# अल् रहीकुल् मख्तुम्

## ईशदूत मुहम्मद ﷺ को पवित्र जीवनी


लेखक

**शैख सफिउर्रहमान मुबारकपूरी**

अनूवादक

**उस्मान गनी फलाही**





प्रकाशक

अस्सलाम मानव सेवा संघ

भैरहवा,सिद्धार्थ नगर, नेपाल

# अल् रहीकुल् मख्तुम्

## (ईशदूत मुहम्मद ﷺ को पवित्र जीवनी)


लेखक : शैख सफिउर्रहमान मुबारकपूरी

अनूवादक : उस्मान गनी फलाही

कम्प्युटर सेटिङ्ग : मुहम्मद सुलैमान



पहिलो संस्करण : सन् २०१४

प्रकाशक

अस्सलाम मानव सेवा संघ

भैरहवा,सिद्धार्थ नगर, नेपाल

पो.बा.नं. : ५०

# الرحيق المختوم

تأليف

**الشيخ صفى الرحمن مباركفوري**

ترجمة باللغة النيبالية

**عثمان غنى فلاحي**

**الناشر**

**جمعية السلام للخد مات الإ نسانية**

**بهيرهوا, سدارت نغر, نيبال**

# विषय सुची

# दुई शब्द

सम्पूर्ण प्रशंसाका मालिक उनै अल्लाह हुन् जसले मानवलाई सर्वश्रेष्ठ प्राणीको हैसियत प्रदान गरे । अल्लाहले मानवलाई जति श्रेष्ठ बनाए उसको सृष्टिको उद्देश्य पनि त्यति नै महान राखे । मानव सृष्टिको त्यो महान उद्देश्य बताउनका लागि उनले आफ्नो संदेश अवतरण गरे । आफ्नो संदेश अवतरण गर्न उनले मानव समुदायबाट असल तथा सज्जन व्यक्तिलाई छनौट गरी उनीहरुलाई ईशदुतत्वको जिम्मेवारी प्रदान गरे । तिनै असल एवं सज्जन व्यक्तिहरुलाई ईशदूत वा संदेशवाहक भनिन्छ ।

ती ईशदूतहरुले अल्लाहको संदेशलाई पूर्ण रुपमा अपनाउनुका साथसाथै मानवसमुदायमा त्यसको प्रचारप्रसार गर्ने गरे र त्यो संदेश स्वीकार्न समुदायलाई आह्वान गरे । त्यसलाई स्वीकार्नेहरु अल्लाहका प्रिय भए र संसारमा पनि उनीहरुले शान्ति पाए । जुन मानिसहरुले त्यसलाई अस्वीकार गरे उनीहरु अल्लाहको क्रोधित पात्र बने र संसारमा पनि उनीहरुको दुर्गति भयो ।

अल्लाहले अन्य ईशदूतहरुलाई कुनै विशेष कालखण्ड तथा विशेष समुदायका लागि मात्र पठाएका थिए तर अन्तिम ईशदूत मुहम्मदﷺलाई सम्पूर्ण मानवका ईशदूत बनाए । उहाँलाई चरित्रको सर्वोच्च शिखरमा राखे । जगतका कृपा तथा उदारका पात्र बनाए । तसर्थ उहाँ समान रुपमा सम्पूर्ण मानवका अन्तिम ईशदूत हुनुहुन्छ । यसर्थ कुनै पनि मानव अल्लाहको प्रिय बन्न चाहन्छ भने उसले मुहम्मदﷺलाई ईशदूत मान्नु, उहाँको आदर गर्नु,उहाँसँग स्नेह राख्नु र उहाँको अनुशरण गर्नु नितान्त जरुरी छ । उहाँको अनुशरण गर्न उहाँको जीवनी बारे जान्नु पनि उति नै आवश्यक छ ।

उहाँको अस्तित्व, व्यक्तित्व, उपदेश, शुभकार्य, आचारण लगायत उहाँको आदर्श जीवन बारे मुस्लिम विद्वानहरुले मात्र नभई गैर मुस्लिम विदहरुले पनि कलम चलाएका छन् । प्रस्तुत पुस्तक पनि त्यसैको एउटा कडी हो । यो पुस्तक प्रख्यात मुस्लिम विद् स्वर्गीय शैख सफिउर्रहमान मुबारकपूरीद्वारा अरबी भाषामा लेखिएको अल् रहीकुल् मख्तुम् नामक किताबको नेपाली अनुवाद हो ।

उपरोक्त पुस्तकमा अन्तिम ईशदूत आगमनअघिका विभिन्न अरब समुदायको धार्मिक, नैतिक, सामाजिक, आर्थिक तथा राजनैतिक अवस्थाको बारेमा चर्चा गरिएको छ । मानवीय दयनीय अवस्थाको जुन परिवेशले ईशदूतको आगमनलाई अपरिहार्य गरेको थियो त्यसको सविस्तार चित्रण गरिएको छ । त्यसैगरी ईशदूतको शुभजन्मदेखि लिएर ईशदूतत्वको जिम्मेवारी ग्रहणसम्मका आयामलाई विस्तृत रुपमा झल्काइएको छ र ईशदूतत्वको भार ग्रहण गरेपछि ईश्वरीय प्रमुख सन्देश ऐकेश्वरवादको नारा फुक्दा समुदायको तर्फबाट भएका विरोध, अन्याय र अत्याचार साथै उहाँलाई दिइएका दुःख, कष्ट तथा कठिनाइहरु बारे उल्लेख गरिएको छ । ती अन्याय र अत्याचारको प्रतिकार गर्न अल्लाहको तर्फबाट अनुमति भएपछि गरिएका सशक्त

प्रतिकारात्मक युद्ध अर्थात धर्म युद्ध र त्यसमा प्राप्त हुँदै गएको सफलताको बारेमा विस्तृत चर्चा गरिएको छ । त्यसैगरी पुस्तकको अन्तिममा उहाँको घरपरिवार तथा उच्च आचरण र सांसारिक जीवनबाट उहाँको बिदाइ भएको कुरा वर्णन गरिएको छ ।

यस पुस्तकको महत्वलाई यसरी पनि बुझ्न सकिन्छ । इस्वी सम्बत १९७६ सालमा अंतराष्ट्रिय इस्लामी संस्था world Muslim leagueद्वारा आयोजना गरिएको सेमिनारमा मुहम्मदﷺको जीवनी विषयक अंतराष्ट्रिय निबन्ध लेखन प्रतियोगिता गर्ने घोषणा गरिएको हुँदा उक्त प्रतियोगितामा भाग लिन लेखिएको पुस्तक हो यो । यसले उक्त प्रतियोगितामा प्रथम स्थान प्राप्त गर्नुका साथसाथै संसारभरी नै अति लोकप्रियता हासिल गरेको छ । फलस्वरुप संसारको विभिन्न भाषामा यसको अनुवाद पनि भइरहेको छ । यसको महत्व र आवश्यकतालाई महसुस गरी मैले पनि नेपाली भाषीहरु समक्ष यसको नेपाली अनुवाद प्रस्तुत गर्ने जमर्को गरेको हुँ । अल्लाहले यो सानो प्रयासलाई स्वीकारुन् ।

यस शुभकार्यमा मलाई प्रेरित गर्नुहुने आदरणीय नजरुल हसन फलाही, प्रिय दाजु शैख ऐयुब र पुस्तकलाई पुरुफ रिडिङ्ग गरी यसमा रहेका त्रुटीहरूलाई औँल्याउन र सच्याउन सकभर प्रयास गरेकी प्रिय श्रीमती जुलेखा खातुनप्रति म हार्दिक आभारी छु । साथै पुस्तक प्रकाशन गर्न गहन जिम्मेवारी वहन गर्ने संस्थाका सम्पूर्ण पदाधिकारी तथा कर्मचारीहरुलाई धन्यवाद दिन चाहन्छु ।

म भाषाविद त होइन तसर्थ यसभित्र थुप्रै गल्तीहरु हुन सक्छन् । यो मेरो अज्ञानता तथा अध्ययनको कमी हो । यसको पूर्णतः म आफै जिम्मेवार छु । पाठक,भाषाविद तथा शुभचिन्तकहरुबाट पुस्तकमा भएको कमी कमजोरीहरु औँल्याइयो भने मेरो यो सानो प्रयास सफल भएको ठान्नेछु । अन्तमा सबैबाट उचित सुझाव एवं सल्लाहको अपेक्षाका साथ विदा हुन्छु ।

अनुवादक
उस्मान गनी फलाही
सन् २०१४
usman.gani.falahi@gmail.com

# प्रकाशकीय

الحمد لله رب العالمين و الصلاة والسلام على خير خلقه محمد بن عبد الله سيد الأولين والآخرين نبينا محمد وآله وصحبه اجمعين, وبعد

ईशदूत मुहम्मदﷺको जीवनी सम्पूर्ण मानवको लागि मार्गदर्शन हो । मानव जीवनको हरेक क्षेत्रमा उहाँको पवित्र जीवनी अनुकरणीय छ । तसर्थ उहाँको पवित्र जीवनीको अध्ययन गर्नु अति नै आवश्यक छ । यसका लागि मुस्लिमविद तथा बुद्धिजीवीहरूले उहाँको अमर जीवनीलाई मुस्लिम तथा गैर मुस्लिम दाजुभाइ समक्ष पुऱ्याउनु जरूरी छ । यस विषयमा हाम्रा विद्वानहरूले कलम नचलाएका होइनन् उहाँहरूले यस विषयमा धेरै कृतिहरू रचेका छन् । उहाँको जीवनी बारे जति पुस्तकहरू लेखिएका छन् त्यति पुस्तक अरू कुनै व्यक्तिको बारेमा लेखिएको भेटिदैन । यथार्थमा भन्ने हो भने यो उहाँको एउटा चमत्कार तथा उहाँ ईशदूत भएको एउटा स्पष्ट प्रमाण पनि हो ।

केही वर्ष पहिला उहाँको पवित्र जीवनी बारे एउटा उत्कृष्ट पुस्तक प्रकाशनमा आयो जसले अंतराष्ट्रिय इस्लामी संस्था world Muslim league द्वारा आयोजना गरिएको मुहम्मदﷺको पवित्र जीवनी विषयक अंतराष्ट्रिय निबन्ध लेखनको प्रतियोगितामा प्रथम स्थान प्राप्त गरेको थियो । त्यो पुस्तक इस्लामी विद्वान शैख सफिउर्रहमान मुबारकपूरीद्वारा अरबी भाषामा लेखिएको **अल् रहीकुल् मख्तुम्** नामक पुस्तक हो । अल्लाहले उहाँलाई यसको राम्रो प्रतिफल प्रदान गरून् । यस पुस्तकको संसारभरी नै विभिन्न भाषामा अनुवाद भएको छ र अँझै पनि हुँदैछ । नेपाली भाषामा पनि यो प्रथम पटक त्यसको अनुवाद भएको हो र अस्सलाम मानव सेवा संघ नेपालले त्यसको पहिलो संस्करण प्रकाशन गर्ने सौभाग्य पाएको छ ।

अस्सलाम मानव सेवा संघले नेपाली भाषामा विभिन्न इस्लामी पुस्तकहरू प्रकाशन गर्दै आएको छ र यो पनि त्यसैको एउटा कडी हो । नेपाली भाषीहरूको सेवामा हाम्रो तर्फबाट यो एउटा अमुल्य उपहार हुनेछ भन्ने हामीले अपेक्षा गरेका छौं । प्रस्तुत पुस्तक पाठकवर्गका लागि अति नै उपयोगी हुनेछ र उच्च आदर्श अपनाउन यसबाट ठूलो पाठ मिल्नेछ भन्ने हामीलाई आशा छ । यस पुस्तकलाई आफै पनि पढौं अरूलाई पनि पढ्न प्रेरित गरौं ।

अथक प्रयास तथा मिहिनेत गरी उपरोक्त पुस्तकलाई नेपाली भाषामा अनुवाद गरी नेपाली भाषीहरूसमक्ष यो अमूल्य उपहार पुऱ्याउन योगदान दिने आदरणीय उस्मान गनी फलाही ज्युलाई हामी हार्दिक बधाइ ज्ञापन गर्न चाहन्छौं । अल्लाहले उहाँलाई धेरैभन्दा धेरै इस्लामी कृतिहरू रच्ने साहस तथा शक्ति प्रदान गरुन् साथै यस महान कृतिको उच्च प्रतिफल प्रदान गरुन् ।

मोहम्मद अफ्जाल शमिमुर्रहमान सलफी
महासचिव
अस्सलाम मानव सेवा संघ,नेपाल

# प्राक्कथन

الحمد لله رب العالمين خالق السموات و الأرض وجاعل الظلمات والنور وصلى الله على سيدنا محمد خاتم الانبياء والرسل اجمعين بشر و انذر و وعد و اوعد وانقذ الله به البشر من الضلالة وهدى الناس إلى الصراط المستقيم صراط الله الذى له ما فى السموات وما فى الارض إلا إلى الله تصير الأمور وبعد :

अल्लाहले आफ्नो ईशदूत मुहम्मदﷺलाई सिफारिसी पद तथा उच्च स्थान प्रदान गरेका छन् । मुसलमानलाई उहाँसँग प्रेम गर्ने आदेश दिएका छन् । उहाँको अनुकरणलाई उहाँसँगको प्रेमप्रतिक घोषित गरेका छन् । अल्लाहको कथन छ :

قُلْ إِنْ كُنْتُمْ تُحِبُّونَ اللَّهَ فَاتَّبِعُونِي يُحْبِبْكُمُ اللَّهُ وَيَغْفِرْ لَكُمْ ذُنُوبَكُمْ (31: 3)

हे ईशदूत भनिदेऊ : यदि तिमीलाई अल्लाहसँग प्रेम छ भने मेरो अनुकरण गर । अनि अल्लाहले तिमीहरुसँग प्रेम गर्नेछ र तिमीहरुको पापलाई माफ गरिदिने छ । (३:३१)

यही एउटा कारण हो जसले मानवलाई उहाँप्रति आकर्षित गर्दछ र उहाँसँग राम्रो सम्बन्ध बनाउने स्रोत तथा साधनको खोजीतर्फ प्रेरित गर्दछ । फलस्वरुप इस्लामको उदय भएदेखि नै मुसलमानहरुले उहाँको विशेषतालाई दर्साउन र उहाँको पवित्र जीवनीलाई प्रचार प्रसार गर्न एक आपसमा प्रतिस्पर्धा गरिरहे । उहाँको पवित्र जीवनी भनेको उहाँको उपदेश,शुभकार्य र उच्च आरचरण हो । आमा आइशा भन्छिन् : कुरआन नै उहाँको आचरण हो । कुरआन अल्लाहको ग्रन्थ तथा कथन हो भन्ने कुरा सर्वविदितै छ । तसर्थ जुन हस्तीको विशेषता यस्तो छ ऊ त सम्पूर्ण मानवमा सर्वोच्च तथा पूर्ण हुन्छ । ऊ नै ईश्वरका सम्पूर्ण प्राणीको प्रेमको सबैभन्दा बढी हकदार हुन्छ ।

यो अथाह प्रेम नै मुस्लिमहरुको धनजन हो । त्यसैको धरातलमा उहाँको पवित्र जीवनी बारे पहिलो सम्मेलन आयोजना भयो । त्यो सम्मेलन हिजरी सम्बत १३९६ सालमा पाकिस्तानको कराची शहरमा सम्पन्न भयो । त्यस सम्मेलनमा World Muslim League ले उहाँको पवित्र जीवनी बारे निबन्ध लेखन प्रतियोगितामा निम्नलिखित शर्तहरु पुरा हुने पाँच वटा सर्वोत्कृष्ट निबन्धलाई एक लाख पचास हजार साउदी रियाल राशीको पुरस्कार दिइने घोषणा गऱ्यो । ती शर्तहरु निम्नलिखित छन् :

१, निबन्ध पूर्ण हुनु पर्नेछ । त्यसमा ऐतिहासिक घटनाक्रम र समय क्रमश: उल्लेख गरिएको हुनु पर्नेछ ।

२, निबन्ध सर्वोत्कृष्ट हुनु पर्नेछ । साथै पहिला प्रकाशनमा आएको हुनु हुँदैन ।

३, निबन्ध तयार गर्दा जुन संन्दर्भ सामग्रीबाट सहयोग लिइएको छ त्यसको सम्पूर्ण स्रोत उल्लेख गरिएको हुनु पर्नेछ ।

४, प्रतियोगीहरुले आफ्नो जीवनको पूर्ण तथा विस्तृत विवरण प्रस्तुत गर्नु पर्नेछ । आफ्नो शैक्षिक योग्यता तथा लेख्य कृतिहरु भए त्यसको पनि चर्चा गर्नु पर्नेछ ।

५, निबन्ध राम्रो तथा सफा अक्षरमा लेखिनु पर्नेछ ।

६, निबन्ध अरबी तथा अन्य भाषामा पनि लेख्न सकिनेछ ।

७, हिजरी सम्बत १३९६ साल रब्बिअल औवल महिनाको १ तारिखबाट निबन्ध संकलन गरिनेछ र हिजरी सम्बत १३९७ साल मोहर्रम महिनाको १ तारिख अन्तिम मियाद हुनेछ ।

८, निबन्ध खाममा बन्द गरी World Muslim League को सचिवालयमा जम्मा गर्नु पर्नेछ । World Muslim League ले त्यसमा विशेष नम्बर राख्नेछ ।

९,महाविद्वानहरुको एउटा उच्च समितिले ती निबन्धहरुको परिक्षण गर्नेछ ।

World Muslim League को यो कार्य लेखकहरुको लागि कोसे ढुंगा साबित भयो । उनीहरुले यस प्रतियोगितामा उत्साहका साथ भाग लिए । उता World Muslim League ले अरबी, अंग्रेजी, उर्दु लगायत अन्य भाषामा लेखिएको निबन्ध स्वीकार्न तयार थियो ।

त्यसपछि हाम्रा आदरणीय प्रतियोगीहरुले विभिन्न भाषामा निबन्ध पठाउन थाले । ती निबन्धहरुको संख्या १७१ पुग्यो । त्यसमा ८४ वटा निबन्ध अरबीमा, ६४ वटा उर्दुमा, २१ वटा अंग्रेजीमा, एउटा फ्रान्सी र एउटा होसा भाषामा लेखिएको थियो ।

World Muslim League ले यी निबन्धहरुलाई जाँच्न र पुरस्कारको लागि छनौट गर्न विशिष्ट विद्वानहरुको एउटा विशेष समिति गठन गर्‍यो । पुरस्कार प्राप्त गर्नेहरु क्रमशः निम्नलिखित छन् :

१, प्रथम पुरस्कार, शैख सफिउर्रहमान मुबारकपूरी, जामिया सलफिया, बनारस, भारत, पचास हजार साउदी रियाल ।

२, दोस्रो पुरस्कार, डाक्टर माजिद अली खान, जामिया इस्लामिया नयाँ दिल्ली भारत, चालिस हजार साउदी रियाल ।

३, तेस्रो पुरस्कार, डाक्टर नसिर अहमद नसिर, प्राध्यापक जामिया इस्लामिया भावलपूर, पाकिस्तान, तीस हजार साउदी रियाल ।

४, चौथो पुरस्कार, प्राध्यापक हामिद महमुद, मुहम्मद मन्सुर, यजिप्ट, बिस हजार साउदी रियाल ।

५, पाँचौं पुरस्कार, अब्दुस्सलाम हाशिम, मदिना मुनौवराह, साउदी अरब,

दश हजार साउदी रियाल ।

World Muslim League ले सफल हुने प्रतियोगीहरुको नाम हिजरी सम्बत १३९८ साल शआबान महिनामा पाकिस्तानको कराची शहरमा आयोजित प्रथम एसियाली मुस्लिम सम्मेलनमा घोषणा गऱ्यो । यसको प्रसारणको लागि सम्पूर्ण संचार माध्यमहरुलाई यस बारे जानकारी गराइयो ।

पुरस्कार वितरणका लागि World Muslim League ले हिजरी सम्बत १३९९ साल रब्बिअल औवल महिनाको १२ तारिख शनिबारको दिन मक्का मुकर्रमामा युवराज सउद बिन अब्दुल मुहसीन बिन अब्दुल अजिजको अध्यक्षतामा पुरस्कार वितरण समारोह आयोजना गऱ्यो । युवराज सउद मक्का मुकर्रमाका गवर्नर युवराज फौवाज बिन अब्दुल अजिजका सचिव हुन् । यस समारोहमा उनले युवराज फौवाजको प्रतिनिधिको हैसियतले पुरस्कार वितरण गरे ।

त्यस अवसरमा World Muslim League ले उत्कृष्ट निबन्धलाई विभिन्न भाषामा प्रकाशन गरी वितरण गर्ने घोषणा पनि गऱ्यो । त्यसै घोषणालाई व्यवहारिकता दिदै शैख सफिउर्रहमान मुबारकपूरीको निबन्धलाई सबैभन्दा पहिला प्रकाश गरी पाठकमा वितरण गरियो । किनभने मौसुफले नै प्रथम पुरस्कार प्राप्त गरेका थिए । बाँकी निबन्धहरु पनि क्रमशः प्रकाश गरिने छ ।

अल्लाहले हाम्रा यी शुभकार्यहरु आफ्नो लागि विशुद्ध पारुन् र त्यसलाई स्वीकारुन् भनी अल्लाहसँग प्रार्थना गर्दछु । अल्लाह नै मालिक तथा सहयोगी हुन् । ईशदूत मुहम्मदﷺमाथि शान्ति तथा सलाम् होस् ।

मुहम्मद बिन अली अल हरकान
महासचिव
World Muslim League

# भूमिका

الحمد لله الذي ارسل رسوله بالهدى ودين الحق ليظهره على الدين كله فجعله شاهدا ومبشرا ونذيرا وداعيا إلى الله بإذنه و سراجا منيرا وجعل فيه اسوة حسنة لمن كان يرجوا الله واليوم الأخرة و ذكر الله كثيرا اللهم صلى وسلم وبارك عليه وعلى آله وصحبه ومن تبعهم بإحسان إلى يوم الدين وفجر لهم ينابيع الرحمة والرضوان تفجيرا اما بعد :

हिजरी सम्बत १३९६ साल रब्बिअल औवल महिनामा पाकिस्तानमा आयोजित ईशदूत मुहम्मदﷺको पवित्र जीवनी विषयक सम्मेलनको समापन गर्ने क्रममा World Muslim league ले उहाँको पवित्र जीवनी बारे उत्तम बहस प्रस्तुत होस् भन्ने हेतुले मुहम्मदﷺको पवित्र जीवनी बारे निबन्ध लेखन प्रतियोगिता गर्ने गरेको घोषणा अति नै हर्षफुल्ल तथा सौभाग्यको कुरा हो । त्यसको उद्देश्य लेखकहरुमा लेख्ने चाहना र उनीहरुको वैचारिक प्रयासमा एक किसिमको अन्तर्सम्बन्ध होस् भन्ने थियो । मेरो विचारमा त्यो एउटा राम्रो कदम थियो । किनकि गहन अनुसन्धान गर्ने हो भने मुहम्मदﷺको पवित्र जीवन र उहाँको अनुपम नमूना एक मात्र यस्तो मुहान हो जहाँबाट इस्लामी जगत तथा मानव समाजका स्वच्छ मुलहरु फुट्ने गर्छन । उहाँको पवित्र व्यक्तित्वमाथि लाखौं शान्ति तथा सलाम होस् ।

यस प्रतियोतितामा भाग लिनको लागि निबन्ध लेख्नु यो मेरो सौभाग्यको कुरा हो । तर मैले मानवगुरुको पवित्र जीवन बारे के नै प्रकाश पार्न सक्छु र ? उहाँका किरणहरुका केही अंश प्राप्त गर्नु नै मेरो सफलता तथा सौभाग्यको कुरा हुनेछ । अंधकारमा भट्किनुको सट्टा त्यसैको धरातलमा टेकेर म उहाँको अनुयायी बनी उहाँको उज्यालो मार्गमा हिँडेर जीवन विताउन सकुँ । मेरो मृत्यु पनि त्यसै मार्गमा होस् र उहाँको सिफारिसको आधारमा अल्लाहले मेरो पापहरु माफ गरुन् ।

उहाँको पवित्र जीवनी बारे निबन्ध लेखन प्रतियोगितामा जुन नीति निमयको पालना गर्नु अनिवार्य गरिएको थियो त्यस बाहेक एउटा सानो कुरा जुन यस पुस्तकको शैली बारे छ त्यसलाई म उल्लेख गर्न उचित ठान्दछु । मैले पुस्तक लेख्नुअघि नै पुस्तकको विषय वस्तुलाई अनावश्यक नलम्बियाईकन र आवश्यक विषय वस्तुलाई नछोडी मध्यम स्तरको पुस्तक लेख्ने निर्णय गरेको थिएँ । तर पवित्र जीवनी बारे लेखिएका पुस्तकहरु पल्टाएर हेर्दा घटनाको क्रमबद्धता र अन्तर विषय वस्तुमा देखिएको मतमतान्तरलाई सम्पादन गर्ने ठाउँ नै देखिन । त्यसकारण जुन ठाउँमा यस्तो अवस्था आयो त्यहाँ मैले हरेक दृष्टिकोणले अध्ययन तथा अनुसन्धान गरी असल नतिजालाई किताबमा उल्लेख गर्ने तर तर्क तथा प्रमाणहरुको विवरण भने

उल्लेख नगर्ने र जुन कुरालाई समर्थन गरिएको छ त्यसको कारण पनि उल्लेख नगर्ने निर्णय गरेँ । त्यसो गरेको खण्डमा पुस्तक अति नै ठूलो हुने थियो । सही हदिस र गलत हदिस बारे मैले अग्रज विद्वानहरुको व्याख्या तथा अनुसन्धानबाट सहयोग लिएको छु । सही हदिस र कमजोर हदिस बारे उनीहरुमाथि नै भरोसा गरेको छु । किनभने यस विषयभित्र प्रवेश गर्न समय अप्रयाप्त छ । तर जहाँ मेरो अनुसन्धानबाट पाठकहरुमा आश्चर्य वा कौतुहल उत्पन्न हुन सक्थ्यो र विद्वानहरुले चित्रण गरेको ती कुराहरु जुन मेरो दृष्टिकोणमा सही थिएन त्यहाँ मैले तर्क तथा प्रमाणहरु पनि उल्लेख गरेको छु ।

अल्लाहले लोक तथा प्रलोकमा मेरो भलो गरुन् । हे अल्लाह तपाईँ अति दयालु तथा क्षमाशील हुनुहुन्छ । तपाईँ सातौँ आकाशमा रहेको राजगद्दीको मालिक हुनुहुन्छ । तपाईँ सर्वेसर्वा हुनुहुन्छ ।

सफिउर्रहमान मुबारकपूरी
जामिया सलफिया बनारस, भारत
२४ रजब १३९६ हिजरी तद्नुसार २३ जुलाई १९७६

# अरबको भौगोलिक स्थिति र वशंहरु

मुहम्मदﷺ[1]को पवित्र जीवनी वास्तवमा ईश्वरीय सन्देशको अमूर्तरुप हो । जसलाई मुहम्मदﷺले उपदेश र शुभकार्य तथा आचरणद्वारा मानव समुदाय समक्ष प्रस्तुत गर्नुभयो । जसको माध्यमबाट उहाँले जीवनको मापदण्ड नै परिवर्तन गर्नुभयो । कुकर्मलाई सुकर्ममा परिवर्तन गर्नुभयो । मानवलाई अँध्यारोबाट निकालेर उज्यालोतर्फ ल्याउनुभयो । साथै मानवीय दास्तित्वबाट निकालेर एक ईश्वरको भक्तितर्फ डोऱ्याउनुभयो । यति मात्र नभई मानवजगतकै ऐतिहासिक गोरेटो र जीवनको धारालाई परिवर्तन गर्नुभयो । ईश्वरीय सन्देश अवतरण हुनुभन्दा पहिलाको अवस्था र पछिको अवस्थाबीच तुलना नगरी मुहम्मदﷺको पवित्र जीवनीको पूर्ण चित्र चित्रण गर्न सम्भव छैन । त्यसैले असल विषयवस्तु प्रस्तुत गर्नुअघि प्रस्तुत अध्यायमा इस्लामभन्दा पहिलाका अरब जनजाति, उनीहरुले निर्माण गरेका शासनप्रणाली, त्यस समयको जातीय संरचना, धर्म तथा संस्कार, रीति, परम्परा, राजनीति लगायत सामुहिक तथा आर्थिक स्थिति वर्णन गरी त्यस परिस्थितिको चित्रण गरिदै छ जुन परिवेशमा मुहम्मदﷺको आगमन भएको थियो ।

## अरबको भौगोलिक स्थिति

अरब शब्दले मरुभूमि भन्ने जनाउँछ । परापूर्व कालदेखि यस शब्दको प्रयोग अरबप्रायद्वीप र त्यहाँ बसोबास गर्ने जनजातिका लागि भएको थियो ।

अरबको पश्चिममा रातो सागर र प्रायद्वीप सिना अवस्थित छ भने पूर्वमा खाडी अरब र दक्षिणी इराकको ठूलो भाग अवस्थित छ । दक्षिणमा अरब सागर छ । त्यसलाई वास्तवमा हिन्द महासागरले ओगटेको छ । उत्तरमा सिरिया र केही उत्तरी इराकले छोएको छ । उपरोक्त केही सिमाना बारे केही मतभेद पनि पाइन्छ । कुल क्षेत्रफल दश लाखदेखि १३ लाख वर्ग किलोमिटर अनुमान गरिएको छ ।

अरबप्रायद्वीपले प्राकृतिक तथा भौगोलिक महत्व बोकेको पाइन्छ । भित्री भागमा चारैतिर मरुभूमि छ । त्यसैले गर्दा बाह्य शक्तिलाई त्यहाँ आक्रमण गरी आफ्नो शासन स्थापित गर्न कठिन छ । फलस्वरुप अरबप्रायद्वीपका बासिन्दाहरु परापूर्व कालदेखि नै आफ्नो हरेक कार्य तथा कर्तव्यमा स्वतन्त्र देखिन्छन् । अरब दुई वटा यस्तो शक्तिशाली राष्ट्रबीच अवस्थित थियो यदि प्राकृतिक अवरोध नभएको भए उनीहरुको आक्रमण रोक्न अरबको वशमा थिएन ।

बाह्य रुपमा अरबप्रायद्वीप प्राचीन जगतको सम्पूर्ण महादेशको बीचमा अवस्थित छ । जल तथा थल दुवै मार्गबाट ती महादेशहरूसँग जोडिएको छ । यसको

---

१ ﷺ अर्थात उहाँमाथि अल्लाहको कृपा तथा शान्ति होस् ।

उत्तरको पश्चिमी भाग अफ्रिका महादेशमा प्रवेश गर्ने द्वारको रूपमा रहेको छ भने उत्तरको पूर्वी भाग युरोपको चाबीको रूपमा रहेको छ । उत्तरको पश्चिमी भागले इरान, मध्य एसिया र पूर्वका अन्य क्षेत्रतिर जाने मार्ग बनाएको छ र त्यो भारत र चीनसम्म पुगेको छ । त्यसैगरी प्रत्येक महादेशका सामुद्रिक मार्गहरु पनि अरबसँग जोडिएका छन् । उनीहरुको जहाजहरू अरब बन्दरगाहमा विना कुनै अवरोध प्रत्येक्ष रुपमा अँडिन्छन् ।

यस्तो भौगोलिक स्थितिका कारण अरबप्रायद्वीपको उत्तरी तथा पूर्वी क्षेत्र विभिन्न वंशको आवतजावत गर्ने थलो बन्नुको साथै व्यापार, सभ्यता, कला तथा संस्कार साटासाट गर्ने केन्द्र पनि बनिसकेको छ ।

## अरबका वंशहरु

इतिहासकारहरुले वंशीय आधारमा अरबलाई तीन वंशमा विभाजित गरेका छन् ।

**१, अरब बायदाह** : यो अरबको प्राचीन वंश हो । यसको अस्तित्व भेटिएको छैन । उनीहरुको बारेमा प्रयाप्त जानकारी पनि उपलब्ध छैन । जस्तै आद, समुद, तस्म, हजरे मौत, जुदैस, अमालेका, अमिम, जुहम,हुजुर, वबार,अबिल आदि

**२, अरब आरेबा :** यो वंश यश्जब बिन यारिब बिन कहतानबाट चलेको वंश हो । उनीहरुलाई कहतानी अरबी भनिन्छ ।

**३, अरब मुस्तअरेबा :** यो वंश इस्माइल عليه السلام बाट चलेको वंश हो । उनीहरुलाई अद्नानी अरबी भनिन्छ ।

**अरब आरेबा :** कहतानी अरबीहरुको असल मुलुक यमन थियो । त्यहाँ उनीहरुको खानदान तथा कबिलाहरु सबा बिन यश्जब बिन यारिब बिन कहतानीबाट विभिन्न शाखा तथा खानदानमा फैलिए र विकसित हुँदै गए । उनीहरुमध्ये दुई वटा कबिलाले अति नाम कमाएका थिए । एउटा हुमैर बिन सबाले र अर्को कहलान बिन सबाले । सबाको बाँकी ११ वा १४ जना सन्तानबाट कुनै खानदान बन्न सकेन । पछि गएर उनीहरु सबा कहलिए ।

### (क) हुमैरको प्रमुख शाखा निम्न छन्

**१, कुजाअ :** यसबाट बहराबिली, कैयन, अजराह र ओब्राह लगायतका खानदानहरु बने ।

**२, सकासिक :** यी जैद बिन वायला बिन हुमैर हुन् । जैदको उपनाम सकासिक थियो । त्यो खानदान सकासिकभन्दा फरक थियो त्यसको वर्णन बनु कहलानमा आउँदैछ ।

**३, जैदुल जमहुर :** यस शाखामा हुमैर, असगर, सबा असगर, हुजुर र जुल अस्बह आदि रहेका थिए ।

**ख) कहलान**

यसका प्रमुख शाखाहरुमध्ये हमदान, अल्हान, अश्अर, तई, मज्हज्, लखम्, जुजाम, आयला, खौलान, मआफिर, अन्मार र अज्द थिए । अज्दबाट अवस, खज्रज्, खुजाअ र जफ्नाका सन्तान जन्मे । उनीहरुले पछि गएर सिरियाको वरिपरि राज गरे । त्यहाँ उनीहरु आले गस्सानको नामबाट प्रसिद्ध भए ।

कहलानीहरुले पछि गएर यमनलाई छाडे र अरबप्रायद्वीपको विभिन्न क्षेत्रमा फैलिए । उनीहरुले देश छोडेको घटना सैले यरमभन्दा केही पहिला घटेको थियो । त्यसबेला इटालियनहरुले यजिप्ट र सिरियाको सत्ता कब्जा गरी यमनका जलमार्गमाथि आफ्नो प्रभूत्व जमाउन थालेका थिए । त्यसैगरी स्थलमार्गका सुविधाहरु ध्वस्त गरी कहलानीहरुको व्यापारलाई सखाप पारेका थिए ।

भनिन्छ उनीहरुले सैले यरमपछि त्यतिबेला देश त्याग गरेका थिए जब उनीहरुको व्यापार नष्ट भइसकेको थियो र जनावरहरु पनि मासिएका थिए । अर्थात जीवनका सम्पूर्ण आधार तथा स्रोत साधनको अन्त्य भइसकेको थियो । कुरआनको अध्याय सबाको १५ देखि १९सम्मको श्लोकमा पनि यसको प्रमाण भेटिन्छ ।

कहलानी र हुमैरी वंशबीच भएको झगडा पनि कहलानीले देश छाडेको कारण हुन सक्छ । किनभने कहलानीले देश छाडेपछि हुमैरी देशमा स्थापित भएका थिए । प्रदेश पलायन भएका कहलानी वंशलाई चार भागमा विभाजित गर्न सकिन्छ ।

**१, अज्द**

उनीहरुले आफ्नो सरदार इमरान बिन अमर मुजैकीयाको सुझावमा देश छाडे । पहिला उनीहरु यमनमा नै एक ठाउँबाट अर्को ठाउँमा विस्थापित भए । परिस्थिति बारे पत्ता लगाउन उनीहरुले अगाडि टोलीहरु पठाए । अन्तिममा उनीहरु उत्तर र पूर्वतिर लागे । यसरी विभिन्न शाखाहरु घुमन्ते शैलीमा विभिन्न ठाउँमा गएर स्थायी रुपमा बसे । त्यसको विवरण निम्नलिखित छ ।

**सअलबा बिन अम्र :** ऊ पहिला हिजाजतिर सअलबा र जिकार भन्ने ठाउँको बीचमा गएर बस्यो । उसको सन्तान हुर्केबढेर शक्तिशाली भएपछि उसले मदिनाको बाटो समात्यो र त्यहाँ गएर स्थायी रुपमा बस्यो । त्यसैबाट अवस र खजरज् खानदान बनेका हुन् । अवस र खजरज् सअलबाका छोरा हारिसाका छोराहरु थिए ।

**हारिसा बिन अम्र :** अर्थात खुजाअ र उसका सन्तान, उनीहरु हिजाजबाट घुम्दै मराउज्जहरा भन्ने ठाउँमा गई पाल हालेर बसे । त्यसपछि उनीहरुले मक्कामा

आक्रमण गरी त्यहाँका वासी बनु जुरहमलाई निकालेर आफुहरु सुकुम्वासीको रुपमा बसे ।

**इमरान बिन अम्र :** ऊ आफ्नो सन्तान सहित ओम्मानमा गएर बस्यो । त्यसकारण उनीहरु अज्द ओम्मानी कहलिए ।

**नसर बिन अज्द :** ऊसँग सम्बन्ध राख्ने कबिलाले तेहामामा बसोबास गऱ्यो । उनीहरुलाई अज्द शनुअ भनिन्छ ।

**जफ्ना बिन अम्र :** ऊ सिरियातिर प्रस्थान गरी आफ्नो सन्तान समेत त्यहीँ बसोबास गऱ्यो । त्यही व्यक्ति गस्सानी राजाहरुको हजुरबाजे थियो । उनीहरुले सिरिया जानुअगाडि हिजाजमा गस्सान नामी कुवा नजिक बसोबास गरेका कारण उनीहरुलाई आले गस्सानी भनिन्छ ।

अन्य ससाना कबिलाहरु सिरिया तथा हिजाज विस्थापित हुने क्रममा उनीहरुसँग मिलेका थिए । जस्तै कअब बिन अमर, हारिस बिन अमर र औफ बिन अमर ।

**२, लखम् तथा जुजाम्**

उनीहरु उत्तरी तथा पुर्वी भागतिर प्रस्थान भए । नसर बिन रबिया पनि त्यसै लख्मी कबिलाको व्यक्ति थियो । ऊ हिराका आले मुन्जिरका राजाहरुको हजुरबाजे थियो ।

**३, बनु तई**

यो कबिला बनु अज्दले देश त्याग गरेपछि उत्तरतिर प्रस्थान भयो र अजाअ र सल्मा नामी दुई वटा पहाडबीच गएर स्थायी रुपमा बस्यो । यसरी ती दुईटा पहाड बनु तईको नामबाट प्रसिद्ध भए ।

**४, किन्दा**

उनीहरु बहरैन हालको अल अहसामा गएर बसे । त्यहाँबाट पनि बाध्य भएर उनीहरु खाली हात हजरेमौत प्रस्थान भए । त्यहाँ पनि उनीहरुले शान्ति पाएनन् । अन्तिममा नजदमा गएर बसोबास गर्नु पऱ्यो । त्यहाँ उनीहरुले एउटा शक्तिशाली सरकार स्थापित गरे । तर त्यो सरकार टिक्न सकेन । त्यसका असरहरू पनि छिटै मेटिए ।

कहलानी बाहेक हुमैरीको एउटा कबिला कुजाअ पनि यस्तै थियो । तर त्यो कबिला हुमैरीको थियो वा थिएन त्यसमा विवाद छ । उसले यमन छाडेर इराकको

सिमानामा रहेका समाद नामक दिहाततिर गएर बसोबास गरेको थियो ।[१] केहीले सिरियाको सिमाना र उत्तरी हिजाजमा गएर बसोबास गरेका थिए ।

## अरब मुस्तअरेबा

उनीहरुका हजुरबाजे इब्राहीमعليه السلام[२] वास्तवमा इराकको उवर शहरका वासी थिए । त्यो शहर फरात नामक नदीको पश्चिमी किनारा कुफा शहर नजिक अवस्थित थियो । त्यसको उत्खनन् गर्दा जुन शिलालेख भेटिएका थिए त्यसमा शहरको बारेमा अत्यधिक विवरणहरु पत्ता लागे । त्यसबाट इब्राहीमعليه السلامको खानदानका केही विवरण र देशको धार्मिक र सामुहिक अवस्था बारे पनि केही जानकारी प्राप्त भयो ।

इब्राहीमعليه السلام त्यहाँबाट देशत्याग गरी हर्रान शहर प्रस्थान भए । त्यहाँबाट प्यालिसटाइन गएर त्यसैलाई आफ्नो ईशदूतीय जिम्मवारीको केन्द्र बनाए । इस्लाम प्रचारप्रसारको लागि त्यहाँबाट देशविदेशको यात्रा गरे । एक चोटि उनी एजिप्ट गए । यजिप्टको राजा अर्थात फिराउनले उनको श्रीमती साराहको सुन्दरता बारे सुनेपछि उसले उनीमाथि कुनियत गरी आफ्नो दरवारमा बोलायो । तर साराहले अल्लाहसँग प्रार्थना गरिन् जसले गर्दा फिराउनको हात खुट्टा लुलोलंगडो भयो । उसको कुनियतीको पाप उसैमाथि लाग्यो । त्यो घटनाले उसले साराह अल्लाहकी असल भक्तजन भएको कुरा महसुस गर्‍यो । ऊ साराहबाट प्रभावित भएर उसले हाजरा[३]लाई साराहको सेवामा सौजन्य स्वरूप दान गर्‍यो । त्यसपछि साराहले हाजरालाई इब्राहीमعليه السلامसँग विवाह गरिदिइन् ।[४]

इब्राहीमعليه السلام हाजरा र साराहलाई लिएर प्यालिसटाइन् आए । त्यहाँ अल्लाहले इब्राहीमعليه السلامलाई हाजराको कोखबाट एउटा बच्चा इस्माइल प्रदान गरे । त्यो कुरा साराहको लागि असह्य भयो । जसले गर्दा साराहले इब्राहीमعليه السلامसँग हाजरालाई बच्चा समेत देश निकाला गर्न आग्रह गरिन् । परिस्थितिले गर्दा उनी साराहको कुरा

---

१ यी कबिला र उनीहरुले देश त्याग गरेको विवरण हेर्नको लागि तारिख इब्ने खल्दुन, तारिखुल अरब, निहायतुल अदब आदि पुस्तकहरु हेर्नुहोस् । देश त्याग तथा समय र घटनाका कारणहरु बारे इतिहासमा ठूलो मतभेद छ । मैले हरेक दृष्टिकोणबाट अध्ययन गरी जुन कुरा सही लाग्यो त्यो यहाँ उल्लेख गरेको छु ।

२ عليه السلام अर्थात उहाँमाथि शान्ति होस् ।

३ भनिन्छ हाजरा दासिका थिइन् । तर मन्सुरपूरीले अनुसन्धान गरी उनी दासिका थिइनन् उनी स्वतन्त्र थिइन् , फिराउनकी छोरी थिइन् भन्ने कुरा प्रमाणित गरेका छन् । रहमतुल लिल्आलमीन भाग २, इब्ने खल्दुनले यजिप्शीयन व्यक्तिहरुसँग कुरा गर्दा उनीहरुले उनको बारेमा उनी राजाकी श्रीमती भएको बताउँछन् । कबिला हामि र ऐन शम्सबीच युद्ध भएको जसमा एक चोटि उनीहरुले पराजय व्यहोरेका थिए । तसर्थ विजयी भएकाहरुले राजाको हत्या गरी हाजरालाई बन्दी बनाएका थिए । यसरी उनी इब्राहीमसम्म पुगिन् । तारिख इब्ने खल्दुन भाग २

४ तारिख इब्ने खल्दुन भाग २, सही बुखारी भाग १

मान्न बाध्य भए । फलस्वरुप उनी हाजरा र इस्माइललाई लिएर हिजाजतर्फ लागे । त्यहाँ उनीहरुलाई एउटा मरुभूमि उपत्यकामा बैतुल्लाह अर्थात अल्लाहको घर नजिक राखे । त्यतिबेला त्यहाँ काबा बनेको थिएन । थुम्को जस्तो ठाउँ थियो । बाढी आउँदा त्यसको दायाँ बायाँबाट बगेर जान्थ्यो । त्यही मस्जिदको सिराननितिर जम्जम् नजिक एउटा रुख थियो । उनले त्यही रुखमूनि हाजरा र इस्माइललाई छाडे । त्यतिबेला मक्कामा न त कुनै मानव थियो न पानी । त्यसकारण इब्राहीमعليه السلامले एउटा भाँडोमा पानी र खजुर दिए । त्यसपछि उनी प्यालिसटाइन फर्के । तर केही दिन नवित्दै खजुर र पानी सिद्धयो । त्यहाँ कठिन समस्या सृजना भयो । तर त्यो कठिन घडीमा अल्लाहको कृपाले गर्दा एउटा पानीको मुहान फुट्यो जसलाई जम्जम् भनिन्छ । त्यो ज्मज्मको मुहान लामो समयसम्म जीवनको आधार बन्यो त्यसको विवरण प्रख्यात छ ।१

केही दिनपछि यमनबाट एउटा कबिला आयो जसलाई इतिहासमा जुर्हम सानी  भनिन्छ । त्यो कबिला इस्माइलको आमासँग अनुमति लिएर मक्कामा बस्यो । भनिन्छ  त्यो कबिला पहिला मक्काको वरिपरि बसेको थियो । बुखारी अनुसार उनीहरु मक्कामा इस्माइल जवान हुनुभन्दा अघि नै आएका थिए । त्यो उपत्यकाबाट उनीहरु पहिला पनि हिँड्ने गरेका थिए ।२

इब्राहीमعليه السلام आफुले छाडेर गएका श्रीमती र छोराको हेरविचारको लागि कहिलेकाहिँ मक्का आउनेजाने गर्थे । तर उनी कति चोटि आए त्यो ज्ञात हुन सकेन । इतिहासकारहरुले चार पटक आएको कुरा उल्लेख गरेका छन् ।

१, कुरआन अनुसार अल्लाहले इब्राहीमعليه السلامलाई सपनामा आफ्नो छोरा बलि गरेको देखाए । त्यो सपना एक किसिमले अल्लाहको आदेश थियो । त्यो आदेश पालना गर्न दुवै बुबाछोरा तयार भए । दुवै जना राजी भएपछि बुबाले छोरालाई घोप्टो सुताए । ठिक त्यतिबेला अल्लाहको तर्फबाट आवाज आयो : हे इब्राहीम तिमीले सपना साकार पर्‍यौ । हामीले असल व्यक्तिलाई यस्तै बदला दिने गर्छौं । वास्तवमा त्यो एउटा खुला चमत्कार थियो । अल्लाहले त्यसको बदलामा एउटा महान बलि प्रदान गरे ।३

बाइबल अनुसार इस्माइलعليه السلام इसहाकभन्दा १३ वर्ष जेठा थिए । तसर्थ कुरआनको  परिवेशले पनि यो घटना इसहाकको जन्म हुनुभन्दा पहिलाको बताउँछ । किनभने सम्पूर्ण घटना घटेपछि इसहाक जन्मने शुभसूचना दिइएको थियो ।



---

१ सही बुखारी भाग २
२ सही बुखारी भाग १
3 कुरआनको सुरह साफ्फात १०३ –१०७

इस्माइलعليه السلام जवान हुनुभन्दा पहिला पनि एक चोटि इब्राहीम मक्का आएको कुरा यस घटनाले देखाउँछ । बाँकी तीन पटक आएको कुरा बुखारी नामक हदिसमा सविस्तार उल्लेख छ । त्यो हदिस इब्ने अब्बासमार्फत वर्णन गरिएको छ ।१ त्यसको विवरण यस प्रकार छ ।

२, इस्माइलعليه السلام जवान भएपछि उनले जुर्हमबाट अरबी सिके र उनी जुर्हमका तारा बन्न पुगे । उनीहरुले आफ्नो खानदानकी एक जना केटीसँग उनको विवाह गरिदिए । त्यसै बीचमा हाजराको निधन भयो । उता इब्राहीमलाई आफ्नो परिवार भेटने सोच भयो । तसर्थ उनी मक्का आए तर हाजरा र इस्माइलعليه السلامसँग भेट भएन । बुहारीसँग मात्र भेट भयो । उनले बुहारीसँग हाल खबर सोधे : उनले आफुहरु विपन्न अवस्थामा रहेको बताइन् । इब्राहीमعليه السلامले बुहारीसँग आफ्नो छोरा इस्माइललाई निम्न संदेश छोडे : आफ्नो ढोकाको चौखट परिवर्तन गर्नु । त्यस संदेशको अर्थ इस्माइलले बुझिहाले । फलस्वरुप इस्माइलले आफ्नी पत्नीलाई छोडपत्र दिएर जुर्हम कबिलाको सरदार मजाज बिन अमरकी छोरीसँग विवाह गरे ।२

इस्माइलعليه السلامले दोस्रो विवाह गरेपछि फेरि इब्राहीमعليه السلام मक्का आए । त्यस पटक पनि इस्माइलसँग भेट भएन । बुहारीसँग मात्र भेट भयो । बुहारीसँग हालखबर सोधे । उनले अल्लाहको प्रशंसा गरिन् । इब्राहीमले उनीसँग इस्माइललाई आफ्नो चौखट स्थायी राख्न वसियत गरी प्यालिसटाइन फर्के ।

त्यसपछि फेरि इब्राहीमعليه السلام मक्का आए । त्यतिबेला इस्माइलعليه السلام रुखमुनि वाण गाड्दै बसेका थिए । एक अर्कालाई देख्ना साथ दुवै बाबुछोराले अंकमाल हाले । यति लामो विछोड थियो जो एक दयालु बुबा तथा असल छोराको लागि अति नै कठिन बनेको थियो । त्यसै अवसरमा दुवै मिलेर काबा निर्माण गरे । जग खनेर गारो उठाए अनि इब्राहीमعليه السلامले सारा जगतका मानिसलाई हज गर्न आह्वान गरे ।

अल्लाहले मजाजकी छोरीबाट इस्माइलعليه السلامलाई बाह्र जना सन्तान दिए ।३ उनीहरुको नाम यस प्रकार छ : नाबित, केदार, अदबाइल, मिबशाम, मिश्माअ, दोमा, मिशा, हुदुद, तुऐमा,यतुर, नफिस र कैदमान ।

ती बाह्र जनाबाट बाह्र वटा कबिला अर्थात खानदान बने । ती सबै कबिलाले मक्कामा नै बसोबास गरे । उनीहरुको आर्थिक यमन, सिरिया र यजिप्टको व्यापारमा आधारित थियो । पछि त्यो कबिला अरबप्रायद्वीपको विभिन्न ठाउँमा र अरबबाहिर

---

१ सही बुखारी भाग १
२ कल्ब जजिरतुल अरब २३०
3 कल्ब जजिरतुल अरब २३०

पनि फैलियो । उनीहरुको इतिहास समयसँगै लोप हुँदै गयो । केवल केदार र नाबित त्यो गुमनामीबाट मुक्त छन् ।

यसरी नब्ती संस्कार हिजाजमा फैलियो र विकसित हुँदै गयो । उनीहरुले एउटा शक्तिशाली शासन स्थापित गरी वरिपरिका मानिसलाई आफ्नो अधीनमा लिए । बतरा उनीहरुको राजधानी थियो । कसैले उनीहरुसँग टक्कर लिन सक्दैन थियो । त्यसपछि इटालियनको शासन आयो र उनीहरुले नब्तीहरुको नाश गरे । वंशविदहरुको एउटा समूहले आले गस्सान र अन्सार अर्थात अवस र खज्रज् कहतानी अरबी नभई इस्माइलका छोरा नाबितबाट बाँकी रहेको वंशमध्येका थिए भनेका छन् । इमाम बुखारीले पनि यसै कुरालाई सही मानेका छन् । तसर्थ उनले आफ्नो किताब बुखारीमा एउटा अध्याय यसै बारेमा लेखेका छन् । त्यसलाई उनले अन्य केही हदिसबाट प्रमाणित पनि गरेका छन् । हाफिज बिन हजरले पनि यसको व्याख्यामा भनेका छन् : कहतानीहरु नाबित बिन इस्माइलका सन्तान हुन् ।[१]

केदार बिन इस्माइलको सन्तान मक्कामा विकसित हुँदै गएपछि अदनान र उसको छोरा मआदको युग शुरु भयो । अदनानी वंशको श्रृंखला सही रुपमा यहाँसम्म पुग्छ ।

अदनान, ईशदूतको वंशीय श्रृंखलाको एक्काइसौँ पुस्तामा गएर मिल्छ । केही हदिसमा वर्णन भए अनुसार उहाँले आफ्नो वंश बताउँदा अदनानसम्म गएर रोकिनु हुन्थ्यो । अगाडि बताउनु हुन्न थियो । उहाँले भन्नु हुन्थ्यो वंशविदहरु गलत छन् ।[२] तर विदहरुको एउटा समूहले अदनान्भन्दा अगाडि पनि वंश बताउन सकिन्छ भनेका छन् । उनीहरुले यस हदिसलाई कमजोर बताएका छन् । तर उनीहरुबीच यति विवाद छ जसलाई सम्पादन गर्न सम्भव छैन ।

विद्वान मन्सुरपूरीले इब्ने सअदद्वारा वर्णन गरिएको त्यो हदिसलाई आधार मानेका छन् जसलाई तब्रीले उल्लेख गरेका छन् । अदनान् र इब्राहीमबीच चालीस वटा पुस्ताहरु छन् ।[3]

मआदका छोरा नज्जारबाट कैयौँ खानदान बनेका थिए । नज्जारका चार जना छोरा थिए । प्रत्येक छोरा प्रत्येक ठूलठूला कबिलाको जग साबित भए । ती चार जनाको नाम यस प्रकार छ : अयाद, अन्मार, रबिया र मुजर । उनीहरुमध्ये रबिया मुजरको शाखा र शाखाको शाखाहरु धेरै छन् । तसर्थ रबियाबाट जबिआ र असद बिन रबिया असदबाट उन्जा र जदिला शाखा बने । जदिलाबाट अबदुल कैस,नमर,

---

१ बुखारी हदिस नं ३५०७, तारिख खल्दुन भाग २
२ तब्री, तारिखुल उमम् वल मुलुक भाग २
3 तारिख तब्री भाग २, तारिख इब्ने खल्दुन भाग २, फतहुल बारी भाग ६, रहमतुल् लिल्आलमीन् भाग २

वायल, वायलबाट बकर, तगलब बनु बकर, बनु कैस, बनु शैबान, बनु हुनफा आदि शाखाहरु बने । उन्जाहबाट हालका साउदी शाहहरु हुन् ।

मुजरको सन्तान दुई वटा ठूलठुला कबिलामा विभाजित भए । कैस ऐलान बिन मुजर र इल्यास बिन मुजर ।

कैस बिन ऐलानबाट बनु सुलैम, बनु हवाजिन, बनु सकिफ, बनु सअसा, बनु गत्फान, गत्फानबाट अबस, जबियान, अश्जअ, गनी र असरका कबिलाहरुको जन्म भयो ।

इल्यास बिन मुजरबाट तमिम बिन मर्राह, हुजैल बिन मुद्रिका, बनु असद बिन खुजैमा र केनानह बिन खुजैमा जस्ता कबिलाहरुको जन्म भयो । केनानहबाट कुरैशी कबिलाको जन्म भयो । यी कबिलाहरु फहर बिन मालिक बिन नजर बिन केनानहका सन्तान हुन् ।

कुरैश पनि विभिन्न शाखाहरुमा विभाजित भयो । कुरैशी शाखाका प्रख्यात नाम यस प्रकार छन् : जमह, सहम, अदी, मख्जुम, तइम, जुहरा र कुसै बिन केलाबका खानदानहरु । अर्थात अब्दुल दार, असद बिन अब्दुल उज्जा र अब्दे मनाफ । यी तीनै जना उसैका छोरा थिए । उनीहरुमध्ये अब्दे मनाफका चार जना छोरा जन्मे । उनीहरुबाट चार वटा ससाना कबिलाहरु जन्मे । अर्थात अब्दे शम्स, नौफल, मुत्तलिब र हाशिम । यही हाशिमी वंशबाट अल्लाहले हाम्रा अन्तिम ईशदूत मुहम्मदﷺलाई ईशदूतको रुपमा चयन गरे ।

ईशदूतको भनाई छ : अल्लाहले इब्राहीमعليه السلامको सन्तानबाट इस्माइलعليه السلामलाई चुने, इस्माइलबाट केनानहलाई चुने र केनानहबाट कुरैशलाई चुने अनि कुरैशबाट बनु हाशिमलाई रोजे र बनु हाशिमबाट मलाई चुने ।१

इब्ने अब्बासको बयान छ : ईशदूत ले भन्नुभयो , अल्लाहले प्राणीको सृष्टि गर्दा मलाई सबैभन्दा राम्रो समूहमा सृष्टि गरे । उनीहरुको दुई वटा समूहमध्ये मलाई राम्रो समूहमा राखे । कबिलाहरुमा मेरो सृष्टि सबैभन्दा राम्रो कबिलामा गरे । घरानाहरुमा सबैभन्दा राम्रो घरानामा सृष्टि गरे । तसर्थ म व्यक्तिगत रुपमा सबैभन्दा उच्च छु , घरानाको रुपमा पनि सबैभन्दा असल छु । एकअर्को शब्द यस्तो छ : अल्लाहले प्राणीको सृष्टि गर्दा मलाई सबैभन्दा राम्रो जमातमा सृष्टि गरे । ती जमातलाई दुईटा जमातमा विभाजित गरे । ती दुवैमध्य राम्रो जमातमा मेरो सृष्टि गरे । उनीहरुलाई कबिलाहरुमा विभाजित गरे । मलाई राम्रो कबिलामा पारे । उनीहरुलाई घरानामा विभाजित गर्दा मलाई राम्रो घरानामा पारे र मलाई स्वच्छ आत्मा दिए ।२

१ सही मुस्लिम भाग २, तिर्मिजी भाग २
२ तिर्मिजी भाग २

अद्नान् वंश बढ्दै जाँदा उनीहरु आफ्नो जीविकोपार्जनको लागि अरबको विभिन्न क्षेत्रमा छरिए । यसरी अब्दुल कैस, बकर बिन वायलको शाखाहरु र बनु तइमका खानदानहरु बहरैनतर्फ लागे र त्यही क्षेत्रमा गएर बसे ।

बनु हनिफा बिन सअब बिन अली बिन बकर यमामहतर्फ लागे र त्यसको केन्द्र हजरमा गएर बसोबास गरे । बकर बिन वायलका बाँकी शाखाले यमामहदेखि लिएर बहरैन, खाडी, सवादे इराक, अहला र हैतका इलाकामा गएर डेरा हाले ।

बनु तगलब फरातिया टापुमा गएर बस्यो । तर त्यसको केही शाखाहरुले बनु बकरको साथमा बसोबास गरे । बनु तइमले बादिया बस्रालाई आफ्नो देश बनायो । बनु सुलैमले मदिना नजिक डेरा हाल्यो । उनीहरुको क्षेत्र वादिल कुराबाट शुरु भएर खैबर र मदिनाको पूर्व हुँदै हर्राह बनु सुलैममा जोडिएको दुई पहाडसम्म फैलिएको थियो । बनु सकिफले ताइफलाई आफ्नो देश बनायो । बनु हवाजिनले मक्काको पूर्वमा रहेको औतास नामक उपत्यकाको वरिपरि आफ्नो बासस्थान बनायो । उनीहरुको क्षेत्र मक्का र बस्राको मार्गमा अवस्थित थियो ।

बनु असद तुऐमाको पूर्व र कुफाको पश्चिममा पाल टाँगेर बस्यो । उनीहरु र तुऐमाबीच बनु तइको बहतर नामक एउटा खानदान बसेको थियो । बनु असदको बस्ती र कुफाबीच पाँच दिन बराबरको दुरी थियो ।

बनु जबियान तुऐमा नजिक हौरानको वरिपरि गएर बसे ।

तहामाहमा बनु केनानहका खानदानको बसोबास थियो । उनीहरुमध्ये कुरैशी खानदान मक्का र त्यसको वरिपरि बसेका थिए । उनीहरु विखण्डित थिए । उनीहरुमा कुनै एकता थिएन । त्यसै बेला कुसै बिन केलाब अगुवा बनेर अगाडि आयो र कुरैशीहरुलाई एकिकृत गरी सम्मानित एवं प्रतिष्ठित बनायो ।१

---

१ मुहाजिराते खिज्री भाग १

# अरबको राज्यव्यवस्था तथा सरदारी प्रणाली

इस्लामभन्दा पहिला अरबको अवस्था बारे चर्चा गर्ने क्रममा त्यहाँको राज्यव्यवस्था, सरदारी प्रणाली र धर्महरुको एउटा संक्षिप्त स्वरुप प्रस्तुत गर्नु उचित होला । त्यसबाट इस्लाम उदय हुँदाको परिस्थिति सजिलैसँग बुझ्न सकिन्छ ।

अरब प्रायद्वीपमा इस्लामको ज्योति फैलन लाग्दा त्यहाँ दुई किसिमका शासक थिए । एक त राजमुकुट लगाएका राजाहरु थिए । उनीहरु पूर्ण रुपमा स्वतन्त्र थिएनन् । अर्को कबिलाका सरदारहरु थिए । उनीहरुलाई पनि केही अधिकार तथा स्वामित्वमा त्यै हैसियत प्राप्त थियो जुन राजमुकुट लगाएका राजाहरुलाई थियो । उनीहरुमध्ये अधिकांशलाई भने पूर्ण स्वाधिन्ता हासिल थियो । राजमुकुट लगाएका राजाहरुमध्ये यमन, सिरिया, आले गस्सान र इराकमा रहेको हिरा क्षेत्रका राजाहरु थिए । बाँकी अन्य राजाहरुले राजमुकुट लगाएका थिएनन् ।

## यमनको राज्यव्यवस्था

अरबको आरेबा वंशमध्ये पुरानो यमनी वंश सबा बारे मात्र पत्ता लागेको छ । इराकबाट जुन शिलालेख भेटिएको थियो त्यसमा ईसाभन्दा २५०० वर्षअघि त्यो वंशको अस्तित्व रहेको पाइन्छ । तर त्यस वंशको विकास भने ईसाभन्दा ११ शताब्दी पूर्व भएको पाइन्छ । त्यस इतिहासका मुख्य युगहरु यस प्रकार छन् :

ईसापूर्व १३०० देखि ६२० सालसम्मको युग : त्यो युगका सबा राजाहरुको उपाधि मक्रब सबा थियो । उनीहरुको राजदरवार सरबाहमा थियो । त्यसका खण्डरहरु आज पनि मआरिबको उत्तरी भागदेखि ५० किलोमिटरको दुरीमा भेटिन्छन् । ती राजदरवारहरु सरबीयाको नामबाट प्रसिद्ध छन् । त्यसै कालखण्डमा मआरिबमा एउटा प्रसिद्ध बाँध बनाइएको थियो । त्यो बाँधलाई यमनको इतिहासमा नै ठूलो महत्वको दृष्टिले हेरिन्छ । त्यस बेला सबाको शासन शसक्त भएका कारण उसले अरब तथा अरबबाहिर जतातत्तै आफ्नो बस्ती बसाएको थियो । त्यस बेलाका राजाहरुको संख्या २३ देखि २६ सम्म रहेको अनुमान गर्न सकिन्छ ।

ईसापूर्व ६२० देखि ११५ सालसम्मको युग : त्यस युगमा सबाका राजाहरुले आफ्नो उपाधि मक्रब छोडेर मलिक राखे । सरबाहलाई छाडेर मआरिबलाई आफ्नो राजधानी बनाए । त्यस शहरका खण्डर आज पनि सन्आदेखि लिएर १९२ किलो मिटरसम्म पूर्वमा फैलिएका छन् ।

ईसापूर्व ११५ देखि ३०० इस्वीसम्मको युग : त्यस कालमा सबाको शासनमाथि हुमैर कबिलाको कब्जा भयो । उनीहरुले मआरिबलाई छाडेर रिदानलाई आफ्नो राजधानी बनाए । पछि रिदानको नाम जफार पर्‍यो । त्यसका खण्डरहरु आज पनि यरिम शहर नजिक मदुर नामक पहाडमा पाइन्छन् ।

त्यसै युगदेखि सबाको शासन पतन हुँदै गयो । पहिला नब्तीहरुले उत्तरी हिजाजमा आफ्नो शासन स्थापित गरी सबालाई उनीहरुको नयाँ बस्तीबाट विस्थापित गरे । त्यसपछि इटालियनहरुले सिरिया, यजिप्ट र हिजाजमाथि कब्जा गरी उनीहरुको व्यापारिक जलमार्गमा नाकाबन्दी लगाए । यसरी उनीहरुको व्यापार बिस्तारै बिस्तारै नष्ट हुँदै गयो । उता कहतानी कबिलाहरु पनि आपसमा लडिरहेका थिए । त्यो कठिन परिस्थितिले गर्दा कहतानी कबिला आफ्नो देश छाडेर यताउता पलायन भयो ।

इस्वी सम्बत ३०० सालदेखि इस्लामको उदयसम्मको युग : त्यस युगमा यमनमा निरन्तर रुपमा अस्थिरता तथा द्वन्द्व चलिरहेको थियो । त्यहाँ आन्दोलनहरु भए, गृहयुद्ध भयो । विदेशी शक्तिहरुले हस्तक्षेप गर्ने मौका पाए । जसले गर्दा यमनको स्वाधिन्ता खोसियो । त्यसै कालमा इटालियनहरुले अदनमाथि सैन्यशासन लागू गरे । उनीहरुको सहयोगबाट हब्शीहरुले हुमैर र हमदानको आपसी लडाइँको मौका छोपी इस्वी सम्बत ३४० सालमा पहिलो चोटि यमनमाथि कब्जा गरे । त्यो कब्जा इस्वी सम्बत ३७८ सालसम्म रह्यो । त्यसपछि यमनको स्वतन्त्रता पुनर्वहाल त भयो तर मआरिबको प्रसिद्ध बाँध भत्कन थाल्यो । यसरी इस्वी सम्बत ४५० सालदेखि ४५१ सालको अन्तरालमा बाँध भत्क्यो जसले गर्दा ठूलो बाढी आयो । त्यो बाँध कुरआनमा सैले यरिमको नामबाट उल्लेख भएको छ । त्यो प्रकोप धेरै ठूलो प्रकोप थियो । त्यसले गर्दा त्यहाँको बस्तीहरु विरान भए । अधिकांश कबिलाहरु यताउता पलायन भए ।

त्यसपछि इस्वी सम्बत ५२३ मा एउटा अर्को ठूलो दुर्घटना भयो । अर्थात यमनको यहुदी राजा जुल नवासले नजरानका इसाइमाथि भयानक आक्रमण गरी उनीहरुलाई इसाई धर्म छोडन बाध्य गरायो । तर उनीहरुले त्यसलाई अस्वीकार गरेपछि जुल नवासले खाडल खन्न लगाएर त्यहाँ भीषण आगो जलाई उनीहरुलाई त्यसमा हाल्यो । कुरआनको अध्याय बुरुजमा यसै भयावह घटनातर्फ इंकित गरिएको छ । त्यस घटनाले गर्दा इसाइहरुले इटालियन शासकको नेतृत्वमा अरब जगतलाई कब्जा गर्न पहिलादेखि नै सक्रियता देखाएका थिए । उनीहरु प्रतियुद्ध गर्न तयार भए र हब्शीहरुलाई यमनमाथि आक्रमण गर्न प्रोत्साहित गर्दै सामुन्द्री बेडा उपलब्ध गराए । हब्शीहरुले इटालियनको सहयोग पाएर इस्वी सम्बत ५२५ सालमा अर्यातको नेतृत्वमा ७० हजार शैनिक लिएर यमनमाथि पूनर्कब्जा गरे । कब्जा गरेपछि अर्यातले हब्शी राजाको गवर्नरको हैसियतले यमनको शासन सम्हाल्यो तर उसको अधीनमा रहेको शैनिक कमाण्डर अब्राहले इस्वी सम्बत ५४९ सालमा उसको हत्या गरी आफैले सत्ता कब्जा गर्‍यो । त्यसैगरी हब्शी राजालाई पनि त्यसमा सहमत गरायो ।

ऊ त्यही अब्राह हो जसले इस्वी सम्बत ५७१ साल जनवरीमा काबामा पनि आक्रमण गरी काबालाई भत्काउने कोसिस गरेको थियो । त्यहाँ आक्रमण गर्न उसले

शैनिक बाहेक हात्ती पनि आफ्नो साथमा ल्याएको थियो । त्यसै कारणले त्यो फौज अस्हाबे फिल अर्थात हात्तिवालाहरूको नामबाट प्रसिद्ध भयो ।

सन्आ फर्केपछि अब्राह मऱ्यो । उसको सत्तामा उसको छोरा एक्सुम र त्यसपछि दोस्रो छोरा मस्रुक सत्तामा आयो । भनिन्छ ती दुवै यमनमा अत्याचार गर्न तथा विध्वंश मच्चाउन आफ्नो बाबुभन्दा पनि अगाडि थिए ।

उता फिलको घटनामा हब्शीहरुले खेपेको नोक्सानबाट फाइदा उठाउँदै यमनवासीहरुले फारस सरकारसँग सहयोग मागेर हब्शीहरुको विरुद्ध विद्रोह गरी सैफ जियजिन हुमैरीको छोरा मआदिकरबको नेतृत्वमा हब्शीहरुलाई देशनिकाला गरे । साथै एउटा स्वतन्त्र देशवासीको रुपमा स्थापित भई मआदिकरबलाई आफ्नो राजा चुने । यो घटना सन् ५७५ सालको हो ।

राष्ट्र स्वतन्त्र भएपछि मआदिकरबले केही हब्शीहरुलाई आफ्नो चाकरी गर्न र राजगद्दी सजाउन रोकेर राख्यो । तर उसको आफ्नो त्यो चाहना उसको लागि धेरै महंगो भयो । ती हब्शीहरुले एक दिन षड्यन्त्र गरेर मआदिकरबको हत्या गरी जियजिनको खानदानबाट सत्तालाई सदाको लागि उल्टाए । उता किस्राले त्यो परिस्थितिको फाइदा उठाउँदै सन्आमाथि आक्रमण गरी फारसी व्यक्तिलाई गवर्नर नियुक्त गरी यमनलाई फारसको एउटा क्षेत्र बनायो । त्यसपछि यमनमा एकपछि अर्को गरी फारसीहरु गवर्नर चयन भए । अन्तिम गवर्नर बाजानले सन् ६२८ सालमा इस्लाममा स्वीकारे । यसरी यमन फारसी सत्ताबाट मुक्त भएर इस्लामको अधीनमा आयो ।

**हिराको राज्यव्यवस्था**

इराक र त्यसको वरिपरिका क्षेत्रहरुमा कोरोश कबिर (खोरस वा साइरस जुल कर्नेन ईसापूर्व ५५७,५२९साल) को युगबाट नै फारसीहरुको शासन चल्दै आएको थियो । उनीहरुको सामना गर्न कुनैले आँट पनि गर्न सक्दैन थियो ।

इस्वी सम्बत २२६ सालमा सिकन्दर मक्दुनीले दारा औवललाई पराजित गर्दै फारसीहरुको शक्तिलाई फुटायो । जसले गर्दा उसको देश टुक्राटुक्रा भयो । ससाना राज्य बन्न पुगे । यस प्रकारको विखण्डन इस्वी सम्बत २३० सालसम्म जारी रह्यो । त्यसै दौरान कहतानी कबिलाहरुले आफ्नो देश छाडेर इराकको एउटा ठूलो हरियाली सीमाक्षेत्रमा गएर बसोबास गरे । त्यसपछि अदनानीहरु पनि आफ्नो देश छाडेर त्यहाँ आए र लडाइँ गरी फरातिया टापुलाई आफ्नो बस्ती बनाए ।

देश त्याग गरेका मानिसहरुमध्ये पहिलो सत्तासिहं व्यक्ति कहतान कबिलाको मालिक बिन फहम तनुखी थियो । उसको राजगद्दी अम्बारसँग जोडिएको क्षेत्रमा थियो । ऊपछि उसको भाइ अमर बिन फहम उत्तराधिकारी बन्यो । एक अर्को कथन

अनुसार उसको छोरा जजिमा बिन मालिक उत्तराधिकारी भएको कुरा ज्ञात हुन्छ । उसको उपनाम अब्रश र वजाह थियो ।

उता इस्वी सम्बत २२६ सलामा उरद शेरले सासानी शासनको जग बसाल्दा विस्तारै विस्तारै फारसीहरुको शक्ति पनि पुनःउदाउन थाल्यो । उरद शेरले फारसीहरुलाई पुनः एकिकृत गऱ्यो । साथै आफ्नो सीमानामा रहेका अरबीहरुलाई आफ्नो नियन्त्रणमा लियो । फलस्वरूप कुजाअले सिरियाको बाटो समात्यो भने हिरा र अम्बारका वासिन्दाहरु उसको अधीनमा बस्न बाध्य भए ।

उरद शेरको कालमा हिरा, बादियतुल इराक र अरबटापुका रबियी एवं मुजरी कबिलामा जुजैमतुल वजाहको शासन थियो । उरद शेरले अरबवासीहरुमाथि प्रत्येक्ष राज गर्नु र उनीहरुलाई सीमाक्षेत्रको लुटपाटबाट रोक्न सहज छैन भन्ने कुरा बुझेको थियो । त्यसकारण उनीहरुको लागि कुनै अरबीलाई शासक बनाउनु उचित थियो जसलाई आफ्नो कबिलाको समर्थन प्राप्त होस् । त्यसको एउटा फाइदा भनेको आवश्यक पर्दा इटालियनविरुद्ध उनीहरुसँग सहयोग लिनु पनि थियो । साथै सिरियाका इटालियन सहयात्री अरबी शासकहरूको विरुद्धमा इराकका शासकलाई खडा गर्न सकिन्थ्यो ।

हिराका शासकहरुसँग सधैँ फारसी फौजको टोली रहन्थ्यो । उनीहरुबाट अरब सुकुम्वासीलाई नियन्त्रण गर्ने काम लिइन्थ्यो ।

इस्वी सम्बत २६८ सालमा जजिमाको निधन भयो । त्यसपछि अमर बिन अदी बिन नजर लखमी इस्वी सम्बत २६८ देखि २८८सालसम्म उसको उत्तराधिकारी बन्यो । ऊ लखम कबिलाको पहिलो शासक थियो । शापुर नामक व्यक्ति उरद शेरको समकालिन थियो । त्यसपछि कुबाज बिन फैरुजको युग इस्वी सम्बत ४४८ देखि ५३१ सालसम्म हिरामा निरन्तर कबिला लखमको राज चल्यो । कुबाजको शासनकालमा मुज्दकको उदय भयो । ऊ अबाहियतवादी थियो । कुबाज र उसको जनताले मुज्दकको समर्थन गऱ्यो । त्यसपछि कुबाजले हिराको राजा मुन्जिरलाई जसले इस्वी सम्बत ५१२ देखि ५५४सालसम्म राज गरेको थियो संदेश पठायो । संदेशमा भन्यो : तिमीले पनि यही धर्म अपनाऊ । मुन्जिर अति स्वाभिमानी थियो । उसले अस्वीकार गऱ्यो । त्यसको नतिजामा कुबाजले उसलाई अपदस्त गरी उसको पदमा मुज्दकको व्यक्ति हारिस बिन अमर बिन हजरलाई हिराको राज सुम्पिदियो ।

कुबाजपछि फारसको राज किस्रा नौशेरवाको हातमा आयो । उसले त्यहाँ इस्वी सम्बत ५३१ देखि ५७८सालसम्म राज गऱ्यो । उसलाई त्यो धर्मदेखि अति घृणा थियो । उसले मुज्दक र उसको समर्थकहरुको ठूलो संख्यामा हत्या गऱ्यो र मुन्जिरलाई पुनः हिराको शासक बनाएर हारिस बिन अमरलाई बोलायो । तर ऊ भागेर बनु कल्बको क्षेत्रतिर गयो र बाँकी जीवन उसले त्यहीँ वितायो ।

मुन्जिरपछि हिरामा नुमान बिन मुन्जिरको राज कायम भयो । इस्वी सम्बत ५८३ देखि ६०५ सालसम्म त्यहाँ उनीहरुको वंशीय राज चल्यो । फेरि जैद बिन अदी उबादीले किस्रासँग नुमान बिन मुन्जिरको बारेमा कुरा लगायो । किस्रा क्रोधित भयो । नुमानलाई बोलायो । नुमान लुकेर बनु शैबानको सरदार हानी बिन मस्उदकहाँ गयो र आफ्नो परिवारको धन सम्पत्ति उसलाई नासोको रुपमा राख्न दिएर ऊ किस्राकहाँ आयो । किस्राले उसलाई जेल हाल्यो । जेलमा नै उसको मृत्यु भयो ।

किस्राले नुमानलाई जेल हालेपछि उसको ठाउँमा अयास बिन कबिसा ताइलाई हिराको शासक बनायो र उसले उसलाई हानी बिन मस्उदसँग नुमानको नासो माग गर्न आदेश दियो । हानी स्वाभिमानी थियो । उसले अस्वीकार मात्र गरेन उसको विरुद्ध युद्धको घोषणा पनि गऱ्यो । त्यसपछि अयास किस्राको फौज र मर्जबनको टोली लिएर हिँडयो । जिकारको मैदानमा दुवै पक्षबीच घमासान लडाइँ भयो । त्यसमा बनु शैबानको विजय भयो । फारसीहरुले लाजमर्दो हार बेहोर्नु पऱ्यो । अरबले गैर अरबमाथि विजय प्राप्त गरेको त्यो पहिलो अवसर थियो ।१ यो घटना मुहम्मदﷺ जन्मनुभन्दा केही दिन पहिला वा पछिको हो । उहाँको शुभजन्म हिरामा अयासको शासनकालको आठौँ महिनामा भएको थियो ।

अयासपछि किस्राले हिरामा एक जना फारसी शासकलाई नियुक्त गऱ्यो । उसको नाम आजादबा बिन माह बयान बिन महरा बन्दाद थियो । उसले इस्वी सम्बत ६१४ देखि ६३१ सालसम्म कुल ७० वर्ष राज गऱ्यो । ऊपछि इस्वी सम्बत ६३२ सालमा लख्मीहरुको राज पुन: स्थापित भयो । मुन्जिर बिन मारुर नामक एक जना व्यक्तिले शासन सम्हाल्यो । तर उसले शासन सम्हालेको केवल आठ महिना नवित्दै खालिद बिन वलिद इस्लामी फौज लिएर हिरामा प्रवेश गरे ।२

**सिरियाको राज्यव्यवस्था**

जुन कालमा अरब कबिलाको देश त्याग गर्ने लहर चलेको थियो त्यही बेला कुजाअका केही शाखाहरु सिरियाको सीमाक्षेत्रमा गएर बसे । उनीहरुको सम्बन्ध बनु सुलैम बिन हलवानबाट थियो । त्यसमध्ये एउटा शाखा बनु जज्अम बिन सुलैम थियो । ऊ जुजाअमाको नामबाट प्रख्यात भयो । कुजाअको एउटा शाखालाई इटालीले अरबी मरुभूमिका पाखेहरुको लुटपाटबाट रोक्न र फारसीहरुको विरुद्धमा प्रयोग गर्नको लागि आफ्नो साथी बनायो । उनीहरुमध्ये एक जनालाई शासक पनि बनायो । त्यसपछि लामो अवधिसम्म उसको शासन चल्यो । उनीहरुमध्ये एक जना प्रसिद्ध शासक जियाद बिन हबुला थियो । भनिन्छ, जुजाअमाको शासनकाल दोस्रो शताब्दिसम्म रह्यो ।

---

१ खलिफा बिन खैयातको मुस्नद पृष्ठ नं २४
२ विवरणको लागि तब्री, इब्ने खल्दुन हेर्नुहोस्

त्यसपछि त्यहाँ आले गस्सानको आगमन भयो र जुजाअमाको शासन समाप्त भयो । आले गस्सानले बनु जज्अमलाई पराजित गरी सम्पूर्ण सत्तामाथि कब्जा गऱ्यो । त्यो परिस्थिति देखेर इटालीले पनि आले गस्सानलाई सिरियाका अरबी शासकको रूपमा स्वीकार गऱ्यो । आले गस्सानको राजधानी दुमतुल जन्दल थियो । इटालीको एजेण्टको रुपमा उनीहरुको शासन सिरियामा निरन्तर रह्यो । यहाँसम्म कि उमर फारुकको शासनकालमा हिजरी सम्बत १३ सालमा यरमुकको युद्ध भयो । आले गस्सानको अन्तिम शासक हब्ला बिन ऐहम इस्लाममा प्रवेश भयो । तर उसको घमण्डले गर्दा उसले इस्लामी समान्तालाई धेरै समयसम्म सहन सकेन र ऊ फेरि इस्लामबाट बाहिरियो ।

**हिजाजको शासन**

मक्कामा बसाइँको आरम्भ इस्माइलعليه السلامबाट भएको हो । उनले १३७ वर्षको उमेर पाएका थिए ।१ बाँचुञ्जेल मक्कामा बैतुल्लाह अर्थात अल्लाहको घरको संरक्षण गरिरहे । उनीपछि उनका दुई जना छोरा नाबित र केदार एकपछि अर्को गरी मक्काका व्यवस्थापक बने । उनीहरुपछि उनीहरुका मामाली हजुरबाजे मजाज बिन अमर जुर्हमीले सम्पूर्ण जिम्मेवारी आफ्नो हात लिए । यसरी मक्काको नेतृत्व बनी जुर्हमतिर हस्तान्त्रण भयो र एउटा लामो समयसम्म उनीहरुको हातमा रह्यो । इस्माइलعليه السلامले आफ्नो पिता इब्राहीमعليه السلامसँग मिलेर अल्लाहको घर निर्माण गरेका कारण उनको सन्तानलाई उच्च स्थान हासिल थियो । तर मक्काको व्यवस्थापन तथा नेतृत्वमा उनीहरुलाई साझेदार बनाइएको थिएन ।२

वर्षौं वित्यो तर इस्माइलعليه السلامको सन्तान आफ्नो गुमनामीबाट निस्कन सकेन । बख्ते नसरको उदय हुनुभन्दा केही पहिला बनी जुर्हमको शक्ति कमजोर हुँदै गयो । मक्काको क्षितिजमा अदनानको राजनैतिक तारा चम्कन थाल्यो । किनभने बख्ते नसरले जाते इर्कमा आक्रमण गर्दा त्यसमा अरब फौजको कमाण्डर जुर्हमी नभई स्वयम अदनान् थियो ।३

त्यसपछि बख्ते नसरले इसापूर्व ५८७ सालमा दोस्रो पटक आक्रमण गर्दा अदनान् भागेर यमन गएको थियो । त्यतिबेला बनु इस्राइलका ईशदूत यर्मियाह थिए । उनका चेला बर्खिया अदनानका छोरा मआदलाई आफ्नो साथ लिएर सिरिया गए । जब बख्ते नसरको शक्ति कमजोर हुँदै गयो अनि मआद मक्का आए । उनले मक्कामा

१ तारिख तब्री भाग १, अर्को भनाई अनसार १३० वर्षमा निधन भएको पाइन्छ ।
२ इब्ने हेशाम भाग १, इब्ने हेशामले इस्माइलको सन्तानमा नाबित मात्र काबाको व्यवस्थापक बनेको उल्लेख गरेका छन्
3 तारिख तब्री १,

जुर्हम कबिलाको एक जना व्यक्ति जर्शम बिन जलहमालाई मात्र पाए । मआदले उसकी छोरी मआनासँग विवाह गरे । उसको कोखबाट नजा नामक व्यक्तिले जन्म लियो ।१

त्यसपछि मक्कामा जुर्हमको अवस्था खस्कदै गयो । उनीहरु विपन्नताको सिकार भए । जसले गर्दा उनीहरुले मक्का आउने यात्रुहरुमाथि अत्याचार गर्न थाले र मक्काको धनसम्पत्ति खान पनि पछि परेनन् ।२ अर्को तर्फ बनु अदनान् उनीहरुको त्यस्तो गतिविधिबाट कुण्ठित भएर चड्किरहेको थियो । त्यो देखेर बनु खुजाअले मर्रुज्जहरानमा शिबिर बनाएर बस्यो । बनु अदनान्लाई बनु जुर्हमसँग दुस्मनी रहेको देखेर त्यो मौका छोपी एउटा अदनानी कबिला बनु बकर बिन अब्द मनाफ बिन केनानहलाई हात लिएर बनु जुर्हममाथि आक्रमण गरी उसलाई मक्काबाट निष्कासन गरी सत्ता आफ्नो हातमा लियो । त्यो घटना दोस्रो शताब्दिको अन्तरालको हो ।

बनु जुर्हमले मक्का छोड्दा जम्जम्को कुवा सुकाएर त्यसमा त्यहाँका ऐतिहासिक महत्वका अत्यधिक वस्तुहरु गाढेर त्यसको निशानहरु पनि मिटाएको थियो । इब्ने इसहाकको भनाइ अनुसार अमर बिन हारिस बिन मजाज३ जुर्हमीले काबाको दुवै हिरन र त्यहाँ लगाइएको हजरे अस्वद अर्थात कालो ढुंगा निकालेर जम्जम्को कुवामा गाढेर आफ्नो कबिलालाई लिई यमन तर्फ भागेको थियो । बनु जुर्हमलाई मक्काबाट निस्कनु पर्दा र आफ्नो सत्ता समाप्त हुँदा धेरै दु:ख लाग्यो । तसर्थ अम्रले आफ्नो दु:ख निम्न कवितामा पोखेको छ :

كان لم يكن بين الحجون إلى الصفا    انيس ولم يسمر بمكة سامر
بلى نحن كما اهلها فابدنا    صروف الليالي والجدود العواثر

अनुवाद छ : हजुनदेखि सफासम्म कुनै घर थिएन जस्तो लाग्छ । कुनै कथाकारले मक्काको बैठकमा कथा सुनाएन होला जस्तो लाग्छ । किन नहुने,ती सबै कुरा भएका थिए । हामीहरु नै त्यहाँका वासी थियौं तर समयको चक्रब्युह तथा फुटेको कर्मले हाम्रो नाश गऱ्यो ।

इस्माइलعليه السलामको कालखण्ड इसापूर्व २००० साल पुरानो थियो । यसरी हेर्ने हो भने मक्कामा जुर्हमको कालखण्ड दुई हजार एक सय वर्ष रहेको पाइन्छ र उनीहरुको शासन दुई हजार वर्ष रहेको पाइन्छ ।

१ तारिख तब्री १, फतहुल बारी ६
२ तारिख तब्री २
3 ऊ त्यो मजाज जुर्हमी होइन जसको वर्णन इस्माइलसँग भएको छ ।

बनु खुजाअले मक्कामाथि कब्जा गरेपछि बनु बकरलाई साथ नलिइकन एकलैले आफ्नो शासन स्थापना गऱ्यो । तर तीन वटा महत्वपूर्ण तथा विशिष्ट पद भने मुजरी कबिलाको हातमा पऱ्यो ।

१) हाजीहरुलाई अरफातबाट मुजदलिफा लैजानु । हजको अन्तिम दिन अर्थात १३ जिल हजको दिन हाजीहरुलाई मेनाबाट बिदाइ गर्नु । यो अधिकार इल्यास बिन मुजरका खानदान बनु गौस बिन मुर्राहलाई हासिल थियो । उनीहरुलाई सोफा भनिन्थ्यो । १३ जिल हजको दिन हाजीहरुले सोफाको कुनै व्यक्तिले कन्करी नहानेसम्म कन्करी हान्न पाउँदैनन् थिए । हाजीहरुले कन्करी हानेपछि मेनाबाट प्रस्थान हुन लाग्दा सोफाका मानिसहरु मेनाको एक मात्र बाटो अकबाको दुवै तर्फ घेरा बनाएर उभिन्थे । उनीहरु त्यहाँबाट नजाँदासम्म अरुलाई जाने अनुमति थिएन । उनीहरु हिँडेपछि मात्र अरुको लागि बाटो खुल्थ्यो । सोफा नाशिएपछि यो प्रतिष्ठा बनु तमिमको खानदान बनु सअद बिन जैद बिन मनातमा हस्तान्तरण भयो ।

२) १० जिल हजको दिन विहान मुजदलिफाबाट मेना जाने अधिकार बनु अदनानलाई प्राप्त थियो ।

३, पवित्र महिनालाई हेरफेर गर्ने अधिकार पनि बनु केनानहको एउटा शाखा बनु तमिम बिन अदीलाई हासिल थियो ।१

मक्कामा बनु खुजाअको शासनसत्ता करिब तीन सय वर्षसम्म स्थापित रह्यो । त्यही कालखण्डमा अदनानी कबिलाहरु मक्का तथा हिजाजबाट निस्केर नजद, इराक वरिपरि र बहरैनमा फैलिए । मक्काको वरिपरि कुरैशका केही शाखाहरु मात्र बाँकी बचे । उनीहरु सुकुम्वासी थिए । उनीहरुको अलग अलग टोलीहरु थिए । बनु केनानहमा उनीहरुको छरिएर रहेका केही घरहरु थिए तर मक्काको सत्ता तथा काबाको व्यवस्थापनमा उनीहरुको कुनै प्रतिनिधित्व थिएन । त्यसपछि कुसै बिन केलाब नामक व्यक्तिको उदय भयो ।२

भनिन्छ कुसै शिशु अवस्थामा हुँदा नै उसको बुबाको मृत्यु भएको थियो । त्यसपछि उसकी आमाले बनु उजराहको एक जना व्यक्ति रबिया बिन हरामसँग विवाह गरी । त्यो कबिला सिरियाको वरिपरि बसेको कारण कुसैको आमा पनि त्यहाँ गई । कुसैलाई पनि उसले आफ्नो साथमा लिएर गई । कुसै जवान भएपछि मक्का फिर्ता भयो । त्यतिबेला मक्काको व्यवस्थापक हुलैल बिन हब्शीया खुजाइ थियो । कुसैले उसकी छोरी हुब्बीसँग विवाह गर्न संदेश पठायो । हुलैलले संदेश स्वीकार गरी विवाह गरिदियो । त्यसपछि हुलैलको निधन भयो अनि मक्काको व्यवस्थापन पदको लागि

१ इब्ने हेशाम १
२ इब्ने हेशाम भाग १

खुजाअ र कुरैशबीच युद्ध भयो । त्यसै युद्धले गर्दा मक्का र काबामा कुसैको सत्ता स्थापित भयो ।

युद्धको कारण बारे तीन वटा भनाईहरु मिल्दाजुल्दा छन् ।

१, जब कुसैका सन्तान फल्नफुल्न थाल्यो उनीहरु आर्थिक रुपमा सम्पन्न भए र उनीहरुको सम्मान हुन थाल्यो अनि हुलैलको निधन भएपछि कुसैले मनमनै सोच्यो : खुजाअ र बनु बकरभन्दा त म नै काबाको व्यवस्थापन तथा मक्काको सत्ताको बढी हकदार छु । उसले कुरैश शुद्ध इस्माइली अरबी हुन् र बाँकी मानिसहरु इस्माइलका सन्तानका सरदार हुन् भन्ने कुरा पनि बुझेको थियो । तसर्थ नेतृत्वका हकदार उनीहरु हुनुपर्छ । तसर्थ कुसैले कुरैश र बनु खुजाअका केही व्यक्तिसँग बनु खुजाअ र बनु बकरलाई मक्काबाट निष्काशन गर्ने कुरा गऱ्यो । उनीहरुले उसको सल्लाहलाई माने ।१

दोस्रो भनाई यस प्रकार छ : खुजाअको भनाई अनुसार, हुलैल स्वयमले कुसैलाई काबाको संरक्षण गर्न र मक्काको सत्ता सम्हाल्न वसियत गरेको थियो ।२

तेस्रो कथन अनुसार, हुलैलले आफ्नी छोरी हुब्बीलाई काबाको व्यवस्थापनको जिम्मेवारी सुम्पेको थियो भने अबु गुब्शानलाई खुजाइको वकिल बनाएको थियो । तसर्थ हुब्बीको प्रतिनिधिको रुपमा गुब्शान नै काबाको व्यवस्थापक बन्यो । हुलैलको निधन भएपछि कुसैले अबु गुब्शानबाट एक बोतल रक्सीको बदलामा काबाको व्यवस्थापनको जिम्मेवारी खरिद गऱ्यो । तर खुजाअले त्यो सौदा स्वीकारेन र कुसैलाई काबाबाट रोक्न चाह्यो । त्यस कुरामा कुसैले बनु खुजाअलाई नै मक्काबाट निकाल्नको लागि कुरैश र बनु केनानहलाई जम्मा गऱ्यो । उनीहरु कुसैको आह्वानमा जम्मा भए ।३

कारण जे होस्, घटनाक्रम यस प्रकार छ : हुलैलको निधन भएपछि सोफाहरुले त्यही गर्न खोजे जुन उनीहरुले सधैं गर्दै आएका थिए । उता कुसैले पनि केनानह र कुरैशका मानिसहरुलाई साथ लियो र अकबा नजिक जहाँ उनीहरु जम्मा थिए उनीहरुसँग भन्यो : हामीहरु तिमीहरुभन्दा यस प्रतिष्ठानका बढी हकदार छौं । उसको कुरा सुनेर सोफाले युद्धको शुरुवात गऱ्यो । तर कुसैले उनीहरुलाई पराजित गरी त्यो प्रतिष्ठान खोस्यो । त्यसै बेला खुजाअ र बनु बकर कुसैबाट अलग भए । कुसैले उनीहरुलाई पनि चेतावनी दियो । त्यसपछि दुवै पक्षबीच भीषण युद्ध भयो । दुवै तर्फबाट अत्यधिक मान्छेहरु मारिए । त्यसपछि सम्झौता गर्ने स्वर गुन्जन थाल्यो

१ इब्ने हेशाम भाग १, तब्री भाग २
२ इब्ने हेशाम भाग १
३ तारिख याकुबी भाग १, फतहुलबारी भाग ६

र बनु बकरको यामर बिन औफ नामक व्यक्तिलाई मध्यस्थ बनाइयो । यामरले खुजाअभन्दा कुसै काबाको व्यवस्थापन र मक्काको शासनको बढी हकदार छ भनी निर्णय गर्दै भन्यो : कुसैले जति पनि रगत बागाएको छ सबैलाई माफ गरी पैतलामुनि हाल्दछु । तर खुजाअ र बनु बकरले जुन मानिसहरुको हत्या गरेको छ त्यसको क्षतिपूर्ति उनीहरुले दिनुपर्छ र काबालाई विना अवरोध कुसैको हवाला गर्नुपर्छ । त्यसै फैसलाले गर्दा यमारको उपनाम शद्दाख पऱ्यो ।[1] शद्दाखको अर्थ हुन्छ पैतलामुनि हाल्ने व्यक्ति । त्यस फैसलाको कारण कुसै र कुरैशलाई मक्काको पूर्ण रुपमा शासन प्राप्त भयो । त्यसपछि कुसै काबाको धार्मिक अगुवा बन्यो । काबामा हज गर्न अरबको कुनाकाप्चाबाट आउने हाजीहरुको ताँती लाग्थ्यो । मक्कामा कुसैको सत्ता रहेको यो घटना पाँचौं शताब्दीको अन्तराल अर्थात इस्वी सम्बत ४४० सालको हो ।[2]

कुसैले मक्काको व्यवस्थापन सम्हाल्ने क्रममा कुरैशलाई मक्काको वरिपरिबाट बोलाएर पूरा शहर उनीहरुलाई विभाजित गरिदियो साथै हरेक खानदानका सुकुम्वासीहरुको लागि निश्चित क्षेत्र तोक्यो । तर महिनाहरु हेरफेर गर्ने व्यक्तिहरु, आले सफवान्, बनु उदवान् र बनु मुर्राह बिन औफलाई आआफ्ना पदमा स्थायी गरिदियो । किनभने कुसैले त्यो धार्मिक कुरा हो, त्यसमा फेरबदल गर्नु ठिक छैन भन्ने कुरा बुझेको थियो ।[3]

कुसैको कृतिहरुमध्ये एउटा कृति भनेको काबाको उत्तरतर्फ दारुल नद्वाको निर्माण हो । त्यसको ढोका मस्जिदतर्फ थियो । दारुल नद्वा वास्तवमा कुरैशको सदनसभा थियो । त्यहाँ ठूलठूला तथा महत्वपूर्ण कुराहरुको फैसला हुने गर्थ्यो । कुरैशले दारुल नद्वाबाट ठूलो लाभ लिएको थियो । किनभने त्यो उनीहरुको एकताको मेरुदण्ड थियो । साथै त्यहाँ उनीहरुको बल्झेका समस्याहरु समाधान हुने गर्थे ।[4]

कुसैको नेतृत्व तथा प्रतिष्ठानलाई केही निम्न मानमर्यादा हासिल थियो :

१, दारुल नद्वाको अध्यक्षता : जहाँ ठूलठूला समस्या बारे छलफल हुन्थ्यो । साथै त्यहाँ मानिसहरुले आफ्नो छोरीको विवाह पनि गर्ने गर्थे ।

२, लेवा,अर्थात युद्धको ध्वजा कुसैले नै बाँध्ने गर्थ्यो ।

३, हिजाबत : अर्थात काबाको संरक्षण, काबाको ढोका कुसैले नै खोल्थ्यो । काबाको सेवा र नेतृत्व पनि उसैले गर्थ्यो ।

---

१ इब्ने हेशाम भाग १, तारिख तब्री भाग २
२ फतहुल बारी भाग ६,
३ इब्ने हेशाम भाग १
४ इब्ने हेशाम भाग १

४, सेकाया : पानी पिलाउनु , केही कुवामा हाजीहरुको लागि पानी भर्ने गरिन्थ्यो । साथै खजुर र किशमिश हालेर पानी गुलियो बनाइन्थ्यो । हाजीहरु मक्का आउँदा त्यो पानी पिउने गर्थे ।
५, रफादह : हाजीहरुको सत्कार, हाजीहरुको लागि सत्कार स्वरुप खाना तयार गरिन्थ्यो । त्यस कामको लागि कुसैले कुरैशमाथि निश्चित रकम तोकेको थियो । त्यो रकम हजको मौसममा कुसैकहाँ जम्मा हुन्थ्यो । कुसैले त्यो पैसाबाट हाजीहरुको लागि खाना तयार गर्थ्यो । जुन मानिसहरु दुखी अवस्थामा हुन्थे वा जुन मानिसहरुसँग खाना खर्च हुँदैन थियो उनीहरुले त्यो खाना खान्थे ।१

यी सम्पूर्ण पदहरु कुसैलाई प्राप्त थियो । कुसैको जेठो छोरा अब्दुल दार भए तापनि माइलो छोरा अब्दे मनाफ कुसैको जीवनमा नै राजनीति क्षेत्रमा उच्च स्थानमा पुगेको थियो । त्यसकारण कुसैले अब्दुल दारसँग भन्यो । उनीहरु राजनीतिमा तिमीभन्दा अगाडि गएका छन् तर म तिमीलाई उनीहरु समान राख्नेछु । तसर्थ कुसैले आफ्नो सम्पूर्ण पद तथा प्रतिष्ठाको वसियत अब्दुल दारको हकमा गऱ्यो । अर्थात दारुल नद्वाको अध्यक्षता, काबाको संरक्षण, हाजीहरुको सत्कार तथा पानी पिलाउने जिम्मेवारी सबै अब्दुल दारलाई सुम्पिदियो । कुनै काममा कुसैको विरोध गरिदैन थियो न उसको कुनै कुरा बदर गरिन्थ्यो । उसको हरेक कुरा उसको जीवन र मृत्युपश्चात पनि अनिवार्य धर्मको रुपमा मानिन्थ्यो । त्यसकारण उसको निधनपछि उसको छोराहरुले निर्विवादित रुपमा उसको वसियत कायम राखे ।

तर अब्दे मनाफको मृत्यु भएपछि उसको छोराहरुले पदको सिलसिलामा अब्दुल दारका छोराहरुसँग विवाद सृजना गरे । त्यसको परिणाम स्वरुप कुरैश दुई समूहमा बाँटियो । युद्ध गर्नसम्म पुगे तर पछि उनीहरुले सम्झौताका नारा उठाए । ती पदहरुलाई आपसमा बाँडफाँड गरे । जसमा पानी पिलाउने र सत्कार गर्ने जिम्मेवारी अब्दे मनाफका सन्तानले पाए । दारुल नद्वाको अध्यक्षता तथा युद्धको ध्वजा बाँध्ने जिम्मेवारी अब्दुल दारका सन्तानलाई दिइयो । त्यसपछि अब्दे मनाफका सन्तानले आफुले पाएको पदमा चिट्ठा निकाल्दा हाशिमलाई पऱ्यो । तसर्थ हाशिमले आफ्नो जीवनभरी हाजी सत्कार तथा पानी पिलाउने जिम्मेवारी बहन गरे । हाशिमको निधन भएपछि उसको भाइ मुत्तलिबले त्यो काम सम्हाल्यो । मुत्तलिब पछि उनको भतिजा अब्दुल मुत्तलिब जो ईशदूत मुहम्मदﷺका हजुरबाजे थिए त्यो पद उनले सम्हाले । उनीपछि उनको सन्तान त्यो पदमा आयो । इस्लामको युग शुरु भएपछि पनि अब्बास बिन अब्दुल मुत्तलिब त्यस पदमा थिए । २

१ इब्ने हेशाम भाग १
२ इब्ने हेशाम भाग १

तीे बाहेक अरु पनि पदहरु थिए जसलाई कुरैशले आपसमा बाँडफाँड गरेका थिए । ती पद र व्यवस्थापनको आधारमा कुरैशले एउटा सानो सरकार वा सरकार जस्तै व्यवस्था स्थापित गरेका थिए । त्यसका कार्यालयहरू तथा रुपरेखा आजको सदन तथा कार्यालय जस्तै थिए। ती पदहरुको संरचना निम्नलिखित छ :

१,ऐसार अर्थात ज्योतिषशास्त्र, भाग्य जान्नको लागि मूर्तिनिर जुन तीर राखिन्थ्यो त्यसको जिम्मेवारी बनु जमहले पाएको थियो ।

२, कोष , मूर्तिको निकटता प्राप्त गर्नको लागि जुन भेटी तथा वलि चढाइन्थ्यो त्यसको व्यवस्था गर्नु साथै झगडा तथा मुद्दाको फैसला गर्नु । यो कार्यभार बनु सहमलाई सुम्पिइएको थियो ।

३, सल्लाहकार समिति, यो पद बनु असदलाई प्राप्त थियो ।

४, अश्नाक अर्थात क्षतिपूर्ति तथा जरिमाना सम्बन्धी व्यवस्था । यस पदमा बनु तइम थियो ।

५, एकाब, राष्ट्रिय ध्वजा राख्ने काम बनु उमैयालाई दिइएको थियो ।

६, कुब्बाह, अर्थात फौजी शिविरको व्यवस्था तथा फौजी कमाण्ड बनु मख्जुमको भागमा परेको थियो ।

७, दुतावास : यो पद बनु अदीले पाएको थियो ।[1]

१ तारिख अर्जुल कुरआन भाग २

# अरबका बाँकी सरदारी प्रणालीहरु

हामीले पछिल्ला पृष्ठमा कहतानी तथा अद्नानी कबिलाहरुले देश त्याग गरेको कुरा उल्लेख गरिसकेका छौं । पूरा अरब ती कबिलाहरुमा विभाजित भएको कुरा पनि उल्लेख गरिसकेका छौं । उनीहरुको राज्य तथा सरदारीको स्वरुप जुन प्रकारको थियो त्यसमा हिराहका वरिपरि रहेका कबिलाहरुलाई हिराह सरकारको अधीनमा राखियो । जुन कबिलाले सिरियाको सिमानामा बसोबास गरेका थिए उनीहरुलाई गस्सानी सरकारको अधीनमा राखियो । यो विभाजन केवल नामको थियो व्यवहारिक थिएन । ती दुई वटा क्षेत्रलाई छोडेर आन्तरिक अरबी कबिलाहरु स्वतन्त्र नै थिए ।

ती कबिलाहरुमा सरदारी प्रणाली थियो । कबिलाले आफ्नो सरदार स्वयम आफैले नियुक्त गर्ने गर्थ्यो । ती सरदारको लागि उनीहरुको कबिलाले एउटा सानो सरकारको हैसियत राख्थ्यो । राजनीतिक अस्तित्व तथा संरक्षणको आधार कबिलाको एकता हुन्थ्यो भने भूमिसुरक्षाको आधार साझा स्वार्थ हुन्थ्यो ।

कबिलाका सरदारहरु आफ्नो कबिलाको लागि राजा सरह हुन्थे । कबिलाहरु युद्ध गर्न वा युद्धविराम गर्न आफ्नो सरदारको निर्देशनमा चल्थे । कुनै पनि हालतमा सरदारभन्दा बाहिर बस्न सक्दैनन् थिए । सरदारलाई तानाशाही राजाको जस्तो अधिकार प्राप्त हुन्थ्यो । यतिसम्म कि यदि कुनै कुरामा सरदार रुष्ठ हुँदा हजारौं मानिसहरु उसको रिसको कारण नबुझि तरवार लिएर निस्कन्थे । एउटै कबिला तथा कुटुम्बमा पनि सरदारीको लागि तनाव हुन्थ्यो । तसर्थ सरदारहरुले आफ्नो कबिलासँग राम्रो सम्बन्ध बनाउँथे । त्यसको लागि धनसम्पत्ति पनि खर्च हुन्थ्यो । पाहुना सत्कारमा अगाडि हुन्थे । नम्रता तथा दूरदर्शिताले काम गर्थे । बहादुरी प्रर्दशन गर्थे । संवेदनशील मामिलामा प्रतिकार गर्थे । जसले गर्दा उनीहरु जनताको अगाडि विशेष गरी कविहरुको नजरमा प्रतिभाशाली हुनु पर्थ्यो । किनभने कविहरु त्यो अवस्थामा आफ्नो कबिलाका प्रवक्ता हुने गर्थे । यसरी सरदारले आफ्नो दाँजोको व्यक्तिभन्दा उच्च स्थान हासिल गर्न चाहन्थ्यो ।

सरदारहरुको केही विशेष अधिकार हुने गर्थ्यो । जसलाई एक जना कविले यसरी वर्णन गरेका छन् :

لك المرباع فينا والصفايا　　　وحكمك والنشيطة والفضول

अनुवाद छ : हामीमध्ये तिम्रो लागि युद्धप्राप्तमा चौथाई भाग छ । साथै विशेष रुपमा छुट्याइएको माल र तिमीले रोजेको माल पनि तिम्रो लागि हो । साथै बाटोमा नै कब्जा गरिएको माल र बाँडेर बचेको माल पनि तिम्रो लागि ।

## राजनैतिक अवस्था

अरबप्रायद्वीपको शासन र सत्ताधारीहरु बारे वर्णन भइसकेको छ । अब उनीहरुको राजनैतिक अवस्था बारे चर्चा गर्नु अनुचित नहोला ।

अरब प्रायद्वीपका तीन वटा सीमा क्षेत्र जुन अन्य मुलुकको छिमेकी थिए उनीहरुको राजनैतिक अवस्था अति दयनीय, अस्थिर,द्वन्द्वग्रस्त र खस्केको थियो । मानव मालिक तथा दासी, हाकिम तथा नोकर जस्ता दुई समूहमा विभाजित थियो । सबै अधिकार आन्तरिक तथा वाह्य नेतृत्वलाई प्राप्त थियो भने सारा बोझ दासीहरुमाथि थियो । स्पष्ट रुपमा भन्नु पर्दा जनता नेतृत्व वर्गका लागि आयआर्जनका स्रोत साधन बनेका थिए । नेतृत्व पक्षले त्यो सम्पत्ति आफ्नो मोजमस्ती, ऐयाशी तथा अरुमाथि अत्याचार गर्नको निम्ति खर्चन्थ्यो । जनता यस किसिमको कालो संसारमा श्रम गर्न बाध्य थिए । उनीहरुमाथि विभिन्न तरिकाले अत्याचार गरिन्थ्यो । तर कुनै कुरा पनि गर्न पाउँदैनन् थिए । उल्टै अत्याचार, घृणा तथा अरुको हैकमलाई सहनु बाहेक अरु केही थिएन । मुखमा ताल्चा लागेको थियो । किनभने सरकार निरंकुश थियो । मानव अधिकार नामको कुनै चीज थिएन ।

ती क्षेत्रको छिमेकमा बस्ने कबिलाहरु सशंकित थिए । उनीहरु आफ्ना चाहना तथा इच्छाका कारण यताउता विराल्लिएका थिए । कहिले इराकीहरुको साथमा हुन्थे भने कहिले सिरियाको साथमा ।

अरबभित्र रहेका कबिलाहरुमा पनि एकता थिएन । उनीहरु विभाजित थिए । चारैतिर कबिलाहरुको एक आपसमा झगडा, वंशीय फसाद तथा धार्मिक विवाद चर्केको थियो । त्यसमा हरेक कबिलाका मानिसहरुले जुनसुकै हालतमा पनि आफ्नो कबिलाको साथ दिन्थे । चाहे उनीहरु सत्यमा होउन् वा असत्यमा । उनीहरुको प्रवक्ताले भन्ने गर्थ्यो :

وما انا الا من غزية ان غوت          عويت وان ترشد غزية ارشد

अनुवाद छ : म पनि त गजिया कबिलाको एक जना व्यक्ति हुँ । यदि ऊ कुमार्गमा हिँड्यो भने म पनि कुमार्गमा हिँड्छु । यदि सत्य मार्गमा हिँड्यो भने म पनि सत्य मार्गमा हिँड्छु ।

अरबमा अरबीहरुको आवाजलाई साथ दिने न कुनै राजा थियो न उनीहरुको दु:ख तथा गुनासो सुन्ने र आवश्यक पर्दा भरोसा गर्ने निकाय नै ।

हिजाजको सरकारलाई सम्मान दृष्टिले अवश्य हेरिन्थ्यो । त्यसलाई धार्मिक संरक्षणको केन्द्र पनि मानिन्थ्यो । यसर्थमा त्यो सरकार सांसारिक तथा धार्मिक नेतृत्वको केन्द्रको संगम मानिन्थ्यो । उसलाई अरबमा धार्मिक दृष्टिकोणले प्रधानता प्राप्त थियो । पवित्र मस्जिद हरम र हरम वरिपरिको क्षेत्रमा उसको राज थियो । त्यसै सरकारले काबाका तीर्थालुहरुको आवश्यकता पुरा गर्ने तथा इब्राहिमी धार्मिक

नियमलाई लागू गर्ने गर्थ्यो । त्यो सरकारसँग सदन जस्तो संरचना पनि थियो । तर त्यो सरकारले आफ्नो कमजोरीका कारण अरबको भार उठाउन सक्दैन थियो । जस्तै हब्शीले आक्रमण गर्दा देखा परेको थियो ।

# अरबका प्राचीन धर्महरू

इस्माइलعليه السلامले धर्म प्रसारप्रचार गरेका कारण अरबका आम जनमानस इब्राहीमी धर्मका अनुयायी थिए । तसर्थ उनीहरूले एक ईश्वरको पूजा गर्ने गर्थे । अर्थात उनीहरू एकेश्वरवादी थिए । तर समयको परिवर्तन सँगसँगै उनीहरूले ईश्वरीय उपदेशको एक भाग बिर्से । त्यसो हुँदा पनि उनीहरूमा एकेश्वरवाद र इब्राहीमी धर्मका केही चिनारीहरू बाँकी नै थिए । ठिक त्यसै बेला बनु खुजाअको सरदार अमर बिन लुह्यीको उदय भयो । उसले सानैदेखि धर्मकर्म गर्ने, दानदक्षिणा दिने र धार्मिक कामकाजमा चाख राख्ने गर्थ्यो त्यसकारण ऊ मानिसहरूको आँखाको तारो बन्यो । मानिसहरूले उसलाई महाविद्वान तथा धर्मगुरू ठान्न र उसको अनुकरण गर्न थाले । त्यसपछि ऊ सिरिया गयो । त्यहाँ उसले मूर्तिपूजा देख्यो । त्यो कुरा उसलाई सत्य लाग्यो । किनभने सिरियामा अत्यधिक ईशदूतहरूको आगमन भएको थियो । साथै ईशग्रन्थहरू पनि अवतरण भएका थिए । तसर्थ उसले त्यहाँबाट हुबल नामक मूर्ति आफ्नो साथमा ल्यायो र त्यसलाई काबाभित्र स्थापित गरेर मक्कावासीहरूलाई ईश्वरसँग शिर्क अर्थात साझेदार बनाउने आह्वान गऱ्यो । मक्कावासीहरूले उसको कुरा सही माने । त्यसपछि हिजाजवासीले पनि मक्कावासीको अनुकरण गर्न थाले । किनभने मक्कावासी काबाका रख्वाला तथा त्यहाँका वासी थिए ।[१] यसरी अरबमा मूर्तिपूजाको उपज भयो ।

हुबल नामक मूर्ति सुर्ख अकिक नामक धातुबाट बनाइएको थियो । त्यसको स्वरुप मानव जस्तो थियो । मूर्तिको दाहिने हात भाँचिएको थियो । कुरैशले त्यसलाई त्यसै अवस्थामा भेटाएका थिए । उनीहरूले भाँचिएको हातको ठाउँमा सुनको हात बनाए । त्यो मूर्ति बहुदेववादीहरूको पहिलो मूर्ति थियो । उनीहरूले त्यसलाई अति महान तथा पवित्र ठान्दथे ।[२]

हुबल नामक मूर्ति बाहेक अरबका पूराना मूर्तिहरूमध्ये एउटा मनात पनि थियो । त्यो मूर्ति हुजैल तथा खुजाअ जातिको मूर्ति थियो । त्यो मूर्ति लाल सागरको तटमा कदिद नजिक मुशल्ललमा स्थापित थियो । मुशल्लल् एउटा पहाडी घाटीको नाम हो जहाँबाट कुदैदतिर झर्ने गरिन्थ्यो ।[३] त्यस पश्चात ताइफमा लात नामक मूर्तिको स्थापना भयो । त्यो सकिफ जातिको मूर्ति थियो । त्यो मूर्ति हाल रहेको मस्जिद, मस्जिदे ताइफको देब्रे मिनारा रहेको ठाउँमा स्थापित थियो ।[४] त्यसपछि फेरि

---

१ मुहम्मद अब्दुल वह्हाबको मुख्तसर सिरतुर्रसुल
२ इब्ने कल्बीको किताबुल अस्नाम
३ सही बुखारी १/ २२२
४ इब्ने कल्बीको किताबुल अस्नाम

नखला नामक उपत्यकामा उज्जा नामक मूर्तिको स्थापना भयो । त्यो मूर्ति कुरैश, बनु केनानह र अन्य अत्यधिक जातिहरूको मूर्ति थियो ।[१] यी तीन वटा मूर्तिहरू अरबकै सबैभन्दा ठूला मूर्ति थिए । त्यस पश्चात हिजाजको हरेक भागमा शिर्क अर्थात बहुदेववादको बाहुल्यता र मूर्तिको प्रचुरता बढ्यो । भन्ने गरिन्छ, एउटा दानव अमर बिन लुह्यीको अधीनमा थियो । उसको भनाई अनुसार नूह जातिका मूर्ति अर्थात वद्दा, सुवाअ, यगूस, यऊक र नस्र मूर्तिहरू जिद्दाहको भूमिमा गाडिएका थिए । त्यस सूचनाको आधारमा अमर बिन लुह्यी जिद्दाह गयो र ती मूर्तिहरूलाई खनेर निकाल्यो । फेरि ती मूर्तिहरूलाई तिहामाह भन्ने ठाउँमा लग्यो । हजको मौसम आएपछि उसले ती मूर्तिलाई विभिन्न जनजातिहरूको सुपुर्द गऱ्यो । ती जनजातिहरूले ती मूर्तिलाई आ-आफ्नो इलाकामा लगे । वद्दा नामक मूर्तिलाई बनु कल्बले लगेर इराक नजिक सिरियाको भूमि दुमतुल जन्दलको क्षेत्रको जर्श भन्ने ठाउँमा स्थापित गऱ्यो । सुवाअ नामक मूर्तिलाई हुजैल बिन मुद्रीकाले लग्यो । उसले त्यसलाई हिजाजको भूमिमा मक्का नजिक तटीय क्षेत्र रेहात भन्ने ठाउँमा स्थापित गऱ्यो । यगुस नामक मूर्तिलाई बनु मुरादको एउटा जाति बनु गतिफले लगेर सबा क्षेत्रको जर्फ भन्ने ठाउँमा स्थापित गऱ्यो । यउक नामक मूर्तिलाई बनु हमदान जातिले लग्यो । उसले त्यसलाई यमनको एउटा गाउँ खैवानमा स्थापित गऱ्यो । खैवान हमदान जातिको एउटा शाखा थियो । नस्र नामक मूर्तिलाई हुमैर नामक जातिको एउटा शाखा जिल केलाअले लगेर हुमैर क्षेत्रमा स्थापित गऱ्यो ।[२]

त्यसपछि बहुदेववादीहरूले ती मूर्तिहरूको लागि मठमन्दिर बनाउन थाले । उनीहरूले ती मठमन्दिरलाई काबा जस्तै पवित्र ठान्दथे । उनीहरूले ती मठमन्दिरका लागि पूजारी तथा कर्मचारी पनि चयन गरे । काबामा झैँ ती मठमन्दिरमा पनि भेटी तथा फुलपाती चढाउन थाले । तर काबालाई ती मठ मन्दिरभन्दा उच्च मान्दथे ।[३]

त्यसपछि अन्य जातिहरूले पनि त्यसै रीतिलाई अपनायो र आफ्नो लागि मूर्ति तथा मन्दिर बनाउन थाले । फलस्वरूप दौस, खस्अम र बजिला नामक जातिले मक्का तथा यमनबीच यमनको आफ्नो भूमिमा तबाला भन्ने ठाउँमा जुल खल्सा नामक मूर्ति र मन्दिर निर्माण गरे । बनु तई र त्यसका वरिपरिका मान्छेहरूले आजा र सल्मा नामक बनु तईका दुई पहाडबीच फल्स नामक मूर्ति स्थापना गरे । यमनवासी तथा हुमैरले सन्आमा रिया नामक मूर्ति र मन्दिर निर्माण गरे । बनु तमिम्

१ फत्हुल बारी ८/६६८, तफ्सीर कुर्तुबी १७/९९
२ सही बुखारी हदिस नं ४९२०
३ इब्ने हेशाम १/८४

जातिको शाखा बनु रबिआ बिन कअबले रेजा नामक मूर्तिघर बनायो । बकर, तग्लाब र अयादले सन्दाद भन्ने ठाउँमा मठमन्दिहरू बनाए ।[१]

दौस जातिको मूर्तिलाई जुल कफिन भनिन्थ्यो । केनानहका सन्तान बकर, मालिक र मालिकानको एउटा मूर्तिलाई सअद भनिन्थ्यो । बनु उजराहको एउटा मूर्तिको नाम शम्स थियो ।[२] खौलान जातिको एउटा मूर्तिको नाम अमियानस थियो ।[३]

यसरी अरब टापुको हरेक क्षेत्रमा मूर्ति र मठ मन्दिरहरू फैलिए । यहाँसम्म कि जातजातिमा र घरघरमा एकएक वटा मूर्ति स्थापित भयो । बहुदेववादीहरूले काबामा पनि मूर्तिहरू भरिदिए । अत : मुहम्मदﷺ[४]ले मक्कामा विजय हासिल गर्दा काबाको वरिपरि तीन सय साठी वटा मूर्तिहरु थिए । उहाँ स्वयमले ती मूर्तिहरूमाथि छडी प्रहार गरी ती मूर्तिहरूलाई ढाल्नुभयो । त्यसपछि उहाँको आदेशमा ती सबै मूर्तिहरूलाई काबाबाट बाहिर निकालेर जलाइयो । त्यसबाहेक काबाभित्र पनि मूर्ति तथा तस्वीरहरू थिए । एउटा मूर्ति इब्राहीमعليه السلام र अर्को मूर्ति इस्माइलعليه السلامको स्वरूप जस्तै बनाइएको थियो । दुवै मूर्तिको हातमा ज्योतिष तीर थियो । मक्का विजय हुँदा ती मूर्तिहरू पनि भत्काइए र तस्वीरहरू पनि मेटाइए ।[५]

मानिसहरूको पथभ्रष्टता त्यतिमा मात्र सिमित थिएन । अबु रेजा अत्तारदीको बयान छ, उनी भन्छन् : हामीले ढुंगा पूज्ने गर्थ्यौं । पूजा गरिएको ढुंगाभन्दा राम्रो ढुंगा भेटाएको खण्डमा पहिलाको ढुंगा फालेर त्यसलाई राख्थ्यौं । ढुंगा नपाएको खण्डमा माटोको सानो ढिक बनाउँथ्यौं र त्यहाँ बाखा ल्याएर दुहुन्थ्यौं र त्यसको परिक्रमा पनि गर्थ्यौं ।[६]

संक्षिप्तमा भन्नु पर्दा बहुदेववाद र मूर्तिपूजा अज्ञानकालका मानिसहरूमा धर्मको सबैभन्दा महान कर्म मानिन्थ्यो । त्यसो हुँदा उनीहरूलाई हामी इब्राहीमعليه السلامको धर्ममा छौं भन्ने गौरव पनि थियो ।

उनीहरूमा बहुदेववाद र मूर्तिपूजाको धारणाको आधार के थियो भने ईशदूत,देवदूत,उपकारी र सज्जन एवं असल मानिसहरू ईश्वरकहाँ सम्मानित हुन्छन् , ईश्वरकहाँ उनीहरूको ठूलो मान्यता हुन्छ, उनीहरूको हातमा चमत्कार हुन्छ भन्ने कुराको उनीहरूलाई भान भयो । त्यसबाट ती विशेष व्यक्तिहरूलाई ईश्वरले आफ्नो विशेष अधिकारमा केही अधिकार दिएको छ भन्ने कुरा उनीहरुले सोचे । ती

---

१ इब्ने हेशाम १/७८,८९ इब्ने कसिर सुरह नुह
२ तारिखुल याकुबी १/२५५
३ इब्ने हेशाम १/८०
४ सल्लल्लाहु अलैहे वसल्लम अर्थात अल्लाहले उहाँमाथि दया गरुन् तथा उहाँमाथि शान्ति होस्
५ सही बुखारी हदिस नं १६१०
६ सही बुखारी हदिस नं ४३७२

व्यक्तिहरू आफुलाई प्राप्त विशेष अधिकार र ईश्वरकहाँ भएको आफ्नो मानमर्यादाका कारण उनीहरू ईश्वर र आम मानिसबीच सिफारिसी बन्ने गर्छन् भन्ने उनीहरूको सोच बन्दै गयो। तसर्थ उनीहरूलाई सिफारिसी नबनाई कसैले पनि ईश्वरसँग केही माग्नु हुँदैन भन्ने ठाने । उनीहरूले ईश्वरकहाँ सिफारिस गर्नेछन् र ईश्वरले उनीहरूको सम्मान तथा पदका कारण उनीहरूको कुरा काट्ने छैन, कसैले पनि ईश्वरको भक्ति उनीहरूलाई मध्यस्थ नबनाई गर्नु हुँदैन, किनभने उनीहरू आफ्नो मानमर्यादाका कारण ईश्वरसँग निकट छन् भन्ने कुरामा उनीहरूको अन्धविश्वास थियो।

त्यही अन्धविश्वासले मानिसमा जरो गाडेपछि उनीहरूले ईशदूत , फरिश्ता र असल मानिसहरूलाई भगवान ठान्न थाले । आफु र ईश्वरबीच उनीहरूलाई सिफारिसी बनाए। आफ्नो विचारमा जुन माध्यमबाट उनीहरूको निकटता हासिल गर्न सकिन्थ्यो त्यसबाट उनीहरूको निकटता हासिल गर्ने कोसिस गरे। फलस्वरूप उनीहरूले मूर्ति तथा शालिक बनाउन थाले। ती मूर्ति तथा शालिक उनीहरूको काल्पनिक उपज थियो। तिनै शालिकलाई मूर्ति भनिन्छ।

सज्जन व्यक्तिहरूमध्ये अधिकांशको शालिक बनाइएको थिएन । त्यसकारण उनीहरूको आश्रम,कुटी, मजार, चिहान तथा घाटलाई पवित्रस्थल घोषित गरियो । त्यहाँ भेँट चढाउन थालियो । उनीहरूको भक्ति हुन थाल्यो । ती आश्रम,कुटी मजार,चिहान तथा घाटलाई अरबी भाषामा औसान भनिन्छ। यो शब्द मूर्ति शब्दको समानार्थ शब्द हो। उर्दु भाषामा यसलाई दरगाह वा दरबारे सरकार भन्ने गरिन्छ।

बहुदेववादीहरूकहाँ मूर्ति पूजाका केही विशेष तरिका र रीतिहरू पनि प्रचलित थिए। ती रीतिहरू अधिकतर अमर बिन लुह्यीले रचेको थियो। अज्ञानीहरूले ती रीतिरिवाज बारे अमर बिन लुह्यीले इब्राहीमी धर्मलाई परिवर्तन नगरी इब्राहीमी धर्ममा केवल राम्रो कुरा रचेको ठानेका थिए। हामीले तल अज्ञानीहरूमा प्रचलित मूर्ति पूजाका केही महत्वपूर्ण प्रथाको विस्तृत रूपमा चर्चा गरेका छौं :

१) अज्ञानकालका बहुदेववादीहरू मूर्तिको नजिक सेवक बनेर बस्थे, तिनको शरण खोज्थे, तिनलाई ठूलो स्वर गरी पुकार्थे र दु:ख तथा कष्ट परेको बेलामा उनीहरूको दर्शन गर्ने गर्थे, उनीहरूसँग विन्ती माग्थे। तिनले ईश्वरसँग हाम्रो सिफारिश गरी हाम्रो इच्छा पूरा गराइ दिने छन् भन्ने कुरामा विश्वास गर्थे।

२) मूर्तिहरूको निम्ति हज एवं परिक्रमा गर्थे। तिनको सामू विनम्रता एवं सानो भएर प्रस्तुत हुन्थे र तिनको अगाडि शीर झुकाएर प्रार्थना गर्थे।

३) मूर्तिहरूमाथि भेटी र बलि चढाउँथे र बलिका ती जनावरहरू कहिले मूर्तिहरूको भव्य समाधिमाथि लगेर बध गर्थे र कहिले अन्य कुनै ठाउँमा मूर्तिहरूको नाउँमा बध गर्थे। बध गरिने ती दुवै रीतिको ईश्वरले ईशग्रन्थ कुरआनमा चर्चा

गरेका छन् : ती जनावरहरूको मासु पनि हराम अर्थात अवैध छ जुन समाधिहरूमाथि बध गरिएका छन् । (५:३) एक अर्को ठाउँमा भनिएको छ :

وَلَا تَأْكُلُوا مِمَّا لَمْ يُذْكَرِ اسْمُ اللَّهِ عَلَيْهِ (الأنعام : 121)

"त्यस जनावरको पनि मासु न खाऊ जसमाथि अल्लाहको नाउँ लिइएको छैन । (अल् अन्आम् :१२१)

४) मूर्तिहरूसँग निकटता हासिल गर्ने एक अर्को तरिका यस्तो पनि थियो । बहुदेववादीहरूले आफ्नो हैसियत अनुसार आफ्नो खाद्य वस्तुहरू, खेती तथा चौपायाबाट आउने आम्दानीको एक भाग मूर्तिहरूको लागि विशेष गरेका थिए त्यसमध्ये उनीहरूको एउटा घचलाग्दो प्रथा यस्तो पनि थियो । उनीहरूले ईश्वरको लागि पनि आफ्नो खेती र जनावरहरूबाट आउने आम्दानीको एक भाग छुट्याउने गर्थे । परिस्थिति अनुसार ईश्वरको भाग त मूर्तिहरूलाई हस्तान्तरण गर्न पाउँथे तर, मूर्तिहरूको भाग कुनै पनि स्थितिमा ईश्वरलाई हस्तान्त्रण गर्न मिल्दैन थियो । ईश्वरको कथन छ :

وَجَعَلُواْ لِلّهِ مِمِّا ذَرَأَ مِنَ الْحَرْثِ وَالأَنْعَامِ نَصِيباً فَقَالُواْ هَـذَا لِلّهِ بِزَعْمِهِمْ وَهَـذَا لِشُرَكَآئِنَا فَمَا كَانَ لِشُرَكَآئِهِمْ فَلاَ يَصِلُ إِلَى اللّهِ وَمَا كَانَ لِلّهِ فَهُوَ يَصِلُ إِلَى شُرَكَآئِهِمْ سَاء مَا يَحْكُمُونَ ( الأنعام :136)

अल्लाहले जुन खेती र चौपाया पैदा गरेका छन् त्यसको एक भाग उनीहरूले अल्लाहको लागि छुट्याएका छन् । उनीहरूले आफ्नो धारणा अनुसार भने, यो अल्लाहको लागि हो र यो हाम्रा भगवानहरूको लागि हो । जुन भाग तिनका भगवानका लागि छन् त्यो त अल्लाहसम्म पुग्दैन तर जुन भाग अल्लाहको लागि छ त्यो तिनका भगवानसम्म पुग्दछ । कति नराम्रो फैसला हो जुन उनीहरूले गर्ने गर्छन् ।" (अल् अन्आम् : १३६)

५) मूर्तिहरूको सामीप्यता हासिल गर्न बहुदेववादीहरूले खेती र चौपाया बारे विभिन्न प्रकारको कसम खाने गर्थे । ईशवाणी छ :

وَقَالُواْ هَـذِهِ أَنْعَامٌ وَحَرْثٌ حِجْرٌ لاَّ يَطْعَمُهَا إِلاَّ مَن نّشَاء بِزَعْمِهِمْ وَأَنْعَامٌ حُرِّمَتْ ظُهُورُهَا وَأَنْعَامٌ لاَّ يَذْكُرُونَ اسْمَ اللّهِ عَلَيْهَا افْتِرَاء عَلَيْهِ ( الأنعام : 138)

बहुदेववादीहरूले आफ्नो धारणा अनुसार भने, यी चौपाया र खेतीहरु निषेध गरिएका छन्, यिनीहरूलाई त्यो व्यक्तिले मात्र खान पाउँछ जसलाई हामी चाहन्छौं, केही यस्ता चौपाया छन् जसमाथि भारी बोकाउन अवैध गरिएको छ । केही यस्ता चौपायाहरु छन् जसलाई वध गर्दा उनीहरूले अल्लाहमाथि आरोप लगाउँदै अल्लाहको नाउँ लिदैनन् । (अल् अन्आम् :१३८)

६) ती जनावरहरूमध्ये बहिरह, सायबा, वसीला र हामि थिए । सइद बिन मुसैयबको भनाई अनुसार बहिरह नामक जनावरको दूध मूर्तिहरूको लागि विशेष

गरिन्थ्यो । त्यो जनावरलाई कसैले दुहुन्थेन । सायबा नामक जनावरलाई आफ्नो मूर्तिहरूको लागि छोडेका थिए । त्यस जनावरमाथि कुनै भारी बोकाइन्थेन । वसिला त्यो उँटनीलाई भनिन्थ्यो जसले पहिलो र दोस्रो वेतमा स्त्रीजातको बच्चा दिन्थ्यो । त्यसलाई मूर्तिहरूको नाममा छोड्नुको कारण त्यसले एउटा स्त्रीजातको बच्चालाई अर्को स्त्रीजातको बच्चासँग सम्बन्ध गाँसेको र दुईटा स्त्रीजातको बच्चाबीच कुनै नर बच्चा नजन्माएको मान्यता थियो । हामि त्यो नर उँटलाई भनिन्थ्यो जसले दश वटा उँटनीलाई गर्भधारण गराउँदा प्रत्येक उँटनीबाट स्त्रीजातको बच्चा जन्मन्थ्यो । त्यस्तो उँटलाई पनि मूर्तिहरूको नाममा छोडिन्थ्यो । त्यसमाथि भारी बोकाइन्थेन । त्यस्तो उँटलाई हामि भनिन्थ्यो ।[१] इब्ने इस्हाकको भनाई अनुसार बहिरह सायबाको स्त्रीजातको बच्चालाई भनिन्थ्यो । सायबा त्यो उँटनीलाई भनिन्थ्यो जसले दश बाह्र पटकसम्म निरन्तर स्त्रीजातको बच्चा जन्माउथ्यो । बीचमा कुनै नर जातको बच्चा जन्मन्थेन । त्यस्तो ऊँटनीलाई छाडा छोडिन्थ्यो, त्यसमाथि सवारी गरिन्थेन । त्यसको रौं पनि काट्ने गरिदैन थियो र पाहुनाले बाहेक कसैले त्यसको दूध पिउन पाउँदैन थियो । त्यसपश्चात् त्यो ऊँटनीले जुन स्त्रीजातको बच्चा जन्माउँथ्यो त्यसको कान चिरिन्थ्यो र त्यसलाई पनि उसको आमासँग छाडा छोडिन्थ्यो । त्यसमाथि सवारी गरिदैन थियो, त्यसको रौं काटिदैन थियो र पाहुनाले बाहेक कसैले त्यसको दूध पिउन पाउँदैन थियो । त्यस्तो उँटलाई बहिरह र त्यसको माउलाई सायबा भनिन्थ्यो ।

वसीला त्यस बाख्रालाई भनिन्थ्यो जसले पाँच पटकसम्म निरन्तर दुई दुई वटा पाठी पाउँने गर्थ्यो बीचमा कुनै पाठो पाउँदैन थियो । त्यस बाख्रालाई वसीला भन्नुको कारण त्यसले सम्पूर्ण पाठीहरूलाई एक अर्कासँग सम्बन्ध गाँसिदिएको मानिन्थ्यो । अनि त्यस्तो बाख्राबाट जुन बच्चा जन्मन्थ्यो त्यसको मासु पुरुषले मात्र खान पाउँथ्यो, महिलाहरूले खान पाउँदैन थिइन् । तर त्यस बाख्राबाट मरेको बच्चा जन्मेको खण्डमा त्यस मरेको बच्चाको मासु पुरुष तथा महिला सबैले खाने गर्थे ।

'हामि' त्यस नर ऊँटलाई भनिन्थ्यो जसको गर्भधारणबाट निरन्तर दश वटा स्त्रीजातको बच्चा जन्मन्थ्यो, बीचमा कुनै नर जन्मिदैन थियो । त्यस्तो ऊँटको पिठ्युँ सुरक्षित राखिन्थ्यो । त्यसमा न सवारी गरिन्थ्यो न त्यसको रौं काटिन्थ्यो । त्यस उँटलाई ऊँटहरूको बगालमा गर्भधारण गराउनको लागि छाडा छोडिन्थ्यो र त्यस बाहेक त्यसबाट अरू कुनै काम लिने गरिदैन थियो । अज्ञान कालका मूर्ति-पूजाका ती तरिकाहरूको खण्डन गर्दै ईश्वरले भनेका छन् :

مَا جَعَلَ اللهُ مِن بَحِيرَةٍ وَلاَ سَآئِبَةٍ وَلاَ وَصِيلَةٍ وَلاَ حَامٍ وَلَـكِنَّ الَّذِينَ كَفَرُواْ يَفْتَرُونَ عَلَـى اللهِ الْكَذِبَ وَأَكْثَرُهُمْ لاَ يَعْقِلُونَ ( المائدة : 103)

१ सही बुखारी हिदस नं ४६२३

अल्लाहले न कुनै बहिराहलाई वैध गरेका छन्, न कुनै सायबालाई, न कुनै वसीलालाई र न कुनै हामलाई । तर इन्कारीहरूले अल्लाहमाथि झूट गढ्दछन् र उनीहरूमध्ये अधिकांश विवेकहीन छन् । (अल् मायदा :१०३)

ईश्वरले एक अर्को ठाउँमा भनेका छन् :

وَقَالُواْ مَا فِي بُطُونِ هَـذِهِ الأَنْعَامِ خَالِصَةٌ لِّذُكُورِنَا وَمُحَرَّمٌ عَلَى أَزْوَاجِنَا وَإِن يَكُن مَّيْتَةً فَهُمْ فِيهِ شُرَكَاء (الأنعام :139)

ती बहुदेववादीहरूले भने, यी जनावरहरूको पेटमा जे छ त्यो केवल हाम्रा पुरुषहरूको लागि वैध छ र हाम्रा महिलाहरूको लागि त्यो अबैध छ । यदि त्यो मरेको छ भने त्यसमा पुरुष तथा महिला सबैको बराबर सहभागिता हुन्छ । (अल् अन्आम् :१३९)

उल्लेखित ती चौपायाहरू अर्थात बहिरह, सायबा, आदिको केही अन्य अर्थ पनि बयान गरिएको छ ।[1] ती अर्थहरू इब्ने इसहाकको व्याख्याभन्दा केही भिन्न छन् ।

सइद बिन मुसैयबको बयानले उल्लेख गरेको व्याख्या अनुसार ती जनावर बहुदेववादीहरूका झुटा देवीदेवताका निम्ति थिए ।[2] सही बुखारी नामक हदीसको पुस्तकमा ईशदूत को भनाई छ : मैले अमर बिन आमिर लुह्यी खुजाईलाई नर्कमा आफ्नो आन्द्रा घिसार्दै गरेको देखेँ ।[3] किनभने इब्राहीमी धर्मलाई विगार्ने ऊ पहिलो व्यक्ति थियो । मूर्तिको स्थापना उसैले गरेको थियो । सायबा नामक जनावर पनि उसैले छाडा छोडेको थियो । बहिरह, वसिला र हामि नामक जनावर पनि उसैले स्थापित गरेको थियो ।[4]

ती मूर्तिहरूले ईश्वरको समीप गरिदिने छन् र ईश्वरसँग सिफारिस गरिदिने छन् भन्ने अरबवासीको विश्वास थियो । अत: कुरआनमा बहुदेववादीहरूको कथनलाई यसरी प्रस्तुत गरिएको छ । ईशवाणी छ :

مَا نَعْبُدُهُمْ إِلَّا لِيُقَرِّبُونَا إِلَى اللَّهِ زُلْفَى (الزمر :3 )

हामीले उनीहरूको उपासना केवल हामीलाई अल्लाहको समीप गरिदिने छन् भनेर गरेका हौं । (अल् जुमर : ३)

وَيَعْبُدُونَ مِن دُونِ اللّهِ مَا لاَ يَضُرُّهُمْ وَلاَ يَنفَعُهُمْ وَيَقُولُونَ هَـؤُلاء شُفَعَاؤُنَا عِندَ اللّهِ (يونس :18)

---

१ सिरत इब्ने हेशाम १/८९,९०
२ सही बुखारी १/४९९
३ सही बुखारी हदिस नं १२१२
४ फतहुल् बारी ६/६३४

यी बहुदेववादीहरूले अल्लाहबाहेक जसको पूजा गर्छन् उनीहरूले न त उनीहरूलाई लाभ दिन सक्छन् न नोक्सान नै पुऱ्याउन सक्छन् । बहुदेववादीहरु भन्छन् यिनीहरू अल्लाहकहाँ हाम्रा सिफारिशी हुन् । (युनुस : १८)

अरबी बहुदेववादीहरूले अज्लाम अर्थात भविष्यवाणी गर्न तीर पनि प्रयोग गर्ने गर्थे । अज्लाम, जलम शब्दको बहुबचन शब्द हो । जलम पखेटा नलागेको वाणलाई भनिन्थ्यो । भविष्यवाणीको लागि प्रयोग हुने ती वाण तीन प्रकारका हुने गर्थे । एक त्यो जसमाथि "हो" या "होइन" लेखिएको हुन्थ्यो । त्यस प्रकारको वाण यात्रा र विवाह जस्ता कार्यको लागि प्रयोग गर्ने गरिन्थ्यो । भविष्यवाणीमा "हो" निस्केको खण्डमा गर्नु पर्ने काम गरिन्थ्यो र "होइन" निस्केको खण्डमा एक वर्षको लागि स्थगन गरिन्थ्यो र आगामी पुनः भविष्यवाणी गरिन्थ्यो ।

भविष्यवाणीका वाणहरूको दोस्रो किसिम त्यो थियो जसमा पानी वा दियत लेखिएको हुन्थ्यो र तेस्रो प्रकार त्यो थियो जसमा "तिमी मध्येबाट हो" वा "तिमी बाहेकबाट हो" या "जोडिएको हो" लेखिएको हुन्थ्यो । कसैको वंशावलीमा शंका भएको खण्डमा त्यसलाई छुट्याउन एक सय ऊँट समेत उसलाई हुबल नामक मूर्तिकहाँ लगेर ती वाणहरूको प्रयोग गरिन्थ्यो । ऊँटहरू वाणवाला महन्तको सुपुर्द गरिन्थ्यो र उसले सम्पूर्ण वाणहरू एक साथ मिलाएर गोलमोल गरी एउटा वाण झिक्थ्यो । त्यसपछि "तिमी मध्येबाट हो" लेखिएको वाण निस्केको खण्डमा ऊ आफ्नो जातिको एउटा सम्मानित व्यक्ति ठहरिन्थ्यो र "तिमीहरूको होइन" लेखिएको वाण निस्केको खण्डमा ऊ त्यस जातिको मित्र ठहरिन्थ्यो र "जोडिएको हो" लेखिएको वाण निस्केको खण्डमा ऊ सशंकित अवस्थामा रहन्थ्यो । न ऊ त्यस जातिको व्यक्ति मानिन्थ्यो न मित्र । [१]

त्यसैसँग मिल्दोजुल्दो अर्को एउटा प्रथा बहुदेववादीमा जुवा खेल्ने र जुवाको वाण प्रयोग गर्ने थियो । त्यसै वाणको निशाना लागेको खण्डमा उनीहरूले जुवाका ऊँट बध गरी त्यसको मासु बाँड्ने गर्थे ।

त्यसको तरिका यस प्रकार थियो । जुवा खेल्नेहरुले एउटा उधारो उँट किन्थे र त्यसलाई वध गर्थे । साथै त्यसको दश वा अठ्ठाइस भाग लगाउँथे र वाण हानेर नाम निकाल्थे । कुनै वाणमा विजयको निशाना लागेको हुन्थ्यो र कुनैमा लागेको हुँदैन थियो । जसको नाममा विजयको निशाना लागेको वाण निस्कन्थ्यो ऊ विजयी मानिन्थ्यो र उसले आफ्नो भाग लिन्थ्यो । त्यसैगरी जसको नाममा निशाना लागेको वाण निस्कदैन थियो उसले त्यसको मुल्य चुकाउनु पर्थ्यो ।

१ फतहुल बारी ८/२७७, इब्ने हेशाम १/१५२

अरबका बहुदेववादीहरू ज्योतिष, वेदांशास्त्र र ज्योतिष-शास्त्रमा पनि आस्था राख्दथे । ज्योतिषी घट्ने घटनाको भविष्यवाणी गर्ने व्यक्तिलाई भनिन्थ्यो । साथै रहस्यमय कुराको ज्ञानको दावी गर्ने व्यक्तिलाई पनि ज्योतिषी भनिन्थ्यो । केही ज्योतिषीले दानव आफ्नो वशमा रहेको र त्यसले खबर दिइरहेको दावी गरेका थिए । केही ज्योतिषीले आफुलाई त्यस्तो बुद्धि प्रदान गरिएको जसबाट परोक्षको पनि ज्ञान भएको दावी गरेका थिए । केही ज्योतिषीले उनीहरूकहाँ केही कुरा सोध्न आउने व्यक्तिको कुरा चालढाल र परिवेश तथा स्रोतबाट घटेको घटनाको पत्ता लगाउने दावी गरेका थिए । त्यस किसिमका मानिसलाई आराफ भनिन्थ्यो । अर्थात त्यस्तो व्यक्तिले चोरीको सामान, चोरी भएको ठाउँ र हराएका जनावरहरू आदिको पत्ता ठेगाना बताउने गर्थ्यो ।

नुजुमी त्यस व्यक्तिलाई भनिन्थ्यो जसले ताराहरू हेरी तिनको गति र समयको हिसाब लगाएर संसारमा आगामी के के घटनाहरू घट्ने छन् भन्ने कुरा पत्ता लगाउथ्यो ।[1] ती नुजुमीहरूलाई मान्नु ताराहरूमाथि आस्था राख्नु सरह हो । ताराहरूमाथि आस्था राखे झै बहुदेववादीहरूले नक्षत्रहरूमाथि पनि आस्था राख्दै फलानो फलानो नक्षत्रबाट वर्षा भएको हो भन्ने गर्थे ।[2]

बहुदेववादीहरूमा अपशकुनको पनि प्रचलन थियो । त्यसलाई अरबीमा तिरह भनिन्छ । त्यसको विधि यस प्रकारको थियो । बहुदेववादीहरू कुनै चरा वा हरिणको नजिक गएर त्यसलाई धपाउँथे । त्यो पशु दाहिनेतर्फ भागेको खण्डमा त्यसलाई शुभसाइत र सफलताको लक्षण सम्झेर आफुले गर्न खोजेको काम गर्थे र त्यो पशु देब्रेतर्फ भागेको खण्डमा त्यसलाई नराम्रो साइतको लक्षण सम्झेर आफुले गर्न खोजेको कामबाट रोकिन्थे । त्यसैगरी कुनै चरा वा जनावरले बाटो काटेको खण्डमा त्यसलाई पनि अपशकुन सम्झन्थे ।

त्यसैसँग मिल्दोजुल्दो एक अर्को प्रवृति यस्तो पनि थियो । बहुदेववादीहरू खरायोको खुट्टाको हाड काटेर झुण्डाउँथे र केही दिन र महिनाका लागि जनावर, घर र महिलालाई अलक्षण सम्झन्थे । रोगलाई छूत ठान्दथे । शरीरबाट निस्केको आत्मालाई उल्लू बन्ने कुरामा विश्वास गर्थे । अर्थात हत्या गरिएको व्यक्तिको बदला नलिदासम्म आत्मालाई शान्ति प्राप्त नहुने र उसको आत्मा उल्लु बनी मरुभूमिमा उडेर तिर्खा तिर्खा भन्दै काराउने गर्छ भन्ने उनीहरूको मान्यता थियो । साथै हत्या गरिएको व्यक्तिको बदला लिएपछि उसको आत्माले शान्ति पाउने उनीहरूको विश्वास थियो ।[3]

१ अल् लिसान
२ सही बुखारी हदिस नं ८४६
3 सही बुखारी हदिस नं २/८५१

## इब्राहिमी धर्ममा कुरैशका मनगढन्ते कुराहरूको मिश्रण

यो थियो अज्ञानकालका मानिसहरूको आस्था एवं धर्मकर्म । त्यसका साथ साथै उनीहरूमा इब्राहीमी धर्मका केही कुराहरू जीवित पनि थिए । अर्थात् उनीहरूले त्यो धर्मलाई पूर्ण रूपमा त्यागेका थिएनन् । तसर्थ उनीहरूले काबाको कदर र त्यसको तवाफ अर्थात परिक्रमा गर्ने गर्दथे , हज तथा उमराह गर्दथे । अरफात एवं मुजदलिफामा विश्राम गर्ने गर्दथे । कुरबानीका जनावरलाई कुरबानी गर्थे । तर उनीहरूले इब्राहीमी धर्ममा अत्यधिक मनगढन्ते कुराहरू रचेर त्यसमा मिसाएका थिए । जस्तै :

कुरैशले आफुहरूलाई इब्राहीमعليه السلامका सन्तान, काबाका संरक्षक र मक्कावासी ठानेका थिए । कोही व्यक्ति हामी समान छैन र कुनैको अधिकार हाम्रो अधिकार समान छैन भन्ने उनीहरूको मान्यता थियो । त्यसै आधारमा उनीहरूले आफ्नो नाम हुम्स अर्थात वीर राखेका थिए । हरम छोडेर बाहिर जानुलाई आफ्नो अपमान ठान्दथे । अतः हज गर्ने क्रममा उनीहरू अरफात पनि जाँदैनन् थिए । त्यहाँबाट तवाफे इफाजह गर्न काबा नगई मुजदलिफामा गएर त्यहाँबाट तवाफे इफाजह गर्न काबा जाने गर्थे । ईश्वरले त्यस मनगढन्ते विचारलाई सुधार गर्न आदेश दिदै भनेका छन् :

ثُمَّ أَفِيضُواْ مِنْ حَيْثُ أَفَاضَ النَّاسُ وَاسْتَغْفِرُواْ اللّهَ إِنَّ اللّهَ غَفُورٌ رَّحِيمٌ (البقرة : 199)

तिमीहरू पनि त्यहींबाट फर्कओ जहाँबाट सम्पूर्ण मानिसहरू फर्कन्छन् ।

(अल् बकराह : १९९) [१]

कुरैशका लागि एहरामको अवस्थामा पनीर र घ्यू बनाउनु हुँदैन, कम्बलबाट बनाइएका टहरामा बस्नु पनि हुँदैन र शीतलमा बस्नु छ भने छालाको टहराबाहेक अरू कुनै ठाउँको शीतलमा बस्नु हुँदैन भन्ने उनीहरूको नयाँ धारणाहरूमध्ये एउटा धारणा थियो ।[२]

हरमभन्दा बाहिरका वासिन्दाहरू हज वा उमराह गर्न आउँदा हरमभन्दा बाहिरबाट उनीहरूले ल्याएको खानेकुरा कुरैशले आफ्नो लागि जायज छैन भन्ने एउटा नयाँ रीति गढेका थिए ।[३]

कुरैशले हरमभन्दा बाहिरका बासिन्दलाई हरममा आएपछि पहिलो तवाफ कुरैशले दिइएको कपडामा गर्नु पर्छ भनी एउटा नयाँ संस्कार निकालेका थिए । तसर्थ तिनीहरूको कपडा प्राप्त नभएको खण्डमा पुरुषले नाङ्गै तवाफ गर्थे र महिलाहरूले

१ इब्ने हेशाम १/१९९, सही बुखारी २२६
२ इब्ने हेशाम १/२०२
3 इब्ने हेशाम १/२०२

सम्पूर्ण कपडा फुकालेर केवल एउटा छोटो खुल्ला कुर्ता लगाएर त्यसैमा तवाफ गर्थिन र तवाफको दौरान निम्न कवितांश पढ्ने गर्थिन् :

اليوم يبدو بعضه او كله وما بدا منه فلا احله

अनुवाद छ : आज शरीरको केही अंग वा पूरा शरीर नांगो हुनेछ तर नांगो भएको अंग हेर्न कसैलाई जायज छैन ।

ईश्वरले त्यस्ता रूढीवादी संस्कारको खण्डन गर्दै भनेका छन् :

يا بَنِي آدَمَ خُذُواْ زِينَتَكُمْ عِندَ كُلِّ مَسْجِدٍ (الأعراف : 31)

हे आदमका सन्तान, हरेक मस्जिदमा जाँदा राम्रो कपडा लगाएर जाने गर । (अल् आराफ : ३१)

महिला तथा पुरुषले श्रेष्ठ एवं ठूलो बनेर हरमभन्दा बाहिरबाट ल्याएको आफ्नै कपडामा तवाफ गरे भने तवाफ पश्चात ती कपडाहरू फ्याक्नु पर्थ्यो । त्यसलाई न त आफुले लगाउँथे न अरूले लगाउँथे ।[१]

कुरैशले एहराम लगाएको अवस्थामा घरको मूल ढोकाबाट घरमा प्रवेश नगर्ने र घरमा प्रवेश गर्नु पर्दा घरको पछाडि एउटा ठूलो प्वाल बनाएर त्यसबाट आउजाउ गर्ने एउटा नयाँ रीति निकालेका थिए । त्यसलाई उनीहरूले पुण्य ठान्दथे । कुरआनले त्यसको खण्डन गरेको छ :

बहुदेववाद अर्थात मूर्तिपूजा र रूढीवाद तथा विकारमा आधारित आस्था एवं कर्मको त्यही धर्म आम अरबवासीको धर्म थियो ।

त्यस बाहेक अरब टापुको विभिन्न क्षेत्रमा यहुदी, मजूसी, इसाई र सावी जस्ता धर्मले पनि जन्म लिने अवसर पाए । तसर्थ उनीहरूको ऐतिहासिक खाका पनि संक्षिप्तमा प्रस्तुत गरिदैछ ।

अरब प्रायद्वीपमा यहुदी युगको न्युनतम दुईटा चरण देखिन्छन् । पहिलो चरण प्यालिस्टायनमा बाबुल र आशुरले राज्यसत्ता हासिल गर्ने क्रममा यहुदीलाई देशनिकाला हुनु पर्दाको अवस्थासँग जोडिएको छ । तत्कालिन शासनको क्रुरता, बख्ते नसरको हातबाट यहुदी बस्तीहरूमा भएको विनाश एवं विध्वंश, तिनका हैकल अर्थात मन्दिरहरू ध्वस्त गरिएका र उनीहरूमध्ये अधिकांश मानिसहरू बाबुल मुलुकतिर पलायन भएका कारण यहुदीको एक समूह प्यालिस्टायनबाट पलायन भएर हिजाजको उत्तरी क्षेत्रमा आएर बस्यो ।[२]

दोस्रो चरण इस्वी सम्बत ७० सालमा इटालियन राजा टाइटिसको नेतृत्वमा इटालियनवासीले प्यालिष्टायनमा कब्जा गरेदेखि शुरु हुन्छ । त्यस बेला इटालियनद्वारा

१ सही बुखारी १/२२६
२ कल्ब जजिरतु अरब पृष्ठ २५१

यहुदीमाथि भएको आक्रमण र उनीहरूको हैकल अर्थात मन्दिरलाई ध्वस्त गरिएको कारण यहुदीको अत्यधिक संख्या भागेर हिजाजतिर पलायन भएको थियो । त्यसै क्रममा उनीहरूले मदिना,खैबर र तुऐमा क्षेत्रमा स्थापित भएर बकायदा गाउँ बनाए । त्यहाँ उनीहरूले किल्ला र बंकरहरू पनि निर्माण गरे । आफ्नो देशबाट पलायन भएका ती यहुदीहरूबाट अरबवासीमा यहुदी धर्मको प्रभाव पर्न थाल्यो र त्यस धर्मलाई पनि इस्लामको उदय हुनुअघि र त्यसको प्रारम्भिक चरणको राजनीतिक घटनाले गर्दा त्यो धर्म बढो चर्चामा आयो । इस्लामको उदय हुँदा प्रसिद्ध यहुदी जातिहरूमध्ये खैबर, नजीर, मुस्तलक, कुरैजा र कैनुका थिए । समहुदीले यहुदी जातिको संख्या बीसभन्दा बढी उल्लेख गरेका छन् ।[१]

यहुदीहरू यमनमा पनि फैलिए । त्यहाँ उनीहरू फैलिनुको कारण तबान असअद अबू करब बन्यो । त्यो व्यक्ति लडाइँ लड्दै यस्रिब पुगेको थियो । त्यहाँ उसले यहुदी धर्म स्वीकाऱ्यो । उसले बनू कुरैजाका दुई जना यहुदी विद्वानलाई आफूसँगै यमन ल्यायो र तिनीहरूको माध्यमबाट यहुदी धर्म यमनमा प्रसारप्रचार हुनुका साथै त्यसको विस्तार भयो । अबू करब पश्चात् उसको छोरा युसुफ जुनवास यमनको हाकिम भयो । उसले यहुदी धर्म पाएको जोशमा नजरानका इसाइहरूमाथि आक्रमण गऱ्यो र उनीहरूलाई यहुदी धर्म स्वीकार्न बाध्य गऱ्यो तर उनीहरूले इन्कार गरे । त्यसपछि जूनवासले खाडल खन्ने आदेश दियो । त्यसमा आगो जलाएर इसाई बृद्धा,बच्चा,पुरुष तथा महिला सबैलाई अभद्र तरिकाले आगोको मुस्लोमा हालिदियो । भन्ने गरिन्छ, त्यस घटनाको शिकार हुनेहरूको संख्या बीसदेखि चालीस हजारसम्म थियो । त्यो घटना अक्टोबर ५२३ इस्वीमा घटेको थियो । कुरआनको बुरुज नामक अध्यायमा पनि त्यस घटनाको चर्चा गरिएको छ ।[२]

इसाइ धर्म, यो धर्म अरब मुलुकहरूमा हब्शी र इटालियन आधिपत्यहरू र विजेताहरूद्वारा भित्रेको थियो । यमनमाथि हब्शीहरूले प्रथम पटक ईस्वी ३४० मा कब्जा गरेको कुरा उल्लेख गरिएको छ । तर उनीहरूको प्रभूत्व धेरै टिकेन । यमनवासीले ईस्वी ३७० देखि ३७८को समयावधिभित्र उनीहरूलाई त्यहाँबाट लखेटे ।[३] तर त्यस दौरान यमनमा ईसाइ मिशनले आफ्नो काम गरिरहेको थियो । लगभग त्यसै जमानामा फेमियुन नाम गरेको एक जना सज्जन र चमत्कारी एवं क्षमतावान इसाइ धर्म गुरू नजरान पुग्यो र त्यहाँको वासिन्दाहरूमा ईसाइ धर्मको प्रचार गऱ्यो । उसमा र उसको धर्ममा सत्यताका केही लक्षण देखेर नजरानवासीहरू पनि इसाइ बने ।[४]

---

१ कल्ब जजिरतु अरब पृष्ठ २५१
२ इब्ने हेशाम १/२०,२१,२२,२७,३१,३५,३६
3 तारिखुल अरब कब्लल् इस्लाम पृष्ठ नं १३२,४३२
४ इब्ने हेशाम १/३१–३४

त्यसपछि जुनवासको कार्वाहीको प्रतिशोधमा हब्शीहरूले फेरि दोस्रो पटक ५२५ इस्वीमा यमनमाथि कब्जा गरे र अब्राहले यमनको बागडोर आफ्नो हातमा लियो । त्यसपछि उसले बढो उत्साहका साथ व्यापक रूपमा इसाइ धर्मलाई प्रचार प्रसार गर्ने प्रयास गऱ्यो । त्यसै उत्साहले गर्दा उसले यमनमा एउटा काबा निर्माण गऱ्यो । साथै उसले अरबवासीलाई मक्कामा रहेको काबाबाट छुटाएर त्यसैको हज गराउँन र मक्काको काबालाई भत्काउन प्रयास गऱ्यो । तर उसको कुचेष्टाका कारण ईश्वरले उसलाई यति नराम्रो सजाय दियो जुन अघिपछि आउनेहरूको निम्ति प्रेरणा बन्यो ।

अर्कोतिर इटालियनको छिमेकी भएको नाताले आले गस्सान, बनू तग्लब र बनू तयी आदि अरब जनजातिमा पनि ईसाइ धर्म फैलियो । त्यति मात्र नभएर हेराका केही अरब नरेशहरूले पनि इसाई धर्म स्वीकारेका थिए ।

मजूसी धर्म, त्यो धर्म अधिकतर फारसका छिमेकी अरब मुलुकहरूमा फैलिएको थियो । जस्तै इराक अरब, बहरैन, हजर र खाडीमा अरबीको तटीय क्षेत्रहरू थिए । ती बाहेक यमनमाथि फारसी आधिपत्यको दौरान त्यहाँ पनि केही व्यक्तिले मजूसी धर्म स्वीकार गरेका थिए ।

सायबी धर्म, ग्रहहरूको पूजा गर्नु, नक्षत्रमा विश्वास गर्नु, ताराहरूलाई मान्नु र तिनलाई जगतको संचालक ठान्नु त्यस धर्मको सार थियो । इराक क्षेत्रहरूमा पुरातात्विक सम्पदाको उत्खनन् गर्दा त्यहाँ भेटिएको पूस्तकहरूबाट त्यो धर्म इब्राहीमको जमानामा कुल्दानी जातिको धर्म थियो भन्ने कुरा झल्किन्छ । प्राचीन कालमा सिरिया एवं यमनका धेरै जसो वासिन्दाहरू पनि त्यसै धर्मका अनुयायी थिए । तर यहुदी र ईसाइको चहलखेल बढेपछि त्यस धर्मलाई ठूलो धक्का लाग्यो र त्यसको दीप निभ्यो । तर मजूसको साथ मिश्रृत भएर वा तिनको छिमेकमा इराक अरब र खाडी अरबीको तटमा त्यस धर्मको केही अनुयायीहरू शेष रहे ।[१]

## धार्मिक अवस्था

इस्लामको सूर्योदय हुँदा अरबमा तिनै धर्महरू पाइन्थे । तर ती सम्पूर्ण धर्महरू हार खाएर टाटिएका थिए । हामी इब्राहीमी धर्ममा छौं भन्ने बहुदेववादीहरू पनि इब्राहीमी धर्मका नीतिनियम तथा आदेश र निषेधित कुराहरूदेखि कोसौं टाढा थिए । त्यस धार्मिक कानूनले जुन उच्च चरित्रको शिक्षा दिएको थियो त्यसबाट ती बहुदेववादीहरूलाई कुनै वास्ता थिएन । उनीहरूमा पापको प्रचुरता थियो । युगको लामो अन्तरालका कारण उनीहरूमा पनि मूर्ति पूजाको त्यही प्रवृति एवं प्रचलनको उपज भएको थियो जसलाई धार्मिक रूढीवादी संस्कारको संज्ञा दिइन्छ । ती प्रवृति

१ तारिख अर्जील् कुरआन २/१९३–२०८

एवं प्रचलनले उनीहरूको सामूहिक राजनैतिक र धार्मिक जीवनमा अति नै गहिरो प्रभाव पारेको थियो ।

यहुदी धर्म, त्यो धर्म केवल देखावटी तथा अहंकारीको रूपमा थियो । यहुदी धर्मका गुरूहरू ईश्वरको सट्टा आफुलाई मालिक सम्झन्थे । मानिसहरूमाथि आफ्नो मनमर्जी चलाउँथे । उनीहरूको मनको कुरा र उनीहरूको भनाइसम्मको जाँच परीक्षण गर्दथे । ती धर्म गुरूहरूको पूरा ध्यान धनसम्पत्ति एवं शानाधिकार प्राप्त गर्नुमा मात्र केन्द्रित थियो । त्यसका लागि आफ्नो धर्मको बर्बादी र नास्तिकत्वको सफलता र ईश्वरीय शिक्षालाई मान्ने नमान्ने कुरामा उनीहरूलाई कुनै सरोकार थिएन ।

इसाइ धर्म, त्यो धर्म अनौठो तरिकाले मूर्ति पूजाको धर्म बनेको थियो । त्यसले ईश्वर र मावनलाई एउटै ठानेको थियो । त्यो धर्म स्वीकार गर्ने अरबीहरूमा त्यस धर्मको कुनै असर थिएन । किनकि त्यस धर्मको शिक्षा उनीहरूको जीवनसँग मेल खाँदैन थियो र उनीहरूले आफ्नो जीवनशैली त्याग्न सक्दैनन् थिए ।

अरबका अन्य धर्मलाई मान्नेहरूको अवस्था पनि बहुदेववादीहरू जस्तै थियो । किनभने तिनीहरूको सोच एक थियो । आस्था मिल्दोजुल्दो थियो । रीति तथा संस्कारमा समानता थियो ।

## अज्ञानी समाजका केही झलकहरू

अरब टापुको राजनीतिक तथा धार्मिक अवस्थाको वर्णन पश्चात त्यहाँको सामूहिक, आर्थिक र नैतिक अवस्थाको खाका संक्षेपमा प्रस्तुत गरिदै छ ।

### सामूहिक अवस्था

अरबको आवादी विभिन्न वर्गमा विभाजित थियो र हरेक वर्गको परिस्थिति एक अर्काभन्दा एकदमै भिन्न थियो । तसर्थ उच्च वर्गका पुरुष र महिलाहरू धेरै विकसित थिए । महिलालाई धेरै कुरामा स्वतन्त्रता हासिल थियो । उनीहरूको कुरा मानिन्थ्यो । उनीहरूको इज्जत तथा सुरक्षा गरिन्थ्यो । उनीहरूको कारण तरबार निस्कन्थ्यो र रक्तपात युद्ध हुन्थ्यो । मानिसहरूले आफ्नो दान तथा वीरताको प्रशंसा गर्न महिलालाई सम्बोधन गर्ने गर्थे जसलाई अरबमा उत्कृष्ट स्थान हासिल थियो । महिलाले चाहेको खण्डमा कबिलाहरू सम्झौताका लागि एकिकृत हुन्थे र उनीहरूले चाहेको खण्डमा कबिलाहरूबीच रक्तपातको ज्वाला फुट्थ्यो । त्यति हुँदा हुँदै पनि पुरुषलाई नै निर्विवाद रूपमा खानदानको प्रमुख मानिन्थ्यो । उसको कुरा निर्णायक हुने गर्थ्यो । त्यस वर्गमा पुरुष र महिलाको मेल विवाह बन्धनबाट हुन्थ्यो । विवाह महिलाका अभिभावकको मातेहतमा हुने गर्थ्यो । महिलालाई आफ्नो अभिभावकको अनुमति विना स्वइच्छाले आफ्नो विवाह गर्ने अधिकार थिएन ।

एकातिर उच्च वर्गको त्यो अवस्था थियो भने अर्कोतिर अन्य वर्गमा पुरुष एवं महिलाको आपसी मेलका कैयौं यस्ता तरिकाहरू थिए जसलाई अनैतिकता एवं निर्लज्जता र अश्लीलता एवं दुर्व्यसनको नामबाहेक अरू कुनै नाम दिन सकिन्न । माई आइशाको बयान छ : अज्ञानकालमा विवाहका चार वटा तरिका थिए ।

**विवाहको पहिलो तरिका** : त्यो तरिका आजकल प्रचलित तरिका जस्तो थियो । जस्तै एक जना व्यक्तिले अर्को व्यक्तिलाई उसको अधीनमा रहेकी केटीसँग विवाह गर्न संदेश पठाउनु र स्वीकृत भएको खण्डमा महर दिएर विवाह गर्नु ।

**विवाहको दोस्रो तरिका** : महिला महिनावारीबाट मुक्त भएपछि उसको लोग्नेले स्वास्नीलाई फलानो व्यक्तिसँग गएर उसँग यौनसम्पर्क गर भन्थ्यो । लोग्ने स्वास्नीदेखि अलग बस्थ्यो । स्वास्नीको नजिक पनि जाँदैन थियो । यहाँसम्म कि स्वास्नीले जुन व्यक्तिसँग यौनसम्पर्क गरेकी थिई उसको गर्भधारण भएको प्रष्ट थाहा हुन्थ्यो । गर्भाधारण भएको थाहा भए पश्चात आफुले चाहेको बेला श्रीमतीसँग सहवास गर्थ्यो । त्यसो गरिनुको कारण छोरा सज्जन एवं आदर्शवान जन्मन्छ भन्ने थियो । त्यस किसिमका विवाहलाई इस्तिब्दाअ भनिन्थ्यो । त्यसैलाई भारतमा नियोग भन्छन् ।

**विवाहको तेस्रो तरिका** : दश जना व्यक्तिभन्दा कमको एउटा समूह जम्मा हुन्थ्यो, उनीहरू सबैले एउटी महिलासँग यौनसम्पर्क गर्थे, महिलाले बच्चा भएको केही दिन पश्चात आफुसँग यौनसम्पर्क गरेका सबैलाई बोलाउन पठाउँथी । सबैलाई उपस्थित हुनु पर्थ्यो, अनुपस्थित हुन कसैको हिम्मत हुँदैन थियो । त्यस पश्चात त्यो महिलाले तिमीहरूले जे गरेका थियौ त्यो कुरा तिमीहरूलाई थाहा छ र अब मेरो गर्भबाट बच्चा जन्मेको छ र यो बच्चा तिमीहरूमध्ये फलानो को हो भनेर भन्ने गर्थी । त्यस महिलाले तिनीहरूमध्ये जसको नाउँ किटान गर्थी त्यो बच्चा त्यसैको छोरा मानिन्थ्यो ।

**विवाहको चौथो तरिका** : अत्यधिक व्यक्तिहरू भेला भएर कुनै महिलाकहाँ जान्थे । उसले कसैलाई आफूकहाँ आउन अस्वीकार गर्दिन थिई । ती महिलाहरू वेश्या हुन्थिन् । उनीहरूले उनीहरूकहाँ जान चाहेकाहरू विना अवरोध जान सकुन् भनेर निशानाको लागि आफ्नो घरको ढोकामा झण्डा गाडेर राख्थिन । यस्ता महिलाहरू गर्भवती भएर बच्चा जन्मेपछि उसँग यौनसम्पर्क गरेकाहरू उसकहाँ जम्मा हुन्थे र मुख सामुद्रिकलाई बोलाउँथे, मुख सामुद्रिकले आफ्नो विचार अनुसार त्यो बच्चा उनीहरूमध्ये कुनै व्यक्तिको छोरा घोषित गर्थ्यो । त्यसपछि त्यो बच्चा त्यसै व्यक्तिको छोरा मानिन्थ्यो । त्यो व्यक्तिले इन्कार गर्न सक्दैनथ्यो । ईश्वरले मुहम्मद ﷺ लाई ईशदूत नियुक्त गरेपछि अज्ञानकालमा रहेका विवाहका सम्पूर्ण रीतिहरू तोडिदिए । केवल इस्लामी विवाह बाँकी रह्यो जुन आज पनि प्रचलित छ ।[१]

अरबमा पुरुष-महिलाको सम्बन्ध तरवार र भालाको आधारमा पनि स्थापित हुने गर्थ्यो अर्थात जातीय युद्धमा युद्ध जित्ने जातिले हारेको जातिहरूको महिलालाई कैदी बनाएर उनीहरूसँग यौनसम्बन्ध राख्ने गर्थे । तर त्यस्ता महिलाबाट जन्मने सन्तानले जीवनभरि हिंसाको सामना गर्नु पर्थ्यो ।

अज्ञानकालमा बहुविवाहको कुनै सीमा थिए । अत्यधिक श्रीमतीहरू राख्ने कुरा प्रचलित थियो । मानिसहरूले श्रीमती र सालीलाई एक साथ आफ्नो सम्बन्धमा राख्थे । पिताले छोडपत्र दिए पश्चात वा मृत्यु भए पश्चात् छोराले आफ्नी सौतेनी आमासँग पनि विवाह गर्थ्यो । छोड-पत्रको अधिकार पुरुषलाई मात्र प्राप्त थियो र त्यसको कुनै सीमा थिएन । तर इस्लामले त्यस सम्बन्धमा सीमा निर्धारण गर्‍यो ।[२]

दुर्व्यसन सम्पूर्ण वर्गमा व्यापक थियो । कुनै वर्ग वा मानवको कुनै समूह त्यसबाट जोगिएको थिएन । यद्यपि केही पुरुष र केही महिला आफ्नो प्रतिष्ठाका कारण त्यस विकृतिको हिलोमा लतपतिनुबाट जोगिएका थिए । स्वतन्त्र महिलाहरूको

---

१ सही बुखारी किताब अल निकाह
२ अबु दाऊद

स्थिति दासिकाहरूको तुलनामा केही राम्रो थियो । समस्यामा दासिकाहरू थिइन् । अज्ञानकालका अधिकांश मानिसहरूले त्यस विकृतिलाई सामान्य ठानेका थिए भन्ने कुरा उपरोक्त कुराबाट झल्किन्छ । तसर्थ सुनन् अबु दाउद नामक हदिसको पुस्तकमा उल्लेख छ । एक चोटि एक जना व्यक्तिले उभिएर मुहम्मदﷺसँग फलानो बच्चा मेरो छोरा हो किनभने मैले अज्ञानकालमा उसको आमासँग यौनसम्पर्क गरेको थिएँ भनेर भन्यो । मुहम्मदﷺले भन्नुभयो : इस्लाममा यस्तो दावी गर्ने कुनै ठाउँ छैन । अज्ञानकालको कुरा गयो । अब त छोरा छोरी आफ्नी श्रीमती वा दासिकाबाट मात्र पाउनु पर्छ । जसले अवैध यौनसम्पर्क गर्छ उनीहरूको लागि ढुंगाको यातना छ । त्यसैगरी सअद बिन अबी वक्कास र अब्द बिन जम्आबीच जम्आ नामक दासिकाको छोरा अब्दुर्रहमान बारे जुन झगडा थियो त्यो पनि प्रख्यात एवं प्रसिद्ध छ ।[१]

अज्ञानकालमा बुवा–छोराको सम्बन्ध पनि भिन्न किसिमको थियो । एकातिर केही व्यक्तिले भन्ने गर्थे :

انما اولادنا بيننا		اكبادنا تمشى على الأرض

अनुवाद छ : हाम्रो सन्तान हाम्रा कलेजा हुन् जो पवित्र भूमिमा हिँडडुल गर्छन ।

तर अर्कोतिर केही यस्ता व्यक्ति पनि थिए जसले आफ्नी छोरीहरूलाई घृणा तथा खर्चको डरले जिउँदै गाडिदिन्थे भने बच्चाहरूलाई अनिकाल तथा भोकमरीको डरले मारिदिन्थे । तर उनीहरूमा क्रुरता व्यापक थियो भन्न सकिदैन । किनकि अरबवासीलाई शत्रुबाट आफ्नो सुरक्षाको लागि अन्य नाताको दाँजोमा आफ्नो सन्तानको बढी खाँचो पर्थ्यो । त्यसलाई उनीहरूले महसुस पनि गर्थे ।

दाजुभाइहरू, काकाका छोराहरू र खलकीय व्यक्तिहरूको आपसी सम्बन्ध भने सुमधुर थियो । किनकि अरबका मानिसहरू खलकीय पक्षपातका आधारमा जिउँने र मर्ने गर्थे । खलकभित्र आपसी सहयोग र सामूहिक चेतना प्रचुर देखिन्थ्यो । जसमा पक्षपाती भावनाले अँझ उर्जा थप्ने गर्थ्यो । भन्नु पर्दा जातीय पक्षपात र नातागोता नै उनीहरूको आपसी सामूहिक जीवन व्यवस्थाको आधार थियो । उनीहरू त्यो कथनका पात्र थिए जसमा भनिएको छ : आफ्नो भाइको मदत गर, पीडित होस् वा अत्याचारी । त्यस कथनलाई सही अर्थ्याइएको थिएन तर त्यसको सही अर्थ इस्लाम आएपछि लाग्यो । अर्थात अत्याचारीको मदत भनेको उसलाई अत्याचार गर्नुबाट रोक्नु हो । तर पद एवं प्रतिष्ठाको आपसी होडबाजीको भावना भने एउटै व्यक्तिबाट जन्मेको खलकमा पनि युद्धको कारक बन्दथ्यो । जसलाई औस र खजरज, अब्स, जुबयान, र बकर तग्लब आदि जातिको घटनामा देख्न सकिन्छ ।

१ सही बुखारी २/९९९,१०६५, अबु दाऊद

केही जात जातिहरूको आपसी सम्बन्ध त झन भताभुंग थियो । एक जातिको पूर्ण शक्ति अर्को जातिलाई नाश गर्नमा सखाप हुन्थ्यो । तर धार्मिक तथा मनगढन्ते केही मूल्य मान्यताका कारण कहिले काँही युद्धको गतिमा केही कमी आउँथ्यो र केही अवस्थाहरूमा सहकार्यता,शपथ र निष्ठाको सिद्धान्तमा विभिन्न जात जातिहरू एकिकृत हुन्थे । पवित्र महिनाहरू उनीहरूको जीवन र जीविकाको लागि पूर्ण कृपालु तथा सहयोगी सावित हुन्थे । किनकि अरबवासीले ती महिनाहरूको कदर गर्ने गर्थे । रेजा अत्तारी भन्छन् :रजबको महिना आउँदा हामीले भन्ने गर्थ्यौं , यसले भालाको चुच्चो निकाल्ने छ । त्यसकारण हामीले कुनै पनि भाला फ्याक्दा चुच्चो निकालेर फ्याक्ने गर्थ्यौं । वाण हान्दा त्यसको धार फालेर हान्ने गर्थ्यौं । रजब महिनामा त्यसलाई कतै गाडेर छाडिदिन्थ्यौं ।[1] अन्य पवित्र महिनाहरूमा पनि हामीले यसै गर्ने गर्थ्यौं ।[2]

सारमा भन्नु पर्दा उनीहरूको सामूहिक अवस्था अति नै कमजोर एवं अस्तित्वहीन थियो । अज्ञानताले आफ्नो जाल फिजाएको थियो । रूढीवादको प्रबल्ता थियो । मानिसहरू जनावर सरह जीवन व्यतीत गरिरहेका थिए । महिलाको किनबेच हुन्थ्यो कुनै कुनै बेला उनीहरूसँग तुच्छ व्यवहार गरिन्थ्यो । जातीय सम्बन्धहरू फितलो मात्र नभई टुक्रिएका थिए र शासन सत्ताको उद्देश्य भनेको जनताबाट केवल आफ्नो ढुकुटी भर्नु र विरोधीहरूमाथि सैन्य आक्रमण गर्नुमा सीमित थियो ।

## आर्थिक अवस्था

आर्थिक व्यवस्था सामूहिक व्यवस्थामा आधारित थियो । अरबको जीविकोपार्जनका स्रोतलाई नियाल्ने हो भने व्यापार नै उनीहरूको जीवनको सबैभन्दा महत्वपूर्ण स्रोत थियो भन्ने कुरा अनुमान गर्न सकिन्छ । व्यापारिक यात्रा शान्ति एवं सुरक्षाको वातावरण विना सजिलो छैन भन्ने कुरा प्रष्ट छ । अरब प्रायद्वीपमा पवित्र महिनाहरू बाहेक अन्य महिनामा शान्ति एवं सुरक्षाको कतै अस्तित्व रहेको अवस्था थिएन । त्यसै कारणले गर्दा पवित्र महिनाहरूमा मात्र अरबको प्रसिद्ध बजार ओकाज, जुल्मजाज र मजिन्न आदि लाग्ने गर्थे ।

औधोगिक क्षेत्रमा त झन् अरब सारा दुनियाँभन्दा पछाडि थियो । कपडाको बुनाई र छालाको चर्मकारी जस्ता केही उद्योग थिए तर त्यो पनि अधिकतर यमन, हेरा र सिरियाको क्षेत्रसँग जोडिएको इलाकामा थिए । यद्यपि भित्री अरबमा खेती बारी गर्ने र पशुपालन गर्ने केही चलन थियो । अरबी महिलाहरूले धागो बुन्ने गर्थिन् । तर विडम्बना के थियो भने सारा धन माल लडाइँमा खर्च हुन्थ्यो । गरिबी र भोकमरी

---

१ सही बुखारी हदिस नं ४३७६
२ फतहुल बारी ८/९१

सामान्य कुरा थियो । मानिसहरू अति आवश्यक कपडा र पोशाकबाट पनि निकै बञ्चित रहन्थे ।

## नैतिक अवस्था

अज्ञानकालका मानिसहरूमा कंजूसी, घटिया बानी व्यहोरा र अज्ञानता एवं अचेतना र अस्वच्छ विचार त स्वभाविक रूपमा थियो । तर उनीहरूमा यस्तो उच्च चरित्र पनि थियो जसलाई देख्दा मानिस दङ्ग एवं चकित हुन्छ । जस्तै:

१) दया एवं उदारता : त्यस कुरामा अज्ञानकालका मानिसहरू एक अर्काभन्दा अगाडि बढ्ने होडबाजी गर्थे र त्यसको गौरवलाई दर्साउन अरबका आधा कविताहरू त्यसैको नजर हुन्थे । त्यस गुणको आधारमा कसैले स्वयं आफ्नो प्रसंशा गरेको छ भने कसैले अरूको । कठोर जाडो र भोकको अवस्थामा आफ्नो र आफ्नो खानदानको जीवनको आधार रहेको एउटा ऊँटनी बाहेक केही नहुँदा पनि कसैको घरमा कोही पाहुना आयो भने ऊभित्र पाहुना सत्कारको भावना प्रबल हुन्थ्यो र भएको एउटा उँटनी पनि पाहुनाको लागि बध गर्थ्यो । उनीहरू दानी भएका कारण उनीहरूले ठूलठूला क्षतिपूर्तिको जिम्मा लिने र धनमालको जिम्मेवारी बोक्ने गर्दथे । यसरी मानवलाई विध्वंश तथा नरसंहारबाट जोगाएर सरदार तथा मुख्याहरूको अगाडि गौरव गर्थे । त्यसै गुणका कारण उनीहरूले रक्सी खानु पनि गौरवको कुरा ठान्थे । मादक पदार्थ सेवन गर्नु स्वयममा कुनै गौरवको कुरा थिएन । तर त्यसले दया तथा दान गर्ने गुणमा उर्जा थप्ने काम गर्थ्यो । किनभने नसाको हालतमा धन माल लुटाउनाले मानिसलाई त्यति मर्का पार्दैन । त्यसैले गर्दा उनीहरूले अंगुरको रूखलाई करम र अंगुरको रक्सी बिन्तुल करम अर्थात दयाको छोरी भन्ने गर्थे । अज्ञानकालका द्विपदीय कविताको अध्ययन गर्ने हो भने प्रसंशा एवं गौरवलाई झल्काउने एक महत्वपूर्ण अध्याय भेटिन्छ । अन्तरह बिन शद्दाद अब्सीले आफ्नो काव्यमा भनेका छन् :

ولقد شربت من المدامة بعدما — ركد الهواجر بالمشرف المعلم
بزجاجة صفراء ذات اسرة — قرنت بأزهربالشمال مفدم
فإذا شربت فأنني مستهلكمالي — وعرضي وافر لم يكلم
واذا صحوت فما اقصرعن ندوكما — علمت شمائلي وتكرمي

अनूवाद निम्न छ : मैले मध्यान्हको चर्को घाम ढलेपछि पहेंलो रंगको एउटा धर्के जाम पिएँ जो पारदर्शी गिलासमा बायाँ तर्फ राखिएको थियो र चम्किलो र विर्को लागेको भाँडोमा थियो । चिन्ह लागेको र सफा थियो । त्यसलाई पिएपछि मैले आफ्नो माल लुटाइहाल्थैं । मेरो खुब इज्जत हुन्थ्यो त्यसमा मन कत्ति पनि दुख्दैन थियो । म होशमा आउँदा पनि दान गर्नमा कन्जुस्याइँ गर्दैन थिएँ । मेरो स्वभाव र दया जे जस्तो छ तिमीलाई थाहा छ । ”

## दानदक्षिणा

उनीहरूमा दान गर्ने विशेषता भएको कारण उनीहरू जुवा खेल्ने गर्थे । उनीहरूको विचारमा त्यो पनि दान गर्ने एउटा माध्यम थियो । किनकि उनीहरूले जे नाफा कमाउँथे वा नाफा पाउनेहरूको भागमा जति बाँकी बच्थ्यो त्यो दीनदुखीहरुलाई दिन्थे । त्यसैले कुरआनले रक्सी र जुवाको नाफालाई अस्वीकार गरेन । तर कुरआनमा भनिएको छ : “यी दुवै कुराको पाप यसको नाफाभन्दा बढी छ ।”

## प्रतिज्ञापालना

यो पनि अज्ञानकालको उच्च चरित्रमध्ये एक थियो । प्रतिज्ञालाई उनीहरूले धर्म सरह मान्थे । उनीहरूले त्यसको खुब ख्याल गर्थे । त्यसका लागि आफ्ना सन्तानको रगत र आफ्ना घरबारको विनाश पनि महत्वहीन सम्झन्थे । त्यसलाई बुझ्नको लागि हानी बिन मसऊद शैबानी, समवाल बिन आदिया र हाजिब बिन जर्रारहका घटनाहरू प्रयाप्त छन् ।

हानी बिन मसउदको कुरा हिराह राजतन्त्रको सन्दर्भमा उल्लेख भइसकेको छ । समवालको घटना यस प्रकार छ । उसले इमरुल कैसकहाँ केही कडीहरू नासो राख्न दिएको थियो । हारिस बिन अबु समर गस्सानीले त्यसलाई लिन चाहयो । उसले अस्वीकार गरी ऊ तुऐमा भन्ने आफ्नो महलमा बन्द भयो । समवालको एक जना छोरा बाहिर छुटेको थियो । हारिसले उसलाई नियन्त्रणमा लियो । कडी नदिए हत्या गर्ने धम्की समेत दियो । तर समवाल नदिने कुरामा अडिग रहयो । आखिरकार हारिसले उसको सामुन्ने उसको छोराको हत्या गरिछाड्यो ।

हाजिबको घटना यस प्रकार छ । उसको क्षेत्रमा अनिकाल परेको थियो । उसले किसरासँग उसको सीमाक्षेत्रमा आफ्नो समुदायलाई स्थापित गर्न अनुमति माग्यो । किसरालाई उसले हिंसा मच्चाउँछ भन्ने डर भयो । त्यसकारण उसले केही जमानत नराखी स्वीकार गरेन । हाजिबले आफ्नो तरवार जमानतमा राख्यो । प्रतिज्ञा अनुसार अनिकाल समाप्त भएपछि उसले आफ्नो समुदायलाई फिर्ता लग्यो । उसका छोरा अत्तारुदले किसराकहाँ गएर आफ्नो बाउले राखेको जमानत फिर्ता मागे । किसराले उसको इमानदारीका कारण तरवार फिर्ता गर्‍यो ।

## स्वाभिमान एवं आत्मसम्मान

यसमा कायम रहनु र अन्याय र अत्याचार सहन नगर्नु पनि अज्ञानकालका मानिसहरूको प्रमुख विशेषता थियो । त्यसै कारणले गर्दा उनीहरूको वीरता एवं स्वाभिमान हदैसम्म बढेको थियो । उनीहरू छिटो रिसाउँथे र स-सानो कुरामा जसबाट अपमान एवं झूटो-निन्दाको गन्ध आउँथ्यो त्यसका लागि हात हतियार

उठाइहाल्थे र अति रक्तपात युद्ध लड्थे । उनीहरूलाई त्यस कुरामा आफ्नो ज्यानको कत्ति पनि माया लाग्दैन थियो ।

## संकल्पलाई व्यवहारमा उतार्नु

अज्ञानकालका मानिसहरूको विशेषतामध्ये यो पनि थियो कि जब उनीहरू कुनै कामलाई इज्जत एवं प्रतिष्ठाको माध्यम सम्फेर गर्न खोज्थे त्यसमा कुनै बाधा हुन सक्दैन थियो । उनीहरू आफ्नो ज्यान थापेर त्यस कार्यलाई सम्पन्न गर्थे ।

## चतुरता र चलाखी

यो विशेषता पनि अज्ञानकालका मानिसमा प्रशंसित थियो । तर यसले उनीहरूमा रहेको युद्ध तथा वीरताको प्रचुरतालाई केही नियन्त्रणमा राख्ने गर्थ्यो ।

## सादापन

सभ्यताको चक्रब्युह तथा संजालबाट अनभिज्ञता र दूरीका कारण उनीहरूमा सत्यता तथा इमानदारी शेष रहेको थियो । उनीहरू धोकेबाजी तथा बेइमानीका विरोधी थिए ।

हामी बुझ्न सक्छौं कि अरब प्रायद्वीपलाई जगतमा जुन भौगोलिक सम्बन्ध हासिल थियो र त्यसको अतिरिक्त तिनै उच्च नैतिक मूल्य मान्यताहरूका कारण अरबवासीलाई मानवको नेतृत्व र ईशदूतत्वको भार उठाउनको लागि चयन गरियो । यद्यपि ती नैतिक मूल्य मान्यता कुनै बेला हत्या हिंसाका कारक बन्थे भने तिनको कारणले दुखदायी घटनाहरू घट्थे तर पनि ती नैतिक मूल्य मान्यता स्वयममा बहुमूल्य थिए । जसलाई अलि कति सुधार गर्दा मानवीय समाजको लागि अति नै हितकार बन्न सक्थ्यो । त्यही काम इस्लामले सम्पन्न गऱ्यो ।

वास्तवमा ती नैतिक मूल्य मान्यताहरूमध्ये प्रतिज्ञाभक्ति बाहेक आत्म स्वाभिमान र दृढ संकल्प सबैभन्दा अमूल्य र उच्च नैतिक गहना थिए । किनकि त्यस महान शक्ति र दृढ संकल्पविना पाप एवं हत्या हिंसाको अन्त्य र न्यायको स्थापना सम्भव थिएन ।

अज्ञानकालका मानिसहरूमा अरू पनि उच्च नैतिक मूल्य मान्यताहरू थिए तर यहाँ ती सबैलाई उल्लेख गर्नु आवश्यक छैन ।

# ईशदूतको वंश एवं परिवार

## ईशदूतको वंश

मुहम्मदﷺको वंशीय श्रृखंलालाई तीन भागमा विभाजित गर्न सकिन्छ । एक किसिम त्यो जसको सत्यतामा जीवनीकार र विशेषज्ञहरूको एकमत छ । त्यो श्रृखंला अदनानसम्म पूर्ण हुन्छ । दोस्रो किसिम बारे जीवनीकारहरूमा मतभेद छ । केहीले त्यसमा विलम्ब गरेका छन् । केही विश्वसनीय छ । त्यो श्रृखंला अदनानभन्दा माथि इब्राहीमसम्म पूर्ण हुन्छ । तेस्रो किसिमको श्रृखंलामा केही त्रुटीहरू भए पनि इब्राहीमﷺभन्दा अझै माथि आदमसम्म पुग्छ । यस बारे केही झलकहरू प्रस्तुत गरिसकिएको छ । तल ती तीनै किसिमको वंशीय श्रृखंलाको केही विस्तृत विवरण प्रस्तुत गरिदैछ ।

## प्रथम श्रृखंला

मुहम्मदﷺका पिता अब्दुल्लाह,अब्दुल्लाहका पिता अब्दुल मुत्तलिब,अब्दुल मुत्तलिबका पिता हाशिम, हाशिमका पिता अब्द मनाफ मुगिरह,अब्द मनाफ मुगिरहका पिता कुसै जैद,कुसै जैदका पिता केलाब, केलाबका पिता मुर्राह, मुर्राहका पिता कअब, कअबका पिता लुऐ, लुऐका पिता गालिब, गालिबका पिता फहर (यिनको उपनाम कुरैश थियो र यिनैसँग  कुरैश जातिको नाम जोडिएको छ),फरहका पिता नजर ( कैस), नजर कैसका पिता किनानह, किनानहका पिता खुजैमा, खुजैमाका पिता मुद्रिका, मुद्रिकाका पिता इल्यास, इल्यासका पिता मुजर, मुजरका पिता नज्जार, नज्जारका पिता मअद,मअदका पिता अदनान हुन् ।[१]

## दोस्रो श्रृखंला

अदनानभन्दा माथि अर्थात अदनानका पिता उद, उदका पिता हुमैसअ, हुमैसअका पिता सलामान, सलामानका पिता औस, औसका पिता यौज, यौजका पिता कमवाल, कमवालका पिता उबै, उबैका पिता औवाम, औवामका पिता नाशिद, नाशिदका पिता हिजा, हिजाका पिता बल्दास, बल्दासका पिता यदलाफ, यदलाफका पिता ताबिख, ताबिखका पिता जाहिम, जाहिमका पिता नाहिश, नाहिशका पिता माखी, माखीका पिता  अइज, अइजका पिता अब्कर, अब्करका पिता उबैद, उबैदका पिता अलदुआ, अलदुआका पिता हमदान, हमदानका पिता सब्ज, सब्जका पिता यस्रिबी, यस्रिबीका पिता यहजन, यहजनका पिता यलहन, यलहनका पिता अरअवी, अरअवाका पिता अइज, अइजका पिता जिशान, जिशानका पिता ऐसर, ऐसरका पिता अफनाद, अफनादका पिता इहाम, इहामका पिता मुक्सिर, मुक्सिरका पिता नाहिस,

---

१ इब्ने हेशाम १/१,२ तारिख तब्री २/२३९,२७१

नाहिसका पिता जारिह, जारिहका पिता सुमै, सुमैका पिता मुजै, मुजैका पिता औजाह, औजाहका पिता अराम, अरामका पिता कैदार, कैदारका पिता इस्माइल, इस्माइलعليه السلامका पिता इब्राहीमعليه السلامसम्म जान्छ ।[१]

## तेस्रो श्रृखंला

इब्राहीमعليه السلامभन्दा माथि अर्थात इब्राहीमعليه السلامका पिता तारिह आजर, तारिह आजरका पिता नाखुर, नाखुरका पिता सारुअ, सारुअका पिता राउअ, राउअका पिता फालिख, फालिखका पिता आबिर्ज, आबिर्जका पिता शालिख, शालिखका पिता अर्फखशद, अर्फखशदका पिता साम, सामका पिता नुह, नुहका पिता लामिक, लामिकका पिता मुतवश्शलख, मुतवश्शलखका पिता अख्नुह (भनिन्छ यो इद्रिसको नाम हो), अख्नुहका पिता यरिद, यरिदका पिता महलायल, महलायलका पिता कैनाअ, कैनाअका पिता आनुशा, आनुशाका पिता शिस, शिसका पिता आदमसम्म जान्छ ।[२]

## परिवार

ईशदूत मुहम्मदﷺको वंश आफ्नो पुर्खा हाशिमको पिता अब्द मनाफसँग जोडिएकाले हाशिमीको नामबाट प्रसिद्ध छ । तसर्थ हाशिम र उनी पश्चातका केही व्यक्तिहरूको संक्षिप्त अवस्था चित्रण गर्नु उचित होला ।

## १.हाशिम

अब्द मनाफ र अब्दूल दारबीच पद बाँडफाँटको सहमति हुँदा अब्द मनाफको सन्तान हाशिमले हाजीहरूलाई पानी पिलाउने र तिनको सत्कार गर्ने पद पाएको कुरा हामीले उल्लेख गरिसकेका छौं । हाशिम धेरै प्रतिष्ठित र धनी थिए । मक्कामा हाजीहरूलाई झोलमा रोटी मुछेर खुवाउने व्यवस्था गर्ने उनी प्रथम व्यक्ति हुन् । उनको असल नाम अमर थियो तर रोटी टुक्राएर झोलमा मुछेकाले उनलाई हाशिम भन्न थालियो । किनकि हाशिमको अर्थ भाँच्ने वा टुक्राउने व्यक्ति भन्ने हुन्छ । त्यसैगरी कुरैशको लागि गर्मी र जाडोमा दुईवटा वार्षिक व्यापारिक यात्राको शुत्रपात गर्ने प्रथम व्यक्ति पनि हाशिम नै हुन् । उनको बारेमा अरबी कविले केही भनेका छन् :

عمرو الذي هشم الثريد لقومه    قوم بمكة مسنتين عجاف
سنت اليه الرحلتان كلاهما    سفر الشتاء ورحلة الأصياف

१ तब्री २/२७१–२७६, फतहुल बारी ६/६२१–६२३
२ इब्ने हेशाम १/२–४, तारिख तब्री २/२७६

अनूवाद छ : यी तिनै अमर हुन् जसले भोकले मारिएका आफ्नो कमजोर जातिलाई मक्कामा रोटी टुक्रा गरी झोलमा भिजाउँदै खुवाएका थिए र जाडो र गर्मीको दुवै यात्राहरूको शुरुवात गरेका थिए ।"[१]

उनको एउटा महत्वपूर्ण घटना यस प्रकार छ । उनी व्यापारको लागि सिरिया जाँदै थिए । जाने क्रममा मदिना पुगेपछि त्यहाँ बनु नज्जार कबिलाकी एक जना महिला सल्मा बिन्त अमरसँग विवाह गरे । केही दिन उनी त्यही बसे । श्रीमतीलाई गर्भावस्थामा माइती घरमै छाडेर सिरियातिर गए । त्यहाँ गएपछि फिलिस्तिनको शहर गज्जाहमा उनको मृत्यु भयो । उता सल्माको गर्भबाट बच्चा जन्मियो । यो घटना ४९७ ईस्वीको हो । बच्चाको शीरको कपालमा सेतोपन भएकोले सल्माले बच्चाको नाम शैबा राखिन्[२] र आफ्नो माइती घर यस्रिबमा नै बच्चालाई हुर्काइन् । पछि त्यही बच्चा अब्दुल मुत्तलिबको नामबाट प्रसिद्ध भयो । लामो समयसम्म हाशिमको खान्दानको कुनै व्यक्तिलाई त्यसको अस्तित्वको जानकारी हुन सकेन । हाशिमका जम्मा चार छोरा र पाँच छोरी थिए । उनीहरूको नाम यस प्रकार छ : असद, अबू सैफी, नजला, अब्दुल मुत्तलिब : जइफाह, शफा, खालेदाह, , रोकैया र जिन्नाह ।[३]

## २,अब्दूल मुत्तलिबः

पछिल्लो पृष्ठहरूमा वर्णन गरे अनुसार हाजीहरूलाई पानी पिलाउने र सत्कार गर्ने जिम्मेवारी हाशिम पश्चात उनको भाइ मुत्तलिबले पाएका थिए । उनी पनि समुदायमा ठूलो प्रतिभा एवं सम्मानका मालिक थिए । उनको कुरा आलटाल गरिदैन थियो । उनले दिने दानदक्षिणाको कारण कुरैशले उनको उपनाम फैयाज राखे । शैबा अर्थात् अब्दुल मुत्तलिब सात वा आठ वर्षका भएपछि मुत्तलिबलाई उनको बारेमा जानकारी भयो र उनी उनलाई लिन गए । यस्रिब नजिक पुगेपछि शैबालाई देखेर मुत्तलिबको आँखाबाट आँसु बग्यो उनले उनलाई आफ्नो छातीमा टाँसे । त्यसपछि आफ्नो सवारीमा पछाडिपट्टि बसालेर मक्काको लागि प्रस्थान भए । तर शैबाले आमाको अनुमति बिना उनीसँग जान अस्वीकार गरे । तसर्थ मुत्तलिबले उनको आमासँग अनुमति मागे तर आमाले अनुमति दिइनन् । आखिर मुत्तलिबले भनेः उनलाई आफ्नो पिताको शासन एवं ईश्वरको घर काबातर्फ लैजाने हो । त्यसो भनेपछि आमाले अनुमति दिइन् र मुत्तलिबले उनलाई आफ्नो ऊँटमाथि बसालेर मक्का ल्याए । मक्कावासीहरूले शैबालाई देखेर भने : यो त अब्दुल मुत्तलिब हो अर्थात मुत्तलिबको दास हो । मुत्तलिबले भने : होइन होइन । यो मेरो भतिजो अर्थात्

---

१ इब्ने हेशाम १/१५७
२ इब्ने हेशाम १/१३७
3 इब्ने हेशाम १/१३७

मेरो दाइ हाशिमको छोरो हो । त्यसपछि शैबा मुत्तलिबकहाँ हुर्के बढे र जवान भए । त्यसपछि यमनको रदमान भन्ने ठाउँमा मुत्तलिबको निधन भयो । उनले छाडेको पद अब्दुल मुत्तलिबलाई प्राप्त भयो । अब्दुल मुत्तलिबले आफ्नो समुदायमा यति श्रेष्ठता एवं सम्मान पाए त्यति ठूलो सम्मान उनको पुर्खामा कसैले पनि पाउन सकेको थिएन । समुदायले हृदयबाट उनलाई चाहयो र उनको ठूलो इज्जत एवं सम्मान गऱ्यो ।[१]

मुत्तलिबको निधन भएपछि नवफलले अब्दुल मुत्तलिबको आँगनमा लुटेराले झैँ कब्जा गऱ्यो । अब्दुल मुत्तलिबले कुरैशका केही मानिसहरूबाट आफ्नो काकाको विरुद्ध सहयोग मागे तर उनीहरूले तिमी र तिम्रो काकाको बीचमा हस्तक्षेप गर्न सकिदैन भनेर हात रोके । अन्ततः अब्दुल मुत्तलिबले बनु नज्जारमा आफ्नो मामालाई केही कविता लेखेर  पठाए । त्यसमा उनले उनीसँग सहयोगको अनुरोध गरेका थिए । जवाफमा उनको मामा अबू सअद बिन अदीले ८० वटा सवारी लिएर मक्का नजिक अब्तहमा झरे । अब्दुल मुत्तलिबले उनीसँग त्यहीँ भेट गरेर भनेः मामा ज्यू घर जाउँ । अबू सअदले भनेः ईश्वरको कसम ! पहिला नवफललाई भेट्छु । त्यस पश्चात अबू सअद अघि बढे । नौफलको अगाडि आएर उभिए । नौफल हतीम अर्थात काबाको पश्चिमी पर्खालनिर कुरैशी मुखियाहरूको साथमा बसेको थियो । अबू सअदले खोलबाट तरवार झिक्दै भने : यस घरको पालनहारको कसम ! यदि तिमीले मेरो भान्जाको जमीन फिर्ता गरेनौ भने यो तरवार तिम्रो शरीरभित्र गड्ने छ । नौफलले भन्यो : हुन्छ ! ल मैले फिर्ता गरिदिएँ । त्यसमा अबू सअदले कुरैशी मुखियाहरूलाई साक्षी राखे । त्यसपछि उनी अब्दुल मुत्तलिबको घर गए । तीन दिन बसेर उमराह गरी मदिना फिर्ता भए ।

त्यस घटना पश्चात नौफलले बनु हाशिमको विरुद्धमा बनु अब्द शम्ससँग पारस्परिक सहयोगको प्रतिज्ञा एवं बाचा गऱ्यो । उता बनू खुजाअले बनु नज्जारले अब्दुल मुत्तलिबको मदत गरेको देखेर अब्दुल मुत्तलिब तिमीहरूको झैँ हाम्रो पनि सन्तान हो भनेर भने । तसर्थ उसको सहयोगको हामी बढी हकदार छौँ । कारण अब्द मनाफको आमाको सम्बन्ध खुजाअ कबिलासँग थियो । अतः बनू खुजाआले दारुल नदवाहमा गएर बनू अब्द शम्स र बनू नौफलको विरुद्ध बनू हाशिमको सहयोग गर्ने प्रतिज्ञा एवं बाचा गरे । त्यही प्रतिज्ञा एवं बाचा इस्लामी युगमा मक्का विजयको कारण बन्यो । विवरण आफ्नो ठाउँमा आउँदै छ ।[२]

काबाको सम्बन्धमा अब्दुल मुत्तालिबमाथि दुई महत्वपूर्ण घटना घटे  । एक जमजम कुवा उत्खननको घटना दोस्रो फिलको घटना ।

---

१ इब्ने हेशाम १/१३७,१३८
२ तारिख तब्री ३/२४८–२५१

## जम्जम् कुवाको उत्खनन्

पहिलो घटनाको संक्षेप यस प्रकार छ । अब्दुल मुत्तलिबले सपनामा आफुलाई जमजम कुवा खन्ने आदेश भएको देखे । सपनामा उनलाई कुवा खन्ने ठाउँ पनि बताइयो । उनले खन्ने काम शुरु गरे । कुवा खन्दै जाँदा ती वस्तुहरू फेला परे जुन बनू जुरहमले मक्का छोड्दा त्यहाँ गाडेका थिए । जस्तै तरवार, रक्षक कवच र सुनका दुईटा हरिण आदि । अब्दुल मुत्तलिबले तरवारबाट काबाको ढोका निर्माण गरे । सुनका दुवै हरिण पनि ढोकामै राखे र हाजीहरूलाई जमजमको पानी पिलाउने व्यवस्था गरे ।

उत्खननको दौरान जब जमजमको कुवा भेटियो अनि कुरैशले अब्दुल मुत्तलिबसँग झगडा गर्न शुरु गरे । उनीहरूले हामीलाई पनि उत्खनन् कार्यमा सामिल गर्नुपर्छ भन्ने माग गरे । अब्दुल मुत्तलिबले भने : म यस्तो गर्न सक्दिन किनभने मलाई यस कामको लागि विशिष्ट गरिएको छ । तर कुरैशका मानिसहरूले मानेनन् । यहाँसम्म कि फैसलाको लागि बनु सअदकी एक जना जादूगर्नी महिलाकहाँ जाने तय भयो । मानिसहरू मक्काबाट त्यसतर्फ जाँदै गर्दा बाटोमा पानी सकियो । ईश्वरले अब्दुल मुत्तलिबमाथि वर्षा वर्षाए जसकारण उनीहरूले पानी प्रयाप्त रूपमा पाए । तर अब्दुल मुत्तलिबका विरोधीमा एक थोपा पनि पानी परेन । त्यसले गर्दा जमजमको कार्य ईश्वरको तर्फबाट नै अब्दुल मुत्तलिबको लागि विशिष्ट गरिएको रहेछ भन्ने कुरा उनीहरूले बुझे । फलस्वरूप उनीहरू बाटोबाट नै फिर्ता भए । त्यही मौकामा अब्दुल मुत्तलिबले यदि ईश्वरले आफुलाई दश छोरा प्रदान गरे र सबै जना उनको रक्षा गर्ने अवस्थामा पुगे भने एक जना छोरालाई काबामा बलिदान गरिदिन्छु भनी भाकल ब्रत गरेका थिए ।[१]

## हात्तीको घटना

दोस्रो घटनाको संक्षेप यस प्रकार छ । अब्राहा बिन सबाह हब्शी (जो नजाशी राजा हब्शको तर्फबाट यमनको गवर्नर जनरल थियो) उसले अरबीहरूलाई काबाको हज गरेको देखेर सन्आमा एउटा ठूलो चर्च निर्माण गर्‍यो र काबामा गरिने हजलाई त्यसैतर्फ ल्याउने प्रयास गर्‍यो । तर किनानह कबिलाका एक जना व्यक्तिलाई त्यस बारे खबर भएपछि उसले रातको समयमा चर्चभित्र पसेर त्यसको अगाडिको भागमा दिसा पोतिदियो । अब्राहालाई जानकारी भएपछि ऊ निकै क्रोधित भयो र साठी हजारको एउटा शक्तिशाली फौज लिएर काबालाई भत्काउन निस्क्यो । उसले आफ्नो लागि एउटा बलियो हात्ती पनि छनौट गर्‍यो । फौजमा सबै गरेर नौ वा तेह्र वटा हात्ती थिए । अब्राहा यमनबाट मार्च गर्दै मुग्मस नामक ठाउँमा पुग्यो र त्यहाँ पुगेर

१ इब्ने हेशाम १/१४२–१४७

उसले आफ्ना सेनालाई व्यवस्थित गरी हात्तीलाई तयार पारी मक्कामा प्रवेश गर्न अगाडि बढ्यो । जब ऊ मुजदलिफा र मिना नामक ठाउँबीच महसर क्षेत्रमा पुगेको थियो उसको हात्ती बस्यो । काबातिर धपाउँदा हात्ती उठेन तर काबा बाहेक अन्य दिशातिर खेद्न लाग्दा हात्ती उठेर दगुर्न खोज्थ्यो । तर काबातर्फ खेद्न लाग्दा बस्थ्यो । त्यसैबीच ईश्वरले चराहरूको एउटा समूह पठाइदिए जसले फौजमाथि गिर्खा जस्तो ढुंगा वर्षायो । त्यसै ढुंगाद्वारा ईश्वरले उनीहरूलाई खाएको भूस जस्तो बनाइदिए । ती चराहरूको नाम अबाबील थियो । हरेक चरासँग मुखमा र पखेटामा गरी तीन तीन वटा ढुंगा थिए । ढुंगा चनाको दाना जतिको थियो । तर जसलाई लाग्थ्यो उसको अंगभंग हुन्थ्यो र ऊ मर्थ्यो । ती ढुंगाहरू सबै व्यक्तिलाई लागेको थिएन तर फौजमा भागाभाग हुँदा एकले अर्कालाई कुल्चिदै भागेका थिए । भाग्नेहरू बाटोमा लडेको अवस्थामा र पानीको मुहानमा मरेको अवस्थामा थिए । उता अब्राहामाथि ईश्वरले यस्तो प्रकोप पठाइ दिए कि उसको औंलाका जोर्नी झरे र ऊ सन्आ पुग्दापुग्दै भर्खर पखेटा उम्रेको बचेरो जस्तो भयो । त्यसपछि उसको छाती चर्कियो, मुटु बाहिर निस्क्यो र ऊ मऱ्यो ।

अब्राहाले मक्कामाथि आक्रमण गर्न लाग्दा मक्काबासीहरू ज्यानको मायाले घाटीहरूमा छरिएका थिए साथै पहाडका टाकुरामाथि गएर लुकेका थिए । अब्राहाको फौजमाथि प्रकोप वर्षेपछि उनीहरू आरामसँग आफ्नो घरतिर फर्के ।[१]

अधिकांश विज्ञहरूको भनाइ अनुसार त्यो घटना मुहम्मदﷺको जन्म हुनुभन्दा केवल पचास वा पचपन्न दिनअघि मुहर्रम महिनामा घटित भएको थियो । यसर्थ त्यो घटना इस्वी सम्बत ५७१ साल फरवरीको अन्त्य वा मार्चको आरम्भको घटना हो । त्यो वास्तवमा एउटा प्रारम्भिक निशानी थियो जुन ईश्वरले आफ्नो ईशदूत मुहम्मदﷺ र आफ्नो घर काबाको निमित्त देखाएका थिए । किनभने तपाईंलाई थाहा होला, बैतुल मक्दिस पनि आफ्नो समयमा इस्लामको किब्ला थियो । त्यहाँका बासी मुसलमान थिए । त्यसको बावजूद त्यसमाथि ईश्वरका शत्रू अर्थात बहुदेववादीहरूको प्रभुत्व थियो । ईसापूर्व ५८७ सालमा बख्ते नसरले गरेको आक्रमण र इस्वी सम्बत ७० सालमा रोमाले गरेको कब्जाले त्यस कुराको पुष्टि गर्दछ । तर त्यस विपरित काबामाथि इसाईहरूलाई प्रभुत्व प्राप्त हुन सकेन । यद्यपि त्यस बेला उनीहरू नै मुसलमान थिए र काबाबासी बहुदेववादी थिए ।

त्यो घटना यस्तो अवस्थामा घटित भयो जसको खबर त्यस बेलाको सांस्कृतिक जगतका अधिकांश क्षेत्र रोम र फारसमा तुरुन्तै प्रेषित भयो । किनभने हब्शाहको रोमीहरूसँग गहिरो सम्बन्ध थियो । अर्कोतिर फारसीहरूको नजर



१ इब्ने हेशाम १/४३–५६

रोमीहरूमाथि निरन्तर टिकेको हुन्थ्यो। उनीहरूले रोमीहरू र तिनको सहायकहरूको साथ घटित हुने घटनाहरूको बराबर निरीक्षण गर्थे। त्यसै कारणले गर्दा त्यस घटना पश्चात् फारसीहरूले यमनमाथि यथाशीघ्र कब्जा गरे। ती दुईटा राज्य त्यस युगको सांस्कृतिक दुनियाँका महत्वपूर्ण प्रतिनिधि क्षेत्र थिए। त्यस घटनाले गर्दा दुनियाँको नजर काबामा केन्द्रित भयो। तिनले काबाको प्रतिष्ठा र गरिमालाई एउटा प्रत्यक्ष ईश्वरीय निशानीको रूपमा लिए। त्यो घरलाई ईश्वरले प्रतिष्ठित बनाएको कुरा उनीहरूको मनमा राम्रोसँग पस्यो। तसर्थ त्यस ठाउँबाट कुनै मानवले आगामी दिनमा ईशदूतत्वको दावी गर्नु स्वभाविकै थियो। साथै मुस्लिमहरूको विरुद्ध बहुदेववादीहरूको सहयोगमा पनि ईश्वरीय रहस्य लुकेको थियो।

अब्दुल मुत्तलिबका दश जना छोरा थिए। उनीहरूको नाम हारिस, जुबैर, अबू तालिब, अब्दुल्लाह, हमजाह,अबु लहब,गैदाक,मकुम,सफार र अब्बास थियो। केही विज्ञहरूले एघार जना बताउँदै एक जनाको नाम कसम उल्लेख गरेका छन्। केही अन्य विज्ञहरूले तेह्र जना बताउँदै एक जनाको नाम अब्दुल काबा र अर्को एक जनाको नाम हजल उल्लेख गरेका छन्। दश जना बताउनेहरूले मकूमको अर्को नाम अब्दुल काबा र गैदाकको दोस्रो नाम हजल उल्लेख गरेका छन्। कसम नामको कुनै व्यक्ति अब्दुल मुत्तलिबको सन्तानमा थिएन भन्ने उनीहरूको भनाइ छ। अब्दुल मुत्तलिबका ६ जना छोरीहरू थिए। नाम निम्न लिखित छ : उम्मुल हकीम, उनको असली नाम बैजाअ थियो। बर्राह, आतिका, अरवा, सफिया र उमैमह।[१]

## ३.ईशदूत मुहम्मदﷺका पिता अब्दुल्लाह

अब्दुल्लाहकी आमाको नाम फातिमा थियो। उनी अमर बिन आयजकी छोरी थिइन्। अब्दुल मुत्तलिबको सन्तानमा अब्दुल्लाह सबैभन्दा बढी सुन्दर, स्वच्छ एवं प्रिय थिए। उनी ज्यानत्यागी कहलिएका थिए। जब अब्दुल मुत्तलिबका छोराहरूको संख्या दश पुग्यो र उनीहरू सबै वयस्क अवस्थामा प्रवेश भए अनि अब्दुल मुत्तलिबले उनीहरूलाई आफुले भाकल गरेको बारे जानकारी गराए। उनीहरू सबैले उनको कुरा माने। भनिन्छ अब्दुल मुत्तलिबले उनीहरूको बिचमा चिट्ठा थुताउँदा अब्दुल्लाहको नाम निस्क्यो। उनी सबैभन्दा प्यारा थिए। त्यसकारण अब्दुल मुत्तलिबले ईश्वरसँग प्रार्थना गरे। हे ईश्वर उनलाई बलि दिउँ वा सय वटा उँट बलि गरूँ ? त्यसपछि उँट र उनको नामको चिट्ठा थुताउँदा उँटको नाउँ निस्क्यो।[२] भनिन्छ अब्दुल मुत्तलिबले भाग्य कोर्ने तीरहरूमा उनीहरू सबैको नाउँ लेखेर हुबल नामक मूर्तिका पूजारीको सुपुर्द गरेका थिए। पूजारीले वाणहरूलाई घुमाएर भाग्यको चिट्ठा निकाल्दा

१ इब्ने हेशाम १/१०८,१०९
२ तारिख तब्री २/२३९

अब्दुल्लाहको नाम निस्कियो । अब्दुल मुत्तलिबले अब्दुल्लाहको हात समाते अनि छुरी लिएर बलि दिनको लागि काबानिर गए तर कुरैश र विशेष गरी अब्दुल्लाहका मामाली अर्थात बनु मख्जुम कबिला र अब्दुल्लाहको दाइ अबू तालिबले बलि गर्न नदिन अडान लिए । अब्दुल मुत्तलिबले भने :मैले भाकल कसरी पुरा गर्ने ? उनीहरूले उनलाई कुनै ज्योतिषी महिलाकहाँ गएर समस्याको समाधान खोज्न सल्लाह दिए । अब्दुल मुत्तलिब एउटी ज्योतिषी महिलाकहाँ गए । ज्योतिषी महिलाले अब्दुल्लाह र दश वटा उँटको नाममा चिट्ठा निकाल्ने सुझाव दिई । त्यसमा पनि अब्दुल्लाहको नाम ननिस्केको खण्डमा अँझै दश वटा उँट थप गरी चिट्ठा निकाल्ने सुझाव दिई । ईश्वर राजी नहुँदासम्म उँटको संख्या थप गर्दै जाने र उँटको नाममा चिटठा निस्केपछि ती सबै उँट बलि दिने कुरा बताई । अब्दुल मुत्तलिबले घर फर्केर अब्दुल्लाह र दश ऊँटहरूको नाउँमा चिट्ठा निकाले तर चिट्ठामा अब्दुल्लाहको नाम निस्कियो । त्यस पश्चात उनले दश दश वटा ऊँट थपदै चिठ्ठा निकाल्दै गए तर चिठ्ठामा अब्दुल्लाहकै नाउँ निस्किरह्यो । उँटको संख्या एक सय पुगेपछि बल्ल चिट्ठामा उँटहरुको नाउँ निस्कियो । त्यसपछि अब्दुल मुत्तलिबले ती उँटहरूलाई अब्दुल्लाहको बदलामा बलि दिए र त्यहीं छाडिदिए । कुनै मानिस वा जनावरको लागि कुनै रोकावट थिएन । त्यस घटनाभन्दा पहिले कुरैश र अरबीहरूमा हत्याको प्रतिदण्ड स्वरूप दश वटा ऊँट दिइन्थ्यो तर त्यस घटना पश्चात सय वटा ऊँट गरियो । इस्लामले पनि यसै परिमाणलाई यथावत राख्यो । ईशदूत द्वारा भनिएको छ : म दुई जना बलिदानीको सन्तान हुँ । एक इस्माइल र दोस्रो मेरो पिता अब्दुल्लाह ।[१]

अब्दुल मुत्तलिबले आफ्नो छोरा अब्दुल्लाहको विवाहको लागि आमेनालाई रोजे । उनी केलाबका छोरा जोहराह, जोहराहको छोरा अब्द मनाफ, अब्द मनाफको छोरा वहबकी छोरी थिइन् । खानदान तथा प्रतिष्ठाका कारण उनी कुरैशकी भद्र महिलामध्ये गनिन्थिन् । उनका पिता खानदान र प्रतिष्ठा दुवै दृष्टिकोणले बनु जोहराका सरदार थिए । उनी मक्कामा नै बिदाई भएर अब्दुल्लाहको घर भित्रिन् । केही दिनपछि अब्दुल्लाहलाई अब्दुल मुत्तलिबले खजूर ल्याउन मदिना पठाउँदा उनको त्यहीँ निधन भयो ।

केही जीवनीकारको भनाई अनुसार उनी व्यापारको लागि सिरिया गएका थिए । कुरैशका एउटा बटुवा टोलीसँग फर्केर आउने क्रममा बिरामी भएर मदिनामा बसे र त्यहीँ उनको निधन भयो । उनको अन्त्यष्टि नाबेगा जअदीको घरमा गरियो । त्यतिबेला उनको उमेर पच्चीस वर्षको थियो । अधिकांश इतिहासकारहरूको भनाइअनुसार त्यतिबेला ईशदूतको जन्म भएको थिएन । यद्यपि केही इतिहासकारको

१ इब्ने हेशाम १/१५१–१५५

भनाइ अनुसार ईशदूतको जन्म उनको निधन हुनुभन्दा दुई महिना पहिला भएको थियो ।[१] उनको निधनको खबर मक्का पुगेपछि आमेनाले अति मार्मिक शोकगीत गाइन् :

عفا جانب البطحاء من ابن هاشم          وجاور لحدا خارجا في الغماغم
دعته المنايا وعوة فاجابها          وما تركت في الناس مثل ابن هاشم
عشية راحوا يحملون سريره          تعاوره اصحابه في التزاحم
فان تك غالته المنايا وريبها          فقد كان معطاء كثرا التراحيم

अनूवाद छ : हाशिमको छोराबाट बतहाको काख रित्तियो । उनी चित्कार एवं अशान्तिको बीच एउटा चिहानमा सुते । उनले मृत्युको एक पुकारमा आफुलाई सुम्पिदिए । मृत्युले मानिसमा हाशिमको छोरा जस्तो व्यक्ति पनि छोडेन । रोइरहेको थियो त्यो रात जब मानिसहरूले उनलाई काठे फल्याकमा लिएर हिँडिरहेका थिए । मृत्युले उनको अस्तित्वलाई मेटाए पनि उनको चरित्रको प्रभावलाई मेटाउन सक्दैन । उनी महादाता तथा दयालु थिए ।”[२]

अब्दुल्लाहले छोडेको कुल सम्पत्ति निम्न थियो : पाँच वटा ऊँट, एक हुल बाखा, एउटी हब्शी दासिका जसको नाम बरकत र उपनाम उम्मे ऐमन थियो । तिनै उम्मे ऐमनले ईशदूतलाई काखमा खेलाउने गर्थिन् ।[3]

---

१ इब्ने हेशाम १/१५६–१५८ तारिख तब्री २/२४६
२ तब्कात इब्ने सअद १/१००
3 सही मुस्लिम २/९६

## मुहम्मदﷺको शुभजन्म र पवित्र जीवनको चालीस वसन्तहरू

**शुभजन्म** :ईशदूत मुहम्मदﷺको जन्म हात्तीको घटना घटेको वर्ष रब्बीअल औवल महिनाको ९ तारिख सोमबारको दिन विहान मक्काको बनु हाशिम नामक घाटीमा भएको हो ।[१] त्यतिखेर नौशेरवाको राज्यसत्ता चालीसौं वर्षमा चल्दै थियो । अर्थात सन ५७१ साल अप्रेल महिनाको २० वा २२ तारिख थियो । महाविद्वान मुहम्मद सुलैमान र सल्मानले यही तथ्य निकालेका छन् ।[२]

इब्ने सअदमार्फत वर्णन गरिएको छ, ईशदूत मुहम्मदﷺकी आमाले भनिन् : उहाँ जन्मदा मेरो शरीरबाट एउटा यस्तो ज्योति निस्केको थियो जसबाट सिरियाका महलहरू उज्याला भएका थिए । इमाम अहमद र इमाम दारमीले पनि लगभग यस्तै विषयको एउटा भनाई वर्णन गरेका छन् ।[३]

केही भनाई अनुसार उहाँको शुभजन्म हुँदा ईशदूतत्वको लक्षणका केही घटनाहरू पनि प्रकटीकरण भएका थिए । जस्तै किसरा राजदरबारका चौध वटा श्रीपेच पतन हुनु, अग्निपूजकहरूको अग्निकुण्ड सेलाउनु, कुण्डहरू सुक्नु र उनीहरूका अग्निशालाहरू भत्कनु आदि । यस कुरालाई बैहकी र तब्रीले वर्णन गरेका छन् ।[४] तर यो कुरा सही प्रमाणित हुन भने सकेको छैन । ती वंशको इतिहासबाट पनि त्यस कुराको कुनै प्रमाण भेटिंदैन । जबकि घटनाक्रमलाई लिखित रूपमा सुरक्षित राख्ने साधन स्रोतहरू छदै थिए ।

उहाँको शुभजन्म पश्चात उहाँकी आमाले अब्दुल मुत्तलिबकहाँ नाती जन्मेको खुशीको खबर पठाइन् । उनी अति प्रसन्न एवं प्रफुल्लित हुँदै आए र उहाँलाई काबामा लगेर अल्लाहसँग दुआ गर्दै कृतज्ञता अर्पण गरे[५] साथै उहाँको नाम मुहम्मद राख्ने निश्चय पनि गरे । यस्तो नाम अरबमा त्यति परिचित थिएन । त्यसपश्चात अरबको रीति अनुसार जन्मेको सातौं दिन खतना गरे ।[६]

उहाँको जन्मको एक हप्तापछि उहाँलाई सर्वप्रथम अबू लहबकी दासिका सौबियाले दूध खुवाइन् । त्यतिखेर उसको काखमा एउटा बच्चा थियो जसको नाम

१ मह्मुद पाशाको इफ्हाम फि तक्वीमुल अरब कब्लल् इस्लाम २८–३५
२ रहमतुल लिल् आलमीन १/३८,३९
३ मुस्नद अहमद ४/१२७
४ बैहकीको दलायल अल नुबुव्वह १/१२६ तारिख तब्री २/१६६
५ इब्ने हेशाम १/१५९
६ इब्ने कैयमको जादुल मआद १/१८

मस्रुह थियो । सौबियाले उहाँभन्दा पहिला पनि हमजा र अबू सल्मा बिन अब्दुल असद मख्जुमीलाई दूध खुवाएकी थिइन् ।[१]

## उहाँ बनु सअदकहाँ

अरबका शहरी बासीहरूले आफ्नो बच्चाहरूलाई शहरी रोगबाट बचाउन, शारीरिक स्वस्थता सन्तुलन राख्न, मांशपेशी बलियो बनाउन र उनीहरूलाई आफ्नो झुलनाबाटै ठेट अरबी भाषा सिकाउनको लागि दूध खुवाउने गाउँले महिलाहरूको सुपुर्द गरिदिने गर्दथे । त्यसै चलन अनुसार अब्दुल मुत्तलिबले दूध खुवाउने महिलाको खोजी गरे र ईशदूतलाई हलीमाको सुपुर्द गरे । उनी बनु सअद बिन बकर कबिलाकी एक महिला थिइन् । उनको श्रीमानको नाम हारिस बिन अब्दुल उज्जा थियो भने उपनाम अबू कब्शा थियो र उनको सम्बन्ध पनि कबिला बनु सअदबाटै थियो ।

हारिसका सन्तानको नाम जो दूध` नाताका कारण ईशदूतका भाइ बहिनी बनेका थिए यस प्रकार छ : अब्दुल्लाह, उनैसा, हुजाफा वा जुजामा यिनैको उपनाम शैमा थियो र त्यही नामबाट उनी बढी प्रसिद्व भइन् । उनले ईशदूतलाई काख खेलाउने गर्दथिन् । त्यस बाहेक ईशदूतका काका हारिसको छोरा अबू सुफ्यानले पनि हलिमाको दूध खाएका कारण उहाँको दूधे भाइ बने । उहाँको काका हमजालाई पनि दूध खुवाउन बनू सअदकी एक महिलाको सुपुर्द गरिएको थियो । उहाँ हलिमाकहाँ हुँदा त्यस महिलाले पनि एक दिन उहाँलाई दूध खुवाइन् । यसरी सौबियाले र बनू सअदकी महिलाले दूध खुवाएको कारण उहाँ र हमजा दोहोरो दूधे भाइ बने ।[२]

ईशदूतलाई पालनपोषण गर्ने क्रममा हलिमाले ईशदूतबाट प्रकट भएका चमत्कारी दृश्यहरू देखेर उनी स्वयम चकित भइन् । यसको विवरण उनकै शब्दमा सुन्नुहोस् । इब्न इस्हाक भन्छन् : हलिमाको भनाई छ : म श्रीमानको साथमा आफ्नो एउटा सानो दूधे बालक लिएर बनु सअदकी केही महिलाहरूको समूहसँग आफ्नो गाउँबाट बाहिर दूध खाने बच्चाहरूको खोजीमा निस्कें । भोकमरीको समय थियो र भोकमरीले केही बाँकी छाडेको थिएन । म आफ्नो सेतो गधिनीमाथि सवार थिएँ र हामीसँग एउटा ऊँटनी पनि थियो । तर त्यसबाट एक थोपा पनि दूध निस्किदैन थियो । अर्कोतिर भोकका कारण बच्चा तडपिरहन्थ्यो जसले गर्दा हामी रातभर सुत्न पाउँदैन थियौं । मेरो छातीमा पनि बच्चालाई खुवाउन केही थिएन । ऊँटनीबाट पनि उसको खुराकको लागि केही थिएन । हामी कहिले वर्षा होला र सुख आउला भन्ने प्रतीक्षामा थियौं । म आफ्नो गधिनीमाथि सवार भएर हिंडे तर उँटनी कमजोर तथा दुब्लो भएकोले अति ढिलो हिँडदा पूरा समूहका महिलाहरू दिक्क हुन्थे । जसरी तसरी हामी

१ सही बुखारी हदिस नं २६४५
२ इब्ने कैयमको जादुल मआद १/१९

दूधे बालकको खोजीमा मक्का पुग्यौं । त्यहाँ हामीमध्ये हरेकसँग ईशदूतलाई लैजान भनेर भनियो । तर उहाँ टुहुरा भएका कारण हामी सबैले अस्वीकार गऱ्यौं । किनकि हामीलाई बच्चाको अभिभावकबाट केही पाइन्छ भन्ने आशा हुन्थ्यो । त्यसकारण हामीले भन्यौं : यो त टुहुरो छ । उसकी विधुवा आमा र उसको हजूर बुवाले हामीलाई के नै दिन सक्छन् र ? त्यसकारण हामीमध्ये कसैले उहाँलाई लिएर जान चाहदैन थियो ।

हामीहरूसँग आउने सबै महिलाहरूले बच्चा भेटाइसकेका थिए । मैले मात्र कोही बालक पाउन सकेकी थिइन । फर्कने बेलामा मैले आफ्नो श्रीमानसँग भनें : सबैले बच्चा लिएर जाने र म त्यसै जाने यो कुरा मलाई राम्रो लागेको छैन । तसर्थ म त्यही टुहुरो बच्चा भए पनि लिएर जान्छु । श्रीमानले भने : ठीक छ , केही छैन । अल्लाहले यसै बच्चाद्वारा हामीलाई सम्पन्न बनाउन सक्छ । अन्ततः मैले त्यही बच्चालाई लिएर आएँ ।

हलिमाको भनाई छ : बच्चालाई लिएर आफ्नो कोठामा आएपछि उसलाई आफ्नो काखमा राखेर दूध खुवाउन लाग्दा दुवै छातीमा दूध रसायो र उसले पेटभरि दूध खायो । उसले दूध खाएपछि उसको दूधे भाइले पनि पेटभरि दूध खायो । त्यसपछि दुवै सुते । यसअघि हामी आफ्नो बच्चाको भोकका कारण सुत्न पाउँदैन थियौं । अर्कोतिर मेरा श्रीमान ऊँटनी दुहुन जाँदा उँटनीको थून रसायो । उनले दुहेर ल्याएको दूध ले हाम्रो पेट पनि भरियो र आरामसँग सुत्यौं । उनको बयान छ : बिहान भएपछि मेरो श्रीमानले भने हलिमा ! तिमीले एउटा शुभगुणी आत्म हासिल गरेकी छौं । मैले भनें : मलाई पनि यस्तै लागेको छ ।

हलिमाको भनाइ छ : त्यस पश्चात हाम्रो टोली त्यहाँबाट हिँड्यो । म आफ्नो उही दुब्लो गधिनीमाथि सवार भएँ र बच्चालाई पनि काखमा राखें । अब त्यही गधिनी टोलीका सबैजनालाई उछिन्दै अगाडि हिँड्यो र गधाले पनि त्यसको पिछा गर्न सकेन । मेरो साथीहरूले मसँग भन्न थालिन् : ए अबू जुबैबकी छोरी ! यो के हुँदै छ ? हाम्रो पनि ख्याल राख । यो त्यही गधिनी होइन जसमाथि तिमी सवार भएर आएकी थियौ ? मैले भने : हो हो, यो त्यही गधिनी हो । उनीहरूले भन्थे : यसमा कुनै भेदको कुरो छ जस्तो छ ।

त्यसपछि हामी बनू सअद अर्थात आफ्नो घरमा आयौं । मलाई हाम्रो क्षेत्रमा भन्दा ठूलो अनिकाल अन्य कुनै ठाउँमा होला जस्तो लाग्दैन थियो । तर म फर्केपछि मेरा बाख्राहरू चर्न जाँदा अघाएर आउन थाले । साथै थुन दूधले भरिपूर्ण हुन थाल्यो । हामीले दूध दुहेर पिउँथ्यौं तर अरू मानिसहरूले भने दूधको एक थोपा पनि देख्न पाएका थिएनन् । तिनका जनावरहरूको थून शुरुदेखि नै सुकेको थियो । केही सीप नलागेर हाम्रा शहरका मानिसहरूले आफ्ना गोठालेहरूलाई जहाँ अबू जुवैबकी

छोरीको गोठालाले बाखा लगेर चराउँछ त्यहीँ लगेर चराउ भन्ने गर्थे । त्यसो गर्दा पनि उनीहरूको बाखा भोकै फर्कन्थे र  ती बाखाको थुनमा एक थोपा पनि दूध हुँदैन थियो । जबकि मेरो बाखा अघाएर आउँथ्यो र तिनको थुन दूध ले भरिपूर्ण हुन्थ्यो । यसरी हामीले अल्लाहको तर्फबाट निरन्तर सुख सम्पन्न र कृपाको अनुभूति गरिरहयौं । यसरी बच्चाको दुई वर्ष पूरा भयो अनि मैले दूध  खुवाउन छुटाइ दिएँ । त्यो बच्चा अरु बच्चाहरूको दाँजोमा तीव्रगतिमा बढिरहेको थियो । त्यसपछि मैले त्यो बच्चालाई उसको आमाकहाँ लिएर गएँ । तर हामीले उसको जुन शुभलक्षण अवलोकन गर्दै आएका थियौं त्यसले गर्दा ऊ हामीकहाँ रहोस् भन्ने हाम्रो ठूलो इच्छा थियो । अतः हामीले उसको आमासँग कुराकानी गऱ्यौं । मैले भनें : तपाईंले मेरो बच्चालाई मेरो साथमा नै बस्न दिनुहोस् किनभने मलाई मक्कामा महामारीको खतरा लागेको छ । हाम्रो निरन्तर अनुरोधमा उनले बच्चा हामीलाई फिर्ता दिइन् ।[1]

## छाती चिरिएको घटना

यसरी दूध खाने अवधि सिद्धिएपछि पनि ईश्दूत बनु सअदकहाँ नै बस्नुभयो र जन्मिएको चौथो वा पाचौं वर्ष[2] उहाँको पवित्र छाती चिरिएको घटना घट्यो । त्यसको विवरण अनसद्वारा वर्णन गरिएको हदिस सहीह मुस्लिमा उल्लेख छ : ईश्वरीय दूत जिब्रइल उहाँनिर आए । उहाँ बच्चाहरूको साथमा खेलिरहनु भएको थियो । जिब्रइलले उहाँलाई समातेर लडाए र छाती चिरेर मुटु निकाले । त्यसपछि मुटुबाट एउटा मासुको डल्लो निकालेर भने : यो शैतानको अंश हो । त्यसपछि मुटुलाई एउटा सुनको थालीमा राखेर जमजमको पानीले धोए र  त्यसलाई आफ्नो ठाउँमा राखे । उता बच्चाहरू दौडेर उहाँलाई दूध खुवाउने आमाकहाँ गएर भन्न थाले मुहम्मदﷺको हत्या गरिएको छ । उनको घरका मानिसहरू तुरुन्तै आए । उहाँलाई देख्दा उहाँको अनुहारको रंग बदलेको थियो ।[3]

## आमाको ममत्वपूर्ण काखमा

त्यस घटनाबाट हलिमालाई डर भयो र उनले उहाँलाई उहाँको आमाको सुपुर्द गरिदिइन् । अतः उहाँ ६ वर्षको उमेरसम्म आमाकै मायालु काखमा बस्नुभयो ।[4]

उता आमेनाले आफ्नो मृत पतिको सम्झनामा यस्रिब गएर उनको चिहानको दर्शन गर्ने अठोट गरिन् । फलस्वरूप उनी आफ्ना टुहुरा छोरा मुहम्मदﷺलाई

---

१ इब्ने हेशाम १/१६२
२ इब्ने सअद १/११२
3 सही मुस्लिम १/९२
४ इब्ने हेशाम १/१६८

आफ्नी नोकरनी उम्मे ऐमन र आफ्ना अभिभावक अब्दुल मुत्तलिबको साथमा लिएर करिब पाँच सय किलो मिटर दूरीको यात्रा गरी मदिना प्रस्थान गरिन् र त्यहाँ एक महिनासम्म बसेर फर्किन् । फर्कने क्रममा केही दुरी पार नगर्दै उनी विरामी भइन् । त्यो रोग झन चर्किंदै गयो । अन्तत: मक्का र मदिनाबीच अबवा नामक ठाउँमा पुगेपछि उनको मृत्यु भयो ।[१]

## हजुरबाजेको छत्रछायाँमा

अब्दुल मुत्तलिब आफ्नो नातिलाई लिएर मक्का गए । उनको हृदय आफ्नो त्यस टुहुरा नातिप्रति प्रेम तथा कृपाका कारण भावुक बनेको थियो । किनभने नयाँ चोटले उनका पूरानो घाउमा नुन छर्ने काम गरेको थियो । नातिप्रति अब्दुल मुत्तलिबले जुन नम्र भाव देखाए आफ्नो सन्तानमध्ये कसैलाई देखाएनन् । भाग्यले उहाँलाई एक्लोपनको जुन मरुभूमिमा धक्याउन खोजेको थियो अब्दुल मुत्तलिबले उहाँलाई त्यसबाट जोगाए । त्यति मात्र होइन उनले उहाँलाई आफ्नो सन्तानभन्दा पनि बढी माया गर्थे र ठूलाबडाको झै उनको सम्मान गर्थे । इब्ने हिशामको बयान छ : अब्दुल मुत्तलिबको लागि काबाको छायाँमा ओछ्यान बिछ्याइन्थ्यो । उनका सबै छोरा ओछ्यानको वरिपरि बस्थे । अब्दुल मुत्तलिब आएर ओछ्यानमाथि बस्थे । उनको आदरका कारण उनका कुनै पनि छोरा ओछ्यानमाथि बस्दैन थियो । तर ईशदूत आएर ओछ्यानमा नै बस्नुहुन्थ्यो । त्यतिखेर उहाँ कमै उमेरको हुनुहुन्थ्यो । उहाँको काकाहरूले उहाँलाई समातेर ओछ्यानबाट तल झार्थे तर अब्दुल मुत्तलिबले उनीहरूलाई त्यस्तो गरेको देख्दा भन्थे : मेरो यस छोरालाई छाडिदेऊ । यसको ममत्याइँ बिचित्रको छ । त्यसपछि उहाँलाई आफूसँग ओछ्यानमाथि बसाल्थे । आफ्नो हातले पिठ्युँ सुम्सुम्याउँथे र उनको चालचलन देखर खुशी हुन्थे ।[२]

उहाँको उमेर ८ वर्ष दुई महिना दश दिनको हुँदा हजुर बुवा अब्दुल मुत्तलिबको पनि छत्रछायाँ उठ्यो । उनको देहावसान मक्कामा भएको थियो र निधन हुनुभन्दा पहिला नै उनले उहाँको काका अबू तालिबलाई जो उहाँको पिता अब्दुल्लाहको साख्खै भाइ थिए, उहाँको पालनपोषणको लागि वसीयत गरे ।[३]

## दयालु काकाको पालनपोषणमा

अबु तालिबले आफ्नो भतिजाको पालनपोषणको जिम्मेवारीलाई विशिष्ट तरिकाले निर्वाह गरे । उहाँलाई आफ्नो सन्तानमा शामिल गरे, उनीहरूलाई भन्दा बढी मान्न थाले । अत्यधिक सम्मान तथा मर्यादा दिए । चालीस वर्षभन्दा बढी

---

१ इब्ने हेशाम १/१६८
२ इब्ने हेशाम १/१६८
३ इब्ने हेशाम १/१६९

उहाँको साथ दिए । आफ्नो समर्थनको हात लम्ब्याए । उहाँको अधारमा मित्र र शत्रू बनाए । यसको थप विवरण  आफ्नो ठाउँमा आउँदै छ ।

## वर्षाको लागि उहाँको प्रार्थना

इब्ने असाकिरले जल्हमा बिन अरफताहद्वारा वर्णन गर्दै भनेका छन् : म मक्का आएँ । मानिसहरू भोकमरीमा ग्रसित थिए । कुरैशीहरूले भने: अबू तालिब उपत्यका भोकमरीको शिकार बनेको छ । बालबच्चाहरू अनिकालमा मर्दै छन् । हिड्नोस वर्षाको लागि प्रार्थना गर्नोस् । अबू तालिब एउटा बच्चाको साथमा निस्के । बच्चा बादलले ढाकेको सूर्य जस्तो देखिन्थ्यो मानौं उसबाट भर्खर घना बादल हटेको छ । उसको वरिपरि अरू बच्चाहरू पनि थिए । अबू तालिबले त्यस बच्चाको हात समातेर उसको पिठ्यूँ काबाको गारोमा अडेस् लगाए । बच्चाले उनको औंला समातेको थियो । त्यस बेला आकाशमा बादलको एक टुक्रा पनि थिएन । तर हेर्दा हेर्दै यता उताबाट बादल लाग्न थाल्यो र भीषण वर्षा भयो र उपत्यकामा बाढी पनि आयो । शहर एवं वस्तीहरूमा हरियाली छायो । पछि अबू तालिबले त्यसै घटनालाई संकेत गरेर मुहम्मदﷺको प्रसंशा गर्दै भनेका थिए

وابيض يستسقى الغمام بجهه          ثمال اليتامى عصمة للارامل

अनुवाद छ : उनी सुन्दर छन् । उनको अनुहारबाट वर्षाको माग गरिन्छ । उनी टुहुरा र विधवाका संरक्षक हुन् ।"[१]

## बहिरा पूजारी

विश्वसनीय केही भनाइ अनुसार जब उहाँको उमेर बाह्र वर्ष र विस्तृत भनाइ अनुसार बाह्र वर्ष दुई महिना दश दिनको[२] भयो अनि अबू तालिब उहाँलाई लिएर व्यापारको लागि सिरियाको यात्रामा निस्के र जाँदै गर्दा बसरा पुगे । बसरा सिरियाको एउटा ठाउँ तथा हौरानको केन्द्रीय शहर हो । त्यस बेला त्यो शहर अरब प्रायद्वीपमध्ये रोमीको कब्जामा रहेको क्षेत्रको राजधानी थियो । त्यस शहरमा जर्जीस नामको एउटा पूजारी बस्थ्यो । त्यो पूजारी बहिराको उपनामबाट प्रसिद्ध थियो । बटुवाहरू त्यहाँ आएर बसेपछि पूजारी आफ्नो चर्चबाट निस्केर बटुवाहरूनिर आएर उसले उनीहरूको सत्कार गऱ्यो । त्यो पूजारी त्यसअघि कहिल्यै पनि बाहिर निस्किदैन थियो । उसले ईशदूत मुहम्मदﷺलाई उहाँको विशेषताको कारण चिन्यो र उहाँको हात समातेर भन्यो : यिनी विश्वनेता हुन् । अल्लाहले यिनलाई विश्व शान्ति दूत बनाएर पठाउने छ । अबू तालिबले भने: तपाईंलाई यो कुरा कसरी थाहा भयो ? उसले भन्यो

---

१ अब्दुल्लाहको मुख्तसर सिरह १५,१६
२ इब्ने जौजीको तलकिहुल फहुम ७

तिमीहरू घाटीको पलतिर आउँदा भक्तिको लागि नझुक्ने कुनै रुख वा ढुंगा थिएन । यस्ता वस्तुहरूले ईशदूतबाहेक अरु कसैको भक्ति गर्दैनन् । यसबाहेक मैले यिनलाई काँधको तल्लो कुरकुरे हड्डीमा स्याउ जस्तै ईशदूतत्वको छाप लागेका कारण चिनेको हुँ । हामीले उनको बारेमा आफ्नो धर्मग्रन्थमा पनि पढेका छौं ।

त्यसपछि बहिरा पूजारीले अबू तालिबसँग भने यिनलाई फिर्ता गरिदेऊ सिरियातिर नलैजाऊ किनकि त्यहाँ यहुदीहरूको खतरा छ । त्यो कुरा सुनेर अबू तालिबले केही नोकरहरूको साथमा उहाँलाई मक्का फिर्ता गरिदिए ।[१]

## फुज्जारको युद्ध

उमेरले उहाँ बिसौं वर्षको हुँदा ओकाजको बजारमा कुरैश, केनानह र कैस एलानबीच जिल कअदा महिनामा एउटा युद्ध भएको थियो जुन फुज्जार युद्धको नामले प्रसिद्ध छ ।[२] कारण केनानहको एक जना व्यक्तिले कैस ऐलानका तीन जनाको हत्या गरेको थियो । त्यसको खबर ओकाजमा पुगेपछि दुवै पक्ष भडके र लडाइँ गर्न थाले । त्यस युद्धमा किनानहका कमाण्डर हर्ब बिन उमैया थियो । किनकि ऊ आफ्नो उमेर एवं प्रतिष्ठाको कारण कुरैश र किनानहमा निकै प्रतिष्ठित थियो । पहिलो पहरमा किनानहमाथि कैसको पल्ला भारी थियो तर मध्यान्नहमा कैसमाथि किनानहको पल्ला भारी हुन लाग्दा युद्धविराम गरी सम्झौता गर्ने कुरा उठ्यो । छलफल गर्दा दुवै पक्षका मृतक गन्ने र जसको मानिसहरू बढी मारिएका छन् उनीहरूलाई क्षतिपूर्ति दिने तय भयो । यसरी त्यसै कुरामा सहमति भयो र युद्धविराम गरियो । जुन दुस्मनी थियो त्यो समाप्त भयो । त्यस युद्धमा पवित्र महिनाहरूको अपमान गरिएको कारण त्यस युद्धलाई फुज्जारको युद्ध भनियो । त्यस युद्धमा ईशदूत  मुहम्मद ﷺ पनि जानु भएको थियो । उहाँले आफ्ना काकाहरूलाई वाण थमाइदिनु हुन्थ्यो ।[३]

## हिलफुल फुजुल

फुज्जार युद्धपछि त्यसै प्रतिष्ठित एवं पवित्र महिना जिल कअदामा हिलफुल फुजुल सम्पन्न भयो । कुरैशका जनजाति अर्थात बनु हाशिम, बनु मुत्तलिब, बनु असद बिन अब्दुल उज्जा, बनु जहराह बिन केलाब र बनु तैयम बिन मुर्राहले त्यसको व्यवस्था गरेका थिए । उनीहरू अब्दुल्लाह बिन जुदआनको घरमा जम्मा भए । किनभने ऊ उमेर तथा प्रतिष्ठामा उच्च थियो । उनीहरूले अब मक्कामा जो कोही पीडित देखियो भने चाहे मक्काको बासी होस् वा बाहिरको उनीहरू सबैको मदत

---

१ जामे तिर्मिजी हदिस नं ३६२०
२ इब्ने असिरको अल कामिल १/४६७
3 इब्ने हेशाम १/१८४–१८६

तथा समर्थनमा उभिने साथै उनीहरूको हक अधिकार दिलाउने भन्ने प्रतिज्ञा तथा बाचा गरे । त्यस भेला ईशदूत मुहम्मदﷺ पनि उपस्थित हुनुहुन्थ्यो । ईशदूतत्वको पदमा चयन भए पश्चात् पनि उहाँले भन्नु हुन्थ्यो : म अब्दुल्लाह बिन जुदआनको घरमा एउटा यस्तो सम्झौतामा सहभागी थिएँ मलाई त्यसको साटो राता ऊँटहरू दिइएको भए पनि त्यसमा म खुशी हुन्न थिएँ । यदि इस्लाममा त्यस बाचा एवं प्रतिज्ञाको लागि मलाई बोलाइएको भए म तयार हुन्थें ।[१]

त्यस सम्झौताको भावना पक्षपाती सतहबाट निस्कने कुभावनाको विपरित थियो । त्यस सम्झौताको कारण बारे भनाई यस प्रकार छ । जुबैदको एक जना व्यक्ति सामान लिएर मक्का आएको थियो । उसँग आस बिन वाइलले सामान खरिद गऱ्यो र उसले पाउने पैसा उसले दिएन । उसले सहयोगी कबिला अब्दुल दार, मख्जूम, जम्ह, सहम र अदीलाई सहयोगको लागि गुहार्यो तर कसैले ध्यान दिएनन् । त्यसपछि उसले अबू कुबैस नामक पहाडमाथि चढेर चर्को स्वरमा केही पद्यात्मक लेख पढ्यो, जसमा उसले आफ्नो पीडा पोखिरहेको थियो । त्यो सुनेर जुबैर बिन अब्दुल मुत्तलिब सक्रिय भए । यो व्यक्ति किन असहाय छ भन्ने कुरा गरे । उनको कोसिसले गर्दा माथि उल्लेख गरिएका कबिलाहरू जम्मा भए । पहिला सम्झौता गरे त्यसपछि आस बिन वाइलबाट उसको हक अधिकार दिलाए ।[२]

## कष्टकर जीवन

यौवनावस्थमा ईशदूत मुहम्मदﷺको कुनै खास काम थिएन । यद्यपि उहाँले बाखा चराएको कुरा पटक पटक उल्लेख भएको छ । उहाँले बनु सअदका बाखाहरू चराउनु भएको थियो ।[३] मक्कामा पनि मक्काबासीहरूका बाखाहरू केही पैसा लिएर चराउनु हुन्थ्यो ।[४] वयस्क अवस्थामा प्रवेश गरेपछि उहाँले व्यापार गर्न थाल्नु भयो । उहाँले साइब बिन यजिद मख्जुमीसँग मिलेर व्यापार गर्नु हुन्थ्यो भन्ने कुरा पनि उल्लेख छ । उनीहरूमा राम्रो साझेदारी थियो । न उनीहरूले तलमाथि गर्थे न झैझगडा नै । तसर्थ मक्का विजय भएपछि साइब मख्जुमी मक्का आउँदा उहाँले उनलाई स्वागत गर्नु भएको थियो । साथै मेरा साझेदार भाइलाई स्वागत छ भन्नु भएको थियो ।[५] पच्चीस वर्षको उमेर भएपछि खदिजाको माल सामान लिएर

---

१ अब्दुल्लाहको मुख्तसर सियर ३०,३१
२ इब्ने सअदको तब्कात १/१२६
३ इब्ने हेशाम १/१६६
४ सही बुखारी
५ सुनन् अबु दाऊद २/६११

व्यापारको लागि सिरियातिर जानुभयो । इब्ने इस्हाकको भनाई अनुसार खदिजा बिन्त खुवैलिद एउटी प्रतिष्ठित धनाढ्ढे तथा व्यापारी महिला थिइन् । मानिसहरूलाई व्यापार गर्न आफ्नो मालसामान दिने गर्थिन् । व्यापारको यस नीति अनुसार एक भाग निर्धारण गर्थिन् । कुरैशको सम्पूर्ण जनजातिको पेशा नै व्यापार थियो । जब उनलाई ईशदूतको सत्यनिष्ठा, इमानदारी र उच्च चरित्र बारे जानकारी भयो अनि उनले उहाँलाई एउटा सन्देश पठाएर आफ्नो माल सामान लिएर व्यापारको लागि आफ्नो नोकर मैसराहको साथमा सिरियातिर जाने प्रस्ताव राखिन् । साथै अरू कामदारहरूलाई भन्दा बढी पारिश्रमिक उहाँलाई दिने बताइन् । उहाँले त्यो प्रस्ताव स्वीकार्नुभयो । उहाँ उनको माल सामान लिएर उनको नोकर मैसराहको साथमा सिरियातिर जानुभयो ।[१]

## खदिजासँग विवाह

उहाँ फर्केर मक्का आएपछि खदिजाले आफ्नो माल सामानमा यस्तो लाभ तथा बरकत देखिन् जुन त्यसअघि कहिलै देखेकी थिइनन् । उता उनको नोकर मैसराहले उहाँको भद्र चरित्र, उच्च आचरण, उच्च विचार, सत्यता र इमानदारी जस्ता आचरण बारे आफुले देखेको कुरा सुनाएपछि खदिजालाई आफुले गुमाएको कुरा हासिल भएको महसुस भयो । त्यसअघि ठूलठूला सरदार र धनाढ्ढेहरूले उनीसँग विवाह गर्न चाहेका थिए तर उनले कसैको सन्देश स्वीकार गरिनन् । त्यसपछि उनले आफ्नो मनको कुरो आफ्नो साथी नफिसा बिन्त मुनब्बाहसँग भनिन् र नफिसाले गएर ईशदूतसँग कुराकानी गरिन् । उहाँ पनि राजी हुनुभयो र आफ्ना काकाहरूसँग त्यस विषयमा कुरा गर्नुभयो । उनीहरूले खदिजाका काकासँग कुरा गरे र विवाहको लागि सन्दशे पठाए । त्यसपछि उहाँको विवाह भयो । निकाह अर्थात विवाहमा बनु हाशिम लगायत दुष्ट सरदारहरू पनि सहभागी भएका थिए ।

यो कुरा सिरियाबाट फर्केको दुई महिना पश्चातको हो ।[२] उहाँले महर स्वरूप बीस वटा ऊँट दिनुभयो । त्यसबेला खदिजाको उमेर चालीस वर्ष र केही भनाई अनुसार अट्ठाइस वर्षको थियो । उनी वंश, धन र बुद्धि विवेकमा आफ्नो जातिकी सबैभन्दा प्रतिष्ठित र श्रेष्ठ महिला थिइन् । ईशदूतले विवाह गर्नु भएको उनी प्रथम महिला हुन् । उहाँले उनको निधन नहुँदासम्म अर्को विवाह गर्नु भएन ।[३]

इब्राहीम बाहेक ईशदूतका सम्पूर्ण सन्तान उनैको गर्भबाट भएका थिए । सबैभन्दा पहिले कासिम जन्मिए र उनकै नाममा उहाँको उपनाम अबुल कासिम

---

१ इब्ने हेशाम १/१८७,१८८
२ मुरुज अल जहब २/२७८
3 इब्ने हेशाम १/१८९

पऱ्यो । त्यसपछि जैनब, रोकैया,उम्मे कुल्सूम, फातिमा र अब्दुल्लाह जन्मे । अब्दुल्लाहको उपनाम तैयब तथा ताहिर थियो । उहाँका सबै छोराहरू बाल्यकालमा नै विते । तर छोरीहरूमध्ये हरेकले इस्लामी युग पाएका थिए । उनीहरू मुसलमान भइन् साथै सबैले हिजरत गरिन् । फातिमा बाहेक सबैको निधन उहाँको जीवनमा नै भएको थियो । फातिमाको निधन भने उहाँको निधनको ६ महिना पश्चात् भएको थियो ।[1]

## काबाको निर्माण र हजरे अस्वद बारे विवादको समाधान

उहाँ उमेरले पैतीसौं वर्षको हुँदा कुरैशले काबाको पूनःनिर्माण शुरु गरे । किनभने काबा केही अग्लो चौकोर जस्तो थियो । इस्माइलعليه السلامको पालादेखि नै त्यसको उँचाई ९ हात थियो तर त्यसमाथि छत थिएन । त्यस्तो अवस्थामा रहेको हुनाले चोरहरूले त्यसभित्र राखिएका खजानाहरू चोरी गर्थे । त्यस बाहेक काबा निर्माण भएको एउटा लामो समय वितेको थियो । भवन भत्केको थियो साथै पर्खालमा चिरा परेको थियो । उता त्यसै वर्ष ठूलो बाढी आयो जसको निकासा काबातिर थियो । जसले गर्दा काबा कुनै पनि बेला ढल्न सक्थ्यो । त्यसकारण कुरैशहरू त्यसको प्रतिष्ठा तथा गरिमालाई जोगाउनको निम्ति त्यसको पुनःनिर्माण गर्न बाध्य भए ।

काबाको निर्माण गर्ने क्रममा कुरैशहरूले काबामा केवल जायज धन खर्चने र वेश्यावृत्ति तथा व्याजे पैसा र अनाहक जफत गरिएको पैसा नलगाउने निर्णय गरे ।

नयाँ भवन निर्माण गर्न पुरानो भवन भत्काउनु जरुरी थियो तर कसैमा त्यो भत्काउने हिम्मत भएन । आखिरकार वलिद बिन मुगिरह मख्जूमीले भत्काउन सुरु गरे । उनले कोदाली लिएर भत्काउन लाग्दा भनेका थिए : हे अल्लाह हामीले शुभकार्य गर्ने अठोट गरेका छौं । त्यसपछि दुईकुनाबाट उनले केही भत्काए । त्यसो गर्दा उनीमाथि कुनै आपत नआएकाले बाँकी मानिसहरूले पनि दोस्रो दिनदेखि भत्काउन शुरु गरे । इब्राहीम عليه السلامले बसालेको जगसम्म भत्काएपछि निर्माणकार्य आरम्भ गरे । निर्माणको लागि हरेक कबिलाको निम्ति अलग अलग भाग छुट्याइयो । हरेक कबिलाले छुट्टाछुट्टै ढुंगाको थुप्रो लगाएर राखेका थिए । निर्माणकार्य शुरु भयो । बाकौम नामक एक जना इटालियन डकर्मी त्यसको निरिक्षक थियो । जब भवनको गारो हजरे अस्वदसम्म आयो त्यहाँ हजरे अस्वदलाई कसले राख्ने भन्ने बारे झगडा उत्पन्न भयो । त्यो झगडा चार पाँच दिनसम्म जारी रह्यो । झगडा चर्कदै गयो र काबामा भीषण रक्तपात हुने सम्भावना देखियो । तर अबू उमैया मख्जुमीले समस्याको समाधान निकाल्दै भने : मस्जिदे हरमको ढोकाबाट जो पहिला प्रवेश हुन्छ उसलाई झगडा समाधान गर्ने मुख्या मानिने छ । मानिसहरूले उसको सुझाव माने । अल्लाहको मनसायले गर्दा नै होला सबैभन्दा पहिला त्यहाँ ईशदूत मुहम्मद ﷺ को

[1] सही बुखारी, फतहुल बारी ७/१०५

प्रवेश भयो । मानिसहरूले उहाँलाई देखेर उनी इमानदार छन् हामी उनले भनेको मान्छौं भनी चिच्याउन थाले । त्यसपछि उहाँ उनीहरूको नजिक आउनुभयो । उनीहरूले उहाँलाई समस्या बारे जानकारी गराए । उहाँले एउटा बर्को मगाएर बीचमा हजरे अस्वद राख्नुभयो । विवाद गरेका कबिलाहरूको सबै सरदारहरूलाई बर्कोको एकएक कुना समातेर माथि उठाउन लगाउनुभयो । उनीहरूले त्यसै गरे । बर्को हजरे अस्वद राख्ने ठाउँमा पुऱ्याइएपछि उहाँले आफ्नो पवित्र हातद्वारा हजरे अस्वदलाई त्यसको निश्चित स्थानमा राख्नुभयो । त्यो अति उचित फैसला थियो । त्यसमा सम्पूर्ण जातिहरू राजी भए ।

उता कुरैशसँग रहेको शुद्ध धन सिद्धिएका कारण उनीहरूले काबाको उत्तरतर्फको लम्बाई ६ हात जति कम गरिदिए । त्यसै भागलाई हिज्र तथा हतीम भनिन्छ । त्यतिखेर कुरैशले कोही व्यक्ति विना अनुमति प्रवेश नगरोस् भनेर काबाको ढोका भुइँबाट धेरै अग्लो उठाएका थिए । गारो १५ हात अग्लो भएपछि भित्रबाट ६ वटा खामो गाडेर माथिबाट छत हाले ।

यसरी काबाको निर्माण सकिएपछि काबा चौकोसे जस्तो भयो । अहिले काबाको उचाई १५ मिटर छ । हजरे अस्वद भएको गारो र त्यसको सामुन्ने अर्थात दक्षिण र उत्तरी गारोको उँचाई दशदश मिटर छ । हजरे अस्वद परिक्रमा गर्ने ठाउँबाट साढे एक मीटरको उचाईमा छ । ढोका भएको गारो र त्यसको सामुन्नेको गारो अर्थात पूर्व र पश्चिमको गारोको उचाइँ बाह्र-बाह्र मिटर छ । ढोका भुइँबाट दुई मिटरको उँचाईमा छ । गारोको तल वरिपरि चारैतिर कुर्सी जस्ता घेराहरु छन् । जसको बीचको उँचाई २५ से.मी. र चौडाई ३० मिटर छ । त्यसलाई शाजे रवाँ भनिन्छ । यो पनि वास्तवमा काबाको भाग हो तर कुरैशले त्यसलाई पनि छाडिदिएका थिए ।[1]

## ईशदूत हुनुभन्दा पहिलाको संक्षिप्त जीवनी

ईशदूतको अस्तित्व ती सम्पूर्ण विशेषता तथा प्रतिभाको संयुक्त रूप थियो जुन व्यक्तिगत रूपमा मानिसहरूको विभिन्न समूहमा पाइन्छ । उहाँ उच्च चिन्तन, दूरदर्शिता र सत्यतामा सर्वोच्च धरोहर हुनुहुन्थ्यो । उहाँलाई शिष्टचार,ठोस विचार, मध्यस्थता एवं स्वच्छ उद्देश्य जस्ता विशेषता अधिक्तम प्रदान गरिएको थियो । उहाँले लामो समयसम्म मौनधारणा गरी निरन्तर गहन चिन्तन र सत्यको खोजी गर्नुहुन्थ्यो । उहाँले आफ्नो उच्च विवेक, असल स्वभावद्वारा जीवनपुस्तक, मानिसहरूको व्यवहार र विभिन्न समूहको अवस्थाको अध्ययन गर्नुभयो । जुन विकृतिमा मानिसहरु लतपतिएका थिए त्यसलाई घोर घृणा गर्नुभयो । अतः उहाँले ती सम्पूर्ण कुराबाट

---

१ इब्ने हेशाम १/१९२ तारिख तब्री २/२८९

आफुलाई बचाउँदै दूरदर्शिताका साथ मानिसहरूको बीचमा जीवन यात्रा तय गर्नुभयो । मानिसहरूले राम्रो कार्य गर्दा त्यसमा सहभागिता जनाउनु हुन्थ्यो[1] नत्र एकान्तमा बस्नुहुन्थ्यो । अत : उहाँले रक्सी खान त परै जाओस् कहिल्यै हेर्नु पनि भएन । मठ मन्दिरमा बलिको रूपमा बध गरिएको मासु पनि खानु भएन । मूर्तिहरूको नाउँमा मनाइने चाड पर्व र मेला तथा बजारमा पनि कहिल्यै जानुभएन ।

उहाँलाई शुरुदेखि नै ती झुटा देवीदेवतादेखि अति घृणा थियो । उहाँको नजरमा ती कुराभन्दा घृणित अरू कुनै कुरा थिएन । उहाँलाई लात र उज्जा नामक मूर्तिहरूको कसम खाएको सुन्नु पनि सह्य थिएन ।[2]

भाग्यले उहाँमाथि सुरक्षा प्रदान गरेको कुरामा संदेह छैन । कहिलेकाहिँ सांसारिक मनोरंजनप्रति भावनाहरू जागेको वा नराम्रो परम्परा मान्न मन लागेको खण्डमा ईश्वरको कृपा त्यसमा अवरोध बन्थ्यो । इब्ने असीरद्वारा वर्णन गरिएको एउटा हदिसमा ईशदूतले भन्नुभएको छ : अज्ञान कालका मानिसहरूले जुन क्रियाकलाप गर्थे ती क्रियाकलामा दुई पटक बाहेक कहिल्यै सामिल हुने सोच पनि आएन । तर दुवै पटक अल्लाहले मलाई त्यसबाट बचायो । त्यसपछि कहिल्यै मेरो मनमा त्यस्तो काम गर्ने सोच पनि आएन । अन्ततः अल्लाहले मलाई ईशदूतत्वको पद प्रदान गरे । मक्काको माथिल्लो भागमा मसँग बाखा चराउने केटालाई मैले एक दिन राती तिमीले मेरो बाखा हेरे म मक्का गएर अन्य युवाहरू झैं कथा कहानीको बैठकमा सामिल हुने थिएँ भनेर भनें । उसले हुन्छ भन्यो । त्यसपछि म मक्का जान हिँडें । जाँदै गर्दा मक्काको पहिलो घरनिर पुग्दा बाजा बजेको स्वर सुनियो । मैले यो के हो भनेर सोध्दा मानिसहरूले फलानोको फलानोसँग विवाह हुँदैछ भनेर भने । म त्यो सुनेर त्यहाँ बसेँ । अल्लाहले मेरो कान बन्द गरिदिए र म त्यहीं सुतें । अनि विहान सूर्यको तापका कारण मेरो आँखा खुल्यो र म आफ्नो साथीतिर फर्केर गएँ । उसले सोध्दा मैले सम्पूर्ण विवरण बताएँ । त्यसैगरी एक अर्को दिन पनि राती मैले त्यही कुरो गरेँ । मक्का पुग्न लाग्दा पहिलो घटना जस्तो घटना घट्यो । त्यसपछि मैले कहिल्यै पनि यस्तो गलत सोच गरिनँ ।[3]

सही बुखारीमा जाबिर बिन अब्दुल्लाहमार्फत वर्णन गरिएको छ : काबा निर्माण गर्दा ईशदूत र उहाँका काका अब्बासले ढुंगा ओसारिरहेका थिए । अब्बासले उहाँसँग भने : आफ्नो लुंगी आफ्नो काँधमा राख सजिलो हुन्छ ढुंगाबाट चोट लाग्दैन । त्यो कुरा सुनेर उहाँ भुइँमा ढल्नुभयो । आँखा आकाशतिर फर्के । सन्चो हुने

---

१ सही बुखारी हदिस नं २००२, फतहुल बारी ४/२८७
२ इब्ने हेशाम १/१२८ तारिख तब्री २/१६१
3 यस हदिसलाई तब्रीले नकल गरेका छन्, हाकिमले सही मानेका छन् तर इब्ने कसिरले यसलाई कमजोर बताएका छन् ।

विप्तिकै मेरो लुंगी खै भनेर सोध्नुभयो । उहाँलाई लुंगी लगाइयो । एक अर्को भनाई अनुसार त्यसपछि उहाँको गुप्ताङ्ग कहिल्यै पनि देखिएन ।[1]

ईशदूत आफ्नो समुदायमा सरल आचरण, असल स्वभाव र दयालु बानीमा श्रेष्ठ हुनुहुन्थ्यो । तसर्थ उहाँ सबैभन्दा बढी सहयोग गर्ने, सबैभन्दा हाँसिलो स्वभाव भएको ,सबैभन्दा प्रतिष्ठित, सबैभन्दा बढी दूरदर्शी, सबैभन्दा बढी सत्य बोल्ने, सबैभन्दा नम्र स्वभाव भएको, सबैभन्दा बढी शुद्ध मन भएको, सबैभन्दा बढी उपकार तथा कृपा गर्ने बानी भएको, सबैभन्दा बढी शुभकर्म गर्ने, सबैभन्दा बढी बचनको ख्याल गर्ने र सबैभन्दा इमानी व्यक्ति हुनुहुन्थ्यो । यहाँसम्म कि उहाँको समुदायले उहाँको नाम अमीन अर्थात इमानदार राखेका थिए । किनभने उहाँ असल कर्म र प्रशंसनीय खुबीको मूर्तरूप हुनुहुन्थ्यो । खदिजाले साक्षी दिएकी छन् : "उहाँले असहायको भारी उठाउनुहुन्थ्यो । गरिबहरूको व्यवस्था गरिदिनु हुन्थ्यो । पाहुनाहरूको आदर सत्कार गर्नुहुन्थ्यो । हकको लागि कठिन घडीमा पनि सहयोग गर्नुहुन्थ्यो ।"[2]



१ सही बुखारी १/५४०
२ सही बुखारी १/३

# मक्की काल

## ईशदूतत्व तथा प्रचारप्रसार

ईशदूतत्वको पद ग्रहण गरेपछि ईशदूतको जीवनका दूई वटा कालखण्ड प्रष्ट देखिन्छन् । ती कालखण्डहरू एक अर्काभन्दा पूर्ण रूपमा भिन्न छन् ।

१) मक्की काल ............ लगभग तेह्र वर्ष
२) मदनी काल.............. पुरै दश वर्ष

ती दुवै कालमध्ये हरेकका कैयौं चरणहरू छन् । हरेक चरणका आआफ्ना विशेषताहरू छन् । जसकारण ती एक अर्काभन्दा विशिष्ट छन् । दुवै कालखण्डलाई केलाउने हो भने ती कालखण्डमा उहाँको आह्वान जुन परिस्थितिबाट गुज्रिएको थियो त्यो प्रष्ट देख्न सकिन्छ ।

**मक्की जीवनलाई तीन चरणमा विभाजित गर्न सकिन्छ ।**

१. गुपचुप एवं व्यक्तिगत रूपमा इस्लामको आह्वान गरिएको चरण, तीन वर्ष ।
२. मक्काबासीलाई खुलेआम इस्लामको आह्वान गरिएको चरण, ईशदूतत्वको चौथो वर्षदेखि मदिनाको हिजरतसम्म ।
३. मक्काबाहिर इस्लामको आह्वान गरिएको चरण, ईशदूतत्वको दशौं वर्षदेखि मदनी काल र ईशदूतको जीवनको अन्तिम अवस्थासम्म ।

मदनी जीवनका चरणहरूको विवरण आफ्नो ठाउँमा आउँने छ ।

# ईशदूतत्वको छायाँमा

## हेरा गुफामा

ईशदूतको उमेर चालीस वर्षको पुग्न लाग्दा त्यस दौरानको सोचविचारले समुदायबाट उहाँको मानसिक एवं चिन्तन दुरी धेरै बढाएको थियो । जसले गर्दा उहाँलाई एकान्तमा बस्न मन लाग्थ्यो । फलस्वरूप उहाँ सातु र पानी लिएर मक्काबाट दुई माइल टाढा हेरा नामक डाँडाको एउटा गुफामा गएर बस्नुभयो । त्यहाँ एउटा सानो गुफा छ जसको लम्बाई चार गज र चौडाई पौने दुई गज छ । त्यो तलतिर त्यति गहिरो छैन अपितु एउटा साँघुरो बाटोको छेउमा माथिको चट्टान परस्पर मिलेकाले कोल्टे जस्तो छ । उहाँले रमजानको पुरै महिना त्यहाँ विताउनु हुन्थ्यो । अल्लाहको उपासना गर्नु हुन्थ्यो । ब्रह्माण्डमा रहेका वस्तु र त्यसलाई चलाउने शक्ति बारे सोचविचार गर्नुहुन्थ्यो । उहाँलाई आफ्नो समुदायको बहुदेववादी आस्था र अन्धविश्वासमा आधारित कल्पनाहरूप्रति सन्तुष्टि थिएन । साथ साथै आफु आत्म सन्तुष्टिका साथ हिँड्ने उहाँको अगाडि कुनै सोझो मार्ग, निश्चित पथ वा पथभ्रष्टताबाट मुक्त हुने कुनै मार्ग पनि थिएन ।

मुहम्मद ﷺ को एकान्तवास पनि अल्लाहको मनसायको एउटा अंश थियो । किनभने ईशदूतलाई सांसारिक कामकाज, जीवनको रमझम र मानवीय सानातिना दुःखसुखबाट अलग भएर त्यो महान दायित्व जसको संसारलाई प्रतीक्षा थियो त्यसको एउटा केन्द्रबिन्दुमा केन्द्रित हुनु जरुरी थियो । महान नासोको बोझ उठाउन, जगतलाई परिवर्तन गर्न र इतिहासलाई मोडन तयार होउन् भनेर अल्लाहले ईशदूतत्वको दायित्व प्रदान गर्नुभन्दा पहिला उहाँको भाग्यमा तीन वर्ष एकान्तवास लेखिदिएका थिए । उहाँले एकान्तवासमा एक महिनासम्म ब्रह्माण्डको खुला वातावरणमा जीवनयात्रा जारी राख्नुभयो । साथै यस अस्तित्व पछाडि रहेका रहस्यको बारेमा चिन्तन मनन् गर्नुभयो ताकि अल्लाहको आदेश हुना साथ ती रहस्यहरूको सामना गर्ने पूर्वतयारी होस् ।[1]

---

१ बुखारी भाग ३, इब्ने हेशाम १/२३५, भनिन्छ हेरा गुफामा उपासना गर्ने पहिलो व्यक्ति अब्दुल मुत्तलिब हुन् । उनी रमजान महिना आउना साथ त्यहाँ जान्थे साथै पूरा महिना गरिबहरुलाई खाना खुवाउँथे ।

## जिब्रइल ईशवाणी लिएर अवतरण हुन्छन्

जब उहाँको उमेर चालीस वर्षको पुग्यो जसलाई परिपक्वताको उमेर र ईशदूत चयन गरिने उमेर भनिन्छ तब ईशदूतत्वको लक्षणहरू देखिन र जगमगाउन थाले । फलस्वरूप मक्कामा एउटा ढुंगाले उहाँलाई सलाम गऱ्यो । उहाँका सपनाहरू साकार हुन थाले । उहाँले जुन सपना देख्नु हुन्थ्यो त्यो उज्यालो विहानी झै साकार हुन्थ्यो । ६ महिना त्यसै अवस्थामा वित्यो । त्यो अवधि ईशदूतत्वको ४६ भागको एक भाग थियो । ईशदूतत्वको कुल अवधि २३ वर्ष थियो । त्यसपछि हेरामा एकान्तवासको तेस्रो वर्ष शुरु हुँदा अल्लाहले पवित्र धर्तीका वासीहरूमाथि आफ्नो कृपादृष्टि गर्नको लागि उहाँलाई ईशदूत चयन गरे । जिब्रइल कुरआनका केही श्लोक लिएर उहाँनिर अवतरण भए ।[1]

प्रमाणहरू र कुरआनको गहन अध्ययन गर्ने हो भने जिब्रइलको आगमनको मिति पहिल्याउन सकिन्छ । मेरो रिसर्च अनुसार त्यो घटना रमजान महिनाको २१ तारिख सोमवारको दिन राती घटेको थियो । तदनुसार ६१० ई. अगस्त महिनाको १० तारिख थियो । चन्द्रमाको हिसाबले उहाँको उमेर चालीस वर्ष ६ महिना, बाह्र दिन र सूर्यको हिसाबले ३९ वर्ष ३ महिना २२ दिनको थियो ।[2]

---

१ हाफिज इब्ने हजर अनुसार बैहकीले सपनाको अवधि ६ महिना बताएका छन् । तसर्थ सपनाको माध्यमबाट ईशदुतत्वको शुत्रपात चालीस वर्ष पुरा भएपछि रब्बिअल औवलको महिनामा भएको हो । त्यो महिना उहाँको जन्म भएको महिना पनि हो । तर ईशवाणी भने रमजान महिनामा अवतरण भएको थियो ।

२ ईशवाणी शुत्रपात भएको महिना, दिन र तारिख बारे इतिहासकारहरुमा ठूलो मतभेद छ । अधिकांश इतिहासकारहरुले रब्बिअल औवलको महिनामा भएको बताउँछन् । तर एकअर्को समूहले रमजानको महिनामा भएको बताउँछ । केहीले रजब महिनामा भएको बताउँछन् । (अब्दुल्लाहको मुख्तसर सिरतुर्रसुल) । मलाई दोस्रो भनाइ अर्थात रमजानको महिनामा भएको बढी सही लाग्छ । किनभने अल्लाहको भनाइ छ : त्यो रमजान कै महिना हो जसमा हामीले कुरआन अवतरण गऱ्यौं । (२:१८५) एकअर्को ठाउँमा अल्लाहले भनेका छन् : हामीले कुरआनलाई लैलतुल कद्रमा अवतरण गऱ्यौं । (९७:१) लैलतुल कद्र रमजानको महिनामा छ भन्ने कुरा विदितै छ । अल्लाहको अर्को भनाइमा पनि लैलतुल कद्रको बारे संकेत गरिएको छ । हामीले कुरआन एक प्रतिष्ठित रातिमा अवतरण गऱ्यौं, हामी मनुष्यहरुलाई प्रकोपको खतराबाट अवगत गराउनेवाला छौं । (४४ :३)
दोस्रो भनाइलाई सही मान्नुको एउटा कारण ईशदूत मुहम्मदﷺ हेरा गुफामा रमजान महिनामा नै बास बस्नुहुन्थ्यो । फरिश्ता जिब्रइल हेरामा अवतरण भएको कुरा विदितै छ ।
जुन इतिहासकारहरुले रमजानमा ईशवाणी अवतरण भएको मानेका छन् उनीहरुमा रमजानको कुन तारिख हो भन्ने बारे मतभेद छ । केहीले सात तारिख भनेका छन् भने केहीले सत्र र केहीले अठार तारिख भनेका छन् । मुख्तसर सिरतुर्रसूल पृष्ठ ७५, रहनतुल लिल् आलमीन ४९ । इब्ने इस्हाक र विद्वान खुजरीले सत्र तारिख थियो भन्ने कुरामा जोड दिएका छन् । तारिख खुजरी ६९/१, र तारिख अल तश्रीअल इस्लामी ५, ६, ७ ।
मैले २१ तारिखलाई मानेको छु । किनभने अधिकांश इतिहासकारहरु उहाँ सोमबार ईशदुत भएको कुरामा एकमत छन् । यसको पुष्टि अबु कतादामार्फत वर्णन गरिएको हदिसबाट पनि हुन्छ । उहाँसँग सोमबार व्रत बस्ने वा नबस्ने बारे सोध्दा उहाँले भन्नुभयो : त्यो त मेरो जन्मदिन हो ।

आउनुहोस् त्यस घटना बारे माई आइशाको मौखिक विवरण सुनौं जो ईशदूतत्वको आरम्भको केन्द्रविन्दु थियो, जसको माध्यमबाट पथभ्रष्टताको अँध्यारो भागेको थियो साथै जीवनशैली पनि परिवर्तन भएको थियो र इतिहासको दिशा पनि मोडिएको थियो । माई आइशा भन्छिन् : मुहम्मदﷺमाथि ईशवाणीको शुरुवात सत्य सपनाबाट भएको हो । उहाँले देखेका सपनाहरू उज्यालो विहानी झै प्रकट हुन्थे । त्यसपछि उहाँलाई एकान्तवास प्रिय भयो । तसर्थ हेरा नामी गुफामा एकान्तवास बस्नु हुन्थ्यो र घर नआई कैयौं रात उपासना गरी विताउनु हुन्थ्यो । साथमा उहाँले खाने कुरा लिएर जानु हुन्थ्यो । खाने कुरा सकिएपछि माई खदिजाकहाँ आएर त्यति नै दिनको लागि खाने कुरा लैजानु हुन्थ्यो । यसरी उहाँले सत्य पाउनुभयो । उहाँ हेरा गुफामा बसिरहँदा एउटा फरिश्ता आएर भन्यो, पढ । उहाँले म पढेलेखेको छैन भनी जवाफ दिनुभयो । फरिश्ताले दोस्रो पल्ट समातेर बेसरी दबायो । म थकित भएँ । त्यसपछि मलाई छोड्यो र भन्यो, पढ । उसले फेरि दोस्रो पटक दबाएर भन्यो, पढ । मैले भनें म पढेलेखेको छैन । उसले दोस्रो पटक पनि दबायो । छोडेर फेरि भन्यो, पढ । मैले भनें म पढेलेखेको छैन । उसले फेरि तेस्रो पटक दबाएर भन्यो : पढ आफ्नो प्रभूको नामबाट जसले सृष्टि गऱ्यो, उसले मानवलाई मासुको चौटाबाट सृष्टि गऱ्यो र तिम्रो पालनकर्ता अति दयावान छ ।

ती श्लोक लिएर मुहम्मदﷺ घर आउनुभयो । उहाँको मुटु ढुकढुक भइरहेको थियो । खदिजाकहाँ आएर मलाई बर्को ओढाइदेऊ, मलाई बर्को ओढाइदेऊ, भनेर भन्नुभयो । उनले उहाँलाई बर्को ओढाइदिइन् र उहाँको डर अलि मथ्थर हुँदैगयो ।

त्यसपछि उहाँले खदिजालाई घटनाको सम्पूर्ण विवरण बताउँदै भन्नुभयो : मलाई के भएको छ ? मलाई त ज्यानको खतरा लागेको छ । खदिजाले भनिन् : कदापि होइन । अल्लाहको कसम अल्लाहले तपाईंलाई अपमान गर्ने छैन । किनभने तपाईंले अरुमाथि दया गर्नुहुन्छ । गरिबहरूको बोझ हल्का गरिदिनुहुन्छ । भिखारीहरूको व्यवस्था गरिदिनुहुन्छ । पाहुनाको सत्कार गर्नुहुन्छ । कठिन अवस्थामा सत्यको सहयोग गर्नुहुन्छ ।

---

त्यो दिन मलाई ईशदूत चयन गरिएको थियो । अर्थात ममाथि ईशवाणी अवतरण गरिएको थियो । सही मुस्लिम १/३६८, मुस्नद अहमद ५/२९७, बैहकी ४/२८६, हाकिम २/२,६ । त्यो वर्ष रमजान महिनामा सोमबारको दिन ७, १४, २१ वा २८ तारिखमा परेको थियो । सही हदिस अनुसार लैलतुल कद्र रमजान महिनाको अन्तिम दश दिनको बिजोर रातमा पर्ने कुरा प्रमाणित हुन्छ । अब अल्लाहको भनाइ हामीले लैलतुल कद्रको रातमा अवतरण गऱ्यौं,अबु कतादाहमार्फत वर्णन गरिएको हदिस जसमा सोमबारको दिन उहाँलाई ईशदूत बनाइयो र त्यस वर्षको भित्तेपात्रलाई पनि हेर्ने हो भने सोमबार जुन तारिखमा परेको थियो त्यसबाट उहाँलाई रमजानको २१ तारिखको राती ईशदूत बनाइएको कुरा मिल्दछ । तसर्थ ईशवाणी अवतरण भएको पहिलो तारिख पनि त्यही हो ।

त्यसपछि खदिजाले उहाँलाई आफ्नो काकाको छोरा वरका बिन नौफलकहाँ लिएर गइन् । वरका अज्ञानी कालमा इसाई भएका थिए । इब्रानी भाषा लेखपढ गर्न जान्दथे । साथै इब्रानी भाषामा ईश्वरीय ग्रन्थ इन्जिल लेख्ने गर्थे । उनी त्यतिखेर धेरै बूढो भइसकेका थिए र आँखा पनि अन्धो भइसकेको थियो । खदिजाले भनिन् दाइ भतिजाको कुरा सुन्नु होस् । उनले भने भतिजो तिमीले के देख्यौ ? उहाँले जे देख्नुभएको थियो बयान गर्नुभयो । त्यो कुरा सुनेर उनले भने यो त त्यो संदेश हो जसलाई अल्लाहले मुसाकहाँ पठाएका थिए । कठै त्यति बेलासम्म म बलियो रहन पाए वा बाँच्न पाए जब उनको समुदायले उनलाई निकाल्ने छ । उहाँले भन्नुभयो के उनीहरूले मलाई निकाल्ने छन् ? वरकाले भने : अँ । तिमीले जुन संदेश लिएर आएका छौ त्यही संदेश लिएर आउनेहरूको आफ्नो समुदायसँग दुस्मनी भएको थियो । यदि म बाँचे भने सकेसम्म तिम्रो मदत गर्ने छु । त्यसपछि वरका केही दिन मै विते र ईशवाणी पनि रोकियो ।[१]

## ईशवाणी अवरतण स्थगित

ईशवाणी कति दिनसम्म स्थगित भयो त्यस बारेमा सअदको छोराले अब्बासमार्फत एउटा हदिस वर्णन गरेका छन् : त्यसको सार अनुसार केही दिनको लागि मात्र ईशवाणी रोक्का भएको थियो । सम्पूर्ण पक्षलाई औंल्याउने हो भने यै कुराको निष्कर्ष निस्कन्छ र सही कुरा पनि यही हो । साथै ईशवाणी तीन वर्ष वा अढाइ वर्षसम्म रोक्का भएको थियो भन्ने जुन प्रसिद्ध छ त्यो एकदमै गलत हो ।

हदिस तथा विज्ञहरूको भनाईलाई अध्ययन गर्दा अति अचम्मको निष्कर्षमा पुगेको छु । जसको बारेमा कुनै विज्ञले उल्लेख गरेको भेटाएको छैन । यसलाई यसरी प्रष्ट्याउन सकिन्छ । हदिस तथा विज्ञहरूको भनाई अनुसार उहाँ हेरा गुफामा हरेक वर्ष १ महिना बस्नु हुन्थ्यो । त्यो रमजानको महिना हुन्थ्यो । त्यो काम उहाँले ईशदूतत्वको तीन वर्ष पहिलादेखि नै शुरु गर्नु भएको थियो । उहाँले ईशदूतत्वको जिम्मेवारी पाएको वर्ष त्यो काम पनि सिद्धयो । रमजान महिनाको अन्तिममा उहाँ हेरा गुफाबाट निस्केर शौवाल महिनाको पहिलो तारिखको दिन घर जानु हुन्थ्यो ।

बुखारी र मुस्लिम नामक हदिसको किताबमा वर्णन गरिएको छ : ईशवाणी रोक्का भएपछि पुनःईशवाणी अवतरण शुरु हुँदा उहाँ हेरा गुफामा एक महिना बसेर घर फर्कदै हुनुहुन्थ्यो । रमाजनको महिनामा नै उहाँलाई ईशदूतत्वको दायित्व प्रदान गरी उहाँमाथि ईशवाणी अवतरण गरिएको थियो । त्यसको अघिल्लो महिना अर्थात शौवाल महिनाको पहिलो दिन ईशवाणी पुनःअवतरण भएको कुरा यसबाट प्रष्ट हुन्छ । किनभने हेरामा उहाँको त्यो बसाइ अन्तिम थियो । उहाँमाथि पहिलो ईशवाणी

१ सही बुखारी १/२,३ मुस्लिम हदिस नं २५२

रमजान महिनाको २१ तारिख सोमबारको दिन राती भएको थियो भने ईशवाणी कुल दश दिन मात्र रोक्का भएको थियो । दोस्रो पटक ईशवाणीको अवतरण शौवाल महिनाको एक तारिख बिहीवारको दिन भएको थियो । त्यसै कारणले होला रमजान महिनाको अन्तिम दश दिन इतेकाफ अर्थात एकान्तवासको लागि र शौवाल महिनाको पहिलो तारिखलाई ईदुल फितरको लागि विशेष गरियो ।

ईशवाणी स्थगित भएको अवधिमा उहाँ उदासिन तथा शोकग्रस्त हुनुभयो । उहाँलाई अचम्म लाग्न थाल्यो । बुखारी नामक हदिसको किताबमा उल्लेख छ :

ईशवाणी रोक्का भएपछि उहाँ अति नै उदास हुनुभयो जसले गर्दा उहाँ पटक पटक अग्लो पहाडको टुप्पोमा हाम फाल्न जानुभयो । तर पहाडबाट हाम फाल्न लाग्दा त्यहाँ फरिश्ता जिब्रइल निस्केर भन्थे ए मुहम्मदﷺ तपाईं अल्लाहको सत्य दूत हुनुहुन्छ । त्यसपछि उहाँको पीडा अलि हल्का हुन्थ्यो । आत्मसन्तुष्टि हुन्थ्यो त्यसपछि उहाँ फर्केर जानुहुन्थ्यो । त्यसैगरी ईशवाणी लामो समयसम्म रोक्का हुँदा उहाँ त्यस्तै काम गर्नु हुन्थ्यो । तर पहाडको टुप्पोमा पुग्दा दूत जिब्रइल झुल्किन्थे र त्यही कुरा दोहोऱ्याउँथे ।[1]

## जिब्रइल पुनःईशवाणी लिएर आउँछन्

हाफिज इब्ने हजर भन्छन् : उहाँभित्र जुन डर उत्पन्न भएको थियो त्यो मथ्थर होस् र फेरि ईशवाणी अवतरणको चाहना सृजना होस्[2] भन्ने हेतुले ईशवाणी केही दिन रोक्का गरिएको थियो । तसर्थ त्यो कुरा पूरा भयो र उहाँ पुनः ईशवाणीको प्रतीक्षामा बस्नुभयो अनि फेरि अल्लाहले ईशवाणी अवतरण गरे । उहाँको भनाई छ :

म हेरा गुफामा एक महिना एकान्तवासी भएँ । एक महिना पूरा भएपछि म त्यहाँबाट निस्कैं । बतन नामक घाटीमा पुग्दा मलाई बोलाइयो । मैले दाहिनेतर्फ हेरें केही देखिनँ देब्रेतिर हेरें केही देखिनँ अगाडि हेरें केही देखिनँ पछाडि हेरें केही देखिनँ । त्यसपछि आकाशतिर आँखा उठाएर हेर्दा त्यहाँ केही देखियो । त्यही फरिश्ता जुन हेरा गुफामा बस्दा आएको थियो त्यो आकाश र धर्तीबीच एउटा कुर्सीमा बसेको देखें । त्यो देखेर डराएर तल भूईंमा निहुरें । त्यसपछि म खदिजाकहाँ आएँ र भनें : मलाई बर्को ओढाइदेऊ, बर्को ओढाइदऊ, कम्बल ओढाइदेऊ । ममाथि चिसो पानी हालिदेऊ । उनले मलाई बर्को ओढाइदिइन् । ममाथि चिसो पानी हालिदिइन् । त्यसपछि अल्लाहले निम्न वाणी अवतरण गरे :

يا أَيُّهَا الْمُدَّثِّرُ (1) قُمْ فَأَنْذِرْ (2) وَرَبَّكَ فَكَبِّرْ (3) وَثِيَابَكَ فَطَهِّرْ (4) وَالرُّجْزَ فَاهْجُرْ (5)
(المدثر: 1-5 )

१ सही बुखारी २/१०३४
२ फतहुल बारी १/२७

हे बर्कोमा गुटुमुटु परेका ! उठ र सचेत गरिदेऊ, आफ्नो पालनकर्ताको बढाइँ जप, आफ्नो कपडा पवित्र राख र फोहोरी वस्तुलाई परित्याग गर ।
(अल् मुद्दस्सिर : १,२,३,४, ५)

यो वाणी नमाज अनिवार्य हुनुभन्दा पहिला अवतरण भएको थियो । त्यसपछि ईशवाणी निरन्तर रूपमा अवतरण हुन थाल्यो ।[1]

यो नै उहाँको ईशदूतीय जिम्मेवारीको प्रारम्भिक बिन्दु थियो । ईशदूतीय दायित्व उहाँ ईशदूत भएपछि ईशवाणी रोक्का भए जति नै ढिलो आएको थियो । त्यसमा उहाँलाई दुई वटा कुराको जिम्मेवारी दिइयो र त्यसको परिणाम पनि बताइयो ।

ईशदूतत्व बारे विवरण उल्लेख गर्नुभन्दा पहिला ईशवाणीको प्रकार बारे जान्नु उचित हुन्छ किनभने यो नै ईशदूतत्वको आधार हो । इब्ने कैयमले यहाँ ईशवाणीका केही प्रकार वर्णन गरेका छन् ।

**पहिलो किसिमः** प्रचारप्रसार र सचेत गर्नु जसलाई उठ र सचेत गरिदेऊ भन्ने आदेशको रूपमा दिइयो । अर्थात उठ र अल्लाहबाहेक कोही पनि पूजनीय छैन भनी मानिसहरूलाई सचेत गरिदेऊ । साथै मानिसहरू उसको अस्तित्व, विशेषता,काम र अधिकारमा अरूलाई साझी बनाएर जुन पथभ्रष्टतामा फँसेका छन् यदि त्यसलाई छोडेनन् भने उनीहरूमाथि अल्लाहको प्रकोप वर्षने छ ।

**दोस्रो किसिम :** दोस्रो दायित्व जुन उहाँलाई दिइएको थियो त्यो हो अल्लाहको आदेश आफुमाथि लागु गर्नु र सकेसम्म त्यसलाई अवलम्बन गर्ने प्रयास गर्नु ताकि उहाँले अल्लाहको प्रसन्नता प्राप्त गर्न सकुन् र दोस्रो तर्फ मुस्लिम हुनेहरूको लागि उत्तम उदाहरण बनुन् । यस आदेश बारे अन्य कुरआनी श्लोकमा उल्लेख छ । कुरआनी श्लोक व रब्बक फकब्बिरको अर्थ हुन्छ अल्लाहको महिमा अल्लाहको लागि विशिष्ट गर्नु । त्यसमा कसैलाई साझेदार नबनाउनु । कुरआनी श्लोक व सियाबक फतह्हीर अर्थात आफ्नो कपडा पवित्र राख । अर्थात कपडा तथा शरीर पवित्र गर्नु । किनभने अल्लाहको महिमा तथा प्रशंसा पवित्र नभई गर्न हुँदैन । जहाँ कपडा तथा शरीरको पवित्रता जरुरी छ त्यहाँ शिर्क तथा अनैतिकताको फोहोरबाट पवित्र हुनु अझ जरुरी छ । वरुज्ज फहजुर अर्थात अल्लाहको क्रोध तथा प्रकोपका कारकहरूबाट टाढा बस । अर्थात पूर्णरूपमा उसको आज्ञाकारी बन र अवज्ञा गर्नुबाट बच । यसैगरी व ला तम्नुन् तस्तक्सिर अर्थात गुण लगाएर त्यसको प्रतिगुण मानवबाट नखोज । जति गुण लगाएको छौ त्यसको बराबर वा त्यो भन्दा अधिक बदला यसै दुनियाँमा लिने आशा नराख । यिनै कुरआनी श्लोकको अन्तिममा आफ्ना समुदायको धर्मलाई त्याग्दा, उनीहरूलाई अल्लाहको तर्फ निमन्त्रणा दिँदा, अल्लाहको दण्डको भय

१ सही बुखारी किताब तफ्सिर

देखाउँदा समुदायबाट हुने प्रतिरोध तथा यातनाको सामना गर्नु पर्नेछ भन्ने कुराबाट सचेत गराइएको छ । तसर्थ भनिएको छ : व ले रब्बेक फस्बिर अर्थात आफ्नो पालनकर्ताको लागि धैर्य गर ।

यी कुरआनी श्लोकमा ईशदूत मुहम्मदﷺलाई उच्च दायित्वको लागि उठ्न र बर्को तथा ओछ्यानबाट निस्केर संघर्षको मैदानमा आउन आह्वान गरिएको छ । कुरआनी श्लोक छः हे बर्कोमा गुटुमुटु परेका उठ । अर्थात जसलाई आफ्नो लागि जीवन बाँच्नु छ उसलाई यहाँ सुख छ तर तपाईँमाथि त सारा मानवको दायित्व छ तसर्थ तपाईँलाई सुत्ने मौका कहाँ छ र ? सुखको तपाईँलाई के को वास्ता ? न्यानो ओछ्यानको तपाईँलाई के खाँचो ? सुखमय जीवनको तपाईँलाई के अर्थ ? विलासी वस्तुको तपाईँलाई के वास्ता ? त्यो महान कार्य गर्न उठनु होस् जसको प्रतीक्षामा तपाईं बस्नु भएको थियो । त्यो भारी बोक्न जुन तपाईँको लागि तयार छ । उठनुहोस् संघर्ष गर्नको लागि, परिश्रमको लागि । उठनुहोस् निद्राबाट अब आराम गर्ने बेला वितिसक्यो । आजदेखि निरन्तर जाग्नु छ । लामो समयसम्म संघर्ष तथा जिहाद छ । त्यस कामको लागि उठनुहोस् र तयार हुनुहोस् ।

त्यो महान आदेश थियो जसले ईशदूतलाई सुख तथा विलासीपन, राम्रो घर, न्यानो ओछ्यानबाट निकालेर तेज आँधीबेहरी तथा लडाइँको महासागरमा फ्याँकेको थियो । साथै मानव आत्मा र जीवनको सत्यतथ्य तनावको भूमरीमा फँसाएको थियो ।

त्यसपछि मुहम्मदﷺ तयार हुनुभयो र बीस वर्षसम्म निरन्तर त्यस कार्यमा लागिरहनुभयो । सुख र विलासीपनलाई त्याग्नुभयो । आफु र आफ्नो परिवारको निम्ति जीवन जीवन रहेन । उहाँ त्यस काममा निस्केपछि त्यसमा लागिरहनुभयो । उहाँको काम भनेको मानवलाई अल्लाहको निमन्त्रणा दिनु थियो । उहाँले ढाड भाँच्ने त्यस भारीलाई दुःख नमानी उठाउनुभयो । त्यो भारी यस संसारमा मानवको भारी थियो, यस धर्तीमा ठूलो नासोको भारी थियो, सम्पूर्ण आस्थाको भारी थियो साथै विभिन्न क्षेत्रमा जिहाद तथा संघर्षको भारी थियो । त्यसका लागि उहाँले तीस वर्षसम्म निरन्तर युद्धको मैदानमा जीवन बिताउनुभयो । अर्थात जबदेखि उहाँले आकाशीय वाणी पाउनु भएको थियो र त्यसको दायित्व ग्रहण गर्नु भएको थियो । उहाँको एउटा परिस्थितिले अर्को परिस्थितिमा कुनै बाधा अड्काउन सकेन । अल्लाहले उहाँलाई हामी सम्पूर्ण मानवको तर्फबाट राम्रो प्रतिफल प्रदान गरून् । अगाडिको पृष्ठमा ईशदूतको यसै लामो तथा कष्टकर संघर्षको संक्षिप्त चित्रण छ ।

## ईशवाणीका किसिमहरू

क्रमबद्ध विषयबाट अलिकति हटेर अर्थात ईशदूतत्व एवं सन्देशकार्यको पवित्र जीवनको विवरणहरू आरम्भ गर्नु भन्दा पहिला ईशवाणीको किसिम चर्चा गर्नेछु । किनभने यो नै ईशदूतत्वको मूलस्रोत र इस्लामी आह्वानको आधार हो । विद्वान इब्ने कैयमले ईशवाणीका निम्नलिखित श्रेणी चर्चा गरेका छन् :

१. साँचो सपना : यसैबाट ईशदूतमाथि ईशवाणीको आरम्भ भयो ।

२. दूतले उहाँको सामुन्ने नदेखिइकन उहाँको मनमा ईशवाणी अवतरण गरिदिन्थे । स्वयम उहाँले भन्नु भएको छ :

إن روح القدس نفث في روعى إنه لن تموت نفس حتى تستكمل رزقها فاتقوا الله واجملوا في الطلب ولا يحملنكم استبطاء الرزق على أن تطلبوه بمعصية الله فان ما عند الله لا ينال إلا بطاعته.

अनुवाद छ : फरिश्ता जिब्रइलले मेरो हृदयमा यो कुरो फुके, कोही आत्मा तबसम्म मर्दैन जबसम्म आफ्नो दाना पानी पूरा प्राप्त गर्दैन । तसर्थ अल्लाहसँग डराऊ र राम्रो तरिकाले कमाऊ । जीविकाको विलम्बले तिमीलाई त्यस कुरोप्रति प्रेरित नगरोस् जुन कुरामा अल्लाहको आज्ञाको अवज्ञा छ । किनभने अल्लाहकहाँ जे छ त्यो उसको आज्ञा विना प्राप्त गर्न सकिदैन ।

३. दूतले मानवरूप धारण गरी ईशदूतलाई सम्बोधन गर्थ्यो र उसले जे भन्थ्यो त्यो उहाँले कण्ठस्थ गरिहाल्नु हुन्थ्यो । त्यस अवस्थामा कहिले कहिले सहाबीहरूले पनि दूतलाई देख्ने गर्थे ।

४. उहाँमाथि ईशवाणी घण्टी टनटन बजे जस्तो भएर आउँथ्यो । ईशवाणी अवतरणको यो अवस्था सबैभन्दा कठिन हुन्थ्यो । त्यसमा दूतले उहाँसँग भेट गर्थ्यो र ईशवाणी अवतरण हुँदा अति जाडोको समयमा पनि उहाँको निधारबाट पसिना निस्कन्थ्यो र उहाँ ऊँटनीमाथि सवारी हुँदा त्यो भूँइमा बस्थ्यो । एक पटक ईशवाणी अवतरण हुँदा उहाँको तिघ्रा जैद बिन साबितको तिघ्रामाथि थियो । उनले आफ्नो तिघ्रा बेसरी कुल्चिए झैं महसुस गरे ।

५. उहाँले फरिश्तालाई उसको असली र जन्मजात रूपमा देख्नु हुन्थ्यो र त्यसै अवस्थामा फरिश्ताले अल्लाहको मनसाय अनुसार उहाँमाथि ईशवाणी गर्थ्यो । त्यो स्थिति उहाँमाथि दुई पटक आयो । त्यसको चर्चा अल्लाहले कुरआनको अध्याय अल नज्ममा गरेका छन् ।

६. नमाजसँग सम्बन्धित ईशवाणी अल्लाहले उहाँमाथि त्यति खेर अवतरण गरे जब उहाँ आकाशमा हुनु हुन्थ्यो ।

७. फरिश्ताको माध्यम बिना नै मुसाले झैं उहाँले अल्लाहसँग प्रत्यक्ष वार्तालाप गर्नुभयो । मुसामाथि अवतरण भएको यस किसिमको ईशवाणीको प्रमाण कुरआनमा

प्रष्ट उल्लेख छ । तर उहाँमाथि अवतरण भएको यस किसिमको प्रमाण कुरआनमा त छैन तर हदिसमा उल्लेख छ ।

केही विद्वानहरूले आठौं किसिम पनि थपेका छन् । अर्थात् अल्लाहले विनापर्दा आमुन्ने सामुन्ने वार्तालाप गरे । तर यस विषयमा पहिलाका विद्वानदेखि लिएर अहिलेका विद्वानसम्म मतभेद छ ।[१]



१ जादुल मआद १८

# पहिलो चरण
# अल्लाहतर्फ निमन्त्रणा

## गोप्य निमन्त्रणाका तीन वर्ष

कुरआनी अध्याय मुद्दस्सिरका श्लोकहरू अवतरण भएपछि ईशदूत मानवलाई ऐकेश्वरवादर्फ निमन्त्रणा दिन लाग्नुभयो । उहाँको समुदाय कठोर स्वभावको थियो । मूर्तिपूजा तथा चिहानपूजा उनीहरूको धर्म थियो । बाउबाजेको परम्परा नै उनीहरूको प्रमाण थियो । अहंकार तथा घमण्ड उनीहरूको बानी थियो । तरवार उनीहरूको समस्याको समाधान थियो । त्यस बाहेक उनीहरू अरब प्रायद्वीपमा धार्मिक अगुवा थिए । मुख्य केन्द्रमा उनीहरूको कब्जा थियो साथै त्यसका संरक्षक पनि थिए । त्यो परिस्थितिलाई मद्देनजर गरी आरम्भमा निमन्त्रणाकार्य तथा प्रचारप्रसारको काम गोप्य रूपमा गर्नु जरुरी थियो । किनभने मक्कावासीको अगाडि अचानक कुनै अप्रिय परिस्थिति सृजना नहोस् ।

## इस्लामका प्रथम सहयात्रीहरू

स्वभाविक रूपमा उहाँले सबैभन्दा पहिले ती मानिसहरूलाई इस्लाम प्रस्तुत गर्नुभयो जोसँग उहाँको गहिरो सम्बन्ध तथा मेल थियो । अर्थात् आफ्नो घरका सदस्यहरू र अन्य मित्रहरू । उहाँले सबैभन्दा पहिले उनीहरूलाई नै निमन्त्रणा दिनुभयो । यसरी उहाँले आरम्भमा चिनेजानेका मानिसहरूलाई जसको अनुहारमा शुभसंकेत देख्नु भएको थियो र उनीहरूले सत्य कुरा मन पराउने छन् भन्ने कुरा बुझ्नु भएको थियो उनीहरुलाई इस्लामको निमन्त्रणा दिनुभयो । साथै ती व्यक्तिहरू जसलाई उहाँको सत्यता एवं स्वच्छता बारे ज्ञान थियो उनीहरुलाई इस्लामको निमन्त्रणा दिनुभयो । जुन व्यक्तिहरूलाई उहाँले इस्लामको निमन्त्रणा दिनु भएको थियो उनीहरूमध्ये एउटा समूह जसलाई उहाँको प्रतिष्ठा,श्रेष्ठता र सत्यता बारे कहिल्यै शङ्का थिएन उनीहरूले उहाँको निमन्त्रणा स्वीकारे । ती व्यक्तिहरू इस्लामी इतिहासमा साबेकुनल औवलिनको उपाधिबाट प्रसिद्ध छन् । उनीहरूमध्ये क्रमशः उहाँकी श्रीमती उम्मुल मुमेनीन खदीजा बिन्त खुवैलिद, उहाँले मुक्त गरेको दासी जैद बिन हारिसा[१],उहाँको काकाको छोरा अली बिन अबी तालिब जो उहाँको छत्रछायाँमा

१ उनी युद्धमा बन्दी बनाइएका थिए । पछि गएर खदिजा उनको मालिक बनिन् र मुहम्मदﷺको हवाला गरिदिइन् । केही दिनपछि उनको बाबु र काका उनलाई आफ्नो घर लिएर जान आए तर उनले उहाँकै साथमा बस्न चाहे । त्यसपछि ईशदूतले उनलाई अरबको रीति अनुसार धर्मपुत्र बनाउनुभयो र उनलाई जैद बिन मुहम्मद अर्थात मुहम्मदको छोरा भनिन थालियो । पछि इस्लामले यस रीतिको अन्त्य गऱ्यो । उनी मुता नामक युद्धमा हिजरी सम्बत ८ साल जमादिउल उलाको महिनामा फौजको कमाण्डरको हैसियतले लडेर शहिद भए ।

हुर्केका थिए र उहाँका गुफा हेराका सत्य मित्र अबू बकर सिद्दीक हुन् । ती सबै जना पहिलो दिन नै मुसलमान भएका थिए । त्यस पश्चात अबू बकर इस्लामको प्रचार प्रसारमा क्रियाशील भए । उनी धेरै लोकप्रिय,नम्र,असल चरित्रका मालिक, नैतिकवान र मनकारी थिए । उनको दया, दूरदर्शीता, व्यापार र असल संगतका कारण उनकहाँ मानिसहरूको आवत जावत गर्ने क्रम चलिरहन्थ्यो । उनले आफुकहाँ आउने जानेहरूमध्ये विश्वासिलो व्यक्तिलाई इस्लामको निमन्त्रणा दिए । उनको प्रयासले उस्मान, जुबैर, अब्दुर्रहमान् बिन औफ, सअद बिन अबी वक्कास र तल्हा बिन उबैदुल्लाह मुसलमान भए । ती बुज्रुक व्यक्तिहरू इस्लामको प्रथम दस्ता थिए ।

उनीहरू पश्चात् अमीनुल उम्मतको[१] उपाधि पाएका अबु उबैदाह आमिर बिन जर्राह, अबू सलमा बिन अब्दुल असद, अर्कम बिन अबील अर्कम, उस्मान बिन मज्उन र उनका दुवै भाइ कदामा र अब्दुल्लाह, उबैदाह बिन हारिस बिन मुत्तलिब बिन मनाफ, सइद बिन जैद अदवी र उनकी श्रीमती अर्थात् उमरकी बहिनी फातिमा बिन्त खत्ताब र खब्बाब बिन अरत तमिमी, जाफर बिन अबु तालिब र उनकी श्रीमती आस्मा बिन्त उमैस, खालिद बिन सइद बिन आस र उनकी श्रीमती अमिना बिन्त खलफ र उनका भाइ अमर बिन सइद, हातिब बिन हारिस जम्ही, उनकी श्रीमती फातिमा बिन्त मुजल्लल् , उनका भाइ खत्ताब बिन हारिस र उनकी श्रीमती फकिहा बिन्त यसार , उनका एक जना भाइ मुअम्मर बिन हारिस, मुत्तलिब बिन अजहर जोहरी र उनकी श्रीमती रमला बिन्त अबु औफ, नुऐम बिन अब्दुल्लाह बिन नहाम अदवी मुसलमान भएका थिए । उनीहरू सबैको सम्बन्ध कुरैश कबिला र यसका विभिन्न खानदानबाट थियो ।

कुरैशभन्दा बाहिरका मानिसहरूमध्ये पहिला इस्लाममा प्रवेश गर्नेहरूमा अब्दुल्लाह बिन मस्उद हजली, मस्उद बिन रबिआ कारी, अब्दुल्लाह बिन जहश असदी र उनका भाइ अहमद बिन जहश, बिलाल बिन रबाह हब्शी, सुहैब बिन सेनान रुमी, अम्मार बिन यासिर अन्सी,उनका बुबा यासिर र आमा सुमैया र आमिर बिन फुहैराह थिए ।

माथि उल्लेख गरिएकी महिलाहरू बाहेक शुरुमा इस्लाम लिने महिलामध्ये उम्मे ऐमन बरकता हब्शीया, अब्बासकी श्रीमती लुबाबह कुब्रा र अबु बकरकी छोरी आस्मा थिए ।[२]

उनीहरू सबै साबेकुनल औवलीनको उपाधिबाट प्रसिद्ध छन् । अनुसंधानको आधारमा जुन व्यक्तिहरुले साबेकुनल औवलीनको उपाधि पाएका छन् उनीहरूको

---

१ सही बुखारी १/५३०
२ इब्ने हेशाम १/२४५

संख्या पुरुष तथा महिला गरी एक सय तीससम्म पुगेको भेटिन्छ । तर उनीहरू सबै गोप्य रूपमा इस्लामको प्रचारप्रसार हुँदा इस्लाममा प्रवेश गरेका थिए वा त्यसभन्दा पछि इस्लाम स्वीकारेका थिए यस बारे यकिनका साथ जानकारी हुन सकेन ।

इब्ने इस्हाकको बयान छ, त्यस पश्चात् पुरुष र महिलाहरू इस्लाममा समूहका समूह प्रवेश भए । यतिसम्म कि मक्कामा पनि इस्लामको नाम फैलियो र मानिसहरूमा त्यस बारे चर्चा भयो ।[१]

उपरोक्त मानिसहरू लुकीछिपी मुसलमान भएका थिए । ईशदूत पनि उनीहरूलाई गाईड गर्न र धार्मिक ज्ञान दिन उनीहरूकहाँ लुकीछिपी आउनु हुन्थ्यो । किनभने प्रचारप्रसारको काम अहिलेसम्म भित्रभित्रै व्यक्तिगत रूपमा चलिरहेको थियो । अर्को तर्फ कुरआनी अध्याय मुद्दस्सिरका केही प्रारम्भिक श्लोक अवतरण भएपछि ईशवाणी निरन्तर एवं तीव्र गतिमा अवतरण हुन थाल्यो । त्यस अवधिमा छोटाछोटा श्लोकहरू अवतरण भएका थिए । ती श्लोकहरू समानान्तर र अति गहकिला शब्दमा टुंगिन्थ्यो । तिनमा शान्तिभाव तथा मनै छुने लयात्मक शैली हुन्थ्यो साथै शान्ति र हृदयस्पर्शीलाई समेट्ने भाव हुन्थ्यो । साथै ती श्लोकहरूमा मानसिक शुद्धिकरणको लाभ र दुनियाँको विकारमा लतपत हुँदाको नोक्सानी बारे व्याख्या हुन्थ्यो । त्यसमा स्वर्ग र नर्कको चित्रण यसरी गरिएको छ मानौं ती आँखाको सामुन्ने छ । कुरआनका ती श्लोहरूले आस्थावानहरूलाई त्यस बेलाको समाजभन्दा एकदमै पृथक एउटा अर्कै वातावरणको अनुभूति गराएको थियो ।

## नमाज

शुरुमा जुन आदेशहरू अवतरण भएका थिए त्यसमा नमाज पनि थियो । इब्ने हजर भन्छन् : ईशदूत र उहाँका साथीहरूले मेराजमा जानुभन्दा पहिला नियमित नमाज पढ्थे । तर पाँच वखतको नमाजभन्दा पहिला कुनै नमाज फर्ज थियो वा थिएन त्यसमा मतभेद छ । केहीको भनाई अनुसार सूर्य उदाउनु र अस्ताउनु अघि एक एक नमाज फर्ज थियो ।

हारिस बिन उसामाहले जैद बिन हारिसामार्फत एउटा हदिस वर्णन गरेका छन् जसमा ईशदूतमाथि ईशवाणी अवतरण हुँदा उहाँनिर फरिश्ता जिब्रइल आएका थिए र उनले उहाँलाई वजु गर्ने तरिका पनि सिकाएका थिए भन्ने कुरा उल्लेख छ । वजु गरेपछि एक मुठ्ठी पानी गुप्तांगमा छिट्नु भएको थियो । त्यसै विषय सम्बन्धी हदिस इब्ने माजाले पनि उल्लेख गरेका छन् । बराअ बिन आजिब र इब्ने अब्बासमार्फत पनि यसै प्रकारको हदिस वर्णन गरिएको छ । इब्ने अब्बासमार्फत

१ इब्ने हेशाम १/२६२

वर्णन गरिएको हदिसमा नमाज अनिवार्य उपासनामध्ये पहिलो थियो भन्ने कुरा उल्लेख छ ।[१]

इब्ने हिशामको बयान छ, ईशदूत र उहाँका साथीहरू नमाजको समयमा नमाज पढ्न घाटीमा जानु हुन्थ्यो र लुकेर नमाज पढ्नु हुन्थ्यो । एक पटक अबू तालिबले ईशदूत र अलीलाई नमाज पढ्दै गरेको देखे । उनले सोधे र वास्तविकता थाहा भएपछि उनले उनीहरूलाई त्यसमा कायम रहन भने ।

यसै उपासनाको इमान वालाहरुलाई आदेश दिइएको थियो । त्यतिखेर नमाजबाहेक अरु कुनै कुराको आदेश भएको कुरा भेटिदैन । तर ईशवाणीद्वारा एकेश्वरवाद सम्बन्धी विभिन्न कुराहरु वर्णन गरिन्थ्यो । आत्मशुद्धीकरणतर्फ प्रेरित गरिन्थ्यो । स्वच्छ चरित्रतर्फ प्रोत्साहित गरिन्थ्यो । स्वर्ग र नर्कको यस्तो चित्रण गरिन्थ्यो मानौं ती आँखा अगाडि छन् । भावपूर्ण उपदेश दिइन्थ्यो जसबाट मन नै पग्लन्थ्यो । आत्माजागृत हुन्थ्यो । कुरआनका ती श्लोहरूले आस्थावानहरूलाई त्यस बेलाको समाजभन्दा एकदमै पृथक एउटा अर्कै वातावरणको अनुभूति गराएको थियो ।

यसरी तीन वर्ष बित्यो । प्रचारप्रसारको काम केवल व्यक्तिसम्म सिमित रह्यो । सभा तथा मञ्चमा त्यसको घोषणा गरिदैन थियो । तर कुरैशमाफ प्रचार प्रसारको कार्य निकै फैलिएको थियो । मक्कामा पनि इस्लामको चर्चा हुन थाल्यो । मानिसहरूमा पनि त्यस बारे चर्चा हुन थाल्यो । केहीले कहिलेकाहीँ विरोध पनि गर्थे । केही इमान वालाहरूलाई कष्ट पनि काट्नु पऱ्यो । सारमा भन्ने हो भने त्यस प्रचारप्रसारको कार्यलाई महत्वका दृष्टिले हेरिएन । किनभने ईशदूतले पनि उनीहरूको धर्मको विरोध गर्नु भएको थिएन । उनीहरूको देवीदेवताको बारेमा मुख खोल्नु भएको थिएन ।

१ अब्दुल्लाहको मुख्तसर सिरतुर्रसुल ८८

# दोश्रो चरण
# खुलेआम प्रचारप्रसार

## प्रचारप्रसार खुलेआम गर्न पहिलो आदेश

जब मोमिनहरूको जमात भाइबन्दुत्वको आधारमा बलियो हुँदै गयो र अल्लाहको संदेश पुऱ्याउने त्यसको जिम्मेवारी बहन गर्न सक्ने भयो अनि अल्लाहको वाणी अवतरण भयो जसमा ईशदूतलाई आफ्नो समुदायमाझ खुलेआम इस्लामको प्रचारप्रसार गर्ने र उनीहरूको असत्य विरुद्ध राम्रो तरिकाले सामना गर्ने जिम्मेवारी दिइयो ।

यस सम्बन्धमा सबैभन्दा पहिले अल्लाहको निम्न भनाई अवतरण भयो जसको अनूवाद छ : "तपाईं आफ्ना घनिष्ट सम्बन्ध भएका मानिसहरूलाई सचेत गरिदिनु (२६:२१४) " । यो शुरा नामक अध्यायको श्लोक हो र त्यस अध्यायमा सबैभन्दा पहिले मूसाعليه السلامको घटना बयान गरी कुन प्रकारले मूसाعليه السلامको ईशदूतत्वको आरम्भ भयो, फेरि अन्त्यमा उनले बनी इसराइल समेत देशत्याग अर्थात हिजरत गरेर फिराउन र फिराउनका अनुयायीबाट मुक्ति पाए साथै फिराउन र उसको अनुयायीलाई कसरी डुबाइयो भन्ने कुराको चर्चा छ । अर्को शब्दमा भन्नु पर्दा त्यसमा ती सम्पूर्ण श्रृङखलाहरूको वर्णन छ जुन मूसाعليه السلامले फिराउन र उसको अनुयायीहरूलाई अल्लाहको धर्मतर्फ निमन्त्रणा दिँदा घटित भएका थिए ।

मेरो विचारमा ईशदूतलाई आफ्नो समुदायमा खुलेर इस्लामको प्रचार प्रसार गर्ने आदेश दिए पश्चात त्यस अवसरमा मूसाعليه السلامको घटनाको विवरण बयान गर्नुको अर्थ खुल्लम खुल्ला निमन्त्रणा दिँदा जुन प्रकारको विरोध र अत्याचार हुन सक्थ्यो त्यसको एउटा नमूना उहाँ र उहाँका साथीहरूको सामु विदित रहोस् भन्ने थियो ।

अर्कोतिर त्यस अध्यायमा ईशदूतहरूमाथि मिथ्यारोपण गर्ने समुदाय जस्तै फिराउन र उसको अनुयायी लगायत नुहعليه السلامका समुदाय, आद, समूद, इब्राहीमका समुदाय लुतعليه السلامका समुदाय र ऐका नामक वासीहरूले भोग्नु परेको दुष्परिणामको पनि चर्चा छ । यसको उद्देश्य जुन मानिसहरूले उहाँलाई झूटा ठानेका थिए तिनलाई आफुले गरेको हठको  परिणाम के हुनेवाला छ र अल्लाहको तर्फबाट कुन प्रकारको दण्ड हुनेछ भन्ने कुरा बुझुन् भन्ने थियो । साथै आस्थावानहरूलाई पनि राम्रो प्रतिफल आफुले पाउने छन् र मिथ्यारोपण गर्नेहरूले पाउने छैनन् भन्ने कुराको ज्ञान होस् ।

## नातेदारहरूलाई इस्लामको निमन्त्रणा

जे होस् यस श्लोकको अवतरण पश्चात् ईशदूतले सर्वप्रथम हाशिमका सन्तानहरूलाई जम्मा गर्नुभयो । उनीहरूको साथमा बनु मुत्तलिब बिन अब्द

मनाफको पनि एउटा जमात थियो। कुल पैँतालीस जना थिए तर अबू लहबले कुरो टिपी हाल्यो र भन्यो : हेर, यी तिम्रो काका र काकापट्टीका दाजु भाइहरू हुन्। कुरा गर। तर मूर्खता छाडिदेऊ र तिम्रो खानदानले सम्पूर्ण अरबको सामना गर्न सक्दैन भन्ने कुरा बुझ। तिमीलाई पक्रने सबैभन्दा बढी हकदार म छु। तसर्थ तिम्रो लागि तिम्रो बुबाको परिवार नै प्रयाप्त छ र यदि तिमी आफ्नो कुरोमा कायम रह्यौ भने कुरैशका सम्पूर्ण कबिलाहरू तिमीमाथि सजिलै खनिने छन् बाँकी अरबले पनि तिनको सहयोग गर्ने छ। यस अवस्थामा तिमीभन्दा बढी अरू कुनै व्यक्ति आफ्नो बुवाको परिवारको लागि नराम्रो साबित होला भन्ने मलाई लाग्दैन। त्यो कुरा सुनेर ईशदूत चुप हुनुभयो र त्यहाँ कुनै कुरा गर्नु भएन।

त्यसपछि पनि उहाँले उनीहरूलाई पुन:भेला गरी भन्नुभयो : सम्पूर्ण प्रसंशा अल्लाहका लागि छन्। म उसको प्रशंसा गर्दछु र उसैसँग सहयोग माग्दछु। उसैमाथि आस्था राख्दछु। उसैमाथि भरोसा गर्दछु र ऊ बाहेक कोही पूजाको लायक छैन भनी साक्षी दिन्छु। ऊ एक्लै छ। उसको कोही साझेदार छैन। अगाडि उहाँले भन्नुभयो : घरको अभिभावकले आफ्नो घरका सदस्यहरूरुसँग झूटो बोल्न सक्दैन। त्यो ईश्वरको कसम जस बाहेक कोही पूज्य छैन। विशेष गरी तिमीहरूको लागि र सामान्यतया सम्पूर्ण मानवको लागि म सन्देशवाहक हुँ। ईश्वरको कसम तिमीहरू सुते झै एक दिन तिमीहरूलाई मर्नु पर्नेछ। त्यसैगरी सुतेर उठे झै तिमीहरूलाई उठाइने छ। त्यसपछि तिमीहरूले गरेको कर्मको तिमीहरूसँग हिसाब लिइने छ। त्यस पश्चात् या त सधैंको लागि स्वर्ग छ या सधैँको लागि नर्क।

त्यसमा अबू तालिबले भने : हामीलाई तिम्रो संगत अति मन परेको छ। तिम्रो उपदेश अति स्वीकार्य छ र तिम्रो कुरा अति सत्य मान्दछौँ। यो तिम्रो बुबाको सन्तान हो जो यहाँ भेला भएको छ। म पनि यिनीहरूमध्ये एउटा व्यक्ति हुँ। फरक यति छ कि म तिम्रो चाहना पूरा गर्न तत्पर रहन्छु। तसर्थ तिमीलाई जुन कुराको आदेश भएको छ त्यसलाई सम्पन्न गर। मैले निरन्तर तिम्रो सुरक्षा एवं सहयोग गर्ने छु तर मेरो मन अब्दुल मुत्तलिबको धर्म त्याग्न राजी छैन।

अबू लहबले भन्यो : ईश्वरको कसम यो त ईश्वरप्रति दोष हो। त्यसको हात अरुले भन्दा पहिला तिमीहरूले नै पक्रओ। त्यसमा अबू तालिबले भने : ईश्वरको कसम जबसम्म ज्युमा प्राण रहन्छ तबसम्म हामी यिनको रक्षा गरिरहने छौँ।

## सफा पहाडमा

अल्लाहको मार्गको प्रचारप्रसार गर्दा अबु तालिबले सहयोग गर्ने छन् भन्ने कुरामा ईशदूत ढुक्क भएपछि एक दिन सफा पहाडतिर जानुभयो र सबैभन्दा अग्लो ढुंगोमाथि चढेर उहाँले आवाज दिनुभयो : विहानीको दसा, विहानीको दसा। अरबको

परम्परा अनुसार कुनै अप्रिय घटना घटन लाग्दा त्यसबाट सचेत गर्नको लागि कुनै अग्लो ठाउँमा चढेर यस्तो पुकार पुकारिन्थ्यो ।

त्यसपछि एक एक कबिलाको नाम लिएर पुकार्नुभयो । हे बनी फहर, हे बनी अदी, हे फलानो, हे बनु फलानो, हे बनु अब्द मनाफ, हे बनु अब्दुल मुत्तलिब ।

मानिसहरूले त्यो आवाज सुनेर कसले बोलाउँदै छ भनेर सोध्दा मुहम्मदﷺले भन्ने जवाफ आयो । त्यो कुरा सुनेर मानिसहरू तुरुन्तै भेला भए । आउन नसक्नेहरूले आफ्नो मान्छे पठाए । यसरी कुरैशका मान्छेहरू भेला भए, जसमा अबु लहब पनि थियो ।

सबै जना भेला भएपछि उहाँले भन्नुभयो : यदि मैले त्यो पहाडको पल्लो फेदीको घाटीमा फौजको एउटा समूह छ जसले तिमीहरूमाथि छापा मार्न खोजिरहेको छ भनेर भनेँ भने तिमीहरूले मेरो कुरालाई स्वीकार्छौ ?

जवाफ आयो : अवश्य, किनभने हामीले तपाईंलाई कहिल्यै झुट बोलेको देखेका छैनौं । हामीले तपाईंलाई सत्य नै पाएका छौं । उहाँले भन्नुभयो : ठीक छ ! म तिमीहरूको माझमा तिमीहरूलाई एउटा कष्टकर प्रकोपबाट सचेत गर्नका लागि पठाइएको हुँ । मेरो र तिमीहरूको उदाहरण त्यस्तै छ जस्तै कुनै व्यक्तिले दुस्मुनलाई देख्यो त्यसपछि उसले अग्लो ठाउँमा गएर आफ्नो खानदानलाई हेऱ्यो उसलाई दुस्मुन उभन्दा पहिला नै त्यहाँ पुग्छ भन्ने खतरा भयो र उसले आवाज दियो विहानीको दसा, विहानीको दसा ।

त्यसपछि उहाँले मानिसहरूलाई सत्य कुराको निमन्त्रणा दिनुभयो र अल्लाहको प्रकोपबाट सचेत गर्नुभयो । विशेष तथा सर्वसाधारण सबैलाई सम्बोधन गर्दै उहाँले भन्नुभयो :

हे मानव आफुलाई अल्लाहसँग खरिद गर । आफुलाई नर्कबाट बचाऊ, मैले तिमीहरूलाई न लाभ पुऱ्यान सक्छु न नोक्सान । न मैले तिमीहरूलाई अल्लाहबाट बचाउन सक्छु । हे बनु कअब आफुलाई नर्कको आगोबाट बचाऊ किनभने मलाई तिम्रो लागि केही गर्ने कुनै अधिकार छैन । हे बनु अब्द मनाफ आफुलाई नर्कको आगोबाट बचाऊ किनभने तिमीहरूलाई नाफानोक्सान दिने मेरो अधिकारको कुरो होइन । न तिमीलाई अल्लाहबाट बचाउन मैले केही गर्न सक्छु । हे बनु अब्दु शम्स आफुलाई नर्कको आगोबाट बचाऊ, हे बनु हाशिम आफुलाई नर्कको आगोबाट बचाऊ, हे बनु अब्दुल मुत्तलिब तिमीहरूलाई नाफा नोक्सान दिने मेरो अधिकारको कुरा होइन । तिमीहरूलाई अल्लाहबाट बचाउन मैले केही गर्न सक्दैन । मेरो सम्पत्तिबाट जे चाहिएको छ त्यो माग तर अल्लाहबाट भने मैले बचाउन सक्दैन । हे अब्बास बिन मुत्तलिब तिम्रो लागि पनि मैले अल्लाहबाट बचाउन केही गर्न सक्दिनँ । हे ईशदूतकी फुपु सफिया बिन्त अब्दुल मुत्तलिब तिमीलाई पनि मैले अल्लाहबाट

बचाउन सक्दिनँ । हे ईशदूतकी छोरी फातिमा मेरो सम्पत्तिबाट जे चाहिएको छ त्यो माग तर आफुलाई नर्कको आगोबाट बचाऊ । किनभने तिम्रो लागि पनि मैले केही गर्न सक्दिनँ । न अल्लाहबाट तिमीलाई बचाउन मैले कुनै काम गर्न सक्छु ।

उहाँको चेतनामूलक प्रवचन सकिएपछि मानिसहरू यताउता लागे । उनीहरूले कुनै ठोस प्रतिक्रिया दिएको कुनै प्रमाण भेटिएको छैन । तर अबु लहबले भने अपमान गर्दै भनेको थियो : तिम्रो सारा दिन नाश होस् । तिमीले हामीलाई यसैका लागि भेला गरेका हौ ? उसको प्रतिक्रियामा कुरआनको अध्याय लहबको श्लोक अवतरण भयो अनूवाद छ : अबू लहबको दुवै हात भाँचियोस् र ऊ स्वयमको नास होस् ।[१]

मरुभूमिमा इस्लाम प्रचारप्रसारको त्यै उद्देश्य थियो । ईशदूतले आफ्नो अति नजिकका नातेदारहरू सामु अब ईशदूतत्वलाई स्वीकारे मात्र नाता स्थापित रहने कुरा प्रष्ट पार्नुभयो । जुन वंशीय तथा जातीय पक्षपातमा अरबीहरू टिकेका छन् ती सबै कुरा ईश्वरीय चेतावनीका कारण समाप्त भइसकेका छन् ।

त्यो आवाजको गुन्जन मक्का वरिपरि गुन्जन नपाउँदै अल्लाहको एकअर्को आदेश अवतरण भयो  अनूवाद छ : जुन कुराको आदेश दिइएको छ त्यसलाई प्रष्ट रूपमा बताइदिनुस् र बहुदेववादीहरूबाट अलग हुनुस् । (१५:९४)

त्यसपछि ईशदूतले बहुदेववादीहरूको सभामा गएर इस्लामको प्रचारप्रसार गर्न थाल्नुभयो । उनीहरू माझमा अल्लाहको किताब कुरआनको पाठ गर्नुहुन्थ्यो । उनीहरूसँग त्यही कुरा भन्नुहुन्थ्यो जुन कुरा पहिलाका ईशदूतहरूले आफ्नो समुदायलाई भनेका थिए । अर्थात : हे मेरो समुदाय , अल्लाहको पूजा गर ऊ बाहेक कोही पूज्य छैन । साथसाथै उहाँले उनीहरूको सामुन्ने दिन दहाडै अल्लाहको पूजा गर्न थाल्नुभयो ।

उहाँको आह्वान झन स्वीकार्य हुँदै गयो । मानिसहरू अल्लाहको मार्गमा प्रवेश हुन थाले । इस्लाम स्वीकार्ने व्यक्ति र उसको घर परिवारबीच वादविवाद एवं फाटा पर्न थाल्यो । कुरैशहरू यस अवस्था देखेर दिक्क हुन थाले । उनीहरूको अगाडि जे भइरहेको थियो त्यसबाट उनीहरू विचल्लित हुँदै थिए ।

## हाजीहरूलाई रोक्न षड्यन्त्रकारीहरुको बैठक

तिनै दिनहरूमा कुरैशको सामू एउटा अर्को दुःखद घडी आयो । अर्थात खुल्लम खुल्ला इस्लामको प्रचारप्रसार भएको केही महिना नबित्दै हजको मौसम आयो । कुरैशलाई अरबका हज गर्ने टोलीहरूको आगमन हुने कुरा थाहा थियो । तसर्थ उनीहरूले मुहम्मदﷺको कुराले अरबवासीको मनमा प्रभाव नपारोस् भनेर कुनै

१ सही बुखारी १/२७५३ , सही मुस्लिम १/११४, फतहुल बारी ५/४४९

निष्कर्ष निकाल्न जरुरी ठाने । त्यस बारे कुराकानी गर्नको लागि वलिद बिन मुगिरहकहाँ भेला भए । वलिदले भन्यो : त्यस बारेमा तिमीहरू सबैको एकमत हुनु जरुरी छ र तिमीहरूमध्ये एकले अर्कोलाई झुटो ठहर गर्ने र एकले अर्कोको कुरा काट गर्ने गरी तिमीहरूमा विवाद हुनु हुँदैन । मानिसहरूले भने: तपाईले नै भन्नोस् । उसले भन्यो : होइन तिमीहरूले भन, म सुन्छु । केहीले भने : हामीले भन्छौं, ऊ ज्योतिषी हो । वलिदले भन्यो : होइन .हामीले ज्योतिषीलाई देखेका छौँ । त्यस व्यक्ति भित्र न ज्योतिषीहरू जस्तो गीतीय शैली छ न लयात्मक शैली ।

उसको कुरा सुनेर मानिसहरूले भने, उसलाई पागल भनौं । वलिदले भन्यो : हुँदैन , ऊ पागल पनि छैन, किनभने हामीले पागललाई पनि देखेका छौं र त्यसको क्रियाकलाप पनि । त्यो व्यक्तिमा पागल जस्तो न साँस फुल्ने गर्छ न उसले उल्टोपुल्टो गतिविधि गर्छ । न पागलले झैं कुरा गर्छ ।

मानिसहरूले भने : त्यसो भए हामी उसलाई गाइने भनौं । वलिदले भन्यो : ऊ गाइने पनि होइन । किनभने हामीलाई गीतका हरेक किसिम थाहा छ । उसको कुरा शायरी पनि होइन ।

मानिसहरूले भने : त्यसो भए हामी उसलाई जादुगर भनौं । वलिदले भन्यो : त्यो व्यक्ति जादूगर पनि होइन । हामीले जादुगर र तिनको जादु पनि देखेका छौँ । त्यो व्यक्तिले न त जादुगरले झैँ झारफुक गर्छ न गाँठो फुकाउँछ ।

मानिसहरूले भने : त्यसो भए हामीले उसलाई के भनौं त ? वलिदले भन्यो : अल्लाहको कसम उसको कुरा अति मधुर छ । उसको कुरा तार्किक एवं प्रभावकारी छ । तिमीहरूले उसको बारेमा जे कुरा भन्न खोजेका छौ त्यसलाई मानिसहरूले झुट ठान्ने छन् । त्यसकारण उसको बारेमा सबैभन्दा उचित कुरा हामीले उसलाई जादुगर भनौं । उसले प्रस्तुत गरेको कुरा जादु हो । त्यसबाट बाउछोरा, दाजुभाइ, श्रीमानश्रीमती, वंश कबिलामा फुट पर्न सक्छ । आखिरकार मानिसहरू त्यसै कुरामा सहमत भएर त्यहाँबाट छुट्टिए ।[1]

केही हदिस अनुसार वलिदले मानिसहरूका सम्पूर्ण विचार रद्द गरेपछि मानिसहरूले उसलाई आफ्नो स्वच्छ सल्लाह प्रस्तुत गर्न भने । त्यसमा वलिदले भन्यो : मलाई एकछिन सोच्न देऊ । त्यसपछि उसले सोचिराख्यो, सोच्दा सोच्दा अन्तिममा आफ्नो उपरोक्त विचार प्रस्तुत गर्‍यो ।[2]

---

१ इब्ने हेशाम १/२७१
२ हाकिम २/३६१

त्यस सम्बन्धी वलिदको बारेमा कुरआनको अध्याय मुद्दस्सिरको ११ देखि २६सम्म १६ श्लोक अवतरण भयो । ती श्लोकमध्ये केहीमा उसको सोचलाई यसरी चित्रण गरिएको छ :

إِنَّهُ فَكَّرَ وَقَدَّرَ (18) فَقُتِلَ كَيْفَ قَدَّرَ (19) ثُمَّ قُتِلَ كَيْفَ قَدَّرَ (20) ثُمَّ نَظَرَ (21) ثُمَّ عَبَسَ وَبَسَرَ (22) ثُمَّ أَدْبَرَ وَاسْتَكْبَرَ (23) فَقَالَ إِنْ هَذَا إِلَّا سِحْرٌ يُؤْثَرُ (24) إِنْ هَذَا إِلَّا قَوْلُ الْبَشَرِ (25) (المدثر)

उसले सोच्यो र अड्कल गऱ्यो । उसको नास होस् उसले कस्तो अड्कल गरेको हो ? उसको नास होस् उसले कस्तो अडकल गरेको हो ? उसले फेरि हेऱ्यो । अनि निधार खुम्च्यायो र मुख बिगाऱ्यो । फेरि पिठ्युँ फर्काएर हिँड्यो र घमण्ड गऱ्यो । उसले भन्यो यो त केवल जादु हो जुन पहिलेदेखि नै नक्कल हुँदै आएको छ । यो त केवल मानवको कुरा हो (अल् मुद्दस्सिर : १८–२५)

जे होस् त्यो करार पारित भइसकेकाले त्यसलाई कार्यान्वयन गर्न मक्काका काफिरहरू हज गर्न आउने टोलीहरूको बाटोमा गएर बस्न थाले । त्यहाँबाट हिँडने हरेक व्यक्तिलाई उहाँको खतराबाट सचेत गर्दै उहाँको बारेमा नकारात्मक कुराहरू भन्न थाले ।[१]

उहाँ हजको मौसममा मानिसहरूको डेरामा र ओकाज, मुजिन्नह तथा जुल मजाज नामक बजारतिर जानु हुन्थ्यो र धर्मको प्रचार प्रसार गर्नु हुन्थ्यो । उता अबू लहबले उहाँको पिछा गरिरहेको हुन्थ्यो र मानिसहरूलाई उहाँको बारेमा ऊ झुटो तथा अधर्मी हो उसको कुरा नमान्नु भनेर भन्ने गर्थ्यो ।[२]

उनीहरूको त्यस दौडधुपले गर्दा मानिसहरू हजबाट घर फर्केपछि उनीहरूलाई उहाँको ईशदूतत्व बारे जानकारी भयो । यसरी पूरा अरबमा उहाँको चर्चा चल्यो ।

## विरोधका विभिन्न शैलीहरू

कुरैशले मुहम्मद ﷺ लाई धर्म प्रचारबाट रोक्न आफ्नो जुक्ति प्रभावकारी नभएको महसुस गरेपछि उनीहरूले फेरि सोचविचार गरी उहाँको धर्म प्रचार प्रसारको काममा अवरोध खडा गर्न विभिन्न जुक्तिहरु अपनाए । त्यसको संक्षिप्त विवरण निम्नलिखित छ ।

१ इब्ने हेशाम १/२७१
२ मुस्नद अहमद ३/४९२

## १.हाँसो, ठट्टा, तिरस्कार, उपहास र मिथ्यारोपण

यसको उद्देश्य मुसलमानहरूलाई निराश बनाएर तिनको हौसला तोड्नु थियो । यसका लागि बहुदेववादीले ईशदूतलाई अपमानजनक लाञ्छना र गालीहरूको निशाना बनाए ।

यसरी उनीहरूले उहाँलाई कहिले पागल भन्थे । जस्तै कुरआनमा भनिएको छ :

وَقَالُواْ يَا أَيُّهَا الَّذِي نُزِّلَ عَلَيْهِ الذِّكْرُ إِنَّكَ لَمَجْنُونٌ (الحجر : 6)

"नास्तिकहरूले भने, हे कुरआन अवतरण भएको व्यक्ति, तिमी त पागल हौ । (अल् हिज्र : ६)

र कहिले उहाँलाई जादुगर र झुटो भनी आरोप लगाउँथे । कुरआनमा भनिएको छ :

وَعَجِبُوا أَن جَاءهُم مُّنذِرٌ مِّنْهُمْ وَقَالَ الْكَافِرُونَ هَذَا سَاحِرٌ كَذَّابٌ (ص :4 )

उनीहरूलाई आफुहरूमध्ये सचेतक आएकोले आश्चर्य लागेको छ । काफिरहरूले भने, यो त झुटो जादुगर हो । (स्वाद :४)

ती नास्तिकहरू रिस र क्रोधका कारण उहाँको अघिपछि राता राता आँखा बनाएर उत्तेजित भावना बोकेर हिँडथे । कुरआनमा उल्लेख छ :

لَمَّا سَمِعُوا الذِّكْرَ وَيَقُولُونَ إِنَّهُ لَمَجْنُونٌ (القلم : 51)

"जब काफिरहरुले त्यो कुरआन सुन्थे उनीहरूले भन्ने गर्थे यो त निश्चय नै पागल हो । (अल् कलम् :५१)

त्यसैगरी जब उहाँ कुनै ठाउँमा जानुहुन्थ्यो र आफ्ना कमजोर तथा पीडित सहाबीहरूबीच बस्नु हुन्थ्यो उहाँहरूलाई देखेर बहुदेववादीहरूले ठट्टा गर्दै भन्थे : यिनै हुन जसमाथि अल्लाहले हामीमध्ये गुण लगाएका छन् ?

"जवाफमा अल्लाहको भनाई छ : "के अल्लाह कृतज्ञहरू बारे सर्वविज्ञ छैनन् ?"

सामान्यतया वहुदेववादीहरूको चाला त्यही थियो जसको बारेमा तलको श्लोकहरूमा चित्रण गरिएको छ :

إِنَّ الَّذِينَ أَجْرَمُوا كَانُواْ مِنَ الَّذِينَ آمَنُوا يَضْحَكُونَ (29) وَإِذَا مَرُّواْ بِهِمْ يَتَغَامَزُونَ (30)
وَإِذَا انقَلَبُواْ إِلَى أَهْلِهِمُ انقَلَبُواْ فَكِهِينَ (31) وَإِذَا رَأَوْهُمْ قَالُوا إِنَّ هَؤُلَاء لَضَالُّونَ (32) وَمَا أُرْسِلُوا عَلَيْهِمْ حَافِظِينَ (33) ( المطففين)

अपराधीहरुले आस्थावानहरूको मजाक उडाउने गर्थे र उनीहरूको नजिकबाट हिँडदा छडके आँखाले हेर्थे, आफ्नो घरतिर फर्केर जाँदा मस्ती मार्दै जान्थे । आस्थावानहरूलाई देख्दा यिनीहरू त पथभ्रष्ट हुन् भन्थे । उनीहरू बहुदेववादीहरूका निम्ति रक्षक बनाएर पठाइएका थिएनन् । (अल् मुतफ्फिफीन : २९–३३)

उनीहरूले बढो लान्छना तथा ठट्टा गर्न थाले । खिल्ली उडाउने हाँसो उडाउने जस्ता क्रियाकलापमा अगाडि बढिरहे । मुहम्मदﷺको मनमा पनि त्यसको प्रभाव पर्न

थाल्यो जसलाई अल्लाहले यसरी वर्णन गरेका छन् : हामीलाई थाहा छ यिनीहरूले जुन कुरा भनिरहेका छन् त्यसले तिम्रो मनमा चोट पारिरहेको छ । तर अल्लाहले उहाँको मनलाई बलियो बनाइदिए । मनमा रहेको त्यो हिनतावोध निराकरण गर्न अल्लाहले एउटा तरिका बताउदै भने : आफ्नो प्रभूको गुनगान गर,स्तुती गर, आफ्नो प्रभूको उपासना गर मृत्युसम्म ।

यसअघि अल्लाहले भनेका छन् ती ठट्टाबाजहरूलाई तह लगाउन अल्लाह नै प्रयाप्त छन् । अल्लाहको भनाइ छ : हामी तपाईँसँग ठट्टा गर्ने ती ठट्टाबाजहरूलाई तह लगाउन सक्षम छौँ जसले अल्लाहको साथसाथै अरूलाई ईश्वर बनाएका छन् । उनीहरूलाई छिटो थाहा हुने छ ।

अल्लाहले उनीहरूको गतिविधिले छिटो नै उनीहरूमाथि आपतविपत निम्त्याउने छ भन्ने कुरालाई यसरी भनेका छन् : तपाईँभन्दा पहिलाका ईशदूतहरूको पनि खिल्ली उडाइएको थियो । खिल्ली उडाउनेहरूको खिल्लीले उनीहरूलाई नै पाँसोमा पाऱ्यो ।

## विरोधको दोस्रो स्वरूप

उहाँको शिक्षा विरुद्ध भ्रम सृजना गर्नु, झूट तथा दुष्प्रचारबाजी गर्नु : उनीहरूले यस किसिमको गतिविधि अत्यधिक र विभिन्न शैलीमा गरेकाले मानिसहरूले उहाँको निमन्त्रणा एवं आह्वानप्रति चिन्तन गर्ने अवसर नै पाउन सकेनन् । अतः ती बहुदेववादीहरूले कुरआनको सम्बन्धमा भन्थे : “यी त दुःखान्त सपनाहरू हुन् जसलाई मुहम्मदले रातमा देख्छन् र दिनमा त्यसको पाठ गर्छन ।” कहिलेकाहीँ भन्थे : “यो त केवल उसको मनगढन्ते कुरा हो । कुनै मानिसले सिकाएको कुरा हो ।” कहिले भन्थे : यो त केवल झुट हो जुन उसले रचेको हो । यसलाई मुहम्मदले रचेको हो र केही मानिसहरूले उसलाई मदत गरेका हुन् । अर्थात उहाँले र उहाँको साथीहरूले मिलेर रचेको कुरा हो । कहिले भन्थे : यो त उसले लेखेको उपन्यास हो जसलाई उसले विहान वेलुकी पाठ गर्छ ।

कहिलेकाहीँ भन्ने गर्थे : जादुगरहरूमाथि जस्तै उमाथि पनि पिचास आउने गर्छ । अल्लाहले त्यसको खण्डन गर्दै भनेका छन् : उनीहरूलाई सोध, पिचास कसमाथि आउँछ ? पिचास त झुट रचने हरेक व्यक्तिहरूमाथि आउँछ । अर्थात पिचास झुट तथा पापमा लतपतिएका व्यक्तिहरूमा पस्छ । तिमीहरूले मबाट न त कहिले झुट बोलेको सुनेका छौ न ममा कुनै अपराध भेटाएका छौ । अनि कुरआनलाई पिचासले अवतरण गरेको हो भनेर कसरी भनेका छौ ?

कहिलेकाहीँ भन्ने गर्थे उनलाई कुनै नसा लागेको छ जसकारण उनले आफ्नो विचार राम्रो र उच्च शब्दमा प्रस्तुत गर्दछन् जस्तै कविहरूले आफ्नो विचारलाई सुन्दर शब्दमा व्यक्त गर्ने गर्छन् । त्यसकारण उनी पनि कवि हुन् । उनको अभिव्यक्ति

कविता सरह छ। अल्लाहले त्यसको खण्डन गर्दै भनेका छन् : कविहरूको पछाडि त पथभ्रष्ट मान्छेहरू डुल्छन्। तिमीलाई थाहा छैन उनीहरू घाटीतिर घुम्छन् भन्ने कुरा ? उनीहरूले त त्यो कुरा भन्छन् जुन आफैले नै गर्दैनन् । कविहरूका तीन वटा विशेषता हुन्छन् । तीमध्ये कुनै पनि मुहम्मदमा छैन । तसर्थ जुन मानिसहरू मुहम्मद ﷺ का अनुयायी छन् उहाँको मार्गदर्शनमा छन् उनीहरू आफ्नो धर्मकर्म, चरित्र तथा व्यवहार लगायत हरेक कुरामा स्वच्छ छन्। उनीहरूको जीवनको कुनै पनि मामिलामा पथभ्रष्टताको नामै छैन । ईशदूत त शायरहरू झैँ घाटीतिर पनि डुल्दैनन् । उहाँले त केवल एक ईश्वर, एक धर्म र एक मार्गतर्फ आमन्त्रणको निमन्त्रणा दिनुहुन्छ। उहाँले ती कुरा मात्र भन्नुहुन्छ जुन स्वयमले गर्नुहुन्छ। तसर्थ उहाँलाई शायरहरू र तिनका शायरीसँग के सरोकार ?

उनीहरूले ईशदूत ,कुरआन र इस्लाम विरुद्ध जुन शंका उब्जाउने गर्थे अल्लाहले त्यसको सन्तोषजनक जवाफ दिए।

उनीहरूको अधिकांश शंकाहरू एकेश्वरवाद, मुहम्मद ईशदूत हो वा होइन भन्ने बारे र मृत्युपश्चात पुनर्जीवन बारे हुने गर्थ्यो। कुरआनले एकेश्वरवाद सम्बन्धी उनीहरूको हरेक शंका उपशंकाको जवाफ दिएको छ। साथै त्यस विषय सम्बन्धी धेरै कुराहरू बयान गरेको छ। त्यसको कुनै पनि पक्ष संदेहको घेरामा अल्झिएको छैन। त्यसैगरी उनीहरूको पुज्य वस्तुहरूको विवशतालाई जुन तरिकाले प्रस्तुत गरेको छ त्यस बारे अधिक भन्नु आवश्यक छैन । त्यसै कुराले गर्दा उनीहरू क्रोधित भएका थिए र त्यसको प्रतिकारमा जुन कुरा भयो त्यो तपाईंलाई थाहा छँदै छ।

ईशदूतको ईशदूतत्व बारे उनीहरूलाई शंका हुँदाहुँदै पनि उनीहरूले उहाँलाई असल इमानदार र पवित्र छन् त भनेका नै थिए तर ईशदूतत्वको यो महान पद कुनै मानवले पाउन सक्दैन भन्ने उनीहरूको बुझाई थियो । अर्थात कुनै पनि मानव ईशदूत हुन सक्दैन र ईशदूत मानव हुन सक्दैन भन्ने उनीहरूको मान्यता थियो । त्यसकारण मुहम्मद ﷺ ले आफु  ईशदूत भएको घोषणा गरेर त्यसलाई स्वीकार्न आह्वान गर्दा मानिसहरूलाई अचम्म लाग्यो र उनीहरूले भन्न थाले : खाना खाने, बजारमा हिँडने यो कस्तो ईशदूत हो ? साथै उनीहरूले भने : ईश्वरले कुनै मावनमाथि कुनै चीज अवतरण गरेका छैनन्। ईश्वरले त्यसको खण्डन गर्दै भनेका छन् : उनीहरूलाई भनिदिनुस् मुसा عليه السلام ले ल्याएको किताब कसले अवतरण गरेको हो ? जो मानवको लागि मार्गदर्शन तथा दीप थियो। उनीहरूलाई थाहा थियो मुसा عليه السلام मानव थिए । त्यसकारण उनीहरूले जवाफ दिन सकेनन् । ईश्वरले उनीहरूको खण्डन गर्दै भने, प्रत्येक जातजातिले आफ्नो ईशदूतहरूको ईशदूतत्वलाई इन्कार गर्दै भने: तिमी त हामी जस्तै मान्छे हौ। उनीहरूको जवाफमा ईशदूतहरुले भनेका थिए : हो हामी त तिमीहरू जस्तै मानव हौँ तर ईश्वरले आफ्नो मानवमध्ये जसमाथि गुण

लगाउन चाहन्छ लगाउँछ । अर्थात ईशदूतहरू मानव नै थिए । मानवता र ईशदूतत्वमा विभेद छैन ।

इब्राहीम, इसमाइल र मुसाعليه السلام ईशदूत थिए भन्ने कुरा उनीहरूलाई मान्य थियो । उनीहरू पनि मानव नै थिए । त्यसकारण यस बारे शंका गरिराख्न अलि सकेनन् । उनीहरूले आफ्नो चालबाजीको शैली परिवर्तन गर्दै भने : ठिक छ यदि मानव ईशदूत हुन सक्छ भने के ईश्वरलाई आफ्नो ईशदूत चयन गर्न यै टुहुरो र गरीब भेटियो ? ईश्वरले मक्काका ठूलाबडालाई छोडेर यो टुहुरोलाई कसरी ईशदूत बनाउँन सक्छन् ? कुरआन यी दुईटा गाउँका कुनै ठूलो व्यक्तिमाथि किन अवतरण गरिएन ? ईश्वरले उनीहरूको खण्डन गर्दै भनेका छन् : के यिनीहरूले तिम्रो प्रभूको वरदानलाई बाँडन खोजेका छन् । अर्थात ईशवाणी तथा ईशदूतत्व ईश्वरको वरदान हुन् । ईश्वरलाई आफ्नो ईशदूतत्व कसलाई दिने हो भन्ने बारे सबैभन्दा बढी ज्ञान छ ।

त्यसपछि वहुदेववादीहरूले एक अर्को चाल रच्दै भने संसारका राजदूतहरू त बढो सानका साथ हिँडछन् । उनीहरूको ठूलो प्रभूत्व हुन्छ । उनीहरूको निम्ति जीवन विताउने हरेक किसिमका साधनहरू उपलब्ध हुन्छन् । तर मुहम्मदले ईशदूत भएको दावी गर्दा पनि उनलाई जीविका चलाउन बजारतिर नडुली हुँदैन । उनीहरूले भने : उनको साथमा कुनै फरिश्ता किन अवतरण गरिएन जो उनको साथमा सचेतक बनोस् ? उनलाई किन ढुकुटी दिइएन ? उनको लागि उनको जीविका चल्ने कुनै बगैँचा त हुनुपर्थ्यो । अत्याचारीहरूले भने तिमीहरूले त जादु गरिएको व्यक्तिको अनुशरण गर्दैछौ ।

ईश्वरले यी सम्पूर्ण प्रश्नहरूको जवाफ दिँदै भने मुहम्मदﷺ ईशदूत हुन् । उनको दायित्व सानो ठूलो,प्रवल निर्वल, असल तथा साधारण र स्वतन्त्र तथा दासी लगायत सबै व्यक्तिहरूलाई ईश्वरको संदेश पुऱ्याउनु हो । यदि उनलाई पनि राजदूतहरूको जस्तो सान, फुइँफाइँ, बडप्पन र मैमत्याइँ दिएर पठाइएको भए कमजोरहरूको उनीसम्म पहुँच हुन सक्दैन थियो र उनीहरू लाभान्वित हुन सक्दैनन् थिए । जबकि उनै सर्वसर्वाह हुन् । यस्तो परिस्थितिमा उनलाई ईशदूत बनाउनुको उद्देश्य नै प्राप्त हुन सक्दैन थियो । त्यसको कुनै विषेश लाभ हुन सक्दैन थियो ।

मरण पश्चात पुनर्जीवन सम्बन्धी उनीहरूले जुन प्रश्न खडा गरेका थिए त्यो आश्चर्यजनक तथा विवेकहीन एवं तर्कहीन थियो । उनीहरूले आश्चर्य गर्दै भन्थे : के हामी मरेर माटो तथा हड्डीमा परिणत भयौं भने फेरि हामीलाई जीवित गरिने छ र ? हाम्रा बाउबाजेलाई पनि जीवित गरिने छ ? त्यो त टाढाको कुरा हो । उनीहरूले अचम्म मानेर भन्थे : के हामीले त्यो व्यक्तिको बारेमा बताऔं जसले तिमी मरेर टुक्राटुक्रा भएपछि पनि पुनर्जीवित हुनेछौ भन्ने खबर दिन्छ । उसले ईश्वरमाथि

मिथ्यारोपण गरेको छ वा ऊ आफै पागल भएको छ त्यो हामीलाई थाहा छैन । उनीहरूले अझै भने :

मृत्यु हुनु, त्यसपछि जिउनु, त्यसपछि हिसाब हुनु यो त वाहियात कुरा हो । ईश्वरले उनीहरूको कुराको खण्डन गर्दै उनीहरूको ध्यान संसारमा घटेका घटनाहरूतर्फ केन्द्रित गरे । हेर, अपराधीले संसारमा आफ्नो अपराधको सजाय नपाइकन संसारबाट गएका छन्, पीडितहरू पनि आफ्नो अपराधीबाट आफ्नो हकको बदला नपाइकन मरेका छन्, असल शुभकारीहरू पनि आफ्ना शुभकर्मको प्रतिफल नपाइकन मरेका छन् । बदमाश, लुच्चा लफंगाहरू पनि आफ्नो कुकर्मको साजय नपाइकन मरे । तसर्थ अब यदि मानवलाई पुनर्जीवित गरेर उनीहरूलाई उनीहरूले गरेको कर्मको प्रतिफल दिइएन भने दुवैमा के फरक रहन्छ र ? यसरी त अत्याचारी र अपराधीहरू नै असल तथा सज्जन व्यक्तिहरूभन्दा भाग्यमानी हुने भए । यो त विवेकहीन कुरा हो र ईश्वरले आफ्नो सृष्टिको व्यवस्थालाई यस्तो अन्यायमा स्थापित गरेको छ भन्ने कुरा सोच्न पनि सकिदैन । ईश्वरको भनाई छ : के हामीले आज्ञाकारीलाई अवज्ञाकारी जस्तै बनाउने छौँ र ? तिमीलाई के भएको छ, तिमीहरूले कस्तो निर्णय गरेका छौ ? ईश्वरले अझै भनेका छन् : के हामीले आस्थावान तथा पुण्य गर्नेहरूलाई धर्तीमा हिंसा मच्चाउनेहरू जस्तो बनाउने छौँ र ? वा हामीले आज्ञाकारीलाई अवज्ञाकारी जस्तो ठहऱ्याउने छौँ र ? अगाडि भनेका छन् : के विकार गर्नेहरूले उनीहरूलाई शुभकर्म गर्नेहरू जस्तो बनाइने छ भन्ने सोचेका छन् ? उनीहरूको मृत्यु र जीवन समान हुन सक्दैन । उनीहरूले गरेको निर्णय अति नराम्रो छ ।

उनीहरूले यी कुराहरूलाई आफ्नो विवेकभन्दा टाढाको कुरा ठानेकाले अल्लाहले भनेका छन् : तिमीहरूलाई सृष्टि गर्नु गाह्रो छ वा आकाशलाई ? के यिनीहरूले देखेका छैनन् जुन ईश्वरले आकाश र धर्ती सृष्टि गऱ्यो र त्यसमा उनलाई कुनै कठिनाइ भएन भने उनी मरेकाहरूलाई जीवित गर्न सक्षम छैनन् ? छन् किन छैनन् ? उनी हरेक कुरा गर्न सक्षम छन् । ईश्वरको भनाई छ : के तिमीलाई आफ्नो पहिलो जन्म थाहा छ ? अनि किन वास्तविकता स्वीकार्दैनौं ? ईश्वरले त्यो कुरा पनि भने जुन विवेकले ठम्याउँछ अर्थात कुनै पनि वस्तुलाई दोस्रो पटक बनाउनु पहिलो पटक बनाउनुभन्दा सजिलो हुन्छ । ईश्वरको भनाई छ : जसरी हामीले पहिलो पल्ट तिमीलाई बनाएका थियौं त्यसरी नै तिमीलाई दोस्रो पल्ट पनि बनाउँछौं । के हामी तिमीलाई पहिलो पल्ट बनाउँदा थाकेका थियौं ?

ईश्वरले उनीहरूको जुन एकएक शंकाहरूको सन्तोषजनक जवाफ दिएका छन् त्यसबाट एक साधारण व्यक्ति पनि सन्तुष्ट हुन सक्छ । तर मक्काका काफिरहरू हठधर्मी भए । उनीहरू घमण्डी भए । उनीहरू यस धर्तीमा बडप्पनका साथ जिउँन चाहन्थे । मानिसहरूमाथि आफ्नो कुरा लाद्न चाहन्थे । त्यसकारण उनीहरू आफ्नो अहंकारमा पथभ्रष्ट हुँदै गए ।

## विरोधको तेस्रो स्वरूप

पूराना कथा र उपन्यासद्वारा कुरआनको मुकाबिला गर्नु र मानिसहरूलाई कुरआनबाट रोक्नु ।

वहुदेववादीहरूले उपरोक्त आफ्ना शंकाहरू फैलाउनुका साथसाथै सम्भव भएसम्म मानिसहरूलाई कुरआन सुन्नुबाट रोक्ने प्रयास गर्थे । उनीहरूले मानिसहरूलाई अन्यत्र भगाउँथे । ईशदूत प्रचारप्रसारको लागि तयार हुँदा वा नमाजमा कुरआन पढ्दा उनीहरूले हल्ला गर्ने, ताली ठोक्ने, सिटी बजाउने जस्ता क्रियाकलाप गर्ने गर्थे । ईश्वरले त्यस बारे भनेका छन् : काफिरहरूले भने, यो कुरआन नसुन , हल्ला गर ताकि तिमीहरूको जित होस् । यस्तो परिस्थितिले गर्दा ईशदूतलाई उनीहरूको भेला वा बैठकमा कुरआन पाठ गर्ने अवसर ईशदूतत्वको पाँचौं वर्षको आखिरदेखि मात्र प्राप्त हुन सक्यो । त्यो पनि उहाँ अचानक उभिएर कुरआनको पाठ गर्नुभएको थियो । पहिलादेखि कसैलाई त्यसबारे खबर हुन सकेको थिएन ।

नजर बिन हारिस कुरैशी पिचासहरूमध्ये एक थियो । ऊ हिराह नामक क्षेत्रतिर गयो । त्यहाँ उसले राजाहरूको घटना र परम्परागत कथाहरू सिक्यो । त्यहाँबाट फर्केपछि जब ईशदूत कुनै ठाउँमा बसेर अल्लाहको कुराहरु गर्नुहुन्थ्यो र उसको पकडबाट मानिसहरूलाई सचेत गराउनुहुन्थ्यो अनि उसले उहाँ पश्चात उभिएर मेरो कुरा मुहम्मदका कुराहरुभन्दा असल छैन र भन्दै फारसका राजाहरूका र परम्परागत कथाहरू सुनाउँथ्यो । के को आधारमा मुहम्मदको कुरा मेरो कुराभन्दा असल छ ?[१]

इब्ने अब्बासको कथन अनुसार नजरले एउटी ठिटी किनेर राखेको थियो । कुनै व्यक्ति मुहम्मदतिर आकर्षित भएको छ भन्ने कुरा सुन्ने वित्तिकै उसलाई त्यो ठिटीकहाँ लिएर आउँथ्यो । त्यो व्यक्तिलाई खानपिन गराउन र गीत सुनाउन ठिटीलाई आदेश दिन्थ्यो । मुहम्मदको कुराभन्दा यो तिम्रो लागि उत्तम छ भन्ने गर्थ्यो । त्यसको बारेमा अल्लाहको भनाई अवतरण भयो : “केही मानिसहरूले मानिसहरूलाई ईश्वरको मार्गबाट पथभ्रष्ट गर्न विकार कुराहरु किन्दैछन् ।” (लुक्मान : ६)

जब कुरैश आफ्नो षड्यन्त्रमा असफल भयो ,आफ्नो भतिजोलाई रोक्न र अल्लाहको धर्म प्रचार गर्नुबाट रोक लगाउन भनी अबुतालिबलाई मनाउन सकेनन् अनि उनीहरुले यस्तो बाटो हिंडने निर्णय गरे जसमा हिंड्न उनीहरुले आल टाल गरिरहेका थिए । जसको दुष्परिणामले गर्दा उनीहरुले त्यसबाट टाढा बस्नु नै उचित ठानेका थिए । त्यो बाटो भनेको उहाँमाथि अत्याचार गर्ने उहाँलाई पीडा दिने बाटो थियो ।

१ इब्ने हेशाम १/२९९,३००

## ईशदूतमाथि अन्याय र अत्याचार

आखिरकार कुरैशले अन्याय र अत्याचारको त्यो चरम सीमा पनि नाघे जसलाई उनीहरूले प्रतिष्ठित ठानेका थिए । उनीहरूको घमण्ड तथा अंहकारले गर्दा आफुले एउटा लामो समयदेखि झेल्दै आएको कुरा सहन उनीहरूलाई कठिन भयो । त्यसकारण उनीहरूले अहिलेसम्म गर्ने गरेका हाँसो ठट्टा, तिरस्कारबाट सत्यलाई ओझेलमा पार्ने जुन नीति अपनाएका थिए त्यो भन्दा एक कमद अझै अगाडि बढेर ईशदूतमाथि दमन गर्न शुरु गरे । त्यस कामको लागि उहाँको काका अबु लहब नै अगाडि हुनु स्वभाविक थियो । किनभने बनु हाशिमको सरदारमध्ये ऊ पनि एक थियो । उसलाई अरुलाई जति खतरा थिएन । ऊ इस्लाम र मुसलमानको सबैभन्दा कट्टर शत्रु थियो । उसले मुहम्मदको बारेमा पहिलो दिनदेखि नै त्यो कुरा सोचेको थियो जुन कुरैशले सोचेका थिएनन् । उसले बनु हाशिमको बैठकमा जे गऱ्यो त्यसपछि सफा नामक पहाडमा जुन अभद्र व्यवहार देखायो त्यसको वर्णन अघिल्ला पृष्ठहरूमा भइसकेको छ ।

मुहम्मदﷺ ईशदूत हुनुभन्दा पहिला अबू लहबले आफ्ना दुई छोरा उत्बा र उतैबाको विवाह ईशदूतकी दुई वटी छोरी रोकैया र उम्मे कुलसूमसँग गरेको थियो । ईशदूत भएपछि उसले नराम्रो र यथोचित ढंगले यी दुवैलाई तलाक दिन लगायो ।[१]

त्यसैगरी ईशदूतको दोस्रो छोरा अब्दुल्लाहको देहावसान हुँदा अबू लहब खुशीले दौडदै आफ्ना साथीहरूकहाँ गएर मुहम्मद वंशवीहीन भयो भन्दै खुशी प्रकट गऱ्यो ।[२]

हामीले यो पनि चर्चा गरिसकेका छौं कि हजका दिनहरूमा अबू लहब ईशदूतको विरोध गर्न बजार तथा सभाहरूमा उहाँको पछिपछि लागिरहन्थ्यो । तारिक बिन अब्दुल्लाह मुहारिबीको कथन अनुसार उसले उहाँको विरोध मात्र होइन उहाँलाई ढुंगा पनि हान्ने गर्थ्यो जसले गर्दा उहाँको कुर्कुच्चाहरू रक्ताम्मे हुन्थे ।[3]

अबू लहबकी श्रीमती उम्मे जमील, जसको नाम उर्वा थियो र ऊ हरब बिन उमैयाकी छोरी र अबू सुफ्यानकी बहिनी थिई ऊ पनि ईशदूतको शत्रुतामा आफ्नो श्रीमानभन्दा कम थिइन । उसले रातको समयमा ईशदूत हिँडने बाटो र द्वारमा काँडा हाल्ने गर्थी । खासगरी ऊ दुर्मुखे तथा बदमाश थिई । ईशदूत विरुद्ध अश्लील कुरा गर्नु, घमण्ड गर्नु, छलकपट, उपद्रो काम गर्नु, विद्रोहको आगो सल्काउनु र भीषण

---

१ असदुल गाबह ६
२ तफ्सिर इब्ने कसिर सुरह अल कौसर
3 कन्जुल उम्माल १२/४४९

युद्ध भडकाउनु उसको नियमित कार्य नै थियो । त्यसैले कुरआनमा उसलाई हम्मालतल् हतब अर्थात दाउरा बोक्नेवाली जस्तो तिरस्कृत नाम दिइएको छ ।

जब उसलाई आफ्नो र आफ्नो श्रीमान्को अपमानमा कुरआन अवतरण भएको कुरा थाहा भयो अनि उसले ईशदूतलाई खोज्दै आई । उहाँ काबा नजिक मस्जिद हरममा बस्नुभएको थियो । अबू बकर सिद्धीक पनि साथमा थिए । उसले हातमा ढुंगा लिएकी थिई । ऊ ईशदूतको सामुन्ने आउन लाग्दा ईश्वरले उसको नजरलाई नै दृष्टिहीन बनाइदिए त्यसकारण ईशदूतलाई उसले देख्न सकिन अबू बकरलाई मात्र देखिरहेकी थिई । उसले सामुन्ने पुग्ने वित्तिकै अबू बकर तिम्रो साथी कहाँ छ भनेर सोधी । उसले मेरो खिल्ली उडाउँछ भन्ने कुरा थाहा भएको छ । मैले उसलाई पाएँ भने उसको टाउको फोर्ने छु । हेर ! ईश्वरको कसम म पनि कवियत्री हुँ । त्यसपछि उसले आफ्नो कविताको निम्नलिखित श्लोक पढी । अनूवाद छ :

“हामीले तिरस्कृत व्यक्तिको अवज्ञा गऱ्यौं । उसको आदेशलाई स्वीकार गरेनौं र उसको धर्मलाई घृणा एवं तिरस्कार गरेर छाडिदियौं । त्यस पश्चात् ऊ फर्केर गई । अबू बकरले भने : हे ईशदूत उसले तपाईंलाई देखिन र ? उहाँले भन्नुभयो देखिन । ईश्वरले उसको आँखामा छारो हालिदिएका थिए ।[1]

अबू बकर बज्जारले पनि यो घटनालाई वर्णन गरेका छन् । त्यसमा उनले ऊ अबू बकरको नजिक उभिएर तिम्रो साथीले हाम्रो निन्दा गरेको छ भन्ने कुरा भनेको उल्लेख गरेका छन् । अबू बकरले भने : उहाँले त न कुनै शायरी भन्नुहुन्छ न त्यसलाई वाचन पनि गर्नुहुन्छ । उसले भनी तिमीले साँचो भन्दै छौ ?

## अत्याचार

ईशदूतत्वको चौथो वर्ष प्रथम पटक इस्लामी आह्वान सार्वजनिक भएपछि बहुदेववादीहरूले त्यसलाई रोक्न पहिलाको जस्तो कदम चाल्न थाले । केही महिना त उनीहरुले कदम अगाडि बढाएनन् साथै कुरुरता तथा ज्यादती पनि गरेनन् । तर ती कारवाही इस्लामी प्रचारप्रसारलाई रोक्न प्रभावकारी साबित नभएपछि उनीहरूले आपसी सल्लाह गरी मुसलमानलाई यातना दिएर उनीहरूलाई उनीहरुको धर्मबाट बञ्चित राख्नु पर्छ भन्ने निर्णय गरे । त्यसपछि कबिलाका सरदारहरूले आफ्नो अधीनमा रहेका दास दासिकाहरूलाई यातना दिन शुरु गरे । हरेक मालिक मुस्लिम बन्ने आफ्नो दासीमाथि बज्रन थाल्यो । बदमाश तथा सरदारहरूका पुच्छरहरू त आफ्नो सरदारको पछाडि दगुर्नु स्वभाविक नै थियो । उनीहरूले आफ्नो सरदारको चाहना बमोजिम काम गरे । फलस्वरूप मुसलमानलाई र विशेष गरी कमजोर

---

१ इब्ने हेशाम १/३३५

मुसलमानहरूलाई सताउन थाले र यस्तो सजाय दिन थाले जसलाई सुन्दा रौँ तात्छन् र मुटु काँप्छ। तल केही उदाहरणहरू प्रस्तुत गरिदैछ।

अबू जहलले कुनै सम्मानित एवं शक्तिशाली व्यक्ति मुसलमान भएको खबर सुन्ना साथ उसलाई उल्टोसुल्टो भन्ने गर्थ्यो, बदनाम एवं बेइज्जत गर्थ्यो र धनसम्पत्ति नोक्सान गर्ने जस्ता धम्कीहरू दिन्थ्यो। कुनै कमजोर मानिस मुसलमान हुँदा त आफुले पनि पिट्थ्यो र अरुलाई पनि भडकाउँथ्यो।[1]

उस्मान बिन अफ्फानको काकाले उनलाई खजुरको गुन्द्रीमा गुटमुट्याएर तलबाट धुवाँ लगाउँथ्यो।[2]

मुसअब् बिन उमैरकी आमाले उनले इस्लाम अपनाएको जानकारी पाएपछि उनको खानपिन बन्द गरिदिइन् र उनलाई घरबाट निकालिदिइन्। उनी धेरै विलासीपनमा हुर्केका थिए। यातना भोगेकाले उनको छाला सर्पको काँचुली झैँ उक्केको थियो।[3] सुहैबलाई यातना दिँदा उनी बेहोश हुन्थे। त्यो अवस्थामा आफुले भनेको कुरा पनि थाहा हुँदैन थियो।[4]

बिलाल, उमैया बिन खल्फ जम्हीका दासी थिए। उमैयाले उनको घाँटीमा डोरी बाँधेर केटाहरूको सुपुर्द गरिदिन्थ्यो। उनीहरूले उनलाई मक्काका पहाडहरूमा घिसार्दै घुमाउँथे। घाँटीमा डोरीको डाम समेत बस्थ्यो। त्यसो हुँदा पनि उनले एकेश्वरवादको नारा लगाइरहे। खलफ बिन उमैया स्वयमले पनि उनलाई बाँधेर लठ्ठीले पिट्थ्यो र टन्टलापुर घाममा बसालेर राख्थ्यो। खाना पानी पनि दिदैन थियो। भोक भोकै राख्थ्यो। त्यतिमा मात्र सिमित थिएन। अत्याचार गर्ने क्रममा मध्यान्हमा खुब गर्मी हुँदा मक्काको कन्करेली ढुंगामा सुताएर छातीमाथि ठूलठूला ढुंगा राख्न लगाउँथ्यो। त्यसपछि उसले भन्थ्यो : ईश्वरको कसम ! नमर्दासम्म र मुहम्मदलाई ननकारेसम्म साथै लात र उज्जा नामक मूर्तिको पूजा नगरेसम्म तिमी यस्तै अवस्थामा रहिरहने छौ। त्यस अवस्थामा पनि बिलालले एकेश्वरवादको नारा लगाउँदैरहे। उनले भने : यदि तिमीलाई यो नाराभन्दा नराम्रो लाग्ने अरु कुनै नारा भए मैले त्यो पनि भन्थे। एक दिन उनीमाथि यस्तै कारवाही भइरहँदा अबू बकर आए। उनले बिलाललाई एउटा काला दासीको बदलामा वा भनिन्छ दुई सय

---

१ इब्ने हेशाम १/३२०
२ रहमतुल लिल् आलमिन १/५७
3 असदुल गाबह ४/४६०
४ इब्ने सअद ३/२४८

दिरहममा (चाँदीका साना सिक्का अर्थात ७३५ ग्राम चाँदी) या दुई सय अस्सी दिरहम (एक किलोभन्दा बढी चाँदी) को बदलामा किनेर मुक्त गरिदिए ।[1]

अम्मार बिन यासिर बनू मख्जूमका दासी थिए । उनले र उनका माता-पिताले इस्लाम स्वीकार्दा उनीहरूमाथि महाप्रलय आइ लाग्यो । बहुदेववादीहरू जसमा अबू जहल अघिअघि थियो । तिनीहरूले चर्को घाम लागेको समयमा उनीहरुलाई ढुंगै ढुंगा भएको भुइँमा लगेर त्यसको तापमा सजाय दिन्थे । एक चोटि उनलाई यस्तै यातना दिइरहँदा ईशदूत आउनुभयो । उहाँले भन्नुभयो : हे यासिर परिवार, धैर्य गर तिम्रो ठेगाना स्वर्ग हुनेछ । आखिर यासिरले अत्याचार सहन नसकी मृत्युवरण प्राप्त गरे । सुमैया जो इमारहकी आमा थिइन् अबू जहलले उनको गुप्तांगमा भाला हान्यो । त्यसैमा उनको निधन भयो । यिनी इस्लामकी प्रथम शहीद महिला हुन् । उनको पिताको नाम खैयात थियो । उनी अबु हुजैफाकी नोकरनी थिइन् । धेरै वृद्धा तथा कमजोर थिइन् ।

इमारहमाथि यातनाको क्रम जारी रह्यो । उनलाई कहिले घाममा राखेर यातना दिइन्थ्यो भने कहिले उनको छातीमाथि रातो ढुंगा राखिन्थ्यो र कहिले पानीमा डुबाइन्थ्यो । यसो गर्दा उनी बेहोश हुन्थे । बहुदेववादीहरूले उनीसँग भन्थे : तिमीले मुहम्मदलाई गाली नगरेसम्म वा लात एवं उज्जाको बारेमा राम्रो कुरा नगरेसम्म तिमीलाई छाडिदैन । बाध्य भएर अम्मारले तिनीहरूको कुरा मान्नु पऱ्यो । त्यसपछि ईशदूतकहाँ रुदै, क्षमायाचना गर्दै आए । यस कार्यप्रति निम्न श्लोक अवतरण भयो, अनुवाद छ : जसले अल्लाहमाथि विश्वास गरेर विश्वासघात गर्छ त्यसमाथि अल्लाहको ठूलो सजाय हुनेछ तर जसलाई बाध्य गराइन्छ र उसको आत्मा इमानमाथि सन्तुष्ट छ भने उसलाई कुनै सजाय हुने छैन।[2](१६:२०६)

अबु फकीहा जसको नाम अफ्लह थियो उनी अजद कबिलाका थिए । उनी बनु अबदुल दारका दासी थिए । उनको दुवै खुट्टा फलामे कडीले बाँधेर साथै शरीरको कपडा निकालेर मध्यान्हको गर्मीमा तातो भूइँमा घोप्टो बनाएर सुताइन्थ्यो र चलमलाउन नपाओस् भनी पिठ्युँमा ठूलठूला ढुंगा राखिन्थ्यो । उनी त्यही अवस्थामा रहिरहँदा बेहोश हुन्थे । उनलाई यस प्रकारको यातना दिएपछि उनी पनि हब्शातर्फ प्रस्थान भए । एक चोटि बहुदेववादीहरूले उनको खुट्टा बाँधी तातो भूइँमा सुताएर उनको घाँटी अँठ्याए । त्यसो गर्दा उनीहरूले उनी मरे भन ठाने । त्यही अवस्थामा त्यहाँ अबु बकर आए र उनले उनलाई उनको मालिकबाट किनेर मुक्त गरिदिए ।[3]

---

१ तलकिहुल फहुम ६१, इब्ने हेशाम १/३१७
२ इब्ने हेशाम १/३१९, इब्ने सअद ३/२४८
3 असदुल गाबह ५/२४८

खब्बाब बिन अरत कबिला खुजाआकी एउटी महिला उम्मे अन्मारका दासी थिए । उनी नकर्मी थिए । मुसलमान बनेपछि उनकी मालिकनीले उनलाई आगोमा जलाउने जस्तो सजाय दिन्थी । फलामको तातो टुक्रा उनको पिठ्युँ वा टाउकोमा राखिदिन्थी । तर त्यसबाट उनको इमानमा झन वृद्धि हुन्थ्यो । बहुदेववादीहरूले पनि उनलाई किसिम किसिमका यातना दिने गर्थे । उनको कपाल लुछ्थे । बेसरी घाँटी निमोठ्थे । एक चोटि उनीहरूले उनलाई दन्किएको अंगारोमा हालेर माथिबाट ढुंगा राखिदिए । उनको पिठ्युँको बोसो पग्लेर मात्र त्यो आगो निभ्यो ।[1]

जुनैराह इटालियन दासिका थिइन् । उनी मुसलमान बनेपछि उनलाई पनि यातना दिइयो । संयोगले उनको आँखा दृष्टिहीन भयो । त्यसमा बहुदेववादीहरुले भने , हेर तिमीलाई लात उज्जाको सराप लागेको छ । उनले भनिन्, होइन । यो त अल्लाहको तर्फबाट भएको हो । यदि उसले चाहयो भने सन्चो बनाउन सक्छ । अल्लाहको मनसायले गर्दा दोस्रो दिन उनको आँखा ठिक भयो । त्यो देखेर बहुदेववादीहरुले भन्न थाले : यो त मुहम्मदको जादु हो ।

उम्मे उबैस बनु जोहराकी दासिका थिइन् । उनले इस्लाम स्वीकार्दा बहुदेववादीहरूले उनीहरूलाई जुन यातना दिएका थिए त्यसको केही उदाहरण वर्णन गरिसकिएको छ । कबिला बनु अदीका एक जना व्यक्ति अमर बिन मुमलकी दासिका मुसलमान हुँदा उमर बिन खत्ताब जो अदी कबिलाका थिए र त्यतिबेला मुसलमान भएका थिएनन् उनले त्यो युवतीलाई नथाक्दासम्म पिटने गर्थे । त्यस पश्चात् उनले भन्ने गर्थे : मैले तिमीलाई दयाको कारण होइन थाकेर छोडेको हुँ ।[2]

अन्त्यमा अबु बकरले बिलाल र आमीर बिन फुहैरह जस्तै अन्य युवतीहरूलाई पनि किनेर मुक्त गरिदिए ।[3]

बहुदेववादीहरूले यातना दिने क्रममा ईशदूतका कुनै कुनै साथीहरूलाई त झन ऊँट तथा गाईको आलो छालामा गुटमुट्याएर घाममा राखि दिन्थे र केहीलाई फलामको साङ्लो लगाएर ढुंगामाथि सुताइदिन्थे ।[4]

वास्तवमा अल्लाहको मार्गमा यातना सहनेहरूको सूची धेरै लामो छ र अति दुखदायी पनि छ । स्थिति यस्तो थियो कुनै व्यक्ति मुसलमान भएको थाहा हुने वित्तिकै बहुदेववादीहरूले उसको बाटो रोक्थे र उसलाई दुःख दिने गर्थे ।

---

१ असदुल गाबह १/५९१, तलकिहुल फहुम ६०
२ इब्ने हेशाम १/३१९
३ इब्ने हेशाम १/३१८
४ रहमतुल लिल् आलमिन १/५८

## ईशदूतबारे बहुदेववादीहरुको धारणा

मुहम्मदﷺ आकर्षित एवं सम्मानित र पृथक व्यक्तित्वका धनी हुनुहुन्थ्यो । शत्रु होस् वा मित्र सबैले उहाँलाई सम्मान दृष्टिकोणले हेर्थे । उहाँ जस्तो व्यक्तित्वलाई आदर तथा सत्कार नै गरिन्थ्यो । उहाँको सामु कुनै तुच्छ व्यवहार त केवल तुच्छ तथा मूर्खले मात्र गर्न सक्थ्यो । उहाँको व्यक्तिगत प्रतिष्ठाका साथसाथै उहाँलाई अबु तालिबको समर्थन प्राप्त थियो । अबु तालिब मक्काका ती गन्यमान्य व्यक्तिहरुमध्ये थिए जुन आफ्नो व्यक्तिगत तथा सामाजिक हैसियतले यति सम्मानित थिए जसले गर्दा कुनै पनि व्यक्तिले न त उनीहरुको प्रतिज्ञा भंग गर्न सक्थ्यो न उनीहरुको समुदायमाथि हात हाल्न सक्थ्यो । यस्तो परिस्थितिले कुरैशलाई कठिनाइमा पारेको थियो । त्यस कठिनाइबाट कुनै अप्रिय घटना नघटाइ निस्कन उनीहरुले सोच्न थाले । आखिरकार उनीहरुले सबैभन्दा ठूलो व्यक्ति अबु तालिबसँग कुरा गर्नु पर्छ भन्ने सोचे । कुरा गर्दा पनि उनीहरुले अति नै सतर्कता र उच्च रणनीति अपनाउनु जरुरी थियो । समस्या सल्टाउने खाले हुनु जरुरी थियो । कुरामा सुक्ष्म चेतावनी पनि होस् र कुरा मान्य पनि होस् ।

## कुरैशको प्रतिनिधिमण्डल अबु तालिबको घरमा

इब्ने इसहाकको कथन अनुसार कुरैशका केही गन्यमान्य व्यक्तिहरुले अबु तालिबकहाँ आएर भने । हे अबु तालिब तपाईंको भतिजोले हाम्रो भगवानहरुलाई हिंसा गरेको छ । हाम्रो धर्मलाई नराम्रो भनेको छ । हामीलाई मुर्ख भनेको छ । हाम्रा बाउबाजेलाई पथभ्रष्ट भनेको छ । तसर्थ कि त तपाईं उसलाई रोक्नु होस् वा तपाईं हामी र उसको बीचबाट हट्नुहोस् । किनभने तपाईं पनि हामी जस्तै उसको धर्मदेखि अलग धर्ममा हुनुहुन्छ । त्यसो नगरे हामीले उसका साथसाथै तपाईंलाई पनि केही गर्न सक्छौं । त्यसको जवाफमा अबुतालिबले नम्र शैलीमा विनम्र कुरा गरे । अन्तत : उनीहरु फिर्ता भए । मुहम्मदﷺ आफ्नो मार्गमा निरन्तर अगाडि बढ्नुभयो र अल्लाहको धर्म प्रचारप्रसार गर्न व्यस्त हुनुभयो ।[१]

तर बहुदेववादीहरुले उहाँलाई नियमित धर्म प्रचारप्रसार गरेको देखेर सहन सकेनन् । आपसमा विशेष छलफल गर्न थाले, आपत्ति जनाए र अबु तालिबसँग अति कठोर शैलीमा पुनःकुरा गर्ने निर्णय गरे ।

## अबू तालिबलाई कुरैशको धम्की

त्यस निर्णयपछि कुरैशका मुखियाहरुले फेरि अबू तालिबकहाँ भेला भएर भने : अबू तालिब ! तपाईं हामीमा बुज्रुक एवं प्रतिष्ठित र प्रशंसाका मालिक हुनुहुन्छ ।

१ इब्ने हेशाम १/२६५

हामीले तपाईंसँग आफ्नो भतिजालाई रोक्नोस् भनेर अनुरोध गर्‍यौं । तर तपाईंले रोक्नु भएन । हेर्नुहोस् उसले हाम्रो बाबुबाजेलाई गाली गरेको कुरालाई हामीले सहेर बस्न सक्दैनौं । हाम्रो बुद्धि एवं विवेकलाई मूर्ख भन्ने र हाम्रा भगवानहरुलाई गलत भन्ने कुरालाई हामी सहन सक्दैनौं । उसलाई रोक्नुहोस् नत्र हामी तपाईं र ऊ विरुद्ध यस्तो युद्ध गर्न तत्पर छौं जसमा एक पक्षको नाश हुनेछ ।

अबू तालिब त्यस कठोर धम्कीबाट डराए र उनले ईशदूतलाई बोलाएर भने : भतिजो तिम्रो जातिका मानिसहरु मकहाँ आएका थिए र उनीहरुले यस्ता यस्ता कुरा भनेर गएका छन् । अब ममाथि र स्वयम आफूमाथि दया गर र त्यस विषयमा ममाथि मैले बोक्न नसक्ने बोझ नहाल ।

त्यो कुरा सुनेर ईशदूतले अब काकाले पनि मेरो साथ छोड्दै छन्, उनी अब साथ दिन असामर्थ्य छन् जस्तो ठाने । तसर्थ उहाँले भन्नुभयो : काका ज्यू ! ईश्वरको कसम ! यदि यी मानिसहरुले मेरो दाहिने हातमा सूर्य र देब्रे हातमा चन्द्रमा राखिदिए पनि म यस कर्तव्यलाई त्यो ठाउँसम्म नपुर्‍याइ छाड्दिन जहाँ कि त अल्लाहले यसलाई विजय गरिदिनेछ कि मेरो नै यस मार्गमा बलिदान हुनेछ ।

त्यस पश्चात् उहाँका आखाँबाट आँसू बग्न थाल्यो । उहाँ रुनुभयो । अनि उठेर फर्कन लाग्दा अबु तालिबले उहाँलाई बोलाएर भने : भतिजो ! जाऊ, जे प्रचार गरेका छौ गर । म तिमीलाई कहिल्यै कुनै हालतमा छोड्न सक्दिनँ ।[१] उनले निम्न पंक्ति पढे :

والله لن يصلوا إليك بجمعهم        حتى اوسد فى التراب دفينا
فاصدع بامرك ما عليك غضاضة        وابشر وقر بذاك منك عيونا

अनुवाद छ : ईश्वरको कसम म मरे पनि ती मानिसहरु आफ्नो जमातै लिएर पनि तिमीकहाँ पुग्न सक्दैनन् । तिमीले आफ्ना कुरा खुलेआम भन । तिमी निरास नहोऊ । प्रसन्न होऊ । त्यसबाट तिमीलाई शान्ति प्राप्त होस् ”[२]

## कुरैश एक पटक फेरि अबू तालिबकहाँ

पछिल्ला धम्कीहरुका बावजूद कुरैशले ईशदूतलाई आफ्नो काम गरिरहेको देखेपछि उनीहरुलाई अबु तालिबले मुहम्मदलाई त्याग्न सक्नु हुन्न भन्ने कुरा लाग्यो । त्यति मात्र नभएर यस मामिलामा कुरैशलाई छोड्न र कुरैशको विरोधमा उभिन अबु तालिब तयार रहेको कुरा पनि उनीहरुले बुझे । त्यसकारण उनीहरु वलीद बिन मुगीराको छोरा इमारहलाई आफ्नो साथमा लिएर अबू तालिबकहाँ गए र उनीसँग निम्न अनुरोध गरे :

---

१ इब्ने हेशाम १/१६५
२ बैहकी २/१८८

हे अबू तालिब ! यो कुरैशको सबैभन्दा बलियो तथा सुन्दर युवक हो । तपाईं यसलाई लिनुहोस् । उसको बलिदान र सहयोगको तपाईं हकदार हुनुहुन्छ । तपाईं यसलाई आफ्नो धर्मपुत्र बनाउनुहोस् । यो तपाईंको हुनेछ । तपाईं आफ्नो भतिजालाई हाम्रो सुपुर्द गरिदिनोस् जसले तपाईंको बाबुबाजेको धर्मको विरोध गरेको छ । तपाईंको समुदायको एकतालाई भताभूङ्ग पारेर राखेको छ र उनीहरुको बुद्धि विवेकलाई मूर्खताको संज्ञा दिएको छ । हामी उसको हत्या गर्न चाहन्छौं । यो व्यक्ति एक जना व्यक्तिको बदलामा हुनेछ ।

अबू तालिबले भने : तिमीहरुले जुन मोलतोल गर्न खोजेका छौ त्यो अति नै अनूचित छ । तिमी आफ्नो छोरा मलाई पालनपोषण गर्न दिदैछौं तर मेरो छोरालाई मसँग हत्या गर्न माग्दै छौ । ईश्वरको कसम यसो हुन सक्दैन ।

त्यसमा नौफल बिन अब्द मनाफको नाती मुतइम बिन अदीले भन्यो : ईश्वरको कसम हे अबू तालिब ! तपाईंसँग तिम्रा समुदायले न्यायोचित कुरा भन्दैछन् र तपाईंलाई आपत पर्ने कुराबाट बचाउने कोसिस गरेका छन् । तर तपाईं उनीहरुको कुनै कुरा स्वीकार गर्न तयार हुनुहुन्न । जवाफमा अबू तालिबले भने : तिमीहरुले मसँग न्यायोचित कुरा गरेनौ । यदि तिमीहरु पनि मेरो साथ छोडेर मेरो विरोधीहरुको सहयोग गर्न चाहेका छौ भने गर ।[1]

तर कुरैश आफ्नो योजनामा असफल भए, अबु तालिबलाई मुहम्मदलाई रोक्ने र इस्लामको प्रचारप्रसार गर्नबाट रोक्ने कुरामा मनाउन सकेनन् अनि उनीहरुले त्यो रणनीति अपनाउने निर्णय गरे जसलाई अहिलेसम्म अपनाउन डराएका थिए । जसको भयानक परिणामबाट बच्नु नै अहिलेसम्म उचित ठानेका थिए । त्यो रणनीति भनेको स्वयम मुहम्मदमाथि अत्याचार थियो ।

अबू लहब मुहम्मदﷺको काका तथा छिमेकी हुँदाहुँदै पनि उसले यी सम्पूर्ण गतिविधि गरिरहेको थियो । उसको घर उहाँको घरसँग जोडिएको थियो । त्यसैगरी अन्य छिमेकीहरूले पनि उहाँलाई उहाँको घरभित्र सताउने गर्थे ।

इब्ने इस्हाकको बयान अनुसार मुहम्मदﷺलाई उहाँको घरभित्र दुःख दिने व्यक्तिहरू निम्न थिए : अबू लहब, हकम बिन अबील आस बिन उमैया, उक्बा बिन अबी मुऐत, अदी बिन हमरा सक्फी, इब्नुल असदा हजली आदि । यी सबै उहाँका छिमेकी थिए । यिनीहरूमध्ये हकम बिन अबुल आस बाहेक कोही पनि मुसलमान भएनन् ।[2] यिनीहरूले यसरी सताउँथे । उहाँ नमाज पढ्न लाग्दा उनीहरूमध्ये कुनैले बाखाको गर्भाशय उहाँमाथि निशाना बनाएर फ्याक्थ्यो र त्यो ठिक उहाँको ज्युमाथि

---

१ इब्ने हेशाम १/२६६
२ उनी अबुल खलिफा उमवी मरवान बिन हकम हुन्

पर्थ्यो । चुल्होमा भात पकाउने भाँडो बसाल्दा त्यसलाई निशाना बनाएर गर्भाशय फ्याक्थ्यो र त्यो सीधा भाँडोमा पर्थ्यो । नमाज पढ्दा ती कुराहरूबाट जोगिन उहाँले बाध्य भएर माटोको घर बनाउनुभयो । उहाँमाथि यस्तो फोहर फ्याँकिदा उहाँले त्यसलाई काठमा लिएर निस्किनु हुन्थ्यो र ढोकामा उभिएर भन्नुहुन्थ्यो : हे बनु अब्द मनाफ ! छिमेकीप्रति यो तिम्रो कस्तो व्यवहार हो ? त्यसो भन्दै त्यसलाई बाटोतिर फ्याकिदिनु हुन्थ्यो ।[१]

उक्बा बिन मुऐत आफ्नो दुष्टता र अभद्रतामा झनै अगाडि थियो । अतः बुखारीमा अब्दुल्लाह बिन मसऊदद्वारा वर्णन गरिएको छ : ईशदूत काबा नजिक नमाज पढिरहनु भएको थियो । अबू जहल र उसका केही साथीहरू पनि त्यहाँ बसेका थिए । उनीहरूमध्ये एकले अर्कालाई भन्यो : कसले फलानोको ऊँटको आन्द्राभूँडी ल्याएर मुहम्मद नमाज पढ्न लाग्दा उसको पिठ्यूँमा हाल्न सक्छ ? त्यसमा समुदायको दुष्ट व्यक्ति उक्बा बिन अबी मुऐत[२] उठ्यो र आन्द्रा-भूँडी ल्याएर मुहम्मदﷺले सजदा गर्न लाग्दा उहाँको पिठ्यूँको बीच भागमा हालिदियो । मैले सम्पूर्ण घटना देखिरहेको थिएँ । तर केही गर्न सक्दैन थिएँ । म बलियो भएको भए केही गर्थें ! इब्ने मसऊद भन्छन् : त्यसपछि उनीहरू हाँस्दै एकअर्कासँग ठट्टा गर्न थाले भने ईशदूत सज्दाको अवस्थामा नै रहनुभयो । शीर उठाउनु भएन । फातिमा आएर उहाँको पिठ्युँबाट आन्द्रा-भूँडी हटाएर फालिन् अनि उहाँले शीर उठाउनुभयो । त्यसपछि उहाँले तीन चोटि भन्नुभयो : हे अल्लाह कुरैशलाई पक्र ” उहाँले उनीहरूको कुभलोको लागि प्रार्थना गर्दा उनीहरूलाई ठूलो आपत्ति पर्‍यो किनभने त्यस शहरमा प्रार्थना स्वीकार हुन्छ भन्ने उनीहरूको विश्वास थियो । त्यस पश्चात् उहाँले नाम किटान गर्दै उनीहरूको कुभलोको लागि प्रार्थना गर्नुभयो । हे अल्लाह ! अबू जहललाई पक्र र उक्बा बिन रबीया, शैबा बिन रबीआ, वलीद बिन उत्बा, उमैया बिन खल्फ र उक्बा बिन अबु मुऐतलाई पक्र । उहाँले सातौं व्यक्तिको पनि नाम किटान गर्नुभयो तर हदिस बयान गर्नेलाई सम्झना हुन सकेन । इब्ने मसऊद भन्छन् : ईश्वरको कसम जसको हातमा मेरो प्राण छ, जुन जुन व्यक्तिको नाम ईशदूतले लिनु भएको थियो ती सबै जना बद्रको कुवामा मृत अवस्थामा थिए ।[३] सातौं व्यक्ति इमारह बिन वलिद थियो ।[४]

---

१ इब्ने हेशाम १/४१६
२ सही बुखारी १/५४३
३ सही बुखारी १/३७
४ सही बुखारी हदिस नं ५२०

मुहम्मदﷺलाई देख्दा गाली तथा हिंसा गर्ने उमैया बिन खल्फको बानी नै थियो । त्यसैको बारेमा निम्न कुरआनी श्लोक अवतरण भयो जसको अनुवाद छ : हिंसा गर्ने र कुरा काट्ने व्यक्तिको निम्ति विनाश छ । इब्ने हिशामले भनेका छन् : हुमाजह खुलेआम लान्छना गर्ने र घृणाको भावमा तेर्छो नजरले हेर्ने व्यक्तिलाई भनिन्छ भने लुमाजह मानिसको पिठ्यूँपछाडि कुरा काट्ने र उनीहरूलाई दुखित तुल्याउने व्यक्तिलाई भनिन्छ । [1]

उमैयाको भाइ उबै बिन खल्फ, उक्बा बिन अबी मुऐतको घनिष्ट मित्र थियो । एक पटक उक्बाले ईशदूत नजिक बसेर केही सुन्यो । उबैलाई थाहा भएपछि उसलाई गाली गऱ्यो, उसको निन्दा गऱ्यो र उसँग ईशदूतकहाँ गएर उहाँको मुखमा थुक्ने आदेश दियो । आखिरकार उक्बाले त्यसै गऱ्यो । उबै बिन खल्फ स्वयमले एक पटक सडेको हाड ल्याएर फोड्यो र हावामा फुकेर ईशदूततिर उडायो ।[2]

अख्नस बिन शुरैक सकफी पनि ईशदूतलाई सताउनेहरूमध्ये एक थियो । कुरआनमा उसको बारेमा नौँ वटा अवगुणहरू वर्णन गरिएको छ जसबाट उसको कुचरित्र झल्किन्छ । वर्णन गरिएको छ :

وَلَا تُطِعْ كُلَّ حَلَّافٍ مَّهِينٍ (10) هَمَّازٍ مَّشَّاءٍ بِنَمِيمٍ (11) مَنَّاعٍ لِّلْخَيْرِ مُعْتَدٍ أَثِيمٍ (12) عُتُلٍّ بَعْدَ ذَٰلِكَ زَنِيمٍ (13) (القلم)

तिमी कसम खाने कुनै पनि कलंक व्यक्तिको कुरा नमान, जसले लान्छना गर्छ चुग्ली गर्छ, भलो कुराबाट रोक्छ, जो ठूलो अत्याचारी, खराप आचरण र अन्यायी छ र साथसाथै दुष्ट पनि छ । (अल् कलम् : १०–१३)

अबू जहलले कहिले कहिले ईशदूतकहाँ आएर कुरआन सुन्थ्यो । तर सुन्ने मात्र गर्थ्यो । आस्था,आज्ञापालना,नम्रता एवं भय जस्ता कुराहरू अपनाउँदैन थियो । उसले ईशदूतलाई आफ्नो दुर्मुखे बोलीले दुःख दिने गर्थ्यो । अल्लाहको मार्गबाट रोक्ने गर्थ्यो । अनि आफ्नो त्यस क्रियाकलापमा घमण्ड र गर्व गर्दै जान्थ्यो । मानौँ उसले कुनै शुभकर्म गरेको छ । कुरआन मजिदको निम्न श्लोक त्यसै व्यक्तिको बारेमा अवतरण भएको हो ।

"न उसले दान दियो न नमाज पढ्यो । उसले त मिथ्यारोपण गऱ्यो, इन्कार गऱ्यो त्यसपछि घमण्ड गर्दै आफ्नो घरपरिवारतिर गयो । अपसोच छ तिमी माथि पछुतो छ तिम्रो लागि"

त्यस व्यक्तिले पहिलो दिन इशदूतलाई नमाज पढ्दै गरेको देखेर त्यसै दिनदेखि उहाँलाई नमाजबाट रोक्न थाल्यो । एक पटक ईशदूत मकामे इब्राहीमको

---

१ इब्ने हेशाम १/३५६, ३५७
२ इब्ने हेशाम १/३६१, ३६२

नजिक नमाज पढिरहँदा ऊ आयो । उहाँलाई देखेर भन्यो, मुहम्मद ! के मैले तिमीलाई यसबाट रोकेको थिइन ? उसले धम्की पनि दियो । ईशदूतले पनि हप्काउँदै रुखो जवाफ दिनुभयो । त्यसमा उसले भन्न थाल्यो : हे मुहम्मद ! मलाई के को धम्की दिइरहेका छौ ? हेर ! त्यस उपत्यकामा मेरो बैठक सबैभन्दा ठूलो हुन्छ । त्यस कुरामा अल्लाहले निम्न श्लोक अवतरण गरे जसको अनुवाद यस प्रकार छ : तिमी आफ्नो बैठकीहरूलाई बोलाऊ हामी दण्ड दिने फरिश्तालाई आदेश दिन्छौं ।

एउटा कथन अनुसार ईशदूतले उसको घाँटीको कठालो समात्नुभयो र झक्झक्याउँदै भन्नुभयो : "तिमीमाथि अपसोच छ, तिमीमाथि अपसोच छ ।"

त्यसमा अल्लाहको त्यो शत्रूले भन्न थाल्यो : हे मुहम्मद ! मलाई धम्की दिइरहेका छौं ? तिमी र तिम्रो प्रभूले मेरो केही बिगार्न सक्दैन । म मक्काको दुवै पहाडको बीचका वासीहरूमध्ये सबैभन्दा प्रतिष्ठित छु ।[१]

त्यस्तो हप्कीदप्की गर्दा पनि अबू जहल आफ्नो मुर्खता छोड्ने वाला थिएन । उल्टै उसको कुकृतिमा झन् वृद्धि भयो । अत : सहीह मुस्लिममा अबु हुरेराहमार्फत वर्णन गएिको छ : एक पटक कुरैशी सरदारहरूसँग अबू जहलले सोध्यो : के मुहम्मद तपाईंहरूकहाँ आउँछ । आउँछ भनी उनीहरूले जवाफ दिए । उसले लात एवं उज्जा नामक मूर्तिको कसम खाएर भन्यो ! यदि मैले उसलाई यस्तो अवस्थामा देखे भने उसको घाँटी निमोठिदिने छु र उसको मुन्टो माटोमा लछारपछार पार्ने छु । त्यस पश्चात् उसले ईशदूतलाई नमाज पढदै गरेको देख्यो र उहाँको घाँटी निमोठ्ने सोच गरेर हिँडयो तर मानिसहरूले उसलाई अचानक फर्केर हारगुहार गरिरहेको देखे । मानिसहरूले भने : अबूल हकम ! तिमीलाई के भयो ? उसले भन्यो : मेरो र उसको बीचमा आगोको एउटा खाडल छ जसमा डर लाग्दा वस्तुहरू छन् र त्यो खाडल भरिएको छ । ईशदूतले भन्नुभयो : यदि ऊ मेरो नजिक आएको भए फरिश्ताहरूले उसको एक एक अंग लुछेर लैजान्थे ।[२]

यो त्यो अत्याचार तथा शोषणको एउटा सानो चित्र मात्र थियो जुन आफुलाई ईश्वरका प्यारा तथा काबाका वासी ठान्ने बहुदेववादीद्वारा ईशदूत तथा मुसलमानहरूलाई दिइएको थियो ।

## अरकम निवास

यो निवास विद्रोही तथा अन्यायीहरूको नजर र उनीहरूको बैठकभन्दा अलग सफा पहाडको काखमा एक्लो घर थियो । ईशदूतले मुसलमानहरूका साथ गोप्य रूपमा भेला हुन त्यै घर रोज्नुभयो । त्यहाँ बसेर उहाँले अल्लाहको अन्तिम वाणी

१ इब्ने जरिर, इब्ने कसिर ४/४७७
२ मुस्लिम हदिस नं ३८

कुरआनको पाठ गर्नुहुन्थ्यो । उनीहरूलाई शिक्षादिक्षा दिनुहुन्थ्यो र ईशवाणी तथा सत्यतथ्य कुराहरू सिकाउनु हुन्थ्यो । मुसलमानहरूले पनि अमन शान्तिका साथ उपासना तथा धर्मकर्म गर्ने गर्थे । साथै कुरआन सिक्ने गर्थे । जुन व्यक्ति मुस्लिम बन्न चाहन्थ्यो ऊ त्यहाँ आएर मुसलमान बन्थ्यो तर अत्याचारी तथा विद्रोहीहरूलाई त्यसको खबर पनि हुँदैन थियो ।

यसो नगरी यदि उहाँ मुसलमानहरूको साथमा खुलेआम भेला भएका भए बहुदेववादीहरूले उहाँलाई आत्म शुद्धिकरण तथा ईशवाणीको शिक्षादिक्षा दिने कार्यमा अवरोध खडा गर्ने कुरा निश्चित थियो र त्यसको परिणाम स्वरुप दुवै समूहबीच लडाइँ झगडा हुन सक्ने सम्भावना थियो । ईशदुतत्वको चौथो वर्ष पनि त्यस्तो गतिविधि भइसकेको थियो । ईशदूतका साथीहरू घाटीमा भेला भएर नमाज पढ्ने गर्थे । एक पटक कुरैशी केही मानिसहरूले देख्ने वित्तिकै गाली गर्न थाले र लडाइँ झगडाको लागि तयार भए । प्रतिकारमा सअद बिन अबी वक्कासले एक जना व्यक्तिलाई हातापाइ गर्दा उसको रगत निस्क्यो । इस्लामको तर्फबाट रगत बोगाइएको यो पहिलो घटना हो ।[1]

यदि यस किसिमको झडप निरन्तर रूपमा भएको भए मुसलमानहरूको अन्त्य हुन सक्ने कुरा निश्चित थियो । त्यसकारण ती कार्यहरू गोप्य रूपमा गर्नु नै बुद्धिमानी थियो । तसर्थ सबै साथीहरूले आफ्नो इस्लाम, आफ्नो उपासना, इस्लाम प्रचार प्रसारको कार्य र आपसी बैठक पनि गोप्य रूपमा गर्थे । तर ईशदूतले भने प्रचारप्रसारको काम बहुदेववादीहरूको सामुन्ने खुले आम गर्नुहुन्थ्यो र उपासना पनि । कुनै कुराले उहाँलाई त्यसबाट रोक्न सक्दैन थियो । तर मुसलमानहरूसँग भने उहाँ पनि उनीहरूको सावधानीको लागि गोप्य रूपमा जानुहुन्थ्यो । उता अरकम बिन अबी अरकम मख्जूमीको घर सफा डाँडामा विद्रोही नजर र उनीहरूको बैठकबाट टाढा अलग थलग अवस्थित थियो । त्यस कारण उहाँले ईर्शदुतत्वको पाँचौं वर्षदेखि त्यसै घरलाई आफ्नो निमन्त्रणा र मुसलमानहरूसँग बैठक गर्ने सभाकेन्द्र बनाउनुभयो ।

## पहिलो हिजरत हब्शातर्फ (प्रथम देशान्तर)

अन्याय र अत्याचारको आरम्भ ईशदूतत्वको चौथो वर्षको मध्येतिर या अन्त्यमा भएको थियो । शुरुमा सामान्य थियो तर दिन प्रतिदिन तथा महिना प्रतिमहिना बढ्दै गयो । ईशदूतत्वको पाचौं वर्षको अन्तरालमा झन बढ्दै गयो । मुसलमानहरूको लागि मक्कामा बस्नु पनि गाह्रो भयो । ती निरन्तर अत्याचारबाट मुक्तिको लागि उनीहरू केही उपाय सोच्न बाध्य भए । तिनै कष्टकर एवं संक्रमण स्थितिमा कुरआनको जुमर नामक अध्याय अवतरण भयो । जसमा हिजरत अर्थात

१ इब्ने हेशाम १/२६३

देश छोडेर निस्कने आदेश भयो । साथै अल्लाहको धर्ती साँघुरो छैन भन्ने कुरा पनि बताइयो ।

لِلَّذِينَ أَحْسَنُوا فِي هَذِهِ الدُّنْيَا حَسَنَةٌ وَأَرْضُ اللَّهِ وَاسِعَةٌ إِنَّمَا يُوَفَّى الصَّابِرُونَ أَجْرَهُم بِغَيْرِ حِسَابٍ ( الزمر)

जुन मानिसहरूले यस दुनियाँमा राम्रो गर्छन तिनको लागि राम्रो प्रतिफल छ र अल्लाहको धर्ती फराकिलो छ । धैर्य गर्नेहरूलाई अत्यधिक पुरस्कार दिइनेछ । (अल् जुमर : १०)

ईशदूतलाई हब्शामा अस्हमाह नामक एउटा नजाशी न्यायप्रेमी राजा छन् भन्ने कुरा थाहा थियो । त्यहाँ कसैमाथि अत्याचार हुँदैन थियो । त्यसकारण उहाँले मुसलमानहरूलाई उपद्रोबाट आफ्नो धर्मको रक्षा गर्न हब्शातिर प्रस्थान गर्न आदेश दिनुभयो ।

त्यस पश्चात निर्धारित कार्यक्रमका साथ ईशदुतत्वको पाँचौं सालको रजब महिनामा ईशदूतका साथीहरूको पहिलो समूहले हब्शातर्फ प्रस्थान गऱ्यो । त्यस समूहमा बाह्र जना पुरुष र चार जना महिला थिए । उस्मान बिन अफ्फान उनीहरूका प्रतिनिधि थिए । उनीहरूको साथमा ईशदूतकी छोरी रोकैया पनि थिइन् । ईशदूतले उनीहरुको बारेमा यिनीहरु इब्राहीम र लूतعليه السلام पश्चात अल्लाहको मार्गमा घर छाड्ने पहिलो घराना हुन् भनेर भन्नु भएको थियो ।[१]

उनीहरु रातको अँध्यारोमा चुपचाप निस्केर आफ्नो नयाँ गन्तव्यतर्फ लागे । कुरैशलाई थाहा नहोस् भनेर उनीहरु गोप्य रुपमा हिँडे । रातो सागरको बन्दरगाह शोऐबाहमा पुगे । संयोगले त्यहा दुई वटा व्यापारिक डुङ्गा थिए । उनीहरु त्यसै डुङ्गामा चढेर समुद्रपार हब्शा पुगे । कुरैशलाई पछि उनीहरु प्रस्थान भएको जानकारी भयो र उनीहरुको पिछा गर्दै समुन्द्रको तटसम्म पुगे तर ईशदूतका साथीहरु अगाडि गइसकेका थिए । त्यस कारण उनीहरु खाली हात फर्के । मुसलमानहरुले हब्शा गएर शान्तिको साँस लिए ।[२]

## मुसलमानको साथमा बहुदेववादीहरुको सज्दा गराई

त्यसै वर्ष रमजानको महिनामा ईशदूत हरम जानुभयो । त्यहाँ कुरैशको ठूलो भेला थियो । तिनीहरुका नायिके र ठूलठूला मानिसहरु जम्मा भएका थिए । उहाँले अचानक उभिएर कुरआनको नज्म नामक अध्यायको पाठ गर्न थाल्नुभयो । काफिरहरुले त्यसअघि कुरआन सुनेका थिएनन् । किनभने कुरआनको बारेमा उनीहरुको दृष्टिलाई कुरआनले यसरी प्रस्तुत गरेको छ :

---

१ जादुल मआद १/२४
२ जादुल मआद १/२४

لَا تَسْمَعُوا لِهَٰذَا الْقُرْآنِ وَالْغَوْا فِيهِ لَعَلَّكُمْ تَغْلِبُونَ (حم السجدة : 26)

यस कुरआनलाई न सुन बरु त्यसको पाठ भइरहेको समयमा हुहल्ला गर ताकि तिमीहरुको जित होस् । (हामीम् अल् सजदा : २६)

तर ईशदूतले अचानक त्यस अध्यायको पाठ शुरु गर्नुभयो र तिनको कानमा सुरिलो, मनमोही एवं आकर्षणले भरिएको ईशवाणी एवं महानताको स्वर गुञ्जेपछि तिनलाई अचम्म लाग्यो । सबै जना प्रत्याशीत भए । कसैको मनमा अन्य कुनै सोच नै आएन । पाठ गर्दै जाँदा उहाँले अध्यायको अन्त्यमा मुटु नै छुने खालका श्लोकहरु पाठ गर्दा निम्न श्लोक पढ्नुभयो, अनुवाद छ : "अल्लाहको लागि सज्दा गर र उसैको पूजा गर ।"

त्यो श्लोक पढेर उहाँले सज्दा गर्दा उनीहरू पनि अचानक सज्दामा घोप्टे । वास्तवमा त्यस अवसरमा सत्यताको मनोहरता एवं महानताले घमण्डीहरु तथा हठधर्मीहरुको पोल खोलिदियो । त्यसकारण उनीहरु आफूमाथि नियन्त्रण गर्न सकेनन र उनीहरु अनियन्त्रित भएर सज्दामा घोप्टे ।[१]

तर अल्लाहको महान बचनले उनीहरुको दिशा नै परिवर्तन गरेको अनुभूति भएपछि उनीहरुले त्यही कार्य गर्न थाले जसलाई मेटाउन र समाप्त गर्नका निम्ति उनीहरुले ससानादेखि ठूलठूला कदम चालेका थिए । साथसाथै त्यस घटनामा अनुपस्थित बहुदेववादीहरुले उनीहरुमाथि चारै तर्फबाट लान्छना र निन्दा गर्न शुरु गरेपछि उनीहरु पछाडि हटे । अनि उनीहरुले आफ्नो ज्यान बचाउनका लागि ईशदूतले मूर्तिहरु बारे इज्जत एवं सम्मानका निम्न कुरा गरेका थिए भनी ईशदूतमाथि झुट तथा मिथ्यारोपण गर्दै भने : अर्थात "यी महान देवीहरु हुन् र यी देवीहरुले सिफारिस गर्नेछन् भनी आशा गरिन्छ ।"

त्यो सेतो झूट थियो । तर उनीहरुले ईशदूतको साथमा सज्दा गरेर गल्ती गरेकोमा उचित बहाना पेश उनीहरूले गर्न त्यो झुटो कुरा बोलेका थिए । जुन मानिसहरुले सधैं ईशदूतको बिरुद्धमा झूट बोले उहाँको बिरुद्ध सधैं मिथ्यारोपण गरे उनीहरुले आफ्नो नाक तथा इज्जत बचाउन यस प्रकारको झूट किन नरच्थे र नि ।

तथापि बहुदेबवादीहरुले सज्दा गरेको कुरा हब्शाहका शरणार्थीहरुलाई पनि थाहा भयो । तर उनीहरुलाई वास्तविकता थाहा नभई कुरैशहरु मुसलमान भएका छन् भन्ने गलत खबर प्राप्त भयो । तसर्थ उनीहरु शौवाल महिनामा मक्कातिर फर्कन हिँडे । तर मक्का नजिक अर्थात मक्का आउन एक दिनको बाटो हुँदा उनीहरुलाई

१ सही बुखारी १/१४६

वास्तविकता थाहा भयो । त्यसपछि केही मानिसहरु हब्शातिर नै फर्के भने केही मानिसहरु लुकीछिपी वा कुरैशका मानिसहरुको शरण लिएर मक्का आए ।[1]

## हब्शातर्फ दोस्रो हिजरत अर्थात देशान्तर

त्यसपछि विशेष गरी यी शरणार्थीहरुमाथि र सामान्यतया मुसलमानहरुमाथि कुरैशको अत्याचार, आतंक,उत्पीडन एवं निरंकुशता अझ बढ्दै गयो । कुरैशी खानदानका व्यक्तिहरुले उनीहरुलाई खुब सताए । किनभने उनीहरुसँग नजाशी राजाले गरेको सतव्यवहार बारे कुरैशलाई थाहा भएपछि उनीहरु झन् रुष्ठ बनेका थिए । बाध्य भएर ईशदूतले फेरि साथीहरुलाई हब्शातर्फ जान सल्लाह दिनुभयो । तर दोस्रो हिजरत पहिलो हिजरतको दाँजोमा कठिन थियो । किनभने कुरैशीहरु पहिलाभन्दा अहिले बढी सतर्क भएका थिए र त्यस प्रकारको कुनै पनि कदमलाई असफल पार्न दृढ संकल्प गरेका थिए । तर मुसलमान तिनीहरुभन्दा अझ बढी सतर्क थिए । साथै अल्लाहले उनीहरुको लागि यात्रा सजिलो बनाइ दिए । अतः उनीहरुलाई कुरैशले पकडन नपाउँदै हब्शाका राजाकहाँ पुगे ।

त्यस पटक बयासी वा तिरासी जना पुरुषहरुले हिजरत गरेका थिए । इमारहले हिजरत गरे वा गरेनन् यस बारे मतभेद छ । हिजरत गर्दा १८ वा १९ जना महिलाहरु पनि थिइन् । इस्लामी विद्वान मन्सुरपुरीले महिलाहरुको संख्या १८ बताएका छन् ।[2]

## हब्शामा शरण लिएकाहरु विरुद्ध कुरैशको षड्यन्त्र

मुसलमान आफ्नो ज्यान र धर्म बचाएर एउटा शान्तिपूर्ण ठाउँतिर गएकोमा बहुदेववादीहरु अति कुण्ठित बनेका थिए । तसर्थ उनीहरुले अमर बिन आस र अब्दुल्लाह बिन रबिआ जो गहिरो सूझ बूझका धनी थिए र अहिले मुसलमान भएका थिएनन् उनीहरुलाई एउटा महत्वपूर्ण कुटनीतिक कदम चाल्नको लागि छनोट गरे । ती दुवैलाई नजाशी तथा पादरीहरुको सेवामा जान उत्कृष्ट उपहार एवं कोसेली दिएर हब्शातर्फ पठाए । ती दुवैले पहिले हब्शा पुगेर पादरी प्रमुखहरुलाई उपहार प्रदान गरे । त्यसपछि मुसलमानहरुलाई हब्शाबाट निष्काशन गराउनका लागि ती पादरीहरुसँग आफ्ना कुराहरु राखे । पादरीहरुले नजाशीलाई मुसलमानहरुलाई निष्काशन गर्न सल्लाह दिन्छौं भनेर सहमति जनाएपछि ती दुवै नजाशीको अगाडि उपस्थित भए अनि उपहार पेश गरेर आफ्नो मुद्दा बारे जानकारी गराउँदै भने :

१ जादुल मआद १/२४, इब्ने हेशाम १/३६४
२ जादुल मआद १/२४

"हे राजा ! तपाईँको देशमा हाम्रा केही असमझदार युवाहरु भागेर आएका छन् । उनीहरुले आफ्नो समुदायको धर्म त्यागेका छन् र तपाईँको धर्ममा पनि प्रवेश गरेका छैनन् । उनीहरुले एउटा नयाँ धर्म आविष्कार गरेका छन् जसलाई न हामी जान्दछौं न तपाईं । हामीलाई तपाईँको सेवामा यिनीहरुकै विषय लिएर यिनका मातापिता, काका र परिवार तथा कबिलाका प्रमुखहरुले पठाएका हुन् । तपाईँले यिनीहरुलाई फिर्ता पठाइबक्सियोस् भन्ने हाम्रो चाहना छ । किनभने कुरैशीहरुले यिनीहरुमाथि गहिरो नजर राखेका छन् र यिनीहरुको गल्तीलाई राम्रोसँग बुझेका छन्" जब ती दुवैले आफ्नो विषयवस्तु राखे अनि पादरीहरुले भने : राजा हजुर, यी दुवैले साँचो कुरा भनेका छन् । यी शरणार्थीहरुलाई यी दुवै जनाको सुपुर्द गरिबक्सियोस् यी दुवैले उनीहरुलाई आफ्नो समुदाय तथा देशमा फिर्ता पुऱ्याइदिने छन् ।

तर नजाशी राजाले त्यस मामिला बारे गहिराइमा जानु र हरेक दृष्टिकोणबाट त्यसको सुनवाई गर्नु जरुरी छ भन्ने कुरा सोचे । तसर्थ उनले मुसलमानहरुलाई बोलाउन पठाए । मुसलमानहरु परिणामको परवाह नगरी आफु साँचो बोल्ने दृढ संकल्प गरेर उनको दरबारमा आए । मुसलमानहरु उपस्थित भएपछि नजाशीले सोध्यो : त्यो कुन धर्म हो जसको आधारमा तिमीहरु आफ्नो समुदायबाट अलग भएका छौ ? तिमीहरु न मैले मान्ने धर्ममा छौ न ती समुदायमध्ये कसैको धर्ममा प्रवेश भएका छौं ? मुसलमानहरुका प्रवक्ता जाफर बिन अबी तालिबले भने : हे राजा ! हामी यस्ता जाति थियौं जो अज्ञानतामा ग्रस्त थियो । हामीले मूर्ति पूज्थ्यौं, मरेका जनावरको मासु खान्थ्यौं, दुर्व्यसन गर्थ्यौं, नातेदारहरुसँग सम्बन्ध विच्छेद गर्ने गर्थ्यौं , छिमेकीहरुसँग दुर्व्यवहार गर्ने गर्थ्यौं , बलवानहरुले निर्बललाई दबाउने गर्थे । यस्तै परिस्थितिमा अल्लाहले हामी मध्ये एक जनालाई ईशदूत बनायो । उसको उच्च वंश, सत्यता, सदाचारिता हामीलाई पहिलेदेखि नै थाहा थियो । उसले हामीलाई अल्लाहतिर बोलायो र सम्झायो अर्थात हामीले केवल एक अल्लाहलाई मानौं र उसैको उपासना गरौं । उसको सिवाय जुन ढुंगाहरु र मूर्तिहरुलाई हाम्रा पूर्खाले पूज्दथे तिनलाई त्याग्यौं । उसले हामीलाई साँचो बोल्ने, इमानदार बन्ने , नातेदारसँग सुसम्बन्ध कायम गर्ने, छिमेकीसँग राम्रो व्यवहार गर्ने र अवैध कार्य तथा रक्तपात नगर्ने आदेश दियो । अशलीलतामा संलग्न हुनु, झूटो बोल्नु, अनाथको धनसम्पति खानु र सोझी महिलाहरुमाथि झूटो आरोप लगाउनु मनाही गऱ्यो । उसले हामीलाई केवल अल्लाहको उपासना गर्ने र उसको स्वामित्वमा कसैलाई साझेदार नबनाउने साथै नमाज पढ्ने वर्त बस्ने र जकात अर्थात दान दिने आदेश दियो । त्यसैगरी जाफरले इस्लामको अन्य कर्म बारे जानकारी गराउँदै भने : हामीले त्यस ईशदूतलाई सत्य मान्यौं र त्यसमाथि विश्वास गऱ्यौं र उसले ल्याएको ईश्वरीय धर्मको अनुकरण गऱ्यौं ।

अर्थात हामीले केवल एक अल्लाहको पूजा गऱ्यौं, उसको साथमा कसैलाई सहभागी गरेनौं र जुन कुरालाई त्यस ईशदूतले हराम भन्यो तिनलाई हराम मान्यौं र जसलाई हलाल भन्यो, त्यसलाई हलाल मान्यौं । यसै कुरामा हाम्रो समुदायका मानिसहरु हामीसँग रिसाए । उनीहरुले हामीमाथि अन्याय र अत्याचार गरे । हामीलाई आफ्नो धर्मबाट फेर्न आतंक मच्चाउने र यातना दिने गरे । अर्थात हामीले अल्लाहको पूजा छाडेर मूर्ति पूजा गरौं र अवैध वस्तुहरुलाई हलाल सम्झौं भन्ने उनीहरूको चाहना छ । जब उनीहरुले हामीमाथि ठूलो अत्याचार गरे, हाम्रो लागि धर्ती साँघुरो पारिदिए र हाम्रो धर्म विरुद्ध अवरोध खडा गरे अनि हामी तपाईंको देशमा आयौं र अरुमाथि तपाईंलाई प्राथमिकता दिंदै तपाईंको शरणमा बस्न उचित ठान्यौं । साथै तपाईंकहाँ हामीमाथि अत्याचार गरिने छैन भन्ने आशा पनि राखेका थियौं ।

नजाशी राजाले सोध्यो : त्यो ईशदूतले जे ल्याएको छ त्यसमध्ये तिमीहरुसँग केही छ ? जाफरले जवाफमा भने : हजूर ! छ । नजाशी राजाले भन्यो : केही मलाई पनि पढेर सुनाऊ । जाफरले कुरआनबाट मरयम नामक अध्यायको प्रारम्भिक श्लोक पाठ गरे । त्यो सुनेर नजाशी राजा अति रोयो जसले गर्दा उसको दाह्री पनि भिज्यो । नजाशीका सबै पादरीहरु पनि जाफरको पाठ सुनेर रोए जसले गर्दा उनीहरुको कागज भिज्यो । त्यसपछि नजाशीले भन्यो यो ईशवाणी र ईसामाथि अवतरण भएको ईशवाणी त एउटै दियोबाट निस्केको रहेछ जस्तो छ । त्यसपछि नजाशीले अमर बिन आस र अब्दुल्लाह बिन रविआसँग भन्यो : तिमीहरु फर्केर जाओ । म यिनीहरुलाई तिमीहरुको सुपुर्द गर्न सक्दिनँ साथै न यहाँ यिनीहरुको विरुद्धमा कुनै चाल चल्न सकिन्छ ।

उनको आदेशमा ती दुवै त्यहाँबाट निस्के । तर फेरि अमर बिन आसले अब्दुल्लाह बिन रबिआसँग भन्यो : उनीहरुको बिरुद्धमा भोलि यस्तो कुरा रच्ने छु जसले उनीहरुको कुभलो गर्ने छ । अब्दुल्लाह बिन रबिआले भने : होइन यस्तो न गर । उनीहरुले हाम्रो विरुद्ध गरे पनि ती हाम्रै कबिलाका मानिस त हुन् । तर अमर बिन आस आफ्नो सोचमा दृढ रह्यो ।

भोलिपल्ट अमर बिन आसले नजाशीसँग भन्यो : हजुर ! यिनीहरुले इसाको बारेमा धेरै नराम्रो कुरा गर्छन् । उसको कुरा सुनेर नजाशीले मुसलमानहरुलाई फेरि बोलाउन पठायो । उसले इसाको बारेमा मुसलमानहरुले के भन्छन् भन्ने कुरा सोध्न खोज्यो । त्यस पालि मुसलमानहरु आत्तिए तर यिनीहरुले परिणाम जे भए पनि सत्य नै बोल्ने अठोट गरे । अतः जब मुसलमान नजाशीको दरबारमा उपस्थित भए र उसले प्रश्न गरेपछि जाफरले जवाफ दिंदै भने : हामी इसाको बारेमा त्यही कुरा भन्छौं जुन हाम्रा ईशदूतले लिएर आउनु भएको छ । अर्थात् ईसा अल्लाहका भक्त,

उसका ईशदूत, उसको आत्म र उसको त्यो शब्द हुन् जसलाई अल्लाहले स्वच्छ कुमारी मरयमभित्र हालेका थिए ।

त्यो कुरा सुनेर नजाशीले भूँइबाट एउटा सिन्को उठायो र भन्यो : ईश्वरको कसम ! इसाको बारेमा तिमीले जे भन्यौ ईसा त्यसभन्दा एक सिन्को पनि बढी थिएनन् । त्यसमा पादरीहरुले असहमती जनाए । नजाशीले भन्यो : चाहे तिमीहरु असहमत होऊ ।

त्यसपछि नजाशीले मुसलमानहरुसँग भन्यो : जाओ ! तिमीहरु मेरो राज्यमा अमन शान्तिमा छौ । जसले तिमीहरुलाई गाली दिन्छ त्यसमाथि जरिमाना लगाइने छ । तिमीहरुमध्ये कसैलाई सताएर त्यसको बदलामा मलाई सुनको पहाड हात लागे पनि म यस्तो गर्न सक्दिनँ ।

त्यसपछि उसले आफ्नो भारदारसँग भन्यो : यी दुवै जनालाई यिनले ल्याएको कोसेलीका साथ फर्काइदेऊ । मलाई त्यसको कुनै खाँचो छैन । ईश्वरको कसम ! ईश्वरले मलाई मेरो देश फिर्ता गरिदिदा मसँग केही घुस लिएको थिएन अनि मैले उसको मार्गमा घुस किन लिने । अल्लाहले मेरो बारेमा मानिसहरुको कुरा स्वीकार गरेनन् भने मैले अल्लाहको बारेमा किन मानिसहरुको कुरा मान्ने ।

यस घटनालाई वर्णन गर्ने उम्मे सल्माले भन्छिन् : त्यसपछि ती दुवै आफुले लगेको कोसेली लिएर निर्लज्जित भई फर्के । हामी नजाशीकहाँ शान्तिपूर्ण छिमेकी मुलुकको छत्रछायामा बस्यौं ।[१]

यो इब्ने इस्हाकको कथन हो । तर अन्य इतिहासकारहरुले नजाशीको दरबारमा अमर बिन आस बद्रको युद्ध पश्चात् आएका थिए भनेका छन् । केहीले अमर बिन आस नजाशीको दरबारमा मुसलमानहरुलाई फिर्ता गर्न दुई पटक गएका थिए भनेका छन् । तर बद्रको युद्ध पश्चात् जाफर र नजाशीबीच कुराकानी भएको थियो भन्ने जुन विवरण बयान गरिन्छ त्यो लगभग त्यही हो जुन इब्ने इस्हाकले हब्शा प्रस्थान पश्चात् उपस्थितिको सिलसिलामा बयान गरेका छन् । कुराकानीको प्रसँगले पनि नजाशीकहाँ त्यो मामिला पहिलो पटक भएको कुरा देखाउँछ । तसर्थ मुसलमानहरुलाई वापस फर्काउने प्रयास एक चोटि मात्र भएको थियो भन्ने कुरा नै बढी सही छ । त्यो प्रयास मुसलमानहरु हब्शा प्रस्थान पश्चात् भएको थियो ।

## अत्याचारमा वृद्धि तथा मुहम्मदﷺको हत्या गर्ने षड्यन्त्र

जब बहुदेववादीहरु आफ्नो षडयन्त्रमा सफल हुन सकेनन् र जब हब्शाबाट मुसलमानलाई फिर्ता गर्ने दुष्प्रयास असफल भयो अनि उनीहरु झन बढी क्रोधित बने । मानौं उनीहरु रिस तथा क्रोधले चर्किदै छन् । फलस्वरुप उनीहरुको आतंक

१ इब्ने हेशाम १/३३४–३३८

बढ्दै गयो । मुहम्मदﷺको पिछा गर्न थाले । उनीहरुको गतिविधिले उनीहरु मुहम्मदﷺको हत्या गर्ने सोचमा छन् भन्ने कुरा देखाएको थियो । ताकि जुन कुराले उनीहरुको निद्रा हराम गरेको थियो त्यसको जरो नै उक्कियोस् ।

मुसलमानको बारेमा भन्नु पर्दा मक्कामा रहेका मुसलमानहरुको संख्या अति नै थोरै थियो । उनीहरु प्रतिष्ठित थिए । साथै प्रतिष्ठित व्यक्तिको शरणमा थिए । उनीहरुले आफ्नो इस्लामलाई लुकाएका थिए । सम्भवत: उनीहरु अत्याचारीहरुको नजरबाट टाढा बस्थे । यसरी जोगिएर हिँडदा पनि आतंक र अत्याचारबाट पूर्ण रुपमा बच्न सकेनन् ।

मुहम्मदﷺले तिनै अत्याचारीहरुको सामुन्ने नमाज पढ्ने अल्लाहको उपासना गर्नुहुन्थ्यो । गोप्य तथा खुलेआम दुवै तरिकाले उनीहरुलाई इस्लामको निमन्त्रणा दिनुहुन्थ्यो । त्यसबाट उहाँलाई कुनै कुराले रोक्न सक्दैन थियो । किनभने त्यो त ईशदूतत्वको एउटा अंश थियो । त्यस दायित्वमा उहाँ त्यो बेलादेखि खटिनु भएको थियो जब अल्लाहले आफ्नो आदेश अवतरण गरेका थिए । इश्वाणी छ : जुन कुराको आदेश गरिन्छ त्यसलाई कडाईका साथ बयान गरिदेऊ र बहुदेववादीहरुको परवाह नगर ।

त्यसै परिस्थितिले गर्दा बहुदेववादीहरुले उहाँलाई जुनसुकै बखत पनि छेड्छाड् गर्न सक्थे । साथै उनीहरुको योजनालाई रोक्ने कुनै साधन थिएन । केवल मुहम्मदﷺको व्यक्तिगत प्रतिष्ठा तथा उहाँको प्रार्थना थियो । त्यसका साथसाथै अबु तालिबको इज्जत थियो । उनीहरुले नराम्रो गरे भने त्यसको परिणाम ठीक हुने छैन र सबै हाशिमी सन्तान उनीहरुको विरुद्ध डटने छन् भन्ने कुरा उनीहरुले बुझेका थिए ।

तर उनीहरुको मनमा उपरोक्त कुराहरुको कुनै असर बाँकी थिएन । उनीहरुलाई मुहम्मदﷺको आह्वानको अगाडि आफ्नो धार्मिक अहंकार र मूर्तिपूजा परम्परा अस्तव्यस्त हुनेछ भन्ने कुरा लागेपछि उनीहरुले उहाँको विरुद्धमा उच्छृंखल क्रियाकलाप गर्न थाले । ती घटनाहरु हदिस तथा मुहम्मदﷺको जीवनीसँग सम्बन्धित पुस्तकमा उल्लेख छन् जसले ती घटनाहरु त्यही युगमा घटेका थिए भन्ने साक्षी दिन्छन् । ती घटनाहरुको एक दुई वटा नमूना यस प्रकार छन् : एक दिन अबू लहबको छोरा उतैबाले ईशदूतकहाँ आएर भन्यो : म कुरआनी श्लोकको इन्कार गर्छु । त्यो श्लोक निम्न छ :

النجم إذا هوى ثم دنا فتدلى

त्यस पश्चात् ऊ उदण्डता मच्चाउँदै उहाँमाथि झम्टियो । उसले उहाँको कुर्ता च्यात्यो र उहाँको अनुहारमा थुक्यो । यद्यपि थुक उहाँमाथि परेन । त्यसै अवसरमा उहाँले उसको कुभलोको लागि प्रार्थना गर्दै भन्नुभयो : हे अल्लाह यस व्यक्तिमाथि आफ्नो कुकुरहरुमध्ये कुनै कुकुर लगाइदेऊ । ईशदूतको त्यो प्रार्थना कबूल भयो ।

फलस्वरुप उतैबा एक पटक कुरेशका केही मानिसहरुको साथमा जाँदै थियो । उनीहरु सिरियाको जरका भन्ने ठाउँमा पाल टाँगेर बास बस्न लाग्दा रातको समयमा एउटा बाघ त्यहाँ आयो । उतैबाले देख्नासाथ भन्यो : हाय मेरो नास हुने भो । यसले मलाई खाने भो । किनभने मुहम्मदले मलाई श्रापेको छ । म सिरियामा छु तर उसले मक्कामै बसेर मलाई मार्दैछ । मानिसहरुले उतैबालाई आफ्नो र आफ्ना जनावरहरुको बीचमा सुताए । तर राती बाघ सबैलाई नाघ्दै सीधा उतैबाको नजिक गयो र टाउको बटारेर घाँटी छिनाल्यो ।[१]

एक पटक उक्बा बिन अबी मुऐतले ईशदूत सज्दा गर्दा उहाँको घाँटी जोडले अँठ्यायो जसकारण उहाँको आँखा नै निस्के जस्तो भयो ।[२]

कुरैशका अन्य बदमाशहरुको मनमा पनि ईशदूतलाई समाप्त गर्ने सोच निरन्तर पाकिरहेको थियो । अब्दुल्लाह बिन अमर बिन आसबाट इब्ने इस्हाकले उनको निम्न बयान वर्णन गरेका छन् : एक चोटि बहुदेववादीहरु हतीमनिर जम्मा भएका थिए । म पनि उपस्थित थिएँ । बहुदेववादीहरुले ईशदूत बारे केही कुरा गर्दै भन्न थाले । त्यस व्यक्तिको बारेमा हामीले जुन धैर्यता अपनाएका छौं त्यसको उदाहरण छैन । वास्तवमा हामीले उसको विषयमा ठूलठूला कुरामा धैर्य गरेका छौं । त्यो कुराकानी चलिरहँदा ईशदूत त्यहाँ आइपुग्नुभयो । उहाँले त्यहाँ आएर सबैभन्दा पहिला हज्रे अस्वदलाई चुम्नुभयो त्यसपछि काबाको तवाफ (परिक्रमा) गर्दै जाँदा बहुदेववादीहरुको छेउबाट हिँडनुभयो । उनीहरुले केही भनेर लान्छना गरे । त्यसको प्रभाव उहाँको अनुहारमा मैले देखें । त्यस पश्चात् फेरि त्यहाँबाट हिँडदा बहुदेववादीहरुले पहिला भैं लान्छना गरे । मैले त्यसको प्रभाव पनि उहाँको अनुहारमा देखें । त्यसपछि तेस्रो पल्ट फेरि त्यहाँबाट जाँदा बहुदेववादीहरुले उहाँलाई हिंसा गरे । यस पल्ट भने ईशदूत अडिनुभयो र भन्नुभयो : हे कुरैशका मानिसहरु ! सुन ? त्यो हस्तीको कसम जसको हातमा मेरो प्राण छ । मैले तिमीकहाँ त्याग लिएर आएको छु ।

उहाँको त्यस भनाइबाट मानिसहरु मौन भए । मानौं हरेक मान्छेको टाउकामा चरा बसेको छ । आखिरकार उहाँप्रति सबैभन्दा बढी क्रोधित व्यक्तिले पनि उत्तम शब्द बोलेर उहाँसँग दया तथा क्षमा याचना गर्न थाल्यो । उसले भन्थ्यो : अबुल कासिम ! जानुहोस् । तपाईं कहिल्यै पनि अबुझ हुनु भएन ।

अर्को दिन फेरि कुरैशहरु भेला भएर उहाँको बारेमा चर्चा गरिरहँदा उहाँ आइपुग्नुभयो । हेर्दा हेर्दै सबै जना एकजुट भएर उहाँमाथि झम्टे र उहाँलाई घेरे । त्यहाँ मैले एक जनालाई उहाँको गलामा रहेको दोसल्ला समातेको देखें । उसले

---

१ अब्दुल्लाह नजदीको मुख्तसर सिरतुर्रसुल १३५
२ अब्दुल्लाह नजदीको मुख्तसर सिरतुर्रसुल ११३

समातेर जोडले तान्न थाल्यो । अबू बकर उहाँलाई बचाउन लागिपरे र उनले रुँदै भने : के तिमीहरुले एक जनालाई मेरो पालनहार अल्लाह हो भनेको अभियोगमा हत्या गर्न खोजेका छौ ? त्यस पश्चात् उनीहरुले उहाँलाई छाडेर भागे । अब्दुल्लाह बिन अमर बिन आस भन्छन् : मैले देखे अनुसार कुरैशको तर्फबाट मुहम्मदﷺलाई दिइएको यो सबैभन्दा ठूलो पीडा थियो ।[१]

सहीह बुखारी नामक हदिसमा उर्वा बिन जुबैरको वयान वर्णन गरिएको छ । उनी भन्छन् : मैले अब्दुल्लाह बिन अमर बिन आससँग बहुदेववादीहरुले ईशदूतप्रति गरेको सबैभन्दा ठूलो अभद्र व्यवहार बारे सोधेँ । जवाफमा उनले भने : ईशदूत काबानिर रहेको हतिममा नमाज पढिरहँदा उक्बा बिन अबी मुऐत आयो । उसले आउने बितिकै आफ्नो कपडा उहाँको घाँटीमा हालेर जोडले घाँटीमा अँठ्यायो । ठीक त्यसै बेला अबू बकर आए र उसको पाखुरा समातेर धक्याए । उसलाई ईशदूतबाट छुट्याएर भने : तिमीहरुले एक जनालाई मेरो पालनकर्ता अल्लाह हो भनेको अभियोगमा हत्या गर्न खोजेका छौ ? [२]

अस्मामार्फत वर्णन गरिएको हदिसमा थप विवरण यस प्रकार छ : अबू बकरको कानमा आफ्नो साथीलाई बचाओ भन्ने चित्कार सुनियो । उनी फटाफट हामीबाट निस्के । उनको टाउकोमा चार वटा चुल्ठो थियो । उनले भने : तिमीहरुले एक जनालाई मेरो पालनकर्ता अल्लाह हो भनेको अभियोगमा हत्या गर्न खोजेका छौ ? बहुदेववादीहरु ईशदूतलाई छोडेर अबू बकरमाथि आक्रमिक भए । उनी त्यहाँबाट फर्कदा उनको अवस्था अति नै दयनीय थियो । उनको कपालको चुल्ठो मुसार्दा कपाल हातमा झर्थ्यो ।[3]

## हमजाह इस्लाममा प्रवेश हुँदै

मक्काको वातावरणमा हिंसा र आतंकको कालो बादल छाएकै बेला अचानक बिजुली चम्कियो र उत्पीडितहरुको मार्ग प्रकाशमय भयो । अर्थात् हमजाह मुसलमान भए । उनी इस्लाममा प्रवेश गरेको कुरा ईशदूतत्वको छैठौं वर्षको अन्त्यको हो । सम्भवतः उनी जिल हिज्जको महिनामा मुसलमान भएका थिए ।

उनी इस्लाममा प्रवेश गर्नुको कारण यस प्रकार छ : एक दिन अबू जहल सफा पहाडनिर उहाँको नजिकबाट हिँड्दै थियो । उसले उहाँलाई लान्छना गर्दै अपशब्द बोल्यो । ईशदूत मौन हुनुभयो र केही पनि भन्नु भएन तर त्यस पश्चात् त्यसले उहाँको टाउकोमा ढुंगाले हान्यो जसले गर्दा उहाँलाई चोट लाग्यो र रगत पनि

---

१ इब्ने हेशाम १/२८९,२९०
२ सही बुखारी १/५४४
3 अब्दुल्लाह नजदीको मुख्तसर सिरतुर्रसूल ११३

बग्यो । त्यसपछि काबामा कुरैशी सभामा गएर बस्यो । अब्दुल्लाह बिन जिद्आनकी एक जना दासिकाले सफा पहाड स्थित आफ्नो घरबाट त्यो सम्पूर्ण दृश्य हेरिरहेकी थिइन् । हमजाह शिकार गरी वाण बोकेर फर्केपछि उनले उनीसँग अबू जहलको सम्पूर्ण क्रियाकलाप सुनाइन् । हमजाह रिसले भड्के । उनी कुरैशका सबैभन्दा शक्तिशाली र बलिया जवान थिए । घटना बारे सुन्ना साथ अबु जहललाई भेटने बित्तिकै उसलाई ठीक पार्छु भनी दौडदै आए । फलस्वरुप मस्जिद हरममा प्रवेश गरी सीधा उसको अगाडि उभिएर भने : हे पदुवा ! तैले मेरो भतिजोलाई गाली गरेको हो ? अब म पनि उसैको धर्ममा छु । अनि उनले वाण प्रहार गरी जोडले हाने जसले गर्दा उसको टाउकोमा नराम्रो चोट लाग्यो । त्यसपछि अबू जहलको कबिला बनू मख्जूम र हजरत हमजाहको कबिला बनू हाशिमका मानिसहरु एक अर्काको विरुद्ध निस्के । अबु इमारहलाई छोडिदेऊ किनभने मैले वास्तवमा उसको भतिजोलाई धेरै नराम्रो गाली गरेको थिएँ भनेर अबु जहलले उनीहरुलाई शान्त पाऱ्यो ।" ।[1]

प्रारम्भमा हमजाहले आफ्नो प्यारो भतिजोलाई किन अपमान गरियो भन्ने झोकमा इस्लाम स्वीकारे तर अल्लाहले उनको छाती खोलिदिए अनि उनले इस्लामलाई बलियोसँग समाते । उनी मुसलमान भएपछि मुसलमानहरुलाई इज्जत तथा शक्तिको अनुभुति भयो ।

## उमर इस्लाममा प्रवेश हुँदै

अत्याचार एवं अपराधको कालो बादलले ढाकेको त्यसै वातावरणमा फेरि एउटा बिजुली चम्कियो । त्यसको उज्यालो पहिलाभन्दा बढी चहकिलो थियो । अर्थात् उमर मुसलमान भए । उनले इस्लाममा प्रवेश गरेको कुरा ईशदूतत्वको छैठौं वर्षको हो ।[2] उनी हमजाहले इस्लाम स्वीकारेको केवल तीन दिनपछि मुसलमान भएका थिए । ईशदूतले उनको बारेमा उनले इस्लाम स्वीकारुन् भनेर प्रार्थना पनि गर्नु भएको थियो । तिर्मिजी नामक हदिसको पुस्तकमा इब्न उमरमार्फत वर्णन गरिएको छ जसलाई सही मानिएको छ । तिब्रानीमा इब्ने मसऊदमार्फत अनससँग उधृत गर्दै भनिएको छ ईशदूतले भन्नुभयो : "हे अल्लाह ! उमर बिन खताब र अबू जहल बिन हिशाममध्ये जुन तिम्रो नजरमा प्रिय छ त्यो व्यक्तिद्वारा इस्लामलाई शक्ति प्रदान गरिदेऊ ।"[3]

अल्लाहले उहाँको प्रार्थना स्वीकार गरे । फलस्वरुप उमर मुसलमान भए । अल्लाहको नजरमा ती दुवैमध्ये प्रिय उमर थिए ।

---

१ इब्ने हेशाम १/२९१,२९२
२ इब्ने जौजीको तारिख उमर बिन खत्ताब ११
3 तिर्मिजी २/२०९

उमरले इस्लाम स्वीकारे सम्बन्धी सबै कथनहरुलाई नियाल्ने हो भने उनको मनमा इस्लाम विस्तारै विस्तारै जागेको कुरा स्पष्ट हुन्छ । ती कथनहरुको सारांश वर्णन गर्नुभन्दा पहिला उमरको स्वभाव,भावना एवं अनूभूतिहरुलाई संक्षिप्तमा प्रस्तुत गर्नु उचित होला ।

उमर आफ्नो कट्टर स्वभावका कारण प्रसिद्ध थिए । मुसलमानहरुले लामो समयसम्म उनीबाट किसिम किसिमका पीडाहरु भोल्नु परेको थियो । उनमा जिद्दी भावनाहरु रहेको देखिन्छ । एकातिर उनले पुर्ख्यौली संस्कारलाई बढो सम्मान गर्दथे साथै खेल तमाशा गर्न मन पराउँथे भने अर्कोतिर धार्मिक मामिलामा मुसलमानहरुको दृढता र त्यस मार्गमा आउने कठिनाइमा उनीहरुको धैर्य शक्तिलाई आश्चर्य तथा सकारात्मक दृष्टिले हेर्थे । उनीभित्र एक जना बौद्धिक व्यक्तिको मनमा उब्जने शंका एवं सन्देहको एउटा सिलसिला थियो । त्यस कुराले इस्लामले जुन कुराको निमन्त्रणा दिएको छ त्यो उत्तम एवं स्वच्छ छ भन्ने कुरा तर्फ उस्काउँथ्यो । तसर्थ उनको स्वभाव कहिले भावुक बन्ने र कहिले सेलाउने गर्थ्यो ।

उमरले इस्लाम स्वीकारे सम्बन्धी सम्पूर्ण कथनहरुको सार यस प्रकार छ : एक दिन राती उनलाई घरबाहिर रात बिताउनु पर्‍यो । उनी हरममा आए र काबाको पर्दाभित्र पसे । त्यस बेला ईशदूत नमाज पढिरहनु भएको थियो । नमाजमा कुरआनको अल हाक्कह नामक अध्याय पाठ गरिरहनु भएको थियो । उमरले कुरआन सुन्न थाले र त्यसको रचनाप्रति उनलाई आश्चर्य लाग्यो । स्वयम उनी भन्छन् : मैले मनमनै भने ,मुहम्मद त कवि हुन् । जस्तै कुरैशले भन्ने गर्छन् । ठीक त्यसै बेला उहाँले निम्न श्लोक पाठ गर्नुभयो जसको अनुवाद यस प्रकार छ :

“त्यो त एउटा बुजुक ईशदूतको भनाइ हो । त्यो कुनै कविको भनाइ होइन । तिमीहरुमध्ये थोरै मान्छेले स्वीकार गर्दछन् ।”

उमर भन्छन् मैले मनमनै भनें : ओहो ऊ त ज्योतिषी हो । ठीक त्यसै बेला उहाँले कुरआनबाट एउटा श्लोक पाठ गर्नुभयो जसको अनुवाद यस प्रकार छ :
“यो कुनै ज्योतिषीको कथन होइन । तिमीहरुमध्ये कमैले उपदेश स्वीकार गर्छौ । यो त ब्रम्हाण्डका पालनहार अल्लाहको तर्फबाट अवतरण भएको हो ।”

उमर भन्छन् : त्यसै बेला मेरो मनमा इस्लामले बास लियो ।[१]

उमरको मनमा इस्लामको बृक्षारोपण भएको त्यो पहिलो मौका थियो । त्यस बेलासम्म उनीभित्र अज्ञानी भावना,परम्परागत पक्षपात र पूर्ख्यौली धर्मको महानता हुँदा हुँदै पनि मनभित्र उर्लेको सत्यको नै विजय भयो । परम्परालाई परवाह नगरी उनी इस्लामको पक्षमा र इस्लामी शत्रूको विरुद्धमा खडा भए ।

१ इब्ने जौजीको तारिख उमर बिन खत्ताब पृ.६, इब्ने हेशाम १/३४६–३४८

उनी आफ्नो कठोर स्वभाव र ईशदूतप्रति प्रचुर शत्रुताका कारण एक दिन मुहम्मदﷺको हत्या गर्ने मनसायले तरबार लिएर निस्केका थिए । तर बाटोमा जाँदै गर्दा उनको भेट नुऐम बिन अब्दुल्लाह अल खाम अदवी[१] वा बनी जहरा[२] वा बनी मख्जूमको[३] कुनै व्यक्तिसँग भयो । उसले उमरलाई रिसाएको अवस्थामा देखेर सोधे कहाँ जाँदै छौ ? उनले भने : मुहम्मदﷺको हत्या गर्न । उसले भन्यो : मुहम्मदﷺलाई हत्या गरेर बनू हाशिम र बनू जुहराहबाट कसरी बच्न सक्छौ ? उमरले भने : लाग्छ तिमी पनि आफ्नो धर्म छाडेर अधर्मी भइसकेका छौ । उसले भन्यो : उमर ! एउटा अनौठो कुरा भनुँ ! तिम्रो बहिनी र जुवाइँले पनि तिम्रो धर्म छोडेर अधर्मी भइसकेका छन् । त्यो कुरा सुनेर उमर रिसले चुर हुँदै सीधै बहिनी जुवाइँको घरतिर लागे । त्यहाँ उनीहरूलाई खब्बाब बिन अरतले कुरआनको तहा नामक अध्याय पढाइरहेका थिए । कुरआन पढाउनका लागि खब्बाब त्यहाँ आउने जाने गर्थे । उमर आएको चाल थाहा पाउना साथ खब्बाब घरभित्र लुके भने उमरकी बहिनी फातिमाले धर्मग्रन्थ लुकाइन् । तर उमरले घर नजिक पुगेर खब्बाबले पाठ गरेको सुनिसकेका थिए । त्यसकारण उनले सोधे : सानो सानो स्वर सुनेको थिएँ के को स्वर हो ? उनीहरूले भने : केही पनि होइन । हामीले एक आपसमा कुराकानी गरिरहेका थियौं । उमरले भने : मलाई लाग्छ तिमी दुवै अधर्मी भइसकेका छौ । जुवाइँले भने : ल ठिक छ जेठान ! यदि सत्यता तपाईंको धर्मबाहेक अरुको धर्ममा भए के गर्ने ? त्यो कुरा सुन्ना साथ उमर आफ्नो जुवाइँमाथि झम्टे र उनलाई अभद्र तरीकाले लछारे । उनकी बहिनी फातिमाले अगाडि बढेर आफ्नो श्रीमानलाई बचाउन लाग्दा बहिनीलाई नै झापड हाने जसले गर्दा उनको अनुहार नै रक्ताम्य भयो । इब्ने इस्हाकको कथन अनुसार उनको टाउकोमा चोट लागेको थियो । बहिनीले आवेगमा भनिन् : उमर ! तिम्रो धर्म बाहेक अरुको नै धर्म सत्य छ भने के गर्ने त ? म गवाही दिन्छु कि अल्लाह बाहेक कोही पूज्य छैन र म गवाही दिन्छु कि मुहम्मदﷺ अल्लाहका सन्देष्टा हुन् । यो कथन सुनेर उमरलाई निराशापनको बादलले ढाक्यो र आफ्नो बहिनीको अनुहार रक्ताम्य भएको देखेर बिस्मात भयो । उनले भने : तिमीहरुले जुन किताबको पाठ गरेका थियौ मलाई पनि पढ्न देऊ । बहिनीले भनिन् : तपाईं अपवित्र हुनुहुन्छ । यस किताबलाई छुन पवित्र हुनुपर्छ । उठ्नु स्नान गर्नु । उमर उठेर स्नान गरे अनि किताब लिएर बिस्मिल्लाहिर्रहमानिर्रहीम पढे । उनले भने : यो त बडो पवित्र नाम रहेछ । त्यसपछि कुरआनको तहा नामक अध्ययाबाट केही श्लोक पढे जसको अनुवाद यस प्रकार छ :

---

१ इब्ने हेशाम १/३४४
२ जौजीको तारिख उमर बिन खत्ताब १०, अब्दुल्लाह नजदीको मुख्तसर सिरतुर्रसुल १०३
3 अब्दुल्लाह नजदीको मुख्तसर सिरतुर्रसूल १०२

(म नै अल्लाह हुँ । म बाहेक कोही पूज्य छैन तसर्थ मेरो पूजा गर र मेरो स्तुती गर्न नमाज पढ ।) उनले भने : यो त अति उत्तम शुभसन्देश हो । मलाई मुहम्मदﷺको ठेगाना बताऊ !

उमरको कुरा सुनेर खब्बाबले भित्रबाट बाहिर निस्केर भने : उमर खुशी होऊ । ईशदूतले बिहिबारको दिन राति तिम्रो सम्बन्धमा जुन प्रार्थना गर्नु भएको थियो अर्थात (हे अल्लाह ! उमर बिन खत्ताब वा अबू जहल बिन हिशामद्वारा इस्लामलाई शक्ति पुऱ्याउनु ) यो त्यही हो । यतिखेर ईशदूत सफा पहाड नजिकको घरमा बस्नु भएको छ ।

त्यसो सुन्ना साथ उमरले आफ्नो तरबार बोकेर घरको नजिक आएर ढोका ढक्ढकाए । एक जनाले उठेर ढोकाको घर्राबाट चियाउँदा उमरलाई तरबार बोकी त्यहाँ उभिएको देखे । तुरुन्तै ईशदूतलाई जानकारी दिए । त्यसपछि सम्पूर्ण साथीहरू जम्मा भए । हमजाहले सोधे : के कुरो हो ? मानिसहरूले भने : उमर आएका छन् । हमजाहले भने : उमर मात्र छन् ? त्यसो भए ढोका खोलिदेऊ । ऊ यदि भलाइको मनसायले आएको छ भने उसलाई स्वागत छ यदि ऊ कुनै नराम्रो मनसायले आएको छ भने उसैको तरबारले उसलाई सिद्धयाइने छ । ईशदूत भित्र बसिरहनु भएको थियो । त्यहाँ उहाँमाथि ईशवाणी अवतरण भइरहेको थियो । ईशवाणी अवतरण भइसकेपछि उहाँ उमरनिर जानुभयो । सभाकक्षमा उनीसँग वार्तालाप भयो । उहाँले उनको कपडा र तरबारको फित्ता समातेर भन्नुभयो : उमर ! के तिमी त्यस बेलासम्म सुध्रिदैनौ जबसम्म अल्लाहले तिमीमाथि त्यो तिरस्कारयुक्त एवं घृणित तथा चेतावनीपूर्ण प्रकोप वर्षाउँदैन जुन वलीद बिन मुगीराले भोगिसकेको छ ? हे अल्लाह ! यो उमर बिन खत्ताब हो । हे अल्लाह ! इस्लामलाई उमर बिन खत्ताबद्वारा शक्ति तथा प्रतिष्ठा प्रदान गर । उहाँको त्यस भनाई पश्चात् उमरले इस्लाम स्वीकार्दै भने : अश्हदु अन्न ला इलाह इल्लल्लाह व अन्नक रसूलुल्लाह अर्थात म गवाही दिन्छु कि अल्लाह बाहेक कोही पूज्य छैन र तपाई ईशदूत हुनुहुन्छ । उमरले इस्लाम स्वीकार गरेको घोषणा सुन्ना साथ घरभित्र उपस्थित ईशदूतका साथीहरुले बेसरी अल्लाहु अक्बरको नारा लगाए । त्यो नारा मस्जिद हराममा बसेकाहरुले पनि सुने ।[१]

उमर अति बलवान व्यक्ति भएको कारण उनीसँग मुकाबिला गर्ने साहस कसैले गर्न सक्दैन थियो भन्ने कुरा प्रख्यात छ । यसर्थ उनी मुसलमान भएकाले बहुदेववादीहरूमा कोलाहल मच्चियो । साथै उनीहरुलाई खिन्नता एवं हीनताबोध भयो । अर्कोतिर उनले इस्लाम स्वीकार गर्नाले मुसलमानहरूलाई इज्जत, बल तथा खुशी प्राप्त भयो ।

---

१ जौजीको तारिख उमर बिन खत्ताब ७–१०, इब्ने हेशाम १/३४२–३४६

इब्ने इस्हाकले उमरको भनाई बयान गरेका छन् : म मुसलमान भएपछि मैले मक्कामा मुहम्मदﷺको सबैभन्दा ठूलो र कठोर शत्रू को होला भन्ने बारे सोचेँ । मैले मनमनै अबु जहल होला भनी सोचेँ । त्यसपछि मैले उसको घर गएर उसको ढोका ढक्ढकाएँ । ऊ बाहिर आयो र मलाई देखेर भन्यो : स्वागतम, स्वागतम । के कामले आउनुभयो ? मैले भनेँ : म मुसलमान भएको कुरा तिमीलाई थाहा दिन आएको हुँ । उमरको बयान छ : यो कुरा सुन्नु थियो कि उसले मतिरको ढोका बन्द गरिहाल्यो र भन्यो : अल्लाहले तिम्रो कुभलो गरोस् र जे कुरा तिमीले लिएर आएका छौ त्यो बिग्रोस् ।[१]

इमाम इब्ने जौजीले उमरमार्फत एउटा कथन नक्कल गरेर लेखेका छन् : कोही व्यक्ति मुसलमान हुँदा मानिसहरू उसको पछि परिहाल्थे । उसको पिटाइ गर्थे । उमरले पनि उनीहरुलाई पिट्थे । तसर्थ म पनि मुसलमान भएपछि म मेरो मामा आसी बिन हाशिमकहाँ गएर उनलाई आफु मुस्लिम भएको खबर दिएँ । उनी घरभित्र पसे । त्यसपछि फेरि कुरैशको एक जना ठूला व्यक्तिकहाँ गएँ । शायद उनले अबू जहलतिर इशारा गरे । मैले उसलाई खबर दिएँ ऊ पनि घरभित्र पसिहाल्यो ।[२]

इब्ने हिशाम र इब्ने जौजीको बयान अनुसार उमर मुसलमान भएपछि उनी जमील बिन मुअम्मर जम्हीकहाँ गए । कुरैशको कुरालाई फैलाउनमा ऊ कुरैशमा सबैभन्दा अगाडि थियो । उमरले उसलाई आफु मुसलमान भएको बताए । उसले सुन्ने वित्तिकै ठूलो स्वर गरी खत्ताबका छोरा अधर्मी भइसकेको छ भनेर चिल्लायो । उमर त्यसको पछाडि थिए । उनले भने : यसले झुट बोल्दै छ म त मुसलमान भएको हुँ । मानिसहरू उमरमाथि झम्टन थाले । आपसमा मारपिट शुरु भयो । मानिसहरूले उमरलाई हानिरहेका थिए भने उमरले पनि मानिसहरूलाई हानिरहेका थिए । घाम चर्कियो । उमर थाकेर बसे । मानिसहरू जाइ लागिरहेका थिए । उमरले भने : जे गर्न सक्छौ गर । यदि हाम्रो संख्या तीन सय जति भएको भए मक्कामा कि त तिमीहरू नै रहन्थ्यौ या हामी नै रहन्थ्यौं ।[३]

त्यसपश्चात् बहुदेववादीले उमरलाई मार्ने मनशाय बनाएर उनको घरमा आक्रमण गरे । अतः सहीह बुखारीमा उमरको छोरामार्फत वर्णन गरिएको छ : उमर त्रसित भएर घरभित्र बसेका थिए । त्यसै दौरान अबू अमर बिन आस सहमी आयो । उसले यमनी धर्के च्यादर र रेशमी कुर्ता लगाएको थियो । ऊ कबिला सहमको व्यक्ति थियो र त्यो कबिला अज्ञान कालमा हाम्रो मित्र थियो । उसले सोध्यो के कुरा हो ?

---

१ इब्ने हेशाम १/३४९–३५०
२ जौजीको तारिख उमर बिन खत्ताब ८
3 जौजीको तारिख उमर बिन खत्ताब ८,इब्ने हेशाम १/३४८,३४९

उमरले भने : म मुसलमान भएको छु । त्यसकारण तपाईंको समुदायले मेरो हत्या गर्न खोजेको छ । आसले भन्यो : यो असम्भव कुरा हो । आसको त्यो कुरो सुनेर म निर्धक्क भएँ । त्यसपछि आसले त्यहाँबाट निस्केर मानिसहरूलाई भेट्यो । त्यतिखेर मानिसहरूको भिडले गर्दा उपत्यका खचाखच भरिएको थियो । आसले सोध्यो : कहाँ जाँदै छौ ? मानिसहरूले भने : खत्ताबका छोरालाई खोजेका छौँ जो अधर्मी भएको छ । आसले भन्यो : यो समाधानको बाटो होइन । त्यो कुरा सुनेर मानिसहरूले सोच्न थाले ।[1]

इब्ने इस्हाकको एउटा कथनमा भनिएको छ : उनीहरु एक ढिक्का भएर निस्केका थिए ।[2]

उमरले इस्लाम स्वीकार गर्दा बहुदेववादीले यस्तो गरेका थिए भने बाँकी मुसलमानलाई के गरे होलान् । त्यसको अनुमान मुजाहिदले इब्ने अब्बासमार्फत वर्णन गरेको कुराबाट लगाउन सकिन्छ, उनी भन्छन् : मैले उमरसँग सोधेँ : तपाईंको उपाधि किन फारुक पऱ्यो ? उनले भने : मभन्दा तीन दिन पहिले हमजा मुसलमान भएका थिए । उमरले उनले इस्लाम स्वीकारेको घटना बयान गरी अन्त्यमा भने : म मुसलमान भएपछि मैले भनेँ : हे ईशदूत के हामी सत्यमा छैनौँ जिउँदो अवस्थामा पनि र मर्दा पनि ? उहाँले भन्नुभयो : अवश्य । त्यो हस्तीको कसम जसको हातमा मेरो ज्यान छ, तिमीहरू सत्यमा छौ जीवित अवस्थामा पनि र मरेको अवस्थामा पनि । उमरले भने : अनि मैले भने, अनि के को लागि लुक्ने ? त्यो हस्तीको कसम जसले उहाँलाई सत्य दिएर पठाएको छ हामी अवश्य बाहिर निस्कने छौँ । फलस्वरुप हामी दुई पंक्ति बनाएर उहाँलाई लिएर बाहिर आयौँ । एउटा पंक्तिमा हमजाह थिए भने अर्कोमा म थिएँ । हाम्रो हिँडाइबाट जाँतोको पिठो झै हल्का हल्का धुलो उडिरहेको थियो । यहाँसम्म कि हामी मस्जिद हरममा प्रवेश भयौँ । उमरको बयान छ : मलाई र हमजाहलाई देखेर तिनीहरुको मनमा अहिलेसम्म नलागेको चोट लाग्यो । त्यसै दिनदेखि ईशदूतले मेरो उपाधि फारुक राख्नुभयो ।[3]

मसऊदका छोराको भनाई छ : हामीले काबामा नमाज पढ्न पाउथेनौँ । यहाँसम्म कि उमरले इस्लाम स्वीकार गरे ।[4]

सोहैब बिन सिनान रोमीको बयान छ : उमर मुसलमान भएपछि इस्लाम गोप्य अवस्थाबाट बाहिर आयो । यसको खुलेआम प्रचारप्रसार सुरु भयो । हामीले समूह समूह भएर काबाको छेउमा बस्यौँ । काबाको परिक्रमा गऱ्यौँ र जसले हामी

---

१ सही बुखारी १/५४५
२ इब्ने हेशाम १/३४९
3 जौजीको तारिख उमर बिन खत्ताब ७, ८,
४ अब्दुल्लाह नजदीको मुख्तसर सिरतुर्रसूल १०३

विरुद्ध अवरोध खडा गऱ्यो उसँग हामीले बदला लियौँ उनीहरुले गरेको केही अत्याचारको जवाफ पनि दियौँ ।[1]

मसऊदको छोराको बयान छ : उमरले इस्लाम स्वीकारेदेखि नै हामी शक्तिशाली र स्वाभिमानी बन्यौँ ।[2]

## कुरैशको प्रतिनिधि ईशदूतकहाँ

ती दुबै शक्तिशाली व्यक्ति अर्थात् हमजाह र उमर बिन खत्ताब मुसलमान भएपछि अत्याचार र अन्यायको बादल हट्न थाल्यो र मुसलमानहरूलाई अत्याचार एवं निरंकुशताको शिकार बनाउने बहुदेववादीभित्र जुन मात लागेको थियो त्यसको स्थान बुद्धिविवेकले लिन थाल्यो । तसर्थ बहुदेववादीले मुहम्मदﷺको निमन्त्रणाको लक्ष्यलाई अत्यधिक सहयोग गरी उहाँलाई उहाँको निमन्त्रणा एवं प्रचार प्रसारबाट बञ्चित राख्न मोलतोल गर्न कोसिस गरे । तर ती विचाराहरुलाई उज्यालो जगत उहाँको अगाडि ल्याए पनि त्यो उहाँको निमन्त्रणाको तुलनामा झारपात सरह हुनेछ भन्ने थाहा थिएन । त्यसकारण उनीहरु आफ्नो योजनामा असफल भए ।

इब्ने इसहाकले यजीद बिन जियादमार्फत मुहम्मद बिन कअब कुर्जीको बयान नक्कल गरेका छन् । कअब भन्छन् : उत्बा बिन रबिआ जो समुदायको प्रमुख थियो उसले एक दिन कुरैशको सभामा भन्यो । त्यतिबेला ईशदूत मस्जिद हरममा एक्लै बस्नुभएको थियो : हे कुरैशी हो ! के म मुहम्मदकहाँ गएर उनीसँग वार्तालाप गरुँ ? उनले कुनै कुरो स्वीकार गर्छन् कि । उनले कुनै कुरा स्वीकार गरे भने त्यो दिएर उनलाई हामीबाट रोक्न सक्छौं । यो त्यस समयको कुरो हो जब हमजाह मुसलमान भइसकेका थिए र मुसलमानहरूको संख्या दिन प्रतिदिन बृद्धि हुँदै गएको कुरा बहुदेववादीहरुलाई थाहा थियो ।

बहुदेववादीहरुले भने, अबूल वलीद ! तपाईं जानुहोस् र उनीसँग कुरा गर्नुहोस् । त्यस पश्चात् उत्बा उठ्यो र ईशदूतकहाँ गएर बस्यो र भन्यो : भतिजो हाम्रो समुदायमा तिम्रो जुन प्रतिष्ठा[3] एवं स्थान छ र जुन उच्च वंश छ त्यो तिमीलाई थाहै छ । तिमी हाम्रो समुदायमा एउटा गहन कुरा लिएर आयौ जसले गर्दा हाम्रो समुदायमा फूट परेको छ । उनीहरुको बुद्धिविवेकलाई मूर्ख्याइँ भनेका छौ । उनीहरुको पूज्य वस्तुहरुलाई हिंसा गरेका छौ । उनीहरुको पूर्खालाई नास्तिक ठहर गरेका छौ । यसर्थ मेरो कुरा सुन ! म तिमीसँग केही कुरा राख्छु त्यसमाथि विचार गर । त्यसमध्ये

१ जौजीको तारिख उमर बिन खत्ताब १३
२ सही बुखारी १/५४५
3 त्यो एउटा ठूलो पद थियो

कुनै कुरा स्वीकार गर्छौं कि । ईशदूतले भन्नुभयो : अबूल वलीद ल भन ! म सुन्छु । अबूल वलीदले भन्यो :

भतिजो ! जुन कुरा तिमीले उठाएका छौ यदि त्यसबाट तिमीले धनसम्पत्ति हासिल गर्न खोजेको छौ भने हामीले तिमीलाई यति धेरै धनसम्पत्ति जम्मा गरिदिने छौँ कि तिमी हामीमध्ये सबैभन्दा ठूलो धनाढ्य बन्ने छौ । यदि तिमीले सम्मान तथा प्रतिष्ठा चाहन्छौ भने हामीले तिमीलाई आफ्नो सरदार बनाइदिने छौँ । तिमी बिना कुनै कुराको निर्णय पनि गर्ने छैनौं । यदि तिमीलाई राजा बन्ने मन छ भने हामीले तिमीलाई आफ्नो राजा बनाउन तयार छौँ । तिमीकहाँ जुन भुतप्रेत आउँछ र जसलाई तिमीले देख्छौ त्यसलाई तिमीले भगाउन सक्दैनौ भने हामी त्यसलाई भगाउने उपाय खोज्छौँ । त्यसबाट तिमीलाई निको बनाउँन हामी आफ्नो धनसम्पत्ति खर्च गर्न पनि तयार छौँ । किनभने कहिले कहिले मानिसलाई भुतप्रेत लाग्ने गर्छ र त्यसको उपचार पनि गर्नु पर्छ ।

उत्बाले त्यो कुरो भनिरह्यो र ईशदूतले पनि सुनिरहनुभयो । उसको कुरा सिद्धिएपछि उहाँले भन्नुभयो : अबूल वलीद तिम्रो कुरा सिद्धयो ? उसले भन्यो, सिद्धयो । उहाँले भन्नुभयो : ल अब मेरो सुन ! उसले भन्यो ठिक छ । सुन्छु । उहाँले भन्नुभयो :

शुरु अल्लाहको नामबाट जो अत्यन्तै कृपालु तथा दयालु छन् । हामिम् ! यो दयावान एवं क्षमाशीलको तर्फबाट अवतरण गरिएको हो । यस्तो किताब हो जसका श्लोकहरूको व्याख्या गरिएको छ । अरबी कुरआन ती मानिसहरूका लागि हो जो ज्ञानी छन् । यो कुरआन शुभसूचक तथा सचेतक हो तर प्रायः मानिसहरूले इन्कार गरेका छन् तसर्थ उनीहरूले सुन्दैनन् । उनीहरु भन्छन् जुन कुरातिर तिमीले हामीलाई बोलाइरहेका छौ त्यस बारे हाम्रा हृदयमाथि पर्दा लागेको छ ।”

ईशदूतले निरन्तर पढिरहनु भएको थियो र उत्बा आफ्नो दुबै हातले पछाडि भूइँमा टेकेर चुपचाप सुन्दै थियो । जब उहाँ सजदा गर्ने श्लोकमा पुग्नुभयो अनि उहाँले सजदा गरेर भन्नुभयो : अबूल वलीद ! तिमीले जे कुरा सुन्नु पर्ने हो त्यो सुन्यौ अब तिमीले बुझ नबुझ तिमी नै जान ।

उत्बा उठ्यो र सीधै आफ्ना साथीहरूकहाँ गयो । उसलाई आउँदै गरेको देखेर बहुदेववादीले एकआपसमा भने : अबूल वलीद हामीबाट जुन शानमा गएको थियो त्यो शान उसमा अहिले छैन । अबूल वलीद आएर बसेपछि मानिसहरूले सोधे : अबूल वलीद ! के भयो ? उसले भन्यो : खबर त के हुन्थ्यो र ? मैले एउटा यस्तो संदेश सुनेको छु जुन संदेश मैले कहिल्यै सुनेको थिएन । त्यो न कविता हो, न जादू हो, न भविष्यवाणी । हे कुरैशीहरू ! मेरो कुरा मान र यस विषयलाई ममाथि छाडिदेऊ । त्यो व्यक्तिलाई उसको चालचलनमा छाडेर अलग बस यो मेरो सुझाव हो । मैले उसको जुन संदेश सुनेको छु त्यसबाट कुनै ठूलो घटना घटने छ । यदि

त्यस व्यक्तिलाई अरबले माऱ्यो भने तिमीहरु अरुबाट नासिने छौ । यदि अरबमाथि उसको राज भयो भने उसको राज तिम्रो राज उसको इज्जत तिम्रो इज्जत हुनेछ । उसको अस्तित्व तिम्रो लागि सबैभन्दा बढी गौरवीय हुनेछ । मानिसहरूले भने : अबूल वलीद ! तिमीमाथि पनि उसको बोलीको जादू चले जस्तो छ । उत्बाले भन्यो : त्यो व्यक्ति बारे मेरो धारणा यही हो अब तिमीहरूलाई जे ठिक लाग्छ त्यही गर ।[१]

एउटा अर्को कथन अनुसार ईशदूतले पाठ गरिरहँदा उत्बाले चुपचाप लागेर सुनिरहेको थियो । उहाँले पाठ गर्दै जाँदा निम्न श्लोकसम्म पुगेपछि उत्बा त्रसित भएर झसङ्ग भयो । श्लोकको अनुवाद छ : यदि उनीहरूले इन्कार गरे भने भनिदेऊ म तिमीहरूलाई आद तथा समूदमाथि आएको चट्याङ्ग जस्तो चट्याङ्गको खतराबाट सचेत गर्छु । म तपाईंलाई अल्लाह र नातेदारको माध्यम समातेर भन्छु यस्तो नगर्नु होस् भनेर उत्बाले आफ्नो हात ईशदूतको मुखमा राख्यो । कतै यस्तो आपत आउँछ कि भन्ने उसलाई खतरा थियो । त्यस पश्चात ऊ आफ्नो समुदायतिर गयो र उल्लेखित वार्तालाप गऱ्यो ।[२]

## कुरैशी मुख्याहरुको मुहम्मदﷺसँग वार्तालाप

उत्बाले राखेको प्रस्तावमा ईशदूतले खरो जवाफ दिँदा पनि कुरैशहरू पूर्ण रुपमा निराश भएनन् । किनभने उहाँको जवाफमा उनीहरुको प्रस्तावलाई स्वीकार्ने वा नस्वीकार्ने बारे कुनै प्रष्ट कुरा थिएन । उहाँले कुरआनको केही श्लोकहरुको पाठ गर्नुभयो जसलाई उत्बाले पूर्ण रुपमा बुझ्न सकेन । ऊ जहाँबाट आएको थियो त्यहाँ फिर्ता गयो । त्यसकारण कुरैशीहरुले फेरि आपसमा सल्लाह गर्न थाले । हरेक दृष्टिकोणले समस्या बारे विचारविमर्श गरे । सम्पूर्ण सम्भावनालाई नियाले । अनि एक दिन घाम अस्ताएपछि काबापछाडि जम्मा भए । ईशदुतलाई बोलाए । उहाँ कुनै राम्रो खबर छ कि भनेर छिटोछिटो त्यहाँ आउनुभयो । उहाँ त्यहाँ आएर बसेपछि उनीहरुले त्यही कुरा भने जुन उत्बाले भनेको थियो । उत्बाले एक्लै भनेर उहाँ सन्तुष्ट नभएको हो अब सबै कुरैशी मुख्याहरु मिलेर प्रस्ताव राख्ने हो भने उहाँ सन्तुष्ट हुनेछन् र उहाँले मान्नुहुनेछ भन्ने शायद उनीहरुको सोचाई थियो । तर उहाँले भन्नुभयो : म त्यो होइन जुन तपाईंहरुले सोच्नु भएको छ । म त इशदूत हुँ । मेरो काम अल्लाहको संदेश पुऱ्याउनु हो । यदि तपाईंहरुले स्वीकार्नुभयो भने त्यो तपाईंहरुको लागि लोक तथा प्रलोकमा भाग्यको कुरा हुनेछ । यदि स्वीकार्नु भएन भने धैर्य गर्नुहोस् अल्लाहले तपाईं र मबीच निर्णय गरिदिने छ ।

---

१ इब्ने हेशाम १/२९३,२९४
२ तफ्सिर इब्ने कसिर ६/१५९–१६१

उनीहरुले उहाँसँग भने तपाईं आफ्नो प्रभूसँग हाम्रा यी पहाडलाई मैदान बनाउन, त्यसबाट नदीको मुहान निकाल्न, हाम्रा मृतकलाई जिवित गर्न भन्नु अनि मात्र हामी मान्छौं । त्यसमा ईशदूतले पहिलाको जस्तै जवाफ दिनुभयो ।

त्यसपछि उनीहरुले उहाँसँग भने, तिमीले आफ्नो पालनकर्तासँग एउटा फरिश्ता पठाउन माग गर जसले तिमी ईशदूत भएको गवाही दिओस् । साथै आफ्नो लागि बगैंचा,ढुकुटी, चाँदीका महल पनि माग गरे । त्यसमा पनि ईशदूतले पहिलाको जस्तै जवाफ दिनुभयो ।

त्यसपछि उनीहरुले प्रकोपको माग गर्दै भने, आकाशबाट ईश्वरले किन कुनै एउटा टुक्रा खसाल्दैन । त्यसमा उहाँले भन्नुभयो यदि अल्लाहले चाहयो भने त्यो पनि गर्न सक्छ । त्यसमा उनीहरुले उहाँलाई धम्की दिए जसले गर्दा उहाँ निराश भएर फर्कनुभयो ।[1]

## अबु जहल मुहम्मदﷺको हत्या गर्न अग्रसर

उहाँ त्यहाँबाट उठेर गएपछि अबु जहलले घमण्ड गर्दै उनीहरुसँग भन्यो : कुरैशी दाजु-भाइहरु, तपाईंहरुलाई थाहा छ मुहम्मदले हाम्रो धर्मलाई हिंसा, हाम्रो पूर्खाको बदख्वाई, हामीलाई मुर्ख र हाम्रा देवीदेवताको घृणा गर्न छोडेको छैन । तसर्थ मैले एउटा ठूलो ढुंगा लिएर उसले सज्दा गर्न लाग्दा उसको टाउको फोर्ने अल्लाहको कसम खाएको छु । त्यसपछि चाहे तपाईंहरुले मलाई त्यतिकै छोडनुहोस् वा मेरो सुरक्षा गर्नुहोस् । बनू अब्द मनाफले पनि त्यस पश्चात् जे चाहे गरोस् । मानिसहरुले भने : हामीले तिमीलाई कहिल्यै कुनै घडीमा एकलै छाड्न सक्दैनौं । तिमीले जे गर्न चाहेका छौं गर ।

विहान भएपछि अबू जहल एउटा ठुलो ढुंगा लिएर ईशदूतको प्रतिक्षामा बस्यो । ईशदूत आएर नमाज शुरु गर्नुभयो । कुरैशहरु पनि आ-आफ्नो बैठक कक्षमा आइसकेका थिए र अबू जहलले गर्न खोजेको कारवाही हेर्ने प्रतीक्षामा थिए । ईशदूत सज्दामा गएपछि अबू जहलले ढुंगा लिएर र उहाँ भएतिर गयो । तर उहाँको नजिक पुगेर ऊ पछाडि हट्यो । उसको अनुहारमा त्रास थियो । ऊ यति डराएको थियो ढुंगा उसैको हातमा टाँसिएको थियो । बडो मुस्किलले उसले हातबाट ढुंगा फ्याक्यो । उता कुरैशका केही मानिसहरु उठेर उसको नजिक आएर भन्न थाले : अबूल हकम ! तिमीलाई के भयो ? उसले भन्यो : मैले राति भनेको कुरा गर्न खोजेको थिएँ तर उसको नजिक पुग्दा एउटा ऊँट बिचमा आएर बाधक बन्यो । मैले कहिल्यै त्यो उँटको जस्तो टाउको, घाँटी र दाँत देखेकै थिइनँ । उसले मलाई खान खोजेको थियो ।

---

१ इब्ने हेशाम १/२९५–२९८

इब्ने इस्हाक भन्छन् : ईशदूतले भन्नुभयो : उनी जिब्रइल थिए, अबू जहल नजिक आउँदा उसलाई रोक्थे । [1]

## धार्मिक कुरामा सट्टीपट्टी गर्ने कुरैशीहरुको सोच

जब कुरैशहरु लोभ लालच, धम्की दिने जस्ता कुराहरुमा असफल भए र अबु जहल उहाँको हत्या गर्ने योजनामा असफल भयो अनि बल्ल कुरैशभित्र आफु घेरिएको कठिन परिस्थितिबाट निस्कन कुनै तार्किक निस्कर्षसम्म पुग्नु पर्छ चेतना पलायो । उता ईशदूत बारे उनी वास्तवमा असत्य छन् भन्ने कुराको उनीहरुलाई पूर्ण विश्वास पनि थिएन । जस्तै अल्लाहले भनेका छन् । त्यस बारे उनीहरु सशंकित थिए । तसर्थ इस्लाम र अज्ञानता दुवै एउटै बाटोमा समावेश होस् भनी उनीहरुले धार्मिक कुरामा उहाँसँग सट्टीपट्टी गर्न उचित ठाने । केही लिने र केही दिने नियममा बहुदेववादीहरुले आफ्नो कुरा त्याग गर्ने र केही कुराहरु ईशदूतलाई पनि त्याग्न लगाउने कुरा सोचे । यदि ईशदूतको आह्वान सत्य छ भने उनले त्यो पाउने छन् भन्ने उनीहरुको सोचाई थियो ।

इब्ने इस्हाकको बयान छ, ईशदूत काबाको तवाफ गरिरहनु भएको थियो । अस्वद बिन मुत्तलिब, उमैया बिन खल्फ र आस बिन वायल सहमी उहाँ भएको ठाउँमा आए । उनीहरु आफ्नो समुदायका प्रमुख थिए । उनीहरुले भने : हे मुहम्मद आउनु जसलाई तपाइँ पुजा गर्नु हुन्छ हामी पनि पुज्छौं र जसलाई हामी पुज्छौं तपाइँ पनि पुज्नु । यसरी हामी सबैले एउटा कुरामा सहमति गरौं । तपाइँको ईश्वर हाम्रो देवीदेवता भन्दा उत्तम भए हामीले आफ्नो कुरा प्राप्त गरिसक्नेछौं । यदि हाम्रो देवीदेवता तपाइँको ईश्वरभन्दा उत्तम भए तपाइँले आफ्नो कुरा प्राप्त गरिसक्नु हुनेछ । त्यस कुराको खण्डन गर्दै अल्लाहले कुरआनको एउटा पूरा सुरह **सुरह काफिरुन** अवतरण गरे । भनिएको छ : तिमीले जुन करालाई पुजेका छौ त्यसलाई म पुज्न सक्दिनँ भन्ने कुरा बताएको छ । [2]

अब्द बिन हुमैदले इब्ने अब्बासमार्फत वर्णन गरेका छन् । कुरैशले उहाँसँग भने, यदि तपाइँले हाम्रो देवीदेवतालाई लाभ लिने नियतले छुनुभयो भने हामी पनि तपाइँको ईश्वरको पूजा गर्नेछौं । यस कुराको खण्डन गर्दै सुरह काफिरुन अवतरण गरियो । [3]

इब्ने जरिरले इब्ने अब्बासमार्फत वर्णन गरेका छन् । बहुदेववादीहरुले उहाँसँग भने, एक वर्ष तपाइँले हाम्रो देवीदेवताको पूजा गर्नु अनि हामी पनि तपाइँको

---

१ इब्ने हेशाम १/२९८
२ इब्ने हेशाम १/३६२
3 अल दारुल अल मन्सुर ६/६९२

ईश्वरको पूजा गर्नेछौं । त्यस कुराको खण्डन गर्दै अल्लाहले निम्न श्लोक अवतरण गरे (तपाईँ भनिदिनु, हे अज्ञानी हो, के तिमीहरुले मलाई अल्लाहबाहेक अरुको पूजा गर्न भन्दैछौ ? [१]

अल्लाले खरो एवं निर्णायक जवाफ दिएर उनीहरुको लज्जास्पद कुराको जरोदेखि नै काट गरे । त्यति हुँदा पनि कुरैशीहरु पूर्ण रुपमा निरासिएनन् । उनीहरु अझै आफ्नो धर्मका केही कुराहरु त्याग्न तयार भए । त्यसमा उनीहरुले मुहम्मद ﷺ ले जुन शिक्षा लिएर आएका छन् त्यसमा परिवर्तन हुनुपर्छ भन्ने शर्त लगाए । तसर्थ उनीहरुले भने : यस कुरआन बाहेक अरु कुनै कुरआन ल्याऊ वा त्यसमा केही परिवर्तन गर । अल्लाहले उनीहरुको कुराको जुन जवाफ मुहम्मद ﷺ लाई बताए त्यसबाट त्यो प्रश्नको पनि काट गरिदिए । तसर्थ अल्लाहले जवाफ दिदै भनेका छन् : तपाईँ भनिदिनु, मलाई त्यसमा आफनो् तर्फबाट अलिकति पनि परिवर्तन गर्ने कुनै अधिकार छैन । मैले त्यसैको अनुशरण गर्छु जुन ममाथि अवतरण हुन्छ । मलाई आफ्नो प्रभुको अवज्ञा गर्न डर लाग्छ किनभने मलाई महाप्रलयको दण्डको डर छ ।

अल्लाहले उपरोक्त साझेदारी गर्दा हुने जोखिमलाई निम्न श्लोकमा बताएका छन् । हामीले तिमीतर्फ गरेको ईशवाणीका कारण तिमीले हाम्रो बारेमा केही कुरा भनेको भए उनीहरुले तिमीलाई पथभ्रष्ट गर्न सक्थे । त्यसो गरेको भए उनीहरुले तिमीलाई घनिष्ट मित्र बनाउँथे । यदि हामीले तिमीलाई दृढता प्रदान नगरेको भए तिमी उनीहरुप्रति लचिलो हुने थियौ । हामीले तिमीलाई यस संसारमा पनि दोब्बर सजाय दिने थियौँ र प्रलोकमा पनि दोब्बर सजाय दिने थियौँ । हाम्रो अगाडि तिमीलाई कसैले सहयोग गर्न पनि सक्थेन । (कुरआन)

## बहुदेववादीहरुलाई चिन्ता र यहुदीहरुसँग सम्पर्क

उल्लेखित वार्तालाप कुराकानी, सट्टीपट्टी र त्याग गर्ने कुरामा बहुदेववादीहरु असफल भएपछि उनीहरुको लागि सम्पूर्ण मार्गहरु अंधकार भए । उनीहरु अब के गर्ने भन्ने बारे चिन्तित् थिए । त्यसै अवसरमा उनीहरुको एक जना पिचाश नजर बिन हारिसले उपदेश दिदै भन्यो : हे कुरैशी, तिमीहरु यस्तो कठिनाइँमा जेलिएका छौ जसबाट तिमीहरू निस्कन सकेका छैनौ । मुहम्मद युवक अवस्थामा तिमीहरुको सबैभन्दा राम्रो मान्छे मानिन्थ्यो । सबैभन्दा उत्तम चरित्रको मानिन्थो र सबैभन्दा इमान्दार पनि । तर अहिले उनी प्रौढ अवस्थामा तिमीहरुकहाँ केही कुरा लिएर आएपछि तिमीहरुले उनलाई जादुगर भन्दैछौ । उनी कदापि जादुगर होइनन् । किनभने हामीले जादुगर देखेका छौं । उनीहरुले गर्ने जन्त्रमन्त्र पनि देखेका छौं । तिमीहरुले उनलाई ज्योतिषी भन्यौ । उनी ज्योतिषी पनि होइनन् । किनभने हामीले

---

१ तफ्सिर इब्ने जरिर तब्री

ज्योतिषीलाई पनि देखेका छौँ । ज्योतिषीले गर्ने क्रियाकलाप पनि देखेका छौँ । तिमीहरुले उनलाई कवि भन्यौ । उनी कवि पनि होइनन् किनभने हामीले कविहरुलाई पनि देखेका छौँ र कविहरुको कविता पनि सुनेका छौँ । तिमीले उनलाई पागल भन्यौ । उनी पागल पनि होइनन् । किनभने हामीले पागलहरुलाई पनि देखेका छौँ । पागलपन पनि देखेका छौँ । उनले पागलले झैं कुरा पनि गर्दैनन् । उनले उल्टो पाल्टो कुरा पनि गर्दैनन् । हे कुरैशीहरु , तिमीहरुमाथि अल्लाहको तर्फबाट ठूलो प्रकोप आइलागेको छ ।

ईशदूत हरेक चुनौतीको अगाडि डटेका, हरेक लोभ तथा प्रलोभनलाई त्यागेका, हरेक कुरामा साँचो देखिएका र सत्यता,पवित्रता उच्च चरित्रताका पहिलादेखि नै धनी भएकाले उनीहरुभित्र उनी ईशदूत हुन् भन्ने कुरामा झन बढी विश्वास लाग्न थाल्यो । तसर्थ उनीहरुले यहुदीहरुसँग सम्पर्क गरी उहाँको बारेमा राम्रोसँग निर्क्योल गर्ने निर्णय गरे । नजर बिन हारिसले कुरैशीहरुलाई उपदेश दिएका कारण कुरैशीहरुले उहाँको बारेमा सत्यतथ्य पत्ता लगाउन उसैलाई केही व्यक्तिहरु लिएर मदिनाका यहुदीहरुकहाँ पठाए । ऊ मदिना आएपछि यहुदी विदहरुले उनीहरुलाई मुहम्मदﷺसँग तीन वटा कुराहरु बारे प्रश्न गर्न भने । यदि उसले सही जवाफ दियो भने ऊ ईशदूत हो नत्र पाखण्डी । पहिलो प्रश्न, विगतमा केही युवकहरु वितेका छन् उनीहरुको घटना बारे ऊसँग सोध । किनभने त्यो घटना अति अचम्मको छ । दोस्रो प्रश्न, जुन व्यक्तिले पुर्व पश्चिमको यात्रा गरेको थियो उसको बारेमा सोध । तेस्रो प्रश्न, आत्मा के हो त्यस बारे सोध ।

उसले मक्का फर्केर भन्यो, मैले तिमीहरु र मुहम्मदबीच रहेको विवाद बारे निर्णायक कुरा लिएर आएको छु । त्यसपछि उसले यहुदीहरुको कुरा सुनायो । फलस्वरुप कुरैशले उहाँसँग ती तीन वटा प्रश्न गरे । केही दिनपछि कुरआनको कहफ नामक अध्याय अवतरण भयो जसमा युवक तथा यात्रा गर्ने व्यक्तिहरु बारे वर्णन गरिएको थियो । युवकहरु अस्हाबे कहफ अर्थात गुफावासी थिए । यात्रा गर्ने व्यक्ति जुल करनेन् थियो । आत्मा बारे सोधिएको प्रश्नको जवाफ कुरआनको अध्याय इस्रामा अवतरण भयो । त्यसपछि कुरैशहरु उहाँ साँचो ईशदूत हुन् भन्ने कुरामा स्पष्ट भए । त्यति हुँदा पनि ती अत्याचारीहरुले अवज्ञाकै मार्ग अपनाए । [१]

बहुदेववादीहरुले ईशदूतको इस्लाम प्रचारप्रसारमा जसरी अवरोध खडा गरेका थिए यो त्यसको एउटा संक्षिप्त चित्रण मात्र हो । उनीहरुले ती सम्पूर्ण संघर्षहरु निरन्तर जारी राखेका थिए । उनीहरुले आफ्नो रणनीतिलाई बदलिरहेका थिए । कहिले कडाइ गर्थे भने कहिले नम्रता,कहिले लडाइँ त कहिले सम्झौता गर्ने गर्थे, कहिले चेतावनी दिन्थे भने कहिले प्रलोभन, कहिले बहुला कुकुर झैं भुक्थे त कहिले

---

१ इब्ने हेशाम भाग १

नम्र हुन्थे, ,कहिले चिप्ला कुराहरु त कहिले झगडा गर्थे, कहिले रक्तपात मच्चाउन तत्पर हुन्थे भने कहिले आफ्नो धर्म त्याग गर्न खोज्थे,कहिले गर्जन्थे भने कहिले सांसारिक प्रलोभन देखाउँथे । उनीहरुलाई न कतै शान्ति थियो न उनीहरु आफ्नो हठ त्याग्न तयार थिए । ती सम्पूर्ण गतिविधिको उद्देश्य केवल इस्लामी प्रचारप्रसारलाई रोक्नु र टुक्रिएको बहुदेववादलाई पुनः स्थापित गर्नु थियो । ती सम्पूर्ण कुनीति तथा दुष्प्रयास गर्दा पनि उनीहरु आफ्नो लक्ष्यमा असफल रहे । उनीहरुको अगाडि केवल एउटा विकल्प थियो सशस्त्र युद्ध । तर यसले विवादलाई सल्टाउनको सट्टा बल्झाउने कुरामा दुईमत थिएन । साथै रक्तपात युद्धको श्रृखंला शुरु भएको भए त्यसले सम्पूर्ण समुदायलाई सखाप पार्थ्यो । त्यसकारण बहुदेववादीहरु चिन्तित थिए ।

## अबू तालिब र उनको खानदानको विचार

जब कुरैशीहरुले अबु तालिबसँग मुहम्मदﷺको हत्या गर्न मुहम्मदﷺलाई आफ्नो हवाला गर्न माग गरे, त्यसैगरी जब उनीहरुको गतिविधिले अबुतालिबको सम्झौता तथा संरक्षणको परवाह नगर्ने संकेत दियो र उक्बा बिन अबी मुऐत, अबु जहल र उमर बिन खत्ताब जस्ता व्यक्तिले जुन योजना बनाए त्यो देखेर अबु तालिबले आफ्नो हजुर बाजे अब्द मनाफका दुई छोरा हाशिम र मुत्तलिबका खानदानलाई भेला गरी सबै मिलेर मुहम्मदﷺलाई सुरक्षा दिन आग्रह गरे । अबू तालिबको त्यो कुरा अरबी मर्यादालाई कायम राख्दै दुवै खानदानका सारा मुस्लिम तथा गैर मुस्लिम व्यक्तिहरुले स्वीकार गरे । काबामा बसेर त्यस बारे प्रतिज्ञा गरे । तर अबू तालिबको भाइ अबू लहबले मात्र त्यस कुरालाई स्वीकार गरेन । उसले सम्पूर्ण खानदानबाट अलग भई बहुदेववादी कुरैशको साथ दियो ।[१]

१ इब्ने हेशाम भाग १

# पूर्ण सामाजिक बहिष्कार

## अन्याय र अत्याचार गर्ने घोषणा

बहुदेववादीहरूका सम्पूर्ण बहानाहरू सिद्धिए र उनीहरूले बनु हाशिम र बनु मुत्तलिबलाई मुहम्मदﷺको सुरक्षामा खटेको देखेर झन आत्तिए । अतः उनीहरूले महसब स्थित बनु केनानहकहाँ जम्मा भएर मुहम्मदﷺको हत्या गर्ने वा उहाँलाई आफ्नो सुपुर्द नगरिएसम्म बनु हाशिम विरुद्ध उनीहरूसँग विवाह,व्यापार नगर्ने, उनीहरूसँग उठ्बस तथा मिलजुल नगर्ने, उनीहरूको घरमा आवतजावत नगर्ने र बोलचाल नगर्ने घोषणा गरे । बहुदेववादीहरूले त्यस बहिष्कारको एउटा दस्तावेजी पुस्तक तयार गरे जसमा उनीहरूले ईशदूतको हत्या गर्न बहुदेववादीहरूलाई नसुम्पिएसम्म बनु हाशिमको कुनै पनि सम्झौता कहिल्यै नस्वीकार्ने, उनीहरूसँग कुनै प्रकारको नम्र व्यवहार नगर्ने उल्लेख गरेका थिए ।

इब्ने कैयम भन्छन्, : त्यो घोषणा पत्र मन्सूर बिन इक्रिमाह बिन आमिर बिन हाशिमले लेखेको थियो भन्ने भनाई छ । अन्य भनाई अनुसार नजर बिन हारिसले लेखेको थियो । तर सही भनाई अनुसार त्यो घोषणा पत्र लेख्ने व्यक्ति बुगैज बिन आमिर बिन हाशिम थियो । ईशदूतले त्यसको कुभलो होस् भनेर प्रार्थना गर्नु भयो फलस्वरूप त्यसको हात डुंडो भयो ।[1]

जे होस् त्यो घोषणा पत्र पारित भएपछि काबाभित्र टांगियो । त्यसपछि अबु लहब बाहेक बनु हाशिम र बनु मुत्तलिबका मुस्लिम तथा गैर मुस्लिम मानिसहरू शिअबे अबी तालिबमा नजरबन्द गरिए । त्यो घटना ईशदूतत्वको सातौं वर्ष मोहर्रमको महिनामा घटेको थियो ।

## तीन वर्ष शिअबे अबी तालिब घाटीमा

त्यस बहिष्कारले गर्दा परिस्थिति झन जटिल भयो । खाद्य वस्तु एवं सामानको आयात बन्द भयो । किनकि मक्कामा जुन खाद्य वस्तु वा खरिद बिक्रीको सामान आउँथ्यो त्यसलाई बहुदेववादीहरूले फटाफट खरिद गरिहाल्थे । त्यसकारण बन्दीहरूको अवस्था अति नै दयनीय भयो । बाध्य भएर उनीहरूले पात र छाला खानु पऱ्यो । भुकमरीले गर्दा भोकले तडपिएका बालबच्चा तथा महिलाहरूको रुवाईको स्वर उपत्यका बाहिरसम्म सुनिन्थ्यो । उनीहरूकहाँ बढो मुश्किलले कुनै चीज पुग्न पाउँथ्यो, त्यो पनि लुकीछिपी । उनीहरू प्रतिष्ठित महिना बाहेक बाँकी दिनहरूमा आवश्यक सामानहरू खरिद गर्न उपत्यकाभन्दा बाहिर निस्कदैनन् थिए । यिनीहरूले यद्यपि बाहिरबाट मक्का आएका व्यापारी समूहसँग सामान खरिद गर्न पाउँथे तर

१ जादुल मआद २/४६, सही बुखारी हदिस नं १५८९

सामानको मूल्य मक्काबासीहरूले यति वृद्धि गरिदिएका थिए कि नजरबन्द गरिएकाहरूको लागि केही खरिद गर्नु मुश्किल पर्थ्यो ।

हकिम बिन हेजाम जो खदिजाको भतिजो थिए उनले कहिलेकाहीँ आफ्नो फुपूको लागि गहुँ पठाउँथे । एकपटक अबू जहलसँग उनको भेट भयो । उसले अन्न पठाउन रोक लगायो तर अबूल बख्तरीले उसँग कुरा गरेर उनलाई आफ्नो फुपूकहाँ गहुँ पठाउन दियो ।

अबू तालिबलाई ईशदूतबारे सदैव चिन्ता लाग्थ्यो । त्यसैले मानिसहरू आ-आफ्नो ओछ्यानमा सुतेपछि उनले ईशदूतलाई आफ्नो ओछ्यानमा सुत्न भन्थे । किनभने उहाँको हत्या गर्ने योजना बनाएको व्यक्तिले उहाँ कुन ठाउँमा सुत्दा रहेछन् भन्ने कुराको ख्याल गर्थ्यो । मानिसहरू सुतिसकेपछि अबू तालिबले उहाँको ठाउँ परिवर्तन गरिदिन्थे । अर्थात् आफ्ना छोरा, भाइ या भतिजो मध्येबाट कसैलाई उहाँको ओछ्यानमा सुताइदिन्थे र उहाँलाई उनीहरूमध्ये कसैको ओछ्यानमा सुत्न भन्थे । यस्तो घेराबन्दी हुँदाहुँदै पनि ईशदूत र अरू मुसलमानिहरू हजका दिनहरूमा बाहिर निस्कन्थे र हजको लागि आउनेहरूसँग भेट गरी इस्लामको निमन्त्रणा दिन्थे । त्यस अवसरमा अबू लहबले जुन गतिविधि गर्ने गर्थ्यो त्यसको चर्चा पछिल्लो पृष्ठहरूमा वर्णन भइसकेको छ ।

## करारपत्र च्यातिन्छ

तीन वर्ष त्यस्तै अवस्थामा बित्यो । त्यस पश्चात् ईशदूतत्वको १०औँ[१] वर्षको मोहर्रम महिनामा करारपत्र च्यातियो र अत्याचारपूर्ण बाचा एवं करार पनि समाप्त गरियो । किनभने त्यस करारबाट केही कुरैशहरू सहमत थिए भने केही कुरैशहरू शुरूदेखि नै रुष्ठ थिए । करारबाट रुष्ट बनेका कुरैशहरूले त्यो करारपत्र च्यात्ने प्रयत्न गरे ।

त्यसको अगुवा कबिला बनु आमिर बिन लुईका हिशाम बिन अमर नामी एक व्यक्ति थियो । उसले रातको अँध्यारोमा लुकीछिपी शिअबे अबी तालिबभित्र अन्नपात पठाएर बनू हाशिमको मद्दत पनि गर्ने गर्थ्यो । त्यो व्यक्ति जुहैर बिन अबी उमैया मख्जूमीकहाँ गयो । जुहैरकी आमा आतिका अब्दुल मुत्तलिबकी छोरी अर्थात् अबू तालिबकी बहिनी थिइन् । हिशामले उसँग भन्यो :जुहैर ! के तिमीलाई यो सह्य छ तिमी मजाले खाऊपिऊ र तिम्रो मामाको जे गति छ त्यो तिमीलाई थाहा छ ? जुहैरले भन्यो : म एक्लैले के गर्न सक्छु र ? यदि मेरो साथमा कोही अर्को व्यक्ति

---

१ यसको प्रमाण के हो भने अबु तालिबको मृत्यु करारपत्र च्यातिएको ६ महिनापछि भएको हो । उनको मृत्यु रजब महिनामा भएको थियो । जुन इतिहासकारहरुले उनको मृत्यु रमजानको महिनामा भएको भनेका छन् उनले अबु तालिबको मृत्यु करारपत्र च्यातिएको ८ महिना केही दिनपछि भएको बताएका छन् । दुवै अवस्थामा करारपत्र च्यातिएको महिना मोहर्रम पर्दछ ।

पनि भए त म त्यो करारपत्र च्यात्न तयार हुन्थेँ । हिशामले भन्यो : एक जना तयार छ । जुहैरले सोध्यो को ? हिशामले भन्यो : म । जुहैरले भन्यो : त्यसो भए एक जना अरू खोज ।

त्यसपछि हिशाम मुत्इम बिन अदीकहाँ गयो । अब्द मनाफका सन्तान बनू हाशिम र बनू मुत्तलिबको मुत्इमसँग घनिष्ट सम्बन्ध रहेको चर्चा गर्दै उसले मुत्इमलाई त्यस अत्याचारमा कुरैशको स्वरमा स्वर किन मिलाएको हो भनेर लान्छना गर्न थाल्यो । स्मरण रहोस् मुत्इम पनि अब्द मनाफको नै वंशबाट थियो । मुत्इमले दुःखका साथ भन्यो : म एक्लोले के गर्न सक्छु र ? हिशामले भन्योः एक जना व्यक्ति तयार छ । मुत्इमले सोध्यो : को हो ? हिशामले भन्यो : म । मुत्इमले भन्यो : त्यसो भए एक जना तेस्रो व्यक्ति खोज । हिशामले भन्यो : त्यो पनि गरिसकेको छु । सोध्यो, त्यो को हो ? भन्यो जुहैर बिन अबी उमैया । मुत्इमले भन्यो :ठीक छ , एक जना अरू खोज । त्यसपछि हिशाम बिन अमर अबूल बख्तरी बिन हिशामकहाँ गयो र त्योसँग पनि त्यसै प्रकारको कुराकानी गऱ्यो जस्तो मुत्इमसँग गरेको थियो । उसले भन्यो : कोही यसको समर्थन गर्नेवाला पनि छ ? हिशामले भन्यो : छ । सोध्यो :को ? उसले भन्यो : जुहैर बिन अबी उमैया, मुत्इम बिन अदी र म । उसले भन्यो : ठीक छ । अब पाँचौं व्यक्ति खोज । त्यसको लागि हिशाम, जम्आ बिन अस्वद बिन मुत्तलिब बिन असदकहाँ गयो र त्यससँग कुराकानी गर्दै बनू हिशामको नाता र तिनको अधिकारको कुरा गऱ्यो । उसले भन्यो : जुन कार्यकोलागि मलाई बोलाइ रहेका छौ त्यससँग अरू कोही सहमत छ ? हिशामले ठोकुवा गर्दै जवाफ दियो र सबैको नाम भन्यो । त्यस पश्चात ती मानिसहरू हजूनको नजिक भेला भएर करारपत्र च्यात्ने भनेर आपसमा अठोट गरे । जुहैरले भन्यो :म प्रारम्भ गर्छु अर्थात् सबैभन्दा पहिले मैले नै मुख खोल्नेछु ।

बिहान भएपछि सबै जना सामान्यतया आफ्नो आफ्नो गुटमा गए । जुहैर पनि एक जोर कपडा लगाएर त्यहाँ पुग्यो । उसले पहिले काबाको सात चक्कर परिक्रमा गऱ्यो । त्यसपछि मानिसहरूसँग भन्यो : मक्काबासीहरू हो ! हामीले खाना खाने, कपडा लगाउने तर बनू हाशिम सखाप हुने ? उनीहरूलाई न केही किन्न दिइएको छ न उनीहरूबाट केही किन्ने अनुमति छ । अल्लाहको कसम खाएर भन्छु म यस्तो अत्याचारपूर्ण तथा नातामा फाटा पार्ने करारपत्र नच्यातिकन बस्न सक्दिन ।

अबू जहल जो मस्जिद हरमको एक कुनामा बसेको थियो उसले भन्यो : तिमीले गलत कुरा गर्दै छौं । अल्लाहको कसम त्यसलाई च्यात्न मिल्दैन । त्यसमा जम्आ बिन अस्वदले भन्यो : अल्लाहको कसम तिमीले धेरै गलत कुरा गर्दै छौ । यो करारपत्र लेख्दा पनि हामी सहमत थिएनौ । अबूल बख्तरीले कम्मर कस्दै भन्यो : जम्आले ठिक भनिरहेको छ । यसमा जे लेखिएको छ त्यसबाट न हामी राजी छौं न

त्यसलाई मान्न तयार छौं । त्यस पश्चात् मुत्इम बिन अदीले भन्यो : तिमी दुवैले ठिक भनेका छौ र यसको विरुद्ध भन्नेहरू गलत छन् । हामी यस करार पत्र र यसमा जे लेखिएको छ त्यसबाट अल्लाहको अगाडि दोषमुक्त भएको कुरा प्रकट गर्छौं । हिशाम बिन अम्रले पनि त्यही कुरा गऱ्यो । त्यो देखेर अबू जहलले भन्यो : हुन सक्छ यो कुरा राति तय गरियो होला र यसको सल्लाह यहाँ नभई अन्य ठाउँमा गरियो होला । अबू तालिब पनि पवित्र हरमको एउटा कुनामा बसिरहेका थिए । अल्लाहले करार पत्रमा किरा (Insect) पारिदिए छन् । ती किराहरूले अत्याचार एवं निरंकुशता र सङ्कीर्णता सम्बन्धी सम्पूर्ण कुराहरू नष्ट गरिदिएका छन् र केवल अल्लाहको नाम बाँकी छोडेका छन भन्ने खबर अल्लाहले ईशदूतलाई दिएका थिए । त्यसपछि ईशदूतले आफ्नो काका अबु तालिबलाई त्यो कुरा भन्नुभयो र अबु तालिब त्यही कुरा भन्न आएका थिए । उनले भने : ईशदूतले यो यो कुरा भन्नु भएको छ यदि उनी झुटा ठहरिए भने म तिमी र उनको बीचबाट हट्ने छु र तिमीहरूलाई जे गर्न मन लागेको छ त्यही गर तर यदि उनी सत्य ठहरिए भने तिमीले बहिष्कार र अत्याचारलाई त्याग्नु पर्छ । त्यो कुरा सुनेर कुरैशले तपाईको कुरा न्यायोचित छ भनेर भनेका थिए । अबू जहल र बाँकी मानिसहरूको रिसराग हटेपछि मुत्इम बिन अदी करार पत्र च्यात्नको लागि उठ्दा वास्तवमा किराले त्यसलाई नष्ट गरेको र केवल बिस्मिकल्ला हुम्म बाँकी राखेको देखे । जहाँ जहाँ अल्लाहको नाम थियो त्यो बचेको थियो । किराले त्यसलाई खाएको थिएन । त्यसपछि करार पत्र च्यातियो । ईशदूत र बाँकी सम्पूर्ण महाशयहरू शिअबे अबी तालिबबाट निस्केर आए । त्यस अवसरमा बहुदेववादीले उहाँको ईशदूतत्वको एउटा महाचमत्कार देखे । तर पनि तिनको चाल त्यही रह्यो जसको चर्चा कुरआनको निम्न श्लोकमा गरिएको छ : "उनीहरूले कुनै निशानी देखे भने इन्कार गर्थे र जादू हो भन्थे ।" अतः बहुदेववादीले यस निशानीलाई पनि इन्कार गरे र बिद्रोही बाटोमा आफ्ना पाइलाहरू अझै अगाडि बढाए ।[१]

## अबू तालिबकहाँ कुरैशको तर्फबाट अन्तिम प्रतिनिधिमण्डल

ईशदूतले शिअबे अबी तालिबबाट निस्केपछि आफ्नो नीति अनुसार इस्लाम प्रचार प्रसारको काम शुरु गर्नुभयो । बहुदेववादीहरूले बहिष्कारको अन्त्य गरे पनि पहिला झै मुसलमानलाई दबाव दिने र अल्लाहको मार्गबाट रोक्ने क्रम जारी राखेका थिए । अबू तालिब पहिला झै तन मन धन लगाएर आफ्नो भतिजाको समर्थन एवं रक्षामा लागेका थिए । तर उनको उमेर अस्सी वर्षभन्दा बढी भइसकेको थियो । कैयौं वर्षदेखि निरन्तर रूपमा झेलेको दुःख कष्ट, विभिन्न घटना र विशेष गरी घेराबन्दीले उनलाई कमजोर बनाएको थियो । उनी अशक्त भएका थिए । तसर्थ घाटीबाट

१ सही बुखारी १/२१६, जादुल मआद २/१४६, इब्ने हेशाम १/३५०

निस्केपछि केही महिना नबित्दै उनी सक्त बिरामी भए । त्यस बेला बहुदेववादीहरूले यदि अबू तालिबको निधन भइहाल्यो र त्यसपछि हामीले उसको भतिजामाथि कुनै ज्यादती गऱ्यौं भने हाम्रो ठूलो बद्नामी हुनेछ त्यसकारण उनको उपस्थितिमा नै मुहम्मदको बारेमा कुनै निर्णय गर्नु पर्छ भन्ने कुरा गरे । त्यसक्रममा उनीहरू केही कुराहरूमा लचक्ता अपनाउन पनि तयार भए जुन कुराहरुमा पहिला तयार थिएनन् । अतः उनीहरूको एउटा प्रतिनिधि-मण्डल अबू तालिबको सेवामा उपस्थित भयो र त्यो उनीहरूको अन्तिम प्रतिनिधि-मण्डल थियो ।

इब्ने इस्हाक तथा अन्य विद्वानहरूको भनाइ छ : अबू तालिब बिरामी भए । कुरैशले उनको स्वास्थ्य निकै बिग्रेको देखेर आपसमा भने, हेर हमजा र उमर मुसलमान भइसकेका छन् । मुहम्मद ﷺ को धर्म कुरैशको हरेक कबिलामा फैलिसकेको छ । लौ हिँड अबू तालिबकहाँ, उनले आफ्नो भतिजालाई कुनै कुरामा सिमित गरून् र हामीसँग पनि उनको सम्बन्धमा बाचा लिउन् । नत्रभने मानिसहरूलाई हामीले आफ्नो नियन्त्रणमा लिन सक्दैनौं । एक अर्को भनाइ अनुसार : यो बुढो मरिहाल्यो र मुहम्मद ﷺ सँग हाम्रो नराम्रो भयो भने मानिसहरूले पनि हामीलाई नराम्रो सोच्ने छन् भन्ने डर छ । उनीहरूले मुहम्मदलाई छोडिदिए भन्ने कुरा गर्ने छन् उसको विरुद्ध केही गर्न सकेनन् र उसको काका मरेपछि उमाथि वर्षे भन्ने छन् । आखिरकार कुरैशको त्यो प्रतिनिधिमण्डल अबू तालिबकहाँ गयो र उनीसँग कुराकानी तथा छलफल गऱ्यो । पच्चीस जना सदस्यको प्रतिनिधि-मण्डलमा कुरैशका प्रतिष्ठित व्यक्तिहरू थिए, अर्थात् उत्बा बिन रबिआ, शैबाह बिन रबिआ, अबू जहल बिन हिशाम, उमैया बिन खल्फ, अबू सुफ्यान बिन हर्ब लगायत कुरैशका अन्य ठूलाबडा व्यक्तिहरू पनि थिए ।

हे अबू तालिब ! हामीबीच तपाईंको जुन मानमर्यादा एवं स्थान छ त्यो तपाईंलाई राम्ररी थाहा छ र अब तपाईं जुन अवस्थामा हुनुहुन्छ त्यो पनि तपाईंको सामुन्ने छ । यी तपाईंका अन्तिम दिनहरू हुन् कि भन्ने हामीलाई डर लागेको छ । उता हाम्रो र तपाईंको भतिजोबीच जुन मामिला चलिरहेको छ त्यो पनि तपाईंलाई थाहा छ । हामी चाहन्छौं कि तपाईंले उनलाई बोलाउनुहोस् । हाम्रो र उनको बारेमा केही सम्झौता गरिदिनुहोस् अर्थात् उनी हामीबाट अलग होउन् र हामी पनि उनीबाट अलग हुन्छौं । उनले हामीलाई हाम्रो धर्ममा छोडुन् र हामीले पनि उनलाई उनको धर्ममा छोड्छौं । त्यो कुरा सुनेर अबू तालिबले उहाँलाई बोलाउन पठाए र उहाँ आएपछि उनले भने : भतिजो यी तिम्रो समुदायाका सम्मानित मानिसहरू हुन् । तिम्रै बारेमा भेला भएका छन् । यिनीहरू तिमीबाट केही वाचा एवं प्रतिज्ञा चाहन्छन् र तिमीले पनि यिनीहरूबाट केही वाचा एवं प्रतिज्ञा गर । त्यस पश्चात अबू तालिबले दुवै पक्षले एक अर्कालाई हस्तक्षेप नगर्ने भन्ने उनीहरूको प्रस्ताव बारे चर्चा गरे ।

जवाफमा ईशदूतले प्रतिनिधिमण्डललाई सम्बोधित गरेर भन्नुभयो : मेरा कुरा स्वीकार्दा तपाईंहरू अरबका राजा बन्न सक्ने र गैर अरबीहरू पनि तपाईंहरूको अधीनमा हुने भयो भने यसमा तपाईंहरूको के विचार छ ? केही कथनअनुसार उहाँले अबू तालिबलाई सम्बोधन गरेर भन्नुभयो : म यिनीहरूसँग एउटा यस्तो कुरा चाहन्छु जसलाई यिनीहरूले माने भने अरब यिनीहरूको अधीनमा हुनेछ र गैर अरबीहरूले यिनीहरूलाई कर दिने छन् । एउटा अर्को कथन अनुसार उहाँले भन्नुभयो : काका ज्यु ! तपाईं यिनीहरूलाई एउटा यस्तो कुरातिर किन बोलाउनु हुन्न जुन यिनीहरूको हकमा अति राम्रो छ ? अबू तालिबले भने : तिमी यिनीहरूलाई कुन कुरातिर बोलाउन चाहन्छौ ? उहाँलले भन्नुभयो : म एउटा यस्तो कुरातिर बोलाउन चाहन्छु जसलाई यिनीहरूले माने भने अरब यिनीहरूको अधीनमा हुनेछ र गैर अरबीमाथि यिनको सत्ता स्थापित हुनेछ । इब्ने इसहाकको एउटा कथन अनुसार उहाँले भन्नुभयो : तपाईंहरू केवल एउटा कुरो मान्नुहोस् जसको सट्टामा तपाईं अरबको राजा बन्न सक्नु हुनेछ र गैरअरब तपाईंको अधीनमा हुनेछ । उहाँले यस्तो कुरा गरेपछि मानिसहरू अलिकति थामिए र अल्मलाउन थाले । उनीहरू यति लाभदायक कुरा कसरी अस्वीकार गर्ने भन्ने कुरामा दोधार थिए । अन्त्यमा अबू जहलले भन्यो : ल ठिक छ भन, त्यो कुरा के हो ? तिम्रो बुबाको कसम यस्ता एउटा मात्र होइन दश वटा कुरा पनि हामी मान्न तयार छौं । उहाँले भन्नुभयो : लाइलाह इल्लल्लाह अर्थात अल्लाह बाहेक कुनै पूज्य छैन भन । अल्लाह बाहेक जुन वस्तुको तिमीहरू पूजा गर्छौ त्यो त्याग । त्यसमा सबैले जोडदार ताली बजाउँदै भने : हे मुहम्मद तिमीले अधिक देवीदेवताको ठाउँमा केवल एउटा ईश्वर बनाउँन चाहन्छौ ? वास्तवमा तिम्रो कुरा बडो अनौठो छ ।

त्यसपछि उनीहरूले एक आपसमा भने : यो व्यक्ति हाम्रो कुनै कुरा मान्न तयार छैन । जाऊँ , आफ्नै बाउबाजेको धर्ममा डटेर बस्ने हो । अल्लाहले हामी र उनीबीच फैसला गर्नेछ । त्यसपछि उनीहरूले आफ्नो आफ्नो बाटो समाते । त्यस घटना पश्चात् यिनीहरूकै बारेमा कुरआनको निम्न श्लोक अवतरण भयो । अनूवाद छ : स्वाद , उपदेशमुलक कुरआनको कसम छ । इन्कारीहरू घमण्ड र हठमा छन् । हामीले उनीहरूभन्दा पहिला कैयौं समुदायलाई नष्ट गर्‍यौं । उनीहरूले हार गुहार गरे तर त्यो हार गुहार गर्ने समय थिएन । उनीहरूले आफुहरूमध्ये सचेत गर्ने व्यक्ति अर्थात ईशदूत आउँदा आश्चर्य मानेका थिए । इन्कारीहरूले भन्थे, यो झुटा जादूगर हो । के उसले सारा देवीदेवताहरूको सट्टा केवल एउटा ईश्वर खोजेको छ ? यो त ठूलो आश्चर्यको कुरा हो । तिनका ठूलाबडाहरूले भने, हिँड हिँड आफ्नो देवीदेवताप्रति डटेर बस । निसन्देह यस कुरामा कुनै स्वार्थ लुकेको छ । यस्तो कुरा त हामीले अघिल्ला धर्महरूमा कहिल्यै सुनेनौं । यो त केवल मनगढन्ते कुरा हो ।" (स्वाद : १–७)[१]

---

१ इब्ने हेशाम १/४१७, तिर्मिजी हदिस नं ३२३२

## शोकवर्ष

### अबू तालिबको निधन

अबू तालिबलाई रोगले चाप्दै गयो जसले गर्दा उनको त्यसैमा मृत्यु भयो । उनको निधन शिअबे अबी तालिबको घेराबन्दी समाप्त भएको ६ महिना पश्चात् ईशदूतत्वको दशौं [१] वर्ष रजब महिनामा भएको थियो । एक अर्को भनाई अनुसार उनको निधन खदीजाको निधनभन्दा तीन दिन पहिला रम्जान महिनामा भएको थियो ।

सहिह् बुखारीमा मुसैयबमार्फत वर्णन गरिएको छ अबू तालिबको निधन हुन लाग्दा ईशदूत उनकहाँ आउनुभयो । त्यहाँ अबू जहल पनि थियो । उहाँले भन्नुभयो : काका ज्यु तपाईं ला इलाह इल्लल्लाह भनिदिनोस् । केवल यै कथनको आधारमा म अल्लाहकहाँ  तपाईं बारे सिफारिश गर्न सक्छु । अबू जहल र अब्दुल्लाह बिन उमैयाले भने : अबू तालिब ! के अब्दुल मुत्तलिबको धर्म त्याग्छौ त ? फेरि ती दुबैले उनीसँग लगातार कुरा गरिरहे । अबु तालिबले अन्तिममा भने "अब्दुल मुत्तलिबको धर्ममा नै हुन्छु " ईशदूतले भन्नुभयो : मलाई तपाईंको लागि प्रार्थना गर्न रोक नलगाइएसम्म म तपाईंको लागि प्रार्थना गर्नेछु । यसमा कुरआनको श्लोक अवतरण भयो :

مَا كَانَ لِلنَّبِيِّ وَالَّذِينَ آمَنُواْ أَن يَسْتَغْفِرُواْ لِلْمُشْرِكِينَ وَلَوْ كَانُواْ أُوْلِي قُرْبَى مِن بَعْدِ مَا تَبَيَّنَ لَهُمْ أَنَّهُمْ أَصْحَابُ الْجَحِيمِ (التوبة : 113)

ईशदूत तथा आस्थावानहरुले बहुदेववादीहरूको क्षमायाचनाको लागि प्रार्थना गर्न जायज छैन । चाहे उनीहरू नातेदार नै किन नहोउन् । किनभने उनीहरू नर्कवासी हुन् । (अत्तौबा : ११३)

साथै निम्न श्लोक पनि अवतरण भयो : जसलाई तपाईंले चाहनु हुन्छ उसलाई मार्गदर्शन दिन सक्नुहुन्न । (अल् कसस् : ५६)[२]

अबू तालिबले ईशदूतको कति सहयोग गरे र कसरी सुरक्षा दिए भन्ने कुरा यहाँ उल्लेख गर्न आवश्यक छैन । उनी वास्तवमा इस्लामी आह्वानलाई मक्काका सरदार र मूर्खहरूको आक्रमणबाट जोगाउने एउटा किल्ला नै बनेका थिए । तर उनी आफ्नै बाउबाजेको धर्ममा डटिरहे । त्यसकारण उनले पूर्ण सफलता पाउन सकेनन् । अत : सहीह बुखारीमा अब्बास बिन अब्दुल मुत्तलिबमार्फत वर्णन गरिएको छ उनले ईशदूतसँग सोधे : तपाईंले आफ्नो काकाको लागि के गर्नुभयो ? किनभने उनले तपाईंको रक्षा गरे, तपाईंको लागि अरुसँग रिसाए अरूसँग झगडा गरे । उहाँले

---

१ अबु तालिबको मृत्यु कहिले भयो त्यसमा इतिहासकारहरुबीच ठूलो मतभेद छ । मैले रजब महिनामा भएको मानेको छु । अधिकांश इतिहासकारहरुको अनुसार उनको मृत्यु शिअबे अबि तालिबबाट निस्केपछि भएको हो ।

२ सही बुखारी १/५४८

भन्नुभयो : उनी नर्कको कम गहिराइमा पर्नेछन् । म नभएको भए उनी नर्कको सबैभन्दा गहिरो खाल्डोमा हुने थिए ।[१]

अबू सईद खुदरीको बयान छ : एकपटक ईशदूतसँग उनको बारेमा चर्चा हुँदा उहाँले भन्नुभयो : महाप्रलयको दिन उनको निम्ति मेरो सिफारिश काम लाग्नेछ र उनलाई नर्कको एउटा कम गहिरो ठाउँमा राखिने छ । त्यो आगोले उनको दुबै गोलीगाँठालाई मात्र छुनेछ ।[२]

## खदिजाको निधन

अबू तालिबको निधनको दुई महिना पश्चात वा केवल तीन दिनपछि उम्मूल मुमेनिन् खदिजाको पनि निधन भयो । उनको निधन ईशदूतत्वको दसौं वर्ष रमजान महिनामा भएको हो । त्यस बेला उनी ६५ वर्षकी थिइन् र ईशदूत आफ्नो उमेरको पचासौं खुड्किलोमा प्रवेश हुनुभएको थियो ।[३]

खदिजा ईशदूतको लागि अल्लाहको तर्फबाट बहुमूल्य उपहार थिइन् । उनी पच्चीस वर्षसम्म उहाँको साथमा रहिन् र त्यस दौरान उत्पन्न भएका दु:ख र आपत्तिजनक घडीमा उहाँको निम्ति चिन्तित रहन्थिन् । संक्रमण तथा कठिन घडीमा उहाँलाई बल दिने गर्थिन् । संदेश प्रचारप्रसार गर्नमा उहाँको सहयोग गर्थिन् । कठिन संघर्षमा उहाँको सहयात्री बनिन् । उहाँलाई पिरमर्का पर्दा आफ्नो जनधनले उहाँको साथ दिने गर्थिन् । ईशदूतको भनाइ छ : जुन बेला मानिसहरूले मसँग विद्रोह गरेका थिए त्यतिबेला उनले ममाथि विश्वास गरिन् । जुन बेला मानिसहरूले मलाई झुटो ठानेका थिए उनले मलाई सच्चा मानिन् । जुन बेला मानिसहरूले मलाई बाइकाट गरेका थिए उनले मलाई आफ्नो धनसम्पत्तिमा सहभागी बनाइन् । अल्लाहले मलाई उनीबाटै सन्तान दिए तर अन्य श्रीमतीबाट कुनै सन्तान भएनन् ।[४]

सहिह् बुखारी नामक हदिसको किताबमा अबू हुरैराद्वारा वर्णन गरिएको छ :फरिश्ता जिब्रइलले ईशदूतकहाँ आएर भने : हे ईशदूत ! यिनी खदिजा हुन् जो आउँदै छिन् । उनीसँग एउटा भाँडो छ जसमा तरकारी या खाना वा पेय पदार्थ छ । जब उनी उहाँको नजिक आइपुगिन् उहाँले उनलाई आफ्नो पालनकर्ताको तर्फबाट सलाम भन्नुभयो र स्वर्गमा हिराको एउटा भवन छ जहाँ न हुहल्ला हुनेछ न दु:ख तथा थकान हुनेछ भन्ने शुभसुचना दिनुभयो ।[५]

---

१ सही बुखारी १/५४८
२ सही बुखारी १/५४८
३ इब्ने जौजीको तलकिहुल फहुम ७, मन्सुरपूरीको रहमतुल लिल् आलमिन २/१६४
४ मुस्नद अहमद ६/११८
५ सही बुखारी १/५३९

## शोकै शोक

यी दुवै दुःखदपूर्ण घटना एक एक गरी केही दिनको अन्तरालमा घटेका थिए । यसबाट ईशदूतको मनमा शोक तथा पीडाको भावना पलायो । त्यसपछि समुदायको तर्फबाट पनि मिथ्यारोपण हुन थाल्यो । किनभने अबु तालिबको मृत्युपछि उनीहरूमा उहाँलाई खुलेर सताउने चेष्टा बढ्यो । त्यो परिस्थितिले उहाँको शोक एवं पीडामा झन् वृद्धि गऱ्यो । उहाँले तिनीहरूबाट निराश भएर ताइफका मान्छेहरूले निमन्त्रणा स्वीकार्छन कि भनेर ताइफको बाटो समात्नुभयो । तर त्यहाँ पनि न कुनै सहयोगी भेटियो न कुनै बास बस्न दिने व्यक्ति । उल्टै त्यहाँका मानिसहरुले उहाँलाई झन् बढी दुःख दिन थाले । उनीहरूले उहाँमाथि उहाँको समुदायले भन्दा बढी दुर्व्यवहार गर्न थाले ।

मक्कावासीहरूले जसरी ईशदूत विरुद्ध अत्याचार एवं उदण्डता मच्चाएका थिए त्यसरी नै उहाँका साथीहरू विरुद्ध पनि अत्याचारलाई निरन्तरता राखेको कुरा दोहोऱ्याउनु अनुचित नहोला । अत : उहाँको मित्र एवं भेदी साथी अबू बकर सिद्दीक मक्का छोड्न बाध्य भए र उनी हब्शातर्फ लागे । बरके गमाद भन्ने ठाउँमा पुगेपछि इब्ने दगनासँग भेट भयो । उसले आफ्नो शरणमा अबु बकरलाई मक्का वापस फिर्ता लिएर आयो ।[१]

इब्ने इसहाकको बयान छ : अबू तालिबको मृत्यु भएपछि कुरैशले ईशदूतलाई जुन दुःख दिएको थियो उनी जीवित हुँदा त्यसको कल्पना पनि गर्न सकिदैन थियो । एक जना मूर्ख आएर उहाँको शरीरमा माटो हालिदियो । उहाँ त्यस्तै अवस्थामा घर जानुभयो । माटो उहाँको शरीरमा नै थियो । उहाँकी एउटी छोरीले उठेर माटो धोइन् । उनले रुँदै धोइदिन् । ईशदूतले उनलाई सान्त्वना दिँदै भन्नुभयो : छोरी ! नरोऊ अल्लाह तिम्रो बुबाको रक्षा गर्ने वाला छ । अबु तालिब हुँदा कुरैशले मलाई दुखित तुल्याउने कुनै प्रकारको अभद्र व्यवहार गरेका थिएनन् ।[२]

यस्तै किसिमका दुःख,कष्ट एवं पीडाका कारण ईशदूतले त्यस वर्षको नाम आमुल हुज्न अर्थात् शोकवर्ष राख्नुभयो । त्यो साल इतिहासमा त्यसै नामले प्रसिद्ध भयो ।

## उम्मुल मुमेनिन् सौदासँग उहाँको विवाह

त्यसै वर्ष अर्थात ईशदूतत्वको १०औं वर्ष शौवाल महिनामा ईशदूत मुहम्मदﷺले सौदासँग विवाह गर्नुभयो । उनी शुरूमा नै मुसलमान भइसकेकी थिइन् । हब्शातर्फ हिजरत गर्ने क्रममा दोस्रो पटक उनले पनि हिजरत गरेकी थिइन् । उनको

१ तारिखे इस्लाम १/१२०,इब्ने हेशाम १/३७२
२ इब्ने हेशाम १/४१६

पहिलो श्रीमानको नाम सुकरान बिन अमर थियो । उनको श्रीमानले पनि शुरूमा नै इस्लाम कबुल गरेका थिए । सौदाले हब्शाह हिजरत गर्दा उनकै साथमा हिजरत गरेकी थिइन् तर उनको हब्शामा नै निधन भयो । एक अर्को भनाइ अनुसार उनको मक्का वापस आएर निधन भयो । त्यस पश्चात् सौदाको इद्दत सिद्धिएपछि उहाँले उनीसँग विवाह गर्ने प्रस्तावपत्र पठाउनुभयो । त्यसपछि विवाह पनि भयो । उहाँकी पहिली श्रीमती खदीजाको निधनपछि सौदा उहाँकी प्रथम श्रीमती हुन् । केही वर्ष पश्चात् सौदाले आफुसँग उहाँको सहवास गर्ने पालो आइशालाई दिएकी थिइन् ।[१]

## प्रारम्भिक चरणका मुसलमानहरूको धैर्यता र त्यसका कारणहरू

यहाँसम्मको अध्ययन गर्दा एक जना विवेकशील र दरो मुटु भएको व्यक्ति पनि चकित पर्छ । के कारण थियो जसले मुसलमानहरूलाई यति आश्चर्यजनक धैर्यता प्रदान गरेको थियो भन्ने कुराको प्रश्न ठूलठूला बुद्धिजीवीहरूले पनि अनविज्ञ हुँदै सोध्छन् । आखिर मुसलमानहरूले कसरी त्यस्तो निरन्तर क्रूरता सहे जसलाई सुनेर आङ नै सिरिङ्ग हुन्छ र मुटु काँप्छ । पटक पटक उठ्ने र भित्री मनबाट निस्कने यस किसिमका प्रश्नको उचित जवाफ दिन ती कारणहरू बारे संक्षिप्त रूपमा त्यसतर्फ इशारा गर्नु जरूरी छ ।

(१) ती कारणहरूमध्ये सबैभन्दा प्रमुख तथा प्रथम कारण भनेको एक अल्लाहमाथि आस्था र त्यसको पहिचान हो । किनभने मनमा एक अल्लाहमाथि आस्था बसिसकेपछि पहाडसँग पनि टक्राउन सक्छ र जित पनि त्यसैको हुन्छ । जुन व्यक्तिमा दृढ आस्था र विश्वास हुन्छ त्यो व्यक्तिले दुनियाँका ती बाधा अडचन एवं कष्ट कठिनाइँहरूको परवाह गर्दैन जुन बाँध तथा किल्ला भत्काउने बाढीको रूपमा आउने गर्छ । त्यसकारण मुस्लिमले आफ्नो दृढ आस्था एवं विश्वासका सामु यस्ता अप्ठ्याराहरूको कुनै परवाह गर्दैन : गाज त बेकार भई उडिहाल्छ तर मानिसलाई नाफा दिने वस्तु धर्तीमा यथावत रहन्छ । (अर्रअद : १७)

त्यसैगरी एउटा कारणले गर्दा अनेक कारणहरू उत्पन्न हुन्छन् जसले सहनशीलता, धैर्यता र दृढ संकल्पलाई थप उर्जा दिने गर्दछ । जस्तै

(२) आकर्षक नेतृत्व : ईशदूत इस्लामी अनुयायीका मात्र नभई सम्पूर्ण मानवमा सर्वोत्कृष्ट गुरू तथा पथप्रदक हुनुहुन्थ्यो भन्ने कुरा सबैलाई थाहा छ । उहाँको शारीरिक सुन्दरता, आध्यात्मिक प्रतिभा, कृपालु, नैतिकता, उच्च चरित्र र असल बानी एवं आचरणका कारण मानिसहरू उहाँतर्फ आकर्षित हुन्थे । किनभने जुन असल विशेषताका कारण मानिसले अरूको निम्ति ज्यान दिन्छन् ती विशेषताहरूबाट उहाँ मानवमा नै सबैभन्दा बढी सजिनुभएको थियो । उहाँ मान सम्मान एवं प्रतिष्ठा र

१ रहमतुल लिल् आलमिन २/१६५, तलकिहुल फहुम ६

श्रेष्ठताको सर्वोच्च शिखरमा विराजमान हुनुहुन्थ्यो । पवित्रता एवं इमानदारी, सच्चाई लगायत समस्त अन्य भलाईको काममा उहाँ अति उच्च स्थानमा हुनुहुन्थ्यो । त्यसै कारणले गर्दा मुस्लिमलाई मात्र नभएर उहाँको शत्रुलाई पनि उहाँको व्यक्तित्वमाथि पूर्ण विश्वास थियो । उहाँले जे बोल्नुहुन्थ्यो त्यसलाई शत्रूले पनि सत्य मानेर विश्वास गर्थे । सत्य नै रहने छ भनी विश्वास गर्थे । घटनाक्रमहरू त्यसका साक्षी छन् । एक पटक कुरैशका तीन जना व्यक्तिहरू जम्मा भए । उनीहरूमध्ये हरेकले आफ्ना बाँकी दुई जना साथीबाट लुकेर एक्लै कुरआन सुन्ने गर्थ्यो तर पछि हरेकको पोल एक आपसमा खुल्यो । उनीहरूमध्ये एक जना अबू जहल पनि थियो । ती तीन जना एक ठाउँमा भेला भएपछि उनीहरूमध्ये एकले अबुजहलसँग सोध्यो । तिमीले मुहम्मदﷺबाट जे सुन्यौ त्यसको बारेमा तिम्रो विचार के छ ? । अबू जहलले भन्यो : मैले के सुनेको छु र ? कुरो वास्तवमा यो हो । हामी र बनू अब्द मनाफले गौरव एवं प्रतिष्ठामा एक अर्काको तुलना गऱ्यौं । उनीहरूले गरीबहरू एवं दरिद्रलाई खाना खुवाएका छन् भने हामीले पनि खुवाएका छौं । उनीहरूले उपहारमा सवारीहरू दिएका छन् भने हामीले पनि दिएका छौं । उनले मानिसहरूलाई उपहार दिएर सम्मान गरेका छन् भने हामीले पनि त्यस्तै गरेका छौं । जब हामी र उनीहरूबीच घण्टौं घण्टा बहस भयो र हामीहरूको अवस्था रेस गर्ने दुई प्रतिद्वन्दी घोडाहरूको जस्तै भयो अनि बनू अब्द मनाफले भन्यो : हामीभित्र एक जना ईशदूत जन्मेको छ जसमाथि आकाशबाट ईशवाणी अवतरण हुन्छ । हामीले त्यस्तो व्यक्ति कहिले पाउन सक्छौं र ? तर हामी त्यस व्यक्तिमाथि विश्वास गर्ने छैनौं र त्यसलाई सत्य मान्ने छैनौं । [१]

त्यसकारण अबू जहलले भन्ने गर्थ्यो : हे मुहम्मद, हामी तिमीलाई झूटा भन्दैनौं तर तिमीमाथि जुन कुरा अवतरण भएको छ त्यसको विरोध गरेका हौं । त्यसै बारेमा अल्लाहले निम्न श्लोक अवतरण गरे :

فانهم لا يكذبونك ولكن الظالمين بآيات الله يجحدون (الأنعام: ٣٣)

उनीहरूले तपाईंलाई त झुटा ठानेका छैनन् यी अत्याचारीहरुले अल्लाहको श्लोकहरूलाई नै झुटा ठानेका छन् । (अल् अन्आम : ३३)

यस घटनाको विवरण यसअघि नै उल्लेख भइसकेको छ । एकदिन नास्तिकहरूले ईशदूतलाई तीन चोटि लान्छना गरे । तेस्रो पटकमा उहाँले भन्नुभयो ! ए कुरैशका समूह ! म तिमीहरूको माझमा बलिदान अर्थात त्याग लिएर आएको छु । त्यो कुराले उनीहरूलाई यति प्रभावित बनायो जुन व्यक्ति अपराध गर्नमा सबैभन्दा अगाडि थियो उसले पनि राम्रोभन्दा राम्रो कुरा भनेर उहाँलाई खुशी पार्ने कोसिसमा

१ इब्ने हेशाम १/३१६

लाग्यो । त्यसको पनि विवरण आइसकेको छ । जब उहाँ सज्दाको अवस्थामा हुनुहुन्थ्यो उहाँमाथि आन्द्राभूँडी हालियो र उहाँले सज्दाबाट टाउको उठाएपछि त्यस्तो क्रियाकलाप गर्नेहरूको विरोधमा निन्दा गर्दा उनीहरूको अनुहार अँध्यारो भयो । उनीहरू शोकग्रस्त भए । हामीहरू अब बच्न सक्दैनौं भन्ने उनीहरूलाई विश्वास भयो ।

उहाँले अबू लहबको छोरा उतैबालाई निन्दा गर्दा उसलाई पनि अब बाँच्न सकिदैन भन्ने विश्वास भयो र ऊ सिरियातिर जाँदा बाघलाई देख्ना साथ उसले भन्यो : मुहम्मदﷺले मक्कामा बसेर पनि मेरो हत्या गर्ने भए ।

उबै बिन खल्फले उहाँलाई पटक पटक हत्याको धम्की दिने गर्थ्यो । एक पटक उहाँले जवाफमा भन्नुभयो : तिमीले त मेरो हत्या गर्न सक्दैनौ तर अल्लाहले चाहने हो भने मैले तिम्रो हत्या गर्न सक्छु । त्यसको केही दिनपछि नै उहाँले उहुद-युद्धमा उबै बिन खल्फको घाँटीमा भाला हान्नुभयो । यद्यपि उसलाई सामान्य चोट लागेको थियो तर उबै बिन खल्फले निरन्तर भनिरहेको थियो : मुहम्मदले मसँग मक्कामा नै मेरो हत्या गर्न सक्छु भनेको थियो त्यसकारण उसले मलाई थुकेको मात्र भए पनि मेरो ज्यान जाने रहेछ । विवरण अगाडि आउँदै छ ।[1]

त्यसैगरी एकपटक सअद बिन मुआजले मक्कामा उमैया बिन खल्फसँग भने : ईशदूतले भनेको सुनेको छु कि मुसलमानले तिम्रो हत्या गर्नेछन् । उमैया डरायो र निरन्तर डराइराख्यो । अनि उसले आफु मक्काबाट बाहिर ननिस्कने बाचा गर्‍यो । बद्रको युद्धमा अबू जहलले जान बाध्य गरेपछि खतराको संकेत देख्ने वित्तिकै भाग्नका निम्ति उसले मक्काको सबैभन्दा तीव्र गतिमा हिँड्न सक्ने ऊँट किन्यो । उता युद्धमा जान लाग्दा उसकी श्रीमतीले पनि भनी : हे अबू सफ्वान ! यस्रीबका भाइले भनेको कुरा बिर्सिसक्नुभयो के हो ? अबू सफ्वानले जवाफमा भन्यो : बिर्सेको छैन, तर उनीहरूसँग थोरै दूरीसम्म मात्र जानेछु ।[2]

उहाँको शत्रुहरूको अवस्था यस्तो थियो भने उहाँका साथीहरू त झन उहाँका तनमन थिए । अन्तरमनदेखि नै उहाँलाई माया गर्थे । चुम्बक फलाममा टाँसिए झैँ उनीहरू उहाँप्रति आकर्षित हुन्थे । कुनै कविले भनेको छ थियो । अनुवाद छ :

उहाँको रूप हरेक रूपको संगम थियो । उहाँको व्यक्तित्व हरेकको मनमा चुम्बक झै टाँसिएको थियो ।

उनीहरूको उहाँप्रति यस प्रकारको प्रेम एवं आत्मसमर्पण र ज्यानअर्पणका कारण उहाँका साथीहरूले उहाँका लागि गर्दन कटाउनु परे पनि कटाउन तयार थिए तर उहाँको नङ्मा सानो चोट लागेको वा खुट्टामा काँडा बिझेको सहदैनन् थिए ।

---

१ इब्ने हेशाम २/८४
२ सही बुखारी २/५६३

एकदिन अबू बकर सिद्दीकलाई नराम्रो तरिकाले चुटियो । उनलाई नराम्रो तरिकाले हानियो । उत्बा बिन रबिआले उनलाई दुइटा टालो लागेको जुत्ताले पिट्न थाल्यो । विशेष गरी अनुहारमा  निशाना बनायो । त्यसपछि पेटमा चढ्यो । चोट लागेका कारण उनको अनुहार र नाक पनि देखिदैन थियो । त्यसपछि उनको कबिला बनू तइमका मानिसहरूले उनलाई एउटा कपडामा लपेटेर घर लगे । उनीहरूलाई अब उनी बाँच्ने छैनन् भन्ने विश्वास थियो । तर दिन अस्ताउन लाग्दा उनी होशमा आए । होशमा आउना साथ ईशदुतलाई केही त भएको छैन भनेर सोधे । त्यसमा बनू तइमले उनलाई हकारे । लान्छना गरे । उनको आमासँग उनलाई केही  खान देऊ भनेर हिँडे । उनी एक्लै भएपछि उनले अबू बकरसँग खान भनिन् । तर अबू बकरले ईशदुतलाई कस्तो छ भनेर सोधे । मलाई तिम्रो साथीको बारेमा थाहा छैन । अबू बकरले भने : खत्ताबको छोरीकहाँ गएर ऊसँग सोध्नु त । उनी खत्ताबको छोरीकहाँ गएर भनिन् अबु बकरले तिमीसँग मुहम्मदﷺको बारेमा सोध्न पठाएका छन् । खत्ताबकी छोरीले भनिन् : मैले न अबू बकरलाई चिन्दछु न मुहम्मदलाई । खत्ताबकी छोरीले भनिन् : यदि तिमीले चाहन्छौ भने म तिम्रो साथमा तिम्रो छोराकहाँ जान सक्छु । ठिक छ । त्यसपछि खत्ताबकी छोरी उनीसँगै आइन् त्यतिखेर अबू बकर अति दयनीय अवस्थामा थिए । उनी अलि नजिक आएर हेरेपछि उनले अत्तालिएर भनिन् : जुन समुदायले तपाईंको यो दूरगति बनाएको छ त्यो वास्तवमा आतंककारी एवं नास्तिक समुदाय हो । मलाई आशा छ अल्लाहले तपाईंको बदला लिएरै छाड्नेछन् । अबू बकरले सोधे : ईशदूतलाई कस्तो छ ? उनले जवाफ दिइन्  तपाईंको आमाले हाम्रो कुरा सुन्दैछिन् । उनले भने : केही छैन । उनले भनिन् : उहाँ सकुशल एवं स्वस्थ हुनुहुन्छ । कहाँ हुनुहुन्छ ? अरकमको छोराको घरमा हुनुहुन्छ । अबू बकरले भने : ठीक छ । मैले जबसम्म ईशदूतलाई भेटदिनँ तबसम्म खानपिन नगर्ने कसम खाएको छु । खत्ताबकी छोरी चुप भइन् । झकमक्क अँध्यारो भयो र आवत जावत बन्द भएपछि ती दुवै जना मिलेर अबू बकरलाई लिएर निस्के । अबु बकरले उनीहरूको सहारा लिएका थिए । यसरी उनीहरूले अबू बकरलाई ईशदूतको सेवामा पुऱ्याइ दिए ।[1]

प्रेम तथा ज्यानको आहुती दिइएका अरु अदभूत घटनाहरू पनि हामीले यस किताबमा आआफ्नो ठाउँमा वर्णन गर्नेछौं । विशेषत : उहुद युद्धको घटना र खुबैबको बारेमा चर्चा आउने छ ।

---

१ अल बेदायाह वल नेहायाह ३/३०

(३) **कर्तव्यनिष्ठता** : माटोबाट बनेको मानवमा जुन गहन तथा कठिन दायित्व छ त्यसलाई कुनै पनि हालतमा छोड्न सकिदैन भन्ने कुरा ईशदूतका साथीहरूलाई राम्रोसँग थाहा थियो । किनकि त्यसलाई छोडने हो भने हालमा हुँदै गरेका अत्याचार एवं निरंकुशताभन्दा बढी भयानक र विध्वंशकारी परिणाम खेप्नु पर्नेछ । त्यो दायित्व वहन नगर्ने हो भने स्वयम आफुले र सम्पूर्ण मानवताले जुन क्षति भोग्नु पर्नेछ । दायित्व वहन गरेको खण्डमा भोग्नु पर्ने कठिनाई र अप्ठ्याराहरू त्यसको दाँजोमा कुनै चीज होइन भन्ने कुरा पनि उनीहरूलाई थाहा थियो ।

(४) **प्रलोकमाथि आस्था** : यो नै उपरोक्त कर्तव्यनिष्ठताको उर्जा थियो । किनभने ईशदूतका साथीहरूलाई जगतका मालिक अल्लाहको सामुन्ने हाजिर हुनु पर्नेछ, सानो ठूलो हरेक कुराको लेखाजोखा हुनेछ र कि त प्रकृतिक सम्पदाले भरिपूर्ण स्वर्ग हुनेछ कि यातनाले भरिएको नर्क हुनेछ भन्ने कुरामा दृढ विश्वास थियो । त्यस विश्वासको कारण ईशदूतका साथीहरू आशा एवं भयको आधारमा आफ्नो जीवन बिताउँथे । अर्थात् आफ्नो प्रभूको कृपाको आशा राख्थे र उनले दिने यातनाबाट डराउँथे । उनीहरूको अवस्था निम्न श्लोकमा चित्रण गरिए जस्तै हुन्थ्यो :

يوتون ما اتوا وقلوبهم وجلة انهم إلي ربهم راجعون

उनीहरूले जे गर्छन आफ्नो प्रभूकहाँ फर्केर जानु छ भन्ने कुराको मनमा भय लिएर गर्छन् ।

लोकमा सबै कुरा हुँदाहुँदै पनि प्रलोकको दाँजोमा लामखुट्टेको एउटा प्वाँख बराबर पनि छैन भन्ने कुरामाथि उनीहरूलाई पूरा विश्वास थियो । त्यो दृढ विश्वासाले गर्दा दुनियाँका सम्पूर्ण अप्ठ्यारा, कठिनाई तथा तीतामिठा कुराहरू उनीहरुको अगाडि निच थिए । त्यसको उनीहरूलाई कुनै मतलब हुँदैन थियो ।

(५) यिनै आपतकालिन तथा संकट परिस्थितिमा कुरआनका यस्ता अध्याय र श्लोकहरू अवतरण भइरहेका थिए जसमा गहन एवं आकर्षण शैलीमा इस्लामका आधारभूत सिद्धान्तहरूका आधारमा नीतिनियम निर्माण गरिएको थियो । त्यस बखत इस्लामको आह्वान तिनै सिद्धान्तहरूको सेरोफेरोमा केन्द्रित थियो । कुरआनका ती श्लोकहरूमा इस्लामका अनुयायीहरूलाई यस्ता आधारभूत विषयवस्तु बारे शिक्षा दिइयो जसमाथि अल्लाहले मानव जगतको सबैभन्दा उच्च तथा आदर्श समाज अर्थात इस्लामी समाजको निर्माण एवं संरचना लेखेको थियो । ती श्लोकहरूमा मुसलमानहरूको भावना एवं चेतनामा उर्जा तथा दृढता थपिएको थियो । उनीहरूका लागि उदाहरण प्रस्तुत गरिनुका साथै त्यसको रहस्य पनि बयान गरिएको थियो । कुरआनमा भनिएको छ :

امْ حَسِبْتُمْ أَنْ تَدْخُلُوا الْجَنَّةَ وَلَمَّا يَأْتِكُمْ مَثَلُ الَّذِينَ خَلَوْا مِنْ قَبْلِكُمْ ۖ مَسَّتْهُمُ الْبَأْسَاءُ وَالضَّرَّاءُ وَزُلْزِلُوا حَتَّىٰ يَقُولَ الرَّسُولُ وَالَّذِينَ آمَنُوا مَعَهُ مَتَىٰ نَصْرُ اللَّهِ ۗ أَلَا إِنَّ نَصْرَ اللَّهِ قَرِيبٌ (البقرة : 214)

के तिमीहरूले स्वर्गमा त्यसै गइने छ भनेर सोचेका छौ जबसम्म तिमीमाथि तिमीहरूभन्दा पहिलाका मानिसहरूको जस्तो अवस्था सृजना हुँदैन ? उनीहरूलाई कठिनाई तथा दयनीय परिस्थितिले छोयो । उनीहरूलाई कँपाइयो । यहाँसम्म कि ईशदूत र उनका अनुयायीहरूले भन्न थाले, अल्लाहको मदत कहिले आउँछ ? सुन अल्लाहको मद्दत छिटै आउने छ । (अल् बकराह : २१४)

الم أَحَسِبَ النَّاسُ أَنْ يُتْرَكُوا أَنْ يَقُولُوا آمَنَّا وَهُمْ لَا يُفْتَنُونَ وَلَقَدْ فَتَنَّا الَّذِينَ مِنْ قَبْلِهِمْ ۖ فَلَيَعْلَمَنَّ اللَّهُ الَّذِينَ صَدَقُوا وَلَيَعْلَمَنَّ الْكَاذِبِينَ (العنكبوت:1-3)

अलिफ लाम् मीम् । के मानिसहरूलाई सोचेका छन् कि हामीले आस्था राखेका छौ भन्दैमा उनीहरुलाई छाडिइने छ जबसम्म उनीहरूको परीक्षण हुँदैन ? जबकि यिनीहरूभन्दा पहिलाका मानिसहरूको पनि हामीले परीक्षण गरेका थियौं । अल्लाहलाई राम्रोसँग थाहा छ कुन मानिसहरू सत्य छन् र कुन भ्रुटा छन् । (अल् अन्कबुत : १–३)

यी श्लोकहरूका साथसाथै यस्ता श्लोकहरू पनि अवतरण हुँदै थिए जसमा नास्तिक तथा विरोधीहरूले खडा गरेको प्रश्नहरूको ठोस जवाफ दिइयो । उनीहरूलाई छलबाजी गर्ने मौका पनि दिइएन । यदि उनीहरू आफ्नो शत्रुता तथा हठमा अडिक रहे भने त्यसको परिणाम अति नै भयानक हुन सक्छ भन्ने कुरा दुई टुक शब्दमा बताइयो । प्रमाण स्वरूप विगतका जातिहरूमा घटेका घटना र प्रमाणहरू प्रस्तुत गरियो जसबाट असल र खराप मानिसहरू बारे अल्लाहको कस्तो नीति हुन्छ भन्ने कुरा प्रष्ट भयो । फेरि त्यस संत्रासपूर्ण कुराहरूका साथसाथै नम्र एवं दयाका कुराहरू पनि भनियो । उनीहरू आफ्नो पथभ्रष्टताबाट फर्किन्छन् कि भनेर आदेश तथा उपदेशयुक्त कुराहरू पनि भनियो ।

वास्तवमा कुरआनले मुसलमानहरूलाई एक अर्कै संसारको यात्रा गराइरहेको थियो । उनीहरूलाई ब्रह्माण्डको अवलोकन, प्रभुताको सुन्दरता, ईश्वरीय चमत्कार, दया एवं करुणाको संकेत, अनुकम्पा र आज्ञाका यस्ता दृश्य देखायो जसको अगाडि कुनै बाधा अड्चन टिक्न सक्दैन थियो ।

त्यति मात्र नभई ती श्लोकहरूको तहमा मुसलमानलाई जुन सम्बोधन गरिएको थियो त्यसमा ईश्वरको तर्फबाट कृपा एवं अनन्त स्रोत साधनले भरिपूर्ण स्वर्गको शुभसूचना पनि थियो । अत्याचारी एवं अवज्ञाकारी नास्तिकहरूलाई ईश्वरको अदालतमा फैसलाको लागि उभिनु पर्नेछ भन्ने कुराको चित्रण पनि गरिएको थियो । उनीहरूले गरेका केही कल्याणकारी एवं शुभ कार्यहरूलाई पनि नियन्त्रणमा लिइने छ ।

साथै उनीहरूलाई मुन्टोमा समातेर घिसार्दै ल अब नर्कको मज्जा चाख भनेर त्यसमा फ्याँकिइने छ ।

**६ सफलताका शुभसुचनाहरू :** उत्पीडित मुस्लिमहरूलाई इस्लाम स्वीकार्नुको अर्थ सदा अत्याचार नै सहनु पर्छ भन्ने होइन भन्ने कुरा पहिलो दिनदेखि नै थाहा थियो । इस्लामी निमन्त्रणाले त प्रथम दिनदेखि नै अज्ञानतापूर्ण र अत्याचारी व्यवस्था अन्त्य गर्न दृढ संकल्प गरेको थियो । यस निमन्त्रणाको एउटा महत्वपूर्ण लक्ष्य भनेको यस पवित्र धर्तीमा आफ्नो प्रभाव तथा प्रभुता स्थापना गर्नु थियो । दुनियाँका राजनीतिक विचारलाई चिर्दै मानवजगत तथा विश्वलाई ईश्वरको आज्ञापालनातर्फ लैजानुका साथै उनीहरूलाई मानव दासित्वबाट मुक्त गरी ईश्वरको भक्तिमा लगाउनु थियो ।

खुशीका यी खबरहरू कुरआनमा कहिले सांकेतिक र कहिले स्पष्ट रूपमा अवतरण हुन्थ्यो ! तसर्थ एकातिर विशाल धर्ती आफ्नो विशालताको बावजुद मुसलमानको निम्ति साँघुरिएको र उनीहरूलाई जाग्न नदिइकन पूर्ण रूपमा समाप्त गरिइने छ जस्तो लाग्थ्यो । तर अर्कोतिर त्यही अवस्थामा गुज्रिएका ईशदूतहरूमाथि घटाइएका घटना उनीहरूको समुदायले गरेको विद्रोहको विवरणहरू उल्लेख भएको श्लोकहरू अवतरण हुन्थ्यो । कुरआनको श्लोकमा चित्रण गरिएको कुरा मक्काका मुसलमानहरू र काफिरहरूबीच भएको घटनाको अनुरूप थियो । त्यसका साथसाथै कुरआनका श्लोकहरूमा त्यसको परिणाम स्वरूप इन्कारीहरू र अत्याचारीहरूको कसरी नास गरियो र अल्लाहका असल भक्तहरूलाई कसरी धर्तीको वारिस बनाइयो भन्ने कुरा पनि उल्लेख हुन्थ्यो । त्यसैगरी यी श्लोकहरूमा भविष्यमा मक्काबासीहरू असफल हुनेछन् र मुसलमान तथा उनीहरूको इस्लामी निमन्त्रणाले सफलता पाउनेछ भन्ने कुराको स्पष्ट संकेत पनि थियो । त्यही परिस्थितिमा आस्थावानहरूको विजयको खुशीको खबर पनि केही श्लोकहरूमा प्रष्टरूपमा अवतरण हुन्थ्यो । जस्तै : अल्लाहको कथन छ :

وَلَقَدْ سَبَقَتْ كَلِمَتُنَا لِعِبَادِنَا الْمُرْسَلِينَ إِنَّهُمْ لَهُمُ الْمَنْصُورُونَ وَإِنَّ جُنْدَنَا لَهُمُ الْغَالِبُونَ فَتَوَلَّ عَنْهُمْ حَتَّىٰ حِينٍ وَأَبْصِرْهُمْ فَسَوْفَ يُبْصِرُونَ أَفَبِعَذَابِنَا يَسْتَعْجِلُونَ فَإِذَا نَزَلَ بِسَاحَتِهِمْ فَسَاءَ صَبَاحُ الْمُنْذَرِينَ (الصافات : 171 -177 )

आफ्ना ईशदूतहरूको बारेमा हाम्रो पहिले नै यो फैसला भइसकेको थियो कि उनीहरूको अवश्य मद्दत गरिने छ र वास्तवमा हाम्रै फौज विजय हुनेछ । तसर्थ हे ईशदूत केही समयको लागि उनीहरूबाट अलग होऊ र उनीहरूलाई हेर्दै गर निकटमा नै उनीहरूले देख्नेछन् । के उनीहरू हाम्रो प्रकोप भोग्न हतारिएका छन् ? यदि त्यो प्रकोप उनीहरूको आँगनमा वर्षियो भने यी सचेत गराइएका मानिसहरूको बिहानी नराम्रो हुनेछ ।” (अल् साफ्फात् १७१–१७७)

अर्को कथन छ :

سَيُهْزَمُ الْجَمْعُ وَيُوَلُّونَ الدُّبُرَ (القمر : 45)

निकटमा नै यस समुदायलाई पराजय गरिनेछ र यी मानिसहरू पिठ्यूँ फर्काएर भाग्नेछन् । (अल् कमर : ४५)

جُندٌ مَّا هُنَالِكَ مَهْزُومٌ مِّنَ الْأَحْزَابِ (ص : 11 )

दलहरूमध्येको यो एउटा दल हो जसले यहीँ पराजय भोगेको छ । (स्वाद : ११)

हब्शाका शरणार्थीहरूको बारेमा आदेश भयो :

जुन मानिसहरूले पीडा सहेर अल्लाहको मार्गमा हिजरत गरे हामीले उनीहरूलाई वास्तवमा दुनियाँमा धेरै राम्रो ठेगाना प्रदान गर्नेछौं र परलोकको पुरस्कार त धेरै ठूलो छ यदि मानिसलाई थाहा छ भने ।

त्यसैगरी इन्कारी अर्थात नास्तिकहरूले ईशदूतसँग पूर्वईशदुत यूसुफको बारेमा सोध्दा जवाफमा निम्न श्लोक पनि अवतरण भयो जसको अनुवाद यस प्रकार छ :

यूसुफ र उनका भाइहरूबीच भएको घटना बारे सोध्नेहरूको लागि प्रेरणा छ ।

यी मक्कावासीहरू जसले आज ईशदूत यूसुफको घटना बारे सोधिरहेका छन् जसरी ईशदूत यूसुफका भाईहरू असफल भएका थिए त्यसरी नै यिनीहरू पनि असफल हुनेछन् । यिनीहरूको घमण्डको पनि त्यही गति हुनेछ जुन उनका भाईहरूको भएको थियो । यिनीहरूले ईशदुत यूसुफ र उनका भाइहरूको घटनाबाट परिणाम कस्तो हुँदो रहेछ भनी पाठ सिक्नु पर्छ । एक अर्को ठाउँमा ईशदूतहरूको चर्चा गरिदै भनिएको छ :

وَقَالَ الَّذِينَ كَفَرُوا لِرُسُلِهِمْ لَنُخْرِجَنَّكُم مِّنْ أَرْضِنَا أَوْ لَتَعُودُنَّ فِي مِلَّتِنَا ۖ فَأَوْحَىٰ إِلَيْهِمْ رَبُّهُمْ لَنُهْلِكَنَّ الظَّالِمِينَ وَلَنُسْكِنَنَّكُمُ الْأَرْضَ مِن بَعْدِهِمْ ۚ ذَٰلِكَ لِمَنْ خَافَ مَقَامِي وَخَافَ وَعِيدِ (إبراهيم : 13, 14 )

नास्तिकले आफ्ना ईशदूतहरूसँग भने, हामीले तिमीहरूलाई आफ्नो भूमिबाट निकाली छाड्ने छौं यदि तिमीहरू हाम्रो धर्ममा फर्कदैनौ भने । त्यसमा ईशदूतहरूको पालनकर्ताले उनीहरूलाई वाणी अवतरण गरेर भने, हामीले अत्याचारीलाई अवश्य नास गरिदिनेछौं । उनीहरूपछि तिमीहरूलाई धर्तीमा स्थापित गरिदिनेछौं । यो वाचा ती व्यक्तिहरूको लागि हो जसलाई मेरो सामुन्ने उपस्थित हुनु पर्छ भन्ने डर छ र जो मेरो धम्कीबाट डराउँछन् । (इब्राहीम : १३–१४)

यसैगरी जतिबेला इरान र इटालीमा युद्धको आगो दन्किरहेको थियो त्यतिबेला मक्काका नास्तिकहरूले इरानीहरूको विजय होस् भन्ने चाहेका थिए । किनभने इरानीहरू पनि मूर्तिपूजारी थिए । अर्को तर्फ मुसलमानहरूले इटालीको विजय होस् भन्ने चाहेका थिए । किनकि इटालीहरू जे भए पनि अल्लाह, ईशदूतहरू, ईशवाणी, आकाशीय ग्रन्थहरू र परलोकमाथि आस्था राख्दथे । तर विजय इरानीहरूलाई प्राप्त हुँदै गएपछि केही वर्षपछि इटालीहरूको विजय हुनेछ भन्ने खुशीको खबर अवतरण

भयो । खुशीको यो खबर दिनुका साथसाथै इटाली विजय हुँदा अल्लाहले मुसलमानहरूको पनि मदत गर्नेछ भन्ने खुशीको खबर पनि अवतरण गरे जसबाट उनीहरू खुशी भए । अल्लाहको कथन छ :

وَيَوْمَئِذٍ يَفْرَحُ الْمُؤْمِنُونَ ( الروم :4 )

त्यतिबेला मुस्लिमहरू पनि अल्लाहको मद्दतबाट खुशी हुनेछन् । (अल् रुम : ४)

पछि अल्लाहको त्यो मद्दत बद्रको युद्धमा प्राप्त भएको विशाल सफलता र विजयको रुपमा आयो ।

कुरआनबाहेक स्वयम ईशदूतले पनि मुसलमानहरूलाई समयसमयमा यस प्रकारको शुभसूचनाहरू सुनाउने गर्नुहुन्थ्यो । फलस्वरूप हजको मौसममा उहाँ अक्काज, मुजना र जुल वजाज जस्ता ठाउँमा इस्लाम प्रचारप्रसारको लागि जाँदा उहाँले स्वर्गको खुशखबरी मात्र दिनुभएन दुई-शब्दमा निम्नलिखित कुराको पनि घोषणा गर्नुभयो :

(يا ايها الناس قولوا لا إله إلا الله تفلحوا وتملكوا بها العرب وتدين لكم بها العجم فاذا متم كنتم ملوكا في الجنة)

“हे मानिस हो ! ला इलाह इल्लल्लाह अर्थात अल्लाह बाहेक कोही पूज्य छैन भन, सफल रहनेछौ र यसैका आधारमा अरबमा राज गर्न सक्नेछौ र गैर अरब पनि तिम्रो अधीनमा हुनेछ । मृत्यु पश्चात स्वर्गमा पनि राजा बन्नेछौ ।” [१]

यो कुरा पछिल्लो पृष्ठहरूमा उल्लेख भइसकेको छ कि जब उत्बा बिन रबिआले उहाँलाई सांसारिक धन देखाएर सौदेबाजी गर्न खोजेको थियो । उहाँले जवाफमा कुरआनको अध्याय सज्दाबाट केही श्लोकहरू पढेर सुनाएपछि उत्बालाई अब परिणाममा उहाँ विजय हुनेछन भन्ने विश्वास भयो ।

त्यसैगरी अबु तालिबकहाँ आएका कुरैशको अन्तिम प्रतिनिधि मण्डलसँग उहाँको जुन वार्ता भएको थियो त्यसको पनि विवरण आइसकेको छ । त्यतिबेला पनि उहाँले स्पष्ट रूपमा भन्नुभएको थियो कि मैले तिमीहरूसँग केवल एउटा कुरा चाहेको छु जसलाई तिमीहरूले मान्यौ भने अरब पनि तिमीहरूको अधीनमा आउनेछ र गैर अरबमा पनि तिम्रो राज हुनेछ ।

खब्बाब बिन अरतको भनाइ छ : एक दिन म ईशदूतकहाँ । उहाँ काबाको छायाँमा एउटा बर्कोको सिरानी हालेर पल्टनुभएको थियो । त्यति बेला बहुदेववादीबाट हामीले कठोर पीडामा भोग्नु परेको थियो । मैले भनें : तपाईंले अल्लाहसँग प्रार्थना गरिदिए हुन्थ्यो नि । त्यो कुरा सुनेर उहाँ उठेर बस्नुभयो । उहाँको अनुहार रिसले रातो भयो अनि उहाँले भन्नुभयो : जुन मानिसहरू तिमीभन्दा पहिला वितेका छन्

१ इब्ने सअद १/२१६

तिनीहरूको हड्डी तथा नसामा फलामको काइँयो दागिन्थ्यो । तर त्यो यातनाले पनि उनीहरूलाई आफ्नो धर्मबाट हटाउन सकेन । अल्लाहले आफ्नो धर्मलाई पूर्ण गरेरै छाड्नेछन् । यहाँसम्म कि यात्रा गर्ने व्यक्तिहरू सन्आदेखि हजरे मौतसम्म जाँदा उनीहरूलाई अल्लाह बाहेक अरू कसैको डर हुने छैन । उनीहरूलाई जंगली जनावरको मात्र डर हुनेछ ।[1] एक अर्को कथनमा भनिएको छ : तर तिमीहरू हतारिएका छौ ।[2] स्मरण रहोस् खुशीका यी खबरहरू छिपेका थिएनन् चर्चित थिए । मुसलमानहरू झैं नास्तिकहरूलाई पनि थाहा थियो । तसर्थ अस्वद बिन मुत्तलिब र उसका साथीहरूले ईशदूतका साथीहरूलाई देख्दा उनीहरूको खिल्ली उडाउँथे, उनीहरूको उपहास गर्दै आपसमा भन्थे । लौ हेर यस धर्तीका राजाहरू आउँदै छन् । यिनीहरूले छिटै किस्रा र कैसरको राजलाई आफनो हातमा लिनेछन् । त्यसो भन्दै उनीहरूले सिटि तथा ताली बजाएर हुटिगं गर्थे ।[3]

तर ईशदूतका साथीहरूविरुद्ध त्यस बेला अन्याय अत्याचार एवं दुःख र कष्टको जुन चौतर्फी आँधी आएको थियो त्यसको हैसियत उनीहरूको स्वर्ग प्राप्तिको आशा र आफ्नो उज्जवल भविष्यको तुलनामा हावाको एक झट्काबाट हट्ने बादल जति पनि थिएन ।

त्यसबाहेक ईशदूतले मुस्लिमहरूलाई आध्यात्मिक उर्जाद्वारा निरन्तर आत्मबल दिनुभयो । ग्रन्थको शिक्षा एवं दर्शनद्वारा आत्मशुद्धिकरण गर्नुभयो । अति नै सुक्ष्म तरीकाले प्रशिक्षण दिनुभयो । आत्म बलियो बनाउनु, मन शुद्ध बनाउनु, आचरण राम्रो बनाउनु, भौतिक स्वार्थबाट मुक्त गराउनु, मनको असीम इच्छाबाट जोगाउनुका साथसाथै आकाश तथा धर्तीका मालिकको पवित्र स्थलतर्फ मानवलाई प्रेरित गर्नुभयो । उहाँले उनीहरूको निराशापनलाई प्रवल आशामा परिणत गर्नुभयो । उनीहरूलाई अँध्यारोबाट निकालेर उज्यालो मार्गदर्शनतर्फ ल्याउने काम जारी राख्नुभयो । उनीहरूलाई दुःखकष्टमा धैर्य गर्ने प्रेरणा दिनुभयो । नम्र भएर क्षमा गर्ने र आत्मालाई बलियो बनाउने शिक्षा दिनुभयो । फलस्वरूप उनीहरूको धर्मप्रतिको दृढतामा वृद्धि हुँदै गयो । उनीहरू अनियन्त्रित चाहनालाई छाडेर अल्लाहको खुशीको मार्गमा आत्म समर्पण गर्ने, स्वर्ग प्राप्त गर्ने, शिक्षा ग्रहण गर्ने, धर्मलाई बुझ्ने, आत्म मुल्याङ्कन गर्ने, भावनालाई नियन्त्रित गर्ने, इच्छाहरूलाई सही दिशा दिने, उत्तेजनाको वेगलाई नियन्त्रण गर्ने र धैर्य, शान्ति एवं प्रतिष्ठालाई कायम राख्ने काममा अनूपम नमूना बने ।

---

१ सही बुखारी १/५४३
२ सही बुखारी १/५१०
3 अस्सिरह अल हलबीया १/५११,५१२

# तेस्रो चरण
# मक्काबाहिर इस्लामको निमन्त्रणा

## ईशदूत ताइफमा

ईशदूतत्वको १०औं वर्ष शौवाल महिना तद्नुसार ६१९ मईको अन्तिम वा जुन महिनाको शुरूमा ईशदूत ताइफ जानुभयो । ताइफ मक्काबाट लगभग एक सय तीस किलोमिटर टाढा छ । उहाँले त्यो दूरी जाँदा आउँदा पैदल यात्रा गर्नु भएको थियो । उहाँका सहयात्री जैद बिन हारिसा थिए । बाटोमा जुन जातिसँग भेट हुन्थ्यो त्यसलाई इस्लामको निमन्त्रणा दिनुहुन्थ्यो तर कसैले पनि उहाँको निमन्त्रणा स्वीकार गर्थेन । ताइफ पुगेपछि उहाँले सकिफ नामक जातिका तीन जना सरदारहरूलाई भेटनुभयो । उनीहरू दाजुभाइ थिए र उनीहरूको नाम क्रमशः अब्द यालयल, मसऊद र हुबैब थियो । उनीहरूको बाबुको नाम अम्र बिन उमैर सकफी थियो । उहाँ उनीहरूलाई अल्लाहको आज्ञापालना गर्ने र इस्लामको मद्दत गर्ने निमन्त्रणा दिनुभयो । जवाफमा एक जनाले भन्यो : अल्लाहले तिमीलाई ईशदूत बनाउनु भनेको काबाको पर्दा च्यात्नु सरह हो अर्थात अल्लाहले तिमीलाई ईशदूत बनाउनु असम्भव कुरा हो । अर्कोले भन्यो : के अल्लाहले तिमीबाहेक अरू कसैलाई भेटाएनन् ? तेस्रोले भन्यो : म तिमीसँग कदापि कुरा गर्दिनँ । यदि तिमी वास्तवमा ईशदूत हौ भने तिम्रो कुरा काट्नु मेरो लागि घातक हुनेछ । यदि तिमीले अल्लाहमाथि झूट गढेका छौ भने तिमीसँग कुरा नै गर्नु हुँदैन । त्यो जवाफ सुनेर उहाँ त्यहाँबाट उठ्नुभयो र तिनीहरूलाई केवल यति मात्र भन्नुभयो : तिमीहरूले जे गऱ्यौ त्यसलाई गोप्य राख्नु ।

ईशदूत ताइफमा दश दिन बस्नुभयो । त्यस दौरान उहाँले त्यहाँका एकएक सरदारसँग भेटेर कुराकानी गर्नुभयो । तर सबैले एउटै जवाफ दिए, हाम्रो शहरबाट जाऊ । त्यति मात्र गरेनन् उनीहरूले आफ्ना गुण्डाहरूलाई पनि उत्तेजित बनाए । अन्तत : जब उहाँ फर्कन लाग्नुभयो ती गुण्डाहरूले उहाँलाई गाली गर्दै, ताली बजाउँदै र हल्ला मच्चाउँदै उहाँको पिछा गरे । हेर्दाहेर्दै ठूलो भीड जम्मा भयो र उहाँको दुबैतर्फ मान्छेहरूको पंक्ति लाग्यो । अनि गाली र अपशब्दहरूका साथसाथै ढुंगा पनि वर्षाउन थाले जसले गर्दा उहाँको कुर्कुच्चामा चोट लागेका कारण दुबै जुत्ता रगत्तामे भयो । उता जैद बिन हारिसा ढाल बनेर उहाँलाई बचाउनका लागि उहाँमाथि आएका ढुंगाहरू रोक्दै थिए जसले गर्दा उनको टाउकोमा कैयौं ठाउँ चोट पनि लाग्यो । बदमाशहरूले त्यो क्रम निरन्तर जारी राखे । यहाँसम्म कि उहाँ रबिआको सन्तान उत्बा र शैबाको एउटा बगैंचामा शरण लिन बाध्य हुनुभयो । त्यो बगैंचा ताइफभन्दा तीन माइलको दूरीमा थियो । उहाँले त्यहाँ शरण लिएपछि भीड खतम भयो र उहाँ एउटा पर्खालमा अडेस लागेर अंगूरको लहराको छायाँमुनि बस्नुभयो । केही आराम भएपछि अल्लाहसँग प्रार्थना गर्नुभयो । त्यो प्रार्थना दयाको

नामले प्रसिद्ध भयो । त्यो प्रार्थनाको एकएक वाक्यबाट अनुमान गर्न सकिन्छ कि ताइफमा त्यस अभद्रताको सामना गर्दा र एउटा व्यक्तिले पनि इमान नल्याउँदा उहाँको मनमा कस्तो चोट लाग्यो होला । उहाँको भावना शोक एवं दुःखले कति ग्रसित थियो होला । उहाँको भनाइ छ :

"हे अल्लाह ! म तपाईंको सामुन्ने आफ्नो कमजोरी एवं विवशताका साथै मानिसहरूको अगाडि आफु अपमान भएको गुनासो पोख्दैछु । हे परम दयालु अल्लाह ! तपाईं कमजोरहरूका पालनकर्ता हुनुहुन्छ र मेरो पनि तपाईं नै पालनकर्ता हुनुहुन्छ । तपाईंले मलाई कसको सुपुर्द गर्नु भएको छ ? ती अपरिचित मानिसको जो मसँग क्रोधित छन् ? वा ती शत्रुको जसलाई तपाईंले मेरो मालिक बनाइदिनु भएको छ ? यदि ममाथि तपाईंको क्रोध छैन भने मलाई कुनै परवाह छैन र तपाईंको शरण नै मेरो लागि प्रयाप्त छ । म तपाईंको मुहारको त्यस किरणको शरण चाहन्छु जसबाट अँध्यारो उज्यालोमा परिणत हुन्छ, जसको आधारमा लोक तथा प्रलोकको व्यवस्था चलेको छ । ममाथि तपाईंको क्रोध वर्षोस् वा धम्की, मलाई तपाईं कै खुशीको अपेक्षा छ । तपाईंबाहेक कुनै शक्ति छैन ।"

उता रबिआका छोराहरूले उहाँलाई त्यो दयनीय अवस्थामा देखेर उनीहरूको मन पग्ल्यो । उनीहरूमध्ये एक जनाले आफ्नो इसाई दासी अदासलाई बोलाएर अंगूरको एउटा झुप्पो चुँडेर उहाँलाई दिन भन्यो । उसले उहाँको सेवामा अंगूर पेश गऱ्यो उहाँले बिस्मिल्लाह पढेर अर्थात अल्लाहको नाम लिएर हात बढाउनुभयो र खान शुरु गर्नुभयो ।

अदासले भन्यो : यस क्षेत्रमा त मानिसहरूले बिस्मिल्लाह पढ्दैनन् । ईशदूतले सोध्नुभयो : तिमी कहाँका बासी हौ ? तिम्रो धर्म के हो ? उसले भन्यो : म इसाई हुँ र नैनवा भन्ने ठाउँको बासी हुँ । ईशदूतले भन्नुभयो : ठीक छ ! तिमी सज्जन व्यक्ति यूनुस बिन मुतैको गाउँका बासी हौ ? उसले भन्यो : तपाईंले यूनुस बिन मुतैलाई कसरी चिन्नु हुन्छ ? ईशदूतले भन्नुभयो : धर्मको आधारमा उनी मेरा दाजु हुन् । उनी पनि ईशदूत थिए र म पनि ईशदुत हुँ । त्यो कुरा सुनेर अदास मुहम्मदﷺको सामु निहुरियो र उहाँको शीर र हात गोडालाई चुम्बन दिन थाल्यो ।

त्यो देखेर रबिआका दुबै छोराले आपसमा भने : लौ ! उसले हाम्रो दासीलाई बिगाड्यो । अदास फर्केर गएपछि दुबै जनाले ऊसँग सोधे : तिमीले के गरेको हो ? उसले भन्यो : मेरा मालिक ! यस धर्तीमा त्यो व्यक्तिभन्दा असल कसैलाई देखिनँ । उसले मलाई एउटा यस्तो कुरा भनेको छ जुन कुरा ईशदूतलाई बाहेक कसैलाई थाहा

हुँदैन । उनीहरूले भने : हेर अदास त्यो व्यक्तिले तिमीलाई पनि तिम्रो धर्मबाट नफेरोस् । किनभने तिम्रो धर्म उसको धर्मभन्दा उत्तम छ ।[१]

केही बेरपछि ईशदूत बगैंचाबाट निस्केर आफ्नो बाटो लाग्नुभयो । दुःख र यातनाका कारण उहाँ थाक्नु भएको थियो, उहाँको मन छियाछिया भएको थियो । करने मनाजिल भन्ने ठाउँमा पुग्दा अल्लाहको तर्फबाट फरिश्ता जिब्रइलको अवतरण भयो । उनको साथमा पहाड सम्बन्धी हेर्ने दूत पनि थिए । उनले उहाँसँग भने : तपाईंको आदेश भए हामीले यी मक्काबासीलाई यी दुई पहाडबीच च्यापिदिन्छौं ।

त्यस घटनाको विवरण सहीह बुखारीमा माई आइशामार्फत वर्णन गरिएको छ । आइशाले एक दिन ईशदूतसँग सोधिन् । के तपाईंमाथि उहुदको दिनभन्दा कठिन घढी अरू कुनै दिन आएको छ ? उहाँले भन्नुभयो : छ ! तिम्रो जातिबाट मलाई जुनजुन कठिनाईको सामना गर्नु पर्‍यो त्यसमध्ये सबैभन्दा बढी कष्ट मलाई घाटीमा भएको थियो । जब म अब्दे यालौल बिन अब्दे कुलालका छोराकहाँ गएको थिएँ र उसले मेरो कुरा अस्वीकार गरेपछि म कष्ट र यातनाले थकित भएर आफ्नो बाटो लागेको थिएँ । करने सआलिब भन्ने ठाउँमा पुगेपछि मात्र मलाई केही आराम भएको थियो । त्यहाँ मैले आफ्नो टाउको उठाएर हेर्दा बादलको एउटा टुक्रा देखें । मैले ध्यानपूर्वक हेरेको त त्यसमा दूत जिब्रइललाई देखें । उनले मलाई बोलाएर भने, तपाईंको समुदायले तपाईंसँग जुन कुरा भनेको थियो । त्यो कुरा अल्लाहले सुनिसकेका छन् । अब उसले तपाईंकहाँ पहाडको रेखदेख गर्ने दूत पठाएको छ । तपाईंले उनलाई जे आदेश गर्न चाहनुहुन्छ गर्नुहोस् । त्यस पश्चात् दूतले मलाई आवाज दियो र सलाम गरेर भन्यो : हे मुहम्मदﷺ ! कुरा के हो भने यदि तपाईंले चाहनु हुन्छ भने म तिनीहरूलाई दुई पहाडको बीचमा च्यापिदिन्छु ।[२] यस्तो भइहाल्छ पनि । ईशदूतले भन्नुभयो : त्यसो नगर्नु । मलाई आशा छ अल्लाहले तिनीहरूको पिंढीबाट यस्तो मानिसहरू पैदा गर्नेछ जसले केवल एक अल्लाहको उपासना गर्नेछ र अल्लाहसँग कुनै कुरालाई साझेदार ठहराउने छैन ।[३]

ईशदूतको त्यो जवाफबाट उहाँको अनूपम व्यक्तित्व र त्यसको तहमा पुग्न नसकिने उच्च नैतिकताको दृश्य देख्न सकिन्छ । जे होस् सातौं आकाशबाट आएको अदृश्य मद्दतका कारण उहाँको मन शान्त भयो । दुःख र पीडाका कालो बादल हट्यो । अतः उहाँ मक्काको बाटो समातेर अगाडि बढ्दै गर्दा नख्ला नामक उपत्यकामा बास

१ इब्ने हेशाम १/४१९–४२१
२ बुखारीमा अख्शबैन शब्द प्रयोग गरिएको छ । त्यो शब्द मक्कामा रहेका दुइटा पहाड अबु कबिस र कैकियानको लागि प्रयोग गरिन्थ्यो । ती पहाड हरमको दक्षिण र उत्तरतिर छन् । त्यस बेला मक्काको बस्ती ती दुवै पहाडबीच थियो ।
3 सही बुखारी १/४५८

बस्नुभयो । त्यहाँ दुई वटा ठाउँ बास बस्न योग्य थियो एउटा सैले कबिर र अर्को जीमा । किनभने ती दुइटै ठाउँमा पानी र हरियाली थियो । तर कुनै स्रोतबाट उहाँ ती दुईटा ठाउँमध्ये कहाँ बस्नुभयो थाहा हुन सकेन ।

नख्ला उपत्यकामा उहाँको बसाइ केही दिन रह्यो । त्यस दौरान अल्लाहले उहाँको सेवामा दानवको एउटा जमात पठाए[१] जसको चर्चा कुरआनको दुई ठाउँमा आएको छ । एक ठाउँ अध्याय अल अहकाफमा र अर्को अध्याय जिनमा छ । अध्याय अल अहकाफका श्लोकहरू निम्न छन् :

وَإِذْ صَرَفْنَا إِلَيْكَ نَفَرًا مِنَ الْجِنِّ يَسْتَمِعُونَ الْقُرْآنَ فَلَمَّا حَضَرُوهُ قَالُوا أَنْصِتُوا ۖ فَلَمَّا قُضِيَ وَلَّوْا إِلَىٰ قَوْمِهِمْ مُنْذِرِينَ قَالُوا يَا قَوْمَنَا إِنَّا سَمِعْنَا كِتَابًا أُنْزِلَ مِنْ بَعْدِ مُوسَىٰ مُصَدِّقًا لِمَا بَيْنَ يَدَيْهِ يَهْدِي إِلَى الْحَقِّ وَإِلَىٰ طَرِيقٍ مُسْتَقِيمٍ يَا قَوْمَنَا أَجِيبُوا دَاعِيَ اللَّهِ وَآمِنُوا بِهِ يَغْفِرْ لَكُمْ مِنْ ذُنُوبِكُمْ وَيُجِرْكُمْ مِنْ عَذَابٍ أَلِيمٍ (الأحقاف: 29, 30, 31 )

"स्मरण गर, जब हामीले दानवको एउटा समूहलाई कुरआन सुनुन् भनेर तपाईंतर्फ ल्यायौं । जब तिनीहरू ईशदूतकहाँ आए, उनीहरूले एक अर्कालाई चुपचाप बस्न भने । कुरआनको पाठ समापन भएपछि उनीहरू आफ्नो समुदायमा सचेतक भएर फर्के । उनीहरूले भने : हे हाम्रा समुदाय ! हामीले एउटा किताब सुनेका छौं जुन मूसा पश्चात अवतरण गरिएको छ । जसले अघि अवतरण भएका पुस्तकहरूलाई पनि सत्य मान्दछ साथै सत्य कुरा बताउँछ र सत्य बाटो देखाउँछ । हे हाम्रा समुदाय ! अल्लाहतर्फ बोलाउने व्यक्तिको कुरा स्वीकार त्यसमाथि आस्था राख अल्लाहले तिम्रो पापलाई क्षमा गरिदिने छन् र तिमीलाई यातनापूर्ण दण्डबाट बचाउने छन् । (अल् अहकाफ् :२९–३१)

कुरआनको सुरह अर्थात अध्याय जिनका श्लोकहरू निम्न छन् :

قُلْ أُوحِيَ إِلَيَّ أَنَّهُ اسْتَمَعَ نَفَرٌ مِنَ الْجِنِّ فَقَالُوا إِنَّا سَمِعْنَا قُرْآنًا عَجَبًا يَهْدِي إِلَى الرُّشْدِ فَآمَنَّا بِهِ ۖ وَلَنْ نُشْرِكَ بِرَبِّنَا أَحَدًا (الجن: 1 -2 )

तपाईं भनिदिनोस् कि दानवको एउटा समूहले कुरआन सुनेको छ भन्ने कुरा ममाथि ईशवाणी भएको छ । अनि उनीहरूले आपसमा भने, हामीले एउटा अनौठो कुरआन सुनेका छौं जसले सत्य मार्ग देखाउँछ । हामीले त्यसमाथि आस्था राखेका छौं र हामी आफ्नो पालनकर्ताको साथमा कसैलाई कदापि साझेदार बनाउने वाला छैनौं । (अल् जिन: १–२)

उपरोक्त श्लोकहरूमा वर्णन भएको घटनाको सन्दर्भलाई नियाल्ने हो भने ईशदूतलाई शुरुमा दानवको जमात आएको जानकारी हुन सकेको थिएन भन्ने कुरा ज्ञात हुन्छ । यी श्लोकहरूमार्फत अल्लाहले जानकारी दिएपछि मात्र उहाँलाई त्यस कुराको जानकारी भयो । दानवको आगोमनको यो पहिलो घटना थियो भन्ने कुरा पनि

१ सही बुखारी १/१९५

ज्ञात हुन्छ । त्यसपछि दानवहरूको आओत जाओत निरन्तर भइरहेको कुरा हदिसबाट पनि थाहा हुन्छ ।

दानवको आगमन र उनीहरूले इस्लाम स्वीकार्ने कुरा वास्तवमा अल्लाहको तर्फबाट अर्को एउटा मदत थियो जुन उनले आफ्ना अदृश्य शक्ति अर्थात त्यस लश्करद्वारा गरेका थिए जसको जानकारी अल्लाह बाहेक कसैलाई हुँदैन । साथ साथै त्यस घटना बारे जुन श्लोकहरू अवतरण भएका छन् त्यसको बीचबीचमा ईशदूतको निमन्त्रणाको सफलताको शुभसुचना पनि दिइएको छ । साथै ब्रह्माण्डको कुनैपनि शक्तिले त्यस निमन्त्रणाको सफलतालाई अवरोध गर्न सक्दैन भन्ने कुरा प्रष्ट्याइएको छ । तसर्थ कुरआनमा भनिएको छ :

وَمَنْ لَا يُجِبْ دَاعِيَ اللَّهِ فَلَيْسَ بِمُعْجِزٍ فِي الْأَرْضِ وَلَيْسَ لَهُ مِنْ دُونِهِ أَوْلِيَاءُ ۚ أُولَٰئِكَ فِي ضَلَالٍ مُبِينٍ (الأحقاف : 32)

जसले अल्लाहको प्रचारकको कुरा मान्दैन उसले धर्तीमा कसैको केही बिगार्न सक्दैन र अल्लाह बाहेक कोही उसको सहयोगी बन्न सक्दैनन् । यस्तै मानिसहरू खुला पथभ्रष्टमा छन् । (अल् अहकाफ:३२)

وَأَنَّا ظَنَنَّا أَنْ لَنْ نُعْجِزَ اللَّهَ فِي الْأَرْضِ وَلَنْ نُعْجِزَهُ هَرَبًا (الجن: 12 )

न हामीले यस धर्तीमा अल्लाहको केही बिगार्न सक्छौं र न हामी भागेर नै उनीबाट कतै जान सक्छौं भन्ने कुरा हामीले अनुमान गरिसकेका छौं । (अल् जिन:१२)

यिनै मदत र शुभसूचनाबाट दुःख एवं पीडा र उदासीका सबै बादल हटे जुन ताइफबाट निस्कने क्रममा गाली र ताली तथा ढुंगाको सामना गर्दा उहाँलाई भएको थियो । उहाँले अब मक्का फर्केर नयाँ ढंगले इस्लामको निमन्त्रणा ईशदूतत्वको प्रचारप्रसारको कार्यमा सक्रियता र उत्साहका साथ लाग्नु पर्छ भन्ने दृढ संकल्प गर्नुभयो । त्यसै बेला जैद बिन हारिसाले उहाँसँग भने, तपाईं मक्का कसरी जान सक्नुहुन्छ जबकि त्यहाँका बासी अर्थात् कुरैशले तपाईंलाई निकालेको छ ? जवाफमा उहाँले भन्नुभयो : ए जैद ! हामीलाई जुन परिस्थितिको सामना छ अल्लाहले त्यसमा अवश्य कुनै बाटो निकाल्ने छन् । निसंदेह अल्लाहले आफ्नो धर्मको मद्दत गर्नेछन् र आफ्नो दूतलाई विजय गराउने छन् ।

आखिरकार ईशदूत त्यहाँबाट प्रस्थान हुनुभयो र मक्का नजिक पुगेर हेरा गुफाको फेदीमा विश्राम लिनुभयो । त्यसपछि खुजाआका एक जना मानिससँग अख्नस बिन शुरैककहाँ आफुलाई शरण दिन भनी सन्देश पठाउनुभयो । उसले म हलिफ हुँ भनी शरण दिन अस्वीकार गऱ्यो । हलिफलाई शरण दिने अनुमति छैन । त्यसपश्चात उहाँले सहल बिन अम्रकहाँ त्यही सन्देश पठाउनुभयो तर उसले पनि बनी आमीरले दिएको शरण बनू कअबमाथि लागू हुँदैन भनी क्षमा माग्यो । त्यसपछि उहाँले मुतइम बिन अदीकहाँ सन्देश पठाउनुभयो । मुतइम्ले हतियार बोकेर आफ्ना छोरा र

समुदायका मानिसलाई बोलाएर भन्यो : तिमीहरू हतियार बाँधेर काबाको क्षेत्रमा जम्मा होऊ । किनभने मैले मुहम्मदﷺ लाई शरण दिइसकेको छु । त्यस पश्चात् मुतइम्ले ईशदूतलाई मक्का आउन भनी सन्देश पठायो । उहाँ सन्देश पाए लगतै जैद बिन हारिसालाई साथ लिएर मक्का आउनुभयो र पवित्र मस्जिदमा प्रवेश हुनुभयो । त्यसपछि मुतइम् बिन अदीले आफ्नो सवारीमाथि उभिएर भन्यो : हे कुरैशका मानिसहरू ! मैले मुहम्मदﷺलाई शरण दिएको छु । तसर्थ अब कसैले उसलाई नचलाओस् । उता ईशदूत सीधै हज्रे अस्वद नजिक जानुभयो र त्यसलाई चुम्नुभयो । त्यसपछि दुई रकअत नमाज पढेर आफ्नो घर फर्कनुभयो । त्यस दौरान मुतइम् बिन अदीका छोराहरूले हतियार बोकी उहाँलाई सुरक्षाको घेरामा राखेका थिए । त्यसरी उहाँ आफ्नो घरभित्र जानुभयो ।

भनिन्छ, त्यस अवसरमा अबू जहलले मुतइम्सँग सोध्यो : शरण तिमीले दिएका हौ वा तिम्रा अनुयायीहरूले ? के तिमी मुसलमान बनेका छौ ? मुतइम्ले जवाफ दियो : केवल शरण दिएको हो । त्यो जवाफ सुनेर अबू जहलले भन्यो, जसलाई तिमीले शरण दिएका छौ उसलाई हामीले पनि शरण दियौं ।[1]

ईशदूतले मुतइम् बिन अदीको त्यो भद्र व्यवहारलाई कहिल्यै बिर्सनु भएन । तसर्थ बद्रको युद्धमा मक्काका विद्रोहीको एउटा ठूलो संख्या कैदी बनेर आउँदा केही कैदीहरूको मुक्तिको लागि जुबैर बिन मुतइम् उहाँको सेवामा उपस्थित हुँदा उहाँले भन्नु भएको थियो :

"यदि मुतइम् बिन अदी जिउँदो हुन्थ्यो र उसले मसँग यी दुर्गन्धित मानिसहरूको बारेमा सिफारिस गर्थ्यो भने मैले उसको निम्ति यी सबैलाई छाडिदिन्थे । [2]

---

१ इब्ने हेशाम १/३८१, जादुल मआद २/४२–४७
२ सही बुखारी २/५७३

## जातजाति तथा अन्य व्यक्तिहरूलाई इस्लामको निमन्त्रणा

१०औं ईशदूतत्व जिलकअदा महिना तद्नुसार जुन महिनाको अन्तिम वा शुरु जुलाई-६१९ इस्वीमा ईशदूत ताइफबाट मक्का आउनुभयो । त्यहाँका जातजाति तथा व्यक्तिहरूलाई इस्लामको निमन्त्रणा दिन शुरु गर्नुभयो । किनभने हजको मौसम नजिकिदै थियो । हज गर्न तथा आफ्नो लाभ र अल्लाहको स्मरण गर्नका लागि छोटो तथा लामो दुरीबाट पैदल र सवारीबाट यात्रा गरी मानिसहरू आउन शुरु भइसकेका थिए । ईशदूतले त्यस अवसरलाई अमूल्य ठान्नुभयो र एकएक कबिलाकहाँ गएर उनीहरूलाई इस्लामको निमन्त्रणा दिनुभयो । जस्तै उहाँले ईशदूतत्वको चौथो वर्षदेखि निमन्त्रणा दिदै आउनु भएको थियो । अल्लाहको आदेशको प्रचारप्रसार होस् भनेर त्यो वर्ष उहाँले आफुलाई त्यस कार्यको लागि एउटा स्थान बनोस्, सहयोग आओस् र सुरक्षा पनि होस् भन्ने कुरा सोच्नुभयो ।

### इस्लामको निमन्त्रणा दिइएका जातिहरु

इमाम जोहरीका अनुसार जुन जातजातिकहाँ गएर ईशदूतले तिनलाई इस्लामको निमन्त्रणा दिदै स्वयंलाई तिनीहरू समक्ष प्रस्तुत गर्नुभयो तिनीहरूमध्ये निम्नलिखित जातजातिका नाम उल्लेख गरिदैछ ।

बनू आमिर बिन सअसआ, महारिब बिन खसफा, फजारह, गस्सान मुर्राह, हनीफा, सुलैम, अनस, बनू नजर, बनुल बका, किन्दा,कल्ब, हारिस बिन कअब, अजरह, हजार्मा । तर ती कबिलामध्ये कसैले पनि इस्लाम स्वीकार गरेन ।[१]

स्पष्ट रहोस् इमाम जोहरीका अनुसार यी सम्पूर्ण प्रसिद्ध वंशहरूलाई एकै पटक वा एक हजमा मात्र इस्लाम प्रस्तुत गरिएको थिइएन । ईशदूतत्वको चौथो वर्षदेखि हिजरत गर्नुभन्दा पहिलाको हजसम्म अर्थात दश वर्षे अवधिसम्म इस्लाम प्रस्तुत गरिएको थियो ।

इब्ने इसहाकले केही वंशहरूमा इस्लामको प्रस्तुति र तिनको जवाफको कैफीयत पनि चर्चा गरेका छन् । संक्षिप्तमा तिनको बयान नक्कल गरिइँदै छ ।

**१. बनू कल्ब :** ईशदूत त्यस वंशको एउटा शाखा बनू अब्दुल्लाहकहाँ गई तिनलाई अल्लाहतर्फ बोलाउनुभयो र आफु स्वयंलाई उनीहरूको अगाडि प्रस्तुत गर्नुभयो । कुरै कुरामा उहाँले भन्नुभयो : ऐ बनू अब्दुल्लाह अल्लाहले तिम्रो पुरानो बाजेको नाम धेरै राम्रो राखेको थियो । तर त्यस जातिले उहाँको निमन्त्रणा स्वीकार गरेन ।

१ इब्ने सअद २/२१६

**२. बनू हनीफा :** उहाँ उनीहरूको डेरामा जानुभयो र उनीहरूलाई अल्लाहतर्फ बोलाउनुभयो साथै आफु स्वयंलाई उनीहरूको अगाडि पेश गर्नुभयो तर उनीहरूले जस्तो खराप जवाफ अरबवासीमध्ये कसैले पनि दिएका थिएनन् ।

**३. आमिर बिन सअसआ** : उनीहरूलाई पनि उहाँले अल्लाहतर्फ निमन्त्रणा दिनुभयो र आफु स्वयंलाई उनीहरूको सामु प्रस्तुत गर्नुभयो । जवाफमा उनीहरूको तर्फबाट एक जना व्यक्ति बोहैरा बिन फरासले भन्यो : अल्लाहको कसम यदि मैले कुरैशका यस युवकलाई आफ्नो हात लिने हो भने पूरा अरबलाई कब्जामा लिन सक्छु । त्यसपछि उसले सोध्यो : ठिक छ, यदि हामीले तपाईंको धर्मलाई ग्रहण गऱ्यौं र तपाईंले आफ्नो विरोधीहरूमाथि विजय प्राप्त गर्नुभयो भने के तपाईंपछि सत्ता हाम्रो हातमा हुनेछ ? उहाँले भन्नुभयो : सत्ता त अल्लाहको हातमा छ, उसले जहाँ चाहन्छ त्यहाँ राख्छ । त्यसमा त्यो व्यक्तिले भन्यो : धेरै राम्रो ! तपाईंको सुरक्षामा हाम्रो छाती अरबवासीको निशाना अगाडि बन्ने तर अल्लाहले तपाईंलाई विजय प्रदान गरेको खण्डमा सत्ता अरूको हातमा हुने । हामीलाई तपाईंको यस्तो धर्म चाहिँदैन । अन्ततः उनीहरूले अस्वीकार गरे ।

त्यसपश्चात् बनू आमिर आफ्नो इलाकातिर फर्केर एक जना बूढो व्यक्तिलाई जो वृद्धावस्थाको कारण हजमा सहभागी हुन सकेको थिएन सम्पूर्ण घटना सुनाउँदै भन्यो : हामीकहाँ कुरैश जातिको खानदान अब्दुल मुत्तलिबको एउटा जवान आएको थियो । उसले आफु ईशदूत भएको बतायो । उसले हामीलाई आफ्नो रक्षा गर्न, उसको साथ दिन र उसलाई आफ्नो इलाकामा ल्याउन अनुरोध गऱ्यो । त्यो कुरा सुनेर बूढोले दुबै हातले कञ्चट समातेर भन्न थाल्यो : ए बनू आमिर ! के अब क्षमायाचनाको कुनै उपाय छ ? के उसलाई खोज्न सकिन्छ ? त्यस हस्तिको कसम जसको हातमा फलानोको ज्यान छ इस्माइलका कुनै सन्तानले कहिल्यै ईशदूतत्वको झुटो दावी गरेको छैन । यो त वास्तवमा सत्य हो । तिमीहरूको बुद्धि कहाँ गएको थियो ?

## इमानको किरण मक्काभन्दा बाहिर

जसरी ईशदूतले वंश तथा प्रतिनिधि मण्डलहरूलाई इस्लाम प्रस्तुत गर्नुभयो त्यसरी नै हरेक व्यक्तिलाई पनि इस्लामको निमन्त्रणा दिनुभयो । केहीले राम्रो जवाफ दिए । त्यस हजको केही समयपछि कैयौं व्यक्तिहरूले इस्लाम स्वीकार गरे । तल उनीहरूको एक संक्षिप्त विवरण प्रस्तुत गरिदै छ ।

**१. सूवैद बिन सामित :** उनी कवि थिए । गहिरो सूझबूझका मालिक उनी यस्रिबका बासी थिए । परिपक्व, गीतकार र प्रतिष्ठित एवं वंशालु भएका कारण यिनको जातिले यिनलाई कामिलको उपाधि दिएको थियो । उनी हज वा उमराह गर्न मक्का आएका थिए । ईशदूतले उनलाई इस्लामको निमन्त्रणा दिनुभयो । उनले भने :

तपाईंसँग जे छ मसँग पनि त्यै कुरा छ । ईशदूतले भन्नुभयो : तिमीसंग के छ ? सूबैदले भने : लुक्मानको दिव्य उपदेश । उहाँले भन्नुभयो : भन । उनले भने । उहाँले भन्नुभयो : तिम्रो कुरा वास्तवमा राम्रो छ, तर मसँग जे छ त्यो यसभन्दा पनि राम्रो छ । त्यो कुरआन हो जुन अल्लाहले ममाथि अवतरण गरेका छन् । त्यो मार्गदर्शन तथा दिव्य उपदेश हो । त्यसपछि ईशदुतले उनलाई कुरआन पढेर सुनाउनुभयो र इस्लामको निमन्त्रणा दिनुभयो । उनले इस्लाम स्वीकारर्दै भने : यो त अति राम्रो वाणी हो । त्यसपछि उनी मदिना फर्केर आउने वित्तिकै बिआस नामक युद्धभन्दा पहिला नै अवस र खज्रजबीच भएको युद्धमा शहिद भए ।[१] करिब उनले ११औं ईशदूतत्वको प्रारम्भमा इस्लाम स्वीकार गरेका थिए ।

**२. इयास बिन मुआज :** उनी पनि यस्रिबका वासी थिए । ती नव युवक ११ औं ईशदूतत्वमा बिआस युद्धभन्दा केही दिन पहिले अवसका एउटा प्रतिनिधि-मण्डलसँग खजरजको विरुद्ध कुरैशसँग हलफ उठाउन एवं सहयोग लिन आएका थिए । त्यस बेला यस्रिबमा ती दुवै कबिलाबीच शत्रुताको आगो दन्किरहेको थियो । अवसको संख्या खजरजभन्दा कम थियो । ईशदूतलाई प्रतिनिधि मण्डलको आगमनको जानकारी भएपछि उहाँ उनीहरुकहाँ जानुभयो र उनीहरुको माझमा बसेर सम्बोधन गर्नुभयो : तपाईंहरू जुन उद्देश्यको लागि आउनु भएको छ के त्योभन्दा असल कुरा स्वीकार गर्न सक्नु हुन्छ ? उनीहरु सबैले भने त्यो के कुरा हो ? उहाँले भन्नुभयो : म अल्लाहको ईशदूत हुँ । अल्लाहले मलाई आफ्ना भक्तहरूको माझ उनीहरुलाई अल्लाहको उपासनातर्फ निमन्त्रणा दिन र उनको स्वामित्वमा कुनै वस्तुलाई सहभागी नगर्ने निमन्त्रणा दिन पठाएका हुन् । अल्लाहले ममाथि किताब पनि अवतरण गरेका छन् । त्यसपछि उहाँले इस्लामको चर्चा गर्नुभयो र कुरआनको पाठ पनि गर्नुभयो ।

इयास बिन मुआजले भने : हे समुदाय, यो कुरा त्यो कुराभन्दा असल छ जसको लागि तपाईंहरू यहाँ आउनुभएको छ । तर प्रतिनिधि मण्डलका एक जना सदस्य अबुल हैसर अनस बिन राफेले एक मुट्ठी माटो लिएर इयासको अनुहारमा हान्दै भन्यो : यो कुरा छोड ! मेरो जिन्दगीको कसम ! यहाँ हामी अर्कै उद्देश्यले आएका हौं । इयास मौन भएर बसे । ईशदूत पनि उठिहाल्नुभयो । मण्डल कुरैशसँग हलफ उठाउन एवं सहयोगको सम्झौता गर्न सफल हुन सकेन र त्यतिकै असफल भएर मदिना फिर्ता भयो । मदिना फर्केको केही दिनपछि नै इयासको मृत्यु भयो । उनले आफ्नो प्राण जाने बेला अल्लाहको प्रशंसा गरिरहेका थिए । तसर्थ उनको मृत्यु इस्लाममा नै भएको कुरा मानिसहरूलाई विश्वास भयो ।[२]

---

१ अल इस्तेआब २/६७७, असदुल गाबह २/३३७
२ इब्ने हेशाम १/४२७

**३. अबूजर गेफारी :** उनी यस्रिबको छेउछाउमा बसोबास गर्थे । सुवैद बिन सामित र इयास बिन मुआजको माध्यमबाट यस्रिबमा मुहम्मदﷺ ईशदूत भएको खबर पुगेपछि त्यस बारे अबूजरलाई पनि खबर भयो र त्यही खबर उनले इस्लाम अपनाउनुको कारण बन्यो ।

उनले इस्लाम स्वीकारेको घटना सही बुखारीमा सविस्तार वर्णन गरिएको छ । इब्ने अब्बासको बयान छ, अबूजरले भने: म गेफार कबिलाको व्यक्ति थिएँ । मक्कामा एक जनाको उदय भएको र उसले आफुलाई ईशदूत हो भनी दावी गरेको मलाई थाहा भयो । मैले आफ्नो भाइसँग भने : तिमी त्यो व्यक्तिकहाँ जाऊ र ऊसँग कुरा गर अनि मलाई त्यसको खबर देऊ । ऊ गयो । उसले ईशदूतसँग भेट गरी फर्कियो । मैले के खबर ल्याएका छौ भनी सोधेँ । उसले भन्यो : मैले उनलाई भलो कुराको आदेश दिने र खराप कुराहरुबाट रोक्ने व्यक्ति पाएँ । मैले भनेँ : तिमीले संतोषजनक खबर दिएनौ । आखिरकार म नै बाटो खर्च लिएर मक्कातिर लागेँ । म त्यहाँ त पुगेँ तर उहाँलाई चिन्दिनथेँ । दोस्रो कुरा उहाँको बारेमा कसैसँग सोध्नु पनि उचित थिएन । तसर्थ म जमजमको पानी पिउँथे र मस्जिद हरममा बसिरहन्थे । मेरो नजिक अली आए । उनले भने तिमी प्रदेशी जस्तो लाग्छौ । मैले भनेँ : हजूर हो । उनले भने : ठिक छ हाम्रो घर हिँड । म उनीसँग गएँ । उनले मसँग केही सोधेनन् र मैले पनि केही कुरो सोधिनँ र कुनै कुरा बताइनँ ।

बिहानी भएपछि म ईशदूतको बारेमा सोध्ने मनसाय लिएर मस्जिदे हरम गएँ । तर त्यहाँ ईशदूतको बारेमा बताउने कोही थिएन । फेरि मेरो नजिकैबाट अली नै आए । मलाई देखेर उनले भने : तिमीलाई अहिलेसम्म आफ्नो गन्तव्य थाहा हुन सकेन ? मैले भनेँ, अहँ । उनले भने : ठिक छ मसँग जाऊँ । त्यसपछि उनले सोधे : तिमी के कामले यहाँ आएका हौ ? मैले भनेँ : तपाईंले मेरो कुरा गोप्य राख्ने भए बताउँछु । उनले भने: ठीक छ मैले गोप्य राख्ने छु । मैले भनेँ : यहाँ एक जना व्यक्तिको उदय भएको छ र उसले आफुलाई ईशदूत भएको दावी गर्छ भन्ने कुरा थाहा भएको छ । मैले आफ्नो भाइलाई कुरा गरेर आओस् भनेर पठाएको थिएँ तर उसले फर्केर सन्तोषजनक कुरा भनेन । त्यसकारण मैले आफै गएर भेट गर्छु भनेर म यहाँ आएको हुँ । अलीले भने : भाइ तिमी सही ठाउँमा पुगेका छौ । हेर, म उनैतर्फ जाँदै छु । जहाँबाट म जान्छु तिमी पनि त्यहाँबाट आउनु । यदि मैले तिम्रो लागि खतरा हुन सक्ने व्यक्तिलाई देखेँ भने म आफ्नो जुत्ता ठिक पारे झै गरेर गारोतिर उभिन्छु र तिमी आफ्नो बाटो नछोडी हिँड्दै गर्नु । त्यसपछि अली हिँडे र म पनि सँगसँगै हिँडिरहेँ । यहाँसम्म कि उनी भित्र प्रवेश भए र म पनि उनीसँग ईशदूत भएको ठाउँमा गएँ । मैले ईशदूतसँग इस्लाम बारे बताउन अनुरोध गरेँ । उहाँले इस्लाम बारे बताउनुभयो र म त्यहीँ मुसलमान भएँ । त्यस पश्चात उहाँले मसँग

भन्नुभयो : ए अबूजर ! यस विषयलाई गोप्य राख्नु र आफ्नो इलाकामा फिर्ता जानु । हामीहरु निर्धक्क भएर बाहिर निस्केको खबर पाएपछि आउनु । मैले भनेँ : त्यो अल्लाहको कसम जसले तपाईँलाई सत्य कुरा दिएर पठाएको छ म त उनीहरु माझ खुलेआम यस कुरालाई भन्छु । त्यस पश्चात म मस्जिद हरममा आएँ । कुरैशहरु त्यहाँ उपस्थित थिए । मैले भनेँ :कुरैशका मानिसहरू ! “म गवाही दिन्छु, अल्लाह बाहेक कोही पूज्य छैन र म यस कुराको पनि गवाही दिन्छु कि मुहम्मदﷺ अल्लाहका भक्त र ईशदूत हुन् ।”

मानिसहरूले भने : उठ, यस अधर्मीको खबर लेऊ । मानिसहरू उठिहाले र मलाई मार्ने गरी कुटे तर अब्बासले आएर बचाए । उनले यसो निहुरेर मलाई हेरे अनि कुरैश तर्फ फर्केर भने : तिम्रो नाश होस् । तिमीहरूले गेफार कबिलाको व्यक्तिलाई कुटेकाछौ जबकि तिम्रो व्यापारमार्ग र आवत जावत गर्ने बाटो गेफार कबिलाबाट हुँदै जान्छ । त्यो कुरा सुनेर मानिसहरूले मलाई छाडे । अर्को दिन बिहानी भएपछि म फेरि त्यहीँ गएँ र जे कुरा हिजो भनेको थिएँ आज पनि त्यही भनेँ । मानिसहरूले भने, उठ यस अधर्मीको खबर लेऊ । त्यसपछि मसँग त्यही दुर्व्यवहार गरे जुन हिजो गरेका थिए । त्यो दिन पनि अब्बासले नै मलाई बचाए । उनले मलाई निहुरेर हेरी त्यही कुरा भने जुन अघिल्लो दिन भनेका थिए ।[१]

४. **तुफैल बिन अम्र दौसी :** उनी एक जना भद्र व्यक्ति थिए । उनी कवि, विवेकशील र समुदायका मुख्या पनि थिए । उनको समुदायलाई यमनको वरिपरि सत्ता वा सत्ता सरह अधिकार हासिल थियो । उनी ईशदूतत्वको एघारौं वर्ष मक्का आए । मक्का पुग्नुभन्दा पहिला नै मक्कावासीले उनको स्वागत गरे । निकै इज्जत एवं सम्मानका साथ प्रस्तुत भए । उनीसँग भने, हे तुफैल तपाईं हाम्रो शहरमा आउनुभएको छ र यो व्यक्ति जो हामीबीच छ उसले हामीलाई जटिल अवस्थामा फसाएर राखेको छ, हाम्रो जमातलाई तितरबितर पारेको छ, उसको कुरा जादू जस्तै प्रभावकारी छ जसले बाबु छोराबीच , दाजुभाइबीच र लोग्ने स्वास्नीबीच फुट पार्दछ । जुन आपतबाट हामी दिक्दार भएका छौं कतै त्यो तपाईं र तपाईंको जातिमाथि पनि न आइपरोस् भन्ने हामीलाई डर छ । तसर्थ तपाईं ऊसँग कदापि कुरा नगर्नोस् र उसको कुनै कुरो न सुन्नोस् ।

तुफैलको कथन छ, ती मानिसहरूले मलाई निरन्तर यस्तै किसिमका कुराहरू सम्झाए । मैले पनि उहाँको कुनै कुरा नसुन्ने वा उहाँसँग कुरा नगर्ने अठोट गरिहालेँ । म बिहान मस्जिदे हराम जाँदा उहाँको कुनै कुरा मेरो कानमा नपरोस् भनी कानलाई रुइले बन्द गरेर गएँ । त्यसो गर्दा पनि अल्लाहको मनसाय भनौं मैले उहाँको कुरा

१ सही बुखारी १/४९९,५००

सुनें । त्यो धेरै उत्तम वाणी थियो । त्यसपछि मैले मनमनै भनें : म त एक सूझबूझ राख्ने कवि हुँ । भलो र कुभलो मबाट लुकेर रहन सक्दैन । अनि किन म त्यस व्यक्तिको कुरा न सुनूँ ? यदि राम्रो लाग्यो भने स्वीकार्छु । नराम्रो लाग्यो भने छोड्छु । त्यो कुरा सोचेर म रोकिएँ । जब उहाँ घर फर्किनुभयो म पनि उहाँको पछाडि लागें । उहाँ घरभित्र प्रवेश हुनुभयो र म पनि पसें । उहाँलाई मैले आफु मक्का आएको, मानिसहरूले मलाई तर्साएको र कानमा रुइ हाल्ने कुरा गर्दा पनि उहाँको कुरा सुनेको विवरण बताएँ । त्यसपछि मैले उहाँलाई आफ्नो कुरा राख्न अनुरोध गरें । उहाँले मलाई इस्लामको निमन्त्रणा दिनुभयो र कुरआनको पाठ गर्नुभयो । अल्लाह साक्षी छ, मैले त्यसभन्दा उत्तम कुरा र त्यसभन्दा बढी न्यायिक कुरा कहिल्यै पनि सुनेको थिइनँ । तसर्थ मैले त्यहीं इस्लाम स्वीकार गरिहालें र सत्यको साक्षी दिएँ । त्यस पश्चात् मैले उहाँसँग भनें : मेरो समुदायले मेरो कुरा खान्छन् । म उनीहरुकहाँ गएर उनीहरुलाई इस्लामको निमन्त्रणा दिन्छु । तपाईंले अल्लाहसँग मलाई कुनै चमत्कार प्रदान गरोस् भनी दुआ गरिदिनु । उहाँले दुआ गर्नुभयो ।

तुफैललाई जुन चमत्कार प्रदान गरिएको थियो त्यो उनी आफ्नो समुदायको नजिक पुग्दा अल्लाहले उनको अनुहारलाई बत्ती झै प्रकाशमय बनाइदिए । उनले भने, हे अल्लाह अनुहारमा भन्दा अरु नै ठाउँमा प्रकाश दिए हुन्थ्यो । मानिसहरुले यसलाई अंगभंग भयो भन्छन् कि भन्ने मलाई डर छ । तसर्थ त्यो प्रकाश उनको लठ्ठीमा सऱ्यो । त्यसपछि उनले आफ्नो पिता र आफ्नी श्रीमतीलाई इस्लामको निमन्त्रणा दिए र ती दुबै जना मुसलमान भए । तर समुदायले इस्लाम स्वीकार गर्न ढिलो गऱ्यो । तुफैल निरन्तर प्रयासरत रहे । यहाँसम्म कि खन्दक युद्धपछि[१] हिजरत गर्दा उनको साथमा उनको खान्दानमध्ये ७० वा ८० खान्दान थिए । तुफैलले इस्लाममा महत्वपूर्ण कृतिहरुको योगदान दिएर इमामाको युद्धमा शहादत प्राप्त गरे ।[२]

**५. जिमाद अज्दीः** उनी यमनका वासी थिए । उनी अज्द शनूअह नामक कबिलाका व्यक्ति थिए । झारफूक गर्नु र विपत्तिलाई निर्मुल पार्नु उनको काम थियो । मक्का आएपछि उनले त्यहाँका महामूर्खहरूबाट मुहम्मदﷺ बहुलाहा हुन् भन्ने कुरा सुने । मैले सोचें, म उसलाई भेट्छु, अल्लाहले मेरो हातबाट उसलाई निको पार्न सक्छ । तसर्थ मैले उहाँलाई भेटेर भनें : दुःख निर्मुल पार्न मैले झारफुक गर्ने गर्छु । के तपाईंलाई पनि यसको आवश्यकता छ ? उहाँले जवाफमा भन्नुभयो : "वास्तवमा सम्पूर्ण प्रशंसा अल्लाहको लागि छ । हामी उसैको प्रशंसा गर्दछौं र उसैसँग मद्दत चाहन्छौं । जसलाई अल्लाहले मार्गदर्शन दिन्छ उसलाई कसैले पथभ्रष्ट गर्न सक्दैन र

१ यो घटना सुलैह हुदैबियापछिको हो । किनभने उनी मदिना आउँदा मुहम्मद खैबरमा हुनुहुन्थ्यो। इब्ने हेशाम १/३८५
२ इब्ने हेशाम १/१८२,१८५

जसलाई अल्लाहले पथभ्रष्ट बनाउँछ उसलाई कसैले मार्गदर्शन दिन सक्दैन । म गवाही दिन्छु, अल्लाहबाहेक कोही उपास्य छैन । ऊ एक्लै छ उसको कोही साझेदार छैन र म गवाही दिन्छु कि मुहम्मदﷺ उसको भक्त र ईशदूत हुन् ।

जिमादले भने, तपाईंले भनेको कुरा मलाई फेरि सुनाउनु होस् । उहाँले तीन पटक दोहऱ्याउनुभयो । त्यस पश्चात् जिमाद्ले भने : मैले ज्योतिषी, जादूगर र कविहरुको कुरा सुनेको छु तर मैले तपाईंले प्रस्तुत गरे जस्तो धार्मिक सिद्धान्त कतै सुनेको छैन । तपाईंका यी कुराहरूको जरो त समुद्रको अथाह गहिराइमा छ । हात दिनोस् ! म तपाईंबाट इस्लामको सपथ लिन्छु । त्यसपछि उनी इस्लाममा प्रवेश भए ।[१]

## यस्रिबका ६ जना सज्जन व्यक्तिहरु

ईशदूतत्वको एघारौं वर्ष ६२० साल जुलाई महिना हजको मौसममा इस्लामी प्रचारप्रसार गर्न केही हुनहार सपूत हात लागे । ती सपूत हेर्दाहेर्दै अग्लो तथा सुन्दर रुख झैं हुर्के,बढे । मुसलमानहरूले वर्षौंदेखि सहनु परेको अत्याचार एवं निरंकुशताको रापबाट उनीहरूको छत्रछायाँमा राहत एवं शरण पाए ।

मक्कावासीले ईशदूतमाथि मिथ्यारोपण गर्ने र मानिसहरूलाई अल्लाहको मार्गबाट रोक्ने जुन काम गरिरहेका थिए त्यसबाट जोगिन ईशदूतले रातिको अँध्यारोमा समुदायकहाँ जाने नीति अपनाउनु भयो ताकि मक्काका कुनै बहुदेववादीले अवरोध खडा गर्न नसकोस् ।

त्यसै रणनीति अनुसार एक दिन राति ईशदूत अबू बक्र र अलीलाई संगै लिएर बाहिर निस्किनुभयो । बनू जुहल र बनू शैबान बिन सअलबाको डेरा हुँदै जाँदा उनीहरुसँग इस्लामको बारेमा कुराकानी गर्नुभयो । उनीहरुले जवाफ त बडो सकारात्मक दिए तर इस्लाम स्वीकार गर्ने बारे कुनै ठोस निर्णय गरेनन् । त्यस अवसरमा अबू बकर र बनू जुहलका एक जना व्यक्तिबीच वंशीय श्रृखंला बारे बडो रोचक वादप्रतिवाद पनि भयो । दुबै जना वंशीय श्रृखंलाका विशेषज्ञ थिए ।[२]

त्यस पश्चात् ईशदूत मिना उपत्यका हुँदै जाँदा केही मानिसहरूलाई परस्पर वार्तालाप गरिरहेको सुन्नुभयो । उहाँ सीधा तिनीहरुतर्फ लाग्नुभयो र उनीहरु भएको ठाउँमा पुग्नुभयो । उनीहरु यस्रिबका ६ जना युवक थिए । उनीहरु सबैको सम्बन्ध खजरज कबिलाबाट थियो । उनीहरुको नाम निम्नलिखित छ :

१. असअद बिन जुरारह कबिला बनी नज्जार
२. औफ बिन हारिस बिन रेफाआ बिन अफरा कबिला बनी नज्जार

---

१ सही मुस्लिम २/५२५
२ अब्दुल्लाह नजदीको मुख्तसर सिरतुर्रसुल १५०,१५२

३. राफे बिन मालिक बिन अजलान — कबिला बनी जुरैक
४. कुत्बा बिन आमिर — कबिला बनी सल्मा
५. उक्बा बिन आमिर नाबी — कबिला बनी हराम बिन कअब
६. जाबिर बिन अब्दुल्लाह बिन रिआब — कबिला बनी उबैद बिन गनम

यो यस्रिबवासीको सौभाग्य भनौं उनीहरूले आफ्नो सहयोगी मदिनावासी यहूदीहरुबाट सुन्ने गर्थे, एक जना ईशदुत आउनेछ र उनको उदय छिटै हुनेछ अनि हामीले उनको साथमा लागेर तिमीहरूलाई आदे इरमलाई झै मार्ने छौं ।[१]

ईशदूतले उनीहरूकहाँ गएर सोध्नुभयो, तपाईंहरू को हुनुहुन्छ ? उनीहरूले भने : हामी खजरज कबिलाका मान्छे हौं । उहाँले सोध्नुभयो : यहुदीको सम्बद्ध ? उनीहरुले जवाफमा भने, हो । ईशदूतले भन्नुभयो, तपाईंहरु एकछिन बसे केही कुराकानी हुने थियो । उनीहरू बसे । ईशदुतले उनीहरू समक्ष इस्लामको वास्तविकता बयान गर्नुभयो । उनीहरूलाई अल्लाहतर्फ निमन्त्रणा दिदै कुरआनको पाठ गर्नुभयो । उनीहरूले आपसमा एक अर्कासँग भने : भाइ ! हेर, यो त त्यही ईशदूत जस्तो लाग्छ जसको आडमा यहूदीले हामीलाई धम्की दिने गर्छन् । यहूदीहरु उहाँको साथी बन्नमा उनीहरूभन्दा अगाडि नहोउन् भनी उनीहरूले तुरुन्तै उहाँको निमन्त्रणा स्वीकार गरी मुसलमान भए ।

उनीहरु यस्रिबका बुद्धिजीवी व्यक्ति थिए । तत्काल जुन युद्धको आगो दन्केको थियो त्यसको धूवाँले लामो समयसम्म वातावरणलाई प्रदुषित पारिरहेको थियो । त्यस युद्धले उनीहरूलाई पूर्ण रुपमा थकित पारेको थियो । त्यसकारण उनीहरुले उहाँको निमन्त्रणा युद्धको समाप्तिको माध्यम साबित हुनेछ भन्ने आशा गरे । अतः उनीहरूले भने : हामी आफ्नो यस्तो जातिलाई छोडेर आएका छौ उनीहरुमा जस्तो वैर-भाव एवं शत्रुता अरु कुनै जातिमा पाइँदैन । हामीलाई आशा छ अल्लाहले तपाईंद्वारा उनीहरूलाई एकिकृत गरिदिने छ । हामी त्यहाँ गएर मानिसहरूलाई तपाईंको निमन्त्रणा बारे बताउने छौं । यो धर्म जसलाई हामीले स्वीकारेका छौं उनीहरु सामु प्रस्तुत गर्नेछौं । यदि अल्लाहले तपाईंद्वारा उनीहरूलाई एकिकृत गरिदियो भने तपाईंभन्दा बढी सम्मानित व्यक्ति अरु कुनै हुने छैन ।

त्यस पश्चात उनीहरू मदिना फर्कर जाँदा इस्लामको सन्देश पनि लिएर गए । फलस्वरुप त्यहाँ घरघरमा ईशदूतको चर्चा हुन थाल्यो ।[२]

---

१ जादुल मआद २/५०, इब्ने हेशाम १/४२९,५४१
२ इब्ने हेशाम १/४२८

## आइशासँग निकाह अर्थात शुभविवाह

त्यसै वर्ष अर्थात ११ ईशदूतत्व शौवाल महिनामा ईशदूतले उम्मुल मुमेनिन् आइशासँग निकाह गर्नुभयो । त्यस बेला उनी ६ वर्षकी बालिका थिइन् । हिजरतको पहिलो वर्ष शौवाल महिनामा उम्मुल मुमेनिन्को विदाइ भयो त्यति बेला उनको उमेर नौ वर्ष पुगेको थियो ।[1]



१ सही बुखारी १/५५०

## इस्रा तथा मेराज

ईशदूतको निमन्त्रणा एवं प्रचारप्रसारको काम सफलता र पीडाको मध्यस्थ अवस्थाबाट गुज्रिरहँदा अर्थात क्षितिजको किनारामा धमिला ताराहरू देखिन थालेपछि इस्रा ताथ मेराजको कुरा सामुन्ने आयो । मेराज कहिले भयो यस बारेमा जीवनीकारहरुको भनाईमा विभेद छ जुन यस प्रकार छ :

१. जुन वर्ष उहाँलाई ईशदूत बनाइयो त्यसै वर्ष मेराजको घटना घटित् भयो ।
२. ईशदूतत्वको पाँचौं वर्ष पश्चात मेराजको घटना घटित् भयो । (इमाम नववी र इमाम कुर्तबी )
३. ईशदूतत्वको दशौं वर्ष रजब महिनाको २७ तारिखमा भयो । (विद्वान मन्सूरपुरी) ।
४. हिजरतभन्दा सोह्र महिना पहिला अर्थात ईशदूतत्वतको बाह्रौं वर्ष रमजान महिनामा भयो ।
५. हिजरतभन्दा एक वर्ष दुई महिना पहिला अर्थात् ईशदूतत्वको तेह्रौं वर्ष मुहर्रम महिनामा भयो ।
६. हिजरतभन्दा एक वर्ष दुई महिना पहिला अर्थात ईशदूतत्वको तेह्रौं वर्ष रब्बीअल औवल महिनामा भयो ।

उपरोक्त भनाईहरुमध्ये एकदेखि तीनसम्मका भनाई सही मान्न सकिदैन । किनभने खदीजाको निधन पाँच वखतको नमाज अनिवार्य गरिनुभन्दा पहिला भएको थियो । साथै पाँच वखतको नमाजको अनिवार्यता मेराजको राती भएको थियो भन्ने बारे सबै एकमत छन् । अर्थात खदीजाको निधन मेराजभन्दा पहिला भएको थियो । खदीजाको निधन ईशदूतत्वको दसौं वर्ष रमजान महिनामा भएको थियो । तसर्थ मेराजको समय त्यसपछिको हुनुपर्छ त्यसभन्दा अधिको हुन सक्दैन । अन्तिमका तीन भनाइहरुमध्ये कुनै सही प्रमाण प्राप्त हुन सकेन । तर कुरआनको इस्रा नामक अध्यायको सन्दर्भलाई नियाल्ने हो भने त्यस घटनालाई मक्की युगको एकदमै अन्तिम चरणको हुन सक्छ भनी अनुमान लगाउँन सकिन्छ ।[१]

हदिस वर्णन गर्नेहरुले यस घटनाको जुन विवरणहरू उल्लेख गरेका छन् त्यसको तपसिल हामीले अघिल्लो छन्दहरुमा प्रस्तुत गर्नेछौं ।

इब्ने कैयम लेख्छन् : सही भनाइ अनुसार ईशदूतलाई उहाँको पवित्र शरीरसमेत बुर्राक नामक घोडामाथि सवार गरी जिब्रइलको साथमा मस्जिदे हरमदेखि बैतुल मक्दिस्सम्म यात्रा गराइयो । उहाँ त्यहाँ झर्नुभयो र अन्य ईशदूतहरूलाई

---

१ यी भनाइहरुको लागि जादुल मआद २/४९, अब्दुल्लाह नजदीको मुख्तसर सिरतुर्रसुल १४८, रहमतुल लिल् आलमिन् १/७६ हेर्नुहोस् ।

आफुले इमामत गरी नमाज पढाउनुभयो । त्यस अवसरमा उहाँले बुर्राकलाई त्यहाँ मस्जिदको ढोकामा बाँधिदिनु भएको थियो ।

त्यसपछि त्यसै दिन राती उहाँलाई बैतुल मक्दिसदेखि आकाशीय संसारमा लगियो । जिब्रइलले ढोका खोल्न लगाए । उहाँको लागि ढोका खोलियो । उहाँले त्यहाँ मानवपीता आदमलाई देख्नुभयो र उनलाई सलाम गर्नुभयो । उनले उहाँलाई स्वागत गरे । सलामको जवाफ दिए र उहाँको ईशदूतत्वलाई स्वीकारे । अल्लाहले उहाँलाई उहाँको दाँयातर्फ असल मानिसहरुको आत्मा र बायाँतर्फ दुष्टहरूको आत्मा देखायो ।

फेरि उहाँलाई दोस्रो आकाशमा लगियो र ढोका खुलाइयो । उहाँले त्यहाँ यह्या बिन जकरिया र इसा बिन मरियमعليه السلामलाई देख्नुभयो । दुबैसँग भेट गरी सलाम गर्नुभयो । दुबैले सलामको जवाफ दिएर बधाई दिए साथै उहाँको ईशदूतत्वलाई स्वीकारे । तेस्रो आकाशमा लगियो । उहाँले त्यहाँ यूसुफعليه السلامलाई देख्नुभयो र उनलाई सलाम गर्नुभयो । उनले सलामको जवाफ दिदै उहँलाई स्वागत गरे साथै उहाँको ईशदूतत्वलाई स्वीकारे ।

चौथो आकाशमा लगियो । त्यहाँ उहाँले इद्रीसعليه السلامलाई देख्नुभयो र उनलाई सलाम गर्नुभयो, उनले सलामको जवाफ दिए । स्वागत गरे साथै उहाँको ईशदूतत्वलाई स्वीकारे । पाँचौं आकाशमा लगियो । त्यहाँ उहाँले हारुन बिन इमरानعليه السلامलाई देख्नुभयो र उनलाई सलाम गर्नुभयो । उनले जवाफ दिदै बधाई दिएर ईशदूतत्वलाई स्वीकारे ।

उहाँलाई छैठौं आकाशमा लगियो । त्यहाँ उहाँको भेट मूसा बिन इमरानसँग भयो । उहाँले सलाम गर्नुभयो । उनले जवाफ दिदै उहाँलाई स्वागत गरे साथै ईशदूतत्वलाई स्वीकारे । तर उहाँ त्यहाँबाट अगाडि बढ्न लाग्दा उनी रुन लागे । तपाईँ किन रुदै हुनुहुन्छ भनी उनीसँग सोधियो ? उनले भने म रोएको कारण एउटा युवा जसलाई मभन्दा पछि पठाइयो उनका अनुयायीहरु मेरो अनुयायीहरुभन्दा अधिक संख्यामा स्वर्गमा प्रवेश हुनेछन् । त्यसपछि उहाँलाई सातौं आकाशमाथि लगियो । त्यहाँ उहाँको भेट इब्राहीमعليه السلامसँग भयो । उहाँले उनलाई सलाम गर्नुभयो । उनले जवाफ दिदै बधाई दिए साथै उहाँको ईशदूतत्वको साक्षी दिए । त्यसपछि उहाँलाई सिदरतुल मुनतहासम्म लगियो र त्यहाँ बैतुल मामूर देखाइयो ।

त्यसपछि उहाँलाई सर्वशक्तिमान अल्लाहको दरबारमा लगियो र उहाँ अल्लाहको अति निकट हुनुभयो अर्थात त्यसको दुरी दुई वटा भालाको चुच्चो बराबर वा त्यो भन्दा पनि कम थियो । त्यतिखेर अल्लाहले उहाँमाथि ईशवाणी अवतरण गरी पचास बखतको नमाज अनिवार्य गरे । त्यसपछि उहाँ फिर्ता हुनुभयो । उहाँ मूसाعليه السلام निरबाट जाने क्रममा उनले सोधे, अल्लाहले तपाईँलाई कुन कुराको आदेश दिएका छन् ? उहाँले भन्नुभयो : पचास बखतको नमाजको । उनले भने : तपाईंको

अनुयायीहरुसँग त्यसको पालना गर्ने क्षमता छैन । अल्लाहकहाँ फर्केर जानु र आफ्नो अनुयायीहरुको लागि केही कम गरिदिन आग्रह गर्नु । उहाँले जिब्रइलعليه السلامतिर हेर्नुभयो मानौं उनीसँग परामर्श गर्दै हुनुहुन्छ । उनले इशारा गरे यदि तपाईं चाहनु हुन्छ भने जानु । त्यसपछि जिब्रइल عليه السلامले उहाँलाई अल्लाहको सामु लगे । अल्लाह आफ्नो ठाउँमा विराजमान थिए । सहीह बुखारी नामक हदीस अनुसार उनले दश नमाज कम गरिदिए । उहाँलाई तल ल्याइयो । मूसाعليه السلامको नजिकबाट जादै गर्दा उनलाई खबर दिनुभयो । उनले भने : तपाईं अल्लाहकहाँ जानु र केही कम गर्न आग्रह गर्नु । यसरी मूसाعليه السلام र अल्लाहबीच उहाँको ओहोरदोहोर निरन्तर जारी रह्यो । अन्तिममा अल्लाहले केवल पाँच बखतको नमाज शेष राखे । त्यसपछि पनि मूसाले उहाँलाई फिर्ता गएर केही कम गर्न आग्रह गर्न सल्लाह दिए । तर उहाँले भन्नुभयो : अब त मलाई आफ्नो पालनकर्तासँग लाज पनि लाग्न थाल्यो । म यसैमा राजी छु र यसैलाई आत्मसात गर्छु । उहाँ धेरै टाढा गएपछि परोक्षबाट स्वर आयो : मैले आफ्नो उपासना लागू गरिदिएँ र आफ्ना भक्तजनहरूबाट केही कम गरिदिएँ ।[१]

इब्ने कैयमले ईशदूतले अल्लाहलाई देख्नुभयो या भएन भन्ने बारे केही मतभेदलाई चर्चा गरेका छन् । साथै इस्लामी विद्वान इब्ने तैमीयाको एउटा अनुसन्धानको चर्चा गरेका छन् जसको सार यस प्रकार छ । आँखाले देखेको भन्ने बारे कुनै प्रमाण छैन र ईशदूतका कुनै पनि साथी त्यसको पक्षमा छैनन् । वाह्य रुपमा वा आध्यात्मिक रुपमा देखेका हुन् भन्ने इब्ने अब्बासको जुन दुई भनाइ नक्कल गरिएको छ त्यसमा पहिलो भनाइ दोस्रोको विपरित छैन । त्यसपछि इब्ने कैयमले कुरआनको अध्याय नज्ममा अल्लाहको निम्नलिखित भनाइको यसरी व्याख्या गरेका छन् :अल्लाहको भनाई छ : “ऊ नजिक आयो र एकदमै नजिक भइहाल्यो ।”

यो त्यस निकटताको कुरा हो जुन मेराजबाहेक प्राप्त भएको थियो । किनभने अध्याय नज्ममा जुन निकटताको चर्चा छ त्यो जिब्रइलको निकटताको कुरा हो । जस्तै आइशा र इब्ने मसउदमार्फत वर्णन गरिएको छ । सन्दर्भले पनि त्यसैलाई संकेत गर्दछ । मेराजसँग सम्बन्धित हदिसमा जुन निकटताको चर्चा छ त्यसमा स्पष्ट रुपमा अल्लाहसँग निकटता भएको कुरा उल्लेख छ । कुरआनको नज्म नामक अध्यायमा त्यसलाई कतै पनि कोट्याइएको छैन । त्यसमा ईशदूतले जसलाई दोस्रो पटक सिदरतुल मुन्तहा नजिक देख्नु भएको थियो उनी जिब्रइल थिए । उनलाई स्वयम उनको रुपमा मुहम्मदﷺले दुई पटक देख्नु भएको थियो । एक पटक संसारमा र अर्को पटक सिदरतुल मुन्तहा नजिक ।[२]

---

१ जादुल मआद २/४७
२ जादुल मआद २/४७, सही बुखारी १/५०,४५५,सही मुस्लिम १/९१

केही भनाइ अनुसार त्यति बेला पनि ईशदूतको छाती चिरिएको थियो र उहाँलाई त्यस यात्राको दौरान कैयौं कुराहरु देखाइयो । उहाँलाई दूध र रक्सी पेश गरियो । उहाँले दूध ग्रहण गर्नुभयो । त्यसमा उहाँसँग भनियो तपाईंलाई प्राकृतिक मार्ग देखाइएको छ अर्थात तपाईंले प्राकृतिक मार्ग पाउनु भएको छ । यदि उहाँले रक्सी रोज्नु भएको भए उहाँको अनुयायी पथभ्रष्ट हुने थिए । उहाँले स्वर्गमा चार वटा नहर देख्नुभयो । दुई प्रत्यक्ष रुपमा दुई अप्रत्यक्ष रुपमा । प्रत्यक्ष नहरहरू नील एवं फरात थिए । त्यसको अर्थ थियो उहाँको ईशदूतत्वले नील र फरातलाई आफ्नो थलो बनाउनु हुनेछ ।

उहाँले नर्कका रक्षक फरिश्तालाई पनि देख्नुभयो । उनी न त हाँस्थे न उनको अनुहारमा खुशी तथा प्रसन्नता थियो । उहाँले स्वर्ग र नर्क पनि देख्नुभयो । उहाँले ती मानिसहरूलाई पनि देख्नुभयो जसले अनाथहरुको सम्पत्ति जफत गरेर खाने गर्थे । उनीहरूको ओठ ऊँटको ओठ जस्तै थियो । उनीहरूले आफ्नो मुखमा ढुंगाका टुक्रा जस्ता अंगार कोचिरहेका थिए र त्यो उनीहरुको मलद्वारबाट निस्किरहेको थियो ।

उहाँले ब्याज खानेहरूलाई पनि देख्नुभयो । उनीहरुको पेट यति ठूल ठूलो थियो कि उनीहरू आफ्नो ठाउँबाट यता उता हिँडन सक्दैनन् थिए । जब फिराउनी समुदायलाई आगोमा ल्याइन्थ्यो उनीहरुको नजिकबाट हिँडदा उनीहरुलाई कुल्चदै जान्थे । उहाँले बलात्कारीहरूलाई पनि देख्नुभयो । उनीहरूको सामुन्ने ताजा र बोसो भएको मासु थियो र त्यसैमा सडेको नराम्रो झिल्लीदार मासु पनि थियो । उनीहरूले ताजा र बोसोयुक्त मासु छोडेर सडेको नराम्रो झिल्लीदार मासु खाइरहेका थिए ।

उहाँले ती महिलाहरूलाई देख्नुभयो जसले परपुरुषबाट भुँडी बोकेर आफ्नो श्रीमानको भन्ने गर्थिन् । उहाँले उनीहरुलाई उनीहरुको छातीमा ठूलठूला बाङ्गा काँडा घोपेर आकाश र धर्तीको बीच झुण्ड्याइएको देख्नुभयो ।

उहाँले आउने जाने क्रममा मक्काका एउटा समूहलाई पनि देख्नुभयो र उनीहरूलाई तिनको एउटा ऊँट पनि देखाउनुभयो जुन भागेको थियो । उहाँले एउटा भाँडोमा ढाकेर राखिएको उनीहरुको पानी पनि खानुभयो । त्यति बेला त्यो समूह सुतिरहेको थियो । अनि उहाँले त्यसरी नै भाँडो ढाकेर छाडिदिनुभयो । त्यो कुरा मेराजको बिहानपख उहाँको दावी सत्य भएको एउटा प्रमाण साबित भयो ।[1]

विद्वान इब्ने कैयम भन्छन् : बिहानपख ईशदूतले आफ्नो समुदायलाई अल्लाहले देखाएका ठूलठूला निशानीहरूको खबर दिएपछि समुदायको विरोध, उदण्डता एवं उग्रताले झन तीव्रगति लियो । उनीहरूले उहाँसँग बैतुल मक्दिस बारे सोधे । त्यस प्रश्नमा अल्लाहले उहाँलाई प्रत्यक्ष रुपमा बैतुल मक्दिस देखाइदिए । बैतुल

---

१ इब्ने हेशाम १/३९७,

मक्दिस उहाँको नजरमा आयो । उहाँले समुदायलाई त्यसको निशानीहरू बताउन शुरु गर्नुभयो । उनीहरूले कुनै कुराको खण्डन गर्न सकेनन् । उहाँले आवत जावत गर्दै गरेका उनीहरुको टोलीसँग भेटेको पनि चर्चा गर्नुभयो । साथै उनीहरुको आउजाउ गर्ने समय पनि बताउनुभयो । उहाँले त्यस ऊँटको बारेमा पनि बताउनुभयो जुन टोलीको अघिअघि आइरहेको थियो । उहाँले जे जस्तो बताउनु भएको थियो त्यही भयो । यी सम्पूर्ण कुराहरु हुँदाहुँदै पनि उनीहरूभित्र विरोधी भावना मात्र बृद्धि भयो । ती अत्याचारीहरूले इन्कार गर्दै कुनै पनि कुरा मान्न अस्वीकार गरिदिए ।[१]

भनिन्छ अबु बकरलाई यसै अवसरमा सिद्दीक अर्थात सज्जनको उपाधि दिइएको थियो । किनभने अबु बकरले मात्र त्यस घटनालाई सत्य मानेका थिए र अरु मानिसहरुले त्यसलाई मिथ्या ठानेका थिए ।[२]

मेराजको महत्वपूर्ण पक्ष बारे जुन कुरा भनिएको छ त्यो यस प्रकार छ :
ताकि हामीले तिमीलाई आफ्नो केही निशानीहरू देखाऔं । (१७:१)
ईशदूतहरुको बारेमा अल्लाहको नीति यस्तै हुन्छ । भनिएको छ : इब्राहीमलाई दृढ विश्वास होस् भनेर हामीले उनलाई आकाश एवं धर्तीको राज्यव्यवस्था देखायौं । (६:५७)

अल्लाहले मूसासँग भने : ताकि हामीले तिमीलाई आफ्ना केही ठूला निशानीहरू देखाऔं । (२०:२३)

यी निशानीहरू देखाउनुको उद्देश्य अल्लाहले यसरी स्पष्ट पारेका छन् । भनिएको छ : ताकि उनी आस्थावान बनुन् । ईशदूतहरुलाई दिइएको ज्ञानको प्रत्यक्ष अवलोकन पनि गराइन्छ जसलाई हामी अनुमान पनि लगाउन सक्दैनौं । त्यसैले भनिन्छ "सुनेको कुरा देखे जस्तो हुँदैन" । त्यसै कारणले ईशदूतहरुले अल्लाहको मार्गमा जस्तो सुकै कठिनाइहरू सहन पनि तयार हुन्छन् । उनीहरुलाई संसारको सारा शक्ति प्राप्त भए पनि लामखुट्टेको पखेटा बराबर छैन भन्ने लाग्थ्यो । त्यसकारण उनीहरूले ती शक्तिहरूको तर्फबाट हुने कठिनाइ र कष्टहरूको कुनै परवाह गर्थेनन् ।

मेराजको घटनाभित्र जुन रहस्य तथा सत्यतथ्य छ त्यसलाई इस्लामी धार्मिक ग्रन्थमा खोज्न सकिन्छ । यद्यपि यस पवित्र यात्राबाट प्रस्फुटित भएका केही ठूलठूला सत्यताहरु ईशदूतको पवित्र जीवनमा झल्किएका छन् । त्यसकारण यहाँ त्यसलाई संक्षिप्त रुपमा वर्णन गरिदै छ ।

अल्लाहले कुरआनको अध्याय इस्रामा इस्राको घटनालाई केवल एउटा श्लोकमा उल्लेख गरी आफ्नो कथनलाई यहूदको कुकर्म र अपराधतर्फ मोडिदिएका

---

१ जादुल मआद १/४८, सही बुखारी २/६८४, सही मुस्लिम १/९६
२ इब्ने हेशाम १/३९९

छन् । कुरआनले त्यो मार्ग देखाउँछ जो सबैभन्दा सीधा र सही मार्ग हो भन्ने कुराको सूचना दिएका छन् । यदाकदा कुरआनका पाठकहरुमा यी कुराहरु अमेल कुराहरु हुन भन्ने शंका उत्पन्न हुन सक्छ तर वास्तवमा यस्तो छैन बरु अल्लाहले यस्तो शैलीद्वारा अब यहूदलाई मानवजातिको नेतृत्वबाट अपदस्थ गरिनेछ भन्ने कुरातर्फ संकेत गरेका छन् । किनकि उनीहरुले जुन अपराध गरेका छन् त्यसले गर्दा उनीहरूलाई त्यस पदमा राख्न मिल्दैन । तसर्थ अब त्यो पद ईशदूतलाई हस्तान्तरण गरिने छ । इब्राहिमी निमन्त्रणाका दुबै केन्द्र उहाँको अधीनमा गरिने छ । अर्थात आध्यात्मिक नेतृत्व एक समुदायबाट अर्को समुदायलाई दिने समय पनि आयो । जुन समुदायको इतिहास छलकपट, अत्याचार एवं कुकृतिले भरिएको छ उसको नेतृत्व खोसेर एक यस्तो समुदायलाई दिनु जरूरी थियो जसबाट सत्कर्म र शुभकार्यको मुहान फुटोस् । त्यस नेतृत्वको अगुवा सत्यमार्ग देखाउने ईशवाणीका ज्ञाता पनि बनुन् ।

तर त्यो नेतृत्व हस्तान्तरण कसरी हुन सक्छ जबकी त्यस समुदायको ईशदूत मक्काको पहाडहरूमा मानिसहरूबीच ठक्कर खाँदै हिँडिरहेको थियो ? त्यस बेला यो एउटा प्रश्न चिन्ह खडा भएको थियो तर त्यसले एकअर्को सत्यताबाट पर्दा उठाइरहेको थियो । इस्लामी आह्वान आफ्नो समापन र पूर्णताको चरण नजिक आउनै लागेको थियो । साथै एकअर्को चरणको शुत्रपात हुँदै थियो जसको दिशा पहिलाको भन्दा भिन्न थियो । त्यसकारण केही श्लोकहरूमा बहुदेववादीहरूलाई खुल्ला चेतावनी र कडा धम्की दिइएको हामी भेटाउँछौं । अल्लाहको कथन छ ।

وَإِذَا أَرَدْنَا أَنْ نُهْلِكَ قَرْيَةً أَمَرْنَا مُتْرَفِيهَا فَفَسَقُوا فِيهَا فَحَقَّ عَلَيْهَا الْقَوْلُ فَدَمَّرْنَاهَا تَدْمِيرًا وَكَمْ أَهْلَكْنَا مِنَ الْقُرُونِ مِنْ بَعْدِ نُوحٍ ۗ وَكَفَىٰ بِرَبِّكَ بِذُنُوبِ عِبَادِهِ خَبِيرًا بَصِيرًا

(بنى إسرائيل : 16 -17 )

जब हामी कुनै वस्तीलाई ध्वस्त गर्न चाहन्छौं अनि त्यहाँका प्रतिष्ठित व्यक्तिहरुलाई कुनै कुरा गर्ने आदेश दिन्छौं । उनीहरुले त्यसको खुलेर विरोध गर्दछन् । अनि त्यस वस्तीमा विनाशको फैसला निश्चित हुन्छ र हामी त्यसलाई थिचोमिथो पारेर छाड्छौं । हामीले ईशदूत नूह पश्चात कैयौं जातिलाई बर्बाद गरिदियौं र तिम्रो पालनहार आफ्ना भक्तजनहरूको अपराधको खबर राख्न र देख्नको लागि प्रयाप्त छ । (बनी इस्राइल१७: १६–१७)

फेरि ती श्लोकहरूको साथमा केही यस्ता श्लोकहरू पनि छन् जसमा मुसलमानहरूलाई सांस्कृतिक मुल्यमान्यता एवं आधारभूत कुराहरू बताइयो जसका आधारमा आगामी दिनहरुमा इस्लामी समाजको निर्माण हुनु थियो । मानौं उनीहरुले धर्तीको कुनै भागमा आफ्नो ठेगाना बनाइसकेका छन् जहाँ विद्यमान रहेका हरेक कुराहरु उनीहरुको आफ्नो हातमा छ । उनले एउटा यस्तो एकता बनाए जसमा समाजको चक्र घुम्ने गर्दछ । तसर्थ ती श्लोकहरूमा ईशदूतले निकटमा नै शान्तिक्षेत्र प्राप्त गर्नुहुनेछ र त्यहीं उहाँको धर्मले पूर्णता पाउने छ भन्ने कुराको संकेत छ ।

यी नै यस पवित्र यात्राको रहस्यहरु हुन् । यो मेरो वहसको विषयसँग सम्बन्धित थियो । त्यसकारणले मैले यसको वर्णन गरिदिएको हुँ । यी रहस्यहरुलाई नियालेपछि मैले इस्राको घटना कि त प्रथम बैअते अकबाभन्दा केही पहिलाको हो वा दुबै बैअतबीचको हो भन्ने दृष्टिकोण प्रस्तुत गरेको छु । अल्लाह नै सर्वज्ञाता छन् ।

## प्रथम बैअते अकबा

ईशदूतत्वको ११औँ वर्ष हजको मौसममा यस्रिबका ६ जना व्यक्तिहरूले इस्लाम स्वीकार गरेर ईशदूतसँग हामी आफ्नो समुदायमा तपाईंको ईशदूतत्वको प्रचारप्रसार गर्नेछौँ भनेर भनेको कुरा उल्लेख भइसकेको छ ।

फलस्वरुप आगामी वर्ष हजको मौसम अर्थात् ईशदूतत्वको १२औँ वर्ष तद्नुसार जुलाई ६२१ सालमा १२ जना उहाँको सेवामा उपस्थित भए । उनीहरुमध्ये जाबिर बिन अब्दुल्लाह बिन रिमाबबाहेक बाँकी पाँच जना गत वर्ष पनि आएका थिए साथै अरु सात जना नयाँ थिए जसको नामावली निम्न छ :

| क्रम | व्यक्तिको नाम | खानदानको नाम | जाति |
|---|---|---|---|
| १. | मुआज बिन हारिस | बनी नज्जार | खज्रज |
| २. | जकवान बिन अब्दुल कैस | बनी जुरैक | खज्रज |
| ३. | उवादह बिन सामित | बनी गनम | खज्रज |
| ४. | यजीद बिन सअलबा | गनमको सहयोगी | खज्रज |
| ५. | अब्बास बिन उबादह | बनी सालेम | खज्रज |
| ६. | अबूल हैसम बिन तैहान | बनी अब्दुल अशहल | औस |
| ७. | अवीम बिन साअदह | बनी अमर बिन औफ | औस |

उनीहरुमध्ये अन्तिमका दुईजना व्यक्ति मात्र औस जातिबाट थिए बाँकी सबै खजरज जातिबाट थिए ।[१] उनीहरूले अल्लाहका ईशदूतसँग मिनामा अकबा अर्थात घाटी नजिक भेट गरे र उहाँसँग केही कुराहरूको प्रतिज्ञा गरे । तिनै कुराहरूको प्रतिज्ञा आगामी वर्ष हुदैबीया सम्झौतापछि र मक्का विजय हुँदा महिलाहरूसँग लिइएको थियो ।

अकबाको त्यस प्रतिज्ञाको विवरण सही बुखारीमा उबादह बिन सामितमार्फत वर्णन गरिएको छ । ईशदूतले भन्नुभयो : आऊ मसँग यस कुराको प्रतिज्ञा गर कि तिमीहरुले अल्लाहसँग कुनै वस्तुलाई साझेदार ठान्ने छैनौ, चोरी गर्ने छैनौ, अवैद यौन सम्पर्क गर्ने छैनौ, आफ्नो सन्तानको हत्या गर्ने छैनौ, आफ्नो मनले गढेर कसैमाथि दोषारोपण गर्ने छैनौ र कुनै भलो कुरामा मेरो अवज्ञा गर्ने छैनौ । जुन व्यक्तिले यी सम्पूर्ण कुराहरू पूरा गर्नेछ उसले अल्लाहको तर्फबाट त्यसको पुण्य पाउनेछ र जुन व्यक्ति ती कुराहरुमध्ये कुनै कुराको दोषी हुनेछ त्यसलाई दुनियाँमा नै त्यसको सजाय दिइने छ । त्यो सजाय दोषीको लागि प्रायश्चित हुनेछ । त्यसैगरी कसैले ती कुराहरुमध्ये नराम्रो गऱ्यो र अल्लाहले त्यसलाई ढाकछोप गरिदियो भने त्यो

१ इब्ने हेशाम १/४३१

कुरा अल्लाहको सुपुर्द छ । उसले चाह्यो भने सजाय दिनेछ र उसले चाहयो भने माफ गरिदिने छ । उबादह भन्छन् हामीले यी कुराहरुको उहाँसँग प्रतिज्ञा गर्‍यौं ।[१]

## मदिनामा इस्लामको प्रतिनिधि

जब प्रतिज्ञा गर्ने काम पूरा भयो र हज समापन भयो अनि ईशदूतले उनीहरूको साथमा यस्रिबतर्फ मुसलमानहरुलाई इस्लामी दर्शनको शिक्षा दिन , इस्लामको व्यवस्था बताउन र जुन मानिसहरुले अझसम्म इस्लाम स्वीकारेका थिएनन् उनीहरुलाई इस्लामको बारेमा बताउन आफ्नो पहिलो प्रतिनिधि टोली पठाउनुभयो । ईशदूतले त्यस कार्यको लागि प्रथम चरणमा मुस्लिम भएका एक जना युवकलाई छनौट गर्नुभयो । उनको नाम मुस्अब बिन उमैर अब्दरी थियो ।

## संतोषजनक सफलता

मुस्अब बिन उमैर मदिना पुगेपछि असअद बिन जुरारहको घरतिर लागे । त्यसपछि दुबै जना मिलेर यस्रिबमा बढो उत्साहका साथ इस्लामको प्रचार प्रसार शुरु गरे । मुस्अब मुक्रीउको उपाधिबाट प्रसिद्ध भए । (मुक्रीउको अर्थ पढाउने व्यक्ति भन्ने हुन्छ । त्यस बेला शिक्षक वा गुरुलाई मुकरीउ भनिन्थ्यो ) ।

प्रचारप्रसारको क्रममा उनीहरुले सफलता हासिल गरेको एउटा रोचक घटना यस प्रकार छ । एक दिन अस्अद बिन जुरारह उनलाई साथमा लिएर बनी अब्दुल अश्हल र बनी जफरको टोलमा गएर त्यहाँ बनी जफरको एउटा बगैंचामा रहेको मर्क नामी कुवानिर बसे । उनीहरु भएको ठाउँमा केही अरु मुसलमानहरु पनि जम्मा भए । त्यति बेलासम्म बनी अब्दुल अश्हलका दुबै सरदार सअद बिन मुआज र उसैद मुसलमान भएका थिएनन् । उनीहरु बहुदेववादी नै थिए । उनीहरुलाई थाहा भएपछि सअदले उसैदसँग भने, जाऊ त ती दुवै इस्लाम प्रचारकलाई जो हाम्रा कमजोर व्यक्तिहरूलाई उल्लु बनाउन आएका छन् हप्काऊ र हाम्रो टोलमा आउन मनाही गरिदेऊ । किनभने अस्अद बिन जुरारह मेरो सानीमाको छोरा हो । त्यसैले गर्दा मैले तिमीलाई भनेको हुँ । नत्र मैले नै भन्थें ।

उसैदले आफ्नो हतियार उठायो र ती दुवै भएतिर गयो । अस्अदले उनलाई आउँदै गरेको देखेर मुस्अबसँग भने : ऊ त्यो आफ्नो जातिको सरदार हो जो हामी भएतिर आइरहेको छ । त्योसँग अल्लाह बारे सत्य कुरा गर्नु । मुस्अबले भने : यदि ऊ बस्यो भने कुरा गर्छु । उसैदले त्यहाँ पुगेपछि उभिएर हकार्दै भन्यो : तिमी दुबै हामीकहाँ किन आएका हौ ? हाम्रा कमजोरहरूलाई उल्लु बनाउन खोजेकाछौ ? याद राख ? यदि तिमीलाई आफ्नो ज्यानको माया छ भने हामीबाट टाढै बस । मुस्अबले

---

१ सही बुखारी १/७, १/५५०

भने : यसो बसेर केही सुन्नोस् न ? यदि कुनै कुरा मन पऱ्यो भने स्वीकार गर्नुस् मन नपरे छोडनुस् । उसैदले भन्यो कुरा त न्यायोचित छ । त्यसपछि ऊ आफ्नो हतियार गाडेर बस्यो । मुस्अबले इस्लामको कुरा आरम्भ गरे । कुरआनको पाठ गरे । उनको आफ्नो बयान छ : उसैद बोल्नुभन्दा पहिला नै उनको फरासिलो अनुहारबाट इस्लामप्रति उनको रुचि छ भन्ने कुरा थाहा भयो । त्यसपछि उनले भने : यो धर्म त उत्तम एवं श्रेष्ठ छ । तिमीहरूले कसैलाई यस धर्ममा प्रवेश गराउन लाग्दा के गर्छौ ? उनीहरुले भने : तपाईंले सबैभन्दा पहिला स्नान गर्नुहोस्, कपडा सफा गर्नुहोस् अनि सत्यको गवाही दिनुहोस् र दुई रकअत नमाज पढ्नुहोस् । उनले उठेर स्नान गरे अनि सफा कपडा लगाएर कलेमा तैयबा अर्थात पवित्र मन्त्र पढे त्यसपछि दुई रकअत नमाज पढे । त्यो सकेपछि उनले भने : मेरो पछाडि एक जना अर्को व्यक्ति पनि छ । यदि उसले तिमीहरुको कुरा स्वीकार गऱ्यो भने उसको समुदायको सबै जनाले तिमीहरुको कुरा मान्ने छन् । म उसलाई पनि तिमीहरुकहाँ पठाइदिन्छु । (इशारा सअद बिन मुआजतिर थियो ।)

त्यसपछि उसैद आफ्नो हतियार उठाएर सअदतिर गए । सअद आफ्नो समुदायको बैठकमा विराजमान थिए । उसैदलाई देखेर भने : ऊ जुन अवस्थामा हामीबाट गएको थियो त्यो अवस्थामा छैन । जब उसैद सभाको नजिक आएर उभिए अनि सअदले उनीसँग सोधे, के भयो ? उनले भने : मैले ती दुवै जनासँग कुरा गरेँ तर मलाई उनीहरुको कुरामा कुनै आपत्ति लागेन । तै पनि मैले उनीहरूलाई हाम्रो टोलमा नआउन भनेको छु र उनीहरू पनि हाम्रो कुरा मान्न तयार छन् ।

बनी हारिसाका मानिसहरू असअद बिन जुरारहको हत्या गर्न गएका छन् भन्ने कुरा मलाई थाहा भएको छ । त्यसको कारण उनीहरूलाई थाहा छ अस्अद तपाईंको सानीमाको छोरो हो । तसर्थ उनीहरूले तपाईंको प्रतिज्ञा भंग गर्न खोजेका छन् । त्यो कुरा सुनेर सअद रिसले चुर भए अनि आफ्नो भाला लिएर सीधै उनीहरू दुबैकहाँ गए । दुवैलाई शान्त रुपमा बसेको देखे । त्यो देखेर उनले बुझे उसैदको चाहना उनले पनि उनीहरुको कुरा सुनुन् भन्ने थियो । तर उनी ती दुवैकहाँ गएर उनीहरुलाई हप्कीदप्की गर्न थाले । त्यसपछि असअद बिन जुरारहलाई सम्बोधित गरेर भने : ऐ अबू उमामह ! यदि मेरो र तिम्रोबीच नाता नभएको भए तिमीले मसँग यसको आशा राख्न सक्दैन थियौ । तिमीहरुले हाम्रो टोलमा आएर यस्तो गतिविधि गर्दैछौ जुन मलाई सह्य छैन ।

उता अस्अदले मुसअबसँग पहिलेदेखि नै भनेका थिए कि तिमीकहाँ एउटा यस्तो सरदार आइरहेको छ जसको पछाडि उसको पूरा समुदाय छ । यदि उसले तिम्रो कुरो मान्यो भने उनीहरुमध्ये कसैले तिमीहरुको कुरा अस्वीकार गर्ने छैन । तसर्थ मुस्अबले सअदसँग भने : यसो तपाईं बसेर हाम्रो कुरा सुने हुन्थ्यो नि । यदि कुनै

कुरो मन परे स्वीकार्नु मन नपरे नस्वीकार्नु । हामी तपाईंले मन नपराएको कुरा तपाईंसँग गर्ने नै छैनौं । सअदले भने : कुरा न्यायोचित गरेका छौ । त्यसपछि आफ्नो भाला गाडेर बसे । मुसअबले उनीसँग इस्लामको कुरा गरे साथै कुरआनको पाठ गरे । मुस्अबको बयान छ : सअदले जवाफ दिनुभन्दा पहिले नै उनको अनुहारको चमकबाट उनले इस्लाम स्वीकार्न तयार छन् भन्ने कुरा थाहा भयो । त्यसपछि सअदले भने : तिमीहरूले इस्लाममा प्रवेश गर्दा के गर्छौ ? मुस्अबले भने : तपाईं स्नान गर्नु, कपडा सफा गर्नु अनि सत्य कुराको गवाही दिनु । त्यसपछि दुई रकअत नमाज पढ्नु । सअदले त्यस्तै गरे ।

त्यस पश्चात् भाला लिएर आफ्नो समुदायको सभामा विराजमान भए । मानिसहरूले देख्ना साथ भने : सअद जुन रवाफका साथ गएका थिए ठिक त्यसको विपरित फर्केका छन् । सअद सभानिर आएर रोकिएपछि उनले भने : हे बनी अब्दुल अश्हल ! तिमीहरूले मलाई कस्तो देखिरहेका छौ ? तिनीहरूले भने : तपाईं हाम्रो सरदार हुनुहुन्छ । सबैभन्दा राम्रो सूझबूझका मालिक हुनुहुन्छ र हाम्रा सबैभन्दा उत्तम रक्षक हुनुहुन्छ । उनले भने : त्यसो भए ल सुन ! अब तिम्रो पुरुष र महिलासँग मेरो कुराकानी गर्न हराम छ जबसम्म तिमीहरू अल्लाह र उसको दूतमाथि आस्था राख्दैनौ । उनको त्यो कुराले गर्दा साँझ नपर्दै उनको समुदायको सम्पूर्ण पुरुष तथा महिलाले इस्लाम स्वीकारे । केवल एक जना जसको नाम उसैर थिए । उनले इस्लाम स्वीकार्न उहुद युद्धसम्म ढिलो गरेका थिए । उहुदको दिन उनले पनि इस्लाम स्वीकार गरे र युद्धमा लड्दा लड्दै शहीद भए । उनले अल्लाहको निम्ति एउटा सज्दा गर्ने मौका पनि पाएका थिएनन् । ईशदूतले भन्नुभयो : उनले कर्म थोरै गरे पनि पुण्य भने धेरै पाए ।

मुस्अब, अस्अद बिन जुरारहकै घरमा बसेर इस्लामको प्रचार प्रसार गरिरहे । अन्सारको कुनै घरका पुरुष र महिलाहरू इस्लाम नस्वीकारी रहेनन् । केवल बनी उमैया बिन जैद, खत्मा र वाइलका केही घर बाँकी थिए । प्रसिद्ध कवि कैस बिन अस्लत उनीहरुमध्ये थियो र उनीहरूले उसैको कुरा मान्थे । कवि कैसले उनीहरूलाई खन्दक युद्धसम्म इस्लामबाट रोकेर राख्यो । ईशदूतत्वको तेह्रौं वर्ष हजको मौसम आउनुभन्दा पहिला मुसअब बिन उमैर सफलताको खबर लिएर ईशदूतको सेवामा मक्का आए । साथै उहाँलाई यस्रिबका कबिलाहरुको अवस्था, उनीहरुको युद्ध र प्रतिकार गर्ने क्षमता र कौशलताको विवरण सुनाए ।[१]

---

१ इब्ने हेशाम १/४३५, जादुल मआद २/५१

# दोस्रो बैअते अकबा

ईशदूतत्वको तेह्रौं वर्ष तदनुसार जून ६२२ साल हजको मौसममा हज गर्न यस्रिबका ७० जनाभन्दा बढी मुसलमानहरू मक्का आए । उनीहरू आफ्नो जातिका बहुदेववादीहरूसँग मिलेर आएका थिए । यस्रिबमा हुँदा वा मक्का जाँदै गर्दा बाटोमा उनीहरुले आपसमा कुरा गर्न थाले । हामीले कहिलेसम्म ईशदूतलाई त्यतिकै छाड्ने हो ? उहाँले मक्काको पहाड पखेरामा चक्कर लगाउनु परेको छ, ठक्कर खानु परेको छ साथै त्रसित अवस्थामा बस्नु परेको छ ।

उनीहरु मक्का पुगेपछि गोप्य रूपमा ईशदूतसँग भेट गर्न थाले । भेटका क्रममा दुवै पक्षले आफुहरु ऐयामे तश्रीक अर्थात जुल हिज्ज महिनाको ११,१२,१३ तारिखमध्ये १२ तारिखको दिन मिनामा अवस्थित जमराह अकबामा भेला हुने र त्यो बैठक रातिको अँध्यारोमा एकदमै गोप्य रूपमा गर्ने कुरा तय भयो ।

त्यो ऐतिहासिक बैठक बारे त्यस बैठकमा रहेका एक जना अन्सारी नेताको भनाई सुनौं जुन बैठकले इस्लाम र बहुदेववादीबीच भएको युद्धगतिको दिशा फेरेको थियो ।

अन्सारी नेता कअब बिन मालिक भन्छन् : हामीहरू हजका लागि निस्कियौं । ईशदूतसँग ऐयामे तश्रीकका दिनमध्ये १२ जुल हिज्जको दिन अक्बामा भेट गर्ने निर्णय भयो । अन्ततः त्यो रात आयो जसमा ईशदूतसँग भेटघाट गर्ने निर्णय भएको थियो । हामीसँग हाम्रा एक विशिष्ठ सरदार अब्दुल्लाह बिन हराम पनि थिए जो अझै मुस्लिम भएका थिएनन् । हामीले उनलाई पनि साथमा लिएर गयौं । हाम्रा समुदायका अन्य बहुदेववादीदेखि हामीले आफ्नो सम्पूर्ण कुरा गोप्य राख्थ्यौं । तर हामीले अब्दुल्लाह बिन हरामसँग कुराकानी गरेर भन्यौं : हे अबू जाबिर तपाईं हाम्रा एक विशिष्ट भलादमी हुनुहुन्छ र हामी तपाईंलाई तपाईंको वर्तमान स्थितिबाट निकाल्न चाहन्छौं ताकि तपाईंलाई प्रलोकमा आगोको दाउरा बन्न नपरोस् । त्यसपछि हामीले उनलाई इस्लामको निमन्त्रणा दिदै भन्यौं आज अकबामा ईशदूतसँग हाम्रो भेटघाट गर्ने तय भएको छ । उनले पनि इस्लाम स्वीकार गरे अनि हामीसँग अकबातिर हिंडे र हाम्रा अगुवाको रुपमा नियुक्त भए ।

कअब घटनाको विवरण बयान गर्दै भन्छन् : हामीहरू नियमित रुपमा त्यो दिन राति आफ्नो समुदायका साथमा नै डेरामा सुत्यौं तर रातिको तेस्रो प्रहर वितेपछि आफ्नो डेराबाट निस्केर ईशदूतले तय गरेको स्थानमा गयौं । हामी पनि चरा गुणबाट सुटुक्क निस्के झैं चुपचाप निस्क्यौं । अन्ततः हामी सबै जना अकबामा भेला भयौं । हाम्रो कूल संख्या ७५ थियो । ७३ जना पुरुष र दुई महिला । महिलामध्ये एक जना उम्मे इमाराह नसीबा बिन्त कअब थिइन् । उनी बनू माजन बिन नज्जार कबिलाकी

थिइन् । अर्की महिला उम्मे मुनिअ अस्मा बिन्त अमर थिइन् । उनको सम्बन्ध बनू सल्मा कबिलाबाट थियो ।

हामी सबै घाटीमा भेला भएर ईशदूतको प्रतीक्षा गर्न थाल्यौं । अन्ततः उहाँको आगमनको त्यो पल पनि आयो । उहाँसँग उहाँकै काका अब्बास पनि थिए । उनी यद्यपि अहिलेसम्म मुसलमान भएका थिएनन् तर आफ्नो भतिजोको कुरामा सहभागी हुन चाहे ताकि पूर्ण रुपमा आत्मसन्तुष्टि होस् । तसर्थ सबैभन्दा पहिला उनले नै कुरा शुरु गरे । [१]

## कुराकानीको आरम्भ अब्बासबाट र समस्याको सुक्ष्म व्याख्या

सबै जना सभामा भेला भएपछि धार्मिक र सैन्य सहयोग बारे गरिएको प्रतिज्ञालाई पूर्ण रुपमा अन्तिम स्वरूप दिनका लागि कुराकानीको प्रारम्भ भयो । ईशदूतको काका अब्बासले नै सबैभन्दा पहिला मुख खोले । उनले दायित्वको गम्भिर पक्षलाई प्रष्ट रुपमा औल्याउन चाहेका थिए जुन प्रतिज्ञाका कारण उनीहरुको थाप्लोमा पर्नेवाला थियो ।

तसर्थ उनले भने : हे खजरजीहरु हो ! आम अरबबासीहरुले अन्सारका दुवै जाति  खजरज र औसलाई खजरज नै भन्थे । हामीमा मुहम्मदﷺको जुन स्थान छ त्यो तिमीहरूलाई थाहा नै छ । हाम्रो जातिका जुन मानिसहरुले हाम्रो जस्तो धार्मिक दृष्टिकोण राखेका छन् हामीले मुहम्मदﷺलाई तिनीहरूबाट सुरक्षित राखेका छौं । उहाँ आफ्नो जाति  र आफ्नो शहरको प्रतिष्ठा तथा सुरक्षामा हुनुहुन्छ तर अब उहाँ तिमीहरुकहाँ गएर तिमीहरुसँग सम्बन्ध गाँस्न उहाँको प्रचुर इच्छा छ । तिमीहरुले उहाँलाई जुन कुराको लागि बोलाउँदै छौ त्यसलाई निर्वाह गर्न सक्छौ र उहाँलाई उनको विरोधीहरुबाट सुरक्षा दिन सक्छौ भने ठीक छ । तिमीहरुले जुन जिम्मेवारी आफ्नो थाप्लोमा लिन खोजेका छौ त्यस बारे विचार गर । यदि तिमीहरुले उहाँलाई लगेर उहाँको साथ छोडेर पछाडि हट्ने जस्तो लाग्छ भने अहिले नै उहाँलाई छोड । किनभने उहाँ आफ्नो जाति र शहरमा इज्जत एवं सुरक्षामा नै हुनुहुन्छ ।

कअबले भने : हामीले अब्बाससँग भन्यौं, हामीले तपाईंको कुरा मान्यौं । अब हे ईशदूत ! तपाईं नै भन्नु, आफ्नो लागि र आफ्नो पालनहारको लागि जुन वाचा गर्नुभएको छ त्यो गर्नु ।[२]

उनीहरुको जवाफबाट महान दायित्वलाई अंगाल्ने त्यसका खतरापूर्ण परिणामलाई झेल्ने बारे अन्सारमा जुन आँट, वीरता उत्साह,जोश जाँगर र इमानदारी थियो त्यसको ज्ञात हुन्छ । त्यसपछि ईशदूतले कुरा गर्नुभयो । उहाँले पहिला

---

१ इब्ने हेशाम १/४४०,४४१
२ इब्ने हेशाम १/४४०,४४१

कुरआनको पाठ गर्नुभयो । अल्लाहतर्फ निमन्त्रणा दिदै इस्लामतर्फ प्रेरित गर्नुभयो । त्यस पश्चात् बैअत् अर्थात प्रतिज्ञा भयो ।

## बैअत अर्थात प्रतिज्ञाका दफाहरू

बैअत बारे इमाम अहमदले जाबिरमार्फत विस्तृत रुपमा वर्णन गरेका छन् । जाबिर को बयान छ : हामीले सोध्यौं, हे ईशदूत हामीले तपाईंसँग कुन कुराको प्रतिज्ञा गर्ने हो ? उहाँले भन्नुभयो : यस कुरामा कि तिमीहरुले :

(१) जाँगर होस् वा नहोस् हरेक अवस्थामा कुरा सुन्नेछौ र मान्नेछौ ।

(२) सम्पन्न अवस्थामा होस् वा विपन्न अवस्थामा इस्लामको मार्गमा धन खर्च गर्नेछौ

(३) भलाईको प्रचार गर्नेछौ र विकारबाट रोक्नेछौ ।

(४) अल्लाहको मार्गमा उठ्ने छौ र यस विषयमा कुनै हिंसा गर्ने व्यक्तिको हिंसाको पर्वाह गर्ने छैनौ ।

(५) म तिमीहरुकहाँ आउँदा तिमीहरुले मेरो मदत गर्ने छौ । जुन कुराले आफ्नो र बालबच्चाहरूको सुरक्षा गर्छौ त्यसले मेरो पनि सुरक्षा गर्यौ भने तिम्रोलागि स्वर्ग छ ।[१]

कअबको भनाई जसलाई इब्ने इसहाकले वर्णन गरेका छन् त्यसमा अन्तिम पाँचौं दफाको मात्र चर्चा छ । त्यसमा भनिएको छ : ईशदूतले कुरआनको पाठ गरेर मानिसलाई अल्लाहतर्फ निमन्त्रणा दिदै भन्नुभयो : म तिमीसँग यस कुराको प्रतिज्ञा लिन्छु कि तिमी त्यो कुराले मेरो सुरक्षा गर्नेछौ जसले आफ्नो बालबच्चाहरूको सुरक्षा गर्छौ । त्यसमा बराअ बिन मारुरले उहाँको हात समाते र भने : ठीक छ, त्यो हस्तीको कसम जसले तपाईंलाई सत्य दूत बनाएर हामीमा पठाएको छ, हामीले निश्चय नै त्यो कुराले तपाईंको सुरक्षा गर्नेछौं जसबाट आफ्नो बालबच्चाहरूको सुरक्षा गर्ने गर्छौं । त्यसकारण हे ईशदूत ! तपाईं हाम्रो प्रतिज्ञालाई मान्नुहोस् । हामी युद्धवीर हौं र हतियार हाम्रा खेलौना हुन् । यही प्रथा हाम्रा पुर्खादेखि चल्दै आइरहेको छ ।

कअब भन्छन् : बराअले ईशदूतसँग कुरा गरिरहँदा अबूल हैसम बिन तैहानले कुरो काट्दै भने : हे ईशदूत ! हामी र अन्य मानिसहरू अर्थात् यहूदीबीच सम्झौताका केही गाँठाहरु छन् । अब हामीले ती गाँठाहरु फुकाउँनेवाला छौं । हामीले उनीहरुसँग भएको सम्झौता भंग गर्ने र अल्लाहले तपाईंलाई विजय गराएको खण्डमा तपाईं हामीलाई छाडेर आफ्नो समुदायतिर जाने त होइन ?

त्यो कुरा सुनेर ईशदूत मुस्काउनुभयो र भन्नुभयो : यस्तो कदापि हुँदैन । तिमीहरूको रगत मेरो रगत र तिमीहरूको नाश हुनु मेरो नाश हुनु हो । म

१ बैहकी ३/३२२,हाकिम ९/१९, इब्ने हेशाम १/४५४

तिमीहरुको हुँ र तिमीहरू मेरा हौ । जोसँग तिमीहरु युद्ध गर्छौ त्योसँग म पनि युद्ध गर्नेछु र जोसँग तिमीहरू सम्झौता गर्छौ त्योसँग म पनि सम्झौता गर्नेछु ।[1]

## खतरापूर्ण प्रतिज्ञाप्रति पुनःध्यानाकर्षण

बैअत अर्थात प्रतिज्ञाका शर्तहरू बारे छलफल भयो र मानिसहरूले प्रतिज्ञा गर्ने अठोट गरेपछि पहिलो पंक्तिका दुई जना मुसलमानहरू जो ईशदूतत्व ११ र १२ औँ सालमा हजका दिनहरूमा मुसलमान भएका थिए एकपछि अर्को उठेर मानिसहरूको सामु उनीहरुको जिम्मेवारीको गम्भिरता र खतरालाई राम्ररी स्पष्ट पार्न अग्रसर भए । ताकि मानिसहरूले मामिला सम्बन्धी सम्पूर्ण पक्षलाई राम्ररी बुझेर मात्र प्रतिज्ञा गरुन् । त्यसको उद्देश्य समुदायले कतिसम्म वलिदान दिन सक्छ भन्ने कुरा पत्ता लगाउनु पनि थियो ।

इब्ने इसहाक भन्छन् : जब मानिसहरू बैअत अर्थात प्रतिज्ञा गर्न जम्मा भए अनि अब्बास बिन उबादह बिन नजलाले भने : के तिमीहरूलाई थाहा छ ? उहाँसँग के कुराको प्रतिज्ञा गरिहेका छौ ? स्वर आयो, हजूर । अब्बासले भने : तिमी उहाँसँग राता तथा काला जातिका मानिसहरुविरुद्ध युद्ध गर्ने प्रतिज्ञा गरिरहेका छौ । तिम्रो सम्पत्ति सखाप भएको वा तिम्रो नायिकेहरुको हत्या गरिएको अवस्थामा यदि तिमीहरुले उहाँको साथ छाड्ने विचार गरेका छौ भने अहिले नै भन । किनभने यदि तिमीहरुले उहाँलाई लगेर छोड्यौ भने यो लोक तथा प्रलोकमा बदनामीको कुरा हुनेछ । यदि धन सम्पत्तिको विनाश हुँदा पनि र तिम्रा नायिकेहरु मारिएको अवस्थामा पनि प्रतिज्ञा निर्वाह गर्नेछौ भन्ने सोच गरेका छौ भने जता उहाँलाई लैजान खोजेका छौ लैजाऊ । किनभने यसैमा लोक तथा प्रलोकको भलाई छ ।

त्यस कुरामा सबैले एक स्वरले भने : हामी धनसम्पत्तिको विनाश र नायिकेहरुको हत्याको खतराको सामना गर्दै उहाँलाई स्वीकार गर्दछौँ । ठीक छ यदि हामीले यो प्रतिज्ञा पूरा गर्‍यौँ भने के पाउँछौँ ? उहाँले भन्नुभयो : स्वर्ग । मानिसहरूले भने : आफ्नो हात थाप्नु । उहाँले हात थाप्नुभयो र मानिसहरूले बैअत अर्थात प्रतिज्ञा गरे ।[2]

जाबिरको बयान छ : त्यस समय हामी बैअत गर्न उठ्दा असअद बिन जुरारह जो ती सत्तरी जनामध्ये सबैभन्दा कम उमेरका थिए उनले उहाँको हात समाते र भने : हे यस्रिबबासी हो ! एक छिन पर्खओ ! हामी उहाँको सेवामा ऊँटको सवारीमा लामो यात्रा गरी उहाँलाई ईशदूत मानेर हाजिर भएका हौँ । आज उहाँलाई यहाँबाट लिएर जानु भनेको पूरा अरबसँग दुस्मनी गर्नु हो । तिम्रा गन्यमान्य

१ इब्ने हेशाम १/४४२
२ इब्ने हेशाम १/४४२

सरदारहरुको हत्या र उनीहरुविरुद्ध युद्ध गर्नु हो । तसर्थ यदि यी सम्पूर्ण कुराहरु झेल्न तयार छौ भने उहाँलाई लिएर जाऊ । तिमीहरुको निम्ति अल्लाहकहाँ त्यसको पुण्य छ । यदि तिमीहरुलाई आफ्नो ज्यान प्यारो छ भने उहाँलाई अहिले नै छाडिदेऊ । यो कुरा अल्लाहकहाँ सबैभन्दा बढी मान्य हुनेछ ।[१]

## बैअत अर्थात प्रतिज्ञा पारित

बैअतको दफाहरू पहिला नै पारित भएका थिए । त्यसमा रहेका संवेदनशील कुराको पुनःव्याख्या गरिएको थियो । त्यसमा अधिक जोड दिएपछि सबैले एक स्वरमा भने असअद बिन जुरारह, आफ्नो हात हटाऊ । हामीले यस बैअतलाई अब न छाड्न सक्छनौं न भंग गर्न ।[२]

त्यो जवाफबाट असअदलाई यस मार्गमा कसले कति वलिदान दिन सक्छ भन्ने कुरा राम्ररी थाहा भयो । मुस्अब बिन उमैरका साथसाथै असअद बिन जुरारह पनि इस्लामका ठूला प्रचारक थिए । उनी यस प्रतिज्ञाको अग्रपंक्तिमा थिए । तसर्थ इब्ने इसहाकको भनाई छ : बनु नज्जारको विचारमा अबू उमामह बिन जुरारह पहिला व्यक्ति हुन् जसले मानिसहरुमा सबैभन्दा पहिला उहाँसँग हात मिलाएका थिए ।[३] त्यसपश्चात आम बैअत भयो । जाबिर को बयान छ : हामीहरू एक एक जना गरेर उठ्यौं । उहाँले हामीसँग बैअत लिनुभयो र त्यसको प्रतिफलमा स्वर्गको शुभसूचना दिनुभयो ।[४]

बैअत लिने क्रममा दुई जना महिला पनि थिइन् । उनीहरुसँग हात नमिलाई केवल मौखिक बैअत लिइयो । किनभने ईशदूतले कहिल्यै पनि कुनै परस्त्रीसँग हात मिलाउनु भएन ।[५]

---

१ सुनने कुब्रा ९/९
२ सुनने कुब्रा ९/९
3 इब्ने इस्हाकको भनाई अनुसार बसैभन्दा पहिला अबुल हैसमले प्रतिज्ञा गरे । कअब बिन मालिकका अनुसार बराअ बिन मारुरले पहिला प्रतिज्ञा गरे । इब्ने हेशाम १/४४७ । मेरो विचारमा बैअत गर्नु पहिला उहाँसँग भएको बराअ र हैसमको कुराकानीलाई बैअत भनेका हुन् । नत्र भने अस्अद बिन जुरारह बैअत गर्न सबैभन्दा बढी हकदार थिए ।
४ मुस्नद अहमद ३/३२२
५ सही मुस्लिम २/१३१

## बाह्र जना प्रतिनिधिहरु

बैअत पूरा भएपछि ईशदूतले बाह्र जनालाई आफ्नो आफ्नो जातिका प्रतिनिधि प्रमुख बन्ने र बैअतका दफाहरू कार्यन्वयन गर्न आफ्नो जातिको तर्फबाट उनीहरु जिम्मेवार तथा उत्तरदायी हुने गरी ती जातिहरुसँग बाह्र जना प्रमुख छान्न आग्रह गर्नुभयो । ताकि ती प्रमुखहरु आआफ्नो जातिको मामिला बारे उत्तरदायि बनुन् । त्यसै बेला छनोट प्रक्रिया कार्यान्वयन भयो । नौ जना प्रतिनिधि खजरजबाट र तीन जना औसबाट चुनिए । उनीहरुको नामावली यसप्रकार छ :

**खजरजका प्रतिनिधि**

१. असअद बिन जुरारह बिन अदस
२. सअद बिन रबीआ बिन अम्र
३. अब्दुल्लाह बिन रवाहा बिन सअलबा
४. राफे बिन मालिक बिन अज्लान
५. बराअ बिन मारुर बिन सख
६. अब्दुल्लाह बिन अम्र बिन हराम
७. उबादह बिन सामित
८. सअद बिन उबादह
९. मुन्जिर बिन अम्र बिन खुनैस

**औसका प्रतिनिधि**

१. उसैद बिन हुजैर बिन समाक
२. सअद बिन खैसमा बिन हारिस
३. रेफाअ बिन अब्दुल मुन्जिर बिन जुबैर [1]

प्रतिनिधि मण्डलको छनोट भएपछि उहाँले उनीहरूबाट उनीहरुको उत्तरदायिको हैसियतले सपथ खुवाउनुभयो । उहाँले भन्नुभयो : तपाईंहरू आफ्नो जातिको सबै मामिलाहरूको त्यस्तै जिम्मेवार हुनुहुन्छ जस्तै हवारी ईसाको तर्फबाट जिम्मेवार थिए र म आफ्नो जाति अर्थात् मुसलमानहरूको जिम्मेवार हुँ । उनीहरु सबैले भने : ठिक छ ।[2]

१ जुबैरलाई केहीले जुनैर भनेका छन् । केही इतिहासकारहरुले रेफाअको साटो अबुल हैसमको नाम उल्लेख गरेका छन् ।
२ इब्ने हेशाम १/४४३,४४४,४४५

## शैतानलाई सम्झौता बारे जानकारी

जब सम्झौता पूरा भयो र मानिसहरू हिँडन लागे ठीक त्यसै बेला एउटा शैतानलाई त्यसको बारेमा जानकारी भयो । उसले त्यो जानकारी अन्तिम क्षणमा पाएको थियो त्यसैले गर्दा त्यस बारे कुरैशका सरदारहरुलाई गोप्य रुपमा खबर पुऱ्याउने समय पनि थिएन ताकि ती कुरैशीहरुले घाटीमा भेला भएका मुस्लिमहरुमाथि अचानक आक्रमण गरुन् । त्यसैले शैतान फ्याट्ट एउटा अग्लो ठाउँमा उभियो र एकदमै ठूलो स्वरमा जुन शायद कहिल्यै सुनिएको थिएन आवाज दियो : हे पालमुनि बस्नेहरू मुहम्मद र उसको साथमा रहेका अधर्मीहरुको बारेमा केही थाहा छ ? उनीहरु तिमीसँग लड्नका लागि जम्मा भएका छन् ।

ईशदूतले भन्नुभयो : यो यस घाटीको शैतान हो । हे ! अल्लाहका शत्रु ! सुन अब मैले तिम्रो विरुद्ध यथाशीघ्र कार्वाही गर्नेछु । त्यसपछि उहाँले मानिसहरुलाई आफ्नो डेरामा जान भन्नुभयो ।[१]

## कुरैशमाथि आक्रमण गर्न अन्सारको तयारी

शैतानको आवाज सुनेर अब्बास बिन उबादह बिन नज्लाले भने : त्यो हस्तीको कसम जसले तपाईंलाई सत्य कुरा दिएर पठाएको छ । यदि तपाईंले अनुमति दिए हामी भोलि नै मिनाका बासीहरुमाथि आक्रमण गर्नेछौं । उहाँले भन्नुभयो : हामीलाई यसको आदेश दिइएको छैन । तिमीहरू आफ्नो डेरामा गइहाल । उनीहरु वापस डेरातिर फर्के र विहानसम्म सुते ।[२]

## यस्रिबका प्रमुखहरुसँग कुरैशको प्रतिवाद

त्यो खबर कुरैशको कानमा पुगेपछि उनीहरुको मनमा कुण्ठा तथा दुःखको कोलाहल उत्पन्न भयो । किनभने यस प्रकारको बैअतका कारण उनीहरुको धनजनलाई पुग्ने क्षति बारे उनीहरुलाई राम्रोसँग थाहा थियो । तसर्थ बिहानी हुने बित्तिकै उनीहरुको सरदार र महाअपराधीहरूको एउटा टोली त्यस सम्झौताको विरुद्ध कडा प्रतिवाद गर्न यस्रिबतिर लाग्यो र त्यहाँ गएर भन्यो :

खजरजका मानिसहरू ! हामीलाई खबर प्राप्त भएको छ कि तपाईंहरू हाम्रा त्यो साहबलाई हामीबाट निकालेर लैजान आउनु भएको छ र हामीसँग युद्ध गर्नको लागि उसको हातमा बैअत अर्थात प्रतिज्ञा गर्नुभएको छ । जबकि अरबका जातिहरुमध्ये तपाईंहरुसँग युद्ध गर्नु हामीले अति नै नराम्रो कुरा ठान्दछौं ।[३]

---

१ इब्ने हेशाम १/४४७, जादुल मआद २/५१
२ इब्ने हेशाम १/४४८
3 इब्ने हेशाम १/४४८

खजरजका बहुदेववादीहरुलाई त्यस बैअतको बारेमा केही थाहा नै थिएन । किनभने त्यो प्रतिज्ञा रातको अँध्यारोमा गोप्य रुपमा भएको थियो । तसर्थ बहुदेववादीहरूले अल्लाहको कसम खाएर यस्तो कुनै कुरा भएको छैन भनी उनीहरुलाई विश्वास दिलाए । हामीलाई यस बारे कुनै कुरा थाहा छैन । अन्त्यमा त्यो कुरैशी टोली अब्दुल्लाह बिन उबै बिन सलूलनिर गयो । उसले पनि त्यसलाई मिथ्या बताउँदै भन्यो : यस्तो भएको छैन र मेरो समुदायले मलाई छाडेर यस्तो काम गर्न सक्दैन । म यस्रिबमा भए पनि मसँग सल्लाह नगरी मेरो जातिले यस्तो गर्ने छैन ।

मुस्लिमहरु एकअर्कालाई हेरेर चुपचाप भए । उनीहरूमध्ये कसैले हो या होइन भनी भन्न सकेनन् । अन्ततः कुरैशका सरदारहरु बहुदेववादीको कुरालाई सत्य मानी असफल हुँदै फिर्ता भए ।

## खबरको विश्वसनीयता र प्रतिज्ञा गर्नेहरुको पिछा

मक्काका सरदारहरू त्यो खबर गलत रहेछ भन्ने कुरामा विश्वस्त भएर फर्के पनि त्यसको खोजमा उनीहरू निरन्तर लागिरहे । अन्ततः उनीहरुलाई पूर्ण विश्वासका साथ त्यो खबर सही रहेछ र बैअत अर्थात प्रतिज्ञा भइसकेको रहेछ भन्ने कुरा थाहा भयो । तर त्यो खबर त्यतिखेर मात्र पाएका थिए जब हाजीहरू आफ्नो देशतिर फर्कदै थिए । त्यसकारण कुरैशी सवारहरूले तीव्रगतिमा यस्रिबवासीको पिछा गरे तर हात भने केही लागेन । उनीहरुले सअद बिन उबादह र मुन्जिर बिन अम्रलाई त पछ्याए तर मुन्जिर भाग्न सफल भए । सअद बिन उबादह भने समातिए । उनको हात गर्दनको पछाडि ऊँटको काँठी बाँध्ने डोरीले बाँधियो । त्यसपछि उनलाई पिट्दै कपाल लुछ्दै मक्का लगियो । तर त्यहाँ मुतइम बिन अदी र हारिस बिन हर्ब बिन उमैया आएर उनलाई छुटाए । किनभने ती दुई जनाका व्यापारी समूह मदिनाको बाटो हिँडदा सअदको सुरक्षामा हिँडथे । उता अन्सारहरुले उनीहरूलाई पक्रेपछि उनीहरुमाथि हातापाइ गर्ने आपसमा पारस्परिक सल्लाह गरिरहेका थिए । तर त्यही अवस्थामा उनी झुलुक्क देखिए । त्यसपछि सम्पूर्ण मानिसहरू आरामसँग मदिना पुगे ।[१]

अकबाको यही दोस्रो बैअत अर्थात प्रतिज्ञालाई बैअत अकबा कुब्रा पनि भनिन्छ । यो बैअत एउटा यस्तो वातावरणमा सम्पन्न भएको थियो जसमा प्रेम एवं इमानदारी, यताउता छरिएका मुस्लिमहरुबीच आपसी सहयोग गर्ने, आपसमा विश्वास गर्ने, वलिदान गर्ने, आत्मसमर्पण गर्ने भावनाले व्याप्त थियो । तसर्थ यस्रिबवासी मुस्लिमहरुको हृदय आफ्ना कमजोर मक्की मुस्लिम साथीहरूप्रति स्नेहले भरिपूर्ण थियो । उनीहरुमा ती दाजुभाइहरूलाई सहयोग गर्ने उत्साह थियो भने उनीहरुमाथि अत्याचार गर्नेहरू विरुद्ध क्रोध थियो । उनीहरुको छाति आफ्ना ती दाजुभाइहरूको

१ जादुल मआद २/५१, इब्ने हेशाम १/४४८, ४४९, ४५०

प्रेमले प्रफुल्ल थियो । उनीहरुलाई केवल अल्लाहको निम्ति आफ्नो भाइसरह बनाएका थिए ।

त्यो भावना र जोश कुनै क्षणिक उत्साहको परिणाम थिएन जुन एक दुई दिनमा सेलाओस् । त्यसको आधार त अल्लाह , ईशदूत र ईशग्रन्थप्रति रहेको दृढ आस्था थियो । अर्थात् त्यो यस्तो आस्था थियो जुन अत्याचार एवं क्रूरताको ठूलोभन्दा ठूलो शक्तिसामु झुक्न सक्दैन थियो । यस्तो आस्था थियो त्यसमा जति वृद्धि हुन्थ्यो त्यति नै आस्थावानको धर्मकर्ममा चमत्कारहरु देखिन्थे । त्यसै आस्थाको आधारमा मुसलमानहरूले यस्ता कृतिहरु कायम गरे, यस्ता छापहरू छाडे जसको नजिरबाट भूतकाल एवं वर्तमानकाल खोक्रो छ । सम्भवतः भविष्य पनि खोक्रो नै रहनेछ ।

# हिजरत गर्ने पहिलो टोली

दोस्रो बैअत अर्थात प्रतिज्ञा सम्पन्न भएपछि इस्लामले नास्तिकत्व एवं अज्ञानताको उजाड मरूभूमिमा आफ्नो अलग प्रदेश बनाउने अवसर प्राप्त गऱ्यो । इस्लामले आफ्नो आह्वानको प्रारम्भदेखि लिएर अहिलेसम्मको त्यो सबैभन्दा महत्वपूर्ण सफलता थियो । तसर्थ ईशदूतले मुसलमानहरूलाई आफ्नो त्यो नयाँ प्रदेशतर्फ प्रस्थान गर्न अनुमति दिनुभयो ।

हिजरतको अर्थ सम्पूर्ण लाभ त्यागी धनसम्पत्तिको बलिदान दिएर ज्यान बचाउनु थियो । त्यो पनि ज्यान जोखिममा राख्दै । शुरुदेखि अन्तिमसम्म कतै पनि ज्यान जान सक्थ्यो । त्यति मात्र नभएर यात्रा संकिर्ण भविष्यतर्फ धकेलिँदै थियो । आगामी दिनहरुमा के के आपत विपत आउने हो थाहा थिएन ।

मुसलमानहरूले त्यो सबै कुरा थाहा हुँदाहुँदै पनि हिजरत गर्न थाले । उता बहुदेववादीहरूले पनि उनीहरूको बाटोमा अवरोध खडा गर्न थाले । किनभने हिजरतबाट आफुहरुलाई पनि खतरा हुने कुरा बहुदेववादीहरुले बुझिसकेका थिए । हिजरतका केही नमूना प्रस्तुत गरिदै छ ।

१.हिजरत गर्ने पहिलो व्यक्ति अबू सल्मा थिए । इब्ने इस्हाकको भनाई अनुसार उनले बैअत अकबा कुबराभन्दा एक वर्ष पहिला नै हिजरत गरेका थिए । उनको साथमा उनका परिवार पनि थिए । उनी हिजरत गर्न लाग्दा उनको ससुरालीले भने : तपाईंलाई त हामीले केही भन्न सक्दैनौं तर हाम्री छोरीको बारेमा तपाईंको विचार के छ ? उसलाई शहर शहर डुलाउन तपाईंसँग किन छोड्ने नि ? त्यसो भन्दै उनीहरुले उनको श्रीमती खोसे । त्यो व्यवहारप्रति अबू सल्माको घरपरिवारलाई रिस उठ्यो र भन्यो : तिमीहरूले त्यो महिलालाई हाम्रो मान्छेबाट खोस्छौ भने हामीले पनि आफ्नो छोरालाई यस महिलासँग जान दिदैनौं । अन्ततः दुवै पक्षले त्यो बच्चालाई आ-आफ्नो तर्फ ताने जसले गर्दा उसको हात नै चुँडियो । अबू सल्माको घरवालाले बच्चालाई आफूकहाँ लिएर गए । सारमा भन्नु पर्दा अबू सल्माले एक्लै मदिनातिर हिजरत गरे । त्यस पश्चात् सल्माकी आमा आफ्नो श्रीमानले हिजरत गरेको र आफ्नो बच्चाबाट वञ्चित भएको कारण हरेक दिन एका बिहानै इब्तह नामक ठाउँ जहाँ त्यो घटना भएको थियो गएर साँझसम्म रुन्थिन् । एक वर्ष त्यै हालतमा वित्यो । अन्ततः उनको घरको एक जनालाई दया लाग्यो र भन्यो त्यो बिचारीलाई किन जान नदिएको ? उसलाई अनर्थ आफ्नो श्रीमान् र छोराबाट वञ्चित गराएर किन राखेका छौ ? त्यो कुरा सुनेर घरवालाहरुले सल्माकी आमासँग भने : यदि तिमी आफ्नो श्रीमानकहाँ जान चाहन्छौ भने जाऊ । सल्माकी आमाले आफ्नो छोरालाई हजुर बुबाको घरबाट फिर्ता लिएर आइन् र मदिनातिर लागिन् । पाँच सय किलोमिटर जति दूरीको यात्रा थियो तर साथमा कोही थिएन । तन्इम पुग्दा उस्मान बिन अबी

तलहालाई भेटाइन् । उनलाई स्थिति बारे जानकारी भएपछि साथमा लिएर मदिना पुऱ्याउन गए । कुबाको बस्ती देखा परेपछि उनले भने : तिम्रो श्रीमान् यसै गाउँमा छ, ल अब तिमी जाऊ । अल्लाहले दया गरुन् । त्यस पश्चात उस्मान बिन अबी तल्हा फर्केर मक्का आए ।[1]

२.सोहैबले हिजरत गर्न खोज्दा कुरैशका नास्तिकहरुले भने : तिमी हामी कहाँ आउँदा तुच्छ एवं भिखारी थियौ तर यहाँ आएर तिम्रो धन-सम्पत्तिमा वृद्धि भयो र तिमीले धेरै प्रगति गऱ्यौ । अब तिमी आफ्नो धनजन सबै लिएर हिँडन खोजेका छौ । ईश्वरको कमस यस्तो हुन सक्दैन । सोहैबले भने : मैले आफ्नो धनसम्पत्ति छोडिदिएँ भने तिमीहरुले मेरो लागि बाटो खुला गरिदिन्छौ ? उनीहरुले भने, गरिदिन्छौँ । सोहैबले भने : ल ठीक छ, हिँड मेरो सम्पत्ति तिम्रो सुपुर्द छ । ईशदूतलाई त्यसको जानकारी भएपछि उहाँले भन्नुभयो : सोहैबले लाभ कमाए । सोहैबले लाभ कमाए ।

३.उमर बिन खत्ताब, ऐयाश बिन अबी रबिया र हिशाम बिन आस बिन वाइलले फलानो ठाउँमा एका बिहानै जम्मा भएर त्यहीँबाट मदिना हिजरत गर्ने तय गरे । उमर र ऐयाश त निर्धारित समयमा नै आए तर हिशामलाई भने बहुदेववादीहरुले पक्रिए ।

जब यी दुबै जना मदिना पुगेर कुबा भन्ने ठाउँमा झर्ना साथ अबु जहल र उसको भाइ हारिस ऐयाश आए । उनीहरु तीनै जनाको आमा एउटै थिइन् । ती दुबै जनाले ऐयाशसँग भने : तिम्रो आमाले तिमीलाई नदेख्दासम्म आफ्नो कपाल नकोर्ने र घाममै बस्ने कसम खाएकी छन् । त्यो कुरा सुनेर ऐयाशलाई आफ्नी आमामाथि दया लाग्यो । उमरले त्यो चाल देखेर भने : ऐयाश ! हेर यिनीहरूले तिमीलाई केवल तिम्रो धर्मबाट भ्रष्ट गर्न खोजेका छन् । तसर्थ यिनीबाट होशियार होऊ । ईश्वरको कसम यदि तिम्रो आमालाई जुम्राले टोक्यो भने अवश्य कपाल कोर्नेछिन् र मक्काको अलिकति चर्को घाम लाग्ने बित्तिकै उनी शीतलतिर गइहाल्ने छिन् । तर ऐयाशले मानेनन् । उनले आफ्नो आमाको कसम पूरा गर्नका लागि ती दुबैको साथमा निस्कने फैसला गरे । उमरले भने : ल ठीक छ, जब जान तयार छौ भने मेरो यो ऊँटनी सवारीको लागि लिएर जाऊ । त्यो धेरै राम्रो र फुर्तिलो छ । उँटनीबाट नझर्नु र मानिसहरूको तर्फबाट कुनै शंकास्पद क्रियाकलाप हुन लागे भाग्नु । ऐयाश ऊँटनीमाथि सवार भई ती दुबैको साथमा निस्के । जाँदै गर्दा बाटोमा अबू जहलले भन्यो : भाइ मेरो यो ऊँट त बडो निर्दयी निस्कियो, मलाई पनि आफ्नो त्यस ऊँटनीमाथि बसाले हुन्थ्यो नि । ऐयाशले भने : केही छैन । अबु जहललाई आफ्नो उँटनीमा सवार गर्न उनले उँटनीलाई रोके । ती दुवै जनाले पनि आफ्नो आफ्नो सवारीहरू रोके । तर जब तीनै जना सवारीबाट ओर्लिए अनि ती दुबै जनाले

---

१ इब्ने हेशाम १/४६८

अचानक ऐयाशमाथि आक्रमण गरी उनलाई डोरीले कसेर बाँधे र त्यसै बाँधिएको हालतमा मक्का ल्याएर भने : हे मक्काबासीहरू ! आफ्नो मूर्खहरूलाई यस्तै गर जस्तो हामीले आफ्नो यस मूर्खलाई गरेका छौं ।[1]

हिजरत गर्न जानेहरुको बारेमा जानकारी भए पश्चात बहुदेववादीहरुले उनीहरुप्रति जुन दुर्व्यवहार गर्थे यी तीन वटा घटना त्यसका नमुना हुन् । त्यसका बावजूद मानिसहरु अघिपछि एकएक गरी निस्कदै गए । तसर्थ बैअत अकबा कुबराको केवल दुई महिना नवित्दै मक्कामा ईशदूत, अबू बकर र अली बाहेक कोही मुसलमान बाँकी रहेन । अबु बकर र अली पनि ईशदूतको आदेशमा रोकिएका थिए । जुन मुसलमानहरुलाई बहुदेववादीहरूले जबर्जस्ती गरी रोकेर राखेका थिए उनीहरु मात्र मक्कामा बाँकी थिए । ईशदूत पनि आफ्नो माल सामान तयार गरेर हिजरतको लागि ईश्वरको आदेशको प्रतीक्षामा बस्नुभएको थियो । अबू बकरले पनि आफ्नो माल सामान बाँधिसकेका थिए ।[2]

सहीह बुखारीमा माई आइशामार्फत वर्णन गरिएको छ । ईशदूतले मुसलमानहरूसँग भन्नुभयो : मलाई तिमीहरुको हिजरत गर्ने ठाउँ देखाइएको छ । त्यो ठाउँ दुई पहाड बीचको उर्वरा क्षेत्र हो । त्यस पश्चात् मानिसहरूले मदिनातिर हिजरत गरे । हब्शाका शरणार्थीहरु पनि मदिनामा नै आए । अबू बकरले पनि मदिना यात्राको लागि माल सामान तयार गरे । तर ईशदूतले उनीहरुसँग भन्नुभयो : एक छिन पर्खओ मलाई पनि अनुमति दिइन्छ कि । अबू बकरले भने : मेरो पिता तपाईंप्रति बलिदान होउन् । तपाईंलाई यसको आशा छ र ? उहाँले भन्नुभयो : छ । त्यसपछि अबू बकर ईशदुतको साथमा जान भनेर रोकिए । उनीसँग दुई वटा ऊँटनी थिए । तिनलाई चार महिनासम्म खुब बबूलको घाँस खुवाएर राखेका थिए ।[3]



---

१ हेशाम र ऐयाश बहुदेववादीको जेलमा नै नजरबन्द थिए । ईशदूतले हिजरत गरेपछि एक दिन भन्नुभयो, हेशाम र ऐयाशलाई मुक्त गरी कसले ल्याउन सक्छ ?वलिद बिन वलिदले भने, त्यसको जिम्मा म लिन्छु । त्यसपछि वलिद लुकेर मक्का गएर एक जना महिला जो उनीहरुको लागि खाना लिएर जाँदै थिई उसको पछिपछि गए र उनीहरुको ठेगाना पत्ता लगाए । उनी दुवै जनालाई छत नभएको एउटा घरमा कैद गरिएको थियो । रात भएपछि वलिद गारोबाट हाम फालेर त्यहाँ पसे । उनीहरुको हत्कडी काटेर उनीहरुलाई उँटमाथि सवार गरी भाग्दै मदिना आए । इब्ने हेशाम १/४७४, उमरले बीस जना साथीहरुको एक समूहका साथ हिजरत गरेका थिए । सही बुखारी १/५५८

२ जादुल मआद २/५२

3 सही बुखारी १/५५३

# कुरैशको सदन दारुल नद्वामा

बहुदेववादीहरूले ईशदूतका साथीहरुलाई बालबच्चाहरू र माल सामान एवं धनसम्पत्ति बोकी औस तथा खजरजको क्षेत्रमा पुगिसकेको देखेपछि उनीहरुभित्र कोलाहल मच्चियो । दुःख र पीडाको ज्वाला विस्फोट भयो । उनीहरुको मनमा यति दुःख भयो त्यति त्यसअघि कहिल्यै भएको थिएन । त्यसैले उनीहरूको सामू एउटा भयानक र साँचो खतराको मुर्तरुप लिएर आएको थियो जो उनीहरुको मूर्ति पूज्ने चलन र आर्थिक संगठनको निम्ति चुनौती बन्यो ।

बहुदेववादीहरूलाई मुहम्मदﷺभित्र नेतृत्व गर्ने उच्च प्रतिभाका साथसाथै आकर्षण शक्ति विद्यमान रहेको कुरा थाहा थियो । उहाँको साथीहरुमा रहेको दृढ संकल्प एवं धैर्यता र आत्मसमर्पणको भावना बारे पनि उनीहरुलाई थाहा थियो । औस र खजरज कबिलाहरुको जनशक्ति र युद्धकौशलता बारे पनि उनीहरुलाई थाहा थियो । ती दुबै कबिलाको बुद्धिजीवीमा मित्रता गाँस्ने र सफाइ दिने क्षमता बारे पनि थाहा थियो । वर्षौंदेखि युद्धको संघारमा फँस्दाको परिणामलाई भोग्दा पनि आपसी शत्रुता मिटाउन तत्पर रहेको कुरा पनि कुरैशलाई थाहा थियो ।

कुरैशलाई यमनदेखि सिरियासम्म लाल सागरको तट हुँदै उनीहरुको व्यापारिक मार्ग जान्छ भन्ने कुरा पनि राम्रोसँग थाहा थियो । त्यो मार्गका कारण मदिना सैनिक महत्वको दृष्टिकोणले संवेदनशील र नाजुक ठाउँमा अवस्थित रहेको कुरा पनि उनीहरुलाई थाहा थियो । जबकि मक्काका व्यापारीहरुको सिरियासँग वार्षिक साढे दुई लाख दिनार बराबर सुनको अनुपातमा व्यापार हुन्थ्यो । ताइफका व्यापारीहरुको व्यापार त्यसको अतिरिक्त थियो । ती सारा व्यापार सुरक्षित मार्गहरुमा नै आधारित थिए भन्ने कुरा छर्लङ्ग छ ।

उपरोक्त विवरणहरूबाट यस्रिबमा इस्लामी निमन्त्रणाले जरो गाड्दा र मक्काबासीको विरुद्ध यस्रिबबासी पंक्तिबद्ध भएको खण्डमा मक्कावासीहरूलाई जुन खतरा हुन सक्थ्यो त्यो पनि प्रष्ट थियो । किनभने बहुदेववादीहरूलाई त्यस गम्भीर खतराको अनुभव थियो जुन उनीहरुको अस्तित्वको लागि नै चुनौती बन्दै थियो । त्यसकारण उनीहरूले त्यस खतराको उचित उपाय सोच्न शुरु गरे । त्यस खतराको मुख्य जरो इस्लामी निमन्त्रणाका नायक मुहम्मदﷺ नै हुनुहुन्थ्यो भन्ने कुरा छर्लङ्ग थियो ।

बहुदेववादीहरूले त्यस उद्देश्यको लागि बैअते अकबा कुबराको लगभग साढे दुई महिनापछि अर्थात २६ सफर १४ ईशदूतत्व तदनुसार १२ सेप्टेम्बर ६२२ सालमा बिहीवार[१] दिनको पहिलो पहरमा[१] मक्काको सदन दारुल नदवामा इतिहासकै सबैभन्दा

१ रहमतुल लिल् आलमिन १/९५, २/४७१

खतरापूर्ण योजना बनाउने सभा आयोजित गरे र त्यसमा कुरैशका सम्पूर्ण खानदानका प्रतिनिधिहरू सहभागी भए । सभामा बहसको विषय एउटा यस्तो योजनाको तयारी थियो जसको आधारमा इस्लामी निमन्त्रणाका नायकलाई छिटोभन्दा छिटो सखाप पार्नु र त्यस निमन्त्रणाको दियोलाई पूर्णरूपमा निभाउनु थियो ।

त्यस खतरापूर्ण सभामा सहभागी भएका कुरैशी कबिलाका प्रतिनिधिहरुको नामावली निम्न छ :

| | **प्रतिनिधिको नाम** | **कबिलाको नाम** |
|---|---|---|
| १. | अबूजहल | मख्जूम |
| २. | जुबेर बिन मुतइम | बनी नौफोल बिन अब्द मनाफ |
| ३. | तइमा बिन अदी | बनी नौफोल बिन अब्द मनाफ |
| ४. | हारिस बिन आमिर | बनी नौफोल बिन अब्द मनाफ |
| ५. | सैबा बिन रबिआ | बनी अब्द शम्स बिन अब्द मनाफ |
| ६. | उतैबा बिन रबिआ | बनी अब्द शम्स बिन अब्द मनाफ |
| ७. | अबू सुफ्यान बिन हर्ब | बनी अब्द शम्स बिन अब्द मनाफ |
| ८. | नज्र बिन हारिस | बनी अब्दुलदार |
| ९. | अबूल बख्तरी बिन हिशाम | बनी असद बिन अब्दुल उज्जा |
| १०. | जम्आ बिन अस्वद | बनी असद बिन अब्दुल उज्जा |
| ११. | हकीम बिन हेजाम | बनी असद बिन अब्दुल उज्जा |
| १२. | नबिया बिन हिजाज | बनी सहमब |
| १३. | मम्बा बिन हिजाज | बनी सहमब |
| १४. | उमैया बिन खल्फ | बनी जम्हा |

निर्धारित समयमा ती प्रतिनिधिहरू सभामा पुगेपछि इब्लीस नामक राक्षस पनि महाप्रमुखको रूपमा आयो । ऊ राम्रो पोशाकमा सजिएको थियो । आएर ढोकामा उभियो । मानिसहरूले सोधे यी को हुन् ? इब्लीसले भन्यो : नज्दको एक जना व्यक्ति हुँ । तपाईंहरूको कार्यक्रम सुनेर उपस्थित भएको हुँ । कुरा सुन्न चाहन्छु । तपाईंहरूलाई सही सुझाव पनि दिन सक्छु । मानिसहरूले भने : स्वागत छ, आउनोस् । अन्ततः इब्लीस पनि सभाभित्र पस्यो ।

१ पहिलो पहरमा त्यो बैठ भएको थियो भन्ने प्रमाण इसहाकले वर्णन गरेको हदिस हो । जसमा जिब्रइलले ईशदूतको सेवामा त्यो बैठक बारे खबर दिएर आएका थिए र उहाँलाई हिजरत गर्ने अनुमति दिएका थिए ।

## संसदीय बहस र ईशदूतको हत्या बारे अपराधपूर्ण करारनामामाथि सहमति

बैठक समाप्त भएपछि विचार अर्थात समाधान प्रस्तुत गर्ने क्रम शुरु भयो । अबेरसम्म बहस जारी रह्यो । सबैभन्दा पहिला अबूल असवदले आफ्नो विचार प्रस्तुत गर्दै भन्यो, त्यस व्यक्तिलाई हामीले हामीबाट निकाल्नु पर्छ र हाम्रो शहरबाटै बदर गर्नु पर्छ । अनि मात्र ऊ कहाँ बस्छ र के गर्छ भन्ने कुरा बारे हामीलाई कुनै चिन्ता हुने छैन । यसरी हाम्रो समस्या समाधान हुनेछ र हामीमा पहिले जस्तै एकता हुनेछ ।

नज्दी शैतानले भन्यो : त्यसो गर्नु हुँदैन । यो सुझाव उचित छैन । के तिमीहरुलाई उसको असल कुरा र मीठो बोली बारे थाहा छैन ? जे कुरा भन्छ त्यसबाट मानिसहरूको मन जितिहाल्छ । यदि तिमीहरुले यस्तो गऱ्यौ भने तिमीहरु शान्त भएर बस्न पाउँदैनौ । ऊ अरबको कुनै कबिलामा गएर तिनीहरुलाई आफ्नो बनाइकन तिमीहरुमाथि आक्रमण गर्न पनि सक्छ र तिमीलाई तिम्रै शहरमा थिचोमिचो पार्न सक्छ । त्यसपछि तिमीहरु विरुद्ध आफुले जे चाहेको छ त्यो गर्नेछ । तसर्थ यो कुरालाई छोडेर कुनै अरू विचार पेश गर ।

अबूल बख्तरीले भन्यो : उसलाई फलामको हतकडी लगाएर थुनेर बाहिरबाट ढोका बन्द गर्नु पर्छ । त्यसपछि हामीले उसको त्यो गतलाई हेरौं जुन यसअघिका कविहरु जस्तै जुहैर र नाबेगा आदिले भोगेका थिए ।

नजदी शैतानले भन्यो : हुँदैन । यो पनि उचित विचार होइन । यदि तिमीहरूले आफ्नो भनाई बमोजिम उसलाई कैद गऱ्यौ भने पनि त्यसको खबर बन्द ढोकाबाट उडेर उसका साथीहरूको कानमा अवश्य जानेछ । अनि उसको साथीहरुले तिमीहरुमाथि आक्रमण गरी उसलाई तिम्रो नियन्त्रणबाट छुटाएर लैजानु धेरै टाढाको कुरा पनि होइन र त्यसको आधारमा आफ्नो संख्या वृद्धि गरी तिमीहरुलाई पराजित गर्न पनि सक्छन् । त्यसकारण यो सुझाव पनि त्यति उचित छैन । कुनै अरु कुरा सोच !

उपरोक्त दुवै विचारहरू संसदले बदर गरेपछि एक तेस्रो अपराधपूर्ण विचार पेश गरियो । त्यसमा सम्पूर्ण सदस्यहरूले सहमति जनाए । त्यसलाई पेश गर्ने व्यक्ति मक्काको सबैभन्दा ठूलो अपराधी अबू जहल थियो । उसले भन्यो : त्यस व्यक्तिको बारेमा मेरो एउटा विचार छ । मलाई लाग्छ अहिलेसम्म तिमीहरू त्यहाँसम्म पुग्न सकेका छैनौ । मानिसहरूले भने : अबूल हकम, त्यो के हो त ? अबू जहलले भन्यो : हामीहरुमध्ये हरेक कबिलाले आफ्नो कबिलाबाट एक एक जना बलियो र फुर्तिलो युवकको छनौट गरौं र उनीहरुमध्ये हरेकलाई एक एक वटा धारिलो तरबार दिऊँ । त्यसपछि सबै जनाले उसको पिछा गरी एक्कासी तरबार हानेर उसको हत्या गरुन् । यसरी हामीलाई त्यो व्यक्तिबाट शान्ति मिल्ने छ । यसरी उसको हत्यामा हाम्रा सबै

कबिला संलग्न हुनेछन् । बनू अब्द मनाफले सबै कबिलासँग युद्ध गर्न सक्दैन र बाध्य भएर हत्याको बदला क्षतिपूर्ति लिन तयार हुनेछन् र हामीले हत्याको क्षतिपूर्ति दिउँ ।[१]

नजदी शैतानले भन्यो : कुरा त यो उचित छ जुन यस जवानले भन्यो । यदि कुनै विचार ठिक छ भने यही ठिक छ । अन्य कुनै ठिक छैन । त्यसपछि मक्काको सदनले त्यस अपराधपूर्ण करारनामाको समर्थन गर्‍यो । सदनका सबै सदस्यहरू त्यस करारनामालाई यथाशीघ्र कार्यान्वयन गर्नु पर्छ भनी आ–आफ्नो घरतिर लागे ।



१ इब्ने हेशाम १/४८०

# ईशदूतको मदिनातर्फ हिजरत

जब ईशदूतको हत्याको अपराधपूर्ण करारनामा घोषित भएको थियो ईश्वरीय फरिश्ता जिब्रइल आफ्ना पालनहारको तर्फबाट ईशवाणी लिएर उहाँको सेवामा उपस्थित भई उहाँलाई कुरैशको षड्यन्त्रबाट सूचित गर्दै भने : अल्लाहले तपाईंलाई यहाँबाट प्रस्थान गर्ने अनुमति दिएका छन् । साथै यहाँबाट प्रस्थान गर्ने समय पनि तोकेका छन् । तसर्थ तपाईं आजको राती आफ्नो ओछ्यानमा नसुत्नु ।[1]

त्यो जानकारी प्राप्त भएपछि हिजरत सम्बन्धि सम्पूर्ण कार्यक्रम तय गर्न उहाँ ठीक मध्यान्हको समयमा अबू बकरको घर जानुभयो । माई आइशाको बयान छ : ठीक मध्यान्हको समयमा हामीहरू अबू बकरको घरमा बसेका थियौं एक जनाले अबू बकरसँग ईशदूत टाउको ढाकेर आउँदै हुनुहन्छ भन्यो । त्यो समयमा उहाँ कहिल्यै आउनु हुन्न थियो । अबू बकरले भने : मेरा माता पिता उहाँमाथि बलिदान होउन् , उहाँ यो समयमा कुनै विशेष कामको लागि आउँदै हुनुहुन्छ ।

ईशदूत आउनुभयो र घरभित्र पस्ने अनुमति माग्नुभयो । भित्र पसेर उहाँले अबू बकरसँग भन्नुभयो : तिमीकहाँ जुन मानिसहरू छन् उनीहरुलाई अलि पर हटाऊ । अबू बकरले भने : तपाईंकै घरका परिवारहरु मात्रै छन् । तपाईंमाथि मेरो पिता समर्पित होउन् हे ईशदूत ! ईशदूतले भन्नुभयो : मलाई हिजरत गर्ने अनुमति भइसकेको छ । अबू बकरले भने : हे ईशदूत ! मेरो पिता तपाईंमाथि समर्पित होउन् । ईशदूतले भन्नुभयो : साच्चै हो ।[2]

त्यसपछि हिजरतको कार्यक्रम निर्धारण गरेर ईशदूत घर फर्कनुभयो र रातको प्रतीक्षा गरेर बस्नुभयो ।

## ईशदूतको घर-घेराऊ

उता कुरैशका महाअपराधीहरूले आफ्नो सारा दिन मक्काको सदनमा पारित भएको करारनामा लागू गर्ने तयारीमा बिताए र त्यस उद्देश्यको लागि ती महाअपराधीहरूबाट एघार जना चुनिए जसको नामावली निम्न लिखित छ :

| | | | |
|---|---|---|---|
| १. | अबू जहल बिन हिशाम | २. | हकम बिन आस |
| ३. | अक्बा बिन अबी मुऐत | ४. | नज्र बिन हारिस |
| ५. | उमैया बिन खल्फ | ६. | जमआह बिन अल अस्वद |
| ७. | तुऐमाह बिन अदी | ८. | अबू लहब |
| ९. | उबै बिन खल्फ | १०. | नुबैह बिन अल हिजाज |

१ इब्ने हेशाम १/४८२ जादुल मआद २/५२
२ सही बुखारी १/५५३

११. मुम्बाह बिन अल हिजाज[१]

इब्ने इस्हाक अनुसार केही अँध्यारो भएपछि ती मानिसहरू ढोकामा जम्मा भए अनि उहाँ कतिखेर निस्कनुहुन्छ र उहाँमाथि आक्रमण गर्न पाइन्छ भनी घातमा बसे ।[२] तर रातमा छिटै सुत्नु र मध्य रात वा केही अधिक रात वितेपछि उठेर मस्जिद हराममा नमाज पढ्न जानु उहाँको नियमित काम थियो ।

उनीहरूलाई आफ्नो फोहरी षड्यन्त्र सफल हुन्छ भन्नेमा पक्का विश्वास थियो । अबू जहलले बडो घमण्ड र अहंकारी तरीकाले उहाँको मजाक एवं उपहास गर्दै घेराउ गर्ने आफ्ना साथीहरूसँग भन्यो : मुहम्मदले भन्छ, यदि तिमीहरूले उसको धर्मलाई स्वीकार्‍यौ भने तिमीहरु अरब लगायत गैर अरबका राजा बन्नेछौ । मृत्यु पश्चात् जीवनमा तिम्रो लागि जोर्डनको बगैंचा जस्तो स्वर्ग हुनेछ र यदि तिमीले यस्तो गरेनौ भने उसको तर्फबाट तिमीहरुमा हत्या हिंसाका घटना घट्ने छन् र मृत्यु पश्चात्को जीवनमा तिम्रो लागि आगो हुनेछ त्यसैमा तिमीहरुलाई जलाइने छ ।[३]

तथापि त्यो षड्यन्त्र कार्यान्वयन गर्ने समय आधी रात पश्चात्को समय निर्धारित थियो । त्यसकारण उनीहरु जाग्राम बसे । निर्धारित समयको प्रतिक्षामा थिए । तर अल्लाह आफ्नो कार्यमा सक्षम छन् । उसैको हातमा आकाश र पातालको राज छ । उसले जे चाहन्छ त्यो गर्छ । जसलाई बचाउन चाहन्छ उसको कसैले एउटा रौं पनि उखेल्न सक्दैन र जसलाई पक्रन चाहन्छ उसलाई कसैले बचाउन पनि सक्दैन । तसर्थ अल्लाहले त्यस अवसरमा त्यो काम गर्‍यो जसलाई निम्न श्लोकमा ईशदूतलाई सम्बोधित गर्दै भनिएको थियो :

وَإِذْ يَمْكُرُ بِكَ الَّذِينَ كَفَرُوا لِيُثْبِتُوكَ أَوْ يَقْتُلُوكَ أَوْ يُخْرِجُوكَ ۚ وَيَمْكُرُونَ وَيَمْكُرُ اللَّهُ ۖ وَاللَّهُ خَيْرُ الْمَاكِرِينَ (الأنفال: 30 )

त्यो घटनालाई स्मरण गर्नु जब काफिरहरूले तिमीलाई पक्रन वा तिम्रो हत्या गर्न वा तिमीलाई देशनिकाला गर्न तिम्रो विरुद्ध चाल चलिरहेका थिए । ती मानिसहरूले आफ्नो चाल चलिरहेका थिए भने अल्लाहले पनि आफ्नो चाल चलिरहेको थियो । अल्लाह नै सबैभन्दा राम्रो चाल चल्नेवाला छ । (अल्अन्फाल:३०)

१ जादुल मआद २/५२
२ इब्ने हेशाम १/४८२
3 इब्ने हेशाम १/४८२

## ईशदूत आफ्नो घर त्यागदै

जे होस् कुरैशले आफ्नो योजना कार्यान्वयन गर्न अत्यधिक तयारी गरे तापनि प्रत्यक्ष रुपमा असफल भए । किनभने त्यो दिन राती ईशदूतले अलीसँग भन्नुभयो : तिमी मेरो ओछ्यानमा यो हरियो हजरमी बर्को ओढेर सुत्नु । तिमीलाई उनीहरूको हातबाट कुनै नोक्सानी हुने छैन । ईशदूतले पनि त्यही बर्को ओढेर सुत्ने गर्नुहुन्थ्यो ।[१] अली उहाँको ओछ्यानमा सुते ।

त्यसपछि ईशदूत बाहिर निस्कनुभयो । बहुदेववादीहरूको पंक्ति चिर्दै हिँड्नुभयो र एक मुट्ठी कन्करेली माटो लिएर उनीहरूको टाउकोमा फाल्नुभयो । त्यसैबाट अल्लाहले उनीहरूको नजर बन्द गरिदियो ताकि उनीहरूले ईशदूतलाई देख्न नसकुन् । त्यस बेला उहाँले कुरआनको निम्न श्लोकहरु पाठ गर्दै निस्कनुभयो :

وَجَعَلْنَا مِنْ بَيْنِ أَيْدِيهِمْ سَدًّا وَمِنْ خَلْفِهِمْ سَدًّا فَأَغْشَيْنَاهُمْ فَهُمْ لَا يُبْصِرُونَ (ياسين :9)

हामीले उनीहरुको अगाडि पछाडि अवरोध खडा गर्‍यौं । हामीले नै उनीहरूको नजर बन्द गरेका थियौं जसले गर्दा उनीहरूले देख्न सकेनन् । (यासिन:९)

त्यस अवसरमा कुनै पनि बहुदेववादी माटो लाग्नुबाट बचेन । उनीहरु सबैको टाउकोमा ईशदूतले माटो फाल्नुभयो । त्यसपछि उहाँ अबू बकरको घर जानुभयो र उनको घरको एउटा झ्यालबाट निस्केर दुवै जना रातरातै यमनतर्फ लाग्नुभयो । केही माइलको दुरीमा सौर नामक पहाडको एउटा गुफामा गएर बस्नुभयो ।[२]

उता घेराउ गर्ने व्यक्तिहरू उहाँ कति बेला निस्कनुहुन्छ भनेर कुरिरहेका थिए । तर उनीहरुलाई पहिला नै आफुहरु विफल भएको जानकारी भएको थियो ।

उनीहरुकहाँ एक जना अपरिचित व्यक्ति आयो र उनीहरूलाई उहाँको ढोकामा देखेर सोध्यो, तपाईंहरु के को प्रतीक्षामा हुनुहुन्छ ? उनीहरूले भने : मुहम्मदको । उसले भन्यो : तपाईंहरू असफल हुनुभयो । मुहम्मदﷺ त तपाईहरूको अगाडिबाट गइसक्नु भएको छ । तपाईंहरूको टाउकोमा माटो छर्दै आफ्नो बाटो लाग्नुभयो । उनीहरूले भने : हामीले त उसलाई देखेनौं । त्यसपछि उनीहरु आफ्नो टाउकोबाट माटो टक्टक्याउँदै उठे ।

ढोकाबाट चियाएर हेर्दा अली सुतिरहेका थिए । उनीहरुले भन्न थाले : यी यहाँ मुहम्मद सुतिरहेको छ । अलीको शरीरमा उहाँको बर्को थियो । तसर्थ उनीहरू बिहानीसम्म त्यहीं डटेर बसे । बिहान भएपछि अली ओछ्यानबाट उठेको देख्दा

१ इब्ने हेशाम १/४८२
२ इब्ने हेशाम १/४८२ जादुल मआद २/५२

बहुदेववादीहरूको हातबाट सुगा उडिसकेको थियो । यिनीहरूले अलीसँग सोधे, ईशदूत कहाँ छन् ? अलीले आफुलाई थाहा नभएको बताए ।[१]

## घरदेखि गुफासम्म

ईशदूत ईशदूतत्वको १४ औं वर्ष सफर महिनाको २७ तारिख तदनुसार १२ वा सेप्टेम्बर ६२२ सालमा[२] मध्यराती आफ्नो घरबाट निस्कनुभयो र आफ्नो सबैभन्दा विश्वासिलो साथी अबू बकरको घर जानुभयो । घाम निस्कनुभन्दा पहिला नै मक्काबाट बाहिर जान सकियोस् भनेर घरको पछाडिको एउटा झ्यालबाट निस्केर दुवै जना हिँड्नुभयो ।

किनभने ईशदूतलाई थाहा थियो, कुरैशीहरुले पूरा शक्ति लगाएर उहाँहरुको खोजी गर्ने छन् । जुन बाटोतिर मानिसहरुको पहिलो नजर जान सक्थ्यो त्यो मार्ग उत्तरतर्फ मदिना जाने राजमार्ग थियो । त्यसकारण उहाँले त्यो बाटो रोज्नुभयो जुन त्यसको एकदमै उल्टो थियो अर्थात् यमन जाने बाटो जुन मक्काको दक्षिण हुँदै जान्थ्यो । उहाँहरु त्यो बाटो हुँदै पाँच माइलको दूरी जति गएपछि त्यस पहाडको फेदीमा पुग्नुभयो जुन सौरको नामले प्रसिद्ध छ । त्यो पहाड अति अग्लो, जटिल र चढ्न निकै कठिन थियो । त्यहाँ ढुङ्गा पनि प्रशस्त थिए । ती ढुङ्गाका कारण ईशदूतको दुवै खुट्टामा चोट लागेको थियो । भनिन्छ उहाँहरु पाइलाका निशान नदेखियोस् भनेर औंलाले टेकेर हिँड्नु भएको थियो । त्यसकारण उहाँको खुट्टामा चोट लागेको थियो । कारण जे भए पनि पहाडको फेदीमा पुगेर अबु बकरले उहाँलाई बोकेर दौडदै पहाडको टाकुराको त्यो गुफामा पुगे जसलाई इतिहासमा सौरको नामले चिनिन्छ ।[३]

## जब दुवै जना गुफामा थिए

गुफाको नजिक पुगेपछि अबू बकरले भने : एक छिन तपाईं यसमा प्रवेश नगर्नुहोस् । पहिला म गएर हेर्छु । यदि त्यसमा कुनै वस्तु भए मैले नै त्यसको सामना गर्नेछु । अन्ततः अबू बकरले भित्र पसेर गुफालाई सफा गरे । एउटा कुनामा दूलाहरू थिए । त्यसलाई उनले आफ्नो लुंगी च्यातेर बन्द गरे । तर दुई वटा ठूलो दूलो बाँकी रह्यो । अबू बकरले ती दुईटै दूलोमा आफ्नो खुट्टा राखे । त्यसपछि ईशदूतसँग भित्र आउन अनुरोध गरे । उहाँ सवारी लिएर भित्र आउनुभयो र अबू बकरको काखमा शीर राखेर सुत्नुभयो । उता अबू बकरको खुट्टामा कुनै वस्तुले टोक्यो तर ईशदूतको निद्रा खलबलिन्छ भनेर उनी अलि कति पनि चलमलाएनन् । तर अचानक उनको आँसु ईशदूतको अनुहारमा खस्यो र उहाँ उठ्नुभयो । ईशदूतले भन्नुभयो : अबू बकर

---

१ इब्ने हेशाम १/४८२ जादुल मआद २/५२
२ रहमतुल लिल् आलमिन १/९५
३ अब्दुल्लाह नजदीको मुख्तसर सिरतुर्रसुल १६७

तिमीलाई के भयो ? उनले भने मेरो पितामाता तपाईंमाथि बलिदान होउन् ! मलाई कुनै वस्तुले टोक्यो । ईशदूतले आफ्नो थुकको राल लगाइ दिनुभयो र दुखाई सन्चो हुँदै गयो ।[१]

त्यहाँ दुवै जनाले तीन रात अर्थात् शुक्रवार, शनिवार र आइतवार राती गुफामा लुकेर बिताउनुभयो ।[२] त्यस दौरान अबू बकरका छोरा अब्दुल्लाह पनि त्यहीं रात बिताउँथे । आइशाको बयान छ : उनी गहिरो सूझबूझका धनि तथा चतुर युवक थिए । घाम निस्कनुभन्दा पहिला नै उनी गुफाबाट मक्का जान्थे मानौं उनले मक्कामा नै रात विताएका थिए । त्यसपछि उहाँ दुवैको विरुद्ध षड्यन्त्र बारे जुन कुरा सुन्थे त्यसलाई राम्रोसँग कण्ठ गर्थे अनि अँध्यारो भएपछि त्यो कुरा लिएर गुफामा जान्थे ।

उता अबू बकरको नोकर आमिर बिन फुहैरह बाखा चराउँने गर्थे । रातको एक पहर बितेपछि बाखा लिएर गुफामा जान्थे । यसरी दुवै जनाले रातमा अघाउने गरी दूध पिउनुहुन्थ्यो । अनि बिहानपख आमिर बिन फुहैरह बाखा लिएर हिँड्थे । तीन रातसम्म उनले त्यसै गरे ।[३] साथसाथै आमिर बिन फुहैरहले अब्दुल्लाह बिन अबी बकर मक्का गएपछि उनको पाइलाको निशानहरु मेटियोस् भनेर त्यही बाटो बाखा लिएर मक्का जान्थे ।[४]

## कुरैशको सक्रियता

जब कुरैशहरु उहाँको हत्या गर्न निर्धारित गरिएको रात वितेको र बिहान ईशदूत उनीहरुको हातबाट उम्केको कुरामा विश्वस्त भए अनि उनीहरूभित्र कुण्ठा तथा उन्माद उत्पन्न भयो । उनीहरूले सबैभन्दा पहिला आफ्नो क्रोध अलीमाथि खन्याउँदै उनलाई घिसारेर काबामा लगे । जाँच बुझको लागि केही बेर आफ्नो नियन्त्रणमा राखे ।[५] अलीबाट केही फेला नपरेपछि अबू बकरको घर आएर ढोका ढक्ढकाए । घरमा अबु बकरकी छोरी आस्मा थिइन् । उनीसँग तिम्रो बुबा कहाँ छन् भनेर सोधे । उनले भनिन् : मलाई थाहा छैन । खै मेरो बुबा कहाँ हुनुहुन्छ ? त्यो जवाफमा दुर्जन अबू जहलले उनको अनुहारमा जोडले थप्पड हान्यो जसले गर्दा उनको कानको रिङ पनि झऱ्यो ।[६]

---

१ मिश्कात २/५५६
२ फत्हुल बारी ७/३३६
३ सही बुखारी १/५५३
४ इब्ने हेशाम १/४८६
५ तारिख तब्री २/३७४
६ इब्ने हेशाम १/४८७

त्यसपछि कुरैशले एक आपतकालीन सभा गरेर उहाँ दुवैलाई गिरफ्तार गर्नका लागि सम्भव भएसम्म सम्पूर्ण साधन खर्चने निर्णय गरे । त्यसै क्रममा मक्काबाट निस्कने सम्पूर्ण मार्गमा उनीहरुले सक्त एवं सशस्त्र पहरा लगाए । त्यसका साथसाथै ईशदूत र अबू बकरलाई वा उहाँहरूमध्ये कुनै एकलाई जिउँदो वा मूर्दा हाजिर गर्नेलाई हरेकको बदला एक सय ऊँट पुरस्कार स्वरुप दिने घोषणा गरे ।[१] त्यस घोषणापछि सवारी गर्ने, पैदल हिँडने र पाइलाको निशाना चिन्ने विशिष्ट व्यक्तिहरु ज्यादै सक्रियताका साथ उहाँहरुको खोजीमा लागे । पहाड,मैदान,उपत्यका र भीर पाखा चारैतिर छरिए तर प्राप्ति केही भएन ।

खोजी गर्नेहरू गुफाको द्वारसम्म पुगे त गर्न के नै सक्थे र ? अल्लाह आफ्नो कार्यमा सशक्त छ । तसर्थ सहीह बुखारीमा अनसमार्फत वर्णन गरिएको छ अबू बकरले भने : म ईशदूको साथमा गुफामा थिएँ, टाउको उठाएर हेर्दा मानिसहरूको खुट्टा देखियो । मैले भनें : हे ईशदूत यदि उनीहरूमध्ये कुनै व्यक्तिले केवल आफ्नो नजर तल गऱ्यो भने हामीलाई देख्न सक्छ । उहाँले भन्नुभयो : अबू बकर ! मौन बस, हामी दुई जनाको साथमा तेस्रो अल्लाह छ । एक अर्को कथन अनुसार शब्दहरू यसप्रकार छन् : "अबू बकर ! यस्तो दुई जनाको बारेमा तिम्रो के विचार छ जसको तेस्रो अल्लाह छ ।"[२]

वास्तवमा त्यो एउटा चमत्कार थियो जुन अल्लाहले आफ्नो दूतलाई प्रदान गरेको थियो । तसर्थ खोजी गर्नेहरु फर्के । जबकि उहाँहरुको र उनीहरुको बीच एक दुई पाइलाभन्दा लामो दूरी थिएन ।

## मदिनाको मार्गमा

जब उनीहरु खोजतलास गरेर थाके, खोजी गर्ने सक्रियता मत्थर हुँदै गयो र तीन दिनसम्मको निरन्तर दौडधूपको असफल परिणामपछि कुरैशको जोसजाँगर सेलाउँदै गयो अनि ईशदूत र अबू बकरले मदिनातर्फ लाग्ने संकल्प गर्नुभयो । जंगल र मरुभूमिको विशिष्ट पथदर्शक अब्दुल्लाह बिन अरीकत लैसीसँग पहिला नै ज्यालादारीमा मदिना पुऱ्याउने कुरा तय भएको थियो । ऊ कुरैशी धर्ममा भए पनि भरोसिलो थियो । त्यसकारण सवारी उसलाई दिइयो । साथै तीन दिनपछि ऊ दुवै सवारी लिएर सौर नामक गुफामा आउनु पर्ने कुरा पनि तय भयो । फलस्वरुप हिजरी सम्बत १ साल रब्बिअल औवल सोमवार तद्नुसार ६२२ साल १६ सेप्टेम्बरको राती अब्दुल्लाह बिन अरीकत सवारी लिएर गुफामा आयो । त्यसै अवसरमा अबू बकरले

१ सही बुखारी १/५५४
२ सही बुखारी १/५५४ मुस्नद अहमद १/२, अब्दुल्लाह नजदीको मुख्तसर सिरतुर्रसुल १६८

ईशदूतको सेवामा सवारीको लागि उत्तम ऊँटनी पेश गर्दै आफ्नो दुईटा सवारीमध्ये एउटा लिन अनुरोध गरे । ईशदूतले भन्नुभयो : कति मा ?

उता अबु बकरकी छोरी अस्मा पनि यात्राखर्च लिएर आइन् तर त्यसमा झुण्ड्याउने गाँठो पार्न बिर्सिन् । प्रस्थानको बेला भएपछि अस्माले यात्राखर्च झुण्ड्याउन लाग्दा त्यसमा गाँठो नै नभएको देखिन् । उनले आफ्नो पटुका खोलरे दुई टुक्रा गरी च्यातेर एकमा यात्राखर्च झुण्ड्याइन् र अर्को कम्मरमा बाँधिन् । त्यसै कारणले उनको उपनाम जातुल निताकैन पर्न गयो ।[१]

त्यसपछि ईशदूत र अबू बकर हिँड्नुभयो । आमिर बिन फुहैरह पनि साथमा थिए । पथदर्शक अब्दुल्लाह बिन अरीकतले तटीय मार्ग समात्यो ।

गुफाबाट प्रस्थान भएपछि ऊ सबैभन्दा पहिला यमनतर्फ लाग्दै दक्षिणतिर धेरै टाढासम्म गयो । त्यसपछि पश्चिमतर्फ मोडियो र सामुन्द्रिक तटतिर लाग्यो । अनि सर्वसाधारणले पहिल्याउन नसक्ने बाटो समातेर उत्तरतिर मोडियो । त्यो मार्ग लाल सागरको नजिकै थियो र त्यसमा कमै कोही हिँड्थ्यो ।

ईशदूत त्यस मार्गको जुन ठाउँ हुँदै जानुभएको थियो इब्ने इस्हाकले ती ठाउँहरुको चर्चा गरेका छन् । उनी भन्छन् : बटुवाले उहाँ दुबैलाई साथ लिएर मक्काको तल्लो भागबाट तट हुँदै उस्फानको तल्लो भागको बाटो काट्यो । त्यसपछि उनीहरुलाई लिएर अमजको तल्लो भाग हुँदै गयो । कुदैद पार गरेपछि बाटो काटेर त्यहाँबाट खरार हुँदै अगाडि बढ्यो । त्यसपछि सिनिया हुँदै अगाडि बढ्यो । लकफ हुँदै अगाडि बढ्यो । यसरी मजाहको मरुभूमिमा पुग्यो र मजाहको मोडबाट अगाडि बढ्यो । त्यसपछि जूलगजवीन मोडको भिरालोतिर लाग्यो त्यसपछि जीकश्रको उपत्यकामा आयो । त्यसपछि जदाजद हुँदै अजरदतिर पुग्यो । त्यस पश्चात् ताहन मरुभूमिको छेउमा रहेको उपत्यका जूसल्म हुँदै गयो । त्यहाँबाट अबाबीद र फाजहतिर लाग्यो । त्यसपछि अर्जमातिर झऱ्यो । त्यसपछि रकूबाको दाहिनेपट्टि सनीयतुल आयरबाट हुँदै अगाडि बढ्यो । यसरी रेम उपत्यकामा झरेर त्यसपछि कुबा पुग्यो ।[२]

(१) सहीह बुखारीमा अबू बकर सिद्दीकमार्फत वर्णन गरिएको छ । उनले भने : हामीहरू सौर गुफाबाट निस्केर रातभर र दिनमा मध्यान्हसम्म हिँड्दै रह्यौं । जब ठिक मध्यान्हको समय भयो, बाटो खाली भयो र कोही बाटो हिंडने व्यक्ति रहेन अनि हामीलाई एउटा लामो चट्टान देखा पऱ्यो जसमा घामको छायाँ थियो । हामी त्यहीँ झऱ्यौं । ईशदूतलाई आराम गर्ने ठाउँ सफा गरेँ र त्यसमाथि एउटा भूवादार कपडा ओछ्याएर ईशदूतलाई सुत्न अनुरोध गरी आफुहरूले वरिपरि रेखदेख गरेँ । उहाँ

---

१ सही बुखारी १/५५३, इब्ने हेशाम १/४८६
२ इब्ने हेशाम १/४९१

सुत्नुभयो र म उहाँको देखभालको लागि बाहिर निस्किएँ । अचानक एक जना गोठालेलाई आफ्नो बाखा लिएर चट्टानतर्फ आउँदै गरेको देखेँ । ऊ पनि त्यस चट्टानमा आराम गर्न आएको थियो । मैले ऊसँग भनेँ : हे बाबु तिमी कसको मान्छे हौ ? उसले मक्का वा मदिनाको कुनै मानिसको बारेमा बतायो ।[1] मैले भनेँ : तिम्रो बाखाले दूध दिन्छ ? उसले भन्यो : दिन्छ । मैले सोधेँ : दुहुन पाइन्छ । उसले भन्यो, पाइन्छ । उसले एउटा बाखा समातेर ल्यायो । मैले सोधेँ : बाखाको थुनमा लागेको माटो तथा पातपतिंगा र रौं सफा गर त । उसले एउटा कचौरामा अलिकति दूध दुह्यो र मसँग ईशदूतले पानी पिउने र वजु गर्ने एउटा छालाको अम्खोरा थियो । म ईशदूतनिर आएँ तर उहाँलाई उठाउन मेरो मनले मानेन । जब उहाँ उठनुभयो उहाँनिर आएँ र दूधमा पानी हालेर मिसाएँ । त्यसको पिँध चिसो भयो । त्यसपछि मैले भनेँ : हे ईशदूत ! ल दूध पिउनुहोस् । उहाँले पिउनुभयो । मलाई धेरै खुसी लाग्यो । उहाँले सोध्नुभयो : जाने बेला भएन ? मैले भनेँ : भइसक्यो । त्यस पश्चात् हामीहरू हिँडिहाल्यौं ।[2]

(२) त्यस यात्रामा अबू बकर ईशदूतको पछाडि हिंडने गर्थे । अर्थात् सवारीमाथि ईशदूतको पछाडि बस्ने गर्थे किनभने उनी वृद्ध देखिन्थे । जसले गर्दा मानिसहरूको ध्यान उनैतिर जान्थ्यो । ईशदूत युवक जस्ता देखिनु हुन्थ्यो जसले गर्दा मानिसहरुको ध्यान उहाँतिर कमै जान्थ्यो । कुनै मानिस भेटिदा उसले अबू बकरसँग उहाँको बारेमा सोध्थ्यो । अबू बकर त्यसको बडो रोचक जवाफ दिंदै भन्थे “यिनी मलाई बाटो बताउने व्यक्ति हुन् ।” सोध्नेहरुले बाटोको अर्थ हिंडने बाटो नै सम्झे तर उनको अभिप्राय भने कल्याणको बाटो थियो ।[3]

(३) त्यसै यात्रामा उहाँ उम्मे माबद् खुजाइयाको शिवीर हुँदै जानुभयो । उनी एउटी प्रतिष्ठित र शक्तिशाली नारी थिइन् । घूँडामा हात राखेर शिवीरको आँगनमा वसिरहन्थिन् र आउने जानेहरूलाई खाना ख्वाउने पानी पिलाउने गर्थिन् । उहाँले उनीसँग सोध्नुभयो : तपाईंसँग केही छ ? उनले भनिन् : हामीसँग केही भएको भए तपाईंहरूको सत्कार गर्न अप्ठ्यारो हुँदैन थियो । बाखा पनि टाढा छन् । त्यो समय अनिकालको समय थियो ।

ईशदूतले शिवीरको एक कुनामा एउटा बाखा देख्नुभयो । उहाँले सोध्नुभयो उम्मे माअबद ! यो कस्तो बाखा हो ? भनिन् : यो बाखा दुब्लो भएको कारण आफ्नो हुलमा जान सकेन । उहाँले सोध्नुभयो यस बाखामा केही दूध छ ? भनिन् : त्यो त

१ एक हदिस अनुसार उसले कुरैशको कुनै व्यक्ति बारे बतायो ।
२ सही बुखारी १/५१०
3 सही बुखारी १/५५६

अरू बाखाभन्दा ज्यादै कम्जोर छ । उहाँले भन्नुभयो : अनुमति भए हामी यसलाई दुहुन्छौं ? भनिन : अवश्य, यदि तपाईंलाई त्यसमा दूध देखा परेको छ भने अवश्य दूहनु । त्यसपछि ईशदूतले बाखाको थुनमा हात मुसार्दै अल्लाहको नाम लिएर दुआ गर्नुभयो । बाखाले खुट्टा फट्टायो । थुनमा दूध  भरियो । उहाँले उम्मे माबदसँग एउटा ठूलो भाँडो माग्नुभयो जसमा एउटा जमातलाई नै पिउन पुग्थ्यो र त्यसमा यति दूध दुहनुभयो त्यसको फिँज पनि माथि आयो । त्यसपछि उम्मे माबदलाई पनि पिलाउनुभयो । उनी पनि दूध  पिएर अघाइन् अनि उहाँ स्वयमले पनि पिउनुभयो । फेरि त्यसै भाँडोमा दोस्रो पटक पनि त्यति नै दूध दुहनुभयो र भाँडो पनि भरियो । त्यो दूध उम्मे माबदलाई दिएर उनीहरू अगाडि लाग्नुभयो ।

केही छिनपछि उनको श्रीमान अबू माअबद आफ्ना दुब्ला बाखाहरू जुन दुब्ला भएका कारण मरेको चालमा आइरहेका थिए तिनलाई डोऱ्याउँदै आइपुगे । दूध देखेर उनलाई आश्चर्य लाग्यो । उनले सोधे, यो दूध  कहाँबाट आयो बाखाहरू त टाढा थिए र घरमा दूध दिने बाखा पनि थिएन ? श्रीमतीले भनिन् : एक जना कल्याणकारी व्यक्ति आएको थियो । यो सब उसको कारणले गर्दा भएको हो । त्यो व्यक्ति यस्तो यस्तो खालको थियो । अबू माबदले भन्यो त्यो त त्यही व्यक्ति लाग्छ जसलाई कुरैशले खोज तलाश गरिरहेका छन् । उसको केही शकल त बयान गर । त्यसमा उम्मे माबदले अति नै आकर्षक शैलीमा उहाँको विशेषता तथा प्रतिभा र चमत्कार बारे यसरी चित्रण गरिन् मानौं श्रोताले उहाँलाई आफ्नो सामू देखिरहेको छ । यस पुस्तकको अन्त्यमा ती विशेषताहरु उल्लेख गरिने छन् । विशेषता सुनेर अबू माबदले भन्यो : ऊ त त्यही व्यक्ति हो जसको बारेमा मानिसहरूले किसिम किसिमका कुराहरू गरेका छन् । मलाई उहाँको साथी बन्ने मन लागेको छ । कुनै उपाय पाएँ भने त्यसै गर्नेछु ।

उता मक्कामा एउटा आवाज गुञ्जेको थियो जसलाई मानिसहरूले सुनिरहेका थिए तर त्यसलाई वाचन गर्ने व्यक्ति देखिएको थिएन । त्यो आवाज निम्न लिखित थियो ।

جزى الله رب العرش خير جزائه    رفيقين حلا خيمتى ام معبد
هما نزلا بالبر وارتحلا به    وافلح من امسى رفيق محمد
فيا لقصى ما زوى الله عنكم    به من فعال لا يجازى وسودد
لهن بنى كعب مكان فتاتهم    ومقعدها للمومنين بمرصد
سلوا اختكم عن شاتها وانائها    فانكم ان تسالوا الشاة تشهد

अनुवाद छ : ब्रह्माण्डका पालनहार अल्लाहले ती दुवै साथीहरूलाई राम्रो प्रतिफल दिओस् जो उम्मे माबदको शिबीरमा गएका थिए । उनी दुबै शुभकर्मका साथ आए साथै शुभकर्मका साथ त्यहाँबाट प्रस्थान भए । जो मुहम्मदﷺको साथी बन्यो त्यो सफल भयो । हाय कुसै, अल्लाहले ऊद्वारा महान कार्य र नेतृत्व तिमीहरुबाट लिएको

छ । बनू कअबलाई उनकी चेलीको बासस्थान र मुमिनहरूको रेखदेखको शिबीरका कारण बधाइ छ । तिमीले आफ्नो चेलीसँग उसको बाखा र दूधले भरिएको भाँडोको बारेमा सोध । तिमीहरुले बाखासँग पनि सोध्यौ भने त्यसले पनि साक्षी दिनेछ ।"

आस्मा भन्छिन्, ईशदूत कता जानुभएको थियो त्यो हामीलाई थाहा थिएन । एउटा दानव मक्काको फेदीबाट कविता गाउँदै आयो । मानिसहरू त्यसको पछिपछि लागे । मानिसहरुले उसको आवाज सुनिरहेका थिए तर उसलाई देखेका थिएनन् । पछि ऊ मक्काको माथिल्लो भागमा देखियो । उनी भन्छिन्, जब हामीले उसको कुरा सुन्यौं अनि हामीलाई ईशदूत कहाँ जानु भएको छ भन्ने कुरा थाहा भयो । अर्थात् उहाँ मदिनातर्फ लाग्नु भएको छ ।[१]

(४) बाटोमा सुराका बिन मालिकले पिछा गरे । त्यस घटनालाई स्वयं सुराकाले बयान गरेका छन् । उनी भन्छन् : म आफ्नो जाति बनी मुद्लजको एउटा बैठकमा बसेको थिएँ । त्यतिकैमा एक जना व्यक्ति आएर हाम्रो सामुन्ने उभियो । हामी बसिरहेका थियौं । उसले भन्यो : हे सुराका ! मैले तटनिर केही व्यक्तिहरू देखेको छु । मेरो विचारमा ऊ मुहम्मदﷺ र उनका साथी हुन् । सुराका भन्छन्, मैले उनीहरू नै होलान भन्ने कुरा बुझिहालें । तर मैले त्यस व्यक्तिसँग भने : ती उनीहरू होइनन् । तिमीले हाम्रो अगाडिबाट गएका फलानो फलानोलाई देखेको होला । म बैठकमा केही बेरसम्म बसें । त्यसपछि उठेर भित्र गएँ र घोडा लिएर सानो डाँडाको पछाडि रोकिएर मेरो प्रतीक्षा गर भनी आफ्नो नोकर्नीलाई भनें । उता मैले आफ्नो भाला लिएर घरको पछाडिबाट बाहिर निस्कें । लट्ठीको एक टुप्पो भूँइमा घिसारेको थिएँ र अर्को भाग तल राखेको थिएँ । यसरी म आफ्नो घोडानिर पुगें र त्यसमाथि सवार भएँ । घोडाले नियमित मलाई लिएर दौडिरह्यो र म उनीहरूको नजिक पुगें । त्यसपछि घोडा मलाई समेत लिएर चिप्लेर लोट्यो तर म त्यसबाट झरिहालें । मैले उठेर ठोक्रोमा हात हालें साथै गिर्खाको वाण निकालेर उनीहरूलाई हान्न सक्छु वा सक्दिन भन्ने कुरा जाँच्न थालें । तर त्यसबाट त्यो वाण निस्कियो जुन मलाई मन पर्दैन थियो । तर पनि मैले त्यही वाण लिएर घोडामाथि सवार भएँ । घोडा मलाई लिएर दौड्न थाल्यो म यति नजिक पुगें कि मैले ईशदूतले कुरआन पाठ गरेको सुनिरहेको थिएँ तर उहाँले परवाह गर्नु भएन । अबू बकर पटक पटक फर्केर हेर्दै थिए । मेरो घोडाको अघिल्ला खुट्टा घुँडासम्म जमिनमा धँसियो अनि म त्यसबाट ओर्लें । त्ससपछि मैले घोडालाई धपाएँ, घोडा उठ्न खोज्यो र मुश्किलले खुट्टा निकाल्यो । घोडा त सीधा उभियो तर त्यसको पाइलाबाट आकाशतिर धूँवा जस्तो मुस्लो उडिरहेको थियो । मैले फेरि गिर्खाको वाणद्वारा भाग्य कस्तो छ भनेर जान्न खोजें

१ जादुल मआद २/५३,५४, हाकिम ३/९

फेरि त्यही वाण निस्कियो जुन मलाई मन परेको थिएन । त्यस पश्चात् मैले शान्तिका साथ उनीहरुलाई पुकारें । उनीहरू रोकिए । म आफ्नो घोडामा सवार भएर उनीहरूको नजिक पुगें । जब उनीहरुले मलाई रोके ईशदूतको व्यवहार ममाथि प्रभावित भएरै छाड्छ भन्ने कुरा मलाई लाग्यो । मैले ईशदूतसँग भनें तपाईंको जातिले तपाईंको बदलामा ठूलो पुरस्कार राखेको छ । मैले मानिसहरूको दुष्प्रयास बारे सूचित पनि गरें साथै मैले यात्रा सामग्री र सामानहरु पनि पेश गरें तर उनीहरूले मेरो न कुनै सामान लिए न मसँग कुनै प्रश्न नै गरे । उनीहरुले मसँग केवल उनीहरुको कुरा गोप्य राख्न भने । मैले उहाँसँग आफ्नो लागि शान्ति पत्र लेख्न अनुरोध गरें । उहाँले आमिर बिन फुहैराहलाई आदेश दिनुभयो र उनले छालाको टुक्रामा लेखेर मलाई दिए । त्यसपछि ईशदूत अघि बढ्नुभयो ।[१]

त्यस घटनासँग सम्बन्धित स्वयं अबू बकरको पनि एउटा कथन छ । उनको बयान छ । हामीहरू प्रस्थान हुँदा समुदाय हाम्रो खोजीमा थियो । तर घोड सवार सुराका बिन मालिकले बाहेक अरू कसैले हामीलाई भेटाउन सकेन । मैले भनें : हे ईशदूत हाम्रो पिछा गर्ने व्यक्तिले हामीलाई समात्न चाहेको छ । उहाँले भन्नुभयो : “ चिन्ता नमान  अल्लाह हाम्रो साथमा छ ।”[२]

सुराका फिर्ता भएपछि पनि उसले मानिसहरूलाई उहाँको खोज तलाशमा सक्रिय देख्यो । उसले भन्यो : मलाई खबर भइसकेको छ । यहाँ तिम्रो जुन काम थियो त्यो भइसकेको छ । यसरी उसले मानिसहरूलाई फिर्ता लिएर गयो । अर्थात् शुरुमा ऊ आफै हाँकिएको थियो तर अन्तिममा सबैको नायिके बन्यो ।[३]

(५) बाटोमा ईशदूतलाई बुरैदह बिन हबिस अस्लमी भेटिए । उनी आफ्नो समुदायका ८० घरधुरी समेत त्यहीँ मुसलमान भए । ईशदूतले इशाको नमाज पढ्दा सबैले उहाँको पछाडि नमाज पढे । बुरैदह आफ्नो समुदायको भूमिमा नै बसे । उहुद युद्धपछि ईशदूतकहाँ आए ।

अब्दुल्लाह बिन बुरैदहमार्फत वर्णन गरिएको छ ईशदूतले राम्रो आशा राख्नुहुन्थ्यो नराम्रो आशा राख्नुहुन्थेन । बुरैदाह आफ्नो खानदान बनु सहमका ७० जना सवारलाई लिएर ईशदूतसँग भेट गरे । उहाँले सोध्नुभयो तिमी कुन समुदायका हौ ? उनले जवाफमा भने, म अस्लम कबिलाको हुँ । उहाँले अबु बकरसँग भन्नुभयो

१ सही बुखारी १/५५४, जादुल मआद २/५३ अनुसार बनी मुदलिजीको घर राबिग नजिक थियो । सुराकाले त्यतिखेर उहाँको पिछा गऱ्यो जब उहाँ कुदैदबाट उकालोतिर लाग्दै हुनुहुन्थ्यो ।
२ बुखारी १/५१६
3 जादुल मआद २/४९१

हामी सकुशल छौँ । उहाँले सोध्नुभयो तिमी कसको सन्तान हौ ? उनले म बनी सहमको सन्तान हुँ भनी जवाफ दिए । उहाँले भन्नुभयो तिम्रो, भाग्य खुल्यो ।[1]

(६) ईशदूत अर्ज नामक ठाउँमा जुहफा र हर्शीबीच रहेको कहदावातमा बसोबास गर्ने कबिला अबु औस तमिम् बिन हजर वा अबु तमिम् औस् बिन हजर अस्लमीको क्षेत्र हुँदै जानुभएको थियो । उहाँको कुनै उँट पछाडि छोडिएको थियो । तसर्थ उहाँ र अबु बकर दुवै एउटै उँटमा सवार थिए । औस्ले आफ्नो नर उँटमा उनी दुवैलाई सवार गरे । उनीहरुको साथमा मस्उद नामक आफ्नो एक जना नोकरलाई पठायो । साथै उसले आफ्नो नोकरलाई आदेश दिदै भन्यो : तिमी उनीहरुलाई सुरक्षित मार्गबाट लिएर जाऊ र उनीहरुको साथ नछोड । तसर्थ ऊ उनीहरुलाई साथ लिएर हिँडयो र मदिना पुऱ्यायो । अनि ईशदूतले मस्उदलाई उसको मालिकतर्फ फिर्ता पठाउनुभयो र उँटको गर्दनमा घोडाको लगामको निशाना लाउन भनी औसलाई भन्न आदेश दिनुभयो । अर्थात दुईटा घेरा बनाएर त्यसको बीचमा रेखा खिचे हुन्छ । त्यो नै त्यसको निशाना रहने छ । उहुदको दिन बहुदेववादीहरु तयार भएपछि औस्ले आफ्नो त्यही नोकर मस्उदलाई त्यसको खबर दिन अर्जबाट पैदल यात्राका साथ मुहम्मदﷺको सेवामा पठायो । यो कथन तबरीमार्फत वर्णन गरिएको छ । ईशदूत मदिना आएपछि औस्ले इस्लाम स्वीकारे तर अर्जमा नै बसे ।[2]

(७) बाटोमा बतन रेम नामक ठाउँमा ईशदूतले जुबैर बिन औवामलाई भेटाउनुभयो । उनी मुसलमानको एउटा व्यापारी समूहको साथमा सिरियाबाट फिर्ता आउँदै थिए । जुबैरले ईशदूत र अबू बकरलाई सेतो लुगा दिए ।[3]

## कुबा आगमन

१४औं ईशदूतत्व ८ रबीअल औवल सोमवारको दिन अर्थात् १ हिजरी तद्नुसार २३ सेप्टेम्बर ६२२ ई मा ईशदूत कुबा पुग्नुभयो ।[4]

अर्वाह बिन जुबैरको बयान छ, मदिनाका मुसलमानहरूले मक्काबाट ईशदूतको प्रस्थानको खबर सुनिसकेका थिए । त्यसकारण मानिसहरू हरेक दिन बिहान-बिहानै हर्राह नामक ठाउँतिर निस्कन्थे र उहाँको बाटो हेरिरहन्थे । अपरान्हको घाम चर्केपछि मात्र उनीहरु फर्कन्थे । एक दिन लामो प्रतीक्षा गरी मानिसहरु फर्केर आफ्नो आफ्नो घर पुगिसकेका थिए । ठिक त्यसै बेला एक जना यहुदी एउटा डाँडामा केही हेर्नको लागि गयो । उसले त्यहाँबाट ईशदूत र उहाँका साथीहरू सेतो कपडा

---

१ असदुल गाबह १/२०९
२ इब्ने हेशाम १/४९१
३ सही बुखारी १/५५४
४ रहमतुल लिल् आलमिन १/१०२, त्यति बेला उहाँको उमेर ठिक ५३ सालको थियो ।

जसबाट चन्द्रज्योति झल्केको थियो लगाएर आउँदै गरेको देख्यो । उसले निकै ठूलो स्वरमा भन्यो : अरबका मानिसहरू ! ऊ आउँदै छ तिम्रो भाग्य जसको तिमीहरू प्रतीक्षा गरिरहेका थियौं । त्यो कुरा सुन्ने बितिकै मुसलमानहरू हतियार लिन दौडे । हतियारले सुसज्जित भएर स्वागतको लागि भेलसरी उर्ले ।[१] हर्राहको पछाडि उहाँको स्वागत गरे ।

इब्ने कैयम भन्छन्, त्यसका साथै बनी अम्र बिन औफ अर्थात कुबावासीमा हल्ला भयो र अल्लाहु अक्बरको नारा गुञ्जियो । मुसलमानहरु उहाँको आगमनको खुशीमा अल्लाहु अक्बरको नारा लगाउँदै उहाँको स्वागतको लागि निस्के । उहाँलाई भेटेर उहाँलाई ईशदूतत्वको बधाई दिए र उहाँको वरिपरि जुनकिरीको जस्तै उनीहरुको जमघट भयो । त्यसबेला उहाँमाथि शान्ति छाएको थियो । त्यसै बेला निम्नलिखत ईशवाणी अवतरण भयो :

فَإِنَّ اللَّهَ هُوَ مَوْلَاهُ وَجِبْرِيلُ وَصَالِحُ الْمُؤْمِنِينَ ۖ وَالْمَلَائِكَةُ بَعْدَ ذَٰلِكَ ظَهِيرٌ (التحريم :4)

अल्लाह उहाँको स्वामी हो । फरिश्ता जिब्रइल तथा सदाचारी मुस्लिमहरु पनि उहाँका सहयोगी हुन् । उनीहरुका साथ साथै फरिश्ताहरु पनि उहाँका सहयोगी हुन् । (अल् तहरीम:४) [२]

उर्वाह बिन जुबैरको बयान छ, मानिसहरूसँग भेटेपछि उहाँ उनीहरुको साथमा दाहिने तर्फ लाग्नुभयो र बनी अम्र बिन औफकहाँ जानुभयो । त्यो समय रब्बिअल औवलको महिना सोमवारको दिन थियो । अबू बकर त्यहाँ आउने मानिसहरुको स्वागतको लागि उभिएका थिए भने ईशदूत मौन बस्नु भएको थियो । अन्सारका जुन मानिसहरू आउँथे र जसले ईशदूतलाई चिनेका थिएनन् उनीहरुले सीधै अबू बकरलाई सलाम गर्थे । उहाँलाई घाम भयो र अबू बकरले च्यादर तानेर उहाँमाथि छायाँ बनाएपछि मानिसहरूले उहाँ ईशदूत हुन् भनेर चिने ।[३]

उहाँको स्वागत र दर्शनको लागि सारा मदिनावासीहरु भेल झै उर्लेर आए । त्यो एउटा ऐतिहासिक दिन थियो जुन मदिना भूमिले कहिल्यै देखेको थिएन । त्यो दिन यहूदीहरुले पनि हब्कुक नामक ईशदूतको भविष्यवाणीलाई साकार देखे “अल्लाह दक्षिणबाट र फारान पहाडको पवित्र ठाउँबाट आयो ।”[४]

---

१ सही बुखारी १/५५५
२ जादुल मआद २/५४
३ सही बुखारी १/५५५
४ बाइबल, सहिफा हब्कुक ३,३

एक भनाइ अनुसार कुबामा अर्को भनाइ अनुसार कुल्सूम बिन हदमको घर र एकअर्को भनाइ अनुसार सअद बिन खैसमाको घरमा उहाँ बास बस्नु भएको थियो । पहिलो भनाई बढी सही छ ।

उता अली बिन अबी तालिब मक्कामा तीन दिन बसे । मानिसहरूले ईशदूतलाई राख्न दिएको नासो तिनीहरुलाई फिर्ता गरी मदिनातिर पैदल हिँडे र ईशदूतलाई कुबामा भेटे र ईशदुतका साथ कुल्सूम बिन हदमको घरमा बास बसे ।[1]

ईशदूत कुबामा सोमवार, मंगलवार, बुधवार र बिहीवार गरी जम्मा चार दिन बस्नुभयो ।[2] त्यसै दौरान मस्जिद कुबाको जग राख्नुभयो साथै त्यहाँ नमाज पनि पढ्नुभयो । त्यो मस्जिद उहाँ ईशदूत बनेपछिको पहिलो मस्जिद हो जसको जग ईशभयको आधारमा राखिएको थियो । पाँचौं दिन जुम्आ अर्थात शुक्रबारको दिन उहाँ अल्लाहको आदेश बमोजिम त्यहाँबाट प्रस्थान हुनुभयो । अबू बकर उहाँको पछाडि सवार भए ।  उहाँले आफ्नो मामाली कबिला बनु नज्जारकहाँ आफ्नो आगमनको खबर पठाउनु भएको थियो । तसर्थ उनीहरू स्वागतका लागि तरवार भिरेर निस्के । उहाँ उनीहरुको साथमा मदिनातिर लाग्नुभयो । बनू सालिम बिन औफको बस्तीमा पुग्दा जुमाको नमाजको समय भयो । उहाँले उपत्यकाको बीचमा रहेको मस्जिदमा जुमाको नमाज पढाउनुभयो । नमाजमा एक सय मानिसहरू थिए ।[3]

## मदिनामा प्रवेश

नमाज पढेपछि ईशदूत मदिनातिर सवार हुनुभयो र त्यसै दिनदेखि त्यस शहरको नाम यस्रिबको साटो मदिनतुर्रसूल अर्थात ईशदूतको शहर पऱ्यो । त्यसैले आजकल संक्षिप्तमा मदिना भन्ने गरिन्छ । त्यो दिन अति नै चहकिलो ऐतिहासिक दिन थियो । गल्ली गल्लीमा पवित्रता एवं ईश्वरीय प्रशंसाको नारा गुञ्जिरहेको थियो र अन्सारकी बालिकाहरू खुशी तथा हर्षले निम्न कविता गान गरिरहेकी थिइन् ।

طلع البدر علينا  من ثنيات الوداع
وجب الشكر علينا ما دعا لله داع
ايها المبعوث فينا جئت بالأمر المطاع

वेदाअका उपत्यकाहरुबाट हाम्रो अगाडि पूर्णिमाको चन्द्रमा निस्क्यो । हामीले अल्लाहको कृतज्ञता प्रकट गर्नु जरुरी छ जबसम्म प्रार्थना गर्नेहरुले प्रार्थना गर्नेछन् ।

१ जादुल मआद २/४५, इब्ने हेशाम १/४९३
२ इब्ने हेशाम १/४९४, सही बुखारी १/६१ मा २४ दिन बताइएको छ ।
3 सही बुखारी १/५५५, ५६०, जादुल मआद २/५५, इब्ने हेशाम १/४९४

हाम्रा लागि पठाइएका हे ईशदूत तपाईंले आज्ञापालना गर्नु पर्ने सन्देशहरु लिएर आउनु भएको छ । [1]

अन्सारीहरु धनाढ्ढे नभएता पनि हरेकले ईशदूत उनीहरूको घरमा बास बसुन् भन्ने चाहेका थिए । उहाँ अन्सारीहरुको जुन घर वा टोल भएर जानुहुन्थ्यो त्यहाँका मानिसहरू उहाँको ऊँटनीको लगाम समातेर भन्थे : विभिन्न सामान तथा हतियार एवं सुरक्षा भएतिर आउनुहोस् । उहाँले भन्नु हुन्थ्यो : यो उँटनीको बाटो छोडिदेऊ । उँटनी अल्लाहको तर्फबाट निर्देशित गरिएको छ । ऊँटनी निरन्तर हिड्दै रह्यो र त्यो स्थानमा पुगेर बस्यो जहाँ आज मस्जिदे नबवी छ । तर उँटनी बसेको ठाउँबाट उठेर अलिकति टाढा नजाँदासम्म उहाँ उँटनीबाट झर्नुभएन । उँटनी अलिकति टाढा गयो फेरि फर्केर त्यही ठाउँमा बस्यो जुन ठाउँमा पहिला बसेको थियो । अनि उहाँ तल झर्नुभयो । त्यो टोल उहाँको मामाली अर्थात् बनू नज्जारको टोल थियो । ऊँटनीमा केवल ईश्वरीय प्रेरणा थियो । किनभने उहाँले आफ्नो मामालीमा बास बसेर उनीहरुलाई प्रतिष्ठित गर्न चाहनु भएको थियो । अब बनू नज्जारका मानिसहरूले आ-आफ्नो घर लैजानका लागि ईशदूतसँग विन्ती तथा अनुरोध गर्न थाले तर अबू ऐयूब अन्सारीले झम्टेर काठी उठाए र आफ्नो घर लिएर गए । त्यसमा ईशदूतले भन्नुभयो : सवारी आफ्नो काठीको साथ जान्छ । उता असअद बिन जर्रारह आएर ऊँटनीको लगाम समाते । तसर्थ ऊँटनी पनि उनकै नजिक बस्यो ।[2]

सहीह बुखारीमा अनसमार्फत वर्णन गरिएको छ ईशदूतले भन्नुभयो : हाम्रो कुन साथीको घर सबैभन्दा नजिक छ ? अबू ऐयूब अन्सारीले भने : मेरो घर , हे ईशदूत ! यी मेरो घर, यहाँ छ मेरो घरको ढोका । ईशदूतले भन्नुभयो : ल जाऊ, हाम्रो लागि केही आराम गर्ने ठाउँ तयार गरिदेऊ । उनले भने ल तपाईंहरु हिँडनुहोस्, अल्लाहको कृपा हुनेछ ।[3]

केही दिनपछि उहाँकी श्रीमती उम्मुल मोमेनिन् सौदा, उहाँकी दुइटी छोरी फातिमा र उम्मे कुल्सूम, ओसामा बिन जैद र उम्मे ऐमन पनि आए । उनीहरुलाई अबु बकरका छोरा अब्दुल्लाहले सपरिवार जसमा उम्मुल मुमेनिन् आइशा पनि थिइन् लिएर आएका थिए । तर ईशदूतकी एउटी छोरी जैनब जो आफ्नो श्रीमान अबूल

१ इब्ने कैयमको भनाइ अनुसार उल्लेखित पंक्तिहरु ईशदूत तबुकबाट फर्कदा पढिएका थिए । जसले मदिनमा प्रवेश गर्दा पढिएको हो भनेका छन् उनीहरुलाई भ्रम भएको हो । जादुल मआद ३/१०, इब्ने कैयमले आफ्नो भनाइको कुनै सन्तोषजनक तर्क दिएका छैनन् । मन्सुरपूरीले मदिनामा प्रवेश गर्दा पढिएका हुन् भनेका छन् । उनले सुहुफे इस्राइलबाट यसलाई प्रमाणित गरेका छन् , रहमतुल लिल् आलमिन १/१०६ । हुन सक्छ दुवै अवसरमा पढिएको थियो ।
२ जादुल मआद २/५५, इब्ने हेशाम १/४९४
३ सही बुखारी १/५५६

आसकहाँ थिइन् आउन पाइनन् । उनको श्रीमानले उनलाई आउन दिएनन् । बद्रको युद्धपछि मात्र उनी आउन पाइन् ।[१]

उम्मुल मुमेनिन् आइशाको बयान छ, ईशदूत मदिना आएपछि अबू बकर र बिलाललाई ज्वरो आयो । मैले उनीहरुको सेवामा उपस्थित भएर सोधें : बुबा तपाईंलाई कस्तो छ ? हे बिलाल ! तपाईंलाई कस्तो छ ? उनी भन्छिन्, अबू बकरलाई ज्वरो आउँदा उनले निम्न कविता पढ्थे ।

كل امرى مصبح فى اهله     والموت ادنى من شراك نعله

अनुवाद छ : हरेक मानिसलाई शुभप्रभात भनिन्छ तर मृत्यु उसको जुत्ताको फित्ताभन्दा पनि धेरै नजिक छ ।

बिलालको स्थितिमा अलि सुधार हुन लाग्दा उनले भन्थे :

الا ليت شعرى هل ابيتن ليلة بواد و حولى اذخر وجليل

وهل ارون يوما مياه مجنة     وهل يبدون لى شامة طفيل

अनुवाद छ : कुनै रात मक्काको उपत्यकामा बिताउने र जहाँ मेरो वरिपरि घास हुने कुरा मलाई थाहा हुने भए । कुनै दिन मुजिन्नहको मुहानमा पुग्ने साथै शामा र तुफैल नामक पहाड देखा पर्ने कुरा मलाई थाहा हुने भए ।

आइशा भन्छिन्, मैले ईशदूतको सेवामा उपस्थित भएर त्यसको खबर दिएपछि उहाँले भन्नुभयो : हे अल्लाह हामीलाई मदिना त्यति नै प्रिय बनाइदेऊ जति मक्का प्रिय थियो वा त्योभन्दा पनि बढी । मदिनाको वातावरण स्वच्छ बनाइदेऊ र त्यहाँको जीविकोपार्जनमा बृद्धि गरिदेऊ । त्यहाँ रहेको ज्वरोलाई हटाएर जुह्फा नामक ठाउँमा पुऱ्याइ देऊ ।[२] अल्लाहले उहाँको दुआ सुन्यो र स्थिति परिवर्तन भइहाल्यो ।

यहाँसम्म ईशदूतको पवित्र जीवनको एउटा चरण तथा इस्लामी निमन्त्रणाको एक युग अर्थात् मक्की काल समाप्त हुन्छ ।

---

१ जादुल मआद २/५५
२ सही बुखारी हदिस १८८९,३९२६,५६५४,५६७७,६३७२

## मदनी काललाई तीन चरणमा विभाजित गर्न सकिन्छ ।

### १ प्रथम चरण

इस्लामी समाजको स्थापना र इस्लामी आह्वान सक्षम भएको चरण ।

यस चरणमा इस्लाम विरोधीद्वारा दंगाफसाद र अस्थिरता मच्चाइनुका साथै आन्तरिक अवरोध खडा गरियो । मदिनाको अस्तित्वलाई धर्तीबाट नै मेटाउन र इस्लामी आह्वानलाई जरोबाट उखेल्न वाह्य शत्रुहरूद्वारा आक्रमण भयो । अन्ततः मुसलमानहरूले विजय तथा परिस्थितिमाथि आफ्नो नियन्त्रण हासिल गरेको अवस्था अर्थात हिजरी सम्बत ८ साल जिल कअदा महिनामा भएको हुदैबिया सन्धिसँगै यो चरण समाप्त हुन्छ ।

### २ द्वितीय चरण

यस चरणमा बहुदेववादीहरूसँग सम्झौता गरिनुका साथसाथै विश्वका राजा तथा सम्राटहरूलाई इस्लामको निम्तो दिइयो । षड्यन्त्रकारी अड्डाको अन्त्य गरियो । यो चरण हिजरी सम्बत ८ साल रमजान महिनाको मक्का विजयीसँगै समाप्त हुन्छ ।

### ३ त्रितीय चरण

यस चरणमा मानिसहरू इस्लाममा हुलका हुल प्रवेश भए । यस चरणमा जात तथा कबिलाका टोलीहरूको आगमन भयो । यो चरण मुहम्मदﷺको पवित्र जीवनको अन्त्य अर्थात हिजरी सम्बत ११ साल रब्बिउल औवल महिनासम्म रहयो ।

# हिजरत गर्दा मदिनाको स्थिति

हिजरतको अर्थ हिंसा र ठट्टाको निशानाबाट छुट्कारा हासिल गर्नु मात्र नभई एउटा शान्तिपूर्ण राज्यमा एउटा नयाँ समाज निर्माणको लागि सहकार्य गर्नु पनि थियो । त्यसैले यस नयाँ राज्यको निर्माण कार्यमा भाग लिने, यसको संरक्षण सम्बर्द्धन गर्ने र यस उत्तम कार्यमा प्रयत्नशील रहने जिम्मेवारी योग्य मुसलमानहरूलाई दिइएको थियो । त्यो समाजको चित्ररेखा कोर्ने नाइके, गूरू एवं अगुवा मुहम्मदﷺ नै हुनुहुन्थ्यो भन्ने कुरा छर्लङ्ग छ । कुनै मतभेदविना सम्पूर्ण काम काजको नेतृत्व उहाँकै हातमा थियो ।

मदिनामा मुहम्मदﷺलाई तीन किसिमका जातिहरूसँग सामना थियो । उनीहरूमध्ये हरेकको स्थिति एकअर्काभन्दा एकदमै भिन्न थियो । एक जातिका अर्को जातिभन्दा फरक केही विशेष समस्याहरू थिए । ती तीन जातिहरू निम्न प्रकार छन् ।

१ मुहम्मदﷺका पवित्र साथीहरूको नवनियुक्त उच्च दल
२ मदिनाका प्राचीन एवं असली वंशका बहुदेववादीहरू जो अँझै मुस्लिम बनेका थिएनन् ।
३ यहुदीहरू

१ मोहम्मदﷺ लाई आफ्ना साथिहरूको समस्यासँग जुन प्रकारको सामना थियो त्यसको विवरण यस प्रकार छ । साथिहरूको निम्ति मदिनाको स्थिति मक्काको स्थितिभन्दा अत्यन्तै फरक थियो । मक्कामा उनीहरूको एक आवाज एक उद्देश्य भएता पनि उनीहरू विभिन्न घरहरूमा छरिएर बसेका थिए । उनीहरू पीडित अपमानित र कमजोर थिए । उनीहरू अधिकारहीन थिए । सबै अधिकार शत्रुहरूको हातमा थियो । संसारको जुनकुनै मानवीय समाज निर्माण गर्नको लागि चाहिने आवश्यक तत्वहरू मक्काका मुसलनमानहरूसित केही थिएन जसको आधारमा नयाँ इस्लामी समाजको चित्ररेखा कोर्न सकियोस् ।

त्यसकारण हामीले मक्की सुरहहरूमा इस्लामी आधारहरूको विशलेषण र हरेक व्यक्तिले व्यक्तिगत रूपमा अपनाउन सक्ने खालका आदेशहरू अवतरण गरिएको भेटाउँछौं । त्यस अतिरिक्त ती सुरहहरूमा शुभकर्म, भलाइ र उच्च आचरणप्रति प्रेरित गरिएको छ भने तुच्छ एवं घृणित कार्यबाट जोगिने आदेश दिइएको छ ।

तर मदिनामा शुरुदेखि नै मुसलमानहरूको आफ्नो सत्ता थियो । उनीहरूमाथि कसैको प्रभूत्व थिएन । त्यसैले मुसलमानहरूको लागि संस्कार, सभ्यता, अर्थतन्त्र, राजनीति र सरकारी सम्झौताहरू गर्ने, युद्ध जस्ता समास्यासँग जुध्ने र त्यसका लागि हलाल, हराम लगायत धार्मिक आचरण जस्ता जीवनका व्यवहारिक पक्षको पूर्ण रूपले निर्णय गर्ने समय आइसकेको थियो ।

मुसलमानहरूको लागि यस्तो नयाँ समाज अर्थात इस्लामी समाजको चित्ररेखा कोर्ने समय आइसकेको थियो जसमा जीवनका हरेक पक्ष अज्ञानी समाजभन्दा भिन्न होस् । विश्वमा रहेको मानवसमाजभन्दा उच्च होस् र त्यो इस्लामी संघर्षको प्रतिनिधित्व गरोस् जसको निम्ति मुसलमानहरूले १३ वर्षसम्म विभिन्न दुःख कष्टहरू भोगेका थिए ।

हामीलाई थाहा छ कुनै पनि समाजको निर्माण एक दिन एक महिना र एक वर्षमा हुन सक्दैन किन्तु यसका लागि लामो समयको आवश्यकता पर्दछ ताकि यसमा विस्तारै विस्तारै तहगत नीतिनियम लागू गर्न सकियोस् र कानून तथा नीति निर्माणकार्य अभ्यास, प्रशिक्षण र व्यवहारिक रूपमा सुसम्पन्न होस् । नीतिनियम तथा कानुन बनाउने र उपलब्ध गराउने सन्दर्भमा अल्लाह नै त्यसका मालिक थिए भने ती कानूनलाई लागू गर्ने र मुसलमानहरूलाई दिक्षा एवं मार्गनिर्देशन गर्ने कार्यमा ईशदूत मुहम्मदﷺलाई लगाइएको थियो । तसर्थ कुरआनमा भनिएको छ :

هُوَ الَّذِي بَعَثَ فِي الْأُمِّيِّينَ رَسُولًا مِنْهُمْ يَتْلُو عَلَيْهِمْ آيَاتِهِ وَيُزَكِّيهِمْ وَيُعَلِّمُهُمُ الْكِتَابَ وَالْحِكْمَةَ
وَإِنْ كَانُوا مِنْ قَبْلُ لَفِي ضَلَالٍ مُبِينٍ (الجمعة :2)

अनुवाद छ : उनैले अज्ञानीहरूमा उनीहरूमध्ये एउटा ईशदूत पठाए जसले उनीहरूलाई अल्लाहको श्लोकहरू पढेर सुनाउछ, उनीहरूलाई पवित्र बनाउँछन् र उनीहरूलाई किताब र तत्वज्ञानको तालिम दिन्छ । यिनीहरू पहिला साफ पथभ्रष्टमा थिए । (अल् जुमा:२)

अर्कोतर्फ मुहम्मदﷺका साथीहरूको ध्यान मोहम्मदﷺतर्फ केन्द्रित थियो र जुन आदेश दिइन्थ्यो त्यसै अनुरूप चल्नुमा उनीहरूलाई प्रसन्नताको अनुभूति हुन्थ्यो । जस्तै कुरआनमा भनिएको छ । जब उनीहरूसमक्ष अल्लाहका संदेशहरू पढिन्छ त्यसले उनीहरूको ईमानलाई बृद्धि गर्दछ ।

यी सम्मपूर्ण कुराको व्याख्या मेरो विषय वस्तुभित्र पर्दैन तसर्थ यस सम्बन्धमा आवश्यक कुराहरू मात्र गर्नेछु ।

जे होस् मुहम्मदﷺलाई मुसलमानसँग सम्बन्धित त्यही सबैभन्दा ठूलो समस्या थियो र त्यो नै इस्लामी आह्वान र ईश्दुतत्वको उद्देश्य पनि थियो । तर त्यो तत्काल समाधान हुने समस्या नभई एउटा दीर्घकालीन समस्या थियो । यी बाहेक तत्काल ध्यान दिइनु पर्ने अन्य समस्याहरू पनि थिए जसको संक्षिप्त विवरण यस्तो थियो ।

मुसलमानको जमातमा दुई खालका मानिस थिए । एक खाले मानिसहरूसँग आफ्नै जमिन, घर र सम्पत्ति थियो । उनीहरूलाई एक सुरक्षित घरमूलीले सोच्नु पर्ने कुराभन्दा बढि अरू कुनै कुराको फिकर थिएन । ती मानिसहरू अन्सारी जमातका थिए । उनीहरूमा परम्परादेखि नै आपसी दुस्मनी चल्दै आइरहेको थियो । उनीहरूको साथमा अर्को जमात मुहाजिरको थियो । उनीहरू हरेक सुबिधाबाट बन्चित थिए ।

दुःख कष्ट सहदै भाग्यसँग जुध्दै उनीहरू मदिना पुगे । उनीहरूसँग न बस्ने बास थियो न खाने गास । न उनीहरूसँग आफ्नो अर्थतन्त्रको संरचना खडा गर्ने धन थियो । शरण लिने मुहाजिरहरूको संख्या थोरै पनि थिएन । उनीहरूको संख्या दिन प्रतिदिन बढ्दै थियो । किनभने अल्लाहमाथि आस्था राख्नेहरूलाई मदिनातिर हिजरत गर्न सुचित गरिएको थियो । ज्ञात रहोस् मदिनामा न त अत्यधिक धन थियो न आम्दानीका स्रोत नै । तसर्थ मदिनाको आर्थिक अवस्था खस्कदै गयो । त्यही आर्थिक संकटमा इस्लामका शत्रुशक्तिहरूले पुरै मदिनामा आर्थिक नाकाबन्दी लगाई दिए जसले गर्दा परिस्थिति झन जटिल बन्दै गयो ।

२ अर्को जाति, जातिका असली बहुदेववादी वासीहरू थिए । मुसलमानमाथि उनीहरूको कुनै प्रभुत्व थिएन । केही बहुदेववादीहरू संकोचमा थिए जसले गर्दा आफ्नो बाउबाजेको धर्म छाड्न चाहेका थिएनन् । तर इस्लाम र मुसलमान विरुद्ध आफ्नो मनमा उनीहरूले कुनै कपट पनि राखेका थिएनन् र घात गर्ने दाउ पनि हेरेका थिएनन् । त्यस किसिमका मानिसहरू केही दिनमा नै मुस्लिम भए र सच्चा पक्का मुस्लिम भए ।

यस विपरित केही बहुदेववादीहरू त्यस्ता थिए जसले आफ्नो मनमा मुहम्मदﷺ र मुसलमान विरुद्ध गहिरो कपट र शत्रुता लुकाएर राखेका थिए तर सामुन्ने आउने हिम्मत भने थिएन । तर परिस्थितिले गर्दा मुहम्मदﷺसँग मायाँ तथा आत्मीयता देखाउन बाध्य थिए । उनीहरूमध्ये पहिलो नम्बरमा अब्दुल्लाह बिन उबै इब्ने सलुल थियो । ऊ त्यो व्यक्ति थियो जसलाई अवस र खजरज नामी दुइ कबिलाले बेआस नामी युद्धपछि आफ्नो नाइके बनाउन सहमति गरेका थिए जब कि त्यसभन्दा पहिला दुवै कबिलाले कसैको नेतृत्वमा सहमती गरेका थिएनन् । उसको शीरमा शाही ताज राखी उसलाई राजा घोषित गर्न मुगांको ताज तयार गरिएको थियो । ऊ मदिनाको राजा घोषित हुन लाग्दा मुहम्मदﷺ मदिना आइ पुग्नुभयो । मानिसहरू उसलाई छाडेर मुहम्मदﷺतिर लागे । त्यसकारण उसमा मुहम्मदﷺले नै मेरो राज खोसेको हो भन्ने भावना पलायो । जसले गर्दा उसले मुहम्मदﷺ विरुद्ध आफ्नो मनमा कठोर शत्रुता लुकाएर राखेको थियो । यति हुँदाहुदै पनि बदरको युद्धपछिको परिस्थिति आफु अनुकूल नपाएपछि सांसारिक नाफाबाट पनि बन्चित भइन्छ कि भन्ने डरले उसले शिर्कको हालतमा पनि देखावटी इस्लाम स्वीकारेको घोषणा गर्‍यो जब कि पर्दापछाडि उ काफिर नै थियो । त्यसकारण मुहम्मदﷺ र मुसलमान विरुद्ध बदमासी गर्ने मौका पाउँदा ऊ चुक्दैन थियो । उसको साथमा विशेष गरी ती सरदारहरू हुन्थे जो उसको राज्यका ठूलठूला पदका लागि आशा लगाइ बसेका थिए । तर उनीहरूलाई ऊबाट नै बन्चित हुनु पर्‍यो । उनीहरू उसको

सहयोगी थिए । उसको योजनालाई पूर्णता दिन सहयोग गर्थे । कहिलेकाहीँ चालाकी गरी युवक र सीधासादा मुसलमानहरूलाई यस उद्देश्यका लागि हतियार बनाउँथे ।

३ तेस्रो जाति यहुदी थियो । यिनीहरूले अशुरा र रुमी नामक जातिको अन्याय तथा अत्याचारबाट फुत्केर हेजाज भन्ने ठाउँमा शरण लिएका थिए । वास्तवमा उनीहरू अब्रानी जातिका थिए तर हेजाजमा बसोबास गरेपछि उनीहरूको भेषभूषा, भाषा र सभ्यता आदि एकदमै अरबी भइसकेको थियो । यहाँसम्म कि उनीहरूको कबिला र व्यक्तिको नाम पनि अरबीमा राख्ने गरिन्थ्यो । उनीहरू र अरबीहरूबीच वैवाहिक सम्बन्ध पनि स्थापित भएको थियो । यी सम्पुर्ण कुरा हुँदाहुँदै पनि उनीहरूमा जातिय पक्षपात बाँकी नै थियो र उनीहरू अरबीहरूसँग मिल्न सकेका थिएनन् । उनीहरूलाई आफ्नो इजरायली यहुदी जातिमाथि घमण्ड थियो जसले गर्दा उनीहरूले अरबीहरूलाई तुच्छ ठान्दथे । उनीहरूलाई उम्मी भन्थे । उम्मीको अर्थलाई उनीहरूले देहाती, खाते, जंगली, घृणित, तुच्छ र अछुतको अर्थमा लिन्थे । उनीहरूले अरबीहरूको सम्पत्ति अवैध रूपमा खान जायज ठानेका थिए । तसर्थ अल्लाहले भनेका छन् : उनीहरूले भने उम्मीको मामिलामा हामीलाई कुनै कारवाही हुने छैन । अर्थात उम्मीहरूको सम्पत्ति खाँदा हामीलाई कुनै पकड हुने छैन । यी यहुदीहरूमा आफनो धर्म प्रचारप्रसार गर्ने कुनै कियाशीलता देखिन्थेन । उनीहरूसँग धार्मिक सम्पदाको नाममा ज्योतिष,जादुगरी र झारफुक आदि बचेको थियो । यिनै कुराको आधारमा उनीहरूले आफुलाई शिक्षित बुद्धिजीवी र धर्मगुरू ठान्दथे ।

यहुदीहरू धन सम्पत्ति कमाउने कलामा बढो दक्ष थिए । अन्न, खजुर, रक्सी , कपडाको व्यापार उनीहरूको हातमा थियो । उनीहरूले अन्न, कपडा र रक्सी आयात गर्ने गर्थे भने खजुर निर्यात गर्थे । यस अतिरिक्त अन्य काममा पनि उनीहरू व्यस्त रहन्थे । व्यापारमा उनीहरूले अरबीहरूसँग दोब्बर तेब्बर नाफा लिन्थे । यतिमा मात्र अडिदैनन् थिए परन्तु व्याज पनि खान्थे । त्यसैले उनीहरूले अरबका ठूलाठाला एवं सरदारहरूलाई व्याजमा ठूलो रकम ऋण दिने गर्थे जो रकम अरबीहरूले आफ्नो प्रशंसाको गान गाउन ठूलठूला शायर तथा कविहरूमाथि आँखा चिम्लेर फजुल खर्च गर्थे । अर्कोतर्फ यहुदीहरूले ऋणको रकमको बदलामा सरदारहरूको जमिन ,खेती र बगैचाहरू धरौटी राख्थे र केही वर्ष वितेपछि त्यसलाई जफत गर्ने गर्थे ।

उनीहरू कुटनीति तथा षड्यन्त्र गर्न र हत्या हिंसाको आगो दन्काउन सिपालु थिए । कसैले सुइँको नै नपाउने गरी छरछिमेकका कबिलाहरूमा शत्रुताको आगो लगाउँथे र एकअर्काको विरुद्ध भडकाउँथे । त्यसपछि ती कबिलाहरूमा निरन्तर लडाइँ चलिरहन्थ्यो । लडाइँको आगो निभ्न नलाग्दै यहुदीहरूको गुप्तचर गतिशील हुन्थ्यो जसले गर्दा फेरि युद्ध भड्किन्थ्यो । महत्वपूर्ण कुरा के थियो भने उनीहरूले कबिलाहरूलाई आपसमा लडाएर मुकदर्शक बनी उनीहरूको विनाशकारी जात्रा हेर्थे ।

तर तिर्नै नसकिने व्याजे ऋण पनि दिन्थे ताकि आर्थिक संकटको कारण लडाइँ नरोकियोस् । यसरी उनीहरूले दोहोरो नाफा कमाउँथे । एकातर्फ यहुदीहरूले आफ्नो संगठनको संरक्षण गर्थे भने अर्कोतर्फ व्याजे कारोबारमा गिरावट आउन दिदैनन् थिए । झन व्याजको स्याज गरी अत्यधिक  धन कमाउँथे ।

यस्रिब भन्ने ठाउँमा यहुदीका तीन वटा प्रख्यात कबिला थिए ।

१ बनु कैनीका, उनीहरू खजरजका सहयोगी थिए । उनीहरूको बसोबास मदिनामा नै थियो ।

२ बनु नजिर

३ बनु कुरैजा : बनु नजिर र बनु कुरैजा अवसका सहयोगी थिए । उनीहरूको बसोबास मदिनाको वरपर थियो ।

यिनै कबिलाहरूले एक लामो अवधिदेखि अवस र खजरजबीच युद्धको आगो दन्काइरहेका थिए । बेआस नामक युद्धमा त स्वयम उनीहरू आफ्ना सहयोगीका साथ सहभागी भए ।

वास्तविक कुरा के हो भने यी यहुदीहरूसँग इस्लामलाई शत्रुताको दृष्टिले हेर्नुबाहेक कुनै आशा गर्न सकिदैन थियो । किनभने ईशदूत उनीहरूको जातिबाट आएका थिएनन् । तसर्थ उनीहरूको मन मष्तिस्कको अभिन्न अंग बनेको जातीय पक्षपातले गर्दा उनीहरूलाई शान्ति थिएन । अर्को कुरा इस्लामको आवाज एक पवित्र आवाज थियो जसले विच्छेद मनलाई जोड्ने, शत्रुताको आगो निभाउँने र सम्पूर्ण व्यवहारमा इमानदारी अपनाउने र पवित्र एवं हलाल माल खाने बानीको विकास गर्दथ्यो । त्यसका आधारमा यस्रिबका कबिलाहरू आपसमा मिल्ने र यहुदीहरूको पंजाबाट मुक्त हुने भए । उता यहुदीहरूको व्यापार ठप्प हुने भयो र उनीहरू त्यो व्याजे मालबाट बन्चित हुने भए जसमा उनीहरूको धनको जातो घुमेको थियो । उनीहरूलाई कतै यी कबिलाहरू जागे भने उनीहरूसँग त्यत्तिकै लिइएको आफ्नो व्याजे मालको हिसाब खोज्ने त होइनन् भन्ने डर पनि थियो र यसै गरी व्याजको सट्टा कब्जा गरेका जमिन बगैंचा पनि फिर्ता लिन्छन् कि भन्ने ती यहुदीहरूलाई डर थियो ।

इस्लामी आह्वानले यस्रिबमा आफ्नो ठाउँ बनाउन चाहेको छ भन्ने कुरा यहुदीहरूलाई थाहा भएपछि उनीहरू ती सम्पूर्ण कुरा बारे चिन्तित् बन्न थाले । त्यसकारण मुहम्मद ﷺ मदिना आएदेखि नै उनीहरूलाई इस्लाम र मुसल्मानसित कठोर दुस्मनी हुन थाल्यो । धेरै समयपछि दुस्मनीको प्रदर्शन गर्ने हिम्मत पनि गरे । त्यो कुरा इब्ने इस्हाकले वर्णन गरेको एउटा घटनाबाट प्रष्ट हुन्छ ।

उनको बयान छ, मलाई सुफिया बिन्ते हैइ बिन अख्तब्बाट यो कुरा थाहा भएको हो । उनी भन्छिन् .म आफ्नो बुवा र काका अबु यासिरको नजरमा सबैभन्दा

प्यारी छोरी थिएँ । म बुवा र काकासँग उनका अन्य सन्तानका साथमा हुँदा पनि उनीहरूले मलाई नै लिन्थे । जब मुहम्मदﷺ कुबामा अमर बिन औफ कहाँ आउनुभयो तब मेरा बुवा र काका अबु यासिर उहाँलाई स्वागत गर्न विहानै गएर सूर्य अस्ताउने बेलामा आए । उनीहरू थाकेका थिए । म लडिबुडि खेल्दै चुलबुले चालमा पहिला झैं उनीहरूतिर दौडें तर उनीहरू धेरै दुखित भएका कारण कसैले पनि मतिर हेरेनन् । मैले आफ्नो काकालाई भनेको सुनें , उनले मेरो बुबा हुयै बिन अख्तबसँग सोधे । के यिनी अर्थात ईशदूत तिनै हुन ? उनले जवाफ दिए, हुन् । अल्लाहको कसम हुन् । काकाले सोधे के तपाँइले उनलाई राम्रोसँग चिन्नु भएको छ ? बुवाले भन्नु भयो, अँ । काकाले सोधे तपाँइको मनमा उनीप्रति के विचार छ ? बुवाले भने , अल्लाहको कसम बाँचुन्जेल शत्रु बन्ने छु ।[१]

यसको प्रमाण बुखारीको त्यो हदिसमा पनि भेटिन्छ, जसमा अब्दुल्लाह बिन सलाम मुस्लिम भएको घटना वर्णन गरिएको छ । उनी एक महान यहुदी विद्वान थिए । उनले बनु नज्जारकहाँ मुहम्मदﷺ आएको थाहा पाएपछि उहाँलाई स्वागत गर्न उनी तुरून्तै हाजिर भए । उनले मुहम्मदﷺसँग केही यस्ता प्रश्नहरू गरे जसको जवाफ ईशदूतलाई मात्र थाहा हुन्छ । उनले मुहम्मदﷺबाट प्रश्नको जवाफ पाएपछि उनी त्यहीँ त्यतिखेरै मुसलमान भए । त्यसपछि उनले मुहम्मदﷺलाई भने । यहुदी आरोप प्रतियारोप लगाउने एउटा जाति हो । तपाईले केही भन्नुभन्दा पहिला यदि उनीहरूलाई मैले इस्लाम स्वीकारेको कुरा थाहा भयो भने उनीहरूले तपाईसँग मेरो बारेमा नराम्रो आरोप लगाउने छन् । तसर्थ मुहम्मदﷺले एक जना यहुदीलाई बोलाउन पठाउनुभयो । ऊ आयो । यता अब्दुल्लाह बिन सलाम घरभित्र लुकेर बसेका थिए । मुहम्मदﷺले यहुदी व्यक्तिसँग अब्दुल्लाह बिन सलामको बारेमा उनी तिमीहरूको बीचमा कस्ता व्यक्ति हुन् भनी सोध्नुभयो ? उसले जवाफ दियो : उनी हाम्रा महान विद्वान हुन, सबैभन्दा ठूला विद्वानको छोरा हुन । हामीमा सबैभन्दा असल व्यक्ति हुन् र सबैभन्दा असल व्यक्तिका छोरा हुन् । एक अर्को हदिसमा यस्ता शब्द छन् : उनी हाम्रा सरदार हुन्, हाम्रा सरदारका छोरा हुन् । एक अर्को हदिसमा यस्ता शब्द छन् : उनी सबैभन्दा असल व्यक्ति हुन् , असल व्यक्तिका छोरा हुन् । हामीमा सबैभन्दा उत्तम र सबैभन्दा उत्तम व्यक्तिको छोरा हुन् । मुहम्मदﷺले सोध्नुभयो, यदि अब्दुल्लाह मुसलमान भयो भने ? यहुदी व्यक्तिले दुई तीन पटक भन्यो अल्लाहले उसलाई यसबाट बचाओस् । त्यसपछि अब्दुल्लाह बिन सलाम आए र उनले भने : म गवाही दिन्छु कि अल्लाहबाहेक कोही पुजनीय छैन र मुहम्मदﷺ ईशदूत र उनका उपासक हुन् । यति कुरा सुन्ना साथ यहुदी व्यक्ति बोल्न थाल्यो । यो व्यक्ति हामीमा

---

१ इब्ने हेशाम १/५१८

सबैभन्दा घृणित व्यक्ति हो, सबैभन्दा घृणित व्यक्तिको छोरा हो । त्यतिखेरै उसले उनको खराबी वयान गर्न थाल्यो । एक हदिसमा छ, अब्दुल्लाह बिन सलामले त्यसको जवाफमा भने : हे यहुदी जमात अल्लाहसँग डराऊ । त्यो अल्लाहको कसम जसबाहेक कुनै पुजनीय छैन । तिमीलाई थाहा छ मुहम्मदﷺ अल्लाहका दूत हुन् र उनले सत्य लिएर आएका छन् । यहुदीहरूले भने तिमी झुटो कुरा गर्दैछौ । [१]

यहुदीहरू बारे मुहम्मदﷺलाई यो पहिलो अनुभव थियो र यस्तो अनुभव मदिनामा प्रवेश गरेको पहिलो दिन नै भयो ।

यहाँसम्म जेजति उल्लेख गरियो त्यो मदिनाको आन्तरिक स्थितिको बारेमा थियो । मदिनाबाहिर मुसलमानहरूको ठूलो शत्रु कुरैश थियो । मुसलमानहरू उनीहरूको अण्डरमा हुँदा उनीहरूले १३ वर्षसम्म आतंक मच्चाउने, धम्काउने र सताउने लगायतका सम्पूर्ण हतकण्डाहरू प्रयोग गरिसकेका थिए । विभिन्न खालका दुःख र पीडा दिइरहेका थिए । ठोस एवं वृहत षड्यन्त्र र अत्यन्तै संयमित तथा मनोवैज्ञानिक जुक्तिहरू पनि प्रयोग गरेका थिए । मुसलमानहरूले मदिनातर्फ हिजरत गरेपछि कुरैशले उनीहरूको घरजमिन,धनसम्पत्ति सबै कुरा जफत गर्नुका साथै मुसलमान र उनका परिवारबीच अवरोध खडा गरे । जसलाई भेटाउँथे कैद गरेर विभिन्न खालका दुःख कष्टहरू दिन्थे । यतिमा मात्र अडिएनन् इस्लामी आह्वानका नाइके मुहम्मदﷺको हत्या गर्न र इस्लामी आह्वानलाई जरोदेखि उखेल्न भयभीत षड्यन्त्र गरे र त्यसलाई व्यवहारिक रूप दिन आफ्नो सम्पूर्ण सामर्थ्य खर्चे । मुसलमान जसरी तसरी आफ्नो बचाव गरी ५०० किलो मिटर दुरीमा अवस्थित मदिनाको भूमिमा गएपछि कुरैशले आफ्नो नेकनामीको फाइदा उठाएर फोहर राजनीतिको खेल शुरू गरे । किनभने उनीहरू मक्कावासी एवं काबाका छिमेकी भएको नाताले अरबवासीको धार्मिक नेतृत्व र विश्वव्यापी राजको अधिकार पनि उनीहरूसँग थियो । त्यसैले उनीहरूले अरब टापुका अन्य बहुदेववादीहरूलाई भड्काएर मदिनामा पूर्ण रूपले नाकाबन्दी लगाएका थिए । तसर्थ मदिनामा आयात कम र शरण लिने मुहाजिरहरूको संख्या दिन प्रतिदिन बढ्दै गयो । वास्तवमा मक्काका यी दुष्टहरू र मुसलमानको नयाँ प्रदेशबीच युद्धको स्थिति शुरु भइसकेको थियो । यस झगडाको आरोप मुसलमानमाथि लगाउनु मुर्खतापूर्ण कुरा हुनेछ । जसरी ती दुष्टहरूले मुसलमानहरूको धनसम्पत्ति कब्जा गरेका थिए त्यसरी नै मुसलमानहरूलाई पनि तिनीहरूको धनसम्पत्ति कब्जा गर्ने अधिकार थियो, जसरी उनीहरूलाई सताइएको थियो त्यसरी नै ती दुष्टहरूलाई सताउने अधिकार थियो, जसरी मुसलमानहरूको अगाडि बाधा तथा तगारो हालिएको थियो दुष्टहरूको

१ सही बुखारी १/४५१,५५६

जीवनमा पनि अवरोध खडा गर्ने अधिकार थियो, ती दुष्टहरूलाई जस्ताको तस्तै बदला दिने अधिकार मुसलमानहरूलाई पनि दिइएको थियो । कारण, तिनीहरूले मुसलमानलाई नाश गर्ने र मुसलमानको जरो उखेल्ने मौका नपाउन् ।

यी थिए ती समस्याहरू जसको सामना मुहम्मदﷺले मदिना आएपछि ईशदूत,पथप्रदक,धर्मगुरू र नाइकेको हैसियतले गर्नु परेको थियो यी समस्याहरूलाई निप्टाउन मदिनामा मुहम्मदﷺले ईशदूत तथा धर्मगुरूको हैसियतले भूमिका खेल्नुभयो । जुन जातिहरूसँग नम्र वा कठोर जुन व्यवहार गर्नु पर्ने थियो उनीहरूसँग त्यही व्यवहार गर्नुभयो । यो ध्रुवसत्य कुरा हो उहाँको कडापनमा पनि सदा दया एवं मायाको प्रबल्ता हुन्थ्यो । केही वर्षपछि सत्ता इस्लाम र मुसलमानको हातमा आयो । अगाडिको पृष्ठहरूमा पाठकहरूको सामु तीनै कुराहरूको विवरण प्रस्तुत गरिने छ ।

## नयाँ समाजको रूपरेखा

हामीले उल्लेख गरिसकेका छौ, मुहम्मदﷺ मदिनामा बनु नज्जारकहाँ हिजरी सम्बत १ साल १२ रब्बीअल औवल शुक्रवार तद्नुसार इस्वी सम्बत ६२२ सेप्टम्बर २७ तारिखको दिन अबु ऐयुबको घरअगाडि पधार्नुभएको थियो । त्यति बेला उहाँले भन्नुभएको थियो यदि अल्लाहले चाहयो भने यो नै मेरो गन्तव्य हुनेछ । त्यसपछि मुहम्मदﷺ अबु ऐयुबको घरमा सर्नुभयो ।

### मस्जिद नबवीको निर्माण

ईशदूत मुहम्मदﷺको पहिलो काम मस्जिद नबवीको निर्माणकार्य आरम्भ गर्नु थियो । त्यसको लागि उहाँले त्यो ठाउँ रोज्नुभयो जहाँ उहाँको ऊँटनी बसेको थियो । त्यो जग्गाका धनी दूई टुहुरा केटाहरू थिए । उहाँले उनीहरूसँग त्यो जग्गा नगदी पैसामा किन्नुभयो र स्वयम आफै मस्जिदको निर्माणकार्यमा सहभागी हुनुभयो । उहाँले इँटाढुंगा ओसार्दै भन्ने गर्नुहुन्थ्यो :

اللهم لا عيش إلا عيش الآخرة     فاغفر للانصار والمهاجرة

अनुवाद छ : हे अल्लाह जीवन त केवल प्रलोकको जीवन हो, तसर्थ अन्सार र मुहाजिरहरूलाई क्षमा गरिदेऊ ।

फेरि उहाँले भन्नुभयो :

هذا الحمال لا حمال خيبر     هذا ابر ربنا واطهر

अनुवाद छ : यो भारी खैबरको जस्तो भारी होइन । हाम्रा पालनकर्ताको कसम यो त धेरै असल र पवित्र छ ।

मुहम्मदﷺको त्यो कुराबाट उहाँका साथीहरूको जोशजाँगर र क्रियाशीलतामा झन्झन् बृद्धि हुन्थ्यो । त्यसैले साथीहरूले भन्ने गर्थे :

لئن قعدنا والنبى يعمل     لذاك منا العمل المضلل

अनुवाद छ : हामी बसिराख्ने र ईशदूतले काम गरिराख्ने भयो भने यो अति नराम्रो काम हुनेछ ।

त्यस ठाउँमा बहुदेववादीहरूको केही चिहान र केही विरानो जग्गा पनि थियो । खजुर र गर्कदका केही रूख पनि थिए । अल्लाहका दूतले बहुदेववादीहरूको चिहान हटाउन भन्नुभयो । विरानो ठाउँलाई नष्ट गराई दिनुभयो । खजुर र अन्य रूखहरू काटेर किब्लादिशातिर लगाइ दिनुभयो । त्यति बेला किब्ला बैतुल मक्दिस थियो । ढोकाका दुवै चौखट ढुगांको बनाइयो । गारो काँचो इँटा र माटोको लगाइयो । छत खजुरको डाली र पातको लगाइयो । खामो खजुरको गाडियो । भूइँमा बालुवा र ससाना गिटी बिछाइयो । त्यसमा तीन वटा ढोका राखियो । किब्लातर्फको गारोबाट पछाडिको गारोसम्म १ सय हात लम्बाइ थियो । चौडाइ पनि त्यति नै वा त्यो भन्दा

अलि कम थियो । जग तीन हात गहिरो थियो । मुहम्मदﷺले मस्जिदको वरिपरि केही घरहरू पनि बनाइदिनु भयो जसको गारो काँचो इँटाको र छतमा खजुरको कडी हालेर खजुरको डाली र पातबाट बनाइएको थियो । यिनै घरमा उहाँका श्रीमतीको कोठा थियो । यी कोठाहरू बनी सकेपछि उहाँ अबु ऐयुबको घरबाट त्यहाँ सर्नुभयो ।[1]

मस्जिद केवल नमाज पढ्नको लागि मात्र थिएन त्यो एउटा मदर्सा पनि थियो जहाँ मुसलमानहरूले इस्लामी शिक्षा र आज्ञाका पाठ हासिल गर्ने गर्थे । त्यो एउटा सभागृह थियो जहाँ पुरानो द्वन्द हिंसा र आपसी लडाइँबाट चेत पाएका कबिलाका व्यक्तिहरू आपसमा मेलमिलाप गर्ने गर्थे । त्यो एउटा राजकेन्द्र पनि थियो जहाँबाट अन्य राज्यको सम्पूर्ण व्यवस्था चलाइन्थ्यो साथसाथै विभिन्न किसिमका टोलीहरू पनि पठाइन्थ्यो । यस अतिरिक्त त्यसको हैसियत एउटा सदन भवनको पनि थियो जहाँ सल्लाहकारहरूको सभा चल्थ्यो । यी सम्पूर्ण कुराहरूका साथ साथै त्यो मस्जिदमा गरिब मुहाजिरहरूको एउटा ठूलो संख्याको बास पनि थियो जसको न त्यहाँ कुनै घर थियो न सम्पत्ति । न त्यहाँ उनीहरूको परिवार नै थियो ।

हिजरतको शुरुमा नै अजानको सुत्रपात भयो । यो एउटा इश्वरीय गान थियो जुन हरेक दिन पाँच चोटि आकाशको क्षितिजमा गुन्जन्थ्यो । यसबाट सारा संसार थर्कमान हुन्थ्यो । यसले हरेक दिन पाँच चोटि अल्लहबाहेक कोही पुजनीय हस्ती छैन र मुहम्मदﷺअल्लाहका दूत हुन् भनी सूचना दिन्थ्यो । त्यसले अल्लाहको महानताबाहेक सम्पूर्ण महानतालाई नकार्थ्यो भने अल्लाहका दूतले ल्याएको धर्मबाहेक संसारमा रहेका अन्य सम्पूर्ण धर्मलाई नकार्थ्यो । यस गानलाई सपनामा देख्ने सौभाग्य मुहम्मदﷺका एक जना साथी अब्दुल्लाह बिन जैद बिन अब्दुर्रब्बहलाई प्राप्त भएको थियो । मुहम्मदﷺले त्यसलाई स्थायी गरिदिनुभयो । त्यही सपना उमर बिन खत्ताबले पनि देखेका थिए ।[2]

## मुसलमानमा भाइबन्धुत्व

जसरी मुहम्मदﷺले मस्जिद नबवी निर्माण गरेर आपसी सभा गर्ने एक सम्मेलन केन्द्र बनाउनुभएको थियो त्यसरी नै उहाँले मानवीय इतिहासको एकअर्को अत्यन्तै उच्च कृतिमान पनि कायम गर्नुभयो जसलाई मुहाजिर र अन्सारबीचको भाइबन्धुत्वको नाम दिइन्छ । इबने कैयम लेख्छन् (मुहम्मदﷺले अनस बिन मालिकको घरमा मुहाजिर र अन्सारबीच भाइबन्धुत्वको सम्बन्ध स्थापित गराउनुभएको थियो । आधा मुहाजिर र आधा अन्सार गरी उनीहरू जम्मा ९० जना थिए । एक अर्काको

१ सही बुखारी भाग नं १/७१,५५५ जादुल मआद भाग २/५६
२ तिर्मिजी भाग नं १/३५८, अबुदाउद, अहमद आदि

दुःखसुख हेर्ने र मृत्यूपश्चात रगतको नातालाई त्यागी उनीहरू नै एकअर्काका अंशियारा हुने भन्ने यस भाइबन्धुत्वको आधार थियो । अंशबण्डाको यो आदेश बदरको युद्धसम्म कायम रह्यो । पछि यो आयत अवतरण भयो : रगतका नातेदारहरू अंशमा एकअर्काका बढी हकदार छन् । त्यसपछि अन्सार र मुहाजिरबीच एकआपसमा अंशीयारा बन्ने आदेश वदर भयो तर भाइबन्धुत्वको सम्बन्ध भने कायमै रह्यो । भनिन्छ, मुहम्मदﷺले मुहाजिरहरूका बीचमा पनि भाइबन्धुत्वको सम्बन्ध स्थापित गराउनुभएको थियो तर अघिल्लो कुरो नै प्रमाणित छ । हुन त मुहाजिरहरूलाई आफ्नो आपसी इस्लामी भाइचारा, राष्ट्रिय भाइचारा र नाताकुटुम्बको कारण अब अधिक कुनै नाताको आवश्यकता थिएन तर मुहाजिर र अन्सारको समस्या भने त्यो भन्दा केही फरक थियो ।[१]

यस भाईचाराको उद्देश्य पूरानो पक्षपातको अन्त्य गर्नु र वंश, रंग र देशको भेदभावको अन्त्य गर्नु र मित्रता र एकताको आधार इस्लाम बाहेक केही नहोस् भन्ने थियो । यस भाइचारामा एकले अर्कालाई आफूमाथि प्राथमिकता दिने, दुःखसुखमा एकअर्कालाई हेर्ने र उपकार गर्ने भावना जोडिएको थियो । फलस्वरूप यसले नयाँ समाजलाई अति आदर्श र उज्वल कृतिले भरिदियो । तसर्थ सही बुखारीमा वर्णन गरिएको छ । मुहाजिरहरू मदिना आएपछि मुहम्मदﷺले अब्दुर्रहमान बिन औफ र सअद बिन रबीअबीच भाइचाराको सम्बन्ध गाँसिदिनुभयो । त्यसपछि सअदले अब्दुर्रहमानसित भनेः अन्सारमध्ये म सबैभन्दा धनी छु । तपाईँ मेरो धनलाई दुई भाग लगाई आधा लिनुहोस् र मेरी दुइटी श्रीमतीमध्ये हेरेर जुन तपाईँलाई मन पर्छ मलाई भन्नु म उसलाई विवाह विच्छेद गरिदिन्छु इद्दत सकिएपछि उसँग विवहा गर्नुहोस् । अब्दुर्रहमानले जवाफमा भने, अल्लाहले तपाईँको परिवार र धनमा कृपा दृष्टि गरून् । यहाँ तपाईँको हाट बजार कहाँ लाग्छ ? मान्छेहरूले उनलाई बनु कैनीकाअको बजारको बारेमा बताए । उनी फर्केर आउँदा उनीसँग केही पनिर र घिउ थियो । त्यसपछि उनी हरेक दिन जानेआउने गरे । एक दिन उनी आउँदा उनमा अलिअलि पहेलो रंगको असर देखियो । मुहम्मदﷺले सोध्नुभयो, यो के हो ? उनले भने : मैले विवाह गरेँ । मुहम्मदﷺले भने बेहुलीलाई महर कति दियौ ? उनले जवाफमा भने : सवा तोला सुन ।[२]

त्यसैगरी अबु हुरैराद्वारा वर्णन गरिएको एक हदिसमा छ (अन्सारले ईशदूतसँग भनेः तपाईँले हामी र हाम्रा भाइहरूबीच यी खजुरका बगैँचाहरू बाँडिदिनुहोस् । मुहम्मदﷺले हुँदैन भनी जवाफ दिनुभयो । अन्सारले मुहाजिरहरूसँग भनेः त्यसो भए

---

१ जादुल मआद भाग नं २/५६
२ सही बुखारी भाग नं १/५५३

तपाईंहरूले हाम्रो काम गर्नुहोस् र फलफूलमा हामी तपाईंहरूलाई साझेदार बनाउँने छौ । उनीहरूले भने, ठीक छ हामी तयार छौं । [१]

अन्सारहरूले कति अगाडि सरेर आफ्ना मुहाजिर दाजुभाइहरूको सम्मान एवं आदर गरेका थिए र कति माया प्रेम र योगदान दिएका थिए भन्ने कुरा यसबाट प्रष्ट हुन्छ । मुहाजिरहरूले पनि अन्सारहरूले लगाएको गुणको सम्मान गरे तसर्थ उनीहरूले त्यसबाट केही गलत फाइदा उठाएनन् । उनीहरूले अन्सारसँग आफ्नो खसेको अर्थतन्त्रलाई उभो लगाउन सक्ने जति मात्र माल लिए । वास्तवमा भाइचारा एक उत्तम तरीका, तत्वदर्शी नीति र मुसलमानहरूले भोगेका समस्याको लागि एउटा सर्वोत्कृष्ट समाधान थियो ।

## इस्लामी सहयोगका करारहरू[२]

माथि उल्लेख भाइबन्धुत्व झैं मुहम्मदﷺले अर्को सम्झौता पनि गराउनुभयो । त्यसबाट सम्पूर्ण पूर्वाग्रही द्वन्द्व र जातीय द्वन्द्वको जरो नै काटियो र पूराना प्रथालाई उहाँले कुनै स्थान दिनुभएन । तल यस सम्झौतालाई यसका बुँदा सहित संक्षिप्तमा प्रस्तुत गरिदै छ ।

यो सम्झौता मुहम्मदﷺद्वारा कुरैशी, यस्रिबी र उहाँको मातहतमा रहेकाहरू र जिहाद गर्ने मुस्लिम र आम मुसलमानहरूबीच गरिएको थियो :

१. उनीहरू अन्य मानिसहरूभन्दा फरक पहिचानको एक अलग समुदाय हुनेछन् ।

२. कुरैशका मुहाजिरहरूले पहिला झैं आपसमा जरिमाना तिर्नेछन् र मोमिनहरूलाई न्यायोचित तरिकाले आफ्ना बन्दीहरूको जरिमाना तिर्नेछन् र अन्सारका सबै कबिलाले पहिला जस्तै आपसमा जरिमाना तिर्नेछन् र उनीहरूको हरेक समूहले मोमिनहरूलाई न्यायोचित तरिकाले आफ्ना बन्दीहरूको जरिमाना तिर्नेछ ।

३. मोमिनहरूले आफ्नो साथमा रहेका कुनै पनि पीडित व्यक्तिलाई जरिमानाको मामिलामा कृपादृष्टि गर्ने छन् ।

४. सम्पूर्ण बुद्धिजिवी मुसलमानहरू आफुहरूमाथि अत्याचार गर्ने व्यक्तिको विरुद्धमा हुनेछन् र त्यो व्यक्तिको पनि विरुद्धमा हुने छन् जो मोमिनहरूको बीचमा अपराध, विसंगति, जियादती र विध्वंश मच्चाउने खोजीमा हुनेछ, चाहे त्यो व्यक्ति उनीहरूमध्ये कसैको छोरा नै किन नहोस् ।

---

१ सही बुखारी भाग नं १/२१३

२ त्यो सम्झौता समाजको संरचना तथा निर्माणको मध्यस्थ चरण थियो । किनभने इस्लामले मुसलमानलाई आपसमा यति बलियोसँग संगठित गरिसकेको थियो कि अब उनीहरुमा कुनै सम्झौताको आवश्यकता रहेन बरु इस्लामले निर्धारण गरेको अधिकार नै सहयोगको लागि प्रयाप्त थियो । यस हदिसको अर्थ पनि यै हो कि इस्लाममा कुनै सम्झौता छैन र यदि अज्ञानीमा कुनै सम्झौताको आवश्यकता भए इस्लामले अझैं बलियो बनाउँने छ । सही मुस्लिम

५. न कुनै मोमिनले कुनै मोमिनलाई नास्तिकको बदलामा हत्या गर्नेछ न कुनै मोमिनको विरुद्धमा कुनै नास्तिकको सहयोग गर्नेछ ।
६. इश्वरको सम्झौता एक हुनेछ । एक साधारण व्यक्तिले दिएको बचन पनि सबै मुसलमानहरूका लागि मान्य हुनेछ ।
७. जुन यहुदीहरूले हाम्रो अनुशरण गर्नेछन् उनीहरूको सहयोग गरिनेछ । उनीहरू अन्य मुसलमान सरह हुनेछन् । उनीहरूमाथि न त अत्याचार गरिनेछ न उनीहरूको विरुद्धमा कसैको सहयोग गरिनेछ ।
८. मुसलमानहरूको सम्झौता एक हुनेछ । कुनै मुसलमानले कुनै मुसलमानलाई त्यागेर जिहादको मामिलामा सम्झौता गर्ने छैन । तसर्थ सबैले समान र न्यायको आधारमा नै कुनै सम्झौता गर्ने छन् ।
९. मुसलमान त्यो रक्तपातमा एकअर्कासँग समान हुनेछन् जुन अल्लाहको बाटोमा गरिनेछ ।
१०. कसैले कुरैशका बहुदेववादीहरूको जनधनको संरक्षण दिन पाउने छैन र मोमिनको अगाडि उनीहरूको संरक्षणको निम्ति बाधा पनि बन्ने छैन ।
११. कसैले मोमिनको हत्या गऱ्यो र त्यसको प्रमाण पनि भेटियो भने उसँग त्यसको बदला लिइने छ तर हत्या गरिएको व्यक्तिका अभिभावकले माफ गरेको खण्डमा माफ हुनेछ ।
१२. सबै मोमिनहरू त्यसको विरुद्धमा हुने छन् । उनीहरूको लागि त्यसको विरोधमा खडा हुनु बाहेक अन्य कुनै विकल्प हुनेछैन ।
१३. कुनै मोमिनको लागि कुनै विध्वशंकारीलाई सहयोग गर्नु र शरण दिनु जायज हुने छैन ।
१४. जसले त्यसको सहयोग गर्छ र त्यसलाई शरण दिन्छ त्यसमाथि महाप्रलयको दिन अल्लाहको निन्दा र दण्ड हुनेछ र उसले गरेको अन्य पुण्यहरू पनि केही काम लाग्ने छैनन् ।
१५. तिमीहरूबीच जुनसुकै मतभेद भए पनि त्यो कुरा अल्लाह र मुहम्मदﷺमाथि छाडिने छ ।[1]

१ इब्ने हेशाम भाग १/५०२

## समाजमा आध्यात्मिक प्रभाव

यस उत्तम युक्ति र दुरदर्शीताका कारण मुहम्मदﷺले एउटा नयाँ समाजको जग बसाल्नुभयो । समाजको वाह्य स्वरूप वास्तवमा त्यसको आन्तरिक विशेषताको प्रतीक थियो । यसबाट मुहम्मदﷺको साथमा रहेका बुजरुक हस्तिहरू लाभान्वित भए । मुहम्मदﷺ उनीहरूको तालिम, शिक्षादिक्षा, आमशुद्धता र उच्च आचरणको लागि सदैव प्रयत्नशील रहनु हुन्थ्यो । उनीहरूलाई भाइबन्धुत्व,आदर, उपासना लगायत आज्ञाकारीताको नीतिनियमको पाठ निरन्तर पढाउनु हुन्थ्यो ।

मुहम्मदﷺका एक जना साथीले उहाँसँग सोधे, कुन खालको इस्लाम राम्रो छ ? अर्थात इस्लाममा कुन कर्म सबैभन्दा राम्रो छ ? उहाँले भन्नुभयोः खाना खुवाऊ र ठूला साना सबैलाई सलाम गर ।[१]

अब्दुल्लाह बिन सलाम भन्छन्, मुहम्मदﷺ मदिना आएपछि म उहाँलाई भेट्न आएँ । मैले उहाँको अनुहारलाई राम्रोसँग नियालेँ । यो कुनै झुटो व्यक्तिको अनुहार हुन सक्तैन भन्ने कुरा मैले बुझेँ । मुहम्मदﷺले भन्नु भएको पहिलो कुरा थियो : हे जनसमुदाय सलामलाई आम गर, खाना खुवाऊ, माया प्रेम गर र मध्यरातमा नमाज पढ स्वर्गमा शान्तिका साथ प्रवेश गर्नेछौ ।[२]

मुहम्मदﷺले भन्नुभयो त्यो व्यक्तिले स्वर्गमा प्रवेश पाउने छैन जसको नकारात्मक गतिविधि र अपराधबाट उसका छिमेकी सुरक्षित छैनन् । [३]

मुसलमान त्यो हो जसको बोलीव्यवहारबाट मुसलमान सुरक्षित रहन्छन् ।[४] तिमीहरूमध्ये कुनै व्यक्ति तबसम्म मुसलमान हुन सक्तैन जबसम्म उसले अर्काको लागि त्यो चीज मन पराउँदैन जुन स्वयम आफ्नो लागि मन पराउँछ ।[५] मुसलमान एउटा शरीर सरह हुन्, जस्तै आँखामा चोट लाग्दा पूर्ण शरीरमा दुखाइको अनुभव हुन्छ र टाउको दुख्दा पूर्ण शरीरमा दुखाइको अनुभव हुन्छ ।[६]

उहाँले अरू भन्नुभयो : मोमिन मोमिनको लागि भवनका इँटा सरह हुन् जसले एकअर्कालाई आड दिइरहेको हुन्छ ।[७] आपसी रिस नराख, आपसी डाह नगर,

१ सही बुखारी भाग नं १/६,९
२ तिर्मिजी, इब्ने माजा, दारमी, मिश्कात १/२६८
३ सही मुस्लिम,मिश्कात भाग नं २/४२२
४ सही बुखारी भाग नं १/६
५ सही बुखारी भाग नं १/६
६ सही मुस्लिम,मिश्कात भाग २/४२२

७ सही मुस्लिम, बुखारी,मिश्कात भाग २/४२२,बुखारी भाग २/८९०

एक अर्कासँग सम्बन्ध विच्छेद नगर, अल्लाहका उपासक र आपसमा भाइभाइ बनी बस । कुनै पनि मुसलमानलाई आपसमा तीन दिनभन्दा बढी सम्बन्ध विच्छेद गर्नु जायज छैन ।[१] मुसलमान मुसलमानका भाई हुन्, ऊमाथि अत्याचार नहोस्, उसलाई शत्रुको हवाला नगरियोस् । जसले एक अर्काको समस्या समाधान गर्छ अल्लाहले उसको समस्या समाधान गर्दछन्, जो कुनै मुसलमानको दुःखमा काम आउँछ अल्लाहले प्रलयको दिन उसको दुःख हटाइ दिनेछन् जसले कुनै मुसलमानको गोप्यतालाई गोप्य राख्छ अल्लाहले प्रलयको दिन उसका गोप्य कुरा गोप्य राख्नेछन् ।[२]

तिमीहरू धर्तीवासीमाथि दया गर अल्लाहले तिमीमाथि दया गर्नेछन् ।[३]

त्यो व्यक्ति मुसलमान हुन सक्तैन जसले पेटभरी खान्छ तर उसको छिमेकी भोकै हुन्छ ।[४]

मुसलमानसित झगडा गर्नु अवज्ञ छ र उसको हत्या गर्नु कुफ्र हो ।[५]

त्यसैगरी मुहम्मदﷺले बाटोबाट कुनै दुःखदायी वस्तु हटाउनुलाई दानको संज्ञा दिनुभयो र त्यसलाई इमानको एक अंगको रूपमा मान्नुभयो ।[६]

उहाँले सदका एवं खैरात गर्न प्रेरित गर्नुहन्थ्यो । उहाँले त्यसको बारेमा मनै लोभ्याउने महत्व बताउनु हुन्थ्यो । तसर्थ उहाँले भन्नुभयो : सदकाले मानिसको पाप त्यसरी नै नष्ट गर्दछ जसरी पानीले आगो । [७]

उहाँले भन्नुभयो : एक मुसलमानले अर्को मुसलमानलाई कपडा दियो भने अल्लाहले प्रलयको दिन उसलाई स्वर्गको कपडा दिनेछन् र जसले कुनै भोका मुसलमानलाई खाना खुवायो भने अल्लाहले प्रलयको दिन उसलाई स्वर्गको फलफूल खुवाउने छन् । जसले कुनै मुसलमानलाई पानी पिलायो भने प्रलयको दिन अल्लाहले उसलाई स्वर्गमा सिल लागेको पवित्र पानी पिलाउने छन् ।[८]

उहाँले भन्नुभयो : खजुरको एउटा टुक्रा सदका गरेर भए पनि आगोबाट बच । यदि त्यो पनि छैन भने नम्र बोली बोलेर आगोबाट बच ।[९]

---

१ सही बुखारी भाग २ /८९६
२ सही मुस्लिम, बुखारी,मिश्कात भाग २/४२२
३ सुनन अबु दाऊद भाग २/३३५, तिर्मिजी भाग २/१४
४ मिश्कात भाग २/४२२
५ सही बुखारी भाग २/८९३
६ सही बुखारी, मुस्लिम, मिश्कात भाग १/१२,१६७
७ अहमद, तिर्मिजी,इब्ने माजा, मिश्कात भाग १/१४
८ सुनन अबु दाउद, तिर्मिजी, मिश्कात भाग १/१६९
९ सही बुखारी भाग १/१९०

यसका साथसाथै अर्कोतर्फ उहाँले माग्नबाट बच्न ठूलो जोड दिनुभयो । उहाँले धैर्यधारणको महत्व बताउनुभयो । उहाँले भन्नुहुन्थ्यो : माग्नेहरूको अनुहारमा दाग लाग्दछ[1] तर यसबाट ती व्यक्तिहरू अलग छन् जुन अत्यन्तै पीडित एवं गरिब छन् ।

यसैगरी उहाँले विभिन्न उपासनाको महत्व पनि बताउनु हुन्थ्यो । अल्लाहकहाँ त्यसको पुण्य र प्रतिफलको बारेमा पनि बताउनु हुन्थ्यो । उहाँमाथि आकाशबाट जुन संदेश अवतरण हुन्थ्यो त्यसको आधारमा मुसलमानहरूलाई राम्रोसँग व्यवस्थित गर्नुहुन्थ्यो । उनीहरूमा विचारको अलावा इस्लामी प्रचारप्रसारको हक र ईशदूतीय जिम्मेवारीको चेतना जागोस् भन्ने हेतुले उहाँले मुसलमानहरूलाई ईशवाणी पढेर सुनाउनुहुन्थ्यो । मुसलमानहरूले पनि पाठ गर्ने गर्थे ।

त्यसैगरी मुहम्मदﷺले मुसलमानको आचरणलाई उच्च बनाउनुभयो । उनीहरूमा रहेका ईश्वरीय विशेषताको विकास गर्नुभयो र उनीहरूलाई उच्च आचरणका मालिक बनाउनुभयो । फलस्वरूप उनीहरू मानवीय इतिहासमा ईशदूतपछि उच्च आचरणका नमुना बने । अब्दुल्लाह बिन मसउद भन्छन् : जसलाई कुनै तरिका अपनाउनु छ भने अग्रज व्यक्तिहरूको तरिका अपनाओ । किनभने अहिलेको मानिसमा विकृति छ । उनीहरू ईशदूतका साथी थिए । यस समुदायमा उनीहरू सबैभन्दा उच्च, असल, शिक्षित र फरासिला छन् । अल्लाहले उनीहरूलाई आफ्नो सन्देष्टाको सँगत प्रदान गरे साथै आफ्नो धर्मको स्थापनाको लागि चुने तसर्थ उनीहरूको महत्वलाई बुझ र उनीहरूको मार्गमा हिँड । जति सक्छौ उनीहरूको आचरणको अनुकरण गर किनभने उनीहरू सत्य मार्गमा छन् ।[2]

मुहम्मदﷺ स्वयम आफैमा यस्ता विशेषता, चमत्कार, इश्वरीय योग्यता, उच्च आचरण र असल कर्महरू थिए जसकारण मानिसहरू आफैं उहाँतिर आकर्षित हुन्थे र उहाँको लागि बलिदान दिन्थे ।

तसर्थ मुहम्मदﷺले कुनै कुराको आदेश दिने वित्तिकै साथीहरू त्यसको पालना गर्न अग्रसर हुन्थे र जुन कुराको मार्गनिर्देशन गर्नु हुन्थ्यो त्यसलाई अपनाउन उनीहरूले एकआपसमा प्रतिस्पर्धा गर्थे ।

यस किसिमको प्रयासका कारण मुहम्मदﷺले मदिनामा एउटा यस्तो समाजको रूपरेखा बनाउन सफल हुनुभयो जो इतिहास कै चमत्कारी एवं आदर्श समाज थियो । उहाँले समस्याको यति राम्रो समाधान प्रस्तुत गर्नुभयो मानवताले एक

---

१ अबु दाउद, तिर्मिजी, नेसई, इब्ने माजा, दारमी, मिश्कात भाग १/१६३
२ रजिन, मिश्कात भाग १/३२

लामो समय पश्चात अथाह अन्धकारमा हातखुट्टा चलाएर थाकेपछि पहिलो पटक सुखको साँस लिन पाए ।

यस नयाँ समाजको विभिन्न अंगहरूको पूर्णता उच्च शिक्षाद्वारा भयो जसले वीरताका साथसाथै जमानाका हरेक आपतविपतको सामना गरी त्यसको दिशा नै परिवर्तन गरिदियो र इतिहासको धारालाई नै मोडिदियो ।

## यहुदीसँग सम्झौता

मुहम्मदﷺले हिजरतपश्चात आस्था, राजनीति र व्यवस्थापनको एकरूपताको आधारमा मुस्लिमहरूको नयाँ समाजको जग खडा गरेपछि गैर मुस्लिमहरूसँगको सम्बन्ध सुदृढ गर्न ध्यान केन्द्रित गर्नुभयो । उहाँको उद्देश्य के थियो भने सम्पूर्ण मानव अमन शान्तिबाट लाभान्वित होउन् र यसबाहेक मदिना र त्यसका वरिपरिका क्षेत्रहरू उच्चस्तरीय एकतामा बाँधियोस् । तसर्थ मुहम्मदﷺले सहिष्णुता एवं फुको मन बनाई यस्तो नीतिनियम निर्माण गर्नुभयो जसको त्यस पक्षपाती एवं कट्टरपन्थी संसारमा परिकल्पना पनि गर्न सकिदैन थियो ।

जस्तै हामीले उल्लेख गरिसकेका छौ, मदिनाका सबैभन्दा नजिकका छिमेकी यहुदीहरू थिए । उनीहरूले आफुभित्र मुसलमान विरुद्ध शत्रुता लुकाएर राखे तापनि अझसम्म कुनै लडाइँ झगडाको प्रदर्शनी भने गरेका थिएनन् । त्यसैले मुहम्मदﷺले उनीहरूसँग एउटा यस्तो सम्झौता गर्नुभयो जसमा उनीहरूलाई धार्मिक एवं धनजनको स्वतन्त्रता प्रदान गरिएको थियो र उनीहरूलाई देशनिकाला गर्ने, उनीहरूको धनसम्पत्ति जफत गर्ने र लडाइँ गर्ने जस्ता कुनीतिको मार्ग अपनाइएको थिइएन ।

यो सम्झौता मुसलमानहरूको आपसी सम्झौताको पक्षमा थियो जसको जिकिर माथि भइसकेको छ । यस सम्झौताका महत्वपूर्ण बुँदाहरू यस प्रकार छन्।

### सम्झौताका दफाहरू

१ बनु औफका यहुदीहरू मुस्लिमहरूसँग मिलेर एउटै समुदाय हुनेछन् । उनीहरूले पनि आफ्नै धर्म मान्ने छन् र मुसलमाहरूले पनि आफ्नै धर्म मान्ने छन् । स्वयम उनीहरू, उनका गुलामहरू र नातेदारहरूलाई यो अधिकार प्राप्त हुनेछ । बनु औफबाहेक अन्य यहुदीहरूलाई पनि यही अधिकार प्राप्त हुनेछ ।
२ यहुदीहरू र मुस्लिमहरूले आआफ्नो खर्च आफैले व्यहोर्नु पर्नेछ
३ कुनै शक्तिले यस सम्झौताका कुनै पक्षधरसँग लडाइँ गऱ्यो भने सबै पक्षधरहरूले त्यसको विरुद्ध एकअर्कालाई सहयोग गर्नेछन् ।
४ यस सम्झौताका पक्षधरहरूको आपसी सम्बन्ध भलाई, उपकार र लाभको आधारमा कायम हुनेछ, अपराधमा होइन ।
५ कुनै पनि व्यक्ति आफ्नो पक्षको कारण अभियोगी ठहरिने छैन
६ पीडितलाई सहयोग गरिने छ ।
७ जबसम्म युद्ध जारी रहनेछ यहुदीहरूले पनि मुसलमानका साथसाथै खर्च व्यहोर्ने छन् ।

८ यस सम्झौताका सम्पूर्ण पक्षधरहरूको लागि मदिनामा प्रदर्शन र रक्तपात गर्न अवैध मानिने छ ।
९ यस सम्झौताका सम्पूर्ण पक्षधरहरूबीच कुनै यस्तो नयाँ कुरा उत्पन्न भयो वा कुनै झगडा भयो जसमा ठूलो फसाद हुने डर छ भने त्यसको निर्णय अल्लाह र उनका दूत मुहम्मदﷺले गर्नु हुनेछ ।
१० कुरैश र उनका सहयोगीहरूलाई शरण दिइने छैन ।
११ कसैले यस्रिबमाथि आक्रमण गऱ्यो भने त्यसको विरुद्ध लड्न सबैले एकअर्कालाई सहयोग गर्नेछन् र हरेक समूहले आआफ्नो तर्फबाट त्यसको प्रतिकार गर्नेछ ।
१२ यो सम्झौता कुनै अपराधी वा अभियोगीको लागि आड बन्ने छैन ।[१]

यो सम्झौता तय भएपछि मदिना र त्यस वरिपरिका क्षेत्रसमेत मिलेर एकिकृत सिंगो राज्यको स्थापना भयो जसको राजधानी मदिनालाई घोषित गरियो र मुहम्मदﷺले त्यसको नेतृत्व आफैले गर्नुभयो । त्यस नेतृत्वमा मुसलमानहरूको प्रभुत्व एंव बाहुल्यता थियो । यसरी मदिना पूर्णरूपले इस्लामको राजधानी बन्यो ।

अमन शान्तिको परिधिलाई अँझ व्यापक बनाउन मुहम्मदﷺले अन्य जातिहरूसँग पनि परिस्थिति अनूकुल सम्झौता गर्नुभयो । ती जातिहरूमध्ये केहीको विवरण अगाडि आउनेछ ।



१ इब्ने हेशाम भाग १/५०३,५०४

# सशस्त्र संघर्ष

## हिजरतपछि मुसलमान विरुद्ध कुरैशहरूको षड्यन्त्र र अब्दुल्लाह बिन उबैलाई पत्राचार

मक्काका नास्तिकहरूले मुस्लिमहरूमाथि कस्ता कस्ता अपराधका पहाड फुटाए, उनीहरूले हिजरत गर्न शुरु गर्दा उनीहरूमाथि कस्तो कस्तो कारबाही गरे भन्ने कुरा उपरोक्त पृष्ठमा उल्लेख गरिएको छ । त्यसको प्रतिकारमा मुस्लिमहरूले पनि उनीहरूको धनसम्पतिमा कब्जा गर्नु र उनीहरूमाथि आक्रमण गर्नु पर्थ्यो । तर पनि उनीहरूको मूर्खताको कडी टुटेन र उनीहरू आफ्नो अपराधिक क्रियाकलापबाट रोकिएनन् । मुस्लिमहरू उनीहरूको कब्जाबाट छुटेर आएको र उनीहरूलाई मदिनामा शान्तिपूर्ण शरण प्राप्त भएको देखेर उनीहरूभित्र झनै रिस र क्रोध जाग्यो । तसर्थ उनीहरूले अब्दुल्लाह बिन उबैलाई जो बहुदेववादी थियो र अन्सारको सरदार रहेको कारण उसलाई चेतावनी दिँदै एउटा चिठी लेखे । किनभने अन्सार उसको नेतृत्वमा सहमत भएका थिए । यदि यस बीचमा मुहम्मदﷺ नआउनु भएको भए उसलाई राजाको ताज पनि लगाइन्थ्यो । बहुदेववादीहरूले त्यस पत्रमा अब्दुल्लाह बिन उबै र उसका साथीहरूलाई सम्बोधन गरी दुई टुक शब्दमा लेखे ।

(तपाईंले हाम्रा मान्छेहरूलाई शरण दिएर राख्नुभएको छ । त्यसैले हामी अल्लाहको कसम खाएर भन्छौं, कि त उनीहरूविरूद्ध लडाइँ गर्नुहोस् कि उनीहरूलाई निकालिदिनुहोस् नत्र हामी आफ्ना सम्पूर्ण जथ्थाका साथ तपाइँका मान्छेहरूमाथि आक्रमण गरी युद्धका योद्धाहरूको हत्या गरिदिनेछौं र तपाइँका महिलाहरूसँग दुर्व्यवहार गर्नेछौं ।[१]

यो पत्र पाउने वित्तिकै अब्दुल्लाह बिन उबै मक्काका आफ्नो बहुदेववादी दाजुभाइहरूको आज्ञा पालना गर्न तयार भयो । किनभने ऊ पहिलादेखि नै मुहम्मदﷺविरुद्ध दुस्मनी एवं कपट लिएर बसेको थियो । यसका साथसाथै मुहम्मदﷺले नै उसको राज खोसेका हुन् भन्ने कुरा उसको मनमस्तिष्कमा बसेको थियो । जब यो पत्र अब्दुल्लाह बिन उबै र उसका मूर्तीपूजारी साथीहरूकहाँ पुग्यो उनीहरू मुहम्मदﷺविरुद्ध युद्ध गर्न एकजुट भए । मुहम्मदﷺलाई त्यसको बारेमा खबर भए लगत्तै उहाँले उनीहरूकहाँ गएर भन्नुभयो : कुरैशको धम्कीले तिमीहरूलाई गहिरो प्रभाव पारेको छ । तिमीहरू आफैले आफुलाई जति क्षति पुऱ्याउन खोजेका छौ त्योभन्दा बढी क्षति कुरैशले तिमीहरूलाई पुऱ्याउन सक्तैनन् । के तिमीहरू आफ्नै

१ अबु दाऊद भाग २ /१५४

दाजुभाईसँग लड्न चाहन्छौ ? ईशदूत मुहम्मदﷺको यो कुरा सुनेर उनीहरू तितरवितर भए । [१]

तत्काल त अब्दुल्लाह बिन उबै युद्धबाट रोकियो । किनभने उसका साथीहरू थकित थिए । उसले पनि बुझेको थियो तर कुरैशसँग लुकीछुपी उसको सम्पर्क स्थापित नै रह्यो । किनभने मुसलमान र बहुदेववादीबीच दंगा फसादको कुनै पनि अवसर उसले हातबाट फुत्कन दिन चाहदैन थियो । उसले यहुदीहरूलाई पनि साथमा लिएको थियो ताकि उनीहरूबाट सम्झौतामा समर्थन प्राप्त होस् तर अर्कोतर्फ मुहम्मदﷺको युक्तिले हत्याहिंसाको आगो निभाउने काम गरिरहेको थियो ।[२]

## मुसलमानहरूका लागि मस्जिदे हरामको ढोका बन्द गरिएको घोषणा

सअद बिन मुआज उमरा गर्न मक्का गई उमैया बिन खलफकहाँ पाहुना भएर बसे । उनले उमैयासँग भने, मेरो लागि कुनै एकान्तको समय हेर म अल्लाहको घरको परिक्रमा गर्न चाहन्छु । उमैयाले उनलाई दिउँसोको समयमा लिएर निस्कँदा अबु जहलसँग भेट भयो । उसले उमैयालाई सम्बोधन गर्दै भन्यो । हे अबु सफ्वान ! तिम्रो साथमा त्यो को हो ? उमैयाले जवाफ दियो, सअद हुन् । अबु जहलले सअदलाई सम्बोधन गरेर भन्यो : ए, मैले हेरिरहेको छु, तिमीले बडो शान्तिपूर्ण रूपले परिक्रमा गरिरहेका छौ जबकि तिमीहरूले अधर्मीलाई शरण दिएका छौ र उसलाई सहयोग गर्ने सोच पनि राखेका छौ । सुन, यदि तिमी अबु सफ्वानको साथमा नभएको भए तिमी सही सलामत घर फर्कने थिएनौ । त्यसको जवाफ दिदै सअदले ठूलो स्वरमा भने : सुन, अल्लाहको कसम यदि तिमीले मलाई यसबाट रोक्यौ भने म तिमीलाई त्यो कुरामा रोक लगाउने छु जुन कुरा तिमीलाई यो भन्दा बढी महँगो पर्नेछ । अर्थात मदिना हुदै गएको तिम्रो व्यापारमार्गबाट ।[३]

## मुहाजिरहरूलाई कुरैशको चेतावनी

कुरैशले मुसलमानसँग भन्न पठाए : तिमी मक्काबाट सुरक्षित निस्केर आयौ भन्दैमा प्रफुल्ल न होउ,हामी यस्रिबमै पुगेर तिमीहरूको सत्यानाश गर्नेछौं ।[४]

यो धम्की मात्र थिएन । मुहम्मदﷺ लाई कुरैशको षड्यन्त्र र कुनियतीको बारेमा यति विश्वसनीय स्रोतबाट खबर भइसकेको थियो कि कहिले उहाँ रातभरी जाग्राम बस्नुहुन्थ्यो कहिले साथीहरूको निगरानीमा सुत्नुहुन्थ्यो । तसर्थ सही बुखारी र

१ अबु दाऊद भाग २/५६३
२ सही बुखारी २ / ६५५
3 सही बुखारी २ /५६३
४ रहमतुल लिल् आलमीन १ /४०४

सही मुस्लिम नामक हदिसको किताबमा आइशामार्फत वर्णन भएको छ : मुहम्मदﷺ मदिना आएपछि एक दिन राती जाग्राम बस्दा भन्नुभएको थियो : ओहो, आज मेरा साथीमध्ये कसैले पहरा दिएको भए । त्यही अवस्थामा बसिरहँदा हामीले हतियार बजेको स्वर सुन्यौं । मुहम्मदﷺले सोध्नुभयो को हो? जवाफ आयो, म सअद बिन अबी वक्कास हुँ । उहाँले सोध्नुभयो, किन आयौ ? सअदले भने तपाईँलाई केही खतरा हुन्छ कि भन्ने मेरो मनमा लागेर म तपाईँलाई पहरा दिन आएको हुँ । त्यो देखेर मुहम्मदﷺले उनको निम्ति प्रार्थना गर्नुभयो र उहाँ सुत्नुभयो ।[१]

ज्ञात रहोस्, पहरा दिने काम कुनै विशेष रातको लागि मात्र नभई सदैवको लागि थियो । तसर्थ आइशामार्फत वर्णन भएको छ, उनी भन्छिन् : मुहम्मदﷺ लाई पहरा दिइरहँदा कुरआनको एउटा श्लोक अवतरण भयो : अल्लाहले तपाईँलाई ती मान्छेहरूबाट सुरक्षित राख्नेछन् । त्यसपछि मुहम्मदﷺले आफ्नो कोटबाट यसो टाउको निकालेर भन्नुभयो, हे साथी हो ! वापस जाओ किनभने अल्लाहले मलाई सुरक्षा प्रदान गरेका छन् ।[२]

त्यो खतरा मुहम्मदﷺमा मात्र सीमित नभई सम्पूर्ण मुसलमानलाई थियो । तसर्थ अबी बिन कअबद्वारा वर्णन गरिएको छ । मुहम्मदﷺ र उहाँका साथीहरू मदिना आएपछि अन्सारले उनीहरूलाई शरण दिँदा सारा अरब उनीहरूको विरुद्धमा एकबद्ध भयो । त्यसै कारणले उनीहरू साथमा हतियार लिएर सुत्ने उठ्ने गर्थे ।

## युद्धको अनुमति

त्यो खतरापूर्ण अवस्था जो मदिनामा मुसलमानहरूको लागि चुनौती बनेको थियो र कुरैश कसैगरी पछि हट्न र विद्रोह त्याग्न तयार छैनन् भन्ने कुरा प्रष्ट भएपछि अल्लाहले मुसलमानहरूलाई युद्ध गर्ने अनुमति दिए तर त्यसलाई अनिवार्य गरेनन् ।

त्यस परिवेशमा अल्लाहको तर्फबाट जुन आदेश अवतरण भएको थियो त्यो यस प्रकार थियो :

أُذِنَ لِلَّذِينَ يُقَاتَلُونَ بِأَنَّهُمْ ظُلِمُوا ۚ وَإِنَّ اللَّهَ عَلَىٰ نَصْرِهِمْ لَقَدِيرٌ (الحج :39 )

जुन मानिसहरूसँग युद्ध गरिएको छ उनीहरूलाई पनि युद्ध गर्ने अनुमति दिइन्छ किनभने उनीहरू पीडित छन् र अल्लाह उनीहरूको मदत गर्न सक्षम छन् । (अल् हज :३९)

---

१ सही मुस्लिम भाग २ सही बुखारी भाग १
२ तिर्मिजी भाग २ /१३०

यस आदेश अन्तर्गत अन्य अधिक आदेशहरू पनि अवतरण भए । जसमा यो अनुमति केवल युद्धको प्रतिकारमा युद्ध गर्ने होइन, यसको लक्ष्य असत्यको अन्त्य गर्ने र अल्लाहको आदेश लागू गर्ने हो भन्ने कुरा दर्शाइएको थियो ।

तसर्थ अगाडि अल्लाहले भनेका छन् :

الَّذِينَ إِنْ مَكَّنَّاهُمْ فِي الْأَرْضِ أَقَامُوا الصَّلَاةَ وَآتَوُا الزَّكَاةَ وَأَمَرُوا بِالْمَعْرُوفِ وَنَهَوْا عَنِ الْمُنْكَرِ ۗ(الحج : 41 )

यदि हामीले यिनीहरूलाई सत्ता दियौं भने यिनीहरूले नमाज कायम गर्नेछन्,जकात दिनेछन्, राम्रो कार्यको आदेश दिनेछन् र नराम्रो कार्यबाट रोक्नेछन् । (अल् हज:४१)
यो आदेश हिजरतपछि मदिनामा अवतरण भएको थियो र मक्कामा अवतरण भएको थिएन भन्ने भनाई सतप्रतिशत सत्य हो, तर अवतरण भएको समय भने पत्तो लगाउन कठिन छ ।

युद्धको यो अनुमति शुरुमा कुरैशसँग मात्र सिमित थियो । बदलिँदो परिस्थिति अनुसार यस अनुमतिमा पनि परिवर्तन आयो । फलस्वरूप यो अनुमति अनिवार्यतामा परिवर्तन भयो । कुरैशलाई मात्र नभई गैर कुरैशको निम्ति पनि अनिवार्य भयो । घटनाहरूको विवरण उल्लेख गर्नुभन्दा पहिला यसको विभिन्न चरणहरूलाई संक्षिप्त रूपमा प्रस्तुत गर्नु उचित होला ।

**१ पहिलो चरण** : कुरैशलाई युद्ध गर्ने विरोधीको रूपमा लिइयो । किनभने उनीहरूले नै अत्याचारको शुरुवात गरेका थिए त्यसैले मुसलमानहरूलाई उनीहरू विरुद्ध लडाइँ गर्ने, उनीहरूको धन सम्पत्ति कब्जा गर्ने अधिकार थियो । तर अरबका अन्य बहुदेववादीहरूको विरुद्ध यो रवैया उचित थिएन ।

२ गैर कुरैशमध्ये दुई समूह जसले कुरैशको साथ दियो र उनीहरूसँग ऐकेबद्ध भयो वा स्वयम जसले मुसलमानमाथि अत्याचार गऱ्यो उनीहरूको विरुद्ध युद्ध गरिने छ ।

३ जुन यहुदीहरूसँग मुहम्मदﷺको सम्झौता भएको थियो उनीहरूले धोका दिए वा बहुदेववादीहरूको साथ दिए भने यस्ता यहुदीहरूको सम्झौतालाई उनीहरूको अगाडि भंग गरिने र उनीहरू विरुद्ध लडाइँ गरिने छ ।

४ अहले किताब, जस्तै इसाईमध्ये जसले मुसलमानसँग शत्रुताको थालनी गर्छ र उनीहरूको विरुद्ध खडा हुन्छ उनीहरू विरुद्ध उनीहरूले हार मानेर कर नतिरेसम्म युद्ध गरिने छ ।

५ जो इस्लाममा प्रवेश गर्छन् उनीहरूमाथि हात हालिने छैन चाहे त्यो यहुदीबाट आएको होस् वा इसाइबाट । बहुदेववादीबाट आएको होस् वा अन्य कुनैबाट । अब उनीहरूको धनजनको बारेमा इस्लामी नियम अनुसार नै व्यवहार गरिने छ । उनीहरूको अन्तरमनको हिसाब अल्लाहसँग छ ।

युद्धको अनुमति बारे आयत त अवतरण भयो तर जुन परिस्थितिमा यो आयत अवतरण भएको थियो त्यो केवल कुरैशको शक्ति र विद्रोहको प्रतिफल थियो । तसर्थ दूरदर्शीता बमोजिम मुसलमानहरूले आफ्नो पकडको घेरा मक्कादेखि सिरिया जाने कुरैशीमार्गसम्म फैलाउनु जरुरी थियो । त्यसकारण मुहम्मदﷺले आफ्नो पकडलाई विस्तार गर्न दुई वटा योजना बनाउनुभयो ।

**१ पहिलो योजना** : जुन कबिला त्यो मार्गको वरिपरि वा त्यो मार्गदेखि मदिनाको बीचको क्षेत्रमा बसोबास गरेका थिए उनीहरूसँग मित्रता कायम गर्ने र युद्ध नगर्ने सम्झौता गर्ने ।

**२ दोस्रो योजना:** त्यस मार्गमा गस्ती टोली पठाइने ।

पहिलो योजना अर्न्तगत त्यो घटना जिकर गर्ने लायक छ जुन पछाडिका पृष्ठहरूमा यहुदीसँग गरिएको सम्झौताको बारेमा उल्लेख छ । मुहम्मदﷺले सशस्त्र संघर्ष गर्नु अगाडि यस किसिमका मित्रता र युद्ध नगर्ने एउटा सम्झौता जुहैना नामक कबिलासँग पनि गर्नुभएको थियो । उनीहरूको बस्ती मदिनाबाट तीन मिलको दुरीमा अवस्थित थियो । त्यस बाहेक रात्री गस्ती हुँदा पनि मुहम्मदﷺले धेरै सम्झौता गर्नुभएको थियो जसको विवरण अगाडि आउनेछ ।

अर्को योजना सराया अर्थात सानातिना लडाइँ र युद्धसँग सम्बन्धित छ जसको विवरण आआफ्नो ठाउँमा आउनेछ ।

# सराया तथा गज्वाह[१]

युद्धको अनुमति अवतरण भएपछि ती दुवै योजनालाई कार्यान्वयन गर्न मुसलमानहरूको सशस्त्र कारबाहीको क्रम व्यवहारिक रूपमा शुरु भयो । सुरक्षा बलको टोलीहरूले रात्रीगस्ती गर्न थाले । त्यसको उद्देश्य जसको बारेमा संकेत गरिसकिएको छ सामान्यतया मदिनाको वरिपरिका मार्ग र विशेष गरी मक्काका मार्गलाई नजरमा राख्नु, त्यहाँको परिस्थिति बारे पत्ता लगाउनु, ती मार्गहरूमा बसोबास गरेका कबिलाहरूसँग सम्झौता गर्नु , यस्रिबका बहुदेववादी,यहुदी र वरिपरिका गाउँलेहरूलाई मुसलमान शक्तिशाली छन् अब उनीहरू कमजोरीबाट मुक्त भएका छन् भन्ने अनुभूति गराउनु थियो । त्यसको अर्को उद्देश्य कुरैशहरूलाई उनीहरूको निरर्थ क्रोध र वीरताको परिणामबाट भयभीत गराउनु पनि थियो ताकि जुन मूर्खताको दलदलमा उनीहरू फसेका त्यसबाट निस्केर होस्मा आऊन् , आफ्नो अर्थ र आर्थिक स्रोतको खतरापूर्ण अवस्था हेरी सम्झौता गर्नतर्फ लागून् , मुसलमानको घरमा घुसेर उनीहरूलाई नाश गर्ने जुन कुचेष्ठा राखेका छन् , अल्लाहको मार्गमा जुन बाधा अड्चन हालेका छन्, मक्काका मुसलमानमाथि जुन अपराध र अत्याचार गरेका छन् ती सम्पूर्ण कार्यबाट रोकिउन् र अरबमा मुसलमानहरू इस्लामको प्रचारप्रसार गर्न स्वतन्त्र होउन् ।

## १ सिफुल बहर नामक संघर्ष[२],रमजान १ हिजरी तदनुसार मार्च ६२३ इस्वी

मोहम्मदﷺले हमजा बिन अब्दुल मुत्तलिबलाई त्यस संघर्षको कमाण्डर बनाउनुभयो र उनको कमाण्डमा तीस जना मुहाजिरहरूलाई सिरियाबाट आउन लागेको कुरैशी दस्ता बारे पत्ता लगाउन पठाउनुभयो । त्यो दस्तामा तीन सय जना मानिसहरू थिए । त्यसमा अबु जहल पनि थियो । उनीहरू ईस[3] नामक ठाउँनिर सागरको किनारामा पुग्दा कुरैशी दस्तासँग सामना भयो । दुवै पक्ष युद्धको लागि ताँती लाग्न थाले तर कबिला जुहैनाको सरदार मजदी बिन अमरले जो दुवै पक्षका मित्र थिए ठूलो प्रयास गरी युद्ध हुन दिएनन् ।

१ गज्वाह त्यो धर्मयुद्ध हो जसमा अल्लाहका संदेष्टा स्वयम उपस्थित हुनुभएको थियो, चाहे लडाइँ भएको होस् वा नभएको होस् । सरिया त्यो सशस्त्र संघर्ष हो जसमा अल्लाहका संदेष्टा उपस्थित हुनु भएन । सराया अरबी भाषामा सरियाको बहुवचन हो ।
२ अर्थात समुन्द्रको किनारा
3 रातो समुन्द्रको वरिपरि अवस्थित यम्बु र मरवाहबीच एउटा ठाउँको नाम हो ।

हमजाको कमाण्डको झण्डा मुहम्मदﷺले आफ्नो हातले बाँध्नुभएको पहिलो झण्डा थियो । त्यसको रंग सेतो थियो त्यसलाई अबु मुर्सिद केनाज् बिन हुसैनले बोकेका थिए ।

## राबिगको संघर्ष शौवाल १ हिजरी तदनुसार अप्रेल ६२३

मुहम्मदﷺले उबैदा बिन हारिस बिन अब्दुल मुत्तलिबको कमाण्डमा ६० जना मुहाजिरहरूलाई पठाउनुभयो । राबिग उपत्यकामा अबु सुफ्यानसँग सामना भयो । उसको साथमा २०० जना व्यक्तिहरू थिए । दुवै पक्षको तर्फबाट वाण हानाहान त भयो तर घमासान लडाइँ भने भएन ।

त्यस संघर्षमा मक्की फौजबाट दूई जना एक मेक्दाद बिन अम्र अल बहरानी र अर्का उत्बा बिन गजवान अल माजनी मुसलमानको गुँटमा आए । ती दुवै मुस्लिम थिए । उनीहरू मुसलमानतिर जाने नियतले नै नास्तिकहरूको फौजसँग निस्केका थिए ।

अबु उबैदाको कमाण्डलाई प्रदान गरिएको झण्डा सेतो थियो र त्यस झण्डालाई मिस्तह बिन असासाह बिन मुत्तलिब बिन अब्द मनाफले बोकेका थिए ।

## ३,खर्रार[1]को संघर्ष जिलकअदा १ हिजरी मई ६२३

मोहम्मदﷺले यस संघर्षका कमाण्डर सअद बिन अबी वक्कासलाई बनाउनुभएको थियो । उनलाई बीस जनाको कमाण्डो दिएर कुरैशी टोलीको पत्ता लगाउन पठाउनुभयो र खर्रारभन्दा अगाडि नबढ्न आदेश पनि दिनुभयो । उनीहरूले पैदलयात्रा गरेका थिए । रातमा यात्रा गर्थे र दिनमा लुकेर बस्थे । पाँचौ दिन विहान उनीहरू खर्रार पुग्दा कुरैशी टोली एक दिन पहिला नै त्यहाँबाट हिँडिसकेको कुरा थाहा पाए । त्यस संघर्षको झण्डा सेतो थियो जुन मेक्दाद बिन अम्रले बोकेका थिए ।

## ४, अब्वा[2] अर्थात वद्दानको युद्ध सफर् २ हिजरी अगस्त ६२३

यस लडाइँमा मुहम्मदﷺले मदिनामा सअद बिन उबादह्लाई आफ्नो कायम मुकाम बनाएर स्वयम आफै मुहाजिरहरूको साथमा जानुभएको थियो । यस लडाइँको उद्देश्य कुरैशको एउटा टोलीको मार्गमा अवरोध खडा गर्नु थियो । मुहम्मदﷺ वद्दानसम्म जानुभयो तर कुनै घटना भने भएन ।

यसै संघर्षमा मुहम्मदﷺले बनु जमराहका सरदारसँग मैत्री सम्झौता पनि गर्नुभयो । सम्झौताको विषय वस्तु निम्न छ ।

---

१ खर्रार जोहफा नजिक एउटा ठाउँको नाम हो ।
२ वद्दान मक्का र मदिनाको बीचमा अवस्थित एउटा ठाउँको नाम हो । यो ठाउँ राबिग हुँदै मदिना जाँदा २९ मिलको दूरीमा पर्दछ ।

यो सम्झौतापत्र मुहम्मदﷺको तर्फबाट बनु जमराहको लागि हो । उनीहरूको धनजन सुरक्षित रहनेछन् । जसले उनीहरूमाथि आक्रमण गर्छ उसको विरुद्ध उनीहरूको सहयोग गरिनेछ यदि उनीहरूले अल्लाहको धर्म विरुद्ध युद्ध गरेनन् भने । यो सम्झौता तबसम्म रहनेछ जबसम्म सागरबाट उनीहरूले लाभ लिनेछन् अर्थात सदैवको लागि हुनेछ र मुहम्मदﷺले उनीहरूलाई आफ्नो सहयोगको लागि बोलाउनुभयो भने उनीहरूलाई आउनु पर्नेछ ।[१]

यो संघर्ष मुहम्मदﷺ सामिल हुनुभएको पहिलो सशक्त संघर्ष थियो र उहाँहरू पन्ध्र दिनसम्म मदिनाबाहिर बसेर फिर्ता हुनुभएको थियो । यस लडाइँको झण्डा सेतो थियो । त्यसलाई हमजाले समातेका थिए ।

## ५,बवात्को युद्ध रब्बिअल् औवल् २ हिजरी सेप्टेम्बर ६२४

यस संघर्षमा मुहम्मदﷺ २०० जना साथीहरूलाई लिएर निस्कनुभएको थियो । यसको लक्ष्य उमैया बिन खलफ समेत पच्चिस सय ऊँट लिएर हिँडेका कुरैशको एक सय जना मानिसहरूको एउटा टोलीको सामना गर्नु थियो । मुहम्मदﷺ रिजवाको वरिपरि बवातसम्म[२] जानुभयो तर कुनै घटना भने भएन ।

यस युद्धमा मुआजलाई मदिनाको प्रमूख बनाइएको थियो । झण्डा सेतो रंगको थियो । झण्डा सअद बिन अबी वक्कासले बोकेका थिए ।

## ६,सफ्वानको युद्ध रब्बिअल् औवल् २ हिजरी तद्नुसार सेप्टेम्बर ६२३

यस युद्धको कारणको कारण यस प्रकार छ । कुर्ज बिन जाबिर फेहरीले बहुदेववादीहरूको एउटा सानो फौजी टोली लिएर मदिनाको गौचरमाथि छापा मारेर केही जनावर लुटेर लगेको थियो । मुहम्मदﷺले त्यसको पिछा गर्न ७० जना साथीहरूलाई लिएर निस्कनुभयो र बदरको वरिपरि सफ्वान नामक उपत्यकासम्म जानुभयो तर उनीहरूलाई भेटाउनु भएन र त्यतिकै फर्कनुभयो । यस युद्धलाई बदरको प्रारम्भिक युद्ध पनि भनिन्छ ।

यस युद्धमा मदिनाको प्रमूख जैद बिन हारिसालाई बनाइएको थियो । यस युद्धको झण्डा सेतो थियो । झण्डा अलीले बोकेका थिए ।

१ अल मवाहिब लिद्दुनियाह १/७५
२ रिजवा र जुहैना पहाडीसँग मिलेको दुई वटा पहाड हुन् जुन वास्तवमा एउटै पहाडको दुईटा शाखा हुन् । त्यो पहाड मक्काबाट सिरियातिर जाने मार्गमा जोडिएको छ र मदिनाबाट ४८ मिलको दूरीमा अवस्थित छ ।

## ७,जिल उशैरहको युद्ध जमादिल् उला र जमादिउल् आखिर् २ हिजरी

यस लडाइँमा मुहम्मदﷺ देड वा दुई सय मुहाजिरहरूको साथमा हुनुहुन्थयो । उहाँले कसैलाई लडाइँमा जान बाध्य गराउनु भएन । सवारी साधनको लागि तीस वटा उँट थिए । त्यसैले उनीहरू पालैपालो गरी सवार हुन्थे । यस युद्धको लक्ष्य कुरैशको त्यो काफेला थियो जो सिरियातर्फ जान मक्काबाट हिँडिसकेको थियो । यस काफेलामा अधिक माल सामान थियो । उहाँले जुल् उशैरहसम्म[१] उनीहरूको पिछा गर्नुभयो तर उहाँहरू पुग्नुभन्दा केही दिन पहिला नै त्यो काफेला त्यहाँबाट गइसकेको थियो । यो त्यो काफेला थियो जसलाई सिरियाबाट फर्कँदा मुहम्मदﷺले गिरिफतार गर्न खोज्नु भएको थियो तर त्यो भाग्न सफल भयो । त्यसपछि बद्रको युद्ध भयो ।

इबने इसहाकको भनाई अनुसार मुहम्मदﷺ यस लडाइँमा जमादिउल् उलाको अन्तिमतिर निस्केर जमादिउल् आखिर्को शुरुमा नै फर्केर आउनुभएको थियो । त्यसैले यो युद्ध कुन महिनामा भएको हो भन्ने बारे मुहम्मदﷺको जीवनीकारहरूबीच मतभेद देखिन्छ ।

यस युद्धमा मुहम्मदﷺले बनु मद्लज् र उनका साथी बनु जमरह्सँग युद्ध नगर्ने सम्झौता गर्नुभयो ।

यात्राअवधि भरका लागि मदिनाको अध्यक्षता अबु सल्मा बिन अब्दुल असद् मख्जुमीले सम्हालेका थिए । त्यस पटक पनि झण्डाको रंग सेतो थियो र झण्डा हमजाले लिएका थिए ।

## ८,नख्लाको संघर्ष रजब् २ हिजरी तद्नुसार जनवरी ६२४

त्यस लडाइँमा मुहम्मदﷺले अब्दुल्लाह बिन जहशको कमाण्डमा बाह्र जना मुहाजिरको एउटा फौजी टोली पठाउनु भएको थियो । प्रत्येक दुई जनाको लागि एउटा उँट थियो जसमा आलोपालो गरी दुई जना सवार हुन्थे । फौजी टोलीलाई मुहम्मदﷺले एउटा पत्र दिएर दुई दिन यात्रा गरेपछि मात्र खोल्ने आदेश दिनु भएको थियो । तसर्थ दुई दिनपछि अब्दुल्लाहले पत्र खोलेर हेर्दा त्यसमा लेखिएको थियो : (तिमीहरू मेरो यो पत्र पढेर मक्का र ताइफबीच नख्ला नपुगुञ्जेल अगाडि बढ्दै जाऊ, त्यहाँ कुरैशको एउटा काफेलाको घातमा बस र हामीहरूलाई उनीहरूको बारेमा खबर दिइराख ।) अब्दुल्लाहले समअन व ताअतन भने अर्थात उनले आफ्ना साथीहरूलाई यसबारे सूचना दिदै भने (म कसैमाथि जबरजस्ती गर्दिनँ, जसलाई शहादत प्राप्तिप्रति प्रेम छ उठ र जसलाई मृत्यूको डर छ फर्केर जाओ) बाँकी म चाहिँ जे भए पनि अगाडि बढ्ने छु । त्यो कुरा सुनेर सबै साथीहरू उठे र आफ्नो

---

१ उशैरह यम्बु नजिक एउटा ठाउँको नाम हो ।

गन्तव्यतर्फ लागे । तर बाटोमा सअद बिन वक्कास र उतबा बिन गज्वान्को उँट हराएका कारण उनी दुवैले पालैपालो सवार भई यात्रा गरिरहँदा उनीहरू पछाडि नै छुटेका थिए ।

अब्दुल्लाह बिन जहश लामो दुरी पार गरी नख्लानिर झरे । त्यहाँबाट कुरैशको एउटा काफेला किस्मिस, छाला र व्यापारको सामान लिई निस्क्यो । काफेलामा अब्दुल्लाह मुगिराहका दुई जना छोरा उस्मान र नौफल, अमर बिन हज्रमी र हकिम बिन कैसान मौला मुगिराह पनि थिए । मुसलमानहरूले आखिर के गर्ने हो भन्ने बारे आपसमा सल्लाह गरे । आज हराम महिना रजबको अन्तिम तारिख हो । यदि हामीले लडाइँ गऱ्यौं भने यसको अपमान हुन्छ यदि एक रातको लागि रोकियौं भने उनीहरू हरममा घुस्ने छन् । सल्लाहपछि सबैले लडाइँ गर्नुपर्छ भन्ने सहमति गरे । फलस्वरूप एक जनाले अमर बिन हज्रमीलाई वाण हाने र उसलाई मारिदिए । बाँकी अरूले उस्मान र हकिमलाई गिरिफतार गरे तर नौफल भने फुत्केर भाग्यो । त्यसपछि उनीहरू ती दुई कैदी र काफेलाको सामान लिई मदिना आए । उनीहरूले युद्धप्राप्तबाट पाचौं भाग पनि छुट्याए ।[१] इस्लामी इतिहासको त्यो पहिलो पाचौं भाग, पहिलो कैदी र पहिलो हत्या थियो ।

मुहम्मदﷺले उनीहरूको यस्तो गतिविधि बारे सोधपुछ गर्नुभयो र भन्नुभयो मैले तिमीहरूलाई हराम महिनामा युद्ध गर्ने आदेश दिएको थिइन र काफेलाको सामान र कैदी बारे कुनै पनि खालको व्यवहार नगर्न भनी तिम्रो हात रोकेको थिएँ ।

उता त्यस घटनाले गर्दा बहुदेववादीहरूले मुसलमानहरूको बारेमा अल्लाहले हराम ठहराएको महिनालाई अपमान गरेको भनी प्रोपेकण्डा गर्ने मौका पाए । यति धेरै टिकाटिप्पणी भयो कि अल्लाहले ईशवाणीद्वारा त्यस प्रोपेकण्डाको पोल खोल्दै भने बहुदेववादीहरुले जे गरिरहेका छन् त्यो मुसलमानहरूले गरेको गतिविधिभन्दा ठूलो अभियोग हो । तसर्थ अल्लाहले कुरअनामा भनेका छन् :

يَسْأَلُونَكَ عَنِ الشَّهْرِ الْحَرَامِ قِتَالٍ فِيهِ ۖ قُلْ قِتَالٌ فِيهِ كَبِيرٌ ۖ وَصَدٌّ عَنْ سَبِيلِ اللَّهِ وَكُفْرٌ بِهِ وَالْمَسْجِدِ الْحَرَامِ وَإِخْرَاجُ أَهْلِهِ مِنْهُ أَكْبَرُ عِنْدَ اللَّهِ ۚ وَالْفِتْنَةُ أَكْبَرُ مِنَ الْقَتْلِ (البقرة : 217 )

मानिसहरू तिमीसँग पवित्र महिनामा युद्ध बारे सोध्छन् । भनिदेऊ, यसमा युद्ध गर्नु महापाप छ, अल्लाहको मार्गबाट रोक्नु ,अल्लाहलाई नकार्नु ,मस्जिदे हरमबाट रोक्नु र त्यसको वरिपरि बसोबास गरेका मानिसलाई त्यहाँबाट निकाल्नु यी सबै अल्लाहकहाँ

१ जीवनीकारहरुको भनाइ यै नै छ । तर जटिलता के छ भने खुम्स अर्थात पाँचौ भाग निकाल्ने आदेश बदरको युद्धमा अवतरण भएको थियो । त्यसका कारणहरु जुन कुरआनको व्याख्यामा वर्णन गरिएको छ त्यसबाट के ज्ञात हुन्छ भने त्यसअघि मुसलमानहरु यस पाँचौ भागको आदेशबाट अनविज्ञ थिए ।

धेरै ठूला अपराध हुन् र विध्वंश मच्चाउनु हत्याभन्दा ठूलो अपराध हो । (अल् बकराह:२१७)

यस ईशवाणीले पुष्टि गर्‍यो । लड्ने मुसलमानहरूको चरित्रबारे बहुदेववादीहरूले जुन हल्ला फिँजाएका छन् त्यसको कुनै औचित्य छैन । किनभने कुरैशले इस्लाम विरुद्ध लडाइँमा मुसलमानमाथि अत्याचार तथा अपराध गर्नको लागि सम्पूर्ण निषेधित वस्तुहरू र क्षेत्रको उल्लंघन गरेका थिए । हिजरत गर्ने मुसलमानहरूको सामान लुटिनु र मुहम्मदﷺको हत्या गर्ने फैसला गरिनु के यी घटना निषेधित क्षेत्र एवं पवित्र नगर मक्कादेखि बाहिरको हो ? अनि के कारणले गर्दा अहिले अचानक निषेधित एवं पवित्र वस्तुको सम्मान गर्न थालियो र त्यसको पोल खोल्दा लाज लाग्यो ? वास्तवमा बहुदेववादीहरूले प्रोपेकण्डाको जुन आँधीबेहरी चलाएका थिए त्यो अत्यन्तै लज्जास्पद थियो ।

त्यसपछि मुहम्मदﷺले दुवै कैदीलाई मुक्त गरिदिनुभयो र हत्या गरिएका अविभावकलाई त्यसको क्षतिपूर्ति दिनुभयो ।[१]

यी थिए बदरको युद्धभन्दा पहिलाका सरिया तथा युद्धहरू । बहुदेववादीहरूले कुर्ज बिन जाबिरको नेतृत्वमा लुटपाट एवं रक्तपात गरेपछि मात्र यी लडाइँहरूमा पनि लुटपाट एवं रक्तपात गर्ने परिस्थिति सृजना भएको हो । अर्थात त्यसको प्रारम्भ पनि बहुदेववादीहरूको तर्फबाटै भएको थियो । त्यसअघि पनि उनीहरूले विभिन्न खालका अपराधिक घटनाहरू घटाएका थिए ।

उता अब्दुल्लाह बिन जहशको घटनापछि बहुदेववादीहरू भयभीत छन् भन्ने कुरा सावित भयो र त्यो उनीहरूको सामुन्ने ठूलो खतराको रूपमा आयो । उनीहरूलाई जुन भासमा फँस्ने डर थियो वास्तवमा उनीहरू त्यसमा फसिसकेका थिए । मदिनाको नेतृत्व अत्यन्तै सचेत छ र उनीहरूको एक एक व्यापारिक गतिविधिमाथि उसको नजर छ भन्ने कुरा उनीहरूले महसुस गरे । मुसलमानहरूले चाहेको भए सय मिलको बाटो पार गरेर उनीहरूको क्षेत्रमा प्रवेश गरी उनीहरूलाई काटमार गर्न सक्थे । धन सम्पत्ति लुट्न सक्थे । यी सम्पूर्ण कारवाही गरेर सुरक्षित रूपमा फर्कन पनि सक्थे । बहुदेववादीहरूले आफ्नो सिरियाको व्यापार खतरामा छ भन्ने कुरा बुझिसकेका थिए । यति हुँदाहुँदै पनि उनीहरू आफ्नो मूर्खता छाडेनन् । जुहैना र बनु जमराहले झैँ सम्झौता गर्नुको सट्टा उनीहरू आफ्नो क्रोध र रिसको भावना र शत्रुताको जोशमा झन् अगाडि बढे । मुसलमानको घरमा घुसेर उनीहरूलाई

१ यी सराया तथा गज्वाहहरुको विवरण निम्न पुस्तकहरुबाट साभार गरिएको हो : जादुल मआद भाग २, इब्ने हेशाम भाग १,रहमतुल लिल् आलमीन भाग १ । यी किताबहरुमा सराया तथा गजवाहको क्रम र त्यसमा सामिल हुनेहरुको बारेमा मदभेद छ । मैले विद्वान इब्ने कैयम र मन्सुरीको कुरालाई सही मानेको छु ।

सिध्याइने छ भन्ने उनका ठूलाठालाको धम्कीलाई व्यवहारिकता दिने निर्णय गरे । यसै भावनाले उनीहरूलाई बदरको मैदानमा पुऱ्यायो ।

यता मुसलमानमाथि अल्लाहले अब्दुल्लाह बिन जहशको नेतृत्वमा लडिएको लडाइँपछि शआबान् २ हिजरीमा युद्ध अनिवार्य गरिदिए र त्यस विषयमा कैयन स्पष्ट आयातहरू अवतरण गरे ।

وَقَاتِلُواْ فِي سَبِيلِ اللّهِ الَّذِينَ يُقَاتِلُونَكُمْ وَلاَ تَعْتَدُواْ إِنَّ اللّهَ لاَ يُحِبِّ الْمُعْتَدِينَ وَاقْتُلُوهُمْ حَيْثُ ثَقِفْتُمُوهُمْ وَأَخْرِجُوهُم مِّنْ حَيْثُ أَخْرَجُوكُمْ وَالْفِتْنَةُ أَشَدُّ مِنَ الْقَتْلِ وَلاَ تُقَاتِلُوهُمْ عِندَ الْمَسْجِدِ الْحَرَامِ حَتَّى يُقَاتِلُوكُمْ فِيهِ فَإِن قَاتَلُوكُمْ فَاقْتُلُوهُمْ كَذَلِكَ جَزَاء الْكَافِرِينَ فَإِنِ انتَهَوْاْ فَإِنَّ اللّهَ غَفُورٌ رَّحِيمٌ وَقَاتِلُوهُمْ حَتَّىٰ لَا تَكُونَ فِتْنَةٌ وَيَكُونَ الدِّينُ لِلَّهِ ۖ فَإِنِ انتَهَوْا فَلَا عُدْوَانَ إِلَّا عَلَى الظَّالِمِينَ (البقرة : 190 - 193)

अल्लाहको मार्गमा ती व्यक्तिहरू विरुद्ध लडाइँ गर जसले तिमीहरूसित लडाइँ गरेका छन् तर ज्यादती नगर । किनभने ज्यादती गर्नेहरूलाई अल्लाहले मन पराउँदैनन् । उनीहरूलाई जहाँ भेटाउछौ त्यहीँ हत्या गर ,जहाँबाट उनीहरूले तिमीहरूलाई निकालेका छन् त्यहाँबाट उनीहरूलाई निकालिदेऊ, किनभने विध्वंश हत्याभन्दा ठूलो अपराध हो । उनीहरूले मस्जिदे हरममा तिमीहरूसँग लडाइँ नगरे तिमीहरूले पनि नगर यदि उनीहरूले त्यहाँ लडाइँ गरे भने तिमीहरूले पनि उनीहरूको विरुद्ध लडाइँ गर । काफिरहरूको प्रतिफल यही हो । यदि उनीहरू यसबाट रोकिए भने अल्लाह माफ गर्नेवाला एवं दयालु छन् । विध्वंशको अन्त्य नहुँदासम्म र अल्लाहको धर्म लागु नहुञ्जेलसम्म उनीहरूको विरुद्ध युद्ध गर । यदि उनीहरूले युद्धविराम गरे भने उनीहरूलाई कुनै कारवाही हुने छैन अपराधीलाई बाहेक । (अल् बकराह:१९०–१९३)

त्यसपछि तुरुन्तै युद्धको तरिका उल्लेख गरिएको र त्यसप्रति प्रोत्साहित गरिनुका साथै युद्ध सम्बन्धी केही नीतिनियमहरू वर्णन गरिएको आयत अवतरण भयो ।

فَإِذَا لَقِيتُمُ الَّذِينَ كَفَرُوا فَضَرْبَ الرِّقَابِ حَتَّىٰ إِذَا أَثْخَنتُمُوهُمْ فَشُدُّوا الْوَثَاقَ فَإِمَّا مَنًّا بَعْدُ وَإِمَّا فِدَاءً حَتَّىٰ تَضَعَ الْحَرْبُ أَوْزَارَهَا ۚ ذَٰلِكَ وَلَوْ يَشَاءُ اللَّهُ لَانتَصَرَ مِنْهُمْ وَلَٰكِن لِّيَبْلُوَ بَعْضَكُم بِبَعْضٍ ۗ وَالَّذِينَ قُتِلُوا فِي سَبِيلِ اللَّهِ فَلَن يُضِلَّ أَعْمَالَهُمْ سَيَهْدِيهِمْ وَيُصْلِحُ بَالَهُمْ وَيُدْخِلُهُمُ الْجَنَّةَ عَرَّفَهَا لَهُمْ يَا أَيُّهَا الَّذِينَ آمَنُوا إِن تَنصُرُوا اللَّهَ يَنصُرْكُمْ وَيُثَبِّتْ أَقْدَامَكُمْ (محمد : 4 – 7 )

काफिरहरूसँग तिम्रो लडाइँ भयो भने उनीहरूको हत्या गर । यदि तिमीहरूले उनीहरूलाई पछाऱ्यौ भने राम्रोसँग जेलमा बन्द गर । त्यसपछि कि त राम्रो व्यवहार गर कि हतियार नत्यागुञ्जेल कर वसुल गर । यस बारे यही आदेश छ । अल्लाहले चाहेको भए आफैले उनीहरूसँग बदला लिन्थ्यो । उसले एकअर्काको माध्यमबाट तिमीहरूको परीक्षा लिन चाहन्छ । जो अल्लाहको मार्गमा शहिद भएको छ अल्लाहले उसको कर्मलाई कदापि खेर फाल्ने छैनन् । अल्लाहले उनीहरूलाई मार्ग देखाउने छ

उनीहरूको अवस्थालाई सुधारिदिने छ र उनीहरूलाई त्यो स्वर्गमा प्रवेश दिनेछ जसको बारेमा उनीहरूलाई जानकारी दिइसकेको छ । हे ! इमानवाला हो, यदि तिमीले अल्लाहको मदत गऱ्यौ भने अल्लाहले तिमीहरूको मदत गर्नेछ र तिमीलाई दृढता प्रदान गर्ने छ । (मुहम्मद :४–७)

त्यसपछि अल्लाहले ती व्यक्तिहरूको निन्दा गरेका छन् जसको मन युद्धको आदेश सुन्दा काप्दछ । अल्लाहले भनेका छन् :

فَإِذَا أُنْزِلَتْ سُورَةٌ مُحْكَمَةٌ وَذُكِرَ فِيهَا الْقِتَالُ ۙ رَأَيْتَ الَّذِينَ فِي قُلُوبِهِمْ مَرَضٌ يَنْظُرُونَ إِلَيْكَ نَظَرَ الْمَغْشِيِّ عَلَيْهِ مِنَ الْمَوْتِ ۖ فَأَوْلَىٰ لَهُمْ

(محمد :20 )

जब युद्ध बारे वर्णन गरिएको कुनै प्रष्ट सुरह अवतरण गरिन्छ तब तिमीले देख्नेछौ ती व्यक्तिहरूलाई जसको मनमा खोट छ उनीहरूले तिमीतर्फ यसरी हेर्छन् जसरी कुनै मर्न लागेको व्यक्तिले हेर्छ । (मुहम्मद:२०)

वास्तवमा युद्धको अनिवार्यता, प्रेरणा र त्यस सम्बन्धी तयारीको आदेश परिस्थिति अनुकूल थियो । परिस्थितिलाई राम्रोसँग बुझ्ने जो कोही कमाण्डरले पनि त्यस आपतकालिन अवस्थाको सामना गर्नको लागि आफ्नो सुरक्षा बललाई यस्तो आदेश दिने गर्छ । तसर्थ महान पालनकर्ताले यस्तो आदेश किन नदियोस् जसलाई प्रत्यक्ष र अप्रत्यक्ष सबै कुराको ज्ञात छ । वास्तवमा परिस्थितिले सत्य र असत्यबीच रक्तपात एवं निर्णायक युद्ध चाहेको थियो । विशेष गरी अब्दुल्लाह बिन जहश्को नेतृत्वको लडाइँपछि बहुदेववादीको इज्जत र स्वाभिमानमा ठूलो चोट लागेकाले उनीहरूलाई झनै क्रोधित तुल्याएको थियो ।

रक्तपात एवं लडाईंको समय नजिक आइसकेको छ र त्यसमा अन्तिम सफलता र मदत मुसलमानहरूले नै पाउने छन् भन्ने कुरा युद्धको आदेश सम्बन्धी आयतहरूको परिवेशबाट पनि अन्दाजा भइसकेको थियो । तपाईं यस कुरालाई हेर्नोस्, अल्लाहले मुसलमानलाई के आदेश दिए ? जहाँबाट बहुदेववादीले तिमीलाई निकालेका छन् अब तिमीहरू पनि त्यहाँबाट उनीहरूलाई निकाल । कैदीलाई बाँध्ने र विद्रोहीहरूलाई लछारपछार गरी युद्धको अन्त्य गर्ने जस्तो आदेश दिए जसको अधिकार एक शक्तिशाली र विजयी फौजसँग हुन्छ । अन्तिम विजय मुसलमानलाई नै हासिल हुनेछ भन्ने यो एउटा संकेत पनि थियो । यी कुराहरू पर्दापछाडि सांकेतिक तरिकाले बताइएको थियो ताकि अल्लाहको मार्गमा जिहाद गर्ने जे जति शक्ति छ त्यसको प्रदर्शन पनि गर्न सकोस् ।

तिनै दिनहरुमा अल्लाहले शाअबान् २ हिजरी तदनुसार फरवरी ६२४ मा बैतुल मक्दिसको सट्टा खाना काअबालाई किब्ला बनाउने र नमाज त्यसैतर्फ फर्केर पढ्ने आदेश दिए । त्यसबाट के फाइदा भयो भने कमजोर यहुदीहरू जुन मुसलमानभित्र केवल दंगा गर्न पसेका थिए उनीहरू खुलेर सामुन्ने आए र

मुसलमानबाट पूर्ण रूपमा अलग भई आफ्नो सक्कली अवस्थामा फर्के । यसरी मुसलमानहरूको जमात विभिन्न गद्दार एवं धोकेबाजहरूबाट पवित्र भयो ।

किब्ला परिवर्तन गर्नुमा एक अर्को सुक्ष्म संकेत अब नयाँ युगको शुरुवात हुँदैछ र यस किब्लामाथि मुसलमानको कब्जा नहुञ्जेलसम्म त्यो समाप्त हुने छैन भन्ने थियो । किनभने कुनै जातको किब्ला आफ्नो शत्रुको कब्जामा हुनु लज्जास्पद कुरा हो र यदि छ भने त्यसलाई जसरी पनि मुक्त गर्नु जरुरी हुन्छ ।

यी आदेश र संकेतपछि मुसलमानको जाँगरमा झन् वृद्धि भयो । उनीहरूमा जिहाद गर्ने चाहना र आफ्नो शत्रुसँग निर्णायक लडाइँ लड्ने इच्छा अँझ प्रबल हुँदै गयो ।

# बदरको महान युद्ध
## इस्लामको प्रथम निर्णायक युद्ध

**युद्धका कारण**: उशैराहको युद्धबारे चर्चा गर्दा मैले बताइसकेको छु कुरैशको काफेला मक्काबाट सिरियातर्फ जाँदा मुहम्मदﷺको पकडबाट फुत्केर भागेको थियो । त्यही काफेला सिरियाबाट मक्का फर्कंदै थियो । मुहम्मदﷺले उनीहरूको बारेमा पत्ता लगाउन तलहा बिन उबैदुल्लाह र सइद बिन जैदलाई उत्तरतर्फ पठाउनुभयो । उनी दुवै जना हुर्रा नामक ठाउँमा पुगे र त्यहीँ बसे । उनीहरूले अबु सुफ्यानलाई काफेला लिई त्यहाँबाट निस्केर गएको देखेपछि उनीहरू छिटोछिटो मदिना फर्केर आए र मुहम्मदﷺलाई त्यसको खबर दिए ।

त्यस काफेलासँग मक्काको अत्यधिक धनसम्पत्ति थियो । त्यो काफेलाले एक हजार उँटमा पचास हजार दिनार (दुई सय बैसट्ठी किलो सुन) बराबरको मालसामान बोकाएर ल्याएको थियो । त्यस मालसामानको सुरक्षाको लागि केवल ४० जना व्यक्तिहरू खटिएका थिए ।

मदिना वासीहरूको लागि त्यो अति सुनौलो अवसर थियो र मक्कावासीहरूले यति धेरै सम्पत्तिबाट हात धुनु पर्‍यो भने उनीहरूको सुरक्षा, राजनीति र अर्थतन्त्रमा ठूलो धक्का लाग्नेछ भन्ने कुरा मुहम्मदﷺले मुस्लिमहरूलाई जानकारी गराउनुभयो । साथै उहाँले काफेला आउदैछ त्यसको लागि तिमीहरू तयार भएर निस्कओ किनभने त्यो माल अल्लाहले युद्धको रूपमा तिमीहरूलाई सुम्पिन सक्छ भनी खबर दिनुभयो ।

तर मुहम्मदﷺले कसैलाई जान भने बाध्य गराउनु भएन र यसलाई ऐच्छिक गरिदिनु भयो । किनभने काफेला विरुद्धबाहेक बदरको महान युद्धमा कुरैश विरुद्ध घमासान लडाइँ हुन्छ भन्ने सम्भावना थिएन । त्यसैले अधिकांश साथीहरू मदिनामा नै बसे । मुहम्मदﷺको यो यात्रा पहिलाको साधारण लडाइँभन्दा फरक हुने छैन भन्ने उनीहरूको सोच थियो । तसर्थ यस संघर्षमा नजानेहरूसँग कुनै सोधपुछ पनि भएन ।

## इस्लामी फौजको संख्या र कमाण्ड वितरण

मोहम्मदﷺ जान लाग्दा उहाँको साथमा तीन सय भन्दा केही बढी साथीहरू थिए, अर्थात ३१३,३१४वा ३१७ आदि । जसमध्ये ८२, ८३ वा ८६ जना मुहाजिर र बाँकी अन्सार थिए । अन्सारबाट १६ जना, औस् कबिलाबाट र ७० जना खज्रज् कबिलाबाट थिए । यस फौजले लडाइँको लागि न त कुनै खास सुरसार गरेको थियो न पूर्ण तयारी । फलस्वरूप पुरै फौजमा जुबैर बिन औवाम्को र मेक्दाद बिन असवद् किन्दीको गरी जम्मा दुई वटा घोडा र ७० वटा उँट थिए । एकएक उँटमा फौजीहरू तीन तीन जना गरी पालैपालो सवार हुन्थे । एउटा उँट मुहम्मदﷺ, अली र मुर्सिद

विन अबी मुर्सिद गनवीको भागमा परेको थियो । जसमा उहाँहरू पालैपालो गरी सवार भए ।

मदिनाको व्यवस्थापन र नमाज पढाउने इमामतको जिम्मेवारी अब्दुल्लाह इब्ने उम्मे मक्तुमलाई सुम्पिइएको थियो तर रौहा नामक ठाउँमा पुगेपछि अबु लुबाबह् बिन अब्दुल मुन्जिरलाई मदिनाको प्रमुख बनाई फर्काइयो । फौजलाई व्यवस्थित गर्ने क्रममा मुहाजिरबाट एउटा र अन्सारबाट एउटा सुरक्षा बल बनाइएको थियो । मुहाजिर सुरक्षाबलको झण्डा अली बिन् अबी तालिबलाई दिइयो भने अन्सार सुरक्षाबलको झण्डा सअद बिन् मुआज्लाई दिइएको थियो । जनरल कमाण्डोको झण्डा जसको रंग सेतो थियो मुस्अब् बिन् उमैरलाई दिइएको थियो । दाहिने तर्फका अफसर जुबैर बिन् औवाम घोषित भए भने देब्रे तर्फका अफसर मेक्दाद बिन असवद् घोषित भए । जस्तै उल्लेख भइसकेको छ कि फौजमा उनी दुई जना मात्र वृद्ध फौजी थिए । रियर गार्डको कमाण्ड कैस् बिन् अबी सअसाअहलाई दिइएको थियो । कमाण्डर इन्चिफ भने मुहम्मदﷺ स्वयम आफै हुनुहुन्थ्यो ।

## बदरतिर इस्लामी लश्करको प्रस्थान

मुहम्मदﷺ यस अपूर्ण लश्करलाई लिएर हिँड्नुभयो । उहाँ मदिनाको दाहिनेबाट निस्केर मक्का जाने राजमार्ग हुँदै बिरे रौहा भन्ने ठाउँसम्म जानुभयो । अगाडि बढ्नुभयो र मक्काको देब्रेतर्फको बाटोलाई छाडी दाहिनेतर्फ लाग्नुभयो र नाजिया भन्ने ठाउँमा पुग्नुभयो । फेरि नाजियाको घाँचघाँचै हिँडेर रहकान् नामक उपत्यका पार गर्नुभयो । त्यो उपत्यका नाजिया र सफरा घाटीबीच अवस्थित थियो । उहाँ त्यस उपत्यकाको सिमाना हुँदै घाटीबाट अलिकति तल झरेर सफ्रा नजिक जानुभयो र त्यहाँबाट कबिला जुहैनाका दुई जना व्यक्ति बसिस् बिन् उमर र अदी बिन् अबी जग्बाअलाई काफेलाको हालखबर पत्ता लगाउन बदर पठाउनुभयो ।

## बदरलाई नै किन चुनियो ?

मुहम्मदﷺको लक्षित गन्तव्य बदर थियो । किनभने अबु सुफ्यानको काफेला जुन मार्गबाट आएको थियो त्यो मार्ग बदर हुँदै जान्थ्यो । साथै हरेक काफेलाले त्यहाँ आएर थकाइ मेट्ने चलन थियो । बदरको मैदानको लम्बाइ एक मिल जति थियो भने चौडाइ त्यो भन्दा केही कम थियो । त्यो मैदान चारैतिर बाट चढ्नै नसकिने अग्लाअग्ला पहाडहरूले घेरिएको थियो । आवतजावतको लागि ती पहाडहरूको बीचबीचमा तीन वा चार वटा मार्गहरू थिए । शत्रुको टोली त्यहाँ झरेपछि ती मार्गहरूलाई बन्द गरी उनीहरूलाई घेर्न सकिन्छ भन्ने मुहम्मदﷺको सोचाइ थियो । त्यसो गर्दा त्यहाँबाट कुनै व्यक्ति वा कुनै उँट भाग्न सक्ने अवस्था थिएन । त्यसैले मुहम्मदﷺ विस्तारै विस्तारै बदरदेखि अलि परबाट हिँडेर जानुभयो ।

## मक्कामा खतराको विगुल

अर्को तर्फ काफेलाको सरदार अबु सुफ्यान निकै सतर्क थियो । मक्काको मार्ग खतरापूर्ण छ भन्ने कुरा उसलाई थाहा थियो । त्यसैले निरन्तर परिस्थितिबारे पत्ता लगाइरहन्थ्यो र जुन काफेलासँग भेट हुन्थ्यो त्योसँग सोधपुछ गरिरहन्थ्यो । मुहम्मदﷺ ले आफ्ना साथीहरूलाई आक्रमण गर्ने आदेश त दिएका छैनन् भन्ने उसलाई चिन्ता बढ्यो । त्यसकारण उसले काफेलाको सुरक्षाको लागि करैशलाई गुहार्न तुरुन्तै जम्जम् बिन् अमर गिफारीलाई ज्याला दिएर मक्का पठायो । जम्जम तेज गतिमा मक्का आयो र अरबको चलन अनुसार उँटको नाक चिऱ्यो, उँटको काठी पल्टायो, आफ्नो लुगा च्यात्यो र मक्काको उपत्यकामा त्यही उँटमाथि उभिएर गुहार माग्यो । हे ! कुरैशको जमात, काफेला......... काफेला .......... तिम्रो जुन सम्पत्ति अबु सुफ्यानसँग छ त्यसमाथि मुहम्मद र उसका साथीले आक्रमण गर्न खोजेका छन् । तिमीहरूले त्यो माल प्राप्त गर्न सक्छौ कि सक्दैनौ भन्ने मलाई थाहा छैन । गुहार........ गुहार ..........।

## युद्धको लागि मक्कावासीको तयारी

गुहारको यो आवाज सुनेर चारैतिरबाट मानिसहरू दौडे र भन्न थाले : के मुहम्मद र उसका साथीहरूले यस काफेलालाई इब्ने हज्रमी जस्तो ठानेका छन् ? होइन कदापि होइन, अल्लाहको कसम उनीहरूलाई हामी अर्कै हौं भन्ने कुरा थाहा हुनेछ । मक्कामा दुई किसिमका मानिस थिए । उनीहरूमध्ये एक समूह लडाइँको लागि आफै निस्क्यो भने अर्को समूहले आफ्नो सट्टा अरुलाई पठायो, यसरी लगभग सबै निस्के । विषेश गरी मक्काका ठुलाबडाहरूमध्ये कोही पनि पछाडि रहेनन् । अबु लहब्ले मात्र आफ्नो ठाउँमा आफ्नो ऋणिलाई पठाएको थियो । वरिपरिका अन्य कबिलाहरूलाई पनि कुरैशले आफ्नो फौजमा भर्ती गऱ्यो । कुरैशी कबिलामा बनु अदीबाहेक कोही पछि रहेनन् । बनु अदीबाट भने कुनै पनि व्यक्ति त्यसमा सामिल भएका थिएनन् ।

## मक्की फौजको संख्या

सुरुमा मक्की फौजको संख्या तेह्र सय थियो । उनीहरूसँग एक सय घोडा र छ सय वटा फलामे युद्धवस्त्र थियो । उँट धेरै थिए तर सही संख्या भने थाहा हुन सकेन । फौजको कमाण्डर अबु जहल बिन् हेशाम थियो । कुरैशका ९ जना ठूलाबडा व्यक्तिहरू यस काफेलाका उत्तरदायी व्यक्ति थिए । उनीहरूको भोजनको लागि कुनै दिन ९ र कुनै दिन १० वटा उँट बध गरिन्थ्यो ।

## बनु बकर् नामक कबिलाको समस्या

जब कुरैशको लश्कर हिँड्न लाग्यो अनि उनीहरूले बनु बकर नामक कबिलासँग आफ्नो दुस्मनी र लडाइँ जारी रहेको कुरा सम्झे । तसर्थ उनीहरूलाई कतै यस कबिलाले पछाडिबाट आक्रमण त गर्ने होइन भन्ने चिन्ता बढ्न थाल्यो । यसरी शत्रुको घेरामा परिने त होइन भन्ने उनीहरूलाई डर भयो । त्यस चिन्ताले कुरैशलाई लडाइँबाट रोक्छ कि जस्तो भयो तर त्यतिखेरै केनानाको सरदार सुराका बिन् मालिकले धुत्कारिएको शैतानको रूपमा प्रकट भएर भन्यो म पनि तिम्रो साथी हुँ र बनु केनानाले तिम्रो पछाडि कुनै नराम्रो काम गर्ने छैन भन्ने ग्यारेण्टी लिन्छु ।

## मक्की फौजको प्रस्थान

त्यस ग्यारेण्टीपछि मक्कावासीहरू आआफ्नो घरबाट निस्के । जस्तै अल्लाहले भनेका छन् : उनीहरू घमण्ड गर्दै, आफ्नो सान देखाउँदै र अल्लाहको मार्गबाट रोक्दै मदिना तर्फ प्रस्थान भए । मुहम्मदﷺले भन्नुभएको छ : उनीहरू आफ्नो धारिलो हतियार लिएर अल्लाह र उनका दूत मुहम्मदﷺ सित डाह गर्दै, बदला लिने जोशमा चुर भइ, क्रोधित र अभिमानी भावनामा रुमलिँदै मुहम्मदﷺ र उनका साथीहरूले उनीहरूमाथि आँखा गाड्ने हिम्मत कसरी गरे भनी कचकचाउदै तेज गतिमा उत्तरतर्फबाट बदरतिर जाने क्रममा उस्फान कुदैद हुँदै जुहफा नामक ठाउँमा पुगे । त्यहाँ उनीहरूले अबु सुफ्यानको एउटा पत्र पाए । उसले लेखेको थियो : तपाईंहरू आफ्नो काफेला र आफ्नो धनजनको संरक्षणको लागि निस्कनु भएको हो । अल्लाहले तपाईंहरू सबैलाई बचाइसकेको छ तसर्थ वापस फर्केर जानुहोस् ।

## काफेला भाग्न सफल

अबु सुफ्यान फुत्केर भागेको विवरण यस प्रकार छ । ऊ सिरियाबाट फौजी मार्ग हुँदै आउँदै थियो । तर निरन्तर सतर्कता अपनाएको थियो । परिस्थिति बारे जानकारी हासिल गर्ने कोसिस पनि जारी राखेको थियो । उसले बदर नजिक पुगेर काफेलाभन्दा अगाडि गई मजदी बिन् अमरसँग भेट गऱ्यो र उसँग मदिनाको फौजको बारेमा सोध्यो । मजदीले उसलाई परिस्थिति बारे बताउँदै भन्यो: मैले त्यहाँ कुनै नयाँ मान्छे त देखिनँ तर दुई जना सवारलाई देखको थिएँ । उनीहरू आफ्नो सवारीलाई डाँडो नजिक अड्याएर पानी भरेर गए । अबु सुफ्यान् फटाफट त्यहाँ पुग्यो र उनीहरूको उँटको गोबर लिएर फुटायो । त्यसमा खजुरको गुठुली भेटियो । अबु सुफ्यानले भन्यो : अल्लाहको कसम यो त यस्रिबको दानाचारा हो । त्यसपछि उ आफ्नो काफेलातर्फ फर्क्यो र काफेलालाई पश्चिमतिर फर्काइ समुन्द्रको किनारातिर लग्यो । बदरतिर जाने फौजी मार्गलाई देब्रेपट्टी छाडिदियो । यसरी उसले आफ्नो फौजलाई मद्नी फौजको आक्रमणबाट बचायो र आफू सुरक्षित रहेको सूचना दिँदै

उनीहरूलाई वापस फर्केर जान पत्र पठायो । त्यो पत्र उनीहरूले जुहफा नामक ठाउँमा पाएका थिए ।

## मक्की फौजको फिर्ता हुने सोच र आपसी फुट

त्यो पत्र पाएपछि मक्की लशकर फर्कन चाहेको थियो तर उनीहरूमध्येको ठूलो विरोधी अबु जहल उठ्यो र घमण्ड गर्दै भन्यो : हामी बदर गएर तीन दिनसम्म नबसी फर्कन हुँदैन । त्यहाँ उँट काटिनेछ । मान्छेहरूलाई भोजन गराइनेछ साथै रक्सीको पनि व्यवस्था गरिनेछ । नोकर्नीहरूले हाम्रो निम्ति गीत गाउने छिन् । सारा अरबलाई हामी, हाम्रो यात्रा र सभा बारे खबर हुनेछ । यसरी सदैव हाम्रो उनीहरूमाथि धाक रहिरने छ ।

तर अबु जहलको सोच विपरित अल्अख्नस बिन् शुरैकले वापस फर्कन सल्लाह दियो । अरू मान्छेहरूले उसको कुरा मानेन् । त्यसकारण उ बनु जोहराका मानिसहरूलाई लिएर वापस फर्क्यो । किनभने ऊ बनु जोहराको मित्र एवं उनीहरूको सरदार थियो । बनु जोहराको संख्या तीन सय जति थियो । उनीहरूको कुनै व्यक्ति पनि बदरको युद्धमा सहभागी भएनन् । पछि बनु जोहराका मानिसहरू अल्अख्नस बिन् शुरैकको सुझावमा अत्यन्तै प्रसन्न एवं प्रफुल्ल भए र उनीहरूमा सदैव उनको इज्जत र आदर कायम रह्यो ।

बनु जोहराबाहेक बनु हाशिम पनि फर्कन चाहेको थियो तर अबु जहलले बाध्य गराउँदै भन्यो हामी नफर्कुन्जेल यो समूह हामीबाट अलग नहोस् । जेहोस् लश्करको यात्रा जारी रह्यो । बनु जोहरा छुट्टिए पछि उनीहरूको संख्या १००० बाँकी रह्यो । उनीहरू बदरतिर बढ्दै गए । बदर नजिक पुगेपछि फौज एउटा डाँडो पछाडि गएर बस्यो । त्यो डाँडो उपत्यकाको दक्षिण सिमानातिर थियो ।

## इस्लामी फौज र अनूकुल परिस्थिति

यता मदिनाको संचार माध्यमले मुहम्मदﷺलाई जफरान् नामक उपत्यकाबाट जाँदै गर्दा बाटोमा नै मक्की फौजको बारेमा सूचना दियो । मुहम्मदﷺले त्यो सूचनाको गहन रूपमा छानविन गरेपछि के विश्वास व्यक्त गर्नुभयो भने अब रक्तपातयुक्त लडाइँको बेला आइसकेको छ र शक्तिशाली, बलियो , आँटिलो र हिम्मतीलो कदम चाल्नु आवश्यक छ । किनभने यदि कुरैशको फौजलाई यस क्षेत्रमा चहलपहल गर्न दिइएको भए त्यसबाट कुरैशको फौजी साखलाई अझ बढी बल पुग्ने र उनीहरूको राजनैतिक सत्ताको घेरा टाढासम्म फैलने, मुसलमानको स्वर दबिएर कमजोर हुने र त्यसपछि इस्लामलाई खोक्रो ठानेर आफ्नो मनमा इस्लाम विरुद्ध कपट एवं शत्रुता राख्ने र यस क्षेत्रका सानाठूला हरेक व्यक्तिले हिंसा मच्चाउने कुरा निश्चित थियो ।

यी सम्पूर्ण कुरा अतिरिक्त मक्की फौज मदिना जाने छैन र लडाइँलाई मदिनाभित्र सारेर मुसलमानहरूलाई उनीहरूको घरमा घुसेर नाश गर्ने कोसिस गर्ने छैन भन्ने के ग्यारेण्टी थियो र ? हो, यदि मदनी फौजको तर्फबाट अलिकति पनि छुट भएको भए यी सबै कुरा सम्भव थिए । यदि यस्तो नभएको भए पनि मुसलमानको स्वाभिमान र इज्जतमा नराम्रो प्रभाव पर्ने नै थियो ।

## सल्लाहकार समितिको बैठक

परिस्थितिको अचानक एवं खतरापूर्ण परिवर्तनलाई मद्देनजर राखी मुहम्मदﷺले फौजको उच्च सल्लाहकार समितिको बैठक बोलाउनुभयो । त्यसमा उहाँले वर्तमान परिस्थितिको बारेमा जानकारी गराउनुका साथै कमाण्डर र आम फौजीहरूसित विचारविमर्श गर्नुभयो । त्यसै बेला एक समूह रक्तपातपूर्ण युद्धको नाम सुनेर काँप्न थाल्यो र उनीहरूको दिल धड्कन लाग्यो । त्यही समूहको बारेमा ईश्वरले भनेका छन् :

كَمَا أَخْرَجَكَ رَبُّكَ مِنْ بَيْتِكَ بِالْحَقِّ وَإِنَّ فَرِيقًا مِنَ الْمُؤْمِنِينَ لَكَارِهُونَ يُجَادِلُونَكَ فِي الْحَقِّ
بَعْدَمَا تَبَيَّنَ كَأَنَّمَا يُسَاقُونَ إِلَى الْمَوْتِ وَهُمْ يَنْظُرُونَ (الأنفال : 5-6 )

जस्तै, तिम्रो पालनकर्ताले तिमीलाई तिम्रो घरबाट सत्यको निम्ति निकालेको थियो । मोमिनको एक समूहलाई त्यो कुरा नराम्रो लाग्यो । हक प्रमाणित भएपछि उनीहरूले तिमीसँग त्यसको बारेमा झगडा गरिरहेका थिए । यस्तो लाग्थ्यो जस्तै उनीहरूलाई मृत्यूतर्फ धपाएर लगिँदै छ । (अल्अन्फाल : ५–६)

कमाण्डरहरू सबैले राम्रो कुरा गरे । अबु बकर उठेर राम्रो कुरा गरे, उमर उठे उनले पनि राम्रो कुरा गरे, अनि मेक्दाद उठेर भने : हे ! ईशदूत ! अल्लाहले जुन बाटो देखाएका छन् त्यसैमा हिँड्नुहोस् हामी तपाईँको साथमा छौँ । अल्लाहको कसम हामीले तपाईँसँग त्यस्तो कुरा गर्ने छैनौँ जुन बनु इज्रायलले मुसासित भनेको थियो "जाउ तिमी र तिम्रो पालनकर्ता लड हामी बस्छौँ । "

हाम्रो भनाई छ, हिँडनुस् तपाईँ र तपाईँका पालनकर्ता लडनुहोस् हामी पनि तपाईँको साथमा लड्ने छौँ । त्यो जातको कसम जसले तपाईँलाई सत्य दिएर पठाएको छ यदि तपाईँले बर्के गमादको तलाउसम्म पनि हामीलाई लिएर जानुभयो भने पनि हामी बटुवाहरूसित लडाइँ गर्दै त्यहाँसम्म जानेछौँ ।

मुहम्मदﷺले उनको हकमा राम्रो कुरा भन्नुभयो र उनको लागि प्रार्थना गर्नुभयो ।

यी तीनै जना कमाण्डर मुहाजिरबाट थिए । उनीहरूको फौजी संख्या थोरै थियो । मुहम्मदﷺले अन्सारको इच्छा जान्न चाहनुभयो किनभने उनीहरूको फौजी संख्या धेरै थियो र युद्धको भार पनि उनीहरूको काँधमाथि पर्ने वाला थियो । बैअते अक्बाले गर्दा उनीहरूलाई मदिनाबाट बाहिर निस्केर युद्ध गर्ने बाध्यता थिएन । त्यसैले

उल्लेखित तीन जना कमाण्डरहरूको कुरा सुनेपछि उहाँले अन्सारलाई लक्षित गर्दै सम्बोधन गर्नुभयो । हे ! साथी हो, मलाई सल्लाह देऊ । अन्सारका कमाण्डर सअद बिन मुआजले कुरा बुझी हाले । तसर्थ उनले भने : हे ! ईशदूत, तपाईंको सम्बोधनका पात्र हामी हौं जस्तो लाग्छ । उहाँले जवाफ दिनुभयो, हो । उनले भनेः हामीले तपाईंमाथि आस्था राखेका छौं, तपाईंलाई साँचो ठानेका छौं, तपाईंले जे लिएर आउनु भएको छ त्यो सत्य हो भन्ने साक्षी दिएका छौं साथै तपाईंको अनुकरण गर्ने बचन पनि गरेका छौं । तसर्थ तपाईंले जे सोच्नु भएको छ त्यो गर्नुहोस् । अल्लाहको कसम यदि तपाईंले हामीलाई लिएर समुन्द्रमा हाम फाल्न चाहनु भएको छ भने पनि हामी तपाईं सँगसँगै हाम फाल्न तयार छौं । हामीमध्ये कोही पनि पछि हट्ने छैन । भोलि नै शत्रुसित लड्नु परे पनि हामीलाई कुनै आपत्ति छैन । हामी निरन्तर लड्ने वीर हौं । अल्लाहले हामीहरूको प्रतिभा देखाउन सक्छ जसले गर्दा तपाईंको आँखा पनि शितल हुनेछ । तसर्थ हामीलाई साथमा लिएर हिँड्नुहोस् अल्लाहले कृपादृष्टि गर्नेछ ।

एक अर्को हदिसमा उल्लेख छ : सअद बिन मुआजले मुहम्मदﷺसँग भने, तपाईंलाई अन्सारले आफ्नो कर्तव्य आफ्नो गाउँघरमा मात्र तपाईंको सहयोग गर्नु हो भनी सम्झेका छन् भन्ने लागेको छ भने म अन्सारको तर्फबाट बोल्दै छु र उनीहरूको तर्फबाट जवाफ पनि दिँदै छु । तसर्थ आग्रह छ, जहाँ जान चाहनुहुन्छ हामीलाई लिएर हिँड्नुहोस् जोसँग सम्बन्ध बनाउनु छ बनाउनुहोस् जोसँग विच्छेद गर्नु छ विच्छेद गर्नुहोस् । हाम्रो सम्पत्तिबाट जे चाहिएको छ लिनुहोस् जे चाहिएको छैन छाडिदिनुहोस् । हाम्रो निम्ति माल छाड्नुभन्दा तपाईंले हाम्रो माल लिनु भएमा हामीलई खुसी लाग्नेछ । यस सम्बन्धमा तपाईंको जे निर्णय हुन्छ त्यही हाम्रो निर्णय हुनेछ । अल्लाहको कसम यदि तपाईं अगाडि बढ्दै बर्के गमादको तलाउसम्म हामीलाई लिएर जानुहुन्छ भने पनि हामी जानेछौं यदि हामीलाई लिएर समुन्द्रमा हाम फाल्न चाहनु हुन्छ भने पनि हामी हाम फाल्न तयार छौं ।

सअदको यो कुरा सुनेर मुहम्मदﷺ अति प्रसन्न हुनुभयो । उहाँभित्र साहस आयो । उहाँले भन्नुभयो, हिँड । खुसी खुसी हिँड । अल्लाहले दुई समूहमध्ये एक समूहबारे बचन दिएका छन् । यतिखेर मैले वंशको हत्यास्थल देखिरहेको छु ।

## इस्लामी फौजको बाँकी यात्रा

मुहम्मदﷺ जफ्रानबाट अगाडि बढ्दै असाफिर नामक केही डाँडाका घुम्तीहरूबाट हिँड्दै दियत नामी एक बस्तीमा झर्नुभयो र हेनान् नामी डाँडोको थुम्कोलाई देब्रेपट्टि छाडी बदरको मैदानमा झर्नुभयो ।

## गुप्तचर कदम

त्यहाँ पुगेर मुहम्मदﷺले आफ्ना साथी अबु बकरलाई साथ लिई परिस्थिति बारे बुझ्न स्वयम आफैं निस्कनुभयो । टाढैबाट मक्की फौजको केम्पको अवलोकन गरिरहँदा एक अरबी बूढो भेटियो । उहाँले बूढोसँग कुरैश, मुहम्मद र मुहम्मदका साथीहरू बारे सोध्नुभयो । दुवै फौजबारे सोध्नुको अर्थ आफु बारे उसलाई पत्तो नलागोस् भन्ने थियो । बूढोले पनि भने : जबसम्म तिमी कुन खानदानका हौ बताउँदैनौ तबसम्म म पनि केही बताउदिनँ भन्यो । मुहम्मदﷺले भन्नुभयो : तिमीले बतायौ भने हामी पनि बताउछौं । उसले भन्यो के यो यसको सट्टा हो ? मुहम्मदﷺले जवाफ दिनुभयो, अँ । उसले भन्यो मुहम्मद र उनका साथी फलानो दिन निस्केका छन् भन्ने थाहा भएको छ । यदि मलाई भन्ने व्यक्तिले सही भनेको भए तिनीहरू आज फलानो ठाउँमा छन् । उसले ठीक त्यो ठाउँको बारेमा संकेत गऱ्यो जहाँ मदिनाको फौज बसेको थियो । कुरैशको फौज फलानो दिन निस्केको छ भन्ने कुरा मलाई थाहा भएको छ, यदि भन्ने व्यक्तिले सही भनेको भए आज तिनीहरू फलानो ठाउँमा छन् । उसले ठीक त्यो ठाउँको नाम लियो जहाँ मक्काको फौज थियो ।

जब बूढोले आफ्नो कुरा सक्यो अनि उसले सोध्यो, तिमी कुन खानदानका हौ ? मुहम्मदﷺले जवाफ दिनुभयो हामी ती दुवैबाहेकका हौं । यति भनेर उहाँहरू हिँड्नुभयो । बूढोले कराउँदै भन्यो, पानीको हौ क्या हो ? के इराकको पानीका हौ ?

## मक्की फौजको बारेमा महत्वपूर्ण खबर प्राप्त

त्यसै दिन साँझ मुहम्मदﷺले शत्रुको चहलखेल बारे पत्ता लगाउन पुनः गुप्तचर दस्ता पठाउनुभयो । त्यस कामको लागि मुहाजिरका तीन जना कमाण्डर अली बिन अबी तालिब, जुबैर बिन औवाम र सअद बिन अबी वक्कास साथीहरूको एक जमातलाई लिएर निस्के । उनीहरू सीधै बदरको मुहाननिर पुगे । त्यहाँ दुई जना गुलामले मक्की फौजको निम्ति पानी भरिरहेका थिए । ती दुवैलाई गिरिफ्तार गरी उनीहरू मुहम्मदﷺ भएको ठाउँमा आए । त्यतिखेर मुहम्मदﷺ नमाज पढिरहनु भएको थियो । साथीहरूले ती दुवैसँग हालखबर सोधे । उनीहरूले हामी कुरैशलाई पानी खुवाउने व्यक्ति हौं र उनीहरूले हामीलाई पानी भर्न पठाएका हुन् भनी जवाफ दिए । उनीहरूको जवाफ साथीहरूलाई सन्तोषजनक लागेन । किनभने उनीहरूले ती दुवै व्यक्ति अबु सुफ्यानको मान्छे होलान् भन्ने ठानेका थिए र काफेलामाथि आफ्नो प्रभूत्व होस् भन्ने उनीहरूको अन्तिम इच्छा थियो । त्यसैले उनीहरूले ती दुवै गुलामलाई बेसरी चुटे । तिनीहरूले बाध्य भई हामी सुफ्यानका मान्छे हौं भनेर भने । त्यसपछि उनीहरूले पिट्न छाडे ।

मोहम्मद ﷺ ले नमाज भ्याएपछि रिसिएर भन्नुभयो, यिनीहरूले सही कुरा गर्दा तिमीहरूले पिट्यौ र झुट बोलेपछि छोड्यौ । अल्लाहको कसम उनीहरूले हामी कुरैशको मान्छे हौं भनेको सही थियो ।

त्यसपछि उहाँले गुलामसँग भन्नुभयो । ल, ठीक छ । अब मलाई कुरैशको बारेमा बताउ । उनी दुवैले उनीहरू त्यो पहाड जुन उपत्यकाको अन्तिम कुनातिर देखिएको छ त्यसैको पछाडि छन् भन्ने कुरा गरे । मुहम्मद ﷺ ले सोध्नुभयो, कति जना छन् ? तिनले जवाफ दिए, धेरै छन् । उहाँले संख्याको बारेमा सोध्नुभयो । तिनले थाहा छैन भनी जवाफ दिए । प्रतिदिन कति उँट काटिन्छन् भनी सोध्नुभयो । तिनले जवाफ दिए, कुनै दिन ९ वटा र कुनै दिन १० वटा काटिन्छन् । त्यसपछि मुहम्मद ﷺ ले मानिसहरूको संख्या ९ सयदेखि एक हजारको बीचमा हुन सक्छ भनी अनुमान लगाउनुभयो । मुहम्मद ﷺ ले उनीहरूमध्ये प्रतिष्ठित व्यक्ति को को हुन् भनी सोध्नुभयो । तिनले जवाफ दिए, रबीआका दुइ जना छोरा उत्बा र शैबा, अबुल बख्तरी बिन हेशाम, हकिम बिन हेजाम, नौफल बिन खुलैद, हारिस बिन आमिर, तइमा बिन अदी, नजर बिन हारिस, जमआ बिन अस्वद, अबु जहल बिन हेशाम, उमैया बिन खल्फ त्यसैगरी अधिक केही व्यक्तिको नाम गनिदिए । मुहम्मद ﷺ ले साथीहरूतर्फ ध्यान केन्द्रित गरी भन्नुभयो, मक्कावासीले आफ्नो दिलको टुक्रालाई तिमीहरूकहाँ ल्याएर राखिदिएको छ ।

## कृपादृष्टिको वर्षा

अल्लाहले त्यसै दिन राती बहुदेववादीहरूमाथि यस्तो मुसलधारे वर्षा वर्षाए जसले उनीहरूको योजनालाई विफल तुल्यायो र त्यो वर्षा मुसलमानको निम्ति झरना झैं वर्षियो जसले उनीहरूलाई पवित्र गरिदियो, शैतानले गरेको फोहरलाई सफा गरिदियो र भूमिलाई अनुकूल बनाइदियो । वर्षाले गर्दा बलौटे जमिन सारो भयो तथा हिँड्न योग्य भयो, त्यहाँको बसाइँ सन्तुलन भयो र मनबोल पनि बढ्यो ।

## मुख्य फौजी केन्द्रतिर इस्लामी लश्कर बढ्दै

त्यसपछि मुहम्मद ﷺ ले आफ्नो लश्कर बहुदेववादीको लश्करभन्दा पहिला बदरको मुहानमा पुगेर बहुदेववादीलाई त्यहाँ कब्जा जमाउन नदिउन् भन्ने उद्देश्यले उनीहरूलाई सक्रिय गर्नुभयो । फलत बेलुकीतिर मुहम्मद ﷺ बदरको सबैभन्दा नजिकको मुहानमा झर्नुभयो । त्यस अवसरमा हब्बाब् बिन मुन्जिरले एक विशिष्ट योद्धाको हैसियतले सोधे : हे ! मुहम्मद ﷺ तपाइँ यस ठाउँमा जहाँबाट हामीलाई यताउता जाने ठाउँ नै छैन अल्लाहको आदेश भएको कारणले आउनु भएको हो कि वा तपाईंले केवल युद्धको रणनीतिको रूपमा यस्तो गर्नु भएको हो ? मुहम्मद ﷺ ले भन्नुभयो : यो केवल युद्धको रणनीति हो । उनले भने, त्यसो हो भने यो ठाउँ उचित

छैन । तपाईं अगाडि हिँडनुहोस् कुरैशको सबभन्दा नजिकको मुहानमा गएर बसौं । अनि हामीले बाँकी मुहान पनि विस्तार गर्न सक्छौ र आफ्नो मुहानमा इनार बनाएर पानी भर्न सक्छौं । त्यसपछि कुरैशसँग लडाइँ गर्दा हामीसँग पानीको कमी हुने छैन र उनीहरू पानीविहीन हुने छन् । मुहम्मदﷺले भन्नुभयोः तिमीले धेरै राम्रो सल्लाह दियौ । त्यसपछि मुहम्मदﷺ लश्कर समेत उठनुभयो र मध्येरातमा शत्रुको सबैभन्दा नजिकको पानीको मुहानमा गएर बस्नुभयो । साथीहरूले इनार बनाएर बाँकी मुहान बन्द गरिदिए ।

## नेतृत्व केन्द्र

साथीहरू पानीको मुहानमा गएर बसिसकेपछि सअद् बिन् मुआज्ले एउटा सुझाव पेश गरे । हामीले मुहम्मदﷺको लागि एउटा नेतृत्व केन्द्र निर्माण किन नगरौं ? यदि कतै विजय हुनुको सट्टा पराजय भोग्नु पर्‍यो वा कुनै आपतविपत आइलाग्यो भने त्यसको लागि पहिलादेखि नै त्यहाँ तयार बस्न सकिने छ । त्यसपछि उनले भने : हे ईशदूत ! तपाईंको लागि एउटा छाप्रो हामी किन नबनाऔं ? जहाँ तपाईं बस्नु हुनेछ र हामीले तपाईंकहाँ सवारी पनि उपलब्ध गराउने छौं, त्यसपछि शत्रुसँग लड्ने छौं । यदि अल्लाहले हामीलाई विजय गरिदिए भने हाम्रो लागि राम्रो हुनेछ यदि यसको विपरित भयो भने तपाईं सवार भई पछाडि रहेका हाम्रा साथीहरूतर्फ जानु हुनेछ । वास्तवमा जुन साथीहरू पछाडि छन्, हे ईशदूत ! उनीहरूलाई तपाईंसँग हामी भन्दा बढी माया छ । यदि उनीहरूलाई तपाईंले युद्धको सामना गर्नु पर्छ भन्ने थाहा भएको भए उनीहरू कदापि पछाडि पर्ने थिएनन् । अल्लाहले तपाईंलाई उनीहरूद्वारा संरक्षण गर्नेछ । उनीहरू तपाईंका शुभचिन्तक बन्नेछन् र तपाईंको साथमा जिहाद गर्ने छन् ।

त्यो कुरा सुनेर मुहम्मदﷺले उनको प्रशंसा गर्नुभयो र उनको लागि प्रार्थना गर्नुभयो । मुसलनमानहरूले युद्धको मैदानको उत्तरतर्फ पहाडको टाकुरोमा एउटा छाप्रो बनाए । त्यहाँबाट युद्धको पूरा मैदान देखिन्थ्यो । त्यस नेतृत्व केन्द्रको संरक्षणको लागि सअद् बिन् मुआज्को कमाण्डोमा अन्सार जवानको एक दस्ता तैनात गरियो ।

## फौजको तरतिब र रात जाग्राम

त्यसपछि मुहम्मदﷺले फौजको तरतिब गरी युद्धको मैदानमा जानुभयो ।[१] त्यहाँ गएर भोलि यो फलानाको हत्यास्थल बन्ने छ भनी हातले इशारा गर्नुभयो । अल्लाहले चाहयो भने यो फलानाको हत्यास्थल बन्ने छ भनेर भन्नुभयो ।[२] त्यसपछि मुहम्मदﷺले त्यहीं एउटा रुखमूनि रात काट्नुभयो र मुसलमानले पनि सुरक्षित

१ तिर्मिजी भाग १ अध्याय : जिहाद
२ सही मुस्लिम, मिश्कात भाग २/५४३

रूपमा विहानीको उज्यालोसम्म रात विताए । उनीहरूको मनमा विश्वास थियो र उनीहरूले अमन चैनसँग आफ्नो भाग प्राप्त गरे । उनीहरूलाई हामीले आफ्नो आँखाले आफ्नो ईश्वरले दिएको शुभसूचना देख्ने छौं भन्ने आशा थियो ।

स्मरण गर जब तिम्रो पालनकर्ताले तिमीलाई अमन र भयरहित वातावरणमा सुताइदिएका थिए । तिमीलाई पवित्र गर्न, तिमीबाट शैतानको फोहर सफा गर्न, तिम्रो मनोबल बढाउन र तिम्रो कदम बलियो बनाउन तिम्रो पालनकर्ताले तिमीमाथि आकाशबाट वर्षा वर्षाएका थिए ।

त्यो १७ रमजान २ हिजरी शुक्रबारको रात थियो । मुहम्मदﷺ मदिनाबाट त्यस महिनाको ८ वा १२ तारिखमा हिंडनु भएको थियो ।

## युद्धको मैदानमा मक्की लश्करको आगमन र उनीहरूको आपसी विवाद

अर्को तर्फ कुरैशहरू उपत्यकाबाहिर आफ्नो केम्पमा रात गुजारेर विहान आफ्नो सबै फौजी दस्तासमेत डाँडोबाट झरेर बदरको मैदानतिर लागे । एउटा समूह मुहम्मदﷺ भएको इनारतिर बढ्यो । मुहम्मदﷺले उनीहरूलाई छाड्नुभयो । तर उनीहरूमध्ये जसले त्यहाँको पानी खाएको थियो त्यो युद्धमा उसको हत्या पनि गरियो । उनीहरूमध्ये हकिम बिन हेजाम बचेका थिए । उनले पछि इस्लाम कबुल गरी उनी एक सच्चा मुसलमान बने । कहिलेकाहीँ ठोस् कसम खानु पर्दा कसम खान्छु त्यो जातको जसले मलाई बदरको युद्धमा बचायो भन्ने उनको बानी नै बसेको थियो ।

अत: कुरैशहरू निर्धक्क भएपछि उनीहरूले मदनी फौजको शक्ति बारे पत्ता लगाउन उमैर बिन् वहब् हजमीलाई पठाए । उमैर घोडामा सवार भई फौजतिर घुमेर फर्क्यो र आफ्नो गुटमा आएर भन्यो तीन सयमा घटीबढी फौज छन् । तर उ केही बेर अडियो र भन्यो : म हेर्छु उनीहरूको लुक्ने ठाउँ वा कुनै सहयोगी टोली त छैन ? त्यसपछि उ उपत्यकामा घोडा दौडाउँदै टाढासम्म पुग्यो तर उसले केही देखेन । फर्केर आयो र भन्यो मैले त केही भेटाइन । तर हे ! कुरैशका मान्छे हो, मैले धेरै आपतको अनुभूति गरेको छु जसले मृत्युलाई बोकेको छ । यस्रिबका उँटले आफुमाथि केवल मृत्यु बोकेका छन् । यी ती व्यक्ति हुन् जसको संरक्षक र शरण स्वयम उनीहरूका तरवार छन् अरु केही छैन । अल्लाहको कसम उनीहरूको हरेक व्यक्तिले तिमीहरूको हत्या गर्ने छ । उनीहरूले तिमीमध्ये विशिष्ट व्यक्तिलाई मारे भने बाँच्नुको के अर्थ रहन्छ र ? तसर्थ राम्रोसँग सोचविचार गर्नुहोस् ।

त्यस अवसरमा लडाइँ गर्न तम्सिएको अबु जहलसँग झगडा हुन थाल्यो । उनीहरूको युद्धविना मक्का फर्कने माग थियो । फलस्वरूप हकिम बिन हेजामले मान्छेहरूबीच कसरत गर्न थाल्यो । उसले उत्बा बिन् रबिआसमक्ष गएर भन्यो । हे ! अबु वलिद, तपाईं कुरैशका महान र मान्य सरदार हुनुहुन्छ । तपाईंबाट एउटा राम्रो काम किन नहोस् जसले गर्दा तपाईंको नाम भलादमीको रूपमा चलिरहने छ ।

उत्बाले सोध्यो त्यो कुन काम हो ? उसले भन्यो, तपाइँ फौजलाई फिर्ता बोलाउनु होस् र तपाईंको मित्र अमर् बिन् हज्रमी जुन नख्लाको लडाइँमा मारिएका थिए उनको मामिला आफ्नो हातमा लिनुहोस् । उत्बाले भन्यो, मलाई मन्जुर छ यदि तिमी मेरो तर्फबाट ऊ मेरो मित्र हो भनी जमानी बस्छौ भने । उसको जरिमानाको पनि म जिम्मेवार हुनेछु र उसको जो सम्पत्ति नोक्सान भएको छ त्यसको पनि जिम्मेवार हुनेछु ।

त्यसपछि उत्बाले हकिम बिन् हेजामसँग भने तिमी हन्जलीयाको पुत्रकहाँ जाऊ किनभने मानिसका समस्यालाई विगार्ने र भत्काउनेमा ऊबाहेक कोही छैन । हन्जलीयाको पुत्र भनेको अबु जहल हो । हन्जलीया उसकी आमा थिइन् ।

त्यसपछि उत्बा बिन् रबिआले उभिएर भाषण गर्दै भने । हे ! कुरैशका मान्छे हो, तिमीहरूले मुहम्मद र उनका साथीहरूसित लडेर कुनै कृतिमान कायम गर्ने छैनौ । यदि तिमीहरूले उनको हत्या गऱ्यौ भने यस्ता अनुहार मात्र देखिने छन् जसलाई हेर्न राम्रो लाग्ने छैन । किनभने मानिसहरूले आफ्नो काकाको छोराको, सानिमाका छोराको वा आफ्नै खानदानका मानिसहरूको हत्या गर्नेछन् । त्यसकारण हिँड मुहम्मद र उनका साथीबाट अलग बस । यदि अरबले उनीहरूको हत्या गऱ्यो भने तिमीले चाहे जस्तो हुनेछ यदि अन्य कुनै कुरा भयो भने मुहम्मदﷺले तिमीहरूलाई उनी विरुद्ध गर्न खोजेको व्यवहार नगरेको अवस्थामा पाउने छन् ।

उता हकिम् बिन् हेजाम् अबु जहलकहाँ पुग्दा उ आफ्नो फलामे युद्धवस्त्र लगाउँदै थियो । उनले भने : हे अबुल हकम, मलाई उत्बाले तपाईंकहाँ यो यो संदेश दिएर पठाएका छन् । अबु जहलले भन्यो, अल्लाहको कसम मुहम्मद र उनका साथीलाई देखेर उत्बाको छाती फुलेको छ । मलाई मान्य छैन । अल्लाहको कसम हामी फर्केर जादैनौं जबसम्म मुहम्मद र हामीबीच अल्लाहले निर्णय गर्दैनन् । उत्बाले जे भनेका छन् मुहम्मद र उसका साथीलाई केवल उँटखोर सम्झेर भनेका छन् , स्वयम उत्बाको छोरा पनि उनीहरूको बीचमा छन् त्यसकारण उसले तिमीहरूलाई डर देखाएको हो । उत्बाका छोरा अबु हुजैफा पहिलेदेखि नै इस्लाममा थिए । हिजरत गरेर मदिना आएका थिए । अबु जहलले उत्बाको डराएको छ भनेको कुरा उत्बालाई थाहा भयो र उनले भने पुठामा सुगन्ध लगाएर दुर्वल्ताको प्रदर्शन गर्नेहरूलाई छिटो नै थाहा हुनेछ, को डराएको छ भन्ने कुरा । उता अबु जहलले यो विवाद अँझ चर्कन्छ कि भन्ने डरले त्यस कुराकानी पछि तुरुन्तै आमिर बिन हज्रमीलाई जो अब्दुल्लाहको नेतृत्वमा लडिएको लडाइँमा मारिएका अमर बिन हजरमीको भाइलाई बोलाउन पठायो र भन्यो : तिम्रो मित्र उत्बाको मनसाय मानिस फिर्ता होउन् भन्ने छ जब कि तिमीले लिने बदला तिम्रो आँखाको अगाडि छ । तसर्थ उठ आफुमाथि गरिएको अत्याचार र आफ्नो भाइको हत्याको शोक व्यक्त गर । त्यो

कुरा सुनेर आमिर आफ्नो धोती उठाएर चिच्याउन थाल्यो हाय अमर ! हाय अमर । त्यो देखेर मानिसहरू ताते । उनीहरूको समस्या जटिल हुँदै गयो र युद्ध गर्ने ठोस् निर्णय भयो । उत्बाले जुन सल्लाह दिएको थियो काम लागेन । यसरी उनीहरूको जोश जाँगर प्रबल भयो र विवाद पनि निरर्थ रह्यो ।

## दुवै फौज आमुन्ने सामुन्ने

अन्ततः बहुदेववादीहरूको लस्कर निस्क्यो । दुवै फौज आमुन्ने सामुन्ने भएपछि मुहम्मदﷺले भन्नुभयो : हे अल्लाह, यी कुरैश हुन् जसले एकदमै घमण्ड गरी तिम्रो विरोध गरेका छन् र तिम्रो दूतलाई मिथ्या ठानेका छन् । हे ! अल्लाह तिम्रो मदत चाहन्छौं जसको तिमीले बचन दिएका छौ । हे ! अल्लाह आज उनीहरूलाई निमोठेर राख्देऊ ।

मुहम्मदﷺले उत्बा बिन शैबालाई रातो रंगको उँटमाथि बसेको देखेर भन्नुभयो : यदि त्यो समूहमा कसैसँग भलाई छ भने रातो रंगको उँटमा बसेको व्यक्तिसँग छ । यदि उनीहरूले उसको कुरा माने भने सही मार्ग पाउने छन् ।

त्यसपछि मुहम्मदﷺले मुसलमान फौजको ताँतीलाई मिलाउनुभयो । ताँती मिलाउँदा एउटा आश्चर्यजनक घटना घट्यो । उहाँको हातमा एउटा तीर थियो । त्यो तीर लिएर ताँती मिलाउँदै हुनुहुन्थ्यो । मुहम्मदﷺले सवाद बिन् गाजिया जो ताँतीभन्दा अलि अगाडि निस्केका थिए उनको पेटमा तीर घोचेर भन्नुभयो : हे सवाद सिधा होऊ । सवादले भने : हे ईशदूत, तपाईंले मलाई घोच्नुभयो । मलाई त्यसको बदला चाहियो । उहाँले आफ्नो पेट खोलेर भन्नुभयो ल बदला लेऊ । सवादले उहाँको पेटमा समातेर पेटमा चुम्बन दिए । उहाँले भन्नुभयो, यस्तो क्रियाकलाप गर्न तिमीलाई कसले भन्यो ? उनले जवाफ दिए, हे ईशदूत जे हुनेवाला छ तपाईंलाई थाहा छ । त्यस अवसरमा अन्तिम चीज तपाईंको छालासँग मेरो छाला छोइयोस् भन्ने मैले चाहेको थिएँ । त्यो देखेर मुहम्मदﷺले उनको लागि प्रार्थना गर्नुभयो ।

जब फौजको ताँती ठीक भयो अनि मुहम्मदﷺले फौजलाई निर्देशन दिदै भन्नुभयो मेरो अन्तिम निर्देशन नभएसम्म युद्ध आरम्भ नगरियोस् । त्यसपछि युद्धको रणनीति बारे विशेष निर्देशन दिदै उहाँले भन्नुभयो जब कुरैश हुल बनेर तिम्रो नजिक आयो भने उनीहरूमाथि तीर चलाऊ तर आफ्नो तीर बचाउने प्रयास पनि गर[१] । अर्थात त्यतिकै तीर खेर नफाल । जबसम्म उनीहरूले तिमीमाथि आक्रमण गर्दैनन् तबसम्म आफ्नो तरबार ननिकाल ।[२] त्यसपछि मुहम्मदﷺ र अबु बकर छाप्रोतिर

१ सही बुखारी भाग २/५६८
२ अबु दाऊद भाग २/१३

फर्केर जानुभयो र सअद् बिन् मुआज् आफ्नो सुरक्षा बल लिएर छाप्रोको ढोकामा तैनात भए ।

अर्को तर्फ बहुदेववादीको अवस्था के थियो भने अबु जहलले निर्णयको लागि अल्लाहसँग प्रार्थना गरेको थियो । उसले भन्यो, हे अल्लाह हामीमध्ये आफ्नो नातेदारको बढी हत्या गर्ने र गलत क्रियाकलाप गर्नेहरूलाई आज टुक्रियाइदेऊ । हामीमध्ये तिम्रो नजिक जो समूह बढी प्यारो छ आज उसलाई मदत गर । पछि त्यसै कुरालाई लक्षित गर्दै अल्लाहले एक वाणी अवतरण गरे ।

यदि तिमीहरूले निर्णय चाहेको भए निर्णय आइसकेको छ । यदि तिमी रोकियौ भने यो तिम्रो लागि उचित हुनेछ । यदि तिमी आफ्नो क्रियाकलापमा फर्क्यौ भने हामी पनि फर्कने छौं । तिम्रो अत्यधिक संख्या तिम्रो काम आउन सक्दैन । याद राख अल्लाह मोमिनहरूको साथमा छ ।

## युद्धको पहिलो सिकार

त्यस युद्धको पहिलो सिकार अस्वद् बिन् अब्दुल असद् मख्जुमी बनेको थियो । त्यो व्यक्ति अति नै अडाहा, घमण्डी र नैतिकहीन थियो । म अल्लाहसँग के प्रतिज्ञा गर्दछु भने कि त उनीहरूको कुवाको पानी पिएर छाड्छु कि त्यसलाई भत्काउँछु वा त्यसको लागि ज्यानको आहुती दिन्छु भन्दै ऊ मैदानमा निस्क्यो । जब ऊ उताबाट निस्क्यो अनि मुस्लिमहरूको तर्फबाट हमजा बिन् अब्दुल मुत्तलिब निस्के । दुवै पक्षको झडप कुवानिर नै भयो । हमजाले यस्तरी तरवार हाने कि उसको खुट्टा तिघ्राको बिचबाट चुँडिएर उछुट्यो र उत्तानो पछाडियो । उसको खुट्टाबाट छुटेको रगतको धार उनीहरूतिरै फर्केको थियो । यति हुँदाहुँदै पनि घुँडाले टेकेर घिस्रदै ऊ कुवातिर बढ्यो । आफ्नो कसम पुरा गर्न कुवाँमा पस्न लाग्दा हमजाले दोस्रो चोटि हाने र ऊ कुवाभित्र नै मर्‍यो ।

## लडाइँ

यो त्यस युद्धको पहिलो हत्या थियो । जसले गर्दा युद्धको आगो झन् दन्कियो । फलस्वरूप कुरैशको तर्फबाट एकै खानदानको तीन जना विशिष्ट योद्धाहरू निस्के । उनीहरूमध्ये एक जना उत्बा थियो । दोस्रो उसको भाई शैबा थियो । उनी दुवै रबिआका छोरा थिए । तेस्रो वलिद् बिन् उत्बा थियो । उनीहरूले आफ्नो पंक्तिबाट निस्कने वित्तिकै लड्ने निम्तो दिए । उनीहरूको प्रतिकारमा अन्सारको तर्फबाट पनि तीन जना जवान निस्के । एक जना औफ् थिए भने दोस्रो मुऔविज् । उनी दुवै हारिस्का छोरा थिए । उनको आमाको नाम अफ्रा थियो । तेस्रो व्यक्ति अब्दुल्लाह बिन् रवाहा थिए । कुरैशीहरूले सोधे तिमी को हौ ? हामी अन्सारको एक जमात हौं भनी उनीहरूले जवाफ दिए । कुरैशीहरूले भने तिमीहरू मुकाबला गर्न आएका छौ तर हामीलाई तिमीहरूसँग कुनै सरोकार छैन । हामीलाई त आफ्ना काकाका

छोराहरू चाहिएका छन् । त्यसपछि उनीहरूको आवाज दिने व्यक्तिले आवाज दियो । हे मुहम्मद, हामीकहाँ कुरैश खानदानका बहादुरहरूलाई पठाउ । मुहम्मदﷺले भन्नुभयो : हे उबैदा बिन् हारिस् उठ, हमजा उठनु होस् र अली उठ । उनीहरू उठेर कुरैश नजिक गएपछि कुरैशीहरूले सोधे । तिमीहरू को हौ ? उनीहरूले आआफ्नो परिचय दिए । कुरैशीहरूले सोधे, के तिमीहरू लड्न आएका हौ ? त्यसपछि लडाइँ शुरु भयो । उबैदा बिन् हारिसले जो सबैभन्दा बृद्ध थिए उत्बासँग मुकाबेला गरे । त्यसैगरी हमजाले शैबासँग र अलीले वलिद[1]सँग मुकाबेला गरे । हमजा र अलीले आफ्नो प्रतिस्पर्धीलाई तुरुन्तै मारिदिए तर उबैदा र उनका प्रतिस्पर्धीले एकएक प्रहार गरी एकअर्कालाई घाइते बनाए । अली र हमजा आफ्नो सिकारलाई सिद्धयाएर उत्बामाथि झम्टे र उसलाई पनि सिद्धयाइदिए अनि उबैदालाई उठाएर ल्याए । उनको खुट्टा काटिएको थियो, बोली पनि बन्द भएको थियो । उनको बोली निरन्तर बन्द रह्यो र युद्धको चौथो वा पाचौं दिन मुसलमान मदिना फर्केर सफरा नामक उपत्यकाबाट जाँदै गर्दा उनको मृत्यु भयो ।

अलीले कसम खाएर भने : निम्न वाणी हाम्रो बारेमा अवतरण भएको हो ।

هَٰذَانِ خَصْمَانِ اخْتَصَمُوا فِي رَبِّهِمْ (الحج: 19)

यी दुवै पक्षले आफ्नो पालनकर्ताको बारेमा विवाद गरेका छन् । (अल् हज:१९)

## मानिसको ठूलो जमघट्

त्यस लडाइँको शुरूमा नै बहुदेववादीले खराब परिणाम देख्नु पऱ्यो । उनीहरूले प्रारम्भिक आक्रमणमा नै आफ्नो तीन जना विशिष्ट योद्धा कमाण्डरहरू गुमाउनु पऱ्यो । त्यसकारण रिस र क्रोधले चुरिएर उनीहरूले एक जनामाथि एक्कासी आक्रमण गरे ।

अर्कोतर्फ मुसलमानहरू अल्लाहसँग सहयोगको लागि प्रार्थना गर्नुका साथै उसको समक्ष हार्दिकता एवं विवशता जाहेर गरी आआफ्नो ठाउँमा अडिक भएर प्रतिकार गर्दै बहुदेववादीहरूको निरन्तर आक्रमणलाई रोकिरहे । उनीहरूलाई ठूलो नोक्सान पुऱ्याए । उनीहरूको नारा थियो अहद् अहद् अर्थात इश्वर एउटै छन् ईश्वर एउटै छन् ।

## मुहम्मदﷺको प्रार्थना

उता मुहम्मदﷺ पंक्ति मिलाएर फर्केपछि अल्लाहसँग मदत र मदत गर्ने बचन पूरा गर्नको लागि प्रार्थना गर्न लाग्नुभयो । उहाँको प्रार्थना निम्न प्रकार थियो :

---

१ इब्ने हेशाम, मुस्नद अहमद, अबु दाऊदमा भिन्नभिन्न भनाइ छ । मिश्कात भाग २ अनुसार उबैदाहले वलिदसँग र अलीले शैबासँग मुकाबिला गरेका थिए ।

(اللهم انجز لی ما وعدتنی. اللهم انشدك عهدك و وعدك)

अनुवाद छ : हे अल्लाह, मलाई दिएको आफ्नो बचन पुरा गरिदिनु । हे अल्लाह, मैले तपाईंले गरेको प्रतिज्ञा र बचनको माग गर्दैछु ।

जब घमासान लडाइँ शुरु भयो, घम्साघम्सीको युद्ध भयो र युद्ध झन् चर्क्यो तब मुहम्मदﷺले यो प्रार्थना गर्नुभयो :

(اللهم ان تهلك هذه العصابة اليوم لا تعبد. اللهم ان شئت لم تعبد بعد اليوم ابدا)

अनुवाद छ : हे अल्लाह, आज हाम्रो समूहको नाश भयो भने तपाइँ उपासना हुने छैन । हे अल्लाह, तपाईंले चाहनुभयो भने आजबाट तपाईंको उपासना कहिल्यै हुने छैन ।

मुहम्मदﷺले विवशताका साथ प्रार्थना गर्दा उहाँको काँधबाट बर्को पनि खस्यो । अबु बकरले बर्को उठाउँदै भने : हे ईशदूत, भयो भयो, विश्राम गर्नुहोस् । तपाईंले आफ्नो पालनकर्तासँग बढो विवशताका साथ प्रार्थना गर्नुभयो उता अल्लाहले फरिश्तालाई वाणी दिएर पठाए । मैले हजारौं फरिश्ताहरूबाट तिम्रो मदत गर्नेछु जो अगाडि पछाडि आउने छन् ।

## फरिश्ताको अवतरण

मुहम्मदﷺ एक चोटि निदाउनुभयो अनि मुहम्मदﷺले टाउको यसो उठाएर भन्नुभयो : अबु बकर खुसी होउ, यिनी जिब्रइल हुन् जो धुलोमैलो अवस्थामा छन् । इब्ने इस्हाकले वर्णन गरेको हदिस अनुसार मुहम्मदﷺले भन्नुभयो, अबु बकर खुसी होउ तिमीहरूमाथि अल्लाहको मदत आयो । यिनी जिब्रइल हुन् । उनले घोडाको लगाम समातेका छन् र त्यसको अगाडि अगाडि आउदै छन् साथै उनी धुलोमैलो भएका छन् ।

त्यसपछि मुहम्मदﷺ छाप्रोबाहिर निस्कनुभयो । उहाँले फलामे युद्धवस्त्र लगाएर जोशमा अगाडि बढ्दै भन्नुभयो : यस जथ्थाले छिटो नै पराजय भोग्ने छ र वापस भाग्ने छ ।

त्यसपछि उहाँले एक मुठी कन्करी माटो लिनुभयो र अनुहार बिग्रोस् भन्दै त्यो माटो उनीहरूको अनुहारमा फ्याक्नुभयो । बहुदेववादीहरूमध्ये हरेकको मुख,आँखा तथा नाकमा त्यो माटो पऱ्यो । त्यसैको बारेमा अल्लाहले भनेका छन् :

माटो तिमीले फ्याँकेको होइन त्यो त अल्लाहले फ्याँकेका हुन् । (८:१७)

## प्रतिकारात्मक आक्रमण

त्यसपछि मुहम्मदﷺले प्रतिकारात्मक आक्रमण गर्ने आदेश दिनुभयो । युद्धको लागि प्रोत्साहित गर्दै भन्नुभयो, आक्रमण गर । त्यो जातको कसम जसको हातमा मुहम्मदﷺको ज्यान छ तिनीहरूको विरुद्ध जुन व्यक्तिले अडिक भई पुण्य सम्झदै

अगाडि बढेर युद्ध गर्नेछ र त्यसमा मारिनेछ अल्लाहले उसलाई स्वर्गमा अवश्य प्रवेश गराउनेछ ।

उहाँले युद्धतर्फ प्रेरित गर्दै भन्नुभयो त्यो स्वर्गतर्फ बढ जसको चौडाइ आकाश र पाताल बराबर छ । त्यो सुनेर उमैर बिन् हम्माम्ले भने : मुहम्मदﷺले धेरै राम्रो कुरा भन्नुभयो । तिमीले धेरै राम्रो कुरा हो भनेर किन भनेका हौ ? उनले भने : म पनि स्वर्गवासीहरूमध्ये हुन्छु भन्ने आशाले । मुहम्मदﷺले भन्नुभयो तिमी पनि स्वर्गवासीहरूमध्ये हुनेछौ । त्यसपछि आफ्नो झोलीबाट केही खजुर निकालेर खान लाग्दा उनले भने : खजुर खान लाग्यो भने ढिलो हुन्छ । तसर्थ उनी आफ्नो खजुर फ्याँकेर बहुदेववादीहरू विरुद्ध लड्न गए र लड्दा लडदै शहिद भए ।[१]

त्यसैगरी प्रख्यात महिला अफ्राको छोरा औफ् बिन् हारिस्ले मुहम्मदﷺसँग सोधे : हे ईशदूत, अल्लाह उपासकको कुन कुराले मुस्काउँछ ? मुहम्मदﷺले जवाफ दिदै भन्नुभयो : शरीरमा फलामे युद्धवस्त्र नलगाई दुस्मन विरुद्ध युद्ध गर्नाले । त्यो सुनेर औफ्ले आफ्नो ज्यानबाट युद्धवस्त्र निकालेर तरवार लिएर दुस्मनमाथि झम्टे त्यसपछि लड्दा लड्दै शहिद भए ।

जुन बेला मुहम्मदﷺले प्रतिकारात्मक आक्रमणको आदेश जारी गर्नु भएको थियो त्यतिखेर दुस्मनको आक्रमण कम भइसकेको थियो र उनीहरूको जोशजाँगर पनि सेलाइसकेको थियो । तसर्थ त्यो तत्वदर्शी योजनाले मुसलमानको स्थितिलाई झनै बलियो बनायो । जुन बेला मुहम्मदﷺका साथीहरूलाई युद्ध गर्ने आदेश भयो त्यतिखेर उनीहरूभित्र जिहादप्रतिको जोशजाँगर प्रबल थियो । फलस्वरूप उनीहरूले भीषण आक्रमण गरे । उनीहरू कुरैशी यौद्धाहरूको ताँतीलाई छिचोल्दै उनीहरूको टाउको काट्दै अगाडि बढे । उनीहरूको जोशजाँगरमा झन् बृद्धि भयो । किनभने मुहम्मदﷺ स्वयम फलामे युद्धवस्त्र लगाई तीव्रगतिमा आउदै हुनुहुन्थ्यो । उहाँले उनीहरूलाई दृढ विश्वासका साथ भन्नुभयो, त्यो जथ्थाले छिटो नै पराजय भोग्ने छ र आफ्नो पिठ्युं फर्काएर भाग्ने छ । त्यसकारण मुसलमानहरू जोशजाँगरका साथ लडे र फरिश्ताहरूले पनि उनीहरूको मदत गरे । तसर्थ इब्ने सइद्ले वर्णन गरेको हदिसमा अक्रमाले भनेका छन् त्यो दिन मानिसहरूको टाउको तनबाट अलग भइरहेको थियो तर कसले काट्यो त्यो थाहा हुदैन थियो । हात काटिएर चुडिन्थ्यो तर कसले चुडाल्यो त्यो थाहा हुँदैन थियो । इब्ने अब्बासले भनेका छन् एक जना मुसलमानले एक जना बहुदेववादीको पिछा गर्दै थियो अचानक बहुदेववादीमाथि कोर्रा हानेको आवाज आयो । एक जना सवार योद्धाको आवाज सुनियो । उसले अगाडि बढ भन्दै थियो । मुसलमानले आफ्नो अगाडि बहुदेववादीलाई ढलेको देखे । हेर्दा कोर्राले

---

१ मुस्लिम, मिश्कात भाग २

लागे जस्तै उसको नाकमा चोट लागेको थियो । अनुहार फुटेको थियो । अनुहार पुरै निलो भएको थियो । अन्सारी मुसलमानले मुहम्मदﷺकहाँ आएर त्यस घटना बारेमा बताउँदा मुहम्मदﷺले भन्नुभयो तिमीले ठीक भनेका छौ । त्यो तेस्रो आकाशीय मदत थियो ।[१]

अबु दाउद् माजनी भन्छन् : म एक बहुदेववादीलाई हान्न दौडदै थिएँ मेरो तरवार लाग्नुभन्दा पहिला नै अचानक उसको टाउको काटियो । त्यसको हत्या मबाहेक अरु कसैले गरेको छ भन्ने कुरा मैले बुझें ।

एक अन्सारीले अब्बास बिन अब्दुल मुत्तलिबलाई गिरिफ्तार गरी ल्याउँदा अब्बासले भन्न थाले : अल्लाहको कसम मलाई यसले गिरिफ्तार गरेको होइन , मलाई त एक जना कपाल नभएको मान्छेले गिरिफ्तार गरेको हो जो अति सुन्दर थियो र शीरमा सेतो धार भएको घोडामाथि सवार थियो । यी मानिसहरूबीच देखिएको छैन । अन्सारीले भने : होइन, हे ईशदूत मैले गिरिफतार गरेको हुँ । मुहम्मदﷺले भन्नुभयो: तिमी चुप लाग अल्लाहले एक असल बुजरुक फरिश्ताद्वारा तिम्रो मदत गरेका हुन् ।)

अली भन्छन्, मुहम्मदﷺले बदरको दिन म र अबु बकरसँग भन्नुभएको थियो, तिमी दुवैमध्ये एक जनासँग फरिश्ता जिब्रइल र अर्कासँग मिकाइल छन् । त्यसैगरी इस्राफील पनि एक बुजरुक फरिश्ता हुन् जो युद्धमा आउने गर्छन् ।[२]

## मैदानबाट शैतान इब्लीस फरार

धुत्कारिएको शैतान सुराका बिन मालिकको रूपधारण गरी आएको थियो भन्ने कुरा माथि उल्लेख भइसकेको छ । ऊ अँझै बहुदेववादीहरूसँगै थियो । बहुदेववादीहरूको विरुद्धमा फरिश्ताको कारवाही देखेर ऊ पछाडि फर्केर भाग्न लाग्दा हारिस् बिन् हेशामले समात्यो । उसले उसलाई सुराका बिन मालिक नै हो भन्ने ठान्यो । शैतान इब्लीसले हारिसको छातीमा जोरले घुस्सा हान्दा ऊ त्यहीं ढल्यो र ऊ भाग्न सफल भयो । बहुदेववादीहरूले भन्न थाले । सुराका कहाँ जादै छौ ? के तिमीले हामीलाई आफ्नो सहयोगी भन्दै हामीबाट अलग नहुने कुरा गरेका थिएनौ ? उसले जवाफ दियो । मैले त्यो चीज देखेको छु जुन तिमीहरूले देखेका छैनौ । मलाई अल्लाहको डर लागेको छ र अल्लाह अति कडा सजाय दिने वाला छन् । त्यति भनेर ऊ भाग्दै समुन्द्रतिर गयो ।

---

१ सही मुस्लिम भाग २

२ मुस्नद अहमद भाग १, मुस्तदरद हाकिम भाग ३, उनले यसलाई सही भनेका छन् । जहबीले समर्थन जनाएका छन् । मुस्नद अबु याला भाग १

## पराजय सुनिश्चित भएको घोषणा

केही छिनापछि नै बहुदेववादीहरूको फोजमा पराजय र सङ्कटका संकेतहरू देखिन थाले । मुसलमानहरूको निरन्तर आक्रमणबाट उनीहरूको पंक्ति तितरवितर हुन थाल्यो र लडाइँ आफ्नो अन्तिम परिणामको नजिक पुग्यो । त्यसपछि बहुदेववादीहरूको जथ्था छितरिएर पछि हट्यो । उनीहरूमा भागदौड मच्चिन थाल्यो । मुसलमानहरूले उनीहरूलाई मार हान्दै, ढाल्दै र समात्दै उनीहरूको पिछा गरे । यसरी उनीहरूले पूर्णरूपमा पराजय भोग्नुपर्‍यो ।

## अबु जहलको हठ

सबैभन्दा ठूलो विद्रोही अबु जहलले आफ्नो फौजको पंक्तिमा संकटका प्रारम्भिक संकेत देख्दा पनि उ त्यस भेलको अगाडि डट्न खोज्यो । तसर्थ उसले हठ तथा अहंकार गर्दै आफ्नो फौजलाई गुहार्दै भनिरहेको थियो : सुराका पाखा लाग्यो भन्दैमा तिमीहरूले हिम्मत हार्नु हुँदैन किनभने उसले मुहम्मदﷺसँग पहिला देखिनै साँठगाँठ गरेको थियो । तिमीमाथि उत्बा,शैबा र वलिदको हत्याको त्रास पनि हुनु हुँदैन किनभने उनीहरूले आत्तिएर काम गरेका थिए । लात र उज्जाको कसम ! जबसम्म हामीले उनीहरूलाई रस्सीमा कसेर बाँध्ने छैनौं तबसम्म हामी फर्कने छैनौं । हेर, उनीहरूको हत्या गर्नुभन्दा उनीहरूलाई गिरिफतार गर्ने गर । किनभने यसरी हामीले उनीहरूलाई उनीहरूको कर्मको पूर्ण मजा चखाउन सक्छौं ।

उसको घमण्डको पोल तुरुन्तै खुल्यो । किनभने मुसलमानको प्रतिकारात्मक आक्रमणले गर्दा केही छणमा नै उनीहरूको फौजी ताँती फाट्न थाल्यो । तर अबु जहल भने अँझै पनि आफ्नो साथीहरूको एउटा समूहमाझ डटिरहयो । त्यो समूहले अबु जहलको चारैतिर तरवार तथा वाणको छेकवार बनाएको थियो । इस्लामी जुलुसको आँधीले त्यो बार पनि भत्काइदियो । त्यहाँ त्यो ठूलो विद्रोही देखियो । मुसलमानहरूले उसलाई एउटा घोडामा सवार भई घुमिरहेको देखे । उता उसको काललें दुई जना अन्सारी जवानद्वारा उसको रगत चुस्ने प्रतीक्षा गरिरहेको थियो ।

## अबु जहलको हत्या

अब्दुर्रहमान् बिन् औफ् भन्छन् : म बदरको युद्धको दिन फौजीपंक्तिभित्र थिएँ । पछाडि यसो फर्केर हेर्दा दायाँ बायाँ दुई जना जवानलाई देखें । उनीहरूलाई देखेर म चकित भएँ । उनीमध्ये एक जनाले आफ्नो साथीले चाल नपाउने गरी मसँग सुटुक्क सोध्यो । काका ! अबु जहल को हो ? मलाई देखाइदिनु न । मैले भने, बाबु के गर्ने हो र ? जवाफमा भन्यो : उसले मुहम्मदﷺलाई गाली गर्छ भन्ने कुरा थाहा पाएको छु । त्यो जातको कसम जसको हातमा मेरो ज्यान छ ! यदि मैले उसलाई देखें भने मेरो अस्तित्व उसको अस्तित्वबाट तबसम्म अलग हुने छैन जबसम्म

हामीमध्ये एक जना जसको मृत्यु पहिला लेखिएको छ मर्दैन । औफ् भन्छन् : उसको कुरा सुनेर म चकित भएँ । त्यति बेला नै एक अर्को जवानले मलाई इशारा गरी त्यही कुरा सोध्यो । औफ्को बयान छ, केही छणपछि मैले अबु जहललाई आफ्नो साथीहरूको माझमा घुमिरहेको देखेँ । मैले उनीहरूलाई भनेँ, ए ! बाबु देखेनौ ? त्यो हो तिमीहरूको सिकार जसको बारेमा तिमीहरूले सोध्दै थियौ । औफ भन्छन् : यति सुन्नु थियो कि उनी दुवै आआफ्नो तरवार लिई अबुजहलमाथि झम्टे र ऊमाथि तरवार प्रहार गरी उसको हत्या गरिदिए । उनी दुवै फर्केर मुहम्मदﷺकहाँ आए । मुहम्मदﷺले सोध्नुभयो : तिमीमध्ये कसले उसको हत्या गरेको हो ? दुवै जनाले आफुले गरेको दावी गरे । मुहम्मदﷺले सोध्नुभयो : के तिमीहरूले आफ्नो तरवार सफा गरिसक्यो ? उनीहरूले जवाफ दिए, गरेका छैनौँ । मुहम्मदﷺले दुईटै तरवार हेरेर भन्नुभयो : तिमी दुवै जनाले हत्या गरेका हौ । तर मुहम्मदﷺले अबुजहलको सामान मुआज् बिन् अमर् बिन् जमुहलाई दिनुभयो । ती दुवै आक्रमणकारीमध्ये एक जनाको नाम मुआज् बिन् अमर् बिन् जमुह र अर्को एक जनाको नाम मुआज् बिन् अफ्रा थियो ।[१]

इब्ने इस्हाकको बयान छ : मुऔविज बिन् अमर् बिन् जमुहको भनाई छ : वाण र तरवारको घना रूख जस्तो बारभित्र बसेको अबुजहलको बारेमा बहुदेववादीहरूले भनिरहेको थिए : अबुल हकमसम्म कसैको पहुँच नहोस् । त्यो कुरा मैले सुनेँ । मुआज् बिन् अमर् भन्छन् : जब मैले त्यो कुरा सुनेँ अनि मैले उसलाई आफ्नो निशाना बनाएँ र उसैतर्फ ध्यान केन्द्रित गरेँ । मौका पाउने बित्तिकै आक्रमण गरिहालेँ । ऊमाथि यस्तो तरिकाले प्रहार गरेँ कि उसको खुट्टा आधा तिघ्राबाट उछुट्टियो । अल्लाहको कसम, उसको खुट्टा ढिकीको कुटाईबाट उछुट्टिने गुठुली झैं उछुट्टियो । उनी भन्छन् : मैले अबुजहललाई मारेपछि उसको छोरा अक्रमाले मेरो काँधमा तरवार प्रहार गर्दा मेरो हात काटिएर मेरो पाखुराको छालामा झुण्डियो र म लडाइँमा लड्खडाउन थालेँ । म त्यो हात घिसार्दै पूरा दिन लडेँ । हात दुखेकोले त्यसलाई खुट्टा राखेर जोडले तानेँ र अलग गरिदिएँ ।[२] त्यसपछि अबुजहल भएको ठाउँमा मुऔविज् बिन् अफ्रा पुगे । ऊ घाइते अवस्थामा थियो । मुऔविज्ले ऊमाथि

१ सही बुखारी भाग १, मिश्कात भाग २, अन्य हदिसमा अर्को व्यक्तिको नाम मुऔविज बिन अफरा उल्लेख गरिएको छ, इब्ने हेशाम भाग १, अबु जहलको सबै सामान एक जनालाई मात्र दिइएको थियो । कारण मुऔविज बिन अफरा त्यसै युद्धमा शहीद भएका थिए । तर अबु जहलको तरवार भने अब्दुल्लाह बिन मस्उदलाई दिइएको थियो । किनकि उनले नै अबु जहलको टाउको काटेका थिए । अबु दाउद भाग २

२ मुआज बिन अमर बिन जमुह, उस्मानको राज्यकालसम्म जीवित थिए ।

प्रहार गरेपछि ऊ त्यहीँ ढल्यो । उसको अलिअलि साँस मात्र बाँकी थियो । त्यसपछि मुऔविज् बिन् अफ्रा पनि लड्दालड्दै शहिद भए ।

युद्ध समाप्त भएपछि मुहम्मदﷺले भन्नुभयो, अबुजहलको दुर्गति हेर्न को जान्छ ? त्यो कुरा सुनेर साथीहरु उसलाई खोज्न हिँडे । अब्दुल्लाह बिन् मस्उद्ले उसलाई साँस बाँकी रहेको अवस्थामा भेटाए । उनले उसको घाँटीमा आफ्नो लात्त राखे र उसको टाउको काटन उसको दाह्री समातेर भने : हे अल्लाहको शत्रु , अन्तिममा अल्लाहले तिम्रो अपमान गरे रै छाडे हैन ? उसले भन्यो मलाई के को अपमान गरेका छन् ? जुन व्यक्तिको तिमीहरूले हत्या गरेका छौ त्यो भन्दा महान व्यक्ति कोही छ ? वा जसलाई तिमीहरूले हत्या गरेका छौ त्योभन्दा उच्च व्यक्ति कोही छ ? त्यसपछि उसले भन्यो : आह ! मेरो हत्या यी किसानहरूले बाहेक अरूले नै गरेको भए हुन्थ्यो । त्यसपछि उसले सोध्यो : आज कसको विजय भयो ? अब्दुल्लाह बिन् मस्उद्ले जवाफमा भने : अल्लाह र उनको दूतको । अब्दुल्लाह बिन् मस्उद् उसको छातीमा खुट्टा राखेर बसे । त्यसपछि उसले अब्दुल्लाह बिन् मस्उद्सँग भन्यो : ए बाख्राको गोठाले तँ त अत्यन्तै उच्च र जोखिम ठाउँमा चडिस् । ज्ञात रहोस् अब्दुल्लाह बिन् मस्उद् मक्कामा बाख्रा चराउँथे ।

त्यस वार्तालापपछि अब्दुल्लाहले उसको टाउको काटेर मुहम्मदﷺको सेवामा उपस्थित हुँदै भने : हे ईशदूत, यो हो अल्लाहको शत्रु अबुजहलको टाउको । मुहम्मदﷺले तीन पटक अल्लाहको कसम खाएर भन्नुभयो , अल्लाह महान छन् , सम्पूर्ण प्रशंसा अल्लाहका लागि छन् , उनले आफ्नो बचन पुरा गरिदिए , उनले आफ्नो उपासकहरूको मदत गरे र एकलैले सबै दलहरूलाई पराजय गरिदिए ।

त्यसपछि उहाँले भन्नुभयो : हिँड मलाई उसको लास देखाओ । हामीले उहाँलाई लगेर उसको लास देखायौँ । उहाँले भन्नुभयो , यो यस समुदायको फेराउन हो ।

## इमानको उज्वल चमत्कार

उमैर बिन् हम्माम् र औफ् बिन् हारिस् बिन् अफराको इमानले भरिपूर्ण कृतिहरू पछाडिका पृष्ठहरूमा उल्लेख भइसकेको छ । वास्तविकता के हो भने यस युद्धको क्षणक्षणमा जुन घटनाहरू भए त्यसमा आध्यात्मिक शक्ति र ठोस रणनीति प्रबल थियो । त्यो युद्ध बाबु, छोरा र दाजुभाइबीच भएको थियो । तरवार खोलबाट नियमविपरित निस्केको थियो । यस युद्धमा अन्याय र अत्याचार गरिएका पीडित वर्गले अत्याचारी र विध्वंशकारी विरुद्ध लडाइँ गरी आफ्नो रिसको आगो निभाएका थिए ।

१ इब्ने इस्हाकले इब्ने अब्बास्मार्फत वर्णन गरेका छन् , मुहम्मदﷺले आफ्नो साथीहरूसँग भन्नुभयो : मलाई थाहा छ बनु हाशिमका केही व्यक्तिहरू युद्धमा

जवरदस्ती ल्याइएका छन् , उनीहरूलाई युद्धबारे कुनै चाँसो छैन । तसर्थ बनु हाशिमको कुनै व्यक्ति हामीमध्ये कसैको सामुन्ने आयो भने उसको हत्या नगरियोस्, अबुल बख्तर बिन हेशाम कसैको सामुन्ने परे भने उनको हत्या नगरियोस् र अब्बास बिन् अब्दुल मुत्तलिब पनि कसैको सामुन्ने परे भने उनको हत्या नगरियोस् किनभने उनीहरूलाई जवरदस्ती ल्याइएको हो । त्यो सुनेर उत्बाको छोरा हुजैफाले भने, हामीले आफ्नो छोरा, बाबु , दाजुभाइ र आफ्नो कबिलाका नातेदारको हत्या गरेको खण्डमा हामीले अब्बासलाई छोड्छौं र ? अल्लाहको कसम यदि ऊ मेरो सामुन्ने पऱ्यो भने मैले उसको घाँटीमा आफ्नो तरवारको माला लगाइदिने छु । त्यो कुरा मुहम्मदﷺले थाहा पाउनुभयो । त्यसपछि मुहम्मदﷺले उमरसँग भन्नुभयो, के ईशदूतको काकाको टाउकोमा पनि तरवार प्रहार गरिने छ र ? उमरले हुजैफाको बारेमा भनेः हे ईशदूत , मलाई अनुमति दिनुहोस् म हुजैफाको टाउको छिनेर ल्याउँछु किनभने ऊ मुनाफिक भएको छ ।

पछिपछि हुजैफाले भन्ने गर्थे मैले जुन कुरा गरेको थिएँ त्यसमा म आफैमा सन्तुष्ट थिइनँ । निरन्तर डर लागिरहन्थ्यो । मेरो शहादत प्राप्ति मात्रै त्यसको बदला बन्न सक्छ । अन्ततः उनी यमामहको युद्धमा शहिद भए ।

२ अबुल बख्तरीको हत्या गर्न किन रोकिएको थियो भने उनले मक्कामा मुहम्मदﷺलाई दुःख दिनुबाट आफ्नो हात रोकेका थिए । उहाँलाई कुनै प्रकारको दुःख दिदैनन् थिए । न त उनले कुनै नराम्रो कुरा गर्थे । साथै उनी ती व्यक्तिहरूमध्ये थिए जसले बनु हाशिम र बनु मुत्तलिबको बाइकाट बारे पोल खोलेका थिए ।

तर त्यति हुँदाहुँदै पनि अबु बख्तरीको हत्या गरियो । भयो के भने, मजदी बिन् जियाद् बलवीसँग उनको सामना भयो, उनको साथमा अर्को एक जना व्यक्ति पनि थियो । दुवै एक साथ लड्दै थिए । मजदीले भने, हे बख्तरी ! मुहम्मदﷺले हामीलाई तिम्रो हत्या गर्नबाट रोक्नु भएको छ । उनले भने, मेरो साथीको नि ? मजदीले भने, छैन । अल्लाहको कसम हामीले तिम्रो साथीलाई छाड्ने छैनौं । उनले भने , त्यसो भए हामी दुवै मर्छौं । त्यसपछि दुवैले लडाइँ शुरु गरिदिए र मजदीले बाध्यतावश उनको पनि हत्या गरिदिए ।

३ अज्ञानयुगदेखि नै अब्दुर्रहमान बिन् औफ् र उमैया बिन् खलफबीच आपसी मित्रता थियो । बदरको युद्धको दिन उमैया आफ्नो छोरा अलीको हात समातेर उभिइरहँदा उता अब्दुर्रहमान बिन् औफ् गए । उनले आफ्नो दुस्मनबाट केही युद्धवस्त्र खोसेर लैजादै थिए । उमैयाले उनलाई देखेर भने । के तिमीलाई मेरो आवश्यकता छ ? तिम्रो त्यो युद्धवस्त्रभन्दा म उत्तम छु । आजको दृश्य जस्तो त मैले कहिल्यै देखेको थिइनँ । तिमीलाई दूधको आवश्यकता छैन ? अर्थात जसले मलाई गिरिफतार गर्नेछ उसलाई मैले जरिमाना स्वरूप दूधालु उँटनीहरू दिनेछु । त्यो कुरा

सुनेर अब्दुर्रहमान् विन् औफ् युद्धवस्त्र फ्याँकेर ती दुवै बाबु छोरालाई गिरिफतार गरी अगाडि बढे ।

अब्दुर्रहमान भन्छन् म उमैया र उसको छोराको माभमा हिँडदै थिएँ । उमैयाले सोधे, तपाईंहरूमध्ये कसले आफ्नो छातीमा सुतुरमुर्गको प्वाँख लगाएको थियो ? मैले जवाफ दिएँ , हमजा विन अब्दुल मुत्तलिबले । उमैयाले भने : त्यही व्यक्तिले हाम्रो विनाश गरेको थियो ।

अब्दुर्रहमान भन्छन्, म ती दुवैलाई लिएर जादै थिएँ अचानक बेलालले उमैयालाई देखे । ज्ञात रहोस् कि उमैयाले मक्कामा बेलाललाई सताउँथ्यो । बेलालले उमैयासँग भनेः ओहो ! नास्तिकको नाइके उमैया विन खलफ, अब कि त म बाँच्छु कि तिमी बाँच्छौ । मैले भने, ए बेलाल ! ऊ मेरो कैदी हो । बेलालले भने कि त यो रहने छ कि म रहनेछु । बेलालले चिच्याएर आवाज दिदै भने : हे अन्सारी हो, ऊ हो नास्तिकको नाइके उमैया विन खलफ, अब कि त म बाँच्छु कि यो बाँच्छ । अब्दुर्रहमान भन्छन् त्यतिखेरै मान्छेहरूले हाम्रो घेराउ गरे । मैले बचाउ गर्दागर्दै एक जनाले आफ्नो तरवार निकालेर उसको छोराको खुट्टामा हान्यो र उ छटपटाउँदै ढल्यो । उता उमैया यति जोडले चिच्यायो त्यस्तो चिच्याहट मैले कहिल्यै सुनेको थिएन । मैले उसलाई भने : भाग, तर आज भाग्ने ठाउँ पनि छैन । अल्लाहको कसम, म आज तिम्रो केही काम आउन सक्तिनँ । अब्दुर्रहमान भन्छन् : मानिसहरूले ऊी दुवैलाई तरवारले काटेर हत्या गरिदिए । पछिपछि अब्दुर्रहमानले भन्ने गर्थे । अल्लाहले बेलालमाथि दया गरुन् , मेरो युद्धवस्त्र पनि गयो र उनले मेरा कैदीको हत्या गरी मलाई दुखित बनाए ।

महान विद्वान इब्ने कैयम आफ्नो जादुल मआद नामक किताबमा लेख्छन् । अब्दुर्रहमान विन औफ्ले उमैया विन खलफसँग भने : घुँडाले टेकेर बस । ऊ बस्यो र अब्दुर्रहरमानले उसलाई छेके तर मानिसहरूले ऊमाथि तरवार प्रहार गरी उसको हत्या गरे । तरवारबाट अब्दुर्रहमान विन औफको खुट्टामा चोट पनि लाग्यो ।

इमाम बुखारीले अब्दुर्रहमानमार्फत वर्णन गरेका छन् : अब्दुर्रहमानको भनाइ छ , मैले उमैया विन खलफसँग उसले मक्कामा मेरो धनसम्पत्तिको संरक्षण गर्नेछ र मैले मदिनामा उसको धन मालको संरक्षण गर्नेछु भन्ने आशा राखेको थिएँ । बदरको दिन जब मानिसहरूले आराम गरिरहेका थिए म एउटा पहाडतिर उसलाई गिरिफतार गर्न निस्के । तर बेलालले उसलाई देखे र अन्सारको एक बैठकमा गएर भने , ऊ उमैया विन खलफ हो । कि त ऊ रहनेछ कि म । त्यसपछि अन्सारको एक समूहले हाम्रो पिछा गरे । उनीहरूले हामीलाई भेटाउँछन् कि भन्ने डरले मैले उमैयाको छोरालाई पछाडि छाडिदिएँ । तर उनीहरूले उसको हत्या गरी हामीहरूको पिछा गरे । उमैया भारी जीउडाल्को मान्छे थियो । उनीहरूले हामीलाई भेटाएपछि मैले उसलाई

भने, बस । मैले उसलाई बचाउन ढाकछोप गरेँ तर मानिसहरूले तलतिरबाट तरवार हानी उसको हत्या गरे । उनीहरूमध्ये कसैकसैको तरवार त मेरो खुट्टामा पनि लाग्यो । अब्दुर्रहमान् आफ्नो खुट्टाको पछाडिको खत देखाइरहन्थे । [१]

४ उमर विन् खत्ताबले आफ्नो मामा आस् विन् हिशामको हत्या गरे । उनले नाताको वास्ता गरेनन् । मदिना आएपछि उनले मुहम्मदﷺको काकासँग भने : हे अब्बास् इस्लाम स्वीकार्नु । यदि तपाईंले इस्लाम कबुल गर्नुभयो भने त्यो कुरा मलाई मेरो बुबा खत्ताबले इस्लाम कबुल गरेको भन्दा राम्रो लाग्ने छ । किनभने तपाईंले इस्लाम कबुल गर्नुभयो भने मुहम्मदﷺ धेरै खुसी हुनुहुनेछ ।[२]

५ अबु बकरले आफ्नो छोरा अब्दुर्रहमान जुन त्यतिखेर बहुदेववादी थियो बोलाएर सोधे । हे ! खबिस, मेरो धन सम्पत्ति कहाँ छ ? अब्दुर्रहमानले भन्यो :

لم يبق غير شكة ويعبوب وصارم يقتل ضلال الشيب

हतियार, तेज घोडा र त्यो तरवार बाहेक केही छैन । त्यसले बृद्धावस्थाको पथभ्रष्टतालाई अवश्य अन्त्य गर्नेछ ।

६ मुसलमानहरूले बहुदेववादीहरूलाई गिरिफ्तार गरिरहँदा मुहम्मदﷺ छाप्रोमा बसिरहनु भएको थियो र सअद् विन् मुआज् तरवार् बोकी ढोकामा पहरा दिइरहेका थिए । मानिसहरूको त्यो क्रियाकलापले गर्दा मुहम्मदﷺले सअद्को अनुहार मलिनो भएको देख्नुभयो । मुहम्मदﷺले भन्नुभयो, हे ! सअद् मुसलमानको यो क्रियाकलाप तिमीलाई नराम्रो लागेको जस्तो छ । सअदले भने, हो । अल्लाहको कसम, ए ! मुहम्मदﷺ बहुदेववादीहरुसँग लड्ने यो पहिलो अवसर अल्लाहले हामीलाई दिएको छ । त्यसकारण बहुदेववादीहरूलाई बाँकी राख्नुभन्दा उनीहरू सबैको हत्या गर्नु र राम्रोसँग थिचोमिचो गरिदिनु नै राम्रो हुनेछ भन्ने म ठान्दछु ।

७ यस युद्धमा अक्काशा विन् मुहसिन् असदीको तरवार भाँचियो । उनी मुहम्मदﷺकहाँ आए । मुहम्मदﷺले उनलाई दाउराको एउटा फट्टा दिएर भन्नुभयो, जाऊ यो लिएर लडाइँ गर । अक्काशाले फट्टा लिएर घुमाउँदा त्यो फट्टा लामो,बलियो तथा चम्किलो सेतो तरवारमा परिणत भयो । उनले त्यो लिएर अल्लाहले मुसलमानहरूलाई विजय प्रदान गर्ने बेलासम्म लडाइँ गरे । त्यस तरवारको नाम औन अर्थात मदत राखिएको थियो । त्यो तरवार स्थायी रूपमा अक्काशासँग नै रह्यो र उनले लडाइँमा त्यही तरवार प्रयोग गरिरहे । अबु बकर सिद्दिकको पालामा मुर्तदहरू

१ सही बुखारी भाग १, जादुल मआद भाग २
२ मुस्तद्रक हाकिम, फतहुल कदीर भाग २

(इस्लामलाई त्यागी अन्य धर्ममा जाने मानिसहरू) को विरुद्ध युद्ध गर्दागर्दै उनी शहिद भए । त्यस बेला पनि त्यो तरवार उनीसँगै थियो ।

८	युद्ध समाप्त भएपछि मुस्अब् विन् उमैर अब्दरी आफ्नो भाइ अबु उजैर विन् उमैर अब्दरी भएको ठाउँबाट जाँदै थिए । अबु उजैरले पनि मुसलमानहरू विरुद्ध लडाइँ गरेको थियो । एक अन्सारीले उसको हात बाँधिरहेका थिए । मुस्अबले त्यो अन्सारीसँग भने, त्यो व्यक्तिद्वारा आफ्नो हात बलियो बनाउ किनभने उसको आमा धनी छे उसले धेरै जरिमाना दिन सक्छे । अबु उजैरले मुस्अबसित भन्यो , के मेरो बारेमा तिम्रो यहि वसियत हो ? मुस्अबले भने, अँ हो । तिम्रो सट्टा यो अन्सारी नै मेरो भाइ हो ।

९	जब बहुदेववादीहरूको लास इनारमा फ्याँक्ने आदेश भयो र उत्वा बिन रबिआलाई घिसारेर इनारतिर लगिदै थियो त्यतिबेला मुहम्मदﷺले उसको छोरा हुजैफाको अनुहारमा हेर्दा उनी शोकग्रस्त देखिए । उनको अनुहार फेरिएको थियो । मुहम्मदﷺले भन्नुभयो , हे ! हुजैफा, हुन सक्छ तिम्रो बुबाको बारेमा तिम्रो हृदयमा केही माया छ ? उनले भने, छैन । अल्लाहको कसम आफ्नो बुबाको बारेमा र उनको हत्याको बारेमा मेरो मन अलिकति पनि धड्केको छैन । तर मलाई थाहा छ उनी बुद्धिविवेक, दूरदर्शिता,सीप तथा प्रतिभाका पनि मालिक हुन् । त्यसकरण यी विशेषताहरूले उनलाई इस्लामतिर लैजान्थ्यो कि भन्ने मलाई आशा लागेको थियो । तर आज उनको यो परिणाम देख्दा र आफ्नो आशाविपरित उनको अन्त्य कुफरमा भएको देख्दा मलाई अफसोच लागेको छ । त्यो कुरा सुनेर मुहम्मदﷺले हुजैफाको हकमा प्रार्थना गर्नुभयो र उनलाई समझाउनुभयो ।

## द्विपक्षीय मृतकहरू

यो युद्ध बहुदेववादीहरूको हकमा खुला पराजय र मुसलमानहरूको हकमा खुला विजय भएको अवस्थामा समाप्त भयो । यसमा १४ जना मुसलमानहरू शहिद भएका थिए जसमध्ये ६ जना मुहाजिर र ८ जना अन्सार थिए । बहुदेववादीहरूले भने यस युद्धमा ठूलो नोक्सान खेप्नु परेको थियो । उनीहरूको तर्फबाट ७० जना व्यक्तिहरू मारिएका थिए भने बन्दी पनि त्यतिनै भएका थिए । जसमा अधिकांश नाइके एवं सरदार र ठूलाबडा नेताहरू सामिल थिए ।

युद्ध समाप्त भएपछि मुहम्मदﷺले बहुदेववादीका मृतकहरूको अगाडि उभिएर भन्नुभयो, तिमीहरू आफ्नो ईशदूतको विरुद्धमा अति नराम्रो गुठ र समूह बनेका थियौ । तिमीहरूले मलाई मिथ्या ठान्यौ जबकि अरूले मलाई सत्य ठाने । तिमीहरूले मलाई बेसहारा छाडिदियौ जबकि अरूले मलाई सहयोग गरे । तिमीहरूले मलाई

निकाल्यौ जबकि अरूले मलाई शरण दिए । त्यसपछि मुहम्मदﷺको आदेश अनुसार ती लासहरूलाई घिसारेर बदरको एउटा इनारमा हालियो ।

अबु तलहा भन्छन् : मुहम्मदﷺको आदेशमा बदरको दिन कुरैशका चौबीस जना ठूला ठूला सरदारहरूको लास बदरको फोहरै फोहरले भरिएको एउटा इनारमा फ्याँकियो । मुहम्मदﷺ कुनै जातिमाथि विजय प्राप्त गर्दा तीन दिनसम्म युद्धको मैदानमा नै बस्नुहुन्थ्यो । तसर्थ बदरको तेस्रो दिन उहाँको आग्रह अनुसार उहाँको सवारीमा काठी कसियो । त्यसपछि उहाँले पदयात्रा गर्नुभयो र उहाँका साथीहरू पनि पछाडि पछाडि हिँडे । उनीहरू बहुदेववादी मृतकहरू फ्याँकिएको इनारको बारनिर पुगेर रोकिए । उहाँले उनीहरूलाई उनीहरूको र उनीहरूको बाबुको नाम लिँदै बोलाउन सुरु गर्नुभयो । हे फलानोको छोरा फलानो, हे फलानोको छोरा फलानो ! के तिमीहरूलाई अल्लाह र उनका दूत मुहम्मदﷺको आज्ञा पालन गरेको भए राम्रो हुने थियो भन्ने लागेको छ ? किनभने हाम्रो पालनकर्ताले हामीलाई जुन बचन दिएका थिए हामीले त त्यसलाई सत्य पायौं, के तिम्रो पालनकर्ताले तिमीसँग जुन बाचा गरेका थिए तिमीले त्यसलाई सत्य पायौ ? उमरले भने, हे अल्लाहका दूत तपाईं यी प्राण नभएको मृत शरीरहरूसँग के कुरा गर्दै हुनुहुन्छ ? मुहम्मदﷺले जवाफमा भन्नुभयो, अल्लाहको कसम मैले उनीहरूसँग जे कुरा भनिरहेको छु तिमीहरूलेभन्दा उनीहरूले बढी सुनेका छन् । एक अर्को हदिसमा छ, उनीहरूलेभन्दा बढी तिमीहरूले पनि सुन्न सक्तैनौ तर उनीहरूले जवाफ भने फर्काउन सक्तैनन् ।[१]

## मक्कामा पराजयको खबर

बहुदेववादीहरू बदरको मैदानबाट फत्फताउँदै हतारहतार तितरवितर भई बिचलित अवस्थामा मक्कातर्फ लागे । लाज शर्मले गर्दा मक्कामा कसरी प्रवेश गर्ने हो भन्ने कुरा उनीहरूको दिमागले ठम्याउन सकेको थिएन ।

इब्ने इस्हाक भन्छन्, सबैभन्दा पहिला जुन व्यक्तिले कुरैशको पराजयको खबर लिएर मक्का आएको थियो उसको नाम हलिसमान् विन् अब्दुल्लाह खुजाइ थियो । मान्छेहरूले ऊसँग पछाडिको के खबर छ भनी सोध्न थाले ? उसले उत्बा बिन रबिआ , शैबा विन रबिआ , अबुल हकम विन हेशाम, उमैया विन खलफ लगायत अधिक केही सरदारहरूको नाम लिँदै ती सबैको हत्या भएको छ भन्ने कुरा सुनायो । जब उसले मारिएका व्यक्तिहरूको सूचिमा सम्मानित व्यक्तिहरूको नाम गिन्ती गर्न थाल्यो अनि सफवान् विन् उमैया जो हतिममा बसेको थियो उसले भन्यो, अल्लाहको कसम यदि यो व्यक्ति होशमा छ भने मेरो बारेमा सोध । मान्छेहरूले सफवान् विन्

१ सही बुखारी मुस्लिम, मिश्कात भाग २

उमैयाको के भयो भनी सोधे । उसले भन्यो, उ त हतिममा बसेको छ । अल्लाहको कसम, उसको बाबु र भाइको हत्या हुँदा स्वयम मैले पनि देखें ।

मोहम्मदﷺका मालिक अबु राफे भन्छन् ,म त्यसबेला अब्बासको गुलाम थिएँ । हाम्रो घरमा इस्लाम प्रवेश भइसकेको थियो । अब्बास पनि मुसलमान भइसकेका थिए । फजलकी आमा मुसलमान भइसकेकी थिइन् । म पनि मुसलमान भइसकेको थिएँ । तर अब्बासले भने आफुले इस्लाम स्वीकारेको कुरा लुकाएका थिए । अबु लहब बदरको युद्धमा गएको थिएन । उसलाई युद्ध बारे खबर भएपछि अल्लाहले उसलाई अपहेलित र अपमान गरे भने हामीले इज्जत र शक्तिको अनुभूति गर्‍यौं । म कमजोर व्यक्ति थिएँ । वाण बनाउथें जमजम भएको कोठामा बसी वाणको दस्ता तास्थें । अल्लाहको कसम त्यसबेला म कोठामा बसेर वाण तासिरहेको थिएँ । फजलकी आमा म निर बसेकी थिइन् । जुन खबर हामीले पाएका थियौं त्यसबाट हामी प्रसन्न थियौं । त्यति बेला नै अबु लहब आफ्नो खुट्टा घिसार्दै कोठामा आयो र कुनामा बस्यो । उसको पिठ्युँ मेरो पिठ्युँतिर फर्केको थियो । ऊ बस्न नपाउँदै अचानक हल्ला भयो । उ अबु सुफयान् विन् हारिस् विन् अब्दुल मुत्तलिब आयो । अबु लहबले उसँग भन्यो, म निर आऊ । ऊ आएर अबु लहब निर बस्यो । अरू मान्छेहरू उभिएका थिए । अबु लहबले भन्यो भतिजा भन मानिसहरूको के हाल छ ? उसले भन्यो केही छैन । बस् मानिसहरूसँग हाम्रो सामना भयो । हामीले उनीहरूको अगाडि आत्मसमर्पण गर्‍यौं । उनीहरूले नराम्रोसँग हाम्रो हत्या गरे, हामीलाई कैदी बनाए । अल्लाहको कसम यसको बावजुद म मानिसहरूको लान्छना गर्दिनँ । किनभने वास्तवमा हाम्रो सामना यस्ता गोरा मानिसहरूसँग भएको थियो जुन आकाश र धर्तीबीच निधारमा सेतो धार भएको घोडामाथि सवार थिए । अल्लाहको कसम न त उनीहरूले कुनै चीज छोड्थे न कुनै चीज उनीहरूको अगाडि टिक्न सक्थ्यो ।

अबु राफे भन्छन् मैले आफ्नो टेन्टको छेउ उठाएर भनें । अल्लाहको कसम उनीहरू फरिश्ता थिए । त्यो कुरा सुन्ना साथ अबु लहबले मेरो अनुहारमा एक झापड हान्यो । मैले पनि उसलाई हानें तर उसले मलाई उचाले भूइँमा थेचारिदियो साथै ममाथि आफ्नो घुँडा राखेर मलाई पिट्न थाल्यो । म कमजोर साबित भएँ । तर फजलकी आमाले टेण्टको एउटा खामो लिएर उसलाई यस्तरी हानिन् कि उसको टाउकोमा नराम्रोसँग चोट लाग्यो । उनले भनिन् , उसको मालिक छैन भनेर कमजोर ठानेका छौ ? अबु लहब बेइज्जत हुँदै उठ्यो र हिँड्यो । अल्लाहको कसम सातौं रात नवित्दै नै अल्लाहले उसलाई अदसया नामक प्लेग रोगमा ग्रसित बनाइदिए र त्यसै रोगबाट उसको अन्त्य भयो । अदसा नामक प्लेग रोगलाई अरबीहरूले अत्यन्तै हिंसा गर्थे । तसर्थ ऊ मरेपछि पनि उसका छोराहरूले उसलाई त्यतिकै छाडिदिए र तीन दिनसम्म सडिरह्यो । न त कुनै उसको नजिक जान्थ्यो न उसको अन्त्यष्टि गर्न

चाहन्थ्यो । यतिकै छोडियो भने मानिसहरूले झन् लान्छना गर्नेछन् भन्ने सोचेर उसका छोराहरूले एउटा खाल्टो खनी एउटा दाउराले उसको लास त्यसमा धकेलिदिए र टाढैबाट ढुंगा फ्याकेर त्यसलाई पुरिदिए ।

अन्ततः यसरी मक्कावासीहरूलाई बदरको पराजयको खबर प्राप्त भयो । यस खबरले उनीहरूको मनमा नराम्रो चोट पर्‍यो । मुसलमानहरूलाई उनीहरूको दुःखमा हाँस्ने मौका नमिलोस् भनेर उनीहरूले आफ्ना मृतकप्रति रुन पनि निषेध गरिदिए ।

यसै क्रममा एउटा हाँसोलाग्दो घटना छ । बदरको महान युद्धमा अस्वदका तीन जना छोरा मारिएका थिए । उ आफ्नो छोराहरूप्रति रुन चाहन्थ्यो । उ अन्धो थियो । एक दिन राती उसले रुदैगरेका केही महिलाहरूको आवाज सुन्यो । झटपट उसले आफ्नो गुलामलाई त्यहाँ हेर्न पठायो । के रोएर सान्त्वना दिने अनुमति भएको छ ? यदि कुरैश आफ्ना मृतकप्रति रुदैछन् भने म पनि आफ्नो छोरा अबु हकिमाप्रति रुन्छु, किनभने मेरो छाती पोलिरहेको छ । गुलाम फर्केर आयो र भन्यो ती महिलाहरू त आफ्नो हराएको उँटप्रति रुदैछन् । त्यो सुनेर अस्वदले आफुलाई सम्हाल्न सकेन र अनियन्त्रित भई उसले भन्यो :

اتبكى ان يضل لها بعير      ويمنعها من النوم السهود
فلا تبكى على بكرولكن      على بدر تقاصرت الجدود
على بدرسراة بنى هيصيص ومخزوم ورهط ابى الوليد
وبكى ان بكيت على عقيل      وبكى حارثا اسد الأسود
وبكيهم ولا تسمى جميعا      وما لابى حكيمة من نديد
الا قد ساد بعدهم ورجال      ولولايوم بدر لم يسودوا

अनुवाद छ : के उनीहरू आफ्नो उँट हरायो भनेर रुन्दैछन् ? त्यसले उनीहरूको निन्द्रा हराम गरिदिएको छ ? उँट हरायो भनेर नरोऊ बरू बदरको ठाउँ जहाँ हाम्रा कर्महरू फुटेका छन् त्यसप्रति रोऊ । हेर ! बदरप्रति रोऊ जहाँ बनी हैसीस, बनी मख्जुमी र अबुल वलिदका कबिलाका सरदारहरू मारिएका छन् । यदि रुनु नै छ भने अकीलमाथि रोऊ र हारिसमाथि रोऊ जो सिंहहरूको सिंह थिए । तिमी उनीहरूमाथि रोऊ उनीहरूको नाम लिदै रोऊ । अबु हकिमाको त कुनै तुलना नै थिएन । हेर ! अब ती व्यक्तिहरू सरदार भएका छन् जुन यदि बदरको युद्ध नभएको भए सरदार हुन सक्दैनन् थिए ।

## मदिनामा विजयको खबर

उता मुसलमानहरू विजय भएपछि मुहम्मद ﷺ ले मदिनामा खबर दिन दुईजनालाई फरिश्तालाई पठाउनुभयो । उनीहरूमध्ये एक जना अब्दुल्लाह विन रवाहा थिए । उसलाई मदिनाको माथिल्लो वासिन्दाहरूकहाँ पठाइएको थियो भने अर्का जैद विन हारिसा थिए । उसलाई मदिनाको तलतिरको वासिन्दाकहाँ पठाइएको थियो ।

त्यसैबीच यहुदी र मुनाफिकहरूले केही प्रोपेकण्डा गरी मदिनामा हुहल्ला मच्चाएका थिए । यतिसम्म कि मुहम्मद ﷺ पनि मारिएका छन् भन्ने कुरा फुकेका थिए । तसर्थ एक जना मुनाफिकले जैद विन हारिसालाई मुहम्मद ﷺ को कस्वा नामक उँटनीमा सवार भई आएको देख्ने वित्तिकै भन्यो, वास्तवमा मुहम्मद ﷺ मारिएका रहेछन् । हेर, यो उनको उँटनी हो । यसलाई हामी चिन्दछौं । ऊ जैद विन हारिसा हो जो पराजय भई भागेर आएको छ । ऊ यति डराएको छ के भन्ने हो भन्ने उसलाई थाहा छैन । दुवै फरिश्ता त्यहाँ पुगेपछि मुसलमानहरू उनीहरूको वरिपरि घेरिए र उनीहरूसँग युद्धको हालखबर सुन्न लागे । उनीहरूलाई मुसलमान विजय भएका छन् भन्ने कुरा विश्वास भयो । त्यसपछि चारैतिर हर्षोल्लासको लहर चल्न थाल्यो । मदिनाको पाखापखेरामा अल्लाहको प्रशंसाको नाराले गुञ्जियो । जुन ठूलाबडा मुसलमान मदिनामा बसेका थिए उनीहरू मुहम्मद ﷺ लाई त्यस विजयको शुभकामना दिन बदरको बाटोतिर निस्के ।

उसामा विन् जैद भन्छन् : हामीलाई विजयको खबर त्यतिबेला भयो जब हामी मुहम्मद ﷺ की छोरी रुकैयाको जुन उसमान विन अफ्फानसँग वैवाहिक बन्धनमा थिइन्, अन्त्यष्टि गरेर कब्रिस्तानमा माटो मिलाइसकेका थियौं । उनको हेरचाह गर्न मुहम्मद ﷺ ले मलाई पनि उसमानको साथमा मदिनामा छाड्नु भएको थियो ।

## माले गनिमत (युद्धप्राप्त) बारे समस्या

मुहम्मद ﷺ युद्ध समाप्त भएपछि तीन दिनसम्म बदरको मैदानमा बस्नु भएको थियो । मुहम्मद ﷺ मैदानबाट नहिँड्दै युद्धप्राप्त (माले गनिमत) बारे फौजबीच वादविवाद भयो र विवाद चर्किएपछि मुहम्मद ﷺ ले भन्नुभयो, जोसँग जे छ मकहाँ जम्मा गर । साथीहरूले आफुसँग भएको सबै कुरा मुहम्मद ﷺ कहाँ जम्मा गरे । त्यसपछि अल्लाहले ईशवाणीद्वारा त्यस समस्याको समाधान अवतरण गरिदिए ।

उबादह् विन् सामित भन्छन् : हामी मुहम्मद ﷺ को साथमा मदिनाबाट निस्क्यौं र बदरको मैदानमा पुग्यौं । शत्रुसँग युद्ध भयो । अल्लाहले शत्रुहरूलाई पराजय गरिदियो । त्यसपछि हाम्रो एक समूह उनीहरूको पिछा गर्दै उनीहरूलाई लखेट्ने र उनीहरूको हत्या गर्ने तर्फ लाग्यो भने अर्को समूह युद्धप्राप्त (माले गनिमत) लिन

होमिनुका साथै त्यसलाई बटुल्न एवं समेट्न लाग्यो । कतै शत्रुहरूले मुहम्मदﷺलाई दुःख दिन्छ कि भनेर एक समूह उहाँको वरिपरि घेरा हालेर बस्यो । जब रात पऱ्यो र मानिसहरू घुमफेर गरी एक अर्का भएको ठाउँमा पुगे अनि युद्धप्राप्त (माले गनिमत) जम्मा गर्नेहरूले भने : यसलाई हामीले जम्मा गरेका हौं तसर्थ यसमा कसैको भाग छैन । शत्रुहरूको पिछा गर्नेहरूले भने : तिमीहरू यसका हामीभन्दा बढी हकदार छैनौं किनभने शत्रुहरूलाई भगाउने र तिनीहरूलाई टाढा राख्ने काम हामीले गरेका हौं । जुन समूहले मुहम्मदﷺको संरक्षण गरेको थियो उसले भन्यो : मुहम्मदﷺलाई एक्लै पाएर उहाँमाथि शत्रुले आक्रमण गर्छन् कि भनेर हामी उहाँको संरक्षणमा व्यस्त थियौं । यी कुरा चलिरहँदा अल्लाहले निम्न ईशवाणी अवतरण गरे :

يَسْأَلُونَكَ عَنِ الْأَنْفَالِ ۖ قُلِ الْأَنْفَالُ لِلَّهِ وَالرَّسُولِ ۖ فَاتَّقُوا اللَّهَ وَأَصْلِحُوا ذَاتَ بَيْنِكُمْ ۖ وَأَطِيعُوا اللَّهَ وَرَسُولَهُ إِنْ كُنْتُمْ مُؤْمِنِينَ ( الأنفال : 1 )

उनीहरू तपाईंसँग मालेगनिमत अर्थात युद्धप्राप्तको बारेमा सोध्छन् । भनिदेऊ, मालेगनिमत अल्लाह र उनका रसुलको लागि हो । तसर्थ अल्लाहसँग डराऊ, आफ्नो आपसी सम्बन्धलाई सुधार, अल्लाह र उनका रसुलको आज्ञापालना गर यदि तिमीहरू सच्चा मोमिन हौ भने । (अल् अन्फाल:१)

त्यसपछि मुहम्मदﷺले मालेगनिमत मुसलमानबीच भाग लगाइदिनुभयो ।[१]

## इस्लामी फौज मदिनाको मार्गमा

मोहम्मदﷺ तीन दिनसम्म बदरको मैदानमा बसेर मदिनातिर लाग्नुभयो । उहाँको साथमा बहुदेववादी कैदीहरू पनि थिए र बहुदेववादीहरूबाट हासिल गरिएको युद्धप्राप्त (माले गनिमत) पनि थियो । मुहम्मदﷺले यसको रेखदेखको जिम्मेवारी अब्दुल्लाह बिन् कअबलाई सुम्पिनुभएको थियो । उहाँ सफ्रा नामक उपत्यकाको खोंचमा पुगेपछि खोंच र नाजिया बीचको एउटा थुम्कोमा बास बस्नुभयो र त्यहीँ मालेगनिमतबाट (खुम्स)पाचौं भाग अलग गरी अरू मुसलमानबीच बराबर भाग लगाइदिनुभयो ।

साथै सफ्रा नामक उपत्यकामा उहाँले नजर बिन् हारिसको हत्या गर्ने आदेश दिनुभयो । बदरको युद्धमा उसले बहुदेववादीहरूको झण्डा बोकेको थियो । ऊ कुरैशका ठूला दोषीहरूमध्ये एक थियो । इस्लामप्रति शत्रुता र मुहम्मदﷺलाई दुःख कष्ट दिने काममा उसले सीमा नै नाघेको थियो । मुहम्मदﷺको आदेशमा अलीले उसको गर्दनमा मार हाने । इर्कुज्जबीया भन्ने ठाउँमा पुगेपछि ईशदूतले उक्बा बिन मुऐतको हत्या गर्ने आदेश दिनुभयो । उसले मुहम्मदﷺलाई जुन तरिकाले दुःख दिन्थ्यो

१ मुस्नद अहमद भाग ५, हाकिम भाग २

त्यसको बारेमा केही अंश अगाडि वर्णन भइसकेको छ । त्यसै व्यक्तिले मुहम्मदﷺले नमाज पढ्दा उहाँको पिठ्यूँमा उँटको आन्द्राभुँडी हालेको थियो । त्यसै व्यक्तिले उहाँको घाँटीमा रूमालको पासो पारेर हत्या गर्न खोजेको थियो । अबु बकर त्यतिखेर नभएका भए उसले मुहम्मदﷺलाई घाँटी अठ्याएर मार्ने थियो । जब मुहम्मदﷺले उसलाई मार्ने आदेश दिनुभयो अनि उसले भन्यो, हे ! मुहम्मदﷺ, बालबच्चाको लागि कोही छैन । मुहम्मदﷺले भन्नुभयो : आगो छ ।[१] त्यसपछि आसिम बिन साबित अन्सारीले र भनिन्छ अलीले उसको गर्दन काटे ।

युद्धको दृष्टिकोणले पनि यी दुवै विद्रोहीहरूको हत्या गर्नु जरुरी थियो किनभने उनीहरू युद्धका कैदी मात्र थिएनन् युद्धका दोषी पनि थिए ।

## स्वागतटोली

मुहम्मदﷺ रौहा भन्ने ठाउँमा पुग्नुभयो । त्यहाँ ती मुसलमान सरदारसँग भेट भयो । उनीहरू उहाँको विजयको खबर सुनी उहाँको स्वागत गर्न र उहाँलाई विजयको शुभकामना दिन मदिनाबाट निस्केर आएका थिए । जब उनीहरूले शुभकामना व्यक्त गरे अनि सल्मा बिन् सलामहले भने : तिमीहरूले हामीलाई के को शुभकामना दिदैछौ ? अल्लाहको कसम हाम्रो सामना त कपाल खुइलिएका ती बूढाहरूसँग भएको थियो जुन उँट जस्ता थिए । त्यो सुनेर मुहम्मदﷺले मुस्काउदै भन्नुभयो : हे ! बाबु, तिनै त त्यो समुदायका सरदारहरू थिए ।

उसैद बिन हुजैरले भने : हे ईशदूत, प्रशंसा अल्लाहको लागि छ किनभने उनले तपाईंलाई सफलता प्रदान गरे र तपाईंको आँखालाई शीतल बनाइ दिए । अल्लाहको कसम ! म तपाईंको सामना शत्रुसँग हुन्छ भनठानेर बदरको युद्धदेखि पछि परेको होइन । मैले त तपाईंको टक्राउ काफेलासँग मात्र हुन्छ होला भन्ने सोचेको थिएँ । यदि मलाई शत्रुसँग सामना हुन्छ भन्ने थाहा भएको भए म पछाडि बस्दिन थिएँ । मुहम्मदﷺले भन्नुभयो, तिमीले ठीक भन्यौ ।

मुहम्मदﷺ सफलता र दलबलको साथ यस्तो शैलीमा मदिनामा प्रवेश हुनुभयो कि शहर र वरिपरिका सबै शत्रुमाथि उहाँको दबाव परिसकेको थियो । विजयको प्रभावले गर्दा मदिनाका अत्यधिक मान्छेहरू इस्लाममा प्रवेश भए । त्यसै मौकालाई छोपी अब्दुल्लाह बिन उबैले पनि देखावोटी रूपमा इस्लाम स्वीकाऱ्यो ।

मुहम्मदﷺ मदिना आएको एक दिनपछि नै कैदीहरूको आगमन सुरु भयो । मुहम्मदﷺले उनीहरूलाई साथीहरूमा बाँटिदिनुभयो र उनीहरूसँग राम्रो व्यवहार गर्ने वसियत पनि गर्नुभयो । त्यसै वसियतको प्रतिफल थियो होला मुहम्मदﷺका साथीहरू

---

१ यो हदिस सही हदिसको किताबमा उल्लेख छ । जस्तै अबु दाऊद ।

खजुरमा गुजारा गर्ने गर्थे तर कैदीहरूलाई रोटी खान दिन्थे । ज्ञात रहोस् मदिनामा खजुरभन्दा रोटीको बढी महत्व थियो ।

## कैदीहरूको मुद्दा

मुहम्मदﷺ मदिना पुगेपछि उहाँले साथीहरूसँग कैदीहरूको बारेमा सल्लाह गर्नुभयो । अबु बकरले भने : हे ईशदूत, उनीहरू हाम्रै काकाहरूका छोरा र आफ्नै कबिला खानदानका मान्छे हुन् । उनीहरुसँग जरिमाना मात्र लिनुहोस् भन्ने मेरो सुझाव छ । जे जति उनीहरूबाट हामीले लिन्छौं त्यो नास्तिकहरूको विरुद्ध हाम्रो शक्तिसाधन बन्ने छ । हुन सक्छ अल्लाहले उनीहरूलाई मार्गदर्शन दिउन् र उनीहरू हाम्रो शक्ति बनून् ।

मुहम्मदﷺले भन्नुभयो : हे ! इब्ने खत्ताब तिम्रो विचार के छ ? उनले भने : मेरो विचार अबु बकरको जस्तो छैन । मेरो विचार के छ भने फलानोलाई (जो मेरा नजिकका छन्) मलाई सुम्पिदिनुहोस् म उसको घाँटी काटिदिन्छु । अकिल इब्ने अबी तालिबलाई अलीको हवाला गरिदिनुहोस् । उसको टाउको उनैले काटून् । हमजाको भाइलाई हमजाको हवाला गरिदिनुहोस् । उसको घाँटी उनैले काटून् । यसरी हाम्रो हृदयमा वहुदेववादीहरूको लागि कुनै नरम ठाउँ छैन भन्ने अल्लाहलाई पनि थाहा होस् । कैदीहरूमध्ये सबै जना बहुदेववादीहरूका सरदार, अगुवा एवं नेताहरू थिए ।

उमर भन्छन् : मुहम्मदﷺले अबुबकरको सुझाव मान्नुभयो तर मेरो कुरा मन पराउनु भएन । अन्ततः उहाँले कैदीहरूबाट जरिमाना लिने निर्णय गर्नुभयो । भोलि पल्ट विहानै म मुहम्मदﷺ र अबुबकरकहाँ आएँ । उहाँ दुवै जना रोइरहनु भएको थियो । मैले भने : हे ! ईशदूत तपाईं र तपाईंको साथी किन रुँदै हुनुहुन्छ मलाई बताउनुहोस् न । रुने कारण थाहा भए म पनि रुन्छु यदि थाहा भएन भने तपाईंलाई रुएको देखेर भए पनि रुनेछु । मुहम्मदﷺले भन्नुभयो, उनीहरूसँग जरिमाना लिएको बदलामा तिम्रा साथीहरूलाई जुन सजाय दिइएको थियो त्यसप्रति रुदैछु । उहाँले नजिकको एउटा रूखलाई देखाएर भन्नुभयो मलाई उनीहरूको सजाय त्यो रूखभन्दा पनि नजिक देखाइएको थियो ।[1] त्यसपछि अल्लाहले निम्न आयत अवतरण गरे ।

مَا كَانَ لِنَبِيٍّ أَنْ يَكُونَ لَهُ أَسْرَىٰ حَتَّىٰ يُثْخِنَ فِي الْأَرْضِ ۚ تُرِيدُونَ عَرَضَ الدُّنْيَا وَاللَّهُ يُرِيدُ الْآخِرَةَ ۗ وَاللَّهُ عَزِيزٌ حَكِيمٌ لَوْلَا كِتَابٌ مِنَ اللَّهِ سَبَقَ لَمَسَّكُمْ فِيمَا أَخَذْتُمْ عَذَابٌ عَظِيمٌ

(الأنفال : 67 -68 )

धर्तीमा ठूलो रक्तपात नभएसम्म कुनै ईशदूतकहाँ कैदी हुनु उचित होइन । तिमीहरू त संसारको धन चाहन्छौ । अल्लाहले तिमीहरूको लागि प्रलोक चाहेका छन्

१ तारिख उमर विन खत्ताब, लेखक इब्ने जौजी

अल्लाह अति प्रभुत्वशाली तथा तत्वदर्शी छन् । अल्लाहको निर्णय पहिलादेखि नै नभएको भए तिमीले जे लिएका छौ त्यसमा ठूलो यातना हुने थियो । (अल् अन्फाल:६७,६८)

इन्कारीहरूसित तिमीहरूको भिडन्त भएको खण्डमा उनीहरूको गर्दन काट । उनीहरूलाई राम्रोसँग थिचोमिचो पारेपछि उनीहरूलाई पक्राउ गरी बाँध । त्यसपछि चाहे उनीहरूमाथि उपकार गरी छाडिदेऊ वा उनीहरूलाई हतियार नत्यागेसम्म सजाय देउ । ईश्वरले चाहेको भए उनीहरूसँग स्वयमले बदला लिन्थ्यो । तर उसले तिमीहरूलाई कसैबाट परीक्षण गर्न चाहन्छ । जुन मानिसहरू ईश्वरको मार्गमा मारिएका छन् उनीहरूको कर्म ईश्वरले कहिल्यै खेर जान दिने छैन ।

उपरोक्त श्लोकमा कैदीहरूसँग जरिमाना लिने अनुमति दिइसकिएको थियो त्यसकारण सहाबीहरूलाई जरिमाना स्वीकारेको बदलामा सजाय त दिइएन तर उनीहरूको निन्दा भने गरियो । किनभन्दा उनीहरूले नास्तिकहरूलाई राम्रोसँग नास गर्नु अगाडि बन्दी बनाएका थिए । भनिन्छ उल्लेखित आयत पछि अवतरण भएको हो । तर जो आदेश अल्लाहको तर्फबाट अवतरण भइसकेको थियो त्यसको अर्थ यस समुदायको निम्ति माले गनिमत जायज छ भन्ने थियो वा बदरमा लड्नेहरूको निम्ति कृपादृष्टि र क्षमा छ भन्ने थियो ।

जे होस् अबु बकरको सुझाव बमोजिम त्यस कुराको निर्णय भइसकेको थियो फलस्वरूप बहुदेववादीहरूसँग जरिमाना लिइयो । जरिमानाको मूल्य एक हजारदेखि तीन, चार हजारसम्मको थियो । मक्कावासीहरूले लेखपढ गर्न पनि जान्दथे तर मदिनावासीहरू जान्दैनन् थिए । तसर्थ जरिमाना तिर्न नसक्नेहरूले मदिनाका दश दश जना केटाकेटीलाई शिक्षा दिने निर्णय गरियो । जब यी बालबालिकहरूले राम्रोसँग लेखपढ गर्न जान्ने हुन्छन् त्यही नै उनीहरूको जरिमाना हुनेछ ।

मुहम्मदﷺले कैदीहरूमाथि गुण लगाउँदै उनीहरूलाई जरिमाना नलिई छाड्दिनुभयो । त्यो सूचिमा मुत्तलिब विन हन्तब , सैफी विन अबी रफाआ र अबु उज्जा जम्हीको नाउँ आउँछ । अबु उज्जा जम्हीलाई उहुद युद्धमा कैद गरी हत्या गरिएको थियो । (विस्तृत विवरण अगाडि आउनेछ )

मुहम्मदﷺले आफ्नो जुवाँइ अबुल आसलाई जैनबलाई नरोक्ने सर्तमा छाड्दिनुभयो । उनलाई छाड्नुको कारण, जैनबले अबुल आसलाई छुटाउन जरिमाना स्वरूप गहना समेत केही माल पठाएकी थिइन् । त्यो गहना वास्तवमा खदिजाको थियो । खदिजाले छोरी जैनबलाई अबुल आससँग विदाइ गर्दा त्यो गहना दिएकी थिइन् । त्यो गहना देखेर उहाँलाई दया लाग्यो र उहाँले साथीहरूसँग अबुल आसलाई छाडिदिने अनुमति माग्नुभयो । साथीहरूले तुरुन्तै कबुल गरे र मुहम्मदﷺले अबुलआसलाई जैनबको बाटो नरोक्ने सर्तमा छाडिदिनुभयो । सर्त बमोजिम अबुल

आसले जैनबको बाटोमा अवरोध खडा गरेनन् र  जैनबले पनि हिजरत गरिन् । मुहम्मदﷺले जैद विन हारिसा र एक जना अन्सारी साथीलाई बतन वा जज नामक ठाउँमा गएर बस्न पठाउनुभयो र जैनब त्यहाँ आइपुगेपछि उनलाई आफ्नो साथमा लिएर आउन भन्नुभयो । यी दुवै जना गए र जैनबलाई लिएर मदिना आए । जैनबको हिजरतको घटना अति लामो एवं दुःखदायी छ ।

कैदीहरूमध्ये सुहैल विन अमर पनि थियो । ऊ एउटा वरिष्ठ वक्ता थियो । उमरले भने, हे ईशदूत, सुहैल विन अमरको अगाडिको दुईटा दाँत भाँचिदिनुहोस् ताकि उसको जिब्रो लट्पटाओस् र कहीँ पनि तपाईंको विरुद्ध वक्ताको रूपमा खडा हुन नसकोस् । मुहम्मदﷺले उनको आग्रहलाई स्वीकार्नु भएन । किनभने त्यो कुरा अङ्गछेद अन्तर्गतको कुरा थियो जसको बारेमा महाप्रलयको दिन सोधपुछ हुन्छ भन्ने उहाँलाई डर थियो ।

सअद विन नोअमान उमराह गर्न जाँदा अबु सुफ्यानले उनलाई कैद गऱ्यो । अबु सुफ्यान्को छोरा अम्र पनि बदरको कैदीमध्ये थियो । तसर्थ अमरलाई अबु सुफ्यानको हवाला गरियो र उसले पनि सअदलाई छाडिदियो ।

## कुरआनको टिप्पणी

त्यसै युद्धको बारेमा सुरह अन्फाल अवतरण भयो । यो सुरह वास्तवमा त्यस युद्धबारे ईश्वरीय टिप्पणी हो । यदि यस बयानलाई सही मान्ने हो भने राजाहरू र कमाण्डरहरूको विजय टिप्पणीभन्दा कुरआनको टिप्पणी एकदमै भिन्न छ । यस टिप्पणीका केही कुराहरू संक्षिप्तमा यस प्रकार छन् ।

अल्लाहले सबैभन्दा पहिला मुसलमानहरूलाई उनीहरूमा शेष रहेको अल्छीपन र नैतिक कमजोरीतर्फ ध्यानाकर्षण गराए । ती मध्ये कुनैकुनै कुरा युद्धको अवसरमा देखिएका थिए । त्यस ध्यानाकर्षणको मुख्य उद्देश्य मुसलमानहरू यी कमजोरीबाट पूर्ण रूपमा पवित्र होउन् भन्ने थियो ।

मुसलमानहरू आफ्नो वीरता एंव शक्तिका कारण धोका नखाउन् र उनीहरूको स्वभाव र चालचलनमा घमण्डको प्रभाव नरहोस् साथै उनीहरूले अल्लाहमाथि भरोसा गरून् र आफ्नो दूतको आज्ञापालन गरून् भन्ने हेतुले अल्लाहले त्यसपछिको श्लोकमा यस विजयमा आफ्नो तर्फबाट भएको समर्थन र सहयोग बारे वर्णन गरेका छन् ।

ती महान उद्देश्य र लक्ष्यहरूको उल्लेख छ जसको निम्ति मुहम्मदﷺले त्यस डरलाग्दो र रक्तपातयुक्त लडाइँमा पाइला चाल्नु भएको थियो । यस अन्तर्गत लडाइँमा सफलताको कारण बन्ने केही नैतिक विशेषता तर्फ पनि संकेत गरिएको छ ।

बहुदेववादी, मुनाफिक, यहुदी र युद्धका कैदीहरूले सत्यको अगाडि घुँडा टेकून् र त्यसमा डटिरहून् भनेर उनीहरूलाई सम्बोधन गर्दै उच्च कोटीको भाषा शैलीमा उपदेश दिइएको छ ।

मुसलमानहरूलाई सम्बोधन गरी मालेगनिमत सम्बन्धी समस्याको सम्पूर्ण नीतिनियम सम्झाइनुका साथसाथै बताइएको छ ।

यस चरणमा इस्लामी आन्दोलनलाई युद्ध र सम्झौता सम्बन्धी जुन कानुनको आवश्यकता थियो त्यसको विश्लेषण र व्याख्या गरिएको छ ताकि मुसलमानहरूको युद्ध र अज्ञानीहरूको युद्धबीच भिन्नता कायम होस् र नैतिकताको आधारमा मुसलमानहरू उच्च होउन् । साथै इस्लाम केवल सिद्धान्तको नाम होइन यसले त जुन नीतिनियममा डोऱ्याउँछ त्यसअनुसार आफ्नो अनुयायीलाई व्यवहारिक प्रशीक्षण दिन्छ भन्ने कुरा दुनियाँलाई पनि थाहा होस् । इस्लामी शासनका कैयन दफाहरू प्रस्तुत गरी इस्लामी शासनको दायराभित्र रहने मुसलमान र इस्लामी शासनको दायराबाहिर रहने मुसलमानबीच के भिन्नता हुन्छ भन्ने कुरा देखाइएको छ ।

## विविध घटनाहरू

हिजरी सम्बत २ सालमा व्रत र सदका फित्रा (दान) अनिवार्य गरियो र जकात सम्बन्धी विभिन्न नीतिनियमको विस्तृत विवरण प्रस्तुत गरियो । सदका फित्राको अनिवार्यता र जकातको नीतिनियमको सुनिश्चतताले गर्दा जुन बोझबाट गरिब मुहाजिरहरूको ठूलो संख्या पीडित थियो त्यसमा केही राहत भयो । किनभने उनीहरू दुःख गरी खाने भूमिबाट पनि बञ्चित थिए । अर्को तर्फ  सौभाग्य र संयोग के पनि थियो भने मुसलमानहरूले हिजरी सम्बत २ साल शौवाल महिनामा आफ्नो जीवनको पहिलो पर्व मनाउन पाए । त्यो इद पर्व बदर युद्धको विजयपछि परेको थियो । कति रमाइलो भयो होला त्यो इद जुन इद मनाउने मौका अल्लाहले मुसलमानहरूको शिरमा विजयको ताज राखेपछि प्रदान गरे । कति इमानपूर्ण थियो होला त्यो इदको नमाज जसलाई अदा गर्न मुसलमानहरू ठूलो स्वरमा अल्लाहको प्रशंसा गर्दै आफ्नो घरबाट मैदानतिर गएका थिए । त्यो अवस्था भनेको ईश्वरले प्रदान गरेको वरदान र समर्थनका कारण मुसलमानहरूको हृदय उसको कृपादृष्टि र दयामा मग्न थियो । उसैतिर आकर्षित थियो । उनीहरूका शिर उसको कृतज्ञतामा झुकेका थिए । ईश्वरले त्यस वरदानलाई निम्न आयतमा उल्लेख गरेका छन् ।

स्मरण गर जब तिमी थोरै थियौ, जमिनमा तिमीलाई कमजोर पारिएको थियो, अपहरण हुन्छ कि भन्ने डर थियो त्यतिखेर उसले तिमीलाई शरण दियो आफ्नो सहयोग दिएर तिम्रो समर्थन गऱ्यो र तिमीलाई पवित्र जीविकोपार्जन दियो ताकि तिमीहरू कृतज्ञी बन । (८:२६)

## बदरको युद्धपछिको युद्ध सक्रियता

बदरको युद्ध मुसलमान र बहुदेववादीबीचको पहिलो सशस्त्र एंव निर्णायक युद्ध थियो । जसमा मुसलमानहरूलाई विजय प्राप्त भयो र सारा अरबले त्यसलाई देख्यो । त्यस युद्धको परिणामबाट सबैभन्दा बढी ती मान्छेहरू निराश त्रसित थिए जसलाई प्रत्यक्ष रूपमा त्यसको ठूलो नोक्सान व्यहोर्नु परेको थियो, अर्थात बहुदेववादीहरू । ती व्यक्तिहरू जसले मुसलमानको प्रभूत्व र प्रवल्तालाई आफ्नो धार्मिक र आर्थिक अस्तित्वको निम्ति खतरा सम्फेका थिए, अर्थात यहुदीहरू । तसर्थ जब मुसलनमाहरूले बदरको युद्ध जिते ती दुवै समूह मुसलमानविरुद्ध रिस,क्रोध र डाहामा जलिरहे । जस्तै अल्लाहले भनेका छन् : तिमीहरूले यहुदी र बहुदेववादीहरूलाई मोमिनहरूको सबैभन्दा कट्टर शत्रु पाउने छौ । (५:८२)

मदिनामा केही मान्छेहरू ती दुई गुटका जासुस थिए । उनीहरूले आफ्नो इज्जत राख्ने कुनै बाटो नपाएपछि देखावटी रूपमा इस्लाममा प्रवेश गरे । उनीहरूमध्ये एउटा गुट अब्दुल्लाह विन उबै र उसको साथीहरूको गुट थियो । त्यसले पनि मुस्लिमविरुद्ध यहुदी र बहुदेववादीले भन्दा कम क्रोध र रिस राखेको थिएन ।

त्यसबाहेक अर्को चौथो समूह पनि थियो अर्थात मदिना वरिपरि सुकुम्बासीको रूपमा बसोबास गरेका मान्छेहरू । उनीहरूलाई नास्तिकता र इस्लामप्रति कुनै चाँसो थिएन । उनीहरू लुटेरा एवं डाँका थिए । तसर्थ बदरको सफलताले गर्दा उनीहरूलाई पनि आपत्ति परेको थियो । मदिनामा यदि शक्तिशाली शासन कायम भयो भने उनीहरूको लुटमार गर्ने बाटो नै बन्द हुन्छ भन्ने उनीहरूको चिन्ता थियो । त्यसकारण उनीहरूको मनमा पनि मुस्लिमविरुद्ध डाह एवं कपट उब्ज्यो र उनीहरू पनि मुस्लिमका शत्रु बने ।

यसरी मुस्लिमहरू चारैतिरबाट संकटमा घेरिएका थिए । तर मुस्लिमविरुद्ध हरेक समूहको नीति भने एकअर्काको भन्दा फरक फरक थियो । हरेक समूहले आफ्नो परिस्थिति अनुसार आफ्नो उद्देश्य पूरा गर्ने नीति लिएको थियो । जस्तै मदिनावासीहरूले देखावटी रूपमा इस्लाम स्वीकारी पर्दापछाडि षडयन्त्र गर्ने , जालफेल गर्ने र आपसमा लडाउने नीति लिएको थियो भने यहुदको एउटा समूहले खुलारूपमा शत्रुता, क्रोध एंव रिस प्रकट गरेको थियो । मक्कावासीहरूले मुस्लिमहरूलाई कम्मर भाँच्ने धम्की दिदै बदला लिन खुलेआम प्रचारबाजी गरेको थियो । उनीहरूले युद्धको तयारी पनि खुलेआम गरिरहेका थिए । अर्थात उनीहरूले मुस्लिमहरूलाई निम्न सूचना दिइरहेका थिए ।

ولا بد من يوم اغر محجل    يطول استماعی بعده للنوادب

अनुवाद छ : एक उज्वल एवं प्रकाशमय दिन हुनु जरुरी छ जुन दिनपछि लामो समयसम्म रुनेहरूको रुवाइ सुनिने छ ।

एक वर्ष पूरा भएपछि उनीहरू व्यवहारिक रूपमा एउटा यस्तो लडाइँ लड्न मदिनाको चारदिवारीको पर्खालमा चढे जो इतिहासमा उहुदको युद्धको नामबाट प्रसिद्ध छ । यस युद्धमा मुसलमानहरूको प्रतिष्ठा र अस्तित्वमा नराम्रो प्रभाव परेको थियो ।

ती खतराहरूको सामना गर्न मुसलमानहरूले पनि ठोस पाइला चाले । जसबाट मुहम्मदﷺको नेतृत्वरणनीति झल्किन्छ । यसबाट के पनि थाहा हुन्छ भने मदिनाको नेतृत्व वरिपरिका खतराहरू बारे अत्यन्तै सचेत थियो र त्यसको सामना गर्न उनीहरूसँग वृहत योजना थियो । अगाडि यसैको एक संक्षिप्त चित्र चित्रण गरिनेछ ।

## करदमा बनी सुलैमको युद्ध

बदरको युद्धपछि मदिनाको संचार माध्यमले गत्फान नामक कबिलाको शाखा बनु सुलैमका मान्छेहरू मदिनामाथि आक्रमण गर्न फौज जम्मा गरिरहेका छन् भन्ने बारे सबैभन्दा पहिलो समाचार दियो । त्यसको प्रतिकार गर्न मुहम्मदﷺ स्वयमले दुई सय सवारका साथमा उनीहरूको क्षेत्रमा गई अचानक उनीहरूमाथि आक्रमण गर्नुभयो । करद[1] नामक ठाउँमा उनीहरूको ठेगानासम्म पुग्नुभयो । मुस्लिमहरूको अचानक आक्रमणबाट बनु सुलैमभित्र भागदौड मच्चियो र भागदौडको क्रममा उनीहरूले उपत्यकामा पाँच सय उँट छोडेर भागे । ती उँटलाई मदिनाको फौजले कब्जा गऱ्यो र मुहम्मदﷺले त्यसको पाँचौ भाग निकालेर बाँकी मुजाहिदहरूबीच भाग लगाइदिनुभयो । हरेकको भागमा दुई दुई वटा उँट परेको थियो । त्यस युद्धमा यसार नामी एक जना गुलाम पनि गिरिफ्तार भएको थियो तर मुहम्मदﷺले उसलाई मुक्त गरिदिनुभयो । बनी सुलैम नामक ठाउँमा तीन दिनसम्म बसेर मुहम्मदﷺ मदिना वापस फर्कनुभयो ।

यो युद्ध हिजरी सम्बत २ साल शौवालको महिनामा बदरबाट फर्केको केवल सात दिनपछि वा हिजरी सम्वत ३ साल मोहर्रम महिनाको मध्यस्थमा भएको थियो । यस युद्धको दौरान मदिनाको जिम्मेवारी सबाअ विन उरफता वा भनिन्छ इब्ने उम्मे मक्तुमलाई थियो ।[2]

## मुहम्मदﷺलाई हत्या गर्ने षड्यन्त्र

बदरको युद्धमा पराजय भोगेपछि बहुदेववादीहरू क्रोधले भुतभुतिएका थिए । पूरा मक्कावासीहरू कसौडीमा पानी उम्ले झैं उम्लिरहेका थिए । अन्ततः मक्काका

---

१ करद एक प्रकारको मैलो चराको नाम हो तर यहाँ बनु सुलैमको एउटा मुहानलाई संकेत गरिएको छ जुन नजदमा मक्काबाट सिरियातर्फ जाने मार्गमा अवस्थित छ ।
२ जादुल मआद भाग २, इब्ने हेशाम भाग २, अब्दुल्लाह नजदीको मुख्तसर सिरतुर्रसुल

दुई जना जवानले यस वादविवादको आधार र कलहको जरो मुहम्मद हुन भनठानेर उनलाई नै मार्नु पर्छ भनी निर्णय गरे ।

बदर युद्धको केही दिनपछिको घटना हो । कुरैशका शैतानहरूमध्ये एक जना उमैर विन वहब जम्ही थियो । उसले मक्कामा मुहम्मदﷺ र उहाँका साथीहरूलाई दुःख दिने गर्थ्यो । उसको छोरा वहब विन उमैरलाई बदरको युद्धमा गिरिफ्तार गरी मुसलमानहरूले बन्दी बनाएका थिए । एक दिन त्यही उमैरले सफ्वान विन उमैयासँग हतिम नामक ठाउँमा बसेर कुरा गर्ने क्रममा बदरको युद्धमा मारिएका र इनारमा फ्याँकिएका मृतकहरूको कुरा पनि गऱ्यो । त्यस बारे बोल्दै सफ्वानले भन्यो,अल्लाहको कसम उनीहरूविना बाँचेर कुनै मजा छैन । जवाफमा उमैरले भन्यो, अल्लाहको कसम तिमीले ठीक भन्यौ । अल्लाहको कसम यदि ममाथि त्यो ऋण नभएको भए जसलाई चुक्ता गर्न मसँग केही छैन र मेरा ती बालबच्चा नभएका भए जसलाई हेरविचार गर्ने मपछि कोही हुने छैन, म मुहम्मदकहाँ गएर उसको हत्या गरिदिन्थे । किनभने म त्यहाँ जाने एउटा कारण पनि छ । मेरो छोरा उनीहरूको कैदमा छ ।

सफ्वानले यस मौकालाई सुनौलो अवसर ठान्दै भन्यो । ठीक छ हिंड तिम्रो ऋणको म जिम्मा भएँ र तिम्रो बालबच्चा मेरा बालबच्चा सरह हुन् । उनीहरू बाँचुञ्जेल मैले उनीहरूको पालनपोषण गर्नेछु । मसँग भएको सबै सुविधा उनीहरूले पाउने छन् ।

उमैरले भन्यो, ल ठीक छ, तिम्रो र मेरो यस कुरालाई गोप्य राख्नु । सफ्वानले भन्यो ठीक छ मैले त्यसै गर्छु ।

उमैरले आफ्नो तरवार धारिलो बनाएर मदिनातिर लाग्यो र त्यहाँ पुग्यो । उ मस्जिदको ढोकानिर आफ्नो उँट अड्याउन लाग्दा उमर विन खत्ताबको नजर उमाथि पऱ्यो । उनले मुसलमानको एक समूहबीच बदरको युद्धमा अल्लाहको तर्फबाट भएको मदत र कृपा बारे बातचित गरिरहेका थिए । उनले उसलाई देख्ने वित्तिकै भने, यो कुकुर अल्लाहको शत्रु उमैर कुनै कुनियतले नै आएको होला । उमरले मुहम्मदﷺको सेवामा उपस्थित भएर भने, हे ईशदूत अल्लाहको शत्रु उमैर आफ्नो तरवार बोकेर आएको छ । मुहम्मदﷺले भन्नुभयो, उसलाई मकहाँ लिएर आऊ । उमैर आएपछि उमरले उसको गलामा रहेको तरवारको फिता समाते र अन्सारका केही व्यक्तिहरूसँग भने, तिमीहरू मुहम्मदﷺ कहाँ जाऊ र त्यहीँ बस साथै मुहम्मदﷺ विरुद्धमा यस खबिसको तर्फबाट हुन सक्ने खतराबाट सचेत होउ । किनभने यो व्यक्ति विश्वासघाती छ । त्यसपछि उनले उमैरलाई भित्र लिएर गए । मुहम्मदﷺले उमरलाई उसको गर्दनमा रहेको तरवारको फिता समातेको देखेर भन्नुभयो उमर उसलाई छाडिदेउ । उमैर तिमी नजिक आऊ । उसले नजिक आएर भन्यो, शुभप्रभात ।

मुहम्मदﷺले भन्नुभयो अल्लाहले हामीलाई दिएको सलाम तिमीहरूको अभिवादनभन्दा धेरै राम्रो छ । अर्थात सलाम स्वर्गवासीको पनि अभिवादन हो ।

मुहम्मदﷺले सोध्नुभयो, हे उमैर तिमी किन आएका होऊ ? उसले भन्यो म तपाईंहरूले बन्दी बनाएर राखेको कैदीको लागि आएको हुँ । तपाईंहरूले उमाथि दया गरिदिनुहोस् ।

मोहम्मदﷺले भन्नुभयो, अनि यो तिम्रो गर्दनमा तरवार किन ? उसले भन्यो अल्लाहले यस तरवारलाई नाश गरोस् किनभने यसले हामीलाई केही काम दिन सकेन । मोहम्मदﷺले फेरि सोध्नुभयो, साँचो भन वास्तवमा किन आएका हौ ? उसले जवाफ दियो, केवल यसै कैदीको लागि आएको हुँ ।

मोहम्मदﷺले भन्नुभयो, होइन । तिमी र सफ्वान बिन उमैया हतिममा बसेका थियौ । कुरैशको तर्फबाट मारिएका जुन व्यक्तिहरू इनारमा फ्याँकिएका थिए तिनीहरूको बारेमा कुरा गर्दै थियौ । त्यहाँ तिमीले भन्यौ, यदि ममाथि ऋण नभएको भए र मेरा बालबच्चा नभएका भए म यहाँबाट गएर मुहम्मदको हत्या गर्ने थिएँ । सफ्वानले तिम्रो ऋण र तिम्रो बालबच्चाको जिम्मेवारी लियो यस सर्तमा कि तिमीले मेरो हत्या गर्नेछौ । तर सुन, तिम्रो र मेरोबीचमा अल्लाह छन् ।

उमैरले भन्यो, तपाईं ईशदूत हुनुहुन्छ भन्ने कुराको म साक्षी दिन्छु । हे ईशदुत, तपाईंले हामी समक्ष आकाशबाट जुन खबर ल्याउनु भएको थियो र तपाईंमाथि जुन वाणी अवतरण भएको थियो त्यसलाई हामीले मिथ्या ठान्दथ्यौं । तर यो त यस्तो कुरा हो जसमा म र सफ्वानबाहेक कोही उपस्थित थिएन । त्यसकारण अल्लाहको कसम, मलाई विश्वास छ, यो कुरा अल्लाहले बाहेक कसैले तपाईंलाई पुऱ्याएका होइनन् । तसर्थ अल्लाहको प्रशंसा गर्दछु जसले मलाई इस्लामको मार्ग दियो र यस ठाउँसम्म हाँकेर ल्यायो । त्यसपछि उमैरले इस्लामको पवित्र कलेमा पढ्यो र मुहम्मदﷺले साथीहरूलाई सम्बोधन गर्दै भन्नुभयो, आफ्नो भाइलाई इस्लाम धर्मको बारेमा बताऊ ,कुरआन पढाऊ र उसको कैदीलाई मुक्त गरिदेऊ ।

उता सफ्वानले मानिसहरूसँग भन्दै हिँडेको थियो : एउटा शुभसूचना सुन । केही दिनमा नै यस्तो घटना घट्ने छ जसले बदरको सम्पूर्ण दुःखलाई बिर्साउने छ । उसले बाटो हिँडने बटुवाहरूसँग पनि उमैरको बारेमा सोधपुछ गरिरहन्थ्यो । अन्तत : एक जना बटुवाले ऊ मुसलमान भएको खबर दियो । त्यो सुनेर सफ्वानले उसँग कहिल्यै नबोल्ने र उसको कुनै काम नगर्ने भनी कसम खायो । उता उमैर इस्लाम लिएर मक्कातिर लागे र त्यहीँ बसोबास गरी इस्लामको प्रचाप्रसार गर्न थाले । उनको हातबाट अत्यधिक मान्छेहरूले इस्लाम स्वीकारेका थिए ।[१]

---

१ इब्ने हेशाम भाग १/६६१

## बनी कैनुकाअको युद्ध

मुहम्मदﷺ मदिना आएपछि उहाँले यहुदीहरूसँग जुन सम्झौता गर्नुभएको थियो त्यसको दफाहरू पछाडिको पृष्ठमा उल्लेख भइसकेको छ । सम्झौतामा जे उल्लेख छ त्यही लागू होस् भन्ने मुहम्मदﷺको पूर्ण प्रयास र चाहना थियो । तसर्थ मुसलमानको तर्फबाट त्यस सम्झौताको एक हरफ विपरित कुनै कदम चालिएन । तर यहुदीहरू जसको इतिहास गद्दारी, बैमानी र सम्झौता भंग गर्ने जस्ता क्रियाकलापले भरिएको थियो उनीहरू एक्कासी आफ्नो पुरानै चालमा फर्के र मुसलमानको जमातभित्र धूर्तता, षड्यन्त्र, झगडा र दंगाफसाद भड्काउने दुष्प्रयास गरे । उनीहरूको धूर्तताको एउटा उदाहरण यहाँ प्रस्तुत गरिदै छ ।

## यहुदी धूर्तताको एउटा उदाहरण

इबने इस्हाक भन्छन्, शाश विन् कैस नामक एक जना यहुदी बूढो थियो । ऊ आफ्नो खुट्टा पसारेर चिहानमाथि बसेको थियो । ऊ कट्टर नास्तिक थियो । मुसलमानहरूसँग कट्टर शत्रुता र डाह गर्थ्यो । एक पटक ऊ सहाबीहरूको एउटा बैठक नजिकबाट हिँडदै थियो । बैठकमा औस् र खज्रज् दुवै कबिलाका मानिसहरू बसेर कुराकानी गरिरहेका थिए । उनीहरूमा पूर्वाग्रहीको ठाउँ इस्लामी माया र एकताले लिएको छ, उनीहरूको पुरानो सानोतिनो मनमोटाव पनि समाप्त भएको छ भन्ने कुराले उसलाई सताउन थाल्यो र उसले भन्यो : ओहो ! यस घरमा कबिलाका मान्यगन्यहरू जम्मा भएका छन् । अल्लाहको कसम, ठूलाबडाको एकता पश्चात त यहाँ हाम्रो आवतजावत पनि कठिन हुनेछ । तसर्थ उसले एकजना यहुदीलाई जो उसको साथमा थियो आदेश दिदै भन्यो : उनीहरूको बैठकमा जाऊ र उनीहरूसँग बिआसको युद्ध र त्यसभन्दा पहिलाको हालखबरबारे चर्चा गर । दुवैपक्षबाट जो शायरी भनिएको थियो त्यसबाट केही सुनाउ । त्यो यहुदीले त्यसै गर्‍यो । परिणामस्वरूप अवस् र खज्रज्बीच भनाभन् हुन थाल्यो । मानिसहरू झगडा गर्न थाले । एकअर्कासँग घमण्ड गर्न थाले । दुवैपक्षको एक एक जनाले घुँडाले टेकेर बसी वादप्रतिवाद गर्न लागे । एक जनाले आफ्नो प्रतिवादीसँग भन्यो । तिमीहरूले चाहयौ भने हामीले यो युद्धलाई पूनः चर्काउने छौँ । भन्नुको अर्थ के थियो भने, हामी त्यो युद्धको लागि फेरि तयार छौँ जुन पहिला लडिसकिएको थियो । त्यो कुरा सुनेर दुवै पक्ष तात्दै भन्न थाले, ठीक छ हुर्रामा प्रतिस्प्रधा हुने छ । हतियार.....हतियार ........।

मान्छेहरू हतियार लिएर हुर्रातर्फ निस्के । रक्तपातयुक्त लडाइँ हुनै लागेको थियो मुहम्मदﷺलाई त्यसको खबर भयो । मुहम्मदﷺ आफ्ना मुहाजिर साथीहरूलाई साथमा लिएर तुरुन्तै उनीहरू भएको ठाउँमा जानुभयो र उनीहरूसँग भन्नुभयो : हे, मुसलमानको जमात, अल्लाह ! अल्लाह !! म हुँदाहुँदै पनि अज्ञानयुगको जस्तो गुहार ? अँझ अल्लाहले तिमीलाई इस्लामको मार्गदर्शन प्रदान गरेको छ र त्यसबाट

तिमीहरूको अज्ञानकालको व्यवहार अन्त्य गरी तिमीलाई अज्ञानताबाट मुक्त गरी तिम्रो हृदय जोडेको छ । उहाँको उपदेश सुनेर साथीहरूलाई थाहा भयो उनीहरूको यो व्यवहार शैतानको एक झटका र शत्रुको चाल थियो । तसर्थ उनीहरू रून थाले र औस र खज्रजका मानिसहरू एक आपसमा अंकमाल गरे । त्यसपछि मुहम्मदﷺको आज्ञा पालना गरी आफ्नो अवस्थामा फर्के । अल्लाहले आफ्नो शत्रु शाश विन कैसले सल्काएको धुर्त्तताको आगो निभाइदिए । [१]

यो हो एउटा उदाहरण ती दंगाफसादहरूको जसलाई यहुदीहरूले मुसलमानबीच फैलाउने प्रयास गरिरहेका थिए । यस किसिमका बाधा अड्चन उनीहरूले इस्लामको मार्गमा खडा गर्ने गर्थे । यस्ता क्रियाकलापका लागि उनीहरूले विभिन्न योजना पनि बनाएका थिए । उनीहरूले झुटो षडयन्त्र पनि गर्ने गर्थे । विहानमा मुसलमान बन्थे साँझ भएपछि काफिर ताकि सीधासादा मुसलमानहरूको मनमा शंकाको बिउ रोप्न सकियोस् । कुनैसंग आर्थिक लेनदेन छ र यदि ऊ मुसलमान भयो भने उमाथि आर्थिक नाकाबन्दी लगाउथे । यदि ऊमाथि उनीहरूको केही बाँकी हुन्थ्यो भने दिनरात माग्ने गर्थे यदि मुसलमानको उनीहरूमाथि केही बाँकी हुन्थ्यो भने त्यो दिदैन थिए बरु नाजायज तरिकाले खान्थे र भन्थे तिम्रो ऋण हामीमाथि त्यति बेलासम्म मात्र थियो जब तिमीहरू हाम्रो पुर्ख्यौली धर्ममा थियौ तर अहिले तिमीहरूले आफ्नो धर्म परिवर्तन गऱ्यौ । तसर्थ तिम्रो र हाम्रो बीच कुनै लेनदेन छैन । [२]

ज्ञात रहोस् यहुदीहरूले यस किसिमका सम्पूर्ण गतिबिधि बदरको युद्धभन्दा पहिला नै  सुरु गरेका थिए । यी गतिबिधिहरू उनीहरूले मुहम्मदﷺसँग गरिएको सम्झौता विपरित गरेका थिए । अर्को तर्फ मुहम्मदﷺका साथीहरूले उनीहरू इस्लाममा आउँछन् कि भन्ने आसामा उनीहरूको सम्पूर्ण दुर्व्यवहरप्रति धैर्य गरेका थिए । त्यसबाहेक त्यो क्षेत्रमा शान्ति स्थापित होस् भन्ने चाहना पनि थियो ।

## बनु कैनुकाद्वारा सम्झौता उल्लघंन

बदरको मैदानमा अल्लाहको तर्फबाट मुसलमानहरूलाई ठूलो सहयोग भएको र उनीहरूलाई इज्जत तथा सम्मान प्रदान गरिएको कारण उनीहरूको शक्तिको छाप टाढासम्म सबैको मनमा परेको कुरा यहुदीहरूले देखपछि उनीहरूभित्र शत्रुता र डाहको भावना जाग्न थाल्यो । उनीहरूले खुलारूपमा विरोध र शत्रुताको प्रदर्शन गरे । खुला रूपमा विद्रोह गर्न र हानिनोक्सानी गर्न थाले ।

---

१ इब्ने हेशाम भाग १/५५५
२ कुरआनका विश्लेषकहरुले सुरह आले इमरानमा उनीहरुको यस प्रकारको गतिविधिका नमुनाहरु उल्लेख गरेका छन् ।

उनीहरुमध्ये सबैभन्दा बढी कपटी र दुष्ट व्यक्ति कअब विन अश्रफ थियो । उसको बारेमा अगाडि बयान गरिने छ । त्यसैगरी तीन कबिलामध्ये सबैभन्दा बढी बदमास बनु कैनुकाको कबिला थियो । उनीहरू मदिनाभित्र नै थिए । उनको टोलको नाम पनि उनको नाममा नामाकंन थियो । उनीहरू पेसागत रूपमा सुनार ,कुमाल र कामी थिए । त्यो पेसाका कारण उनीहरू सबै जनासँग प्रयाप्त मात्रामा युद्ध गर्ने हातहतियार थियो । उनीहरूको योद्धाहरूको संख्या ७०० थियो । उनीहरू मदिनाको शक्तिशाली यहुदीहरू थिए र उनीहरूले नै सबैभन्दा पहिला सम्झौता उल्लघंन गरेका थिए । विवरण यस प्रकार छ ।

जब अल्लाहले बदरको युद्धमा मुसलमानलाई विजय प्रदान गरे अनि उनीहरूको अत्याचार झन चर्कन थाल्यो । उनीहरूले आफ्नो अत्याचार, दुराचार र लडाउने भिडाउने क्रियाकलाप व्यापक बनाए । दंगा सृजना गर्न थाले । फलस्वरूप मुसलमानमध्ये कोही उनीहरूको बजारमा जाँदा उसँग ठट्टा गर्नुका साथै उसलाई यातना दिन्थे । मुसलमान महिलालाई पनि छेड्छाड गर्न सुरु गरे

यसरी स्थिति अँझ गम्भिर हुँदै गएपछि उनीहरूको अत्याचार झनै बढ्दै गयो अनि मुहम्मदﷺले उनीहरूलाई जम्मा गरेर प्रवचन दिदै सही मार्गतिर बोलाउनुका साथसाथै अत्याचार र विद्रोहको परिणमबाट सचेत गर्नुभयो । तर त्यसबाट उनीहरूको दुष्टता र घमण्डमा झन बृद्धि भयो ।

अबु दाउदले इब्ने अब्बासमार्फत वर्णन गरेका छन् । मुहम्मदﷺले बदरको दिन कुरैशलाई पराजित गरेर मदिना आएपछि बनु कैनुकाको बजारमा यहुदीहरूलाई जम्मा गरेर भन्नुभयो । ए यहुदी जमात, इस्लाम स्वीकार ताकि कुरैशलाई जुन मार परेको थियो त्यो मार तिमीलाई नपरोस् । उनीहरूले भनेः हे मुहम्मदﷺ तिमीलाई यस कुराबाट धोका नहोस् कि तिमीले कुरैशका अनाडी एवं युद्धबारे अज्ञानी मान्छेहरूसँग लडाइँ गरेर उनीहरुलाई पराजित गऱ्यौ । यदि तिम्रो लडाइँ हामीसँग भयो भने थाहा हुने छ हामी वीर हौं भन्ने कुरा । साथै हामी जस्तो मान्छेसँग तिम्रो सामना भएको छैन । त्यसको जवाफमा अल्लाहले निम्न आयत अवतरण गरे ।[१]

قل للذين كفروا ستغلبون و تحشرون إلى جهنم وبئس المهاد قَدْ كَانَ لَكُمْ آيَةٌ فِي فِئَتَيْنِ الْتَقَتَا ۖ فِئَةٌ تُقَاتِلُ فِي سَبِيلِ اللَّهِ وَأُخْرَىٰ كَافِرَةٌ يَرَوْنَهُمْ مِثْلَيْهِمْ رَأْيَ الْعَيْنِ ۚ وَاللَّهُ يُؤَيِّدُ بِنَصْرِهِ مَنْ يَشَاءُ ۗ إِنَّ فِي ذَٰلِكَ لَعِبْرَةً لِأُولِي الْأَبْصَارِ (آل عمران :12- 13 )

यी काफिरहरूसँग भनिदेऊ, तिमीहरू निकट भविष्यमा नै पराजित हुनेछौ र नर्कको आगोतिर एकिकृत गरिने छौ र त्यो अति नै नराम्रो ठेगाना हो । दुई समूहमा भएको लडाइँमा तिम्रो लागि प्रेरणा छ । एक समूह अल्लाहको मार्गमा लडिरहेको

१ औनुल माअबुद भाग ३, इब्ने हेशाम भाग १/५५२

थियो र अर्को समूह काफिर थियो । अल्लाहको मार्गमा लड्नेहरू उनीहरूको नजरमा दोब्बर देखिएका थिए । अल्लाह आफ्नो सहयोगद्वारा जसलाई चाहन्छ समर्थन गर्दछ । त्यसमा दृष्टिवालाहरूको लागि प्रेरणा छ । (आले इम्रान:१२,१३)

जे होस्, बनु कैनुकाको तर्फबाट जुन प्रकारको जवाफ आएको थियो त्यसको प्रष्ट अर्थ युद्धमा होमिनु थियो तर मुहम्मदﷺले त्यसमा पनि धैर्य गर्नुभयो । मुसलमानहरूले पनि धैर्यताका साथ आगामी परिस्थितिको प्रतीक्षा गरे ।

यस कुराले गर्दा यहुदीहरूको हिम्मत झन् बलियो भयो । फलस्वरूप केही दिनपछि नै उनीहरूले मदिनामा दंगाफसाद फैलाउन थाले । त्यसको नतिजामा उनीहरूले आफ्नो चिहानको खाडल आफैले खन्ने काम गरे र आफु बाँच्ने बाटो पनि बन्द गरे ।

इबने हेशामले अबु औनमार्फत वर्णन गरेका छन् : एक जना अरबी महिला बनु कैनुकाको बजारमा केही सामान लिएर गइन् । त्यो बेचेर केही कामको लागि एक जना यहुदी सुनारको पसलमा गइन् । यहुदीले उनको अनुहार खोल्न पठायो तर उनले अस्वीकार गरिन् । यहुदीले उनले थाहा नै नपाउने गरी उनको कपडाको तलको भाग पछाडिपट्टि बाँधिदियो र उनलाई पत्तो नै भएन । जब उनी उठिन् उनको कपडा खुल्यो । यहुदी जोडले हाँस्यो । महिलाले हारगुहार गरिन् । उनको स्वर सुनेर एक जना मुस्लिम व्यक्तिले त्यो सुनारमाथि आक्रमण गऱ्यो र उसको हत्या गरिदियो । यहुदीहरूले त्यसको प्रतिकार गर्दै मुसलमानमाथि आक्रमण गरी उनको हत्या गरे । त्यसपछि मृतकका आफन्तहरूले हारगुहार गरे र यहुदी विरुद्ध मुसलमानसँग सहायता मागे । अन्ततः मुसलमान र बनु कैनुकाको यहुदीबीच लडाइँ भयो ।[१]

## घेराबन्दी, आत्मसमर्पण र देशनिकाला

मुहम्मदﷺको धैर्यताको बाँध टुट्यो । उहाँले मदिनाको व्यवस्थापनको जिम्मेवारी अबु लुबाबामाथि सुम्पिनुभयो । मुसलमानको झण्डा हमजाको हातमा दिनुभयो र स्वयम आफै अल्लाहको लसकरको साथमा बनु कैनुकातर्फ लाग्नुभयो । मुहम्मदﷺलाई देख्ना साथ उनीहरू किल्लाभित्र पसे । उहाँले उनीहरूको राम्रोसँग घेराउ गर्नुभयो । हिजरी सम्बत २ साल शौवाल महिनाको १५ तारिख शुक्रबारको दिन थियो । १५ दिनसम्म अर्थात जिकअदा महिनाको औँसीसम्म घेराउ निरन्तर जारी रह्यो । त्यसपछि अल्लाहले उनीहरूको मनलाई भयभीत गरिदिए । किनभने जुन समूहलाई अल्लाहले पराजित गर्न चाहन्छन् उनीहरूको मनलाई भयभीत तुल्याउँछन् । यसरी बनु कैनुकाले मुहम्मदﷺले उनीहरूको धनजन, बालबच्चा र महिला बारे

१ इब्ने हेशाम भाग २/४७

गर्नुभएको सबै निर्णयलाई स्वीकारी आत्मसमर्पण गऱ्यो । त्यसपछि मुहम्मदﷺको निर्देशन बमोजिम उनीहरू सबैलाई बाँधियो ।

तर त्यही मौकामा अब्दुल्लाह विन उबैले आफ्नो मुनाफिकाना चाल चल्यो । उसले आफ्नो बारेमा क्षमाको आदेश गरिदिनु भनी मुहम्मदﷺसँग जिद्दि गर्दै बिन्ती गर्न थाल्यो । उसले भन्यो । हे मुहम्मदﷺ , सम्झौता गर्ने मेरा साथीहरूमाथि दया गरिदिनु होस् । ज्ञात रहोस् , बनु कैनुका खजरज्का सहयोगी थिए । मुहम्मदﷺले निर्णय गर्न अलिकति ढिलो गर्नुभएको थियो । उसले फेरि त्यही कुरालाई दोहोऱ्यायो । त्यस पटक मुहम्मदﷺले ऊदेखि आफ्नो अनुहार घुमाउनुभयो । उसले मुहम्मदﷺको खुट्टा समात्न थाल्यो । मुहम्मदﷺले भन्नुभयो, मलाई छोड । उहाँ रिसाउनुभयो । रिसका संकेत अनुहारमा देखिन थाल्यो । तिमीमाथि अपसोच छ, मलाई छोड । तर त्यो मुनाफिक आफ्नो कुरामा अडिग रह्यो र भन्यो : अल्लाहको कसम म तपाईंलाई छोड्न सक्तिन जबसम्म तपाईंले हाम्रो सम्झौताकर्ताहरूमाथि दया गर्नुहुन्न । तपाईंले माफ गर्नु भएन भने मलाई आपतविपतबाट बचाउने ४०० जना अर्धपोशाकमा रहेका र ३०० सय जना युद्धवस्त्र लगाएका जवानहरूलाई तपाईंले एक विहानीमा नै हत्या गरिदिनु हुनेछ । अल्लाहको कसम मैले समयचक्रको खतरा अनुभूति गरिरहेको छु ।

आखिरकार मुहम्मदﷺले त्यस मुनाफिकमाथि दया गरिदिनुभयो साथै उसको साथीहरूलाई पनि जीवनदान दिनुभयो । उनीहरूलाई मदिनाबाट निस्कन र आफ्नो वरिपरि बसोबास नगर्न पनि आदेश दिनुभयो । फलस्वरूप उनीहरू सिरियातर्फ लागे । केही दिनपछि नै उनीहरूमध्ये अधिकांशको त्यहाँ मृत्यु भयो ।

मुहम्मदﷺले उनीहरूको धन कब्जा गर्नुभयो । जसमध्ये तीन वटा कमान, दुइ वटा युद्धवस्त्र,तीन वटा तरवार र तीन वटा तीर आफुले लिनुभयो र युद्धप्राप्तबाट पाँचौ भाग पनि निकाल्नुभयो । युद्धप्राप्त जम्मा गर्ने काम मुहम्मद विन मस्लमाले गरेका थिए ।[१]

## सविकको युद्ध

एकातर्फ सफवान् विन उमैया, यहुदी र मुनाफिकहरू आआफ्नो जालझेलमा क्रियाशील थिए भने अर्कोतर्फ अबु सुफ्यान् पनि कम भारमा राम्रो प्रतिफल प्राप्त हुने कारवाही रच्दै थियो । उसले छिटोभन्दा छिटो त्यस्तो कारवाही गरेर आफ्नो समुदायको स्वाभिमानको संरक्षण गर्नुका साथै उनीहरूको शक्तिप्रदर्शन गर्न चाहन्थ्यो । उसले मुहम्मदﷺसँग लडाइँ नगर्दासम्म अपवित्र भएको खण्डमा पनि पानी नछुने

१ जादुल मआद भाग २, इब्ने हेशाम भाग २

कसम खाएको थियो । तसर्थ उ आफ्नो कसम पूरा गर्न दुई सय जना सवारको साथमा निस्केर कनात नामी उपत्यकाको एक तर्फको निब नामी पहाडको काखमा टेण्ट लगाएर बस्यो । मदिनाबाट त्यसको दुरी बाह्र मिल जति थियो । तर सुफयान्लाई मदिनामा खुला आक्रमण गर्न हिम्मत भएन । त्यसैले उसले त्यस्तो खालको कारवाही गऱ्यो जसलाई लुटपाटको संज्ञा दिन सकिन्छ । त्यसको विवरण यस प्रकार छ । ऊ रातको अन्धकारमा मदिनाको चक्रपथमा प्रवेश गऱ्यो र हुयै इब्ने अख्तबको घर नजिक गएर उसलाई ढोका खोल्न भन्यो तर उसले डरका कारण ढोका खोल्न इन्कार गऱ्यो । अबु सुफयान् फर्केर बनु नजिरको एक अर्को सरदार सलाम मश्कम्कहाँ पुग्यो जो बनु नजिरको कोषाध्यक्ष पनि थियो । अबु सुफयानले भित्र पस्ने अनुमति माग्यो । उसले उसलाई अनुमति पनि दियो र सत्कार पनि गऱ्यो । खानाका साथमा रक्सी पनि खुवायो । मुस्लिमहरूको गोप्य परिस्थिति बारे पनि जानकारी गरायो । रातको अन्तिम पहरमा ऊ त्यहाँबाट निस्केर आफ्नो साथीहरूकहाँ गयो र उनीहरूको एक दस्तालाई लिएर उसले मदिनाको वरिपरि अरिज नामी ठाउँमा आक्रमण गऱ्यो । त्यो दस्ताले त्यहाँ खजुरका केही बोटहरू काटेर जलायो र एक जना अन्सार र उनका साथीको उनीहरूकै खेतमा हत्या गरेर मक्कातिर सुइकियो ।

मुहम्मदﷺले उनीहरू आएको खबर पाउने वित्तिकै अबु सुफ्यान र उसको साथीहरूको पिछा गर्नुभयो तर उनीहरू भागिकेका थिए । मुहम्मदﷺले उनीहरूलाई भेटाउन त सक्नुभएन तर उनीहरूले आफ्नो भारी हल्का गर्न फालेको सातु लगायत अन्य सामान फेला पार्नुभयो । मुहम्मदﷺ करकर्तुल कद्रसम्म गएर फर्कनुभयो । मुसलमानहरू सातु र अन्य सामान लिएर वापस आए र त्यस युद्धको नाम सविक राखे । सातुलाई अरबी भाषामा सविक भनिन्छ । यो युद्ध बदरको युद्धको ठीक दुई महिनापछि हिजरी सम्बत २ साल जिल हिज्जको महिनामा भएको थियो । यस युद्धमा मदिनाको व्यवस्थापन अबु लुबाबह विन अब्दुल मुन्जिरलाई सुम्पिइएको थियो ।[१]

## जिअम्रको संघर्ष

बदर र उहुद युद्धबीचको मुहम्मदﷺको नेतृत्वमा यो संघर्ष सबैभन्दा ठूलो सशस्त्र संघर्ष थियो । यो संघर्ष हिजरी सम्बत २ साल मोहर्रम महिनामा भएको थियो ।

यस युद्धको कारण, मदिनाका संचारमाध्यमले मुहम्मदﷺलाई बनु सअलबा र महारिबको ठूलो जत्था मदिनामा छापा मार्न जम्मा हुँदैछन् भन्ने खबर दियो । त्यो

१ जादुल मआद भाग २, इब्ने हेशाम भाग २

खबर प्राप्त हुनासाथ मुहम्मदﷺले मुसलमानलाई तयारी गर्ने आदेश दिनुभयो । सवारी र पैदल गरी ४५० जनाको टोली लिएर उहाँ निस्कनुभयो । उहाँले उस्मान विन अफ्फानलाई आफ्नो कायम मुकाम नियुक्त गर्नुभयो ।

बाटोमा सहाबीहरूले बनु सअलबाको जब्बार नामक एक जनालाई गिरिफतार गरे । मुहम्मदﷺले उसलाई इस्लामको निमन्त्रणा दिनुभयो । उसले इस्लाम स्वीकाऱ्यो । त्यसपछि उहाँले उसलाई बिलालको साथमा सामिल गर्नुभयो । बाटो देखाउने बटुवा बनेर उसले मुसलमानहरूलाई शत्रुको ठाउँसम्म पुऱ्यायो ।

उता शत्रुहरूलाई मदनी फौजको आगमनको खबर भएपछि उनीहरू वरिपरिका पहाडहरूमा छरिए तर मुहम्मदﷺ अगाडि बढिरहनुभयो र लश्करको साथमा त्यो ठाउँसम्म पुग्नुभयो जहाँ शत्रुहरूले आफ्नो फौज जम्मा गर्न छनोट गरेका थिए । त्यो ठाउँमा पानीको एउटा मुहान थियो जो जिअम्रको नामबाट प्रसिद्ध थियो । उहाँले त्यहाँका गाउँलेमाथि दवाव कायम राख्न र उनीहरूलाई मुसलमानको शक्तिको अनुभूति गराउनको लागि हिजरी सम्बत ३ सालमा सफर महिना पूरै त्यहाँ विताएर मदिना फर्कनुभयो ।[1]

## कअब बिन अशरफ्को हत्या

यहुदीहरूमध्ये कअब यस्तो व्यक्ति थियो जसलाई इस्लाम र मुसलमानसित कट्टर शत्रुता र डाह थियो । मुहम्मदﷺलाई दुःख दिने गर्थ्यो र उहाँको विरुद्ध युद्ध गर्न खुलेआम प्रचारबाजी गर्थ्यो ।

ऊ तिइ नामक कबिलाको बनु नब्हानबाट थियो र उसको आमाको सम्बन्ध बनी नजिरबाट थियो । ऊ बढो धनी एंव पुँजीपति थियो । अरबमा उसको सुन्दरताको चर्चा थियो र ऊ कवि पनि थियो । उसको किल्ला मदिनाको दक्षिणतिर बनु नजिरको बस्तीपछाडि अवस्थित थियो ।

जब उसलाई बदरको युद्धमा मुसलमानको विजय र कुरैशको सरदारहरूको हत्याको खबर भयो अनि ऊ झ्वाट्ट उठेर बोल्यो : के वास्तवमा यस्तो भएको छ ? उनीहरू अरबका मान्यगन्य र जनताका राजा थिए । यदि मुहम्मदले उनीहरूलाई मारेको हो भने धर्तीको कोख उसको पिठ्यूँभन्दा उत्तम छ ।

विश्वसनीय स्रोतबाट खबरको पुष्टि भएपछि त्यो अल्लाहको शत्रुले मुहम्मदﷺ र मुसलमानहरूको खिल्ली उडाउन र इस्लाम विरोधीहरूको प्रशंसा गर्न र उनीहरूलाई मुसलमान विरुद्ध भड्काउन थाल्यो । यति गर्दा पनि उसको मन भरिएन

---

१ इब्ने हेशाम भाग २, जादुल मआद भाग २ । भनिन्छ दासुर वा गौरिस नामक व्यक्तिले यसै युद्धमा अल्लाहका संदेष्टाको हत्या गर्ने षड्यन्त्र गरेको थियो । तर यो घटना अन्य युद्धमा घटेको थियो भन्ने भनाइ सही छ । सही बुखारी भाग २

र कुरैशकहाँ गई मुत्तलिब विन अबी वदाअ सहमीको घरमा बसेर उसले बहुदेववादीहरूको भावनालाई भड्काउन, बदला लिने चेतना जगाउन र उनीहरूलाई मुहम्मदﷺविरुद्ध युद्धको निम्ति उभार्न शोकगीत गाएर कुरैशका ती सरदारहरूको शोक व्यक्त गर्न थाल्यो जसलाई बदरको युद्धमा हत्या गरी इनारमा फ्याँकिएको थियो । ऊ मक्कामा हुँदा अबु सुफ्यान र बहुदेववादीहरूले उसँग सोधे, तिम्रो विचारमा हाम्रो धर्म राम्रो छ कि मुहम्मद र उसका साथीहरूको ? हामी र उनीहरूमध्ये को सत्य मार्गमा छ ? कअब विन अश्रफले भन्यो , तिमीहरू सत्य मार्गमा छौ र उच्च छौ । उनीहरूको प्रतिक्रियामा अल्लाहले निम्न श्लोक अवतरण गरे ।

أَلَمْ تَرَ إِلَى الَّذِينَ أُوتُوا نَصِيبًا مِنَ الْكِتَابِ يُؤْمِنُونَ بِالْجِبْتِ وَالطَّاغُوتِ وَيَقُولُونَ لِلَّذِينَ كَفَرُوا هَؤُلَاءِ أَهْدَىٰ مِنَ الَّذِينَ آمَنُوا سَبِيلًا (النساء :51)

के तिमीले किताबको एक अंश दिइएको मानिसहरूलाई देखेनौ जसले मूर्ति र पिचासमाथि आस्था राख्छन । नास्तिकहरूसँग भन्छन् आफुहरू आस्थावानहरूभन्दा बढी सत्य मार्गमा छन् । (अल् निसा: ५१)

कअब विन अश्रफले ती सम्पूर्ण दुष्कर्महरू गरी मदिना आएर सहाबी र महिलाहरूको बारेमा अश्लील शायरी भन्न थाल्यो र आफ्नो नराम्रो बचन तथा अपशब्द बोलेर उनीहरूलाई गहिरो चोट दिन थाल्यो । यस्तै परिस्थितिले गर्दा मुहम्मदﷺले भन्न बाध्य हुनुभयो, कसले कअब विन अश्रफलाई तह लगाउन सक्छ ? किनभने उसले अल्लाह र उसका दूतलाई चोट पुऱ्याएको छ ।

जवाफमा मुहम्मद विन मस्लमा, उबाद विन बशर, अबु नायला जसको नाम सल्कान विन सलामा थियो साथै कअबको आमापट्टिको भाइ पनि थियो, हारिस विन औस् र अबु अबस् विन हब्रले आफुलाई अगाडि सारे । त्यो सानो टोलीको कमाण्डर मुहम्मद विन् मस्लमा थिए ।

कअब विन् अश्रफको हत्याको बारेमा जुन भनाईहरू छन् त्यो के हो भने मुहम्मदﷺले सोध्नुभयो, अल्लाह र अल्लाहका दूतलाई चोट पऱ्याउने व्यक्ति कअब विन अश्रफलाई कसले तह लगाउन सक्छ ? जवाफमा मुहम्मद विन मस्लमा उठेर भने, हे ! अल्लाहका दूत म हाजिर छु । के उसको हत्या गरिदिउँ ? उहाँले भन्नुभयो, हुन्छ । उनले भने, मलाई केही भन्ने अनूमति दिनुहोस् । उहाँले भन्नुभयो, ल भन । त्यसपछि मुहम्मद विन मस्लमा कअबकहाँ गए र मुहम्मदﷺतर्फ इशारा गर्दै भने, त्यो व्यक्तिले हामीबाट खैरात मागेर वास्तवमा हामीलाई दुःखमा पारेको छ ।

कअबले भन्यो अल्लाहको कसम तिमीहरूले अँझै चेत पाउने छौ ।

मुहम्मद विन मस्लमाले भने, अब हामी उसको अनुयायी बनी सक्यौ परिणाम नआउञ्जेलसम्म उसको साथ छोड्न उचित पनि छैन । हजुर ! हामीलाई एक दुई वसक गहुँ दिनु पऱ्यो ।

कअबले भन्यो मकहाँ केही धरौटी राख ।

मुहम्मद बिन मस्लमाले भने, तपाईँलाई के चीज मन पर्छ ।

कअबले भन्यो, तिम्रो श्रीमती धरौटी राख ।

मुहम्मद बिन मस्लमाले भने, अरबको सबैभन्दा सुन्दर तपाईँ जस्तो व्यक्तिकहाँ हामीले आफ्नी श्रीमतीलाई धरौटी कसरी राख्ने ?

उसले भन्यो, त्यसो हो भने तिम्रो छोरीहरूलाई नै राख ।

मुहम्मद बिन मस्लमाले भने, हामीले आफ्नी छोरीलाई कसरी राख्ने ? हामीले यस्तो गर्‍यौं भने एक दुई वसकको बदलामा धरौटी राखिएकी थिइन् भनी सबैले उनीहरूलाई घृणा गर्नेछन् । यो हाम्रो निम्ति लाजमर्दो कुरा हुनेछ । बरु हामीले हतियार धरौटी राख्न सक्छौं ।

मुहम्मद बिन मस्लमाले हतियार लिएर आउने कुरा दुवै पक्षमा तय भयो ।

उता अबु नायलाले पनि त्यस्तै कदम चाले । उनी पनि कअब विन अश्रफकहाँ आए । केही बेर यताउताको शायरी सुन्ने सुनाउने गरे । उनले भने : दाज्यू इब्ने अश्रफ ! म एउटा कामले आएको हुँ । म भन्न चाहन्छु तर त्यसलाई अलि गोप्य राख्नु होला ।

कअबले भन्यो, ठीक छ ।

अबु नायलाले भने : मुहम्मदﷺतिर इशारा गर्दै त्यो व्यक्तिको आगमनले गर्दा हामी दुःखमा परेका छौं । सारा अरब हाम्रो दुस्मन बनेका छन् । सबै हाम्रो विरुद्धमा एकबद्ध भएका छन् । हाम्रो बाटो पनि बन्द भएको छ । परिवारमा फुट परेको छ । मान्छे अकालमा मर्दैछन् । हाम्रा बालबच्चाहरू सक्त कठिनाइमा छन् । यसरी उनले पनि मुहम्मद विन मस्लमाले जस्तो रंगढंगका कुरा गरे । कुरा गर्दागर्दै अबु नायलाले भने मसँग केही साथीहरू छन् । उनीहरूको अवस्था पनि मेरो जस्तै छ । उनीहरूलाई तपाईंकहाँ ल्याउन चाहन्छु । तपाईं उनीहरूसँग पनि आफ्नो केही सामान बेचेर उनीहरूमाथि गुण लगाउनुहोस् ।

मुहम्मद विन मस्लमा र अबु नायलाले आआफनो कुरा राखेर आफ्नो उद्देश्यमा सफल भए । किनभने त्यस कुराहरूपछि हतियार र साथीहरूसमेत उनीहरू दुवैको आगमनले उसलाई कुनै डर हुने भएन । शुरुको त्यस कुराकानीपछि उनीहरू ३ हिजरी रब्बिअल औवल १४ तारिखको दिन जुनेली रातमा सानो टोली लिएर मुहम्मदﷺको सेवामा उपस्थित भए । मुहम्मदﷺ उनीहरूलाई विदाइ गर्न बकिअ गर्कदसम्म जानुभयो र उनीहरूसँग भन्नुभयो, अल्लाको नाम लिएर जाऊ । अल्लाहले तिमीहरूको मदत गरून् । त्यसपछि मुहम्मदﷺ आफ्नो घरतिर फर्कनुभयो र नमाज तथा प्रार्थनामा व्यस्त हुनुभयो ।

उता त्यो टोली कअब विन अश्रफको किल्लानिर पुगेपछि अबु नायलाले ठूलो स्वर गरी बोलाए । स्वर सुनेर कअब उनीहरू भएको ठाउँमा जान लाग्दा उसको नौली श्रीमतीले भनी : यसबेला कहाँ जादै हुनुहुन्छ ? मैले यस्तो स्वर सुनिरहेकी छु जसले रक्तपातलाई निम्त्याए जस्तो छ ।

कअबले भन्यो, उनीहरू त मेरा भाइ मुहम्मद विन मस्लमा र एउटै महिलाको दूध खाएको दूधे भाइ अबु नायला हुन् । उनीहरू सज्जन साथी हुन् । उनीहरूलाई तीरको अगाडि बोलाइयो भने पनि आउँछन् । त्यसपछि ऊ बाहिर आयो । उसले केही सुगन्ध लगाएको थियो जसले गर्दा उसको टाउकोबाट बासना आएको थियो ।

अबु नायलाले आफ्नो साथीहरूसँग भनेका थिए, ऊ आयो भने म उसको कपाल समातेर सुँघ्छु, उसको टाउको राम्रोसँग मेरो नियन्त्रणमा परेपछि उमाथि झम्टेर उसलाई मार्नु । अन्तत : कअब आएपछि केही छिन कुराकानी भयो । कुराकानी गर्ने क्रममा अबु नायलाले भने, इब्ने अश्रफ ! शुअबे अजुजतिर जाउँ कि ? आज राती केही कुरा गरौं । उसले भन्यो, तिम्रो इच्छा भए जाऔं । सबै हिँडे । हिँड्दाहिँड्दै अबु नायलाले भने, आजको जस्तो सुगन्ध त मैले कहिल्यै पनि सुँघेको थिइनँ । त्यो कुरा सुनेर गौरवले कअबको छाती फुल्यो । भन्न थाल्यो, मसँग अरबकै सबैभन्दा बढी बसाउने महिला छ । अबु नायलाले भने, अनुमति भए तपाईंको टाउको सुँघु कि ? उसले भन्यो, ठीक छ । अबु नायलाले उसको टाउको सुमसुम्याइ आफुले पनि सुँघे र साथीहरूलाई पनि सुँघाए ।

उनीहरू केही अगाडि हिँडे, अबु नायलाले भने, दाज्यु एक पटक अँझै सुँघ्नु पर्‍यो । कअबले भन्यो ठिक छ, ठिक छ । अबु नायलाले फरि त्यही काम गरे । ऊ एकदमै निर्धक्क थियो ।

केही अगाडि बढेपछि अबु नायलाले भने, दाज्यू एक पटक अरु । उसले भन्यो ठीक छ । यस पटक अबु नायलाले टाउको मुसारे र राम्रोसँग समातेर भने : समात अल्लाहको शत्रुलाई, त्यति भन्नु थियो कि ऊमाथि कैयन तरवारहरू प्रहार गरिए तर एउटा पनि काम लागेन । त्यो देखेर मुहम्मद विन मस्लमाले आफ्नो कोदालले उसको आँडलाई अँठ्याएँ । कोदाली आरपार भयो र अल्लाहको शत्रु त्यहीँ ढल्यो । ऊमाथि आक्रमण हुँदा ऊ अति जोडले चिच्यायो जसले गर्दा वरिपरि हुहल्ला भयो । सम्पूर्ण किल्लाका मानिसहरू उठे तर केही भएन ।

आक्रमण गर्दा हारिस विन औस्लाई केही साथीहरूको तरवार लागेकाले उनी घाइते भएका थिए । उनको शरीरबाट रगत बगिरहेको थियो । आफ्नो दस्ता हुर्रा अरिज नामक ठाउँमा पुग्दा उनीहरूले हारिसलाई साथमा देखेनन् । सबै त्यहीँ रोकिए । केही छणपछि हारिस पनि उनीहरूको पाइलाको निशाना हेर्दै त्यहाँ पुगे ।

त्यहाँबाट उनलाई साथीहरूले बोकेर लगे र बकिअ गर्कदमा पुगेर  चर्को स्वरले नारा लगाउँदा मुहम्मदﷺले पनि सुन्नुभयो । उनीहरूले उसलाई मारेका छन् भन्ने कुरा मुहम्मदﷺले बुझी हाल्नुभयो र उहाँले पनि अल्लाहु अक्बरको नारा लगाउनुभयो । उनीहरू मुहम्मदﷺको सेवामा उपस्थित भएपछि मुहम्मदﷺले भन्नुभयो : तिमीहरूलाई खुसी प्राप्त होस् । उनीहरूले भने, तपाईंलाई पनि हे ईशदूत । साथसाथै उनीहरूले त्यो विद्रोहीको टाउको उहाँको सामु ल्याएर राखिदिए । मुहम्मदﷺले उसको हत्याप्रति अल्लाहको प्रशंसा गर्नुभयो र हारिसको घाउमा थुक लगाइदिनुभयो जसबाट उनी ठीक भए त्यसपछि त्यो घाउ सदाको लागि ठीक भयो ।[१]

उता यहुदीहरूलाई विद्रोही कअब विन अश्रफको हत्याको खबर भएपछि उनीहरूको हठधर्मी एवं ढिपी मन त्रसित भयो । अमन शान्ति विथोल्ने,दंगाफसाद गर्ने र सम्झौताको ख्याल नगर्नेहरूलाई उपदेश काम नलागेको खण्डमा मुहम्मदﷺले बलको प्रयोग गर्न पनि पछाडि नपर्ने रहेछन् भन्ने कुरा थाहा भयो । त्यसकारण उनीहरूले आफ्नो मान्छेको हत्या हुँदा पनि केही बोल्न सकेनन् र उनीहरू एकदमै चुपचाप बसे । बदला लिने जमर्को त गरे तर आँट भएन ।  अर्थात ती काला सर्पहरू सुटुक्क आफ्नो दुलोभित्र पसे ।

यसरी एउटा लामो समयसम्म मुहम्मदﷺलाई मदिना बाहिरबाट आउन सक्ने खतराहरूको सामना गर्नु परेन र मुसलमानहरू आन्तरिक समस्याबाट मुक्त भए जसको खतरा उनीहरूलाई महसुस् भइरहेको थियो र बेलाबेलामा महसुस् गर्ने गर्थे ।

## बहरानको युद्ध

यो एउटा ठूलो फौज रात्रीगस्तीमा थियो । उनीहरूको संख्या ३०० जति थियो । त्यो फौज लिएर मुहम्मदﷺ हिजरी सम्बत ३ साल रब्बिअल आखिरको महिनामा बहरान नामी क्षेत्रतिर जानुभयो । त्यो ठाउँ हिजाजमा अवस्थित फरअको वरिपरि एक खानी भूभाग हो । रब्बिअल आखिर र जमादिल औवल दुई महिनासम्म उनीहरू त्यहीँ बसेर मदिना फर्के । त्यहाँ कुनै किसिमको झडप भएन ।[२]

---

१ यस घटनाको विवरण इब्ने हेशाम भाग २, सही बुखारी भाग १, अबु दाऊद र जादुल मआद भाग २ बाट लिइएको हो ।

२ इब्ने हेशाम भाग २, जादुल मआद भाग २ । यस युद्धका कारणहरु निर्क्योल गर्न सन्दर्भहरुमा मतभेद छ । भनिन्छ मदिना तथा मदिनावरिपरि आक्रमण गर्नको लागि बनु सुलैमले व्यापक रुपमा तयारी गरिरहेको छ भन्ने खबर मदिना पुग्यो । अर्को भनाइ छ , अल्लाहका संदेष्टा कुरैशको कुनै काफेला बारे पत्ता लगाउन निस्कनु भएको थियो । इब्ने हेशामले यै कारण उल्लेख गरेका छन् । इब्ने कैयमले पनि यसैलाई आधार मानेका छन् । तसर्थ पहिलो कारणलाई कसैले उल्लेख गरेका छैनन् ।

## जैद बिन हारिसाको संघर्ष

उहुदको युद्धअघि मुस्लिमहरूको तर्फबाट भएको यो अन्तिम र सबैभन्दा सफल संघर्ष थियो । यो युद्ध हिजरी सम्बत ३ साल जमादिल आखिरको महिनामा भएको थियो । घटनाको विवरण यस प्रकार छ । बदरको युद्धपछि कुरैश दुःखित एवं कुण्ठित थिए । तर गर्मी मौसम आएपश्चात सिरियातर्फ व्यापारयात्रा शुरु भए लगतै उनीहरू सलबलाउन थाले । त्यसको पुष्टि यसबाट पनि हुन्छ, कुरैशको तर्फबाट सिरियातिर जाने व्यापारी टोलीको नेतृत्वमा चयन गरिएका सफ्वानले कुरैशसँग भन्यो : मुहम्मदﷺ र उनका साथीहरूले हाम्रो व्यापारमार्गमा बाधाअड्चना खडा गरेका छन् । उनका सथीहरूसँग कसरी सामना गर्ने होला थाहा छैन । उनीहरूले सामुन्द्री तट छोडेका छैनन् । तटवासीहरू उनीहरूसँग मिलेका छन् । आम जनता पनि उनीहरूको साथमा छन् । के उपाय गर्ने होला थाहा छैन । यदि हामी घरमा नै बसिराख्यौ भने असल पुँजी पनि सकिनेछ र केही बाँकी बच्ने छैन । किनभने गर्मीको मौसममा सिरियाको र जाडो महिनामा हब्शाको व्यापारमा नै हाम्रो मक्की जीवन निर्भर छ ।

सफ्वानको त्यस कुरापछि त्यस समस्या बारे छलफल हुन थाल्यो । अन्तिममा अस्वद विन अब्दुल मुत्तलिबले सफ्वानसँग भन्यो: तिमीहरू समुन्द्रीय तटको बाटो छाडेर इराकको बाटो हुँदै जाऊ । त्यो बाटो लामो अवश्य छ तर नजद हुँदै सिरिया जान्छ र मदिना आउनभन्दा पहिला अलि टाढाबाट जान्छ । कुरैश त्यस बाटो बारे एकदमै अनविज्ञ थिए । त्यसैले अस्वद विन अब्दुल मुत्तलिबले सफवानलाई बकर विन वायलको व्यक्ति फरात विन हैयानलाई बाटो देखाउनको लागि साथमा लिएर जान सुझाव दियो जसले त्यस यात्रामा सहयोग गर्नेछ । त्यसपछि कुरैशको जमात सफ्वान विन उमैयाको नेतृत्वमा नयाँ मार्ग हुँदै गयो तर त्यस जमात र यात्राको योजनाको सम्पूर्ण खबर मदिना पुगिसकेको थियो । भयो के भने, सुलैत विन नुमान जो मुसलमान बनेका थिए र नुऐम विन मस्उद जो अझसम्म मुसलमान बनेका थिएनन् एउटा भट्टीमा जम्मा भए । त्यो घटना रक्सी अवैध गरिनुभन्दा पहिलाको हो । नुऐम नशामा चुर्लुम्म डुबेपछि उसले जमात र यात्राको योजना बारे विस्तृत विवरण बतायो । त्यसपछि सुलैत तीव्रगतिमा मुहम्मदﷺकहाँ आएर सम्पूर्ण विवरण बताए ।

मुहम्मदﷺले पनि तुरुन्तै आक्रमण गर्ने तयारी गर्नुभयो । सय जना सवारको एउटा टोली जैद विन हारिसाको कमाण्डमा दिएर पठाउनुभयो । जैदले तेज गतिमा बाटो पार गरे । त्यतिखेर कुरैशको जमातलाई कुनै खबर नभएको कारण उनीहरू कुरदा नामी पानीको एउटा मुहाननिर बास बस्न झरे । जैद त्यहाँ पुगे र पूरै जमातमाथि एक्कासी आक्रमण गरी उनीहरूलाई कब्जा गरे । सफ्वान विन उमैया र अन्य सुरक्षाकर्मीहरूले भाग्न बाहेक अरू केही उपाय देखेनन् । मुसलमानहरूले फरात

विन हैयान र भनिन्छ अन्य दुई जनालाई गिरिफ्तार गरे । जमातसँग सामान र चाँदीको ठूलो परिमाण थियो जो लगभग एक लाख दिरहम बराबर थियो। त्यो रकम युद्धप्राप्तको रूपमा हात लाग्यो । मुहम्मदﷺले पाँचौ भाग निकालेर युद्धप्राप्त मुजाहिदहरूमा बाँडिदिनुभयो। साथै फरात विन हैयानले मुहम्मदﷺको पवित्र हातमा इस्लाम स्वीकारे ।

बदरको युद्धपछि कुरैशको निम्ति त्यो सबैभन्दा दुःखद घटना थियो । त्यसले उनीहरूको दुःख तथा पीडामा झन बृद्धि गऱ्यो। अब उनीहरूसँग दुइटा मात्र उपाय बच्यो । एउटा आफ्नो घमण्डलाई त्यागेर मुसलमानसँग मेलमिलाप गर्नु अर्को सशक्त युद्ध गरी आफ्नो प्रतिष्ठा एवं विगतलाई वापस फर्काउनु र मुस्लिम शक्तिलाई पुनः टाउको उठाउन नसक्ने गरी नष्ट गर्नु। मक्काका कुरैशले दोस्रो उपाय अपनाए। तसर्थ त्यस घटनापछि कुरैशमा बदला लिने कुचेष्टा झन प्रबल भयो । उसले मुसलमानसँग पंगा लिने र उनीहरूको घरमा घुसेर उनीहरूमाथि आक्रमण गर्ने तयारी गऱ्यो । यसरी विगतका घटनाहरूका साथसथै यो घटना पनि उहुद युद्धको पृष्ठभूमि बन्यो।[१]

१ इब्ने हेशाम भाग २, रहमतुल लिल् आलमीन भाग २

# उहुदको युद्ध

## प्रतिकारात्मक युद्धको लागि कुरैशको तयारी

मक्कावासीहरूले बदरको युद्धमा व्यहोर्नु परेको पराजय एंव हारको लाज र आफ्ना सरदारहरूको हत्याका कारण उनीहरूले जुन पीडा भोग्नु परेको थियो त्यसले गर्दा उनीहरू मुसलमानहरू विरुद्ध रिस र क्रोधले उम्लिरहेका थिए । यतिसम्म कि मुसलमानहरूले उनीहरूलाई परेको गहिरो पीडा एंव शोक बारे थाहा पाउन नसकुन् भनेर उनीहरूले आफ्नो मृतकप्रति शोक व्यक्त गर्न प्रतिबन्द लगाए र जरिमाना तिरेर आफ्नो बन्दीहरूलाई छुटाउन पनि हतार गरेनन् । त्यसपछि उनीहरूले मुसलमानविरुद्ध घमासान युद्ध गरी आफ्नो मन शान्त पार्ने र रिसराग तथा क्रोधित भावनालाई सन्तुष्टि दिने सहमति गरेर युद्धको तयारी सुरु गरे । त्यसमा कुरैशका सरदार इक्रिमाह विन् अबु जहल, सफ्वान विन् उमैया, अबु सुफ्यान विन् हरब् र अब्दुल्लाह विन् रबिआ बढी जागरूक र अरूभन्दा अगाडि अगाडि थिए ।

त्यस सम्बन्धमा सबैभन्दा पहिला उनीहरूले बदरको युद्धघटक बनेको अबु सुफ्यानको काफेला जसलाई लिएर अबु सुफ्यान भाग्न सफल भएको थियो उनीहरूको सम्पूर्ण माल युद्धखर्चको लागि रोकेर राखे र त्यो माल जुन व्यक्तिहरूको थियो उनीहरूसँग आग्रह गर्दै भने : हे कुरैशी साथी हो, मुहम्मदले तिमीहरूलाई गहिरो चोट पुऱ्याएको छ । तिम्रा विशिष्ट नाइकेहरूको हत्या गरेको छ । तसर्थ उनीहरू विरूद्ध युद्ध गर्न आफ्नो धनसम्पत्तिबाट आर्थिक सहयोग गर । हामीले बदला चुकाउन सक्नेछौं भन्ने आशा लिएका छौं । उनीहरूले त्यस प्रस्तावलाई स्वीकारे । फलस्वरूप एक हजार उँट र पचास हजार दिनार बराबरको माल युद्धको तयारीको लागि बेचिदिए । त्यसै सिलसिलमा अल्लाहले भनेका छन् :

إِنَّ الَّذِينَ كَفَرُوا يُنْفِقُونَ أَمْوَالَهُمْ لِيَصُدُّوا عَنْ سَبِيلِ اللَّهِ ۚ فَسَيُنْفِقُونَهَا ثُمَّ تَكُونُ عَلَيْهِمْ حَسْرَةً ثُمَّ يُغْلَبُونَ ۗ وَالَّذِينَ كَفَرُوا إِلَىٰ جَهَنَّمَ يُحْشَرُونَ (الأنفال : 36)

काफिरहरूले आफ्नो माल अल्लाहको मार्गमा बाधा व्यवधान खडा गर्न खर्च गर्छन् । उनीहरूले खर्च त गर्नेछन् तर त्यो उनीहरूको लागि घातक बन्नेछ र उनीहरू पराजित हुने छन् । (अल् अन्फाल:३६)

त्यसपछि उनीहरूले युद्धमा सहयोग जुटाउनका लागि अहाबिस, केनाना, र तहामीका मानिसहरूमध्ये मुसलमानविरुद्ध युद्धमा शरिक हुन चाहनेहरूको लागि कुरैशको झण्डामूनि जम्मा हुन स्वयमसेवकको ढोका पनि खोले । उनीहरूले त्यसप्रति उत्साहित एवं जागरुक बनाउन विभिन्न रणनीतिहरू पनि अपनाए । यहाँसम्म कि बदरको युद्धमा गिरिफ्तार भएको एक जना कुरैशी कवि जसलाई मुहम्मदﷺले अबदेखि उहाँको विरुद्धमा उभिने छैन भन्ने बाचा बचनका साथ मुक्त गरिदिनुभएको

थियो त्यही व्यक्तिलाई सफ्वान विन उमैयाले मुस्लिम विरुद्ध आफ्नो कबिलालाई भड्काउनको लागि ऊ लडाइँबाट बचेर सुरक्षित आएको खण्डमा उसलाई मालामाल गरिदिने र त्यसो हुन नसके उसको छोरीहरूको खर्च व्यहोरिने सर्तमा उसँग सम्झौता पनि गऱ्यो । फलस्वरूप उसले मुहम्मदﷺसँग गरेको सम्झौता भंग गरी स्वच्छ तथा उच्च भावनालाई भड्काउने खालका शायरी भनेर कबिलालाई मुसलमान विरुद्ध भड्काउन थाल्यो । त्यसैगरी कुरैशले एक अर्को कविलाई पनि त्यस कामको लागि तयार गऱ्यो ।

उता अबु सुफ्यान सविक नामक युद्धबाट पराजित मात्र नभई आफ्नो अत्यधिक सामान पनि गुमाएर फर्केपछि मुसलमान विरुद्ध मानिसहरूलाई भड्काउन अँझ बढी सक्रिय भयो ।

अन्तिममा जैद विन् हारिसाको संघर्षमा कुरैशको कम्मर भाँच्ने आर्थिक विनाश र उनीहरूमा रहेको निरास एंव पीडाले आगोमा घ्यु हाल्ने काम गऱ्यो र मुसलमानविरुद्ध निर्णायक लडाइँ लड्ने कुरैशको तयारीमा थप उर्जा थप्यो ।

## कुरैशी लश्कर,युद्धको सामान र कमाण्ड

अन्ततः साल पूरा हुँदानहुँदै कुरैशको तयारी पूर्ण भयो । उनीहरूले आफ्नो जनशक्तिबाहेक अन्य आफ्नो सहयोगी अर्थात अहाबिस नामक कबिलालाई सामिल गरी कुल तीन हजार फौज तयार गरे । कुरैशका नेताहरूले महिलाहरूको सुरक्षाको निम्ति अँझ बढी तनमनसँग लड्न सकिन्छ कि भनेर उनीहरूलाई पनि आफ्नो साथमा लिएर जाने निर्णय गरे । फलस्वरूप उनीहरूको लश्करमा महिला पनि सामिल भइन् जसको संख्या १५ थियो । सवारी तथा भारी बोक्नका लागि तीन हजार उँट थिए र घोडचढी फौजको लागि दुई सय घोडा थिए[1] । ती घोडालाई हृष्टपुष्ट राख्नको लागि बाटोमा कतै पनि सवारी गरिएन । रक्षात्मक हतियारको रूपमा सात सय ढालहरू थिए ।

अबु सुफ्यानलाई पूरै लश्करको कमाण्डर नियुक्त गरियो । घोडचढी फौजको कमाण्ड खालिद विन् वलिद्लाई दिइयो र इक्रिमाह विन अबु जहललाई उसको कायम मुकाम बनाइयो । झण्डा कबिला बनुद्दारको प्रमुख टोलीको हातमा दिइयो ।

## मक्की लश्करको प्रस्थान

त्यो पूर्ण तयारीपछि मक्की लश्कर मुसलमानविरुद्ध रिस, क्रोध र बदला लिने भावनामा चुर भई मदिनातर्फ लागे । त्यसले तत्काल लडिने लडाइँको रक्तपात र घमासानको संकेत गरिरहेको थियो ।

१ जादुल मआद भाग २, यै भनाइ सही छ । तर फतहुल बारी भाग ७ मा घोडाको संख्या एक सय उल्लेख गरिएको छ ।

## मदिनामा पनि पुग्यो सूचना

अब्बासले कुरैशका ती सम्पूर्ण गतिविधि र युद्धको तयारी बारे कसैले सुइँको नपाउने गरी गहिरिएर अवलोकन गरिरहेका थिए । कुरैशी लश्कर सलबलाउन थालेपछि अब्बासले त्यसको सम्पूर्ण विवरण सहित तुरुन्तै एउटा पत्र  मुहम्मदﷺकहाँ पठाए ।

अब्बासको खबर लिएर जाने व्यक्ति अति तेजिला थिए । उनले मक्काबाट मदिनासम्मको पाँच सय किलोमिटर बराबरको बाटो केवल तीन दिनमा पार गरी उनको चिठी मुहम्मदﷺलाई दिए । त्यतिबेला उहाँ मस्जिदे नववीमा बसिरहनु भएको थियो ।

अबि विन कअबले त्यो पत्र मुहम्मदﷺलाई पढेर सुनाए । उहाँले उनलाई पत्र गोप्य राख्न भनी तुरुन्तै मदिनाका अन्सार र मुहाजिरका नेताहरूसँग परामर्श गर्नुभयो ।

## संकटकालको सामना गर्ने तयारी

त्यसपछि मदिनामा चारैतिर मोर्चा नै मोर्चा देखिन थाल्यो । मानिसहरू हरेक संकट परिस्थितिको सामना गर्न हरवखत सशस्त्र रूपमा बस्न थाले । उनीहरूले नमाजमा पनि हतियार निकाल्थेनन् ।

उता अन्सारको एउटा सानो दस्ता जसमा सअद् विन् मुआज,उसैद् विन् हुजैर र सअद् विन् उबादा थिए मुहम्मदﷺको सुरक्षाको लागि तैनात भए । उनीहरू हतियार लिएर पूरा रात मुहम्मदﷺको ढोकामा बस्थे ।

कसैले अचानक आक्रमण नगरोस् भनेर अन्य दस्ताहरू मदिनाको चारैतिरको प्रवेशद्वारमा तैनात भए ।

अन्य केही दस्ताहरू शत्रुहरूको गतिविधि पत्ता लगाउन रात्रीगस्ती गर्न निस्के । ती दस्ताहरूले मदिनामा छापा मार्न सकिने मार्गमा गस्ती गरिरहेका थिए ।

## मक्की लश्कर मदिनाको पाखामा

उता मक्की लश्कर राजमार्गबाट आउँदै थियो । उनीहरू अबवा नामक ठाउँमा पुगेपछि सुफ्यानकी स्वास्नी हिन्दाले मुहम्मदﷺको आमाको चिहान उखाड्ने प्रस्ताव गरी ।

तर त्यस्तो काम गर्दा व्यहोर्नु पर्ने दुष्परिणामका कारण लश्करका नेताहरूले त्यो प्रस्ताव स्वीकारेनन् ।

त्यसपछि लश्करले आफ्नो यात्रा नियमित जारी राख्यो र मदिना नजिक पुगेपछि अमिक नामक उपत्यका हुँदै दाहिनेबाट छिटोछिटो उहुदको पहाड नजिक उऐनिन् नामक एक ठाउँ जो मदिनाको उत्तरतर्फ कनात नामक उपत्यकाको कुनाको

एक मरुभूमि थियो त्यहाँ गएर बसे । त्यो घट्ना हिजरी सम्बत ३ साल शौवाल ६ तारिख शुक्रबारको हो ।

## मदिनामा प्रतिकारात्मक रणनीतिको लागि समितिको बैठक

मदिनाको संचार माध्यमले मक्की लश्करको एकएक खबर मदिना पुऱ्याइरहेको थियो । उनीहरूको बैठकको अन्तिम खबर पनि मदिनाको संचारले दियो । त्यसपछि मुहम्मदﷺले फौजको उच्च कमाण्डको सल्लाहकार समितिको बैठक बोलाउनुभयो, जसमा उचित रणनीति अपनाउने बारे परामर्श गर्नुपर्ने थियो । मुहम्मदﷺले उनीहरूलाई आफुले देखेको सपना बताउनुभयो । उहाँले भन्नुभयो : अल्लाहको कसम मैले एउटा राम्रो कुरा देखेको छु । मैले केही गाईहरू बध गरिएको, मेरो तरवार बिग्रेको र आफ्नो हात एक सुरक्षित ढालभित्र पसालेको देखेको छु । त्यसपछि मुहम्मदﷺले गाई बध गरिएको बारे बताउँदै भन्नुभयो, केही साथीहरूको हत्या हुनेछ । तरवारमा विग्रेको अर्थ बारे बताउँदै भन्नुभयो, मुहम्मदﷺको घरमा कसैलाई शहिद गरिने छ । सुरक्षित ढालमा हात पसालेको अर्थ मदिना सहरलाई संकेत गर्नुभयो ।

त्यसपछि मुहम्मदﷺले साथीहरूको सामु प्रतिकारात्मक रणनीति बारे आफ्नो सुझाव प्रस्तुत गर्दै भन्नुभयो : मदिनाबिहिर नजानु बरु मदिनाभित्र नै मोर्चा बन्दी गर्नु । वहुदेववादीहरू यदि आफ्नै केम्पमा बसिराखे भने उनीहरूको बसाइँ निरुद्देश्य र निरर्थ हुनेछ । यदि मदिनामा प्रवेश गरे भने मुसलमानहरू गल्ली र चौकमा उनीहरू विरुद्ध लड्नेछन् र महिलाहरूले आआफ्नो घरको छतबाट ईंटा वर्षाउने छिन् । त्यो सुझाव सही थियो र सल्लाहकार समितिको बैठकमा खजरज नामक कबिलाको प्रमुखको हैसियतले प्रतिनिधित्व गरेको मुनाफिक अब्दुल्लाह बिन उबै पनि त्यसमा सहमत भयो । उसको सहमति युद्धको लागि नभई युद्धबाट कसैले पत्तो नपाउने गरी भाग्ने कुरामा आधारित थियो । तर अल्लाहको चाहना अर्कै थियो । त्यो व्यक्ति आफ्नो साथीहरू समेत आम जनमानस अगाडि अपमान होस्, उसको नास्तिकपन र मुनाफिकपनमा जुन पर्दा लागेको छ त्यो हटोस् र मुस्लिमहरूलाई त्यो कठिन घडीमा आफुभित्र काला सर्पहरू पनि रहेछन् भन्ने कुरा थाहा होस् भन्ने अल्लाहको चाहना थियो ।

अन्तत बदरको युद्धमा शरिक हुन नसकेका बुद्धिजीवी साथीहरूको एक जमातले अगाडि बढेर मुहम्मदﷺलाई मैदानमा उत्रन सल्लाह दिए र उनीहरू आफ्नो प्रस्तावमा अडिग भए । केही साथीहरूले भने : हे ईशदूत हामीहरूले आजको दिनको चाहना गरेका थियौं र यसको लागि हामी अल्लाहसँग प्रार्थना पनि गर्ने गर्थ्यौं । अल्लाहले यो मौका हामीलाई दिएको छ, मैदानमा जाने समय आएको छ, तपाइँ

शत्रुको सामना गर्न हिँड्नुहोस् ताकि उनीहरूलाई हामी डराएका छौँ भन्ने भान नपरोस् ।

जागरुक व्यक्तिहरूको सूचीमा स्वयम मुहम्मद ﷺ का काका हमजा विन अब्दुल मुत्तलिब पनि थिए जसले बदरको युद्धमा आफ्नो तरवारको चमत्कार देखाएका थिए । उनले मुहम्मद ﷺ सँग भने : त्यो जातको कसम जसले तपाईंमाथि कुरआन अवतरण गरेको छ, म कुनै पनि खाना तबसम्म खान्न जबसम्म मदिनाबाहिर गई आफ्नो तरवार लिएर लडाइँ गर्दिनँ ।[१]

मुहम्मद ﷺ ले उनीहरूको इच्छा अगाडि आफ्नो सुझाव त्याग्नुभयो र अन्तिममा मदिनाबाहिर गई मैदानमा नै लडाइँ गर्ने निर्णय भयो ।

## इस्लामी फौजको तरतिब र युद्धको मैदानतर्फ बढ्दै

त्यसपछि मुहम्मद ﷺ ले जुमाको नमाजमा उपदेश दिनुभयो, संघर्ष गर्न प्रोत्साहित गर्नुभयो र धैर्यता र दृढतामा नै विजय प्राप्त हुन सक्छ भन्ने कुरा बताउनुभयो । साथसाथै शत्रुको सामना गर्ने आदेश पनि दिनुभयो । उहाँको कुराहरू सुनेर साथीहरू खुसी भए ।

त्यसपछि उहाँले असरको नमाज पढ्नुभयो । त्यति बेला मानिसहरू जम्मा भइसकेका थिए । अवालीका बासिन्दाहरू पनि आएका थिए । नमाजपछि उहाँ मस्जिदभित्र जानुभयो । साथमा अबु बकर र उमर पनि थिए । उनीहरूले उहाँको टाउकोमा पगरी बाँधिदिए र उहाँलाई कपडा लगाइदिए । उहाँले तलमाथि गरी दुईटा ढाल लगाउनुभयो,तरवार बोक्नुभयो र हतियारबन्द भई मानिसहरूको अगाडि आउनुभयो ।

मानिसहरू उहाँको आगमनको प्रतीक्षामा त थिए नै तर त्यसैबीच सअद विन मुआज र उसैद विन हुजैरले साथीहरूसँग भने : तिमीहरूले मुहम्मद ﷺ लाई जबरजस्ती मैदानमा निस्कन तयार गऱ्यौ तसर्थ सम्पूर्ण कुराहरू उहाँमाथि छाडिदेउ । त्यो कुरा सुनेर साथीहरूले गल्ती गरेको महसुस गरे । मुहम्मद ﷺ बाहिर आएपछि साथीहरूले भने : हे ईशदूत हामीलाई तपाईंको सुझाव मान्नु पर्ने थियो । तपाईंको जे इच्छा छ त्यो गर्नुहोस् । तपाईं मदिनामा बस्न चाहनु हुन्छ भने मदिनामा नै बस्नुहोस् । मुहम्मद ﷺ ले जवाफ दिनुभयो, कुनै पनि ईशदूतले हतियार बोकिसकेपछि त्यो हतियार तबसम्म उतार्न मिल्दैन जबसम्म अल्लाहले उसको र उसको शत्रुबीच निर्णय गर्दैन ।[२]

त्यसपछि मुहम्मद ﷺ ले लश्करलाई तीन टोलीमा विभाजित गर्नुभयो ।

१ सिरत हलबीया भाग २
२ मुस्नद अहमद, नेसई, हाकिम, इब्ने इसहाक र बुखारीले अल् इतेसाम अध्याय नं २८ को तर्जुमतुल बाबमा उल्लेख गरेका छन् ।

१ मुहाजिरहरूको टोली : त्यसको झण्डा मुस्अब् विन उमैरलाई दिनुभयो ।

२ औस् कबिलाको टोली : त्यसको झण्डा उसैद् विन हुजैरलाई दिनुभयो ।

३ खजरज् कबिलाको टोली : त्यसको झण्डा हब्बाब् विन मुन्जिरलाई दिनुभयो ।

पूरा लस्करमा एक हजार जना योद्धाहरू थिए जसमध्ये एक सय जनाले ढाल लगाएका थिए भने पचास जना[1] घोडचढी सवार थिए । भनिन्छ, घोडचढी कोही थिएन ।

इब्ने उम्मे मक्तुमलाई मदिनाभित्र बस्नेहरूलाई नमाज पढाउनको लागि चयन गरियो । त्यसपछि प्रस्थानको लागि आदेश भयो र लस्कर उत्तरतर्फ लाग्यो । सअद् विन मुआज र सअद विन उबादह ढाल लगाएर मुहम्मदﷺको अंगरक्षक बनी अगाडि अगाडि हिँडे ।

उनीहरू सनियतुल वदाअदेखि अगाडि बढे । त्यहाँ एक उत्तम हतियारबन्द एउटा टोली देखियो जो इस्लामी लस्करभन्दा भिन्न थियो । मुहम्मदﷺले सोध्दा, उनीहरू खजरजका सहयोगी [2]यहुदीहरू हुन् र उनीहरू वहुदेववादीविरुद्ध लड्न चाहेका छन् भन्ने जवाफ आयो । मुहम्मदﷺले सोध्नुभयो : के उनीहरू मुसलमान बनेका छन् ? साथीहरूले जवाफ दिए, छैनन् । उनीहरूको जवाफ सुनेर मुहम्मदﷺले वहुदेववादीहरू विरुद्ध नास्तिकको सहयोग लिन अस्वीकर गर्नुभयो ।

## लस्करको परीक्षण

त्यसपछि उहाँले शैखान नामी ठाउँमा पुगेर लस्करको जाँचपडताल गर्नुभयो । जुन व्यक्तिहरू कलिलो उमेरका थिए र युद्ध गर्न अयोग्य थिए उनीहरूलाई फर्काइदिनुभयो । फर्काइएका व्यक्तिहरूको नाम यस प्रकार छ : अब्दुल्लाह विन उमर, उसामा विन जैद, उसैद विन जुहैर, जैद विन सावित, जैद विन अर्कम, उराबा विन औस्, अमर विन हज्म् , अबु सइद खुद्री, जैद विन् हारिसा अन्सारी र सअद विन हब्बा । यस सूचीमा बरा विन् आजिबको नाम पनि उल्लेख भएको पाइन्छ । बुखारी नामक हदिसको किताबमा जुन हदिस वर्णन भएको छ त्यसबाट पनि उनी उहुदको युद्धमा सामिल थिए भन्ने कुरा प्रमाणित हुन्छ ।

---

१ यो कुरा इब्ने कैयमले जादुल मआद भाग २ मा वर्णन गरेका छन् । हाफिज इब्ने हजरले यसलाई ठूलो गल्ती बताएका छन् । मुसा इब्ने उक्बाले उहुदमा मुसलमानसँग कुनै घोडा थिएन भनेका छन् । वाकदीले दुईटा घोडा देखाएका छन् । एउटा अल्लाहका संदेष्टासँग र अर्को अबु दर्दासँग, फतहुल बारी भाग ७

२ यस घटनालाई इब्ने सइदले वर्णन गरेका छन् । त्यसमा बनु कैनुकाका यहुदी थिए भन्ने कुरा पनि उल्लेख छ । तर यो भनाइ सही छैन । किनभने बनु कैनुकालाई बदर युद्धको केही दिनपछि देशनिकाला गरिएको थियो ।

तर राफेअ विन खुदैज् र समुराह विन जुन्दुबलाई कलिलो उमेरका भएता पनि युद्ध गर्ने अनुमति दिइयो । किनभने राफेअ विन खदिज् तीर चलाउन सिपालु थिए तसर्थ उनलाई अनुमति दिइयो । उनलाई अनुमति दिइएपछि समुराह विन् जुन्दुबले भने, म राफेअभन्दा बलियो छु , मैले उसलाई पछार्न सक्छु । जब मुहम्मदﷺलाई त्यसको बारेमा खबर भयो अनि मुहम्मदﷺले दुवैबीच कुस्ती गराउनुभयो र समुराह विन जुन्दुवले राफेलाई पछारिदिए । तसर्थ उनलाई पनि युद्धमा सामिल हुने अनुमति दिइयो ।

## उहुद र मदिनाबीच बास बसाइँ

त्यहाँ पुग्दा साँझ परिसकेको थियो । त्यसैले उहाँले त्यहाँ मग्रीब र इशाको नमाज पढ्नुभयो र त्यहीँ बास बस्ने निर्णय पनि गर्नुभयो । पहरा दिनको लागि पचास जना साथीहरू खटाइएका थिए । उनीहरूले केम्पको वरिपरि गस्ती गरिरहे । उनीहरूको कमाण्डर मुहम्मद विन् मस्लमा थिए । उनी उही बुजरुक व्यक्ति हुन् जसले कअब विन् अश्रफलाई मार्ने टोलीको नेतृत्व गरेका थिए । विशेष गरी जकवान विन् अब्दुल्लाह विन् कैसले मुहम्मदﷺलाई पहरा दिइरहेका थिए ।

## अब्दुल्लाह विन उबै र उसको साथीहरूको षड्यन्त्र

मिर्मिरे विहानीभन्दा अलि पहिला उहाँ त्यहाँबाट हिँड्नुभयो र शौत नामी ठाउँमा गई फजरको नमाज पढ्नुभयो । त्यतिखेर उहाँहरू शत्रुहरूको एकदमै नजिक हुनुहुन्थ्यो । दुवै पक्षले एक अर्कालाई नियालिरहेको थियो । त्यहाँ पुगेपछि अब्दुल्लाह विन उबैले धोका दियो र एक तिहाइ अथवा तीन सय जति फौज लिएर हामी त्यतिकै किन आफ्नो ज्यान दिने भन्दै फर्क्यो । मुहम्मदﷺले अरुको कुरा माने तर मेरो कुरा सुनेन् भनी उसले विरोध पनि जनायो ।

मुहम्मदﷺले उसको कुरा नमानेको जुन कारण उसले देखाएको थियो । उसको अलग हुने वास्तवमा कारण त्यो थिएन । यदि त्यही कारण भएको भए त ऊ मुहम्मदﷺको फौजको साथमा आउने प्रश्नै उठदैन थियो । उसलाई फौज हिँड्नुभन्दा पहिला नै अलग हुनुपर्थ्यो । तसर्थ जुन कुरा उसले भन्यो वास्तविकता त्यो थिएन । वास्तविकता के थियो भने उसले त्यो नाजुक मोडमा अलग भएर इस्लामी फौजभित्र त्यस्तो समयमा हुलदंगा मच्चाउन खोजेको थियो । जतिखेर शत्रुले उनीहरूको गतिविधिलाई नियालिरहेका थिए ताकि आम फौजले मुहम्मदﷺको साथ छाड्नु् र बाँकी फौजको हिम्मत टुटोस् , अर्कोतर्फ त्यो अवस्था देखेर शत्रुको हिम्मत बढोस् र आँट बलियो होस् भन्ने थियो । तसर्थ मुहम्मदﷺ र उहाँका साथीहरूको अन्त्य गर्ने यो उसको ठोस कदम थियो । त्यसो गरेपछि आफ्नो र आफ्नो साथीहरूको लागि सरदारीको कुर्सी खाली हुन्छ कि भन्ने आशा पनि त्यो मुनाफिकले राखेको थियो ।

त्यो मुनाफिक आफ्नो उद्देश्यमा सफल हुनै लागेको थियो । किनभने दुई समूह (कबिला औसबाट बनु हारिसा र खजरजबाट बनु सल्मा) ले पनि हिम्मत हारिसकेका थिए र फर्कने सोचमा थिए । तर अल्लाहले उनीहरूको मदत गरे र त्यो दुवै समूह त्रसित भएर वापस फर्कने सोचका बावजुद अडिग भयो । उनीहरूको बारेमा अल्लाहले भनेका छन् :

إِذْ هَمَّتْ طَائِفَتَانِ مِنْكُمْ أَنْ تَفْشَلَا وَاللَّهُ وَلِيُّهُمَا ۗ وَعَلَى اللَّهِ فَلْيَتَوَكَّلِ الْمُؤْمِنُونَ (آل عمران: 122)

तिमीमध्ये दुई समूहले कायरता देखाउने इरादा गरे जब कि अल्लाह उनीहरूको सहयोगी थिए । आस्थावान्हरूलाई अल्लाहमाथि नै भरोसा गर्नुपर्छ । (आले इमरान:१२२)

मुनाफिकहरूले फिर्ता हुने निर्णय गरेपछि जाबिरका बुवा अब्दुल्लाह विन् हरामले त्यस नाजुक मोडमा उनीहरूको कर्तव्य स्मरण गराउन लागे । उनले उनीहरूलाई डाँटदपेट तथा युद्धतर्फ प्रेरित गर्दै उनीहरूको पछिपछि गएर भने : आओ ! अल्लाहको मार्गमा लड वा प्रतिकार गर । उनीहरूले जवाफमा भने : यदि हामीहरूलाई तपाईंहरूले युद्ध गर्नुहुनेछ भन्ने थाहा भएको भए त फर्कने थिएनौं । त्यो जवाफ सुनेर अब्दुल्लाह विन् हराम निम्न कुरा भन्दै वापस फर्के : हे अल्लाहका शत्रु हो, तिमीहरूमाथि अल्लाहको मार परोस्, याद राख अल्लाहले आफ्नो दूतलाई तिमीभन्दा मालामाल राख्ने छ ।

तिनै मुनाफिकहरूको बारेमा अल्लाहले भनेका छन् : अल्लाहले ती मुनाफिकहरूलाई पनि जानुन् जोसँग भनिएको थियो, आऊ अल्लाहको मार्गमा लडाइँ गर वा प्रतिकार गर । उनीहरूले जवाफ दिए यदि हामीले लडाइँ गर्न जानेको भए निसंदेह तिमीले भनेको मान्ने थियौं । उनीहरू आज इमानभन्दा नास्तिकत्वको नजिक छन् । मनमा नभएको कुरा मुखले भन्दैछन् र उनीहरूले जे कुरा लुकाएका छन् अल्लाहलाई त्यसबारे खुब थाहा छ । (३:१६७)

## बाँकी इस्लामी लश्कर उहुदको पाखामा

त्यस विद्रोहबाट वापसीपछि ईशदूतले बाँकी सात सय जनामा सामिल लस्कर लिएर शत्रुतर्फ कदम बढाउनुभयो । उहाँ र उहुद पहाडबीच चारैतिर शत्रुहरू बसेका थिए । त्यसकारण शत्रुहरू नभएको कुनै नजिकको मार्गबाट आफ्नो लस्कर लिएर जान सक्ने कोही व्यक्ति छ भनी उहाँले सोध्नुभयो ।

जवाफमा अबु खुसैमाले भने : हे ईशदूत, म त्यस कामको लागि तयार छु । उनले एउटा यस्तो छोटो बाटो देखाए जो वहुदेववादीको फौजलाई पश्चिमतर्फ छाडेर बनी हारिसाको हुर्रा एवं खेत हुँदै जान्थ्यो ।

त्यो मार्गबाट जाँदा फौज मुरब्बी विन कैजीको बगैंचाबाट हिँड्यो । त्यो व्यक्ति मुनाफिक थियो साथसाथै अन्धो पनि । फौज आएको थाहा पाएपछि उसले मुसलमानहरूको अनुहारमा धुलो फ्याँक्दै भन्यो यदि तिमी ईशदूत हौ भने मेरो

बगैंचामा आउने अनुमति छैन । सहाबीहरू उसको हत्या गर्न झम्टे तर मुहम्मद ﷺ ले भन्नुभयो : उसको हत्या नगर । ऊ मन र आँखा दुवैको अन्धो छ ।

मुहम्मद ﷺ अगाडि बढेर उपत्यकाको अन्तिम किनारामा अवस्थित उहुद पहाडको घाटीतिर झर्नुभयो र आफ्नो फौजी केम्प बनाउनुभयो । अगाडि मदिना पर्थ्यो भने पछाडि उहुदको अग्लो पहाड । यसरी शत्रुको लस्कर मुसलमान र मदिनाबीच संघार बन्यो ।

## प्रतिकारात्मक आक्रमण

त्यहाँ पुगेर मुहम्मद ﷺ ले लस्करको तरतिब एंव व्यवस्था मिलाउनुभयो र युद्धलाई दृष्टिगत गर्दै फौजलाई कैयन ताँतीमा विभाजित गर्नुभयो । तीर चलाउनेहरूको एउटा सक्षम टोली पनि छान्नुभयो जसमा पचास योद्धाहरू थिए । त्यसको कमाण्ड अब्दुल्लाह बिन जुबैर बिन् नोमान् अन्सारी दोसी बदरीलाई दिनुभयो र उनलाई दक्षिण किनारामा अवस्थित इस्लामी लस्करभन्दा डेड मिटर पूर्वदक्षिणतिरको एउटा सानो डाँडोमा तैनात गर्नुभयो । त्यो पहाड आजकल जबले रमातको नामले प्रसिद्ध छ । त्यसो गर्नुको उद्देश्य ती शब्दहरूबाट प्रष्ट हुन्छ जुन उहाँले आफ्नो तीर चलाउने साथीहरूलाई निर्देशन दिदै भन्नुभएको थियो । उहाँले उनीहरूको कमाण्डरलाई सम्बोधन गर्दै भन्नुभयो : घोडचढीहरूलाई तीर हानेर हामीदेखि टाढा भगाउ ताकि पछाडिबाट आक्रमण गर्न नसकुन् । हाम्रो विजय वा पराजय जे भए पनि तिमीहरू आफ्नो ठाउँमा बसिराख, ताकि तिमीहरूको दिशाबाट हामीमाथि आक्रमण नहोस् ।[1] त्यसपछि उहाँले तीर चलाउने साथीहरूलाई सम्बोधन गर्दै भन्नुभयो : हाम्रो पछाडितर्फ पहरा देऊ, हाम्रो हत्या भएको देख्यौ भने पनि तिमीहरू हाम्रो सहयोगको लागि नआऊ वा हामीले युद्धप्राप्त बटुलन थाल्यौं भने पनि त्यसमा सामिल नहोऊ ।[2] सही बुखारीको शब्दानुसार उहाँले भन्नुभयो : यदि तिमीले हामीलाई गिद्दले लुछेको देख्यौ भने पनि आफ्नो ठाउँ नछोड जबसम्म मेरो आदेश हुँदैन । यदि हामीले उनीहरूलाई पराजय गरेको देख्यौ भने पनि मेरो आदेश नआउँदासम्म आफ्नो ठाउँ नछोड ।[3]

यिनै कडा निर्देशन र आदेश दिँदै उहाँले त्यस दस्तालाई त्यो डाँडोमा खटाएर एउटा त्यो द्वार पनि बन्द गरिदिनुभयो जसलाई पार गरी वहुदेववादीहरूको घोडचढी फौज मुस्लिम फौजको पछाडिको ताँतीमा घुसेर उनीहरूलाई आफ्नो घेरामा लिन सक्थ्यो ।

---

१ इब्ने हेशाम भाग २
२ अहमद,तब्रानी, फतहुल बारी भाग २
3 सही बुखारी भाग १

बाँकी फौजको तरतिब यसरी गरिएको थियो । दाहिनेतिर मुन्जिर विन् अमर र देब्रेतिर जुबैर विन औवाम खटिए । उनीहरूको कायममुकाम मेक्दाद विन अस्वदलाई बनाइयो । खालिद विन वलिदको घोडचढीहरूको बाटो रोक्ने जिम्मेवारी पनि जुबैरलाई सुम्पिइयो । त्यस तरतिबका साथसाथै अगाडितिर छनौट गरिएका ती वरिष्ठ वीर योद्धाहरूलाई खटाइयो जसको वलिदान र वीरताको चर्चा थियो र जसलाई हजारको बराबर मानिन्थ्यो ।

त्यो योजना अति सुक्ष्म र तत्वदर्शीतामा आधारित थियो । त्यसबाट फौजी कमाण्डरमा हुने मुहम्मदﷺको उच्च रणनीति झल्कन्छ । वरिष्ठ कमाण्डरले पनि मुहम्मदﷺले भन्दा सुक्ष्म एवं तत्वदर्शी योजना तयार गर्न नसक्ने कुरा यसबाट प्रष्ट हुन्छ । किनभने उहाँ युद्ध स्थलमा शत्रुभन्दा पछि आउनु भएको थियो र उहाँले आफ्नो लस्करको लागि त्यो ठाउँ रोज्नुभयो जुन युद्धको दृष्टिकोणले युद्धको मैदानको लागि सबैभन्दा उत्तम ठाउँ हुन सक्थ्यो । अर्थात उहाँले अग्लो पहाडको आड लिएर आफ्नो पछाडि र दाहिनेतिरको द्वार सुरक्षित गर्नुभयो । साथै देब्रेतिरको द्वार पनि सुरक्षित गर्नुभयो जहाँबाट आक्रमण गरी पछाडितिर पुग्न सकिन्थ्यो । त्यो द्वार तीर चलाउनेहरूको दस्तालाई तैनात गरी बन्द गरिदिनुभयो र केम्प बसाल्न अग्लो ठाउँ रोज्नुभयो ताकि पराजय भोग्नु परेको खण्डमा भाग्न वा गिरिफतार हुन नपरोस्, केम्पमा शरण लिन सकियोस् र शत्रुहरू केम्पतर्फ बढेको खण्डमा उनीहरूलाई ठूलो नोक्सान पुऱ्याउन सकियोस् । त्यस अतिरिक्त उहाँले शत्रुहरूलाई आफ्नो केम्प बनाउन पहाडको फेदीतिर जान बाध्य गराउनुभयो ताकि उनीहरू विजय भए पनि उनीहरूलाई कुनै खास फाइदा हुन नसकोस् र मुसलमान विजय भएको खण्डमा मुस्लिमको पकडबाट उनीहरू बच्न नसकोस् । यसरी उहाँले वरिष्ठ वीरहरूको एउटा टोली नियुक्त गरेर फौजी संख्याको कमीलाई पूरा गर्नुभयो । मुहम्मदﷺले आफ्नो लस्करलाई तरतिब दिने काम हिजरी सम्बत ३ साल शौवाल महिनाको ७ तारिख शनिबारको दिन विहान सम्पन्न गर्नुभयो ।

## मुहम्मदﷺ आफ्नो लश्करमा वीरताको मन्त्र फुक्दै

उहाँले जबसम्म मेरो आदेश आउँदैन तबसम्म युद्ध सुरु नगरियोस् भनी निर्देशन गर्नुभयो । उहाँले तलमाथि दुई वटा ढाल लगाउनुभएको थियो । मुहम्मदﷺले आफ्नो साथीहरूलाई युद्धप्रति जागरुक गर्दै भन्नुभयो, शत्रुको सामना भयो भने वीरतापूर्ण एंव अडिग भएर लड । उहाँले उनीहरूमा वीरताको मन्त्र फुक्दै एउटा धारिलो तरवार खोलबाट निकालेर भन्नुभयो : यस तरवारको हक कसले निभाउन सक्छ ? उहाँको कुरा सुनेर कैयन साथीहरू तलवार लिन लम्के जसमा अली विन् अबी तालिब, जुबैर विन् औवाम र उमर विन खत्ताब पनि थिए । तर अबु दुजाना

सिमाक बिन खरशाले अगाडि बढेर भने : हे ! ईशदूत, त्यसको हक के हो ? उहाँले जवाफमा भन्नुभयो, यो तरवार नभाँचिदासम्म शत्रुहरूको अनुहारमा हान्नु । उनले भने : हे ईशदूत, म यो तरवार लिएर यसको हक अदा गर्न चाहन्छु । उहाँले तरवार उनैलाई दिनुभयो ।

अबु दुजाना बडो बहादुर थिए । लडाईँको बेलामा पनि उनी कस्सिएर हिँडथे । उनीसँग एउटा रातो पगरी थियो । उनले त्यो पगरी टाउकोमा बाँधेपछि उनी मृत्यु नहुन्जेल लडिरहने छन् भन्ने कुरा मानिसहरूले बुझ्दथे । उनी तरवार लिएर आफ्नो टाउकोमा पगरी बाँधेर दुवै फौजबीच फुर्ती देखाउँदै हिँडन थाले । त्यस अवसरमा मुहम्मदﷺले भन्नुभएको थियो : यो चाल अल्लाहलाई मन त पर्दैन तर यस अवस्थामा मात्र ।

## मक्की लस्करको तरतिब

वहुदेववादीहरूले पनि आफ्नो फौजलाई ताँती बनाएर व्यवस्थित एंव तरतिब गरेका थिए । उनीहरूको नायिके अबु सुफ्यान थियो । उसले लस्करको माझमा आफ्नो केन्द्र बनाएको थियो । दाहिनेतर्फ खालिद विन वलिद थिए जो त्यतिखेर बहुदेववादी थिए, देब्रेतर्फ इक्रिमाह विन अबु जहल थियो । पैदल फौजको कमाण्ड सफ्वान विन् उमैयाले सम्हालेको थियो र तीर चलाउनलेहरूको कमाण्ड अब्दुल्लाह विन अबी रबिआले सम्हालेको थियो ।

झण्डा अब्दुल दारको एउटा सानो समूहको हातमा थियो । त्यो झण्डा उनीहरूलाई त्यति बेलादेखि नै प्राप्त थियो जतिखेर बनु अब्द मनाफले कुसैबाट वरासतमा पाएको पद बाँडफाँड गरेको थियो । यसको विवरण पुस्तकको सुरुमा उल्लेख भइसकेको छ । अर्कोतर्फ बाबुबाजेदेखि चलिआएको परम्पराले गर्दा पनि त्यस बारेमा कुनै व्यक्तिले विवाद गर्न सक्दैन थियो । अबु सुफ्यानले उनीहरूलाई बदरको युद्ध बारे त्यतिबेला स्मरण गरायो जब उनीहरूको झण्डा बोक्ने व्यक्ति नजर बिन हारिस गिरिफ्तार गरिएको थियो र उनीहरूलाई कठिनाइको सामना गर्नु परेको थियो । त्यस कुराको सम्झना गराउँने क्रममा उनीहरूलाई अँझ क्रोधित बनाउँन उसले भन्यो : हे ! बनी अब्दुद्दार, बदरको दिन तपाईँहरूले हाम्रो झण्डा बोक्नु भएको थियो त्यसले गर्दा हामीलाई जुन प्रकारको परिस्थितिबाट गुजरिनु परेको छ त्यो तपाईँहरूलाई थाहा नै छ । वास्तवमा झण्डाको कारणले गर्दा फौजलाई ठूलो नोक्सान हुन्छ । जब झण्डा झर्छ अनि फौज भाग्न थाल्छ । यस पटक कि तपाईँहरूले झण्डा राम्रोसँग संहाल्नुहोस् कि हाम्रो टोलीबाट अलग हुनुहोस् । हामी यसको व्यवस्था आफै गर्छौं । त्यो कुरा भनेर अबु सुफ्यान आफ्नो उद्देश्यमा सफल भयो । त्यो कुरा सुनेर अब्दुल दार रिसले चुरमुरियो । उनीहरूमाथि आक्रमण गर्छन् कि जस्तो गऱ्यो । के हामीले हाम्रो झण्डा तिमीहरूलाई दिने ? भोलि जब युद्ध हुन्छ

अनि थाहा हुन्छ, हामीले के गर्छौं भन्ने कुरा ? फलत: युद्ध सुरु भएपछि उनीहरू मैदानमा डटिरहे यहाँसम्म कि उनीहरूमध्ये हरेक व्यक्ति सदाको निम्ति मृत्युको गास बने ।

## कुरैशको राजनैतिक चालबाजी

युद्ध सुरु हुनुभन्दा पहिला कुरैशले मुसलमानलाई फुटाउने र विवाद सृजना गराउने दुष्प्रयास गऱ्यो । यो उद्देश्य पूरा गर्नको लागि अबु सुफ्यानले अन्सारहरूलाई संदेश पठायो : तपाइँहरूले हामी र हाम्रा काकाको छोरा मुहम्मदबीच हस्तक्षेप गर्नु भएन भने हाम्रो निशाना तपाइँहरूतिर हुने छैन । किनभने हामीलाई तपाइँहरूसँग लड्ने कुनै आवश्यकता छैन । तर अन्सार अगाडि त पहाड पनि बाधक बन्न सक्दैन थियो भने उसको त्यो चाल के नै काम लाग्थ्यो र ? फलस्वरूप अन्सारले उसलाई कडा शब्दमा जवाफ दिँदै तितामिठा कुराहरू सुनाए ।

समय अति नजिक हुँदै गयो । दुवै फौज एक अर्काको नजिक भएपछि कुरैशहरूले आफ्नो उद्देश्य पूरा गर्नको लागि अर्को षड्यन्त्र गरे । अर्थात उनीहरूको एक जना धोकेबाज एवं अवज्ञाकारी सहयोगी अबु आमिर मुस्लिमहरूको सामुन्ने आयो । उसको नाम अब्द अमर विन सैफी थियो । उसलाई तपस्वी पनि भनिन्थ्यो । तर मुहम्मदﷺले उसको नाम अवज्ञाकारी राख्नुभएको थियो । ऊ अज्ञानकालमा औस नामक कबिलाको सरदार थियो । इस्लामको उदय उसको घाँटीको पासो भयो । उसले मुहम्मदﷺविरुद्ध खुलेआम विद्रोह गर्न थाल्यो । त्यसै क्रममा ऊ मदिनाबाट निस्केर कुरैशकहाँ पुग्यो । उनीहरूलाई मुहम्मदﷺ विरुद्ध भडकाएर युद्ध गर्न तयार गऱ्यो । मेरो जातिका मान्छेले मलाई देखे भने मेरो कुरा मान्ने छन् र मेरो साथ दिने छन् भन्ने विश्वास दिलायो । उहुदको युद्धमा अहाबिस र मक्काका गुलामको साथ मुसलमानको विरुद्ध निस्केको ऊ पहिलो व्यक्ति थियो । आफ्नो समुदायको मान्छेलाई बोलाउँदै आफ्नो परिचय गरायो : हे ! कबिला अवसका मान्छे हो, म अबु आमिर हुँ । उनीहरूले जवाफ दिए : हे ! अवज्ञाकारी, तेरो आँखाले प्रसन्नता देख्न नपाओस् । उसले त्यो जवाफ सुनेर भन्यो, ओहो ! मेरो समुदायका मान्छेहरू त बिग्रेका पो रहेछन् । (तर युद्ध सुरु भएपछि उसले डटेर लड्दै मुसलमानमाथि अत्यधिक ढुंगा वर्षायो ।)

यसरी मुसलमानभित्र फुट हाल्ने कुरैशको दोस्रो दुष्प्रयास पनि विफल भयो । उनीहरूसँग अधिक फौजी संख्या र युद्धका हातहतियार हुँदाहुँदै पनि उनीहरू मुसलमानबाट कति भयभीत एवं त्रसित थिए भन्ने कुराको उपरोक्त कुराबाट अन्दाजा लगाउन सकिन्छ ।

## आँट तथा हिम्मत दिन कुरैशी महिलाहरूको सक्रियता

उता कुरैशी महिलाहरू पनि युद्धमा आफ्नो कर्तव्य निभाउन लागिन् । उनीहरूको नेतृत्व अबु सुफ्यानकी स्वास्नीले गरिरहेकी थिई । उनीहरूले आफ्नो फौजको ताँतीभित्र घुम्दै बाजा बजाएर फौजीहरूलाई उत्तेजित गराए, युद्धको लागि भडकाए, साथै ज्यानको आहुती दिनेहरूको स्वाभिमानलाई चुनौती दिँदै, बाण हान्ने,तरवार चलाउने र काटमार गर्ने भावनालाई प्रबल बनाए । झण्डा बोकेकाहरूलाई सम्बोधन गरेर उनीहरूले भनिन् :

ويها بنى عبد الدار ويها حماة الأدبارضربا بكل بتار

अनुवाद छ : हे ! अब्दुद्दार, ए ! पछाडिको सुरक्षाबल, अँझै तरवार चलाओ ।

आफ्नो समुदायलाई युद्धको जोस दिलाउँदै भनिन् :

ان تقبلوا نعاق ونفرش النمارق اوتدبروا نفارق فراق غير وامق

अनुवाद छ : यदि तिमीहरू अगाडि बढ्यौ भने हामीले तिमीहरूलाई अंगालो हाल्ने छौँ, तिमीहरूको लागि कालिन बिछ्याउने छौँ, यदि पछाडि हट्यौ भने हामी रिसाउने छौँ साथै तिमीहरूदेखि अलग हुनेछौँ ।

## युद्धको पहिलो सिकार

दुवै पक्ष एकदमै नजिक आमुन्ने सामुन्ने भएपछि युद्ध सुरु भयो । युद्धको पहिलो सिकार वहुदेववादीहरूको झण्डा बोक्ने व्यक्ति तलहा विन अबी तलहा अब्दरी बन्यो । ऊ कुरैशको वीर योद्धा थियो । उसलाई मुसलमानले कबशुल कुतैबा भन्थे । ऊ उँटमाथि सवार भई निस्क्यो र लडाइँको लागि निम्तो दियो । ऊ निकै बहादुर भएको कारण साधारण साथीहरू प्रतिस्प्रधा गर्न डराए । तर जुबैर अगाडि बढे । एक छिण पनि नअडिई सिंह झैँ उफ्रेर उँटमा चढे र उसलाई आफ्नो नियन्त्रणमा लिई उँटबाट भूइँमा झरे अनि उसलाई तरवारले बध गरिदिए ।

मुहम्मदﷺले त्यो उत्साहमय दृश्य देखेर खुसीले अल्लाहु अक्बरको नारा लगाउनुभयो । मुसलमानहरूले पनि नारा लगाए अनि उहाँले जुबैरको प्रशंसा गर्दै भन्नुभयो : प्रत्येक ईशदूतको एक जना सहयोगी हुन्छ र मेरा सहयोगी जुबैर हुन् ।[1]

## युद्धको सुरक्षित केन्द्र र नायिकेहरूको अन्त्य

चारैतिर युद्धको आगो दन्कियो । मैदानमा जताततै काटमार सुरु भयो । वहुदेववादीहरूको झण्डा युद्धको सुरक्षित केन्द्रमा थियो । आफ्नो कमाण्डरको हत्या हुँदै जाँदा बनु अब्दुद्दारका व्यक्तिहरू एकपछि अर्कोले झण्डा सम्हाल्यो । तर सबै

१ यस कुरालाई सिरत हल्बीयाका लेखकले उल्लेख गरेका छन् । हदिसमा यो शब्द अन्य सन्दर्भमा उल्लेख भएको छ ।

मारिए । सबैभन्दा पहिला तलहाको भाई उस्मान विन अबी तलहाले झण्डा बोकेर यो कुरा भन्दै अगाडि बढ्यो : नायिकेहरूको कर्तव्य बन्दछ चाहे तरवार रगतले रंगियोस् चाहे भाँचियोस् ।

त्यो कुरा सुनेर हमजा विन अब्दुल मुत्तलिबले ऊमाथि आक्रमण गरे र उसको काँधमा तरवार प्रहार गर्दा तरवार हातलाई चुँडाली काँधलाई काट्दै र शरीरलाई चिर्दै नाउटीसम्म पुग्यो जसले गर्दा उसको फोक्सो पनि देखियो ।

त्यसपछि झण्डा अबु सुफ्यान विन अबु सअदले लियो । ऊमाथि सअद विन अबी वक्कासले तीर चलाए, तीर उसको ठीक घाँटीमा लाग्यो जसले गर्दा उसको जिब्रो बाहिर निस्क्यो र उ उतिखेरै मऱ्यो । केही जीवनीकारहरू भन्छन् ,अबु सअदले बाहिर निस्केर भिड्ने निम्तो दियो । अलीले अगाडि बढेर उसको सामना गरे । दुवैले एकअर्कामाथि तरवार चलाए तर अलीले अबु सअदलाई मारिदिए ।

त्यसपछि मुसाफअ बिन तलहा विन अबी तलहाले झण्डा लियो । उसलाई आसिम विन सावित विन अबी अफलहले तीर हानेर हत्या गरिदिए । त्यसपछि उसको भाई केलाब बिन तलहा बिन अबी तलहाले झण्डा उठायो । ऊमाथि जुबैर विन औवाम झम्टे र लड्दालड्दै उनले उसको पनि काम सिध्याइदिए । उनीहरूको भाई जलास विन तलहा विन अबी तलहाले झण्डा लियो । उसलाई तलहा विन उबैदुल्लाहले भाला हानेर मारिदिए । भनिन्छ आसिम विन सावित विन अबी अफलहले तीर हानेर मारेका थिए ।

उनीहरू एकै घरका छ जना व्यक्ति थिए । अथवा उनीहरू सबै अब्दुल्लाह विन उस्मान विन अब्द दारका छोरानाती थिए जो बहुदेववादीहरूको झण्डा सुरक्षा गर्ने क्रममा मारिए । त्यसपछि झण्डा कबिला अब्द दारको अर्को एक जना व्यक्ति अरतात विन शरहबिलले सम्हाल्यो । अली विन अबी तालिबले साथै भनिन्छ हमजा विन अब्दुल मुत्तलिबले उसको हत्या गरिदिए । त्यसपछि शरिह विन कारिजले झण्डा सम्हाल्यो तर उसको पनि कजमानले हत्या गरिदियो । कजमान मुनाफिक थियो । ऊ इस्लामको लागि नभई आफ्नो जातीय इज्जतको जोशमा मुसलमानको साथमा लड्न आएको थियो । शरिह पछि अबु जैद विन अमर विन अब्द मनाफ अब्दरीले झण्डा समात्यो तर उसको हत्या पनि कजमानले नै गऱ्यो । त्यसपछि झण्डा शरहबिल विन हाशिम अब्दरीको एक जना छोराले लियो ऊ पनि कजमानको हातबाट मऱ्यो ।

अब्दुद्दारका ती दश जना व्यक्ति थिए जसले वहुदेववादीहरूको झण्डा बोकेका थिए र ती सबै मारिए । त्यसपछि झण्डा समाउन त्यस कबिलाबाट कोही पनि बाँकी बचेन र अन्तिममा उनीहरूको एक जना सवाब नामक हब्शी गुलामले लम्किएर झण्डा उठायो र अति वीरताका साथ लड्यो, ऊभन्दा पहिलाका झण्डा उठाउने आफ्ना सरदारहरूलाई पनि उसले पछाडि पाऱ्यो । त्यो व्यक्ति निरन्तर लडिरहयो

एकएक गरी दुवै हात काटिँदा पनि उसले झण्डा झर्न दिएन र घुँडाले टेकेर आफ्नो छाती र गर्दनले झण्डा उठाइराख्यो । अन्तिममा उसको पनि हत्या भयो । त्यतिबेला पनि उसले भनिरहेको थियो : हे ! अल्लाह अब त मैले कुनै कसर पनि बाँकी छोडेन । त्यस सवाब नामक गुलामको हत्या पछि झण्डा भूइँमा खस्यो र त्यसलाई उठाउन कुनै पनि शेष रहेनन् अन्तत त्यो झण्डा भूइँमा नै रह्यो ।

## अन्य क्षेत्रमा युद्धको परिस्थिति

एका तर्फ वहुदेववादीहरूको झण्डा नै युद्धको कठिन केन्द्र बनेको थियो भने अर्कोतर्फ अन्य क्षेत्रमा पनि घमासान लडाइँ चलिरहेको थियो । मुसलमानको जमातमा आध्यात्मिक शक्तिले काम गरिरहेको थियो । त्यसैले उनीहरू वहुदेववादी र नास्तिकहरूको लस्करसामु त्यो भेल झैं उर्लिए जसको सामुन्ने कुनै बाँध टिकदैन । मुसलमानले त्यस अवसरमा उम्मत ! उम्मत !! भनिरहेका थिए र युद्धमा उनीहरूको त्यही गान थियो ।

उता अबु दुजानाले आफ्नो लाल पगरी बाँधेर मुहम्मद ﷺ को तरवार लिई त्यसको हक निभाउने अठोट इरादा गरी अगाडि बढे र लड्दै अगाडिसम्म घुसे । उनी जोसँग भिड्थे उसलाई सिध्याउँथे । उनले वहुदेववादीहरूको ताँतीको ताँतीलाई उल्टाइदिए ।

जुबैर विन औवामले वर्णन गरेका छन् , मैले मुहम्मद ﷺ सँग तरवार माग्दा उहाँले तरवार नदिएपछि मेरो मनमा नरमाइलो लाग्यो । मैले मनमनै सोचेँ म उहाँको फुपु सफियाको छोरा हुँ साथसाथै कुरैशी पनि । मैले अबु दुजानाभन्दा पहिला गएर उहाँसँग तरवार मागेँ तर उहाँले मलाई नदिइ उनलाई दिनुभयो । तसर्थ म पनि हेर्छु उनले त्यसबाट के काम गर्दा रहेछन् । अतः म उनको पछाडि लागेँ । उनले सबैभन्दा पहिला आफ्नो लाल पगरी निकालेर टाउकोमा बाँधे । त्यो देखेर अन्सारले अबु दुजानालाई भने, उनले आफ्नो मृत्युको पगरी निकालेका छन् । उनी निम्न युद्धगीत गाउँदै मैदानतर्फ बढे :

انا الذى عاهدنى خليلى        ونحن بالسفح لذى النخيل
ان لا اقوام الدهر في الكيل    واضرب بسيف الله والرسول

यस खजुरको धुलो घारीमा मैले आफ्नो मित्रसँग बाचा गरेको छु : म कहिल्यै पनि ताँतीभन्दा पछाडि रहने छैन र अल्लाह र ईशदूतको तरवार चलाउने छु ।

त्यसपछि उनले जसलाई भेटाउँथे हत्या गर्थे । उता वहुदेववादीहरूतर्फ पनि एक जना थियो जसले हाम्रा घाइतेहरूलाई पाउना साथ सिद्धयाउँथ्यो । उनी दुवै विस्तारै विस्तारै नजिकिदै गए । मैले अल्लासँग दुवैमा टक्राउ होस् भनी प्रार्थना गरेँ र वास्तवमा टक्राउ पनि भयो । दुवैले एक अर्कामाथि एक एक चोटि प्रहार गरे । पहिला वहुदेववादीले अबु दुजानामाथि तरवार चलायो तर उनले उसको तरवारलाई ढालले

रोकिदिए । वहुदेववादीको तरवार ढालमा अड्कियो । त्यसपछि अबु दुजानाले तरवार चलाएर उसलाई त्यहीँ ढलाइदिए ।[१]

त्यसपछि अबुदुजाना ताँती चिर्दै अगाडि बढे र कुरैशी महिलाको कमाण्डरसम्म पुगे । उनलाई त्यो महिला हो भन्ने थाहा थिएन । उनको बयान छ , मैले एक जना मान्छेलाई देखेँ जसले मानिसहरूलाई बडो उत्तेजित तथा जागरुक बनाइरहेको थियो । त्यसकारण मैले उसलाई आफ्नो निशाना बनाएँ । तर जब मैले तरवार हान्न लागेँ ऊ कराउन थाली र ऊ महिला हो भन्ने कुरा थाहा भयो । मैले मुहम्मदﷺको तरवारले कुनै महिलालाई हानेर उहाँको तरवारमा दाग लाग्न दिएन ।

त्यो महिला हिन्दा विन्ते उत्बा थिई । जुबैर विन औवामको बयान छ, मैले अबु दुजानालाई हिन्दा विन्ते उत्बाको सीधा टाउकोमा तरवार उठाएको देखेँ तर उनले तरवार हटाए । मैले भनेँ, अल्लाह र ईशदूतलाई सही ज्ञान ।[२]

उता हमजा पनि सिंह झैं रिसमा चुरिएर युद्ध गरिरहेका थिए । काटमार गर्दै उनी लस्करको माझमा घुसे । उनको सामुन्ने ठूला ठूला वीरहरू पनि चैते हावामा पातपतिंगा उडे झैं तितरवितर हुन्थे । उनले वहुदेववादी नायिकेहरूको हत्या गर्नुको साथसाथै उनको तर्फबाट वलिदान दिने वीरहरूको हाल पनि बेहाल बनाइदिएका थिए । तर अफसोचको कुरा के भयो भने त्यही अवस्थामा उनी शहिद भए । उनलाई वीर झैँ आमुन्नेसामुन्ने लडेर शहिद गरिएन । कायरतापूर्ण तरिकाले लुकेर सुनियोजित अवस्थामा उनको हत्या गरियो ।

## अल्लाहका सिंह हमजाको शहादत

हमजाको हत्यारा वहशी विन हरब थियो । हामी उनको शहादतको घटना बारे उसैको मुखबाट भनिएको कुरा वर्णन गर्छौं । उसको बयान छ, म जुबैर विन मुत्इमको गुलाम थिएँ । उनको काका तइमा विन अदी बदरको युद्धमा मारिएको थियो । जब कुरैश उहुदको युद्धको लागि निस्के अनि जुबैर विन मुत्इमले मलाई भन्यो : यदि तिमीले मुहम्मदﷺका काका हमजालाई मेरो काकाको सट्टामा हत्या गरिदियौ भने म तिमीलाई मुक्त गरिदिने छु । वहशी भन्छ, म त्यसै कुरालाई मनन् गर्दै कुरैशको साथमा निस्के । म कालो जातिको मान्छे थिएँ । कालो जातिले झैँ भाला हान्न म सिपालु थिएँ । निशाना कमै चुक्थ्यो । युद्ध सुरु भएपछि मैले हमजालाई नियालेँ । मेरो नजरले उनलाई खोजिरहेको थियो । अन्तिममा मैले उनलाई मानिसहरूको हुलमा देखेँ । उनी धुलोमैलो लागेको उँट जस्तै देखिएका थिए । उनी मानिसहरूलाई तितरवितर गर्दै थिए । उनको सामुन्ने कुनै चीज टिकदैन थियो ।

---

१ इब्ने हेशाम भाग २
२ इब्ने हेशाम भाग २

अल्लाहको कसम, म पनि उनको ताकमा लागिरहेको थिएँ । उनी नजिक आउछन कि भनेर म एउटा रुख वा ढुंगाको आडमा लुकेर बसेको थिएँ । त्यतिखेरै सबाअ विन अब्दुल उज्जा मभन्दा अगाडि बढी उनी भएको ठाउँमा पुग्यो । हमजाले उसलाई बोलाउदै भने : ए गुप्तांगको छाला काटने आइमाईको छोरा, ले ! यो समात । यतिकैमा उनले यति जोडले तरवार हाने जसले गर्दा टाउको उछुट्यो ।

वहशीको भनाई छ, त्यतिखेरै मैले आफ्नो भाला निशानामा राखेको थिएँ । ठीक निशाना परेपछि मैले भाला हानें । भाला उनको नाउटीतल लाग्यो र दुवै खुट्टाबीच हुँदै भाला छिर्यो । उनी मतर्फ बढ्न चाहे तर सकेनन् । मैले उनलाई त्यही अवस्थामा छोडिदिएँ र उनी मरे । म उनी भएको ठाउँमा गएर आफ्नो भाला निकाली लस्करतिर गएर बसेँ । मेरो काम सकिएको थियो । मलाई उनीबाहेक अरू कसैसँग सरोकार थिएन । मैले उनलाई केवल आफु मुक्त हुनको लागि हत्या गरेको थिएँ । अन्ततः मक्का आएपछि म मुक्त भएँ ।[१]

## मुसलमानहरूको प्रभूत्व

अल्लाह र उनका दूतका सिंह हमजाको शहादतले मुसलमानलाई जुन ठूलो नोक्सान तथा क्षति व्यहोर्नु परेको थियो त्यसको बावजुद युद्धमा उनीहरूको नै प्रभुत्व थियो । अबु बकर, उमर, अली ,जुबैर, मुस्अब विन उमैर, तलहा विन् उबैदुल्लाह, अब्दुल्लाह विन जहश, सअद विन मुआज, सअद विन उबादा, सअद विन रबिअ र नजर विन अनस लगायतका व्यक्तिहरूले वीरतापूर्व ज्यानको बाजी लगाएर युद्ध गरेपछि वहुदेववादीहरूको छक्का छुट्यो । उनीहरूको हिम्मत टुट्यो र शक्तिले पनि जवाफ दिन थाल्यो ।

## वेहुलीको ओछ्यानबाट तरबारको धारमा

अर्कोतर्फ ज्यानको आहुती दिनेहरूमध्ये एक जना बुजरुक हन्जला अल गसिल पनि देखिएका थिए । उनी आज एक नयाँ सानका साथ युद्धको मैदानमा आएका थिए । उनी त्यही अबु आमिर अबु राहिबको छोरा थिए जो पछि फासिक अर्थात अवज्ञकारीको नामबाट परिचित भयो । जसको बारेमा पछाडिको पृष्ठमा उल्लेख भएको छ । हन्जलाले नौली वेहुली विवाह गर्ने वित्तिकै युद्धको सूचना आयो । त्यति बेला उनी वेहुलीको साथमा नै थिए । आवाज सुन्ने वित्तिकै उनी वेहुलीको काखबाट निस्केर युद्धको लागि हिँडे । जब वहुदेववादीसँग युद्ध चर्कियो अनि उनी ताँतीलाई चिर्दै उनीहरूको कमाण्डर अबु सुफ्यान भएको ठाउँमा पुगे । उसको हत्या गर्ने

१ इब्ने हेशाम भगा २, सही बुखारी भाग २, वहशीले ताइफ युद्धपछि इस्लाम स्वीकारेको थियो । उसले त्यसै भालाबाट अबु बकरको राज्यकालमा यमामहको युद्धमा मुसैलेमा विन कज्जाबको हत्या गरेको थियो । इटाली विरुद्ध यरमुक युद्धमा पनि सामिल भएको थियो ।

लागेका थिए तर अल्लाहले पहिला उनकै शहादत निश्चित गरिसकेका थिए । तसर्थ उनले अबु सुफ्यानलाई निशानामा लिएर तरवार उठाउनै लाग्दा शद्दाद विन अस्वदले उनलाई देख्यो र एक्कासी आक्रमण गऱ्यो त्यसबाट हन्जला शहिद भए ।

## तीर चलाउनेहरूको योगदान

रमात नामक पहाडमा मुहम्मदﷺले तीर चलाउनेहरूको जुन जमातलाई खटाएउनु भएको थियो उनीहरूले पनि युद्धलाई मुसलमानको हकमा पार्नको निमित्त ठूलो भूमिका निर्भाह गरेका थिए । मक्की घोडचढीहरू खालिद विन् वलिदको नेतृत्व र अबु आमिरको सहयोगमा इस्लामी फौजको देब्रेतर्फको सुरक्षाबललाई तोडेर मुसलमानको पछाडितिर पुगे । मुस्लिमहरूको ताँतीमा हुलदंगा मच्चाएर उनीहरूलाई पराजय गर्नको लागि तीन पटकसम्म घमसान आक्रमण गरे । तर मुसलमानका तीरबाजहरूले आफ्नो तीरद्वारा उनीहरूलाई यस्तो तरिकाले छेद गरे कि उनीहरूको तीन वटै आक्रमण विफल भयो ।[१]

## बहुदेववादीहरूको पराजय

केही छिन घमसान युद्ध जारी रह्यो । सानो इस्लामी लस्कर युद्धको गतिमा प्रबल नै रह्यो । अन्तिममा वहुदेववादीहरूको हिम्मत टुट्यो । उनीहरूको ताँती चारैतिरबाट विथोलिन थाल्यो । तीन हजार फौजलाई सात सयको नभई तीस हजार फौजको सामना छ जस्तो हुन थाल्यो ।

अर्कोतर्फ मुसलमानहरू इमान,आत्मविश्वास,वलिदान र वीरताको उच्च पात्र बनेर आफ्नो तरवारको प्रतिभा देखाइरहेका थिए ।

कुरैशले मुसलमानहरूको सशस्त्र आक्रमण रोक्नको लागि आफ्नो सम्पूर्ण शक्ति खर्चदा पनि उनीहरू विवश देखिन थाले । उनीहरूको हिम्मत यति टुट्यो कि सवाबको हत्यापछि युद्ध जारी राख्नको निमित्त ढलेको झण्डा उठाउने कसैको आँट भएन । त्यसपछि उनीहरू विवश भई भाग्न थाले । बदला, इज्जत र आफ्नो विगतलाई दोहोऱ्याउने जुन कुराहरू उनीहरूले रचेका थिए सबै बिर्से ।

इब्ने इस्हाकको भनाई छ, अल्लाहले मुसलमानमाथि आफ्नो मदत अवतरण गरी उनीहरूसँग गरेको आफ्नो बचन पूरा गरिदिए । तसर्थ मुसलमानहरूले आफ्नो तरवारले उनीहरूलाई काटेपछि नीहरू आफ्नो केम्पबाट पनि टाढा भागे । निसंदेह, उनीहरू राम्रोसँग पराजित भए । अब्दुल्लाह विन जुबैरको बयान छ, उनको बाबुले

१ फतहुल बारी भाग ७

भने । अल्लाहको कसम मैले हिन्दा विन्ते उत्बा र उसको साथीहरूका तिघ्रा देखेँ । उनीहरू कपडा उठाएर भाग्दै थिइन् । उनीहरूलाई सजिलै गिरिफतार गर्न सकिन्थ्यो ।[1]

सही बुखारीमा बराअ बिन आजिबले बयान गरेका छन्, वहुदेववादीहरूसँग हाम्रो सामना भएपछि वहुदेववादीहरूमा हुलदंगा मच्चियो । मैले आइमाईहरूलाई देखेँ उनीहरू आफ्नो कपडा उठाएर पहाडतिर भाग्दै थिइन् जसले गर्दा उनीहरूको पायल पनि देखिएको थियो ।[2] भागाभागको त्यो अवस्थामा मुसलमानहरूले वहुदेववादीहरूमाथि तरवार वर्षाए र माल सामान बटुल्दै उनीहरूको पिछा गरे ।

## तीर चलाउने जमातबाट भयानक गल्ती

इस्लामी लस्करले वहुदेववादीको विरुद्ध इतिहासको पानामा त्यो भव्य विजय प्राप्त गर्न लाग्दा जुन बदरको युद्धभन्दा कतै पनि कमी थिएन तीर चलाउने जमातमध्येका अधिकांशले एउटा भयानक गलती गरे जसले गर्दा युद्धको काया नै पल्टियो । मुसलमानहरूलाई बडो नोक्सानको सामना गर्नु पऱ्यो । स्वयम मुहम्मदﷺ शहादत प्राप्तिबाट बालबाल बच्नुभयो । त्यसले गर्दा मुसलमानबाट आफ्नो त्यो छाप र प्रभुत्व हराउँदै गयो जुन बदरको युद्धमा उनीहरूलाई हासिल थियो ।

पछाडिका पृष्ठहरूमा उल्लेख भइसकेको छ, मुहम्मदﷺले तीर चलाउने जमातलाई विजय वा पराजयको जुनसुकै हालतमा पनि आफ्नो मोर्चा नछाड्न आदेश दिनुभएको थियो । त्यस आदेशको बावजुद उनीहरूले आफ्नो मुस्लिम जमातलाई युद्धप्राप्त लुटिरहेको देखेपछि उनीहरूको मनमा दुनियाँको केही प्रलोभन पलायो । तसर्थ एक अर्कालाई भन्न थाले , युद्धप्राप्त .........युद्धप्राप्त................। हाम्रा साथीहरूले जितिसके, अब पनि के को प्रतीक्षा गर्ने हो ?

यी कुराहरू हुँदाहुँदै उनका कमाण्डर अब्दुल्लाह विन जुबैरले उनीहरूलाई ईशदूतको आदेशको स्मरण गराए । के मुहम्मदﷺले जुन आदेश दिनुभएको थियो त्यो तिमीहरूले बिर्सिसक्यौ ? अधिकांशले उनको कुरा सुनेन् र भन्न थाले : अल्लाहको कसम हामीहरू पनि मानिसहरू भएको ठाउँमा जान्छौँ र केही युद्धप्राप्त लिन्छौँ ।[3] त्यसपछि चालीस जना तीरबाजहरूले आफ्नो मोर्चा छाडेर युद्धप्राप्त हासिल गर्न आम लस्कर भएको ठाउँमा गए । यसरी मुसलमानको पछाडितिरको सुरक्षा रहेन । त्यहाँ अब्दुल्लाह विन जुबैर केवल नौ जना साथीहरूको साथमा थिए । कि त हामीलाई पनि अनुमति दिइने छ कि हामीले ज्यानको आहुती दिने छौँ भन्ने सोचमा उनीहरू त्यहाँ डटिरहे ।

---

१ इब्ने हेशाम भाग २
२ सही बुखारी भाग २
3 यो कुरा सही बुखारी भाग १ मा बराअ बिन आजिबमार्फत वर्णन गरिएको छ ।

## इस्लामी लस्कर बहुदेववादीको नियन्त्रणमा

खलिद विन वलिदले पहिला नै तीन पटकसम्म यस मोर्चामाथि आक्रमण गर्ने कोसिस गरिसकेका थिए । यसलाई सुनौलो अवसर ठानी उनी घुमेर तीव्रगतिमा इस्लामी फौजको पछाडितिर गए र केही छिनमा अब्दुल्लाह विन जुबैर र उनका साथीहरूको हत्या गरी मुसलमानमाथि पछाडिबाट आक्रमण गरेर उनको घोडचढी सवारहरूले नारा लगाए । जसले गर्दा हारेका वहुदेववादीहरूलाई पनि बदलिएको परिस्थिति बारे खबर भयो र उनीहरू पनि मुसलमानमाथि होमिए । उता बनु हारिस नामक कबिलाकी एक जना उमराह विन्ते अल्कमा नाम गरेकी महिलाले लम्किएर ढलेको झण्डालाई उठाई । अनि तितरवितर भएका वहुदेववादीहरू झण्डामुनि जम्मा हुन थाले र एकले अर्कालाई बोलायो । यसरी उनीहरूले मुसलमान विरुद्ध एकिकृत भई डटेर युद्ध गरे । मुसलनमानहरू अगाडिपछाडि दुवैतिरबाट घेरिइसकेका थिए । अर्थात उनीहरू जाँतोको दुई पाटाको बीचमा परेका थिए ।

## मुहम्मदﷺको जोखिमपूर्ण निर्णय र शक्तिशाली कदम

त्यतिबेला मुहम्मदﷺ केवल ९ जना[१] सहाबीहरूको सानो जमातको साथमा हुनुहुन्थ्यो । मुसलमानहरूलाई काटमार गरिएको र वहुदेववादीहरूले लखेटेको दृश्य हेरिरहनु भएको थियो । त्यही अवस्थामा अचानक उहाँले खालिद विन वलिदका घोडचढी सवारहरूलाई देख्नुभयो । त्यस पश्चात आफ्ना ९ जना साथीहरू समेत कुनै सुरक्षित ठाउँतिर भाग्नु, दुस्मनको नियन्त्रणमा आइसकेको आफ्नो लस्करलाई उनीहरूको किस्मतमा छोड्नु र जोखिम खेप्दै साथीहरूलाई गुहारेर उनीहरूलाई आफ्नो ठाउँमा जम्मा गरी एक शक्तिशाली मोर्चा बनाएर त्यसबाट वहुदेववादीहरूको घेरा तोड्दै आफ्नो लस्करको लागि उहुद पहाडको शिखरतिर जानको लागि बाटो बनाउनु जस्ता दुइटा उपायबाहेक अरू कुनै उपाय थिएन ।

परीक्षणको यस नाजुक मोडमा पनि उहाँको युद्धरणनीति र उदाहरणीय वीरता झल्किएको देखिन्छ । किनभने मुहम्मदﷺले आफ्नो ज्यान बचाएर भाग्नुको सट्टा आफ्नो ज्यान जोखिममा हाली आफ्ना साथीहरूको ज्यान बचाउने निर्णय गर्नुभयो ।

तसर्थ उहाँले खालिद विन वलिदको घोडचढी सवारहरूलाई देख्ने वित्तिकै साथीहरूलाई बोलाउनुभयो । हे अल्लाहका उपासकहरू,यता आओ यता । त्यो आवाज मुसलमानहरूले भन्दा पहिला वहुदेववादीहरूले सुन्नेछन् भन्ने उहाँलाई थाहा थियो र भयो पनि त्यस्तै । आवाज सुनेर मुहम्मदﷺ यहीँ छन् भन्ने कुरा वहुदेववादीहरूलाई थाहा भयो । तसर्थ खालिद विन वलिदको एक दस्ता मुसलमानहरूभन्दा पहिला उहाँ

---

१ मुस्लिम भाग १ अनुसार अल्लाहका संदेष्टा उहुद युद्धको दिन सात जना अन्सार र दुई जना कुरैशीहरुको माझमा हुनुहुन्थ्यो ।

भएको ठाउँमा पुग्यो र बाँकी घोडचढी सवारहरूले तुरुन्तै मुसलमानको घेराउ गर्न सुरु गरे । अब दुवैको विवरण अलग अलग उल्लेख गरिने छ ।

## मुसलमानभित्र भागदौड

मुसलमान उनीहरूको नियन्त्रणमा आएपछि एउटा समूहको होस् नै गुम्यो । उनीहरूलाई केवल आफ्नो ज्यानको चिन्ता हुन थाल्यो । तसर्थ उनीहरू युद्धको मैदान छोडेर भागे । पछाडि के भइरहे छ त्यसको उनीहरूलाई कुनै खबर पनि थिएन । उनीहरूमध्ये केही भागेर मदिना आए भने केही पहाडमाथि चढे । अर्को एक समूह पछाडि फर्केर वहुदेववादीहरूको हुलमा पस्यो । दुवै लस्करका मान्छेहरू गोलमोल भए । एक अर्कालाई चिन्न सकेनन् तसर्थ मुसलमानको हातबाट मुसलमान पनि मारिए । बुखारीमा माई आयशामार्फत वर्णन गरिएको छ : उहुदको युद्धमा पहिला वहुदेववादीलाई पराजय भोग्नु पर्‍यो । त्यसपछि इबलीस शैतानले आवाज लगायो, हे अल्लाहका उपासक ! .....पछाडि......... त्यो आवाज सुनेर अगाडिको टोली फर्क्यो र पछाडिको टोलीसँग मिल्यो । हुजैफाले आफ्नो बुबा यमानमाथि आक्रमण भइरहेको देखे । उनले भने, हे अल्लाहका उपासकहरु ! उनी मेरा बुबा हुन्, तर अल्लाहको कसम, उनीहरूले आफ्नो हात रोकेनन् र उनलाई मारिदिए । हुजैफाले भने, अल्लाहले तिमीहरूको सुरक्षा गरुन् । उरवाको वयान छ, अल्लाहको कसम हुजैफामा सदा भलाइ नै देखियो यहाँसम्म कि उनको निधन भयो ।[१]

अन्तत: त्यस ताँतीमा निकै भागदौड तथा खलबली मच्चियो । अधिकांश मानिसहरू हतास्सिएका थिए र व्याकुल पनि भएका थिए । कता भाग्ने हो उनीहरूलाई पत्तो नै थिएन । ठिक त्यति बेला मुहम्मदﷺको हत्या भयो भन्ने एक जनाको स्वर सुनियो । त्यो कुराले अलिअलि बाँकी रहेको होस् पनि हरायो । अधिकांश मानिसहरूको हौसला टुट्यो । केही पछाडि हटे र हरेस खाएर हतियार पनि फ्याँके । केहीले मुनाफिकको सरदार अब्दुल्लाह विन उबैसँग गई अबु सुफ्यानसँग आफ्नो लागि शरण दिन सिफारिश गर्न लगाउने सोच गरे ।

केही छिनपछि अनस विन् नजर उनीहरू भएको ठाउँबाट हिँडे । उनले त्यहाँ उनीहरूलाई हात बाँधेर बसेको देखे । उनले सोधे के को प्रतीक्षा हो ? उनीहरूले भने, मुहम्मदﷺको हत्या भएको छ । अनस विन् नजरले भने, मुहम्मदﷺपछि अब तिमीहरू बाँचेर के गर्छौ ? उठ ! मुहम्मदﷺले जेको लागि ज्यान दिनुभयो त्यसैको

१ यसको तर्क अल्लाहको यो कथन हो । अनुवाद छ : अल्लाहका संदेष्टाले तिमीहरुलाई पछाडिबाट बोलाइरहेका थिए । सही बुखारी भाग १, फतहुलबारी भाग ७, बुखारीबाहेक अन्य हदिसहरुमा उल्लेख छ : अल्लाहका संदेष्टाले उनको प्रतिदान दिन चाहानुभएको थियो । तर हुजैफाले भने : मैले उनको प्रतिदान मुसलमानलाई दान गरिदिएँ । त्यसैले अल्लाहका संदेष्टाको नजरमा हुजैफाको भलाइमा अँझ वृद्धि भयो ।

लागि तिमीहरूले पनि ज्यान दिओ ! त्यसपछि उनले भने, हे अल्लाह यिनीहरू अर्थात मुसलमानहरूले जे काम गरे त्यसप्रति तपाईँसँग क्षमा चाहन्छु र तिनीहरू अर्थात वहुदेववादीहरूले जे गरे त्यसबाट मुक्ति चाहन्छु । त्यो कुरा भन्दै उनी अगाडि बढे । अगाडि सअद विन् मुआजसँग भेट भयो । उनले सोधे, ए अबु उमर कहाँ जादै हुनुहन्छ ? अनसले जवाफ दिए, ओहो स्वर्गको बासनाको के कुरा गर्नु, ए सअद ! मलाई उहुदको पहाड टाढा लागेको छ । त्यसपछि उनी अँझै अगाडि बढे र वहुदेववादीहरूसँग लडदालडदै शहिद भए । युद्धको अन्त्य भएपछि उनको सनाखत हुन कठिन भयो । उनकी बहिनीले पनि उनलाई केवल औलाको जोर्नीबाट चिनिन् । उनलाई भाला,तीर र तरवारबाट ८० ठाउँमा चोट लागेको थियो ।[१]

त्यसैगरी सावित विन् दहदाहले आफ्नो खानदानलाई बोलाएर भनेः यदि मुहम्मदﷺ मारिएका छन् भने अल्लाह त जीवित छन् नि । ऊ त मर्दैन । तिमीहरू आफ्नो धर्मको लागि लड । अल्लाहले तिमीहरूलाई विजय प्रदान गर्नेछ । त्यो कुरा सुनेर अन्सारको एक जमात तयार भयो र सावितले उनीहरूको सहयोगमा खालिद विन् वलिदको घोडचढी सवारमाथि आक्रमण गरे । उनी पनि लड्दालडदै खालिद विन वलिदको भाला प्रहारबाट शहिद भए । उनले झैँ उनका साथीहरूले पनि लड्दालड्दै शहादत प्राप्त गरे ।[२]

एक जना मुहाजिर रगतमा लतपतिएको एक जना अन्सार साथीको नजिक गएर सोधे । मुहाजिरले भने, दाज्यु तपाईँलाई मुहम्मदﷺको हत्या भएको थाहा छ ? अन्सारीले भने यदि मुहम्मदﷺको हत्या भएको छ भने उहाँले अल्लाहको धर्म पुऱ्याइ सक्नुभएको छ । अल्लाहको धर्मको संरक्षणको लागि अब युद्ध गर्ने जिम्मेवारी तिमीहरूको बन्छ ।[3]

त्यस किसिमको ठोस तथा जोसिलो कुराले इस्लामी फौजको हौसला पुनः बहाल भयो । उनीहरू पुनः होसमा आए । तसर्थ उनीहरूले आफ्नो हतियार सुम्पिएर आत्मसमर्पण गर्ने र अब्दुल्लाह बिन उबैको शरण लिने कुरालाई त्यागी हतियार उठाउने निर्णय गरे । साथै उनीहरू वहुदेववादीहरूको तर्फबाट उर्लेको भेलसँग टक्राएर उनको घेरालाई तोड्ने र आफ्नो नेतृत्व केन्द्रसम्म जाने बाटो बनाउने प्रयासमा डटिरहे । त्यसैबीच उनीहरूलाई मुहम्मदﷺको हत्याको खबर झुट तथा मनगढन्त भएको कुरा थाहा भयो । त्यस खबरबाट उनीहरूको शक्तिमा अँझ उर्जा थपियो । उनीहरूको हौसला तथा जोसमा झन् फुर्ती आयो । अन्ततः उनीहरू

---

१ जादुल मआद भाग २ सही बुखारी भाग २
२ सिरतुल हलबीया भाग २
3 जादुल मआद भाग २

घमसान एवं रक्तपातयुक्त युद्ध गरी घेरा तोडेर उनीहरूको नियन्त्रणबाट निस्के र एक बलियो केन्द्रमा एकिकृत हुन सफल भए ।

इस्लामी लस्करको एक तेस्रो समूह केवल मुहम्मदﷺको चिन्तामा ग्रसित थियो । त्यो समूह घेराउ गरिएको जानकारी हुने वित्तिकै मुहम्मदﷺतर्फ फर्कियो । उनीहरूमध्ये प्रथम सूचीमा अबु बकर सिद्दिक, उमर विन खत्ताब र अली बिन अबु तालिब लगायतका साथीहरू थिए । उनीहरू हाताहात हुने व्यक्तिहरूको प्रथम ताँतीमा पनि थिए । तर जब मुहम्मदﷺको लागि खतरा सृजना भयो उहाँको सुरक्षा र प्रतिकार गर्नेहरू पनि अगाडि अगाडि बढे ।

## मुहम्मदﷺको वरिपरि भीषण युद्ध

इस्लामी लस्कर बहुदेववादीहरूको नियन्त्रण र युद्धको चपेटामा हुँदा मुहम्मदﷺको वरिपरि पनि भीषण युद्ध जारी थियो । हामीले वर्णन गरिसकेका छौं कि बहुदेववादीहरूको कारवाही सुरु हुँदा मुहम्मदﷺको साथमा केवल नौ जना साथीहरू थिए । उहाँले मुसलमानहरूलाई म ईशदूत हुँ, म भएको ठाउँमा आओ भनी बोलाउँदा त्यो स्वर बहुदेववादीहरूले सुने । उनीहरूले उहाँको आवाज चिने किनभने उनीहरू त्यतिखेर मुसलमानभन्दा पनि नजिक थिए । तसर्थ उनीहरू उहाँमाथि आक्रमण गर्न होमिए । कुनै मुसलमान आउनुअघि नै उनीहरूले आफ्नो सम्पूर्ण शक्ति लगाए । उनीहरूको अचानक आक्रमणले गर्दा बहुदेववादीहरू र मुसलमानबीच घमसान युद्ध भयो जसमा युद्धप्रेम, बलिदान तथा वीरताका ठूलठूला घटनाहरू घटे ।

सही मुस्लिम नामक हदिसको किताबमा अनसमार्फत वर्णन गरिएको छ : उहुदको दिन मुहम्मदﷺ सात जना अन्सार र दुई जना कुरैशी साथीहरूलाई साथमा लिएर अलग बस्नुभएको थियो । आक्रणकारीहरू उहाँको नजिक पुग्न लाग्दा उहाँले भन्नुभयो, जसले उनीहरूलाई हामीबाट भगाउँछ उसको लागि स्वर्ग छ । वा उहाँले भन्नुभयो, ऊ स्वर्गमा मेरो साथी हुनेछ । त्यसपछि अन्सारी साथीहरू अगाडि बढे र लड्दालड्दै शहिद भए । त्यसपछि वहुदेववादीहरू उहाँको एकदम नजिक आए । यसरी पालोपालो सातै जना साथीहरू शहिद भए । त्यो देखेर मुहम्मदﷺले आफ्ना बाँकी बचेका दुई जना कुरैशी साथीहरूसँग भन्नुभयोः हामीले आफ्ना साथीहरूसँग न्याय गरेनौं । [१]

ती सात जना साथीहरूमध्ये अन्तिम साथी इमारह विन यजिद विन सकन थिए । उनी लडिरहे र चोट खप्न नसकी ढले । [२]

---

१ सही मुस्लिम भाग २
२ केही क्षणपछि अल्लाहका संदेष्टाकहाँ सहाबीहरुको एउटा जमात आयो । उनीहरुले बहुदेववादीहरुलाई अम्मारहबाट पछाडि हटाए । उनलाई अल्लाहको संदेष्टाकहाँ ल्याए । उहाँले

इब्ने सकन ढलेपछि मुहम्मदﷺको साथमा केवल दुई जना साथीहरू बाँकी बचेका थिए । बुखारी र मुस्लिम नामक हदिसको किताबमा अबु उस्मानमार्फत वर्णन गरिएको छ : उहाँले जति युद्धहरू गर्नुभयो तीमध्ये एउटा पनि लडाइँमा तलहा विन उबैदुल्लाह र सअद बिन वक्कासबाहेक कोही बाँकी रहेनन् ।

त्यो क्षण मुहम्मदﷺको जीवनको लागि अत्यन्तै नाजुक क्षण थियो र बहुदेववदीहरूको लागि अत्यन्तै सुनौलो अवसर थियो । वास्तवमा वहुदेववादीहरूले त्यस मौकाको फाइदा उठाउन कत्ति पनि चुकेनन् । उनीहरूले आफ्नो सशस्त्र आक्रमण मुहम्मदﷺमाथि केन्द्रित गरे र उहाँको अन्त्य गर्न चाहे । त्यसै आक्रमणमा उत्बा विन अबी वक्कासले उहाँमाथि ढुंगा हानेको थियो जसकारण उहाँ पाखुराको भरमा ढल्नुभयो र उहाँको दाहिनेतिरको तल्लो दाँत भाँचियो । त्यसका साथसाथै तल्लो ओठमा पनि चोट लागेको थियो । अब्दुल्लाह विन शहाब जोहरीले अगाडि बढेर उहाँको निधारमा हान्यो । एक जना अर्को अडियल सवार अब्दुल्लाह विन कुम्आले झम्टेर उहाँको काँधमा तरवार प्रहार गऱ्यो जसको दुखाई मुहम्मदﷺलाई एक महिनासम्म महसुस भयो तर उहाँको ढाल भने फुटेन । त्यसपछि पनि उसले पहिला झैँ जोडले तरवार हान्यो । त्यो तरवार आँखाभन्दा अलि तल उभ्रेको हाँडमा लाग्यो । त्यसले गर्दा उहाँले लगाउनु भएको दुईटा कडी उहाँको अनुहारमा गड्यो । उसले भन्यो : ल मलाई समात, म कुम्आको छोरा हुँ । मुहम्मदﷺले अनुहारबाट रगत पुछ्दै भन्नुभयो : अल्लाहले तँलाई टुक्रियाओस् ।[१]

बुखारीमा वर्णन गरिएको छ : उहाँको दाहिनेतिरको तल्लो दाँत भाँचिनुका सथै टाउकोमा पनि चोट लागेको थियो । त्यति बेला उहाँ आफ्नो अनुहारबाट रगत पुछ्दै हिँड्नुभयो । उहाँले भन्नुभएको थियो : त्यो जाति कसरी सफल हुन सक्छ जसले आफ्नो ईशदूतलाई घाइते बनाएको छ जबकि ईशदूतले उनीहरूलाई अल्लाहतर्फ बोलाउँदै छ । त्यस बारे अल्लाहले कुरआनको श्लोक अवतरण गरे ।

لَيْسَ لَكَ مِنَ الْأَمْرِ شَيْءٌ أَوْ يَتُوبَ عَلَيْهِمْ أَوْ يُعَذِّبَهُمْ فَإِنَّهُمْ ظَالِمُونَ (آل عمران: 128 )

तिम्रो हातमा केही छैन, चाहे अल्लाहले उनीहरूलाई क्षमा गरून् वा उनीहरूलाई सजाय दिउन् । किनभने उनीहरु अत्याचारी हुन् । (आले इम्रान : १२८)

---

उनलाई आफनो खुट्टामा आडेस लगाउनुभयो । आफ्नो निधार अल्लाहका संदेष्टाको पाउँमा हुँदा उनले प्राण छोडे, इब्ने हेशाम भाग २ । वास्तवमा उनको चाहना पूरा भयो ।

१ अल्लाहले उहाँको प्रार्थना सुन्नुभयो । तसर्थ इब्ने आइजमार्फत वर्णन गरिएको छ, इब्ने कुम्आ युद्धबाट फर्केर घर आएर आफनो बाखा हेर्न निस्कँदा उसले बाखा पहाडको टुप्पोमा देख्यो । त्यो व्यक्ति त्यहाँ जाँदा एउटा पहाडी बाखाले ऊमाथि आक्रमण गऱ्यो र आफनो सिंगले हान्दै पहाडबाट खसालिदियो, फतहुलबारी भाग ७ । तब्रानी अनुसार अल्लाहले ऊमाथि पहाडी बाखा लगाइ दिएका थिए । जसले सिंग हानेर उसलाई टुक्रा टुक्रा पारेको थियो , फतहुलबारी भाग ७

तिब्रानी नामक हदिसमा वर्णन भएको छ, उहाँले त्यो दिन भन्नुभएको थियो : त्यो समुदायमाथि अल्लाहको कडा दण्ड होस् जसले आफ्नो ईशदूतको अनुहार रगताम्मै बनाएको छ । केही छिन रोकिएर भन्नुभयो : हे अल्लाह ! मेरो जातिलाई माफ गरिदेऊ किनभने उसलाई केही थाहा छैन ।

सही मुस्लिममा पनि त्यही कुराको वर्णन छ । उहाँले पटकपटक भन्नुभएको थियो :

(اللهم اغفر لقومى فانهم لا يعلمون)

हे अल्लाह ! मेरो जातिलाई माफ गरिदेऊ किनभने उसलाई केही थाहा छैन ।

काजी अयाजको शफा नामक किताबमा उल्लेख छ : हे अल्लाह ! मेरो जातिलाई मार्गदशन देखाऊ किनभने उसलाई केही थाहा छैन ।

बहुदेववादीहरूले उहाँको हत्या गर्न चाहेका थिए भन्ने कुरामा कुनै शंका छैन । तर उहाँको दुई जना कुरैशी साथी सअद विन अबी वक्कास र तलहा विन् उबैदुल्लाहले आश्चर्यजनक बलिदान र उदाहरणीय बहादुरीका साथ लडेपछि बहुदेववादीहरूको सफल कारवाहीलाई विफल तुल्याए । उनी दुवै जना अरबका सिपालु तीरबाजहरूमध्ये थिए । उनीहरूले तीर वर्षाएर बहुदेववादीहरूलाई मुहम्मदﷺदेखि टाढा भगाए ।

मुहम्मदﷺले सअद विन वक्कासलाई आफ्नो तर्कुसबाट सबै तीर निकाले चलाउन भन्नुभयो । तिमीमाथि मेरा आमा बुबा बलिदान होउन् ।[1] उनको महानतालाई यसरी पनि बुझ्न सकिन्छ, मुहम्मदﷺले उनीबाहेक कसैको लागि आफ्ना आमा बुबाको बलिदान होस् भन्नु भएन ।[2]

त्यसैगरी तलहाको बारेमा चर्चा गर्नु पर्दा उनको योगदानको अन्दाजा नेसई नामक हदिसको किताबबाट लगाउन सकिन्छ । जसमा जाबिरले मुहम्मदﷺमाथि बहुदेववादीहरूको आक्रमण बारे उल्लेख गरेका छन् । मुहम्मदﷺ अन्सारको सानो टोलीको साथमा हुँदाको अवस्था बारे जाबिरको बयान छ । बहुदेववादीहरू मुहम्मदﷺ नजिक आए । उहाँले भन्नुभयो, यिनीहरूको सामना कसले गर्छ ? तलहाले जवाफमा भने, मैले । जाबिरले अन्सारहरूले अगाडि बढेर एकएक गरी शहादत प्राप्त गरेको कुरा उल्लेख गरेका छन् । त्यसको विवरण सही मुस्लिम नामक किताबमार्फत उल्लेख भइसकेको छ । जाबिर भन्छन्, यी सबै शहिद भएपछि तलहा अगाडि बढे र एघार जनाको ठाउँमा एकलैले लडाइँ लडे । आफ्नै तरवारबाट आफ्नो हातमा चोट लागेर उनको औंलाहरू काटिए । त्यस्तो भएपछि उनको मुखबाट ऐया गरे जस्तो आवाज

१ सही बुखारी भाग १
२ सही बुखारी भाग १

निस्क्यो । मुहम्मदﷺले भन्नुभयो : यदि तिमीले अल्लाहको नाम लिएको भए फरिश्ताहरूले तिमीलाई उठाउँथे र मान्छेहरूले पनि त्यो दृश्य देख्न थिए । जाबिरको बयान छ, अल्लाहले फेरि बहुदेववादीहरूलाई पल्टाइदिए ।[१]

इक्लैलले हाकिममार्फत वर्णन गरेका छन्, उनलाई उहुदको दिन पैंतिसदेखि उन्चालीस वटा चोट लागेको थियो । उनको मझौला औँला र चोर औँला नष्ट भएको थियो ।[२]

इमाम बुखारीले कैस विन् अबी हाजिममार्फत वर्णन गरेका छन् , उनले भनेः मैले तलहाको हात नष्ट भएको अवस्थामा देखेँ । त्यसै हातबाट उनले उहुदको दिन मुहम्मदﷺलाई बचाएका थिए ।[३]

तिर्मिजी नामक हदिसको किताबमा वर्णन गरिएको छ । मुहम्मदﷺले त्यो दिन भन्नुभयो : जसले यस धर्तीमा हिँड्डुल गरेको कुनै शहिदलाई देख्न चाहन्छ भने तलहालाई हेरे हुन्छ ।[४]

अबु दाउद आइशामार्फत वर्णन गरेका छन् ,अबु बकरले त्यस युद्धबारे चर्चा गर्दा उनले भन्ने गर्थे : त्यो युद्ध पूर्णरूपमा तलहाको हातमा थियो ।[५] अर्थात त्यस युद्धमा मुहम्मदﷺको संरक्षणमा उनले ठूलो योगदान दिएका थिए । अबु बकरले उनको बारेमा यो कुरा पनि भने : हे तलहा विन उबैदुल्लाह तिम्रो लागि स्वर्ग अपरिहार्य भयो । तिमीले अपसराको बासस्थानमा आफ्नो ठेकाना बनायौ ।[६]

त्यस नाजुक तथा कठिन घडीमा अल्लाहले आफ्नो अदृश्य शक्तिबाट मदत गरे । बुखारी र मुस्लिममा सअदको बयान छ, उनी भन्छन् । उहुदको दिन मैले मुहम्मदﷺलाई हेर्दा उहाँसँग दुई जना मानिसहरू थिए । उनीहरू सेतो कपडा लगाई मुहम्मदﷺको तर्फबाट घमासान युद्ध गरिरहेका थिए । मैले उनीहरूलाई यसअघि कहिल्यै देखेको थिइनँ । एक अर्को हदिस अनुसार , उनीहरू अल्लाहको फरिश्ता जिब्रइल र मिकाइल थिए ।[७]

---

१ फतहुलबारी भाग ७, नेसई भाग २
२ फतहुलबारी भाग ७
३ सही बुखारी भाग १
४ तिर्मिजी हदिस नं ३७४०, इब्ने माजाको भूमिका हदिस नं १२५
५ फतहुलबारी भाग ७

६ मुख्तसर तारिख दिमश्क भाग ७
७ सही बुखारी भाग २, मुस्लिम भाग नं ४ हदिस नं ४६,४७

## मुहम्मदﷺ भएको ठाउँमा साथीहरूको जमघट सुरू

यी सम्पूर्ण घटनाक्रमहरू अचानक एवं तीव्रगतिमा एक छोटो अवधिमा भएका थिए । किनभने मुहम्मदﷺले पहिलो ताँतीमा लड्नको लागि नियुक्त गरेका साथीहरू उहाँमाथि कुनै दुर्घटना नहोस् भनेर युद्धको परिस्थिति मत्थर हुने वा मुहम्मदﷺको आवाज सुन्ने वित्तिकै उहाँतर्फ दौडे । तर उनीहरू त्यहाँ पुग्दा मुहम्मदﷺ घाइते भइसक्नु भएको थियो । ६ जना अन्सार साथीहरूले शहादत प्राप्त गरिसकेका थिए । सातौं व्यक्ति घाइते अवस्थामा थिए । सअदले र तलहाले ज्यानको बलिदान दिदै प्रतिकार गरिरहेका थिए । उनीहरू त्यहाँ पुग्ने वित्तिकै मुहम्मदﷺलाई आफ्नो शरीर तथा हतियारद्वारा छेकबार बनाइ सुरक्षा दिए । शत्रुका भीषण आक्रमण रोक्न उनीहरूले वीरतापूर्ण योगदान दिए । लडाइँको ताँतीबाट सबैभन्दा पहिला मुहम्मदﷺ भएको ठाउँमा आउने साथी उहाँका यारेगार अर्थात गुफाका साथी अबु बकर थिए ।

इब्ने हिबानले आफ्नो सही हदिसमा आइशामार्फत वर्णन गरेका छन् , अबु बकरले भने : उहुदको दिन सबै जना मुहम्मदﷺलाई छाडेर गए अर्थात केही सुरक्षा बलबाहेक सबै साथीहरू उहाँलाई उहाँको केन्द्रमा छाडेर लडाइँको लागि पहिलो ताँतीतिर गए । तर घेराउपछि सबैभन्दा पहिला म मुहम्मदﷺकहाँ आएँ । त्यहाँ मैले एक जनालाई देखें जो उहाँको तर्फबाट लड्दै थियो र उहाँलाई सुरक्षा दिइरहेको थियो । मैले मनमनै भनें, त्यो व्यक्ति तलहा भइदिए हुन्थ्यो । तिमीमाथि मेरा बुबा आमा बलिदान होउन् । के तिमी तलहा हौ ? तिमीमाथि मेरा बाबु आमाको बलिदान होउन् । मबाट त्यो अवसर गुमेको थियो । त्यसकारण मैले भनें, मेरो जातिबाट एक जना व्यक्ति भएको भए त्यो अति राम्रो हुने थियो ।[1] त्यति बेला नै अबु उबैदा विन जर्राह चरी उडे झै दौडेर आए र मलाई भेटे । हामी दुवै मुहम्मदﷺतर्फ दौड्यौं । उहाँको अगाडि तलहा ढलेको अवस्थामा थिए । उहाँले भन्नुभयो, आफ्नो साथीलाई सम्हाल । उसले आफ्नो लागि स्वर्ग अपरिहार्य गरिसकेको छ । अबु बकर भन्छन्, हामी त्यहाँ पुग्दा मुहम्मदﷺको अनुहारमा चोट लागेको देख्यौं । उहाँको दुईटा फलामे कडी उहाँको आँखा तल गडेको थियो । मैले त्यसलाई निकाल्न खोज्दा उबैदाले भने : मलाई निकाल्न दिनुहोस् । उनले मुहम्मदﷺलाई दुखाई नहोस् भनेर विस्तारै विस्तारै आफ्नो दाँतले त्यो कडी निकाल्न सुरु गरे । आखिरकार एउटा कडी निकाले । त्यो कडी निकाल्दा उनको तलको एउटा दाँत पनि भाँचियो । अर्को कडी मैले निकाल्न खोजें तर अबु उबैदा विन जर्राहले भने : मलाई निकाल्न दिनुहोस् । उनले अर्को कडी

१ तहजिब तारिख दिमश्क भाग ७, तलहा बिन उबैदुल्लाहको सम्बन्ध अबु बकरको कबिला बनु तमिमसँग थियो ।

निकाल्दा तलको अर्को दाँत पनि भाँचियो । मुहम्मदﷺले भन्नुभयोः आफ्नो भाई तलहालाई उठाऊ । उनले आफ्नो लागि स्वर्ग अपरिहार्य गरेका छन् । अबु बकर भन्छन् , हामी तलहानिर गएर उनलाई उठायौं । उनलाई १० वटा[१] चोट लागेको थियो । तहजिब तारिखे दिमश्क नामक किताबमा उल्लेख छ, हामी उनी भएको खाडलनिर आउँदा उनलाई भाला,तीर र तरवारको गरी ६० वटा चोट लागेको देख्यौं जसमा उनको औंला पनि काटिएको थियो । हामीले उनलाई केही राहत दियौं ।[२] ( उनले त्यो दिन प्रतिकार तथा युद्धको लागि कत्रो ज्यानको बाजी लगाए र कति निडर भई लडाइँ गरे भन्ने कुरा यस बाट पनि प्रष्ट हुन्छ )

त्यही संकट स्थितिमा ज्यानको आहुती दिने साथीहरूको एउटा समूह मुहम्मदﷺको वरिपरि आयो । उनीहरूको नाम यस प्रकार छ ।

अबु दुजाना ,मुस्अब विन उमैर, अली विन अबी तालिब, सहल विन हुनैफ, मालिक विन सिनान् , उम्मे इमारह नसिबा विन्त् कअब माजनिया, कतादाह विन नोअमान, उमर विन खत्ताब , हातिब विन अबी बल्ताअह र अबु तलहा

उनीहरू मुहम्मदﷺनिर कसरी पुगे भन्ने कुरा अलीको यस बयानबाट ज्ञात हुन्छ । उनी भन्छन् , उहुदको दिन उनीहरू मुहम्मदﷺदेखि भाग्दा मैले उहाँलाई मृतकहरूको माझमा देखें । तर मुहम्मदﷺ देखिएनन् । मैले मनमनै भने अल्लाहको कसम उहाँ कदापि भाग्नुहुन्न । उहाँ मृतकको माझमा देखिनु भएको छैन । त्यसैले हामीहरूको करतुतले गर्दा अल्लाह हामीसँग क्रोध भई उहाँलाई उठाए होलान् भन्ने मैले सोचें । फलत : मेरो अगाडि पनि लड्दालड्दै शहिद हुनुबाहेक अरु कुनै बाटो थिएन । मैले आफ्नो तरवारको खोल भाँचिदिएँ र वहुदेववादीहरूमाथि कडा आक्रमण गरें फलस्वरूप उनीहरूले त्यो ठाउँ छाडे । त्यसपछि मैले मुहम्मदﷺलाई उनीहरूको माझमा देखें ।[3]

## बहुदेववादीहरूको तर्फबाट थप दबाव

अर्को तर्फ बहुदेववादीहरूको संख्या पनि अलिअलि बढ्दै थियो । उनीहरूको तर्फबाट कडा आक्रमण भइरहेको थियो । उनीहरूको दबाव पनि बढ्दै थियो । त्यसले गर्दा उहाँ एउटा खाडलमा खस्नुभयो जुन खाडलहरू अबु आमिरले त्यसै उद्देश्यको निम्ति खनेको थियो । त्यहाँ उहाँको घुँडा मर्केको थियो । अलीले उहाँको हात समाते र तलहा जो स्वयम घाइते थिए उनले पनि उहाँलाई अगाडिबाट समाते । यसरी उहाँ सीधा उठ्नुभयो ।

---

१ जादुल मआद भाग २
२ तहजीब तारिख दिमश्क भाग ७
3 मुस्नद अबी याला भाग १ हदिस नं ५४६

नाफे विन जुबैर भन्छन्, मैले एक जना मुहाजिर साथीलाई भनेको सुनें : म उहुदको युद्धमा गएको थिएँ । चारैतिरबाट मुहम्मद ﷺ माथि तीरको वर्षा भइरहेको थियो । उहाँ वर्षिरहेको तीरको माझमा हुनुहुन्थ्यो । तर सबै तीर उहाँबाट फर्काइन्थ्यो अर्थात उहाँको अगाडि रहेका साथीहरूले ती तीरहरू रोक्थे । मैले अब्दुल्लाह विन शहाबलाई मुहम्मद ﷺ को ताकमा लागेको देखें । कि त अब म बाँच्छु कि उ । जब कि मुहम्मद ﷺ उ नजिकै हुनुहुन्थ्यो । उहाँको साथमा कोही पनि थिएन । फेरि ऊ उहाँको अगाडि गयो । उसलाई देखेर सफवान्ले उसलाई हप्कीदप्की गऱ्यो । जवाफमा उसले भन्यो : अरे, मैले उसलाई देख्नै सकिनँ । अल्लाहको कसम ऊ हामीबाट सुरक्षित गरिएको छ । त्यसपछि हामी चार जना अब्दुल्लाह विन शहाबको हत्या गर्ने बाचा गरेर निस्क्यौं तर हामी ऊ भएको ठाउँमा पुग्न सकेनौं ।[१]

## कर्तव्यनिष्ठ बलिदान

जेहोस् त्यो अवस्थामा मुसलमानहरूले जुन कर्तव्यनिष्ठताका साथ बलिदान दिए र जुन ठूलो योगदान दिए त्यसको उदाहरण इतिहासमा पाउन सकिदैन । अन्तत : अबु तलहा मुहम्मद ﷺ को साथमा एउटा शक्तिको रूपमा खडा भए । मुहम्मद ﷺ लाई शत्रुको तीरबाट सुरक्षित राख्नको लागि उनले आफ्नो छाती खोलिदिए । अनसको बयान छ, उहुदको दिन अन्य मुसलमानहरू मुहम्मद ﷺ भएको ठाउँमा आउनुको सट्टा पराजित भएर भागे तर अबु तलहा मुहम्मद ﷺ को अगाडि ढाल लिएर सिंह झैं उभिए । उनी तीर चलाउन सिपालु थिए । उनले तीर चलाउँदा बेसरी तानेर चलाउँथे । त्यसैले उनले त्यो दिन दुई वा तीन वटा तीर भाँचेका थिए । मुहम्मद ﷺ ले आफ्नो नजिकबाट कुनै साथीलाई तीर लिएर गएको देख्दा त्यो तीर अबु तलहालाई देउ भन्नुहुन्थ्यो । मुहम्मद ﷺ ले आफ्नो समुदायतिर आफ्नो टाउको उठाएर हेर्दा अबु तलहाले भन्थे : मेरा आमा बुबा तपाईंमाथि बलिदान होउन् । तपाईं आफ्नो टाउको ननिकाल्नुहोस् किनभने तपाईंलाई उनीहरूको तीर लाग्न सक्छ । मेरो छाती तपाईंको सुरक्षामा छ ।[२]

अनसले यो कुरा पनि भनेका छन्, अबु तलहाले मुहम्मद ﷺ लाई एउटै ढालले सुरक्षा दिइरहेका थिए । अबु तलहा तीर चलाउन सिपालु थिए । उनले तीर चलाउँदा मुहम्मद ﷺ ले उनको तीर कहाँ गएर खस्यो भनी हेर्नुहुन्थ्यो ।[३]

---

१ जादुल मआद भाग २
२ सही बुखारी भाग २
3 सही बुखारी भाग २

अबु दुजाना मुहम्मदﷺको अगाडि उभिएर आफ्नो पिठ्यूँलाई मुहम्मदﷺको निम्ति ढाल बनाइदिए । आफुमाथि तीर वर्षदाँ पनि उनी यताउता हटेनन् ।

हातिब विन अबी बल्ताअले उत्बा विन वक्कासको पिछा गरे । किनभने उसले मुहम्मदﷺको दाँत शहिद गरेको थियो । उनले ऊमाथि जोडले तरवार प्रहार गरी उसको टाउको काटी उसको घोडा र तरवार कब्जा गरे । सअद विन अबी वक्कासले आफ्नो भाइ उत्बाको हत्या गर्ने खुब चाहना गरेका थिए तर सफल हुन सकेनन् । त्यो सौभाग्य हातिबको भाग्यमा पऱ्यो ।

सहल विन हुनैफ पनि तीर चलाउन अति सिपालु थिए । उनले मृत्युलाई हत्केलामा लिएर बहुदेववादीहरूलाई यथाशिघ्र हटाए ।

मुहम्मदﷺले पनि तीर आफै चलाउनु हुन्थ्यो । कतादा विन नौमान भन्छन्, मुहम्मदﷺले आफ्नो झोलीको अत्यधिक तीर चलाउँदा उहाँको वाणको टुप्पो पनि भाँचिएको थियो । त्यो बाँड कतादाहले लिएर राखे । त्यो दिन कतादाको आँखामा चोट लागेकाले आँसु बगिरहेको थियो । मुहम्मदﷺले आफ्नो हातले त्यसलाई परेलाभित्र पसालिदिनुभयो । त्यसपछि उनको दुवै आँखामध्ये त्यो आँखा नै बढी सुन्दर देखिन थाल्यो र त्यसको दृष्टि पनि बढी तेज थियो ।

युद्ध गर्ने क्रममा अब्दुर्रहमान बिन औफको मुखमा चोट लाग्यो र उनको अगाडिको दाँत पनि भाँचियो । उनलाई बीस वा बीसभन्दा बढी चोट लागेको थियो । केही चोट खुट्टामा पनि लागेको थियो जसले गर्दा उनी खुट्टाका अपांगा भएका थिए ।

मुहम्मदﷺको अनुहारबाट निस्केको रगत अबु सइद खुदरीका बुबा मालिक बिन सिनान्ले चुसेर सफा गरेका थिए । उहाँले भन्नुभयो, त्यसलाई थुकिदेउ । उनले भने, अल्लाहको कसम त्यसलाई म थुक्दिनँ । त्यसपछि गएर उनी लड्न लागे । मुहम्मदﷺले भन्नुभयो, स्वर्गबासीलाई हेर्न चाहनेहरूले उनलाई हेरे हुन्छ । उनी लड्ने क्रममा शहिद भए ।

एक जना महिला उम्मे इमारह नसिबा विन्ते कअबले पनि एउटा आश्चर्यजनक योगदान दिइन् । उनी मुसलमानको साथमा लड्ने क्रममा इब्ने कुम्आको अगाडि उभिइन् । इब्ने कुम्आले उनको काँधमा तरवार हानेर घाइते बनायो । उनले पनि उमाथि कैयन पटक तरवार प्रहार गरिन् । तर त्यो दुर्जनले दुई वटा ढाल लगाएको थियो जसले गर्दा ऊ बच्यो । उनले लड्ने क्रममा बाह्र वटा चोट खाइन् ।

मुस्अब विन उमैरले पनि बहादुरीका साथ युद्ध गरे । उनले मुहम्मदﷺको तर्फबाट इब्ने कुम्आ र उसको साथीहरूबाट भएको निरन्तर आक्रमणको प्रतिकार गरिरहे । उनको हातमा इस्लामी लस्करको झण्डा थियो । अत्याचारी दुस्मनहरूले उनको दाहिने हातमा जोडले तरवार हान्दा उनको हात नै काटियो । त्यसपछि उनले देब्रे हातमा झण्डा लिए र नास्तिकहरूको सामुने डटे । अन्तिममा उनको देब्रे हात

पनि काटियो । त्यसपछि उनले घुँडाले टेकी छाति र घाँटीको भरमा झण्डा फरफराए । त्यै अवस्थामा उनले शहादत प्राप्त गरेका थिए । उनको हत्यारा इब्ने कुम्म थियो । उसले उनलाई मुहम्मदﷺ सम्झेको थियो । किनभने उनको रूपरंग मुहम्मदﷺसँग मिल्दोजुल्दो थियो । तसर्थ उसले मुस्अब विन उमैरलाई शहिद गरी आफ्नो समूह कुरैशतर्फ गएर मुहम्मदﷺको हत्या भयो भनी हल्ला गर्‍यो ।[1]

## मुहम्मदﷺको शहादतको झूटो खबर र युद्धमा त्यसको प्रभाव

उसले दिएको सूचनाले मुसलमान र बहुदेववादी सबैतिर मुहम्मदﷺको शहादतको खबर फैलियो । त्यो अति नाजुक घडी थियो । त्यसबाट मुहम्मदﷺदेखि टाडा दुस्मनको नियन्त्रणमा रहेका मुसलमानहरूको हौसला टुट्यो । उनीहरूको साहस नै सेलायो । उनीहरूको ताँतीभित्र खलबली मच्चियो र उनीहरूमा भागदौड मच्चियो । तर मुहम्मदﷺको शहादतको खबरबाट एउटा फाइदा के भयो भने त्यो खबरपछि बहुदेववादीहरूको जोसिलो आक्रमणमा केही कमी आयो । किनभने उनीहरूले आफ्नो अन्तिम लक्ष्य पूरा भयो भन्ने ठाने । त्यसपछि अधिकांश बहुदेववादीहरूले आक्रमण बन्द गरी मुसलमान शहिदहरूको लास चिरफार गर्न थाले ।

## मुहम्मदﷺद्वारा निरन्तर संघर्ष र परिस्थितिमाथि नियन्त्रण

मुस्अब विन उमैरको शहादतपछि मुहम्मदﷺले झण्डा अली विन अबी तालिबलाई दिनुभयो । उनले डटेर युद्ध गरे । त्यहाँ भएको अन्य साथीहरूले पनि ज्यानको बाजी लगाई आफ्नो टाउको कटाउने भावनाका साथ प्रतिकार एवं युद्ध गरे । आखिरकार त्यसबाट मुहम्मदﷺको निम्ति बहुदेववादीको ताँतीलाई चिरदै उनीहरूको नियन्त्रणमा रहेका मुसलमानसम्म पुग्ने बाटो बनाउने सम्भावना देखियो । तसर्थ उहाँले आफ्नो कदम चाल्नुभयो र साथीहरूतर्फ जानुभयो । सबैभन्दा पहिला कअब् विन् मालिकले उहाँलाई चिने । प्रसन्नताले प्रफुल्ल भई चिच्याए । हे ! मुसलमान साथी हो खुसी होऊ । यहाँ छन् मुहम्मदﷺ ! उहाँले चुप हुन भन्नुभयो ताकि वहुदेववादीहरूलाई उहाँको र उहाँ भएको ठाउँको पत्ता लाग्न नसकोस् । उनको आवाज मुसलमानहरूको कानमा पुगिसकेको थियो तसर्थ मुसलमानहरू उहाँतर्फ आउन थाले र विस्तारै विस्तारै तीस जना साथीहरू जम्मा भए ।

त्यति संख्या जम्मा भएपछि मुहम्मदﷺ पहाडको घाटी अर्थात आफ्नो केम्पतर्फ लाग्नुभयो । त्यस वापसीको उद्देश्य बहुदेववादीहरूले मुसलमानलाई नियन्त्रणमा लिने जुन कारवाही गरेका थिए त्यसलाई विफल पार्नु थियो । उता

---

१ इब्ने हेशाम भाग २, जादुल मआद भाग २

बहुदेववादीहरूले त्यस वापसीलाई विफल तुल्याउन तीव्र आक्रमण जारी राखेका थिए तर मुहम्मदﷺले ती आक्रमणकारीको भिडलाई चिर्दै बाटो बनाउनुभयो । यसरी इस्लामी वीरहरूको वीरता र शक्तिको अगाडि उनीहरूको केही चलेन । त्यसैबीच बहुदेववादीहरूको एक जना अडिएल घोडसवार उस्मान विन अब्दुल्लाह विन मुगिरह कि त म बाँच्ने छु कि ऊ भन्दै मुहम्मदﷺतिर बढ्यो । उता मुहम्मदﷺ पनि प्रतिकार गर्न तयार रहनुभयो । तर भिडन्त हुन सकेन । किनभने उसको घोडा एउटा खाल्डोमा खस्यो । त्यतिकैमा हारिस विन समाले ऊ खसेको ठाउँमा गएर उसलाई बोलाए र उसको खुट्टामा तरवार हानेर त्यहीँ ढलाइदिए साथै उसलाई सिद्धयाइ उसको हतियार लिएर मुहम्मदﷺको सेवामा उपस्थित भए । त्यतिखेरै मक्की फौजको एक अर्को सवारले फर्केर हारिसा विन समामाथि आक्रमण गर्‍यो । उनको पिठ्युँमा चोट लाग्यो । मुसलमानहरूले अगाडि बढेर उनलाई उठाए । उता खतरासँग जुध्न आफ्नो टाउकोमा लाल पट्टी बाँधेका मुजाहिद अबु दुजाना अब्दुल्लाह विन जाबिरमाथि झम्टे र तरवार हानेर उसको टाउको तनदेखि अलग गरिदिए ।

अल्लाहको चमत्कार हेर्नुहोस् ! त्यस्तो काटमारको अवस्थामा पनि मुसलमानलाई निद्रा लागेको थियो । कुरआनले पनि त्यस बारे वर्णन गरेको छ : अल्लाहको तर्फबाट प्रदान गरिएको अमन चैन थियो त्यो । अबु तलहा भन्छन्, म पनि उहुदको दिन निदाउनेहरूमध्ये एक थिएँ । म यति निदाएँ कि मेरो हातबाट तरवार नै खस्यो । निन्द्राले गर्दा तरवार खस्ने र बिउँझदा उठाउने जस्तो ।[१]

त्यस किसिमको बलिदानबाट यो दस्ता युद्धरणनीति अपनाउँदै पछाडि गएर पहाडको घाटीमा अवस्थित केम्पसम्म पुग्यो र बाँकी दस्ताको लागि पनि त्यस केम्पसम्म जाने बाटो बनायो । यसरी बाँकी लस्कर पनि मुहम्मदﷺकहाँ आयो र खालिद विन वलिदको सैन्य रणनीति मुहम्मदﷺको अगाडि विफल भयो ।

## उबै बिन खलफको हत्या

इब्ने इसहाकको बयान छ, मुहम्मदﷺ घाटीमा आइसकेपछि अबी विन खलफ मुहम्मदﷺ कहाँ छ भन्दै आयो । कि त म बाँच्छु कि ऊ । साथीहरूले मुहम्मदﷺसँग सोधे, के हामीमध्ये कसैले ऊमाथि आक्रमण गरिदिउँ ? मुहम्मदﷺले भन्नुभयो उसलाई आउन देऊ । ऊ नजिक आइसकेपछि मुहम्मदﷺ ले हारिस विन समासँग एउटा भाला लिनुभयो । त्यो भाला लिएर एक झटका हान्दा मानिसहरू उँटले आफ्नो शरीर जिरिंग गर्दा झिंगा उडे झैँ यताउता तितरवितर भए । त्यसपछि उहाँ उसको आमुन्नेसामुन्ने जानुभयो । उसले घाँटीमा लगाएको ढाल अलिकति प्वाल

---

१ सही बुखारी भाग २

देखियो । उहाँले त्यसलाई निशाना बनाएर भाला हान्नुभयो जसले गर्दा ऊ घोडाबाट कैयन बल्ड्याङ्ग खाँदै कुरैश भएतिर गयो । जब कि उसको घाँटीमा त्यति ठूलो चोट लागेको थिएन । केवल रगत जमेको थियो । रगत बगेको थिएन । उसले भन्न थाल्यो : अल्लाहको कसम मुहम्मदले मलाई माऱ्यो । मानिसहरूले भने अल्लाहको कसम केवल तिम्रो मन डराएको हो तिमीलाई खासै चोट लागेको छैन । उसले भन्यो, मुहम्मदले मक्कामा मसँग मेरो हत्या गर्छु भनेको थियो ।[१] यदि मुहम्मदले मलाई थुकिदिएको मात्र भए पनि म मर्ने थिएँ । अन्तिममा अल्लाहको त्यो शत्रुले मक्का फर्कदा सरिफ नामक ठाउँमा पुगेर जिब्रो टोक्यो ।[२] अबुल अस्वदले उरवामार्फत बयान गरेका छन् , उसले गोरुको जस्तो स्वरले कराउँदै भन्यो त्यो जातको कसम जसको हातमा मेरो जिन्दगी छ जुन पीडा मलाई भएको छ यदि त्यो पीडा जिल मजाजका सबै वासीहरूलाई भएको भए सबै मर्ने थिए ।[३]

## तलहा मुहम्मदﷺलाई उठाउँदै

मुहम्मदﷺ पहाडतिर वापस हुँदा बीचमा एउटा ढुंगा पऱ्यो । उहाँले त्यो ढुंगामा चढ्ने प्रयास गर्नुभयो तर चड्न सक्नुभएन । किनभने एक त उहाँको ज्यान गह्रौं तथा थाकेको थियो अर्को कुरा उहाँले दुई वटा ढाल लगाउनु भएको थियो र उहाँलाई ठूलो चोट पनि लागेको थियो । तसर्थ तलहाले उहाँलाई बोकेर उठाए । यसरी उहाँ ढुंगामाथि चढ्नुभयो । उहाँले भन्नुभयो, तलहाले आफ्नो लागि स्वर्ग अनिवार्य गरे ।[४]

## बहुदेववादीहरूको अन्तिम आक्रमण

मुहम्मदﷺ घाटीभित्रको आफ्नो नेतृत्वकेन्द्रमा पुगेपछि बहुदेववादीहरूले मुसलमानलाई दुःख दिने अन्तिम प्रयास गरे । इब्ने इसहाकको वयान छ , त्यस दौरान मुहम्मदﷺ घाटीभित्र बसिरहनु भएको थियो । अबु सुफ्यान र खालिद विन वलिदको दस्ता माथि चढ्यो । मुहम्मदﷺले त्यो दस्ता आफुभन्दा माथि नजाओस्

---

१ घटना यस प्रकार छ : उबैको भेट मुहम्मदﷺसँग भएपछि उसले उहाँसँग भन्यो :हे मुहम्मद, मसँग औद नामी एउटा घोडा छ । मैले उसलाई दैनिक साढे सात किलो गहुँ खुवाउँछु । त्यसमाथि सवार भएर तिम्रो हत्या गर्नेछु । अल्लाहका संदेष्टाले भन्नुभयो यदि अल्लाहले चाह्यो भने मैले नै तिम्रो हत्या गर्नेछु ।
२ इब्ने हेशाम भाग २, जादुल मआद भाग २

3 मुस्तद्रक हाकिम भाग २

४ इब्ने हेशाम भाग २ , तिर्मिजी हदिस नं १६९२, ३७३९, मुस्नद भाग १, हाकिमले यसलाई सही मानेका छन् । जहबीले समर्थन गरेका छन् ।

भनी अल्लाहसँग प्रार्थना गर्नुभयो । त्यसपछि उमर बिन खत्ताब र मुहाजिरहरूको एक जमातले आक्रमण गरी उनीहरूलाई पहाडदेखि तल झारिदिए ।[१]

मगाजी उमवीको बयान छ, बहुदेववादीहरू पहाडमा चढेपछि मुहम्मदﷺ ले सअदलाई भन्नुभयो, उनीहरूको हिम्मतलाई तोडिदेऊ । अर्थात उनीहरूलाई पछाडि लखेट । उनले भने, म एकलैले उनीहरूको हौसला कसरी तोडुँ । त्यसपछि मुहम्मदﷺले तीन चोटि त्यही कुरा दोहोऱ्यानुभयो । अन्ततः सअदले आफ्नो तीरको झोलीबाट एउटा तीर निकाली एक जनालाई हानेपछि ऊ त्यहीँ ढल्यो । सअद भन्छन्, मैले फेरि छानेर एउटा तीर लिएँ । मैले त्यो एक अर्को व्यक्तिमाथि प्रहार गरेँ र उसको काम पनि सिद्ध्याइदिएँ । त्यसपछि फेरि एक अर्को तीर छानेर लिएँ । मैले त्यो तीर तेस्रो व्यक्तिमाथि हानेँ त्यो पनि मर्न लाग्यो । त्यसपछि बहुदेववादीहरू तल झरे । मैले भनेँ, यो पवित्र तीर हो । मैले त्यसलाई आफ्नो झोलीमा राखेँ । त्यो तीर जीवनभर सअदको साथमा रह्यो र त्यसपछि उनको सन्तानसँग रह्यो ।[२]

## शहिदहरूको अङ्गच्छेद

त्यो अन्तिम आक्रमण थियो जुन बहुदेववादीहरूले मुहम्मदﷺको विरुद्धमा गरेका थिए । उनीहरूलाई मुहम्मदﷺको हालखबर बारे थाहा नै थिएन । उनीहरूलाई मुहम्मदﷺ शहिद भइसकेका छन् भन्ने कुरामा विश्वास थियो । त्यसैले उनीहरू आफ्नो केम्पमा फर्केर मक्कातिर जान थाले । केही बहुदेववादी पुरुष र महिलाहरू मुस्लिम शहिदहरूको अङ्गच्छेद गर्नमा लिप्त भए । अर्थात शहिदहरूको गुप्तांग तथा नाक कान आदि काटे, पेट चिरे । हिन्दा बिन्ते उत्बाले हमजाको कलेजा निकालेर चपाई । उसले निल्न खोजी तर निल्न नसकेर थुकिदिई । काटिएका कान नाकको पाउजेब तथा गहना बनाई ।[३]

## अन्तिम चरणसम्म युद्ध गर्न मुसलमानको तयारी

अन्तिम समयमा घटेको दुई वटा घटनाबाट वीर मुसलमानहरू अन्तिम चरणसम्म युद्ध लड्न कतिका तयार थिए र अल्लाहको मार्गमा आफ्नो बलिदान दिन उनीहरूमा साहसी भावना कतिको थियो भन्ने कुरा प्रस्ट हुन्छ ।

१ कअब् बिन मालिक भन्छन्, घाटीबाट बाहिर आएका मुसलमानहरूमध्ये म पनि एक थिएँ । बहुदेववादीहरूले मुस्लिम शहिदहरूको नाककान काटेको देखेर अडिएँ । अँझै अगाडि बढेँ । गह्रौं युद्धवस्त्र लगाएको एक जना बहुदेववादीलाई देखेँ । ऊ

---

१ इब्ने हेशाम भाग २
२ जादुल मआद भाग २
3 इब्ने हेशाम भाग २

शहिदहरूको माझबाट हिँडिरहेको थियो । उसले भन्दै थियो, उनीहरू वध गरिएका बाखा झैँ ढलेका छन् । एक जना मुस्लिमले उसको बाटो हेरिरहेका थिए । उनले पनि युद्धवस्त्र लगाएका थिए । म केही पाइला अगाडि बढेँ । बहुदेववादी र मुस्लिमलाई हेरिरहेँ । बहुदेववादी शारीरिक र हतियार दुवै हैसियतमा बलियो देखियो । मैले दुवैलाई हेरिरहेँ । अन्तिममा दुवैबीच लडाइँ भयो र मुस्लिम व्यक्तिले बहुदेववादीलाई तरवार हानेर खुट्टासमेत काटिदिए र वहुदेववादी दुई टुक्रा भई भूईँमा ढल्यो । मुस्लिम व्यक्तिले आफ्नो अनुहार खोलेर मसँग भन्यो, हे ! कअब् कस्तो लाग्यो ? म अबु दुजाना हुँ । [१]

२ युद्ध समाप्त भएपछि केही मुस्लिम महिलाहरू जिहादको मैदानमा पुगिन् । अनस्को बयान छ, मैले आइशा र उम्मे सुलैमलाई खुट्टाको पायलभन्दा माथि कपडा उठाएर आफ्नो पिठ्युँमा सुगन्ध बोकेर समुदायको चेहरामा छरिरहेको देखेँ ।[२] उमरको बयान छ, उहुदको दिन उम्मे सुलैमले हाम्रो लागि सुगन्ध भरेर ल्याउने गर्थिन् ।[३]

ती महिलाहरूमा उम्मे ऐमन पनि थिइन् । पराजित भएका मुसलमानहरू मदिनामा घुस्न लाग्दा उनले उनीहरूको अनुहारमा धुलो फ्याँकेर भनिन् , चुरा तिमीहरू लगाऊ तरवार हामीलाई देऊ ।[४] त्यसपछि तीव्रगतिमा युद्धको मैदानमा पुगिन् र घाइतेहरूलाई पानी पिलाउन लागिन् । हिबान विन अरकाले उनीमाथि तीर हान्यो जसले गर्दा उनी ढलिन् र उनको पर्दा खुल्यो । त्यो देखेर अल्लाहको शत्रु जोडले हाँस्यो । मुहम्मदﷺलाई त्यो कुरा अति नराम्रो लाग्यो । उहाँले सअद बिन अबु वक्कासलाई एउटा बुच्चो तीर दिएर भन्नुभयो, यो तीर ऊमाथि चलाऊ । सअदले तीर चलाए र त्यो तीर गएर हिबानको घाँटीमा लाग्यो । ऊ उत्तानो ढल्यो । त्यो देखेर मुहम्मदﷺ पनि खुब हाँस्नुभयो र हाँस्दा उनको गिँजाको दाँत पनि देखियो । उहाँले भन्नुभयो , सअदले उम्मे ऐमनको बदला लिए । अल्लाहले उनको प्रार्थना स्वीकारून् ।[५]

## राहतपछि उपत्यकामा

मुहम्मदﷺलाई घाटीभित्र आफु बसेको ठाउँमा केही राहत मिलेपछि अलीले महरासबाट आफ्नो ढालमा पानी भरेर ल्याए । महरास ढुंगामा बनेको खाडल थियो

---

१ अल बेदाया व नेहाया भाग ४
२ सही बुखारी भाग १
३ सही बुखारी भाग १
४ चुरा लगाउनु अरब महिलाको विशेषता थियो । यस अवसरमा यो उखानको अर्थ हाम्रो भाषामा चुरा लगाऊ र तरवार देऊ भन्ने हुन्छ ।
५ सिरत हलबीया भाग २

जसमा पानी जम्मा हुन्थ्यो भन्ने एउटा भनाई छ भने उहुदमा अवस्थित पानीको एउटा मूलको नाम हो भन्ने अर्को भनाई पनि छ । जेहोस् अलीले त्यो पानी मुहम्मदﷺको निम्ति ल्याए । उहाँलाई पानीमा दुर्गन्ध रहेको महसुस भयो । त्यसकारण उहाँले पानी पिउनु भएन तर उहाँले त्यसबाट आफ्नो अनुहारको रगत पखाल्नुभयो र टाउकोमा पनि हाल्नुभयो । त्यति बेला उहाँले भन्नु भएको थियो : त्यो व्यक्तिमाथि अल्लाहको दण्ड होस् जसले अल्लाहका दूतको अनुहारलाई रगताम्यै बनाएको छ ।[१] सहल भन्छन्, मुहम्मदﷺको अनुहार कसले धोयो, पानी कसले हाल्यो र उहाँको उपचार कसले गऱ्यो भन्ने कुरा मलाई थाहा छ । उहाँकी छोरी फातिमाले उहाँको अनुहार धोइन्, अलीले आफ्नो ढालबाट पानी हालिरहेका थिए । पानीले पखाल्दा उहाँको रगत झन् बग्न लागेपछि फातिमाले गुन्द्रीको एउटा टुक्रा लिइन् र जलाएर लगाइदिइन् त्यसपछि रगत बग्न बन्द भयो ।[२]

मुहम्मद बिन मुसैलेमाले सफा एवं सुग्घर पानी ल्याए । मुहम्मदﷺले त्यो पानी पिएर उनको हकमा प्रार्थना गर्नुभयो ।[३] चोट लागेको कारण मुहम्मदﷺले जोहरको नमाज बसेर पढ्नुभयो । साथीहरूले पनि उहाँको पछाडि बसेरै नमाज पढे ।[४]

## अबु सुफ्यानको सराप र उमरसँग भनाभन

बहुदेववादीहरूले वापस फर्कने पूर्ण तयारी गरेपछि अबु सुफ्यान उहुदको पहाडमा चढेर चिच्याएर भन्यो : के तिमीहरूसँग मुहम्मद पनि छन् ? मुस्लिमहरूले कुनै जवाफ दिएनन् । उसले फेरि सोध्यो, के तिमीहरूसँग अबु बकर छन् ? त्यसमा पनि मुस्लिमहरूले कुनै जवाफ दिएनन् । उसले फेरि सोध्यो, के तिमीहरूको बीचमा उमर छन् ? त्यस पटक पनि उनीहरूले कुनै जवाफ दिएनन् । किनभने मुहम्मदﷺले जवाफ दिन निषेध गर्नु भएको थियो । अबु सुफ्यानले ती तीन जनाबाहेक अरूको बारेमा सोधेन । किनभने उसलाई र उसको जातिलाई इस्लाम उनै तीन जनामा टिकेको छ भन्ने कुरा थाहा थियो । कुनै जवाफ नपाएपछि उसले भन्यो, हिँड, अब ती तीन जनाबाट छुट्टी पाइयो । त्यो कुरा सुन्ना साथ उमरले आवेशमा आएर भने : हे अल्लाहको शत्रु ! जसको तिमीले नाम लिएको थियौ सबै जीवितै छन् । अल्लाहले तिम्रो अपमान गर्ने शक्ति बाँकी नै राखेका छन् । अबु सुफ्यानले भन्यो, तिम्रो मृतकहरूको नाककान काटिएको छ । तर त्यसो गर्ने आदेश मैले दिएको होइन र

१ इब्ने हेशाम भाग २
२ सही बुखारी भाग २
३ सिरत हलबीया भाग २
४ इब्ने हेशाम भाग २

त्यसो गर्नेहरूलाई मैले नराम्रो पनि भनेको छैन । त्यसपछि उसले हुबल जिन्दावाद भन्दै नारा लगायो ।

मुहम्मदﷺले भन्नुभयो, तिमीहरूले पनि त्यसको जवाफ देऊ । साथीहरूले सोधे के जवाफ दिने ? उहाँले भन्नुभयो, अल्लाह जिन्दावाद ! भन ।

अबु सुफ्यानले फेरि नारा लगायो, हाम्रा लागि उज्जा छन् तर तिम्रा लागि कोही छैन । मुहम्मदﷺले जवाफ दिन भन्नुभयो । साथीहरूले सोधे के जवाफ दिने ? उहाँले भन्नुभयो, हाम्रो लागि अल्लाह सहयोगी छन् तर तिम्रो कोही छैन ।

अबु सुफ्यानले भन्यो, आजको योगदान निकै राम्रो रहयो ! आजको दिन बदरको दिनको बदला हो र आज बल्ल युद्ध बराबर भयो ।[१]

उमरले भने : कसरी बराबर हुनु । हाम्रा मृतकहरू त स्वर्गमा छन् तर तिम्रा मृतकहरू नर्कमा ।

अबु सुफ्यानले भन्यो, उमर मेरो नजिक आऊ । मुहम्मदﷺले भन्नुभयो, जाऊ त, के भन्दो रहेछ । उनी उसको नजिक गए अनि उसले सोध्यो : के हामीले मुहम्मदको हत्या गरिदिएका छौँ ? उनले भने, गरेका छैनौ । उहाँले यतिबेला तिम्रो कुरा सुनिरहनु भएको छ । अबु सुफायनले भन्यो : तिमी इब्ने कुम्आभन्दा पनि बढी साँचो र इमानदार छौ ।[२]

## बदरको मैदानमा एक अर्को लडाइँ लड्ने सम्झौता

इब्ने इसहाकको बयान छ, अबु सुफ्यान र उसको साथी वापस हुँदा अबु सुफ्यानले भनेको थियो : आगामी वर्ष फेरि बदरमा लड्ने बचन दिन्छु । मुहम्मदﷺले एक जना साथीलाई भन्न पठाउनुभयो, हुन्छ भन । अब त्यो कुरा हामी र तिमीहरूबीच तय भयो ।[३]

## बहुदेववादीको विचार बारे अनुसन्धान

मुहम्मदﷺले अलीसँग भन्नुभयो, बहुदेववादीहरूको पछिपछि जाऊ । उनीहरूले के गरिरहेका छन् ? उनीहरूको सोच के छ बुझ । यदि तिनीहरूले उँटमा सवार भई घोडालाई हिँडाएका छन् भने उनीहरूले मक्का जाने विचार गरेका छन् भन्ने बुझ यदि घोडामाथि सवार भई उँटलाई हिँडाएका छन् भने उनीहरूको विचार मदिना जानेछ भन्ने बुझ । उहाँले भन्नुभयो, यदि उनीहरूले मदिना जाने सोच गरेका छन् भने म मदिना गएर उनीहरूसँग लड्ने छु । अली भन्छन्, त्यसपछि म उनीहरूको

---

१ कहिले एक पक्ष प्रबल हुन्थ्यो कहिले अर्को पक्ष अर्थात बाल्टीन तानातान गरे झैं हुनु ।
२ इब्ने हेशाम भाग २ , जादुल मआद भाग २, सही बुखारी भाग २
3 इब्ने हेशाम भाग २

पछिपछि गएँ । उनीहरूले उँटमाथि सवार भई घोडालाई हिँडाएर मक्कातिर लागेको देखेँ ।[१]

## शहिद र घाइतेहरूको खोजी

कुरैश वापस भएपछि मुसलमानहरूले आफ्ना शहिद र घाइतेहरूको खोजी गर्ने फुर्सत पाए । जैद विन साबित भन्छन्, उहुदको दिन मुहम्मदﷺले मलाई सअद विन रबिअको खोजी गर्न र भेटिए आफ्नो सलाम भन्न पठाउनुभयो । साथै त्यस अवस्थामा आफुलाई कस्तो अनुभव भइरहेको छ भनी सोध्न पनि भन्नुभयो । जैद विन सावित भन्छन् , म मृतकहरूलाई हेर्दै उनी भएको ठाउँमा पुगेँ । उनी आफ्नो जीवनको अन्तिम क्षणमा थिए । उनलाई भाला, तरवार र तीरबाट ७० भन्दा बढी चोट लागेको थियो । मैले भनेँ : हे सअद, ईशदूतले सलाम भन्नुभएको छ र तपाईँलाई कस्तो छ भनी सोध्नुभएको छ । उनले जवाफ दिए, मुहम्मदﷺलाई मेरो सलाम भन्नु र मैले स्वर्गको सुगन्ध पाइरहेको कुरा सुनाउनु । मेरो समुदायका अन्सारसँग भन्नु, तिमीहरूमध्ये कसैको पनि प्राण रहुन्जेल मुहम्मदﷺलाई शत्रुद्वारा दुःख दिइयो भने तिमीहरूले अल्लाहकहाँ कुनै बहाना गर्न पाउने छैनौ । त्यति भन्दै उनको प्राण निस्क्यो ।[२]

मुसलमानहरूले आफ्ना घाइतेमध्ये उसैरमलाई पनि भेटाए । उसको नाम अमर बिन सावित थियो । उसमा पनि अलिकति प्राण बाँकी थियो । पहिला उसलाई इस्लामको निम्तो दिइएको थियो तर उसले स्वीकारेन । सहाबीहरूले आश्चर्य भावमा सोधे । उसैरम, तिमी यहाँ कसरी आयौ ? हामीले उनलाई अधर्मी होला भनेर छोडिदियौँ । उनीसँग फेरि सोधियो, तिमीलाई यहाँ केका लागि आएका हौँ ? जातीयका कारणले वा इस्लामका कारणले ? उनले भने : इस्लामका कारण । वास्तवमा मैले अल्लाह र ईशदूतमाथि विश्वास गरेँ त्यसपछि ईशदूतको सहयोगको लागि म यहाँ आएको हुँ । यहाँ मलाई जे भएको छ त्यो तपाईँहरूको सामुन्ने छ । त्यति भन्दै उनको पनि मृत्यु भयो । सहाबीहरूले मुहम्मदﷺसँग उनको बारेमा चर्चा गर्दा उहाँले भन्नुभयोः उनी स्वर्गवासीहरूमध्ये एक हुन् । अबु हुरैराह भन्छन्, उनले एक वखतको पनि नमाज पढ्न पाएका थिएनन् ।[३] किनभने इस्लाम स्वीकारेपछि नमाजको समय हुनुभन्दा पहिला नै उनी युद्धमा शहिद भएका थिए ।

---

१ इब्ने हेशाम भाग २, फतहुलबारीमा उल्लेख छ : बहुदेववादीहरुको गतिविधि पत्ता लगाउन सअद विन अबी वक्कास गएका थिए ।

२ जादुल मआद भाग २

3 जादुल मआद भाग २, इब्ने हेशाम भाग २

घाइतेहरूमध्ये एक जना कजमान नामक व्यक्ति पनि भेटियो । उसले युद्धमा खुब वीरता देखाएको थियो । ऊ एकलैले सात आठ जना बहुदेववादीहरूलाई मृत्युको घाटमा उतारेको थियो । ऊ चोटका कारण अलापविलाप गरेको अवस्थामा भेटियो । सहाबीहरूले उसलाई उठाएर बनु जफरको वस्तीमा लिएर गए । सहाबीहरूले उसलाई शुभकामना दिन लाग्दा उसले भन्यो,म त केवल आफ्नो जातिको इज्जतको लागि लडेको थिएँ । त्यो कुरा नभएको भए मैले लडाइँ नै गर्दैन थिएँ । जब उसको चोट ज्यादै दुख्न थाल्यो अनि चोटको दुखाइ सहन नसकी उसले आफुलाई काटेर आत्महत्या गऱ्यो । उता मुहम्मदﷺसँग उसको बारेमा चर्चा गर्दा उहाँले ऊ नर्कवासी हो भनेर भन्नुभयो ।[१] त्यस घटनाले उहाँको भविष्यवाणीलाई पनि सही प्रमाणित गऱ्यो । वास्तवमा अल्लाहको मार्गबाहेक आफ्नो देश वा अन्य कुनै मार्गको लागि लड्नेको परिणाम त्यस्तै हुँदोरहेछ । चाहे ऊ इस्लामको झण्डामुनि मुहम्मदﷺ र उनका साथीहरूको साथमा नै किन नहोस् ।

त्यस अतिरिक्त मृतकहरूमा बनु सअलबाको एक जना यहुदी पनि थियो । युद्धको बादल गर्जन लाग्दा उसले आफ्नो जातिसँग भनेको थियो : हे ! यहुदी जमात अल्लाहको कसम मुहम्मदﷺलाई मदत गर्नु तिमीहरूमाथि अनिवार्य छ । यहुदीहरूले भने, तर आज त शनिबारको दिन हो । उसले भन्यो तिमीहरूको लागि कुनै सब्त अर्थात शनिबार छैन । त्यसपछि उसले आफ्नो तरवार तथा सामान लिएर भन्यो यदि म मारिएँ भने मेरो सबै माल मुहम्मदﷺको लागि हुनेछ । उहाँले आफ्नो इच्छा अनुसार यसलाई खर्च गर्नु हुनेछ । त्यसपछि ऊ युद्धको मैदानमा गयो र लड्दालड्दै मऱ्यो । मुहम्मदﷺले भन्नुभयो मुखैयरिक अति राम्रो यहुदी थियो ।[२]

## शहिदहरूको कफनदफन

त्यस अवसरमा मुहम्मदﷺ स्वयमले शहिदरूको निरिक्षण गर्नुभयो । उहाँले भन्नुभयो, म यिनीहरूको हकमा साक्षी बन्नेछु । किनभने व्यक्ति अल्लाहको मार्गमा घाइत बनाइन्छ महाप्रलयको दिन उसलाई अल्लाहले उसको चोटबाट रगत बगिरहेको अवस्थामा उठाउने छन् । रंग रातो हुनेछ तर सुगन्ध मृगको जस्तो हुनेछ ।[3]

केही सहाबीहरूले आफ्ना शहिदहरूलाई मदिना लगेका थिए । मुहम्मदﷺले उनीहरूलाई फिर्ता लगेर उनीहरू शहिद भएको ठाउँमा दफन गर्न आदेश दिनुभयो । साथै उनीहरूले लगाएको हतियार तथा युद्धवस्त्र उतार्ने र स्नान नगराई जुन

१ जादुल मआद भाग २, इब्ने हेशाम भाग २
२ इब्ने हेशाम भाग २
3 इब्ने हेशाम भाग २

हालतमा छन् त्यही हालतमा कबरिस्तानमा दफन गर्ने निर्देशन दिनुभयो । उहाँले दुई दुई तीन तीन जनालाई एउटै कबरिस्तानमा दफन गर्नुभयो । दुई दुई जनालाई एउटै कपडामा एकसाथ राखेर कफन लगाइयो । उनीहरूमध्ये कसले कुरआन कण्ठ गरेको थियो भनी उहाँले सोध्नुभयो । सहाबीहरूले जसको तर्फ इशारा गर्थे उहाँले उसलाई लहद आकारको कबरिस्तान अगाडि राख्नुभयो र उनीहरूको लागि म महाप्रलयको दिन साक्षी दिने छु भनेर भन्नुभयो ।[1] अब्दुल्लाह बिन अमर बिन हराम र अमर बिन जमुहलाई एउटै कबरिस्तानमा दफनाइएको थियो । किनभने उनीहरूको बीचमा घनिष्ट मित्रता थियो ।[2]

हन्जलाको शव हराइरहेको थियो । खोजी गर्ने क्रममा एउटा ठाउँमा जमिनभन्दा अलि माथि रहेको अवस्थामा फेला पर्‍यो । शवबाट पानी चुइरहेको थियो । मुहम्मदﷺले सहाबीहरूसँग भन्नुभयो, फरिश्ताहरूले उनलाई नुहाइदिरहेका थिए । मुहम्मदﷺले सहाबीहरूलाई उनको बारेमा उनकी श्रीमतीसँग सोध्न पठाउनुभयो । उनकी श्रीमतीसँग सोधिएपछि उनले सम्पूर्ण विवरण बताइन् । त्यहाँदेखि उनी गसिलुल मलायकाको नामबाट प्रसिद्ध भए ।[3]

मुहम्मदﷺ आफ्नो काका हमजाको अवस्था देखेर अति दुखित हुनुभयो । उहाँकी फुपु सफिया आइन् । उनले पनि आफ्नो भाई हमजाको शव हेर्न चाहिन् । उनले आफ्नो भाइको त्यो अवस्था देख्न नपरोस् भनेर मुहम्मदﷺले सफियाको छोरा जुबैरसँग उनलाई फिर्ता लैजान भन्नुभयो । सफियाले भनिन्, आखिर यस्तो किन ? मलाई आफ्नो भाइको शवलाई चिरफार गरिएको कुरा थाहा छ र यो अल्लाहको मार्गमा भएको छ । त्यसैले जे भयो त्यसमा हामी राजीखुसी छौं । अल्लाहले चाह्यो भने मैले पुण्यको नियतले धैर्य गर्नेछु । त्यसपछि उनी हमजाको शवनिर आइन् । उनलाई हेरिन् । उनको लागि प्रार्थना गरिन् । **इन्ना लिल्लाहे वइन्ना यलैहे राजेउन** पढिन् । उनको क्षमाको लागि अल्लाहसँग प्रार्थना गरिन् । त्यसपछि मुहम्मदﷺले उनलाई अब्दुल्लाह बिन जहशको साथमा दफन गर्ने निर्देशन दिनुभयो । उनी हमजाका भान्जा पनि थिए र दूध को नाताले भाइ पनि ।

इब्ने मस्उदको बयान छ, उनी भन्छन् । मुहम्मदﷺ हमजाप्रति जति रूनुभयो त्यति अरूमाथि रोएको मैले देखिनँ । उहाँले उनलाई किब्लातर्फ फर्काएर राख्नुभयो,

---

१ सही बुखारी भाग २ , हदिस नं १३४३, १३४६, १३४७, १३४८, १३५३, ४०७९
२ सही बुखारी भाग २, जादुल मआद भाग २
3 जादुल मआद भाग २

उनको जनाजहको नमाज पढाउन पंक्तिमा उभिनुभयो । नमाज पढाउने क्रममा उहाँ रुनुभएको आवाज पनि सुनिएको थियो ।[१]

वास्तवमा शहिदहरूको शवको दृश्य अति नै भयानक र विषाक्त थियो । खब्बाब विन अरतको बयान छ । हमजाको कफनमा कालो धर्को भएको एउटा बर्को बाहेक अरू केही थिएन । टाउको ढाक्दा खुट्टा देखिन्थ्यो खुट्टा ढाक्दा टाउको । अन्तिममा बर्कोले टाउको ढाकियो र खुट्टालाई इज्खीर[२] नामक घाँसले ढाकियो ।[३]

अब्दुर्रहमान बिन औफको बयान छ, उनी भन्छन् : मुस्अब बिन उमैर  शहिद भए । उनी मभन्दा सुसम्पन्न थिए र पनि उनलाई एउटै कफनमा दफनाइयो । उनको टाउको ढाक्दा खुट्टा देखिन्थ्यो खुट्टा ढाक्दा टाउको देखिन्थ्यो । उनको यस अवस्थाको बारेमा खुब्बाबले पनि बयान गरेका छन् । उनले अलिकति थपेका छन् : त्यो अवस्था देखेर मुहम्मदﷺले बर्कोले टाउको ढाक्न र खुट्टालाई अज्खर नामक घाँसले छोप्न भन्नुभयो ।[४]

## मुहम्मदﷺ अल्लाहको प्रशंसा तथा प्रार्थना गर्दै

इमाम अहमदमार्फत एउटा हदिस बयान गरिएको छ । उहुदको दिन बहुदेववादीहरू वापस फर्केर गएपछि मुहम्मदﷺले साथीहरूसँग भन्नुभयो : उठ  म अल्लाहको प्रशंसा गर्न गइरहेको छु । त्यस आदेशपछि सहाबीहरूले उहाँको पछाडि लाइन् लगाए मुहम्मदﷺले प्रार्थनामा भन्नुभयो :

हे अल्लाह तपाईंकै लागि सम्पूर्ण प्रशंसा छ । हे अल्लाह, जसलाई तपाईंले सम्पन्न बनाउनु हुन्छ त्यसलाई कसैले विपन्न बनाउन सक्दैन र जसलाई तपाईंले विपन्न पार्नुहुन्छ त्यसलाई कसैले सम्पन्न बनाउन सक्दैन । जसलाई तपाईं मार्गदर्शन देखाउन चाहनु हुन्छ उसलाई कसैले पथभ्रष्ट गर्न सक्दैन र जसलाई तपाईंले पथभ्रष्ट गर्न चाहनु हुन्छ त्यसलाई कसैले मार्गदर्शन देखाउन सक्दैन । जे चीज तपाईंले रोक्न चाहनु हुन्छ त्यो कसैले दिन सक्दैन र जे चीज तपाईंले दिन चाहनु हुन्छ त्यसलाई कसैले रोक्न सक्दैन । जे चीज तपाईंले पाखा लगाउन चाहनु हुन्छ त्यो कसैले नजिक्याउन सक्दैन र जे चीजलाई तपाईंले नजिक्याउन चाहनु हुन्छ त्यसलाई कसैले पाखा लगाउन सक्दैन । हे अल्लाह हामीमाथि आफ्नो कृपादृष्टि गर्नु र रोजीरोटीमा वृद्धि गरिदिनु ।

१ यो हदिस इब्ने शाजानमार्फत वर्णन गरिएको छ । अब्दुल्लाह नजदीको मुख्तसर सिरतुर्रसुल २५५ ।
२ यो घाँस केराको पात जस्तो र सुघन्धित हुन्छ । अधिकांश ठाउँमा चियामा हालिन्छ । अरबमा यसको बिरुवा एक हात वा देड हात लामो हुन्छ । जबकि भारतमा एक मिटर लामो हुन्छ ।
3 मुस्नद अहमद, मिश्कात भाग १
४ सही बुखारी भाग २ हदिस नं २७२, ३८९७, ३९१३, ३९१४, ४०४७, ४०८२, ६४३२, ६४४८

हे अल्लाह, म तपाईँसँग अनन्त एवं दीर्घकालिन् वरदान् माग्दछु । हे अल्लाह, म गरिबीका दिनहरूमा सहयोग र भयभीत अवस्थामा शान्तिको भिख माग्दछु । हे अल्लाह, तपाईँबाट प्रदान गरिएका वा नगरिएका सम्पूर्ण कुराको नकारात्मक पक्षबाट तपाईँको शरण चाहन्छु । हे अल्लाह, हामीमा इमानलाई नै प्यारो बनाइदिनु र त्यसैमा आत्मसन्तुष्टि प्रदान गर्नु । नास्तिकत्व र अवज्ञाकारीहरूको कुभलो गर्नु र हामीलाई मार्गदर्शन पाउनेहरूमध्ये बनाइदिनु । हे अल्लाह, हामीलाई इस्लाममा जीवित राख्नु र मृत्यु पनि इस्लाममा नै दिनु । अपमान तथा घृणाबाट जोगाएर सज्जनहरूमा सामिल गरिदिनु । हे अल्लाह, ती नास्तिकहरूलाई जसले तपाईँको दूतलाई मिथ्या ठहराए र तपाईँको मार्गबाट रोके नाश गर्नु र कठोर सजाय दिनु । हे अल्लाह, ती नास्तिकहरूलाई पनि नाश गर्नु जसलाई किताब दिइएको थियो । हे सत्य अल्लाह ! [१]

## मदिनातर्फ वापसी र आत्मवलिदानको अनौठो घटना

शहिदहरूलाई दफन गरी अल्लाहको प्रशंसा तथा प्रार्थनापछि मुहम्मदﷺ मदिनातिर लाग्नुभयो । जसरी युद्धको अवस्थामा साथीहरूको तर्फबाट प्रेम तथा ज्यानको बलिदान दिने दृश्यहरू प्रकट भएका थिए ठिक त्यसरी बाटोमा आउँदा महिलाहरूको तर्फबाट पनि ज्यानको बलिदान दिने आश्चर्यजनक घटनाहरू प्रकट भए ।

बाटोमा मुहम्मदﷺको भेट हमना विन्ते जहशसँग भयो । उनलाई उनको भाइ अब्दुल्लाह विन जहशको शहादत प्राप्तिको खबर दिइयो । उनले इन्ना लिल्लाहे वइन्ना यलैहे राजेउन् पढिन् र अल्लाहसँग क्षमाको लागि प्रार्थना गरिन् । उनलाई आफ्नो मामा हमजा बिन अब्दुल मुत्तलिबको शहादत बारे खबर दिइयो । उनले इन्ना लिल्लाहे व इन्ना यलैहे राजेउन् पढेर अल्लाहसँग प्रार्थना गरिन् । त्यसपछि उनलाई आफ्नो श्रीमान मुस्अब विन उमैरको शहादत प्राप्ति बारे खबर दिइयो । त्यो खबर सुनेर उनी व्याकुल भइन् । टाउको पिटदै रून थालिन् । त्यो अवस्था देखेर मुहम्मदﷺले उनको श्रीमान र उनीबीच घनिष्ट सम्बन्ध थियो भनेर भन्नुभयो । [२]

त्यसैगरी उहाँहरू बनु दिनारको एक जना महिलानिर जानुभयो । उनको श्रीमान, भाइ र बुबा तीनै जना शहिद भएका थिए । उनलाई उनीहरूको शहादतको खबर भएपछि उनले भनिन् : मुहम्मदﷺको हाल खबर के छ ? मानिसहरूले जवाफ दिए, उहाँ सन्चै हुनुहुन्छ । उहाँ तिमीले सोचे झैँ सन्चै हुनुहुन्छ । उनले भनिन् खै मलाई देखाओ म पनि उहाँको पवित्र चेहेरा हेर्छु । मानिसहरूले उनलाई इशारा गरी

---

१ सही बुखारी, मुस्नद अहमद भाग ३

२ इब्ने हेशाम भाग २

बताए । उनको नजर मुहम्मदﷺमाथि पर्नासाथ उनले भनिन्: उहाँलाई देखेर सबै दु:ख हट्यो ।[1]

बाटो हिँड्दै गर्दा सअद विन मुआजकी आमा उहाँतर्फ दौडेर आइन् । त्यतिखेर सअद विन मुआज मुहम्मदﷺको घोडाको लगाम समातेर डोऱ्याइरहेका थिए । उनले भने, हे मुहम्मदﷺ उनी मेरी आमा हुन् । मुहम्मदﷺले भन्नुभयो, उनलाई स्वागत छ । त्यसपछि उनको स्वागतको लागि अडिए । उनकी आमा नजिक आएपछि उहाँले उनलाई आफ्नो छोरा अमर विन् मुआजको शहादत प्राप्तिको खबर सुनाउनुभयो र उनीप्रति शोक व्यक्त गर्दै धैर्य गर्न उपदेश दिनुभयो । उनले भनिन्, जब मैले तपाईंलाई कुशल अवस्थामा देखें मेरो सबै दु:ख हल्का भयो । त्यसपछि मुहम्मदﷺले उहुदका शहिदहरूको लागि प्रार्थना गर्नुभयो । उहाँले प्रार्थनामा भन्नुभयो: हे उम्मे सअद खुसी होऊ । शहिदका परिवारलाई शुभसुचना देऊ । उनका शहिदहरू सबै एकसाथ स्वर्गमा छन् र आफ्नो परिवारको बारेमा उनीहरूको सिफारिश कबुल गरिसकिएको छ ।

उनले भनिन्: हे ईशदूत उनका पीडित परिवारको लागि पनि प्रार्थना गरिदिनु होस् । उहाँले भन्नुभयो, हे अल्लाह उनीहरूको मनको घाउ निको गरिदेऊ । उनीहरूले भोगेको पीडाको प्रतिफल देऊ । जीवित परिवारलाई राम्रोसँग संरक्षण गरिदेऊ ।[2]

## मुहम्मदﷺ मदिनामा

हिजरी सम्बत ३ साल शौवाल महिनाको ७ तारिख शनिबारको दिन मुहम्मदﷺ मदिना पुग्नुभयो । घर पुगेर आफ्नो तरवार फातिमालाई दिँदै भन्नुभयो, छोरी यसमा लागेको रगत धोइदेऊ । अल्लाहको कसम यो तरवार मेरो निम्ति खुब काम लाग्यो । त्यसपछि अलीले पनि तरवार झुण्ड्याए । उनको तरवार पनि धोइदिन भन्नुभयो । अलीले भने, अल्लाहको कसम यो पनि खुब काम लाग्यो । त्यो कुरा सुनेर मुहम्मदﷺले भन्नुभयो । तिमीले झैं तिम्रो साथमा सहल विन हुनैफ र अबु दुजानाले पनि वीरतापूर्ण युद्ध गरेका थिए ।[3]

अधिकांश हदिसमा मुसलमान शहिदहरूको संख्या ७० उल्लेख भएको पाइन्छ । उनीहरूमध्ये अधिकांश अन्सारहरू थिए । उनीहरूबाट ६५ जना शहिद भएका थिए ।

---

१ इब्ने हेशाम भाग २

२ सियरत हलबीया भाग २

3 इब्ने हेशाम भाग २

जसमध्ये ४१ जना खजरज र २४ जना अवस कबिलाका व्यक्ति थिए । एक जना यहुदीको हातबाट मारिएका थियो । मुहाजिरहरूको तर्फबाट शहिद संख्या केवल ४ थियो ।

इब्ने इस्हाकको बयान अनुसार कुरैशको तर्फबाट २२ जना मारिएका थिए । तर सहाबे मगाजी र मुहम्मदﷺको जीवनीकारहरूले यस युद्धको बारेमा जे विवरण प्रस्तुत गरेका छन् र त्यस अन्तर्गत युद्धका विभिन्न चरणमा मारिएका बहुदेववादीहरूको वर्णन भएको छ त्यसलाई दृष्टिगत गरी हिसाब लगाउने हो भने उनीहरूको संख्या २२ मात्र नभई ३७ पुग्छ । अल्लाह नै सर्वज्ञाता छन् ।[१]

## मदिनामा संकटकाल

हिजरी सम्बत ३ साल शौवाल महिना ८ तारिख आइतबारको मध्यरातमा मुसलमानहरूले आपत काटे । उनीहरू युद्धबाट ज्यादै थकित थिए । त्यसको बावजुद उनीहरूले मदिनाको मार्ग तथा बाटोघाटोमा पहरा दिइरहेका थिए । उनीहरू आफ्ना वरिष्ठ कमाण्डर मुहम्मदﷺको सुरक्षाको लागि तैनात थिए किनभने चारैतिर खतरा थियो ।

## हमराउल असदको युद्ध

उता मुहम्मदﷺले युद्धबाट सृजना भएको परिस्थिति बारे सोचविचार गर्दागर्दै पूरै रात विताउनुभयो । युद्धमा आफ्नो विजय भएतापनि कुनै लाभ उठाउन सकिएन भन्ने कुरा बहुदेववादीहरूले सोचे भने उनीहरूलाई अवश्य पछुतो हुने छ र उनीहरूले बाटोबाटै फर्केर मदिनामा आक्रमण गर्न सक्नेछन् भन्ने उहाँलाई खतरा लागेको थियो । त्यसैले उहाँले मक्की फौजको पिछा गर्नु पर्छ भनी निर्णय गर्नुभयो ।

फलतः मुहम्मदﷺले उहुदको युद्धको भोलिपल्ट हिजरी सम्बत ३ साल शौवाल महिनाको ८ तारिख आइतबारको दिन विहानै शत्रुको सामना गर्न जानु पर्छ भन्ने सूचना दिनुभयो । साथै उहाँको साथमा ती व्यक्तिहरू मात्र जान पाउने छन् जुन उहुदको युद्धमा सरिक थिए भनी उहाँले सूचित पनि गर्नुभयो । त्यही बेला अब्दुल्लाह विन उवैले उहाँको साथमा जान अनुमति माग्यो । तर उहाँले अनुमति दिनु भएन । अर्को तर्फ घाइते, हतोत्साहित एवं त्रसित सबै मुसलमानहरूले मुहम्मदﷺको आदेशको निरविरोध आज्ञा पालना गरे । जाबिर विन अब्दुल्लाह जो उहुदको युद्धमा सामिल थिएनन् उनले पनि अनुमति माग्न चाहे । उहाँको सेवामा उपस्थित भएर उनले भने : हे ईशदूत, तपाईं जुन युद्धमा जाँदै हुनुहुन्छ म पनि तपाईंको साथमा जान चाहन्छु । उहुदको युद्धमा मेरो बुबाले मलाई मेरी छोरीहरूको रेखदेख गर्न रोक्नु

१ इब्ने हेशाम भाग२, फतहुलबारी भाग ७, उहुद युद्ध लेखक मुहम्मद अहमद बाश्मिल

भएको थियो । तथर्स तपाईँ मलाई आफ्नो साथमा जान अनुमति दिनुहोस् । उनको कुरा सुनेर उहाँले उनलाई अनुमति दिनुभयो ।

योजना बमोजिम मुहम्मदﷺ मुसलमानहरूलाई आफ्नो साथमा लिएर प्रस्थान हुनुभयो । मदिनाबाट आठ मिल टाढा रहेको हमराउल असद नामक ठाउँमा पुगेर उहाँहरूले केम्प लगाउनुभयो ।

त्यस बसाईको बीचमा मअबद विन अबी मअबद खुजाइले मुहम्मदﷺको सेवामा उपस्थित भएर इस्लाम स्वीकारे । भनिन्छ, उनी बहुदेववादी भएपनि उनले मुहम्मदﷺको भलो चाहन्थे । किनभने खुजाअ र बनु हाशिमबीच मैत्रिक सम्बन्ध थियो । उनले भने : हे ईशदूत तपाईँ र तपाईँका साथीहरूलाई जुन चोट लागेको छ त्यसमा म दुखित छु । अल्लाहले तपाईँहरूलाई सुरक्षित राख्नेछ भन्ने मैले आशा गरेको थिएँ । उनले दुःखको भाव जताएपछि मुहम्मदﷺले उनलाई अबु सुफ्यानकहाँ गएर उसको हौसला निरुत्साहित पार्न भन्नुभयो ।

उता बहुदेववादीहरूले मदिनातिर आउने सोच गर्छन कि भन्ने जुन खतरा मुहम्मदﷺले महसुस गर्नुभएको थियो त्यो एकदमै सत्य थियो । जब बहुदेववादीहरूले मदिनाको ३६ मिल टाढा रौहा नामक ठाउँमा पुगेर पाल लगाए अनि उनीहरूले एकअर्कालाई लाञ्छना गर्न थाले । उनीहरूले एकअर्कालाई भने : तिमीहरूले केही गर्न सकेनौ । मुस्लिमशक्तिलाई तोडेर उनीहरूलाई त्यतिकै छोडिदियौ । अँझै उनीहरूको संख्या यति छ कि तिम्रो टाउकोको दुखाइ बन्न सक्छ । तसर्थ हामी फर्कौं र उनीहरूको जरो नै काटौं ।

त्यो सतही सुझाव ती व्यक्तिहरूले व्यक्त गरेका थिए जसलाई दुई पक्षीय शक्तिको बारेमा सही अड्कल् थिएन । त्यसकारण उनीहरूको तर्फबाट आधिकारिक व्यक्ति अफसर सफ्वान विन उमैयाले त्यसको विरोध गर्दै भन्यो, हे ! साथी हो यस्तो नगर । जुन मानिसहरू उहुदको लडाइँमा आएका थिएनन् तिनीहरू पनि तिम्रो विरुद्ध खडा हुन सक्छन् भन्ने मलाई खतरा लागेको छ । तसर्थ यसै विजयका साथ फर्कौं । यदि हामीले मदिनामाथि आक्रमण गर्न सोच्यौं भने चक्रव्यूहमा फस्नु पर्ला । तर अधिकांश व्यक्तिहरूले त्यो सुझावलाई स्वीकारेनन् र मक्का वापस जाने निर्णय गरे । अब सुफ्यान र उसका साथीहरू त्यहाँबाट हिँड्नु अघि मअबद विन अबी मअबद खुजाई पुग्यो । अबु सुफ्यानलाई ऊ मुसलमान भएको थाहा थिएन । उसले मअबदसँग सोध्यो उता पछाडिको के खबर छ ? उसले छकाउँदै जवाफ दियो । मुहम्मदﷺ आफ्नो साथीहरूलाई लिएर तिमीहरूमाथि आक्रमण गर्न निस्केका छन् । उनको दल धेरै ठूलो छ त्यति ठूलो दल त मैले कहिल्यै देखेको थिएन । सबै व्यक्तिहरू तिमीहरूको विरुद्ध रिस र क्रोधमा चुर छन् । उहुदको युद्धमा पछि रहेकाहरू पनि आएका छन् । उनीहरू आफुले

गुमाएको कुरामा धेरै पछुताएका छन् । तिनीहरू तिम्रो विरुद्धमा यति चर्केका छन् त्यसको उदाहरण दिन म सक्दिनँ ।

अबु सुफ्यानले भन्यो : दाज्यु तपाईं यो के भन्दै हुनुहुन्छ ?

मआबदले भन्यो: मलाई लाग्छ तिमीहरू यहाँबाट जानुभन्दा पहिला नै उनीहरूको घोडालाई देख्ने छौ वा फौजको पहिलो टोली यस डाँडोमा देखिने छ ।

अबु सुफ्यानले भन्यो, अल्लाहको कसम हामीले फर्केर उनीहरूमाथि आक्रमण गरी उनीहरूलाई सखाप पार्ने निर्णय गरेका थियौं ।

मअबदले भन्यो, यस्तो नगर, किनभने मैले तिमीहरूको भलाइको लागि भन्दैछु ।

त्यो कुरा सुनेर मक्की फौजको हौसला टुट्यो । हतास तथा भयभीत भएपछि मक्कातिर जानु नै आफ्नो लागि उनीहरूले उपयुक्त ठाने । तर अबु सुफ्यान्ले इस्लामी लस्करलाई आक्रमण गर्नबाट रोक्न र पुनःमुठभेडबाट बच्नको निम्ति षडयन्त्रकारी ढंगले प्रतिउत्तर दियो । आफु भएको ठाउँबाट कबिला अब्दुल कैसको एउटा काफेला जाँदै गर्दा अबु सुफ्यानले त्यो काफेलासँग भन्यो, तपाईंहरूले मेरो यो सन्देश मुहम्मदलाई पुऱ्याउनुभयो भने त्यसको बदला मक्कामा आएपछि ओकाजको बजारमा तपाईंहरूको उँटले बोक्न सक्ने किस्मिस दिनेछु । उनीहरूले भने हुन्छ ।

अबु सुफ्यान्ले भन्यो : मुहम्मदलाई यो खबर पुऱ्याइदिनु कि हामीहरूले उसको र उसका साथीहरूको जरो उखेल्ने निर्णय गरेका छौं ।

जब त्यो काफेला हमराउल असदमा मुहम्मदﷺ र उहाँका साथीहरू भएको ठाउँमा पुग्यो उनीहरूले मुहम्मदﷺलाई खबर दिदै भने : मानिसहरू तिमीहरूको विरुद्धमा एकिकृत भएका छन् तसर्थ उनीहरूसँग डराऊ । उनीहरूको कुरा सुनेर मुसलमानहरूको मनोबल झन् बलियो भयो । उनीहरूले भने, हाम्रो लागि अल्लाहको सहयोग प्रयाप्त छ र उनी नै असल सहयोगी हुन् । उनीहरू त्यस आध्यात्मिक शक्तिको कारण अल्लाहको वरदान एवं कृपाका साथ फर्के । उनीहरूलाई कुनै दुःख पनि भएन । उनीहरूले अल्लाहको प्रसन्नतालाई नै अंगाले किनभने अल्लाह नै कृपालु छन् ।

मुहम्मदﷺ आइतवार हमराउल असद जानुभयो । हिजरी सम्बत ३ साल ९ देखि ११ शौवाल आइतबार, सोमवार, मंगलवार र बुधवारसम्म उहाँ त्यहीं बस्नुभयो । त्यसपछि मदिना फर्कनुभयो । मदिना फर्कनुभन्दा पहिला अबु उज्जा जम्ही उहाँको नियन्त्रणमा आयो । ऊ त्यो व्यक्ति थियो जसलाई बदरको युद्धमा उसको गरिबी तथा उसका धेरै छोरीहरू भएको कारण कुनै प्रतिदान नलिइ यस सर्तमा छोडिएको थियो कि आगामी दिनहरूमा उसले मुहम्मदﷺको विरुद्धमा कसैको सहयोग गर्ने छैन । तर उसले आफुले गरेको सम्झौता तथा बाचा तोड्यो । साथै गीत गाएर मानिसहरूलाई मुहम्मदﷺ र उहाँका साथीहरू विरुद्ध भड्काउने काम गऱ्यो । जसको वर्णन पछाडिका पृष्ठहरूमा उल्लेख भएको छ । त्यति मात्र नभएर ऊ उहुदको युद्धमा स्वयम आफै मुसलमान विरुद्ध लड्न आयो । जब उसलाई गिरिफतार गरी मुहम्मदﷺको सेवामा

उपस्थित गरियो, उसले भन्यो हजुर मलाई र मेरो गल्तीलाई क्षमा गरिदिनुहोस् । ममाथि गुण लगाउनुहोस् मेरी छोरीहरूको निम्ति मलाई छोडिदिनुहोस्, म बचन गर्दछु अब आगामी यस्तो षड्यन्त्रहरू गर्ने छैन, मुहम्मदﷺले भन्नुभयो, अब तिमी मक्का गएर मैले मुहम्मदﷺलाई दोस्रो पटक पनि धोका दिएँ भनी खुसी प्रकट गर्न पाउने छैनौ किनभने मोमिनले एकै ठाउँबाट पटक पटक धोका खादैन । त्यसपछि जुबैर वा आसिम बिन सावितलाई निर्देशन दिइयो र उनीहरूले उसको हत्या गरिदिए ।

यसरी नै मक्काको एक जना जासुस पनि मारियो । उसको नाम मुआविया बिन मुगिरह बिन अबील आस थियो । साथै ऊ अब्दुल मलिक विन मरवानको हजुर बुबा थियो । त्यो व्यक्ति यसरी फेला पऱ्यो । उहुदको दिन बहुदेववादीहरू वापस गएपछि आफ्नो काकाको छोरा उस्मान विन अफ्फानसँग भेट गर्न आयो । उस्मानले उसको लागि मुहम्मदﷺसँग सुरक्षा चाहे । उहाँले तीन दिनपछि पनि यहाँ भेटियो भने उसको हत्या गरिनेछ भन्ने सर्तमा अनुमति दिनुभयो । तर जब मदिना इस्लामी लस्करबाट खाली भयो अनि ऊ कुरैशको निम्ति जासुसी गर्नको लागि तीन दिनभन्दा बढी बस्यो । लस्कर फर्केर आएपछि उसले भाग्ने प्रयास गऱ्यो । मुहम्मदﷺले जैद विन हारिसा र अम्मार विन यासिरलाई आदेश दिनुभयो । उनीहरूले उसको पिछा गरी उसको पनि हत्या गरिदिए ।[१]

हमराउल असदको युद्धलाई एक अलग पाठको रूपमा वर्णन गरिन्छ तर त्यो कुनै अलग युद्ध थिएन । त्यो केवल उहुदको युद्धको एक भाग तथा शेष अंश र त्यसको पृष्ठमध्येको एउटा पृष्ठ थियो ।

१ उहुद युद्ध र हमराउल असद युद्धको विवरण इब्ने हेशाम भाग २, जादुल मआद भाग २, फतहुलबारी भाग ७ र मुख्तसर सिरहबाट संकलन गरिएको हो ।

# उहुदको युद्ध
# विजय वा पराजय एक विश्लेषण

यो थियो उहुदको युद्ध । यस युद्धको सम्पूर्ण चरण र यसको तपसिल एवं परिणाम बारे ठूलठूला बहसहरू गरिएका छन् । यसलाई मुसलमानहरूको पराजयको संज्ञा दिन सकिन्छ कि सकिदैन ? यथार्थमा भन्नुपर्दा युद्धको दोस्रो चरणमा बहुदेववादीहरूको प्रभुत्व रहेको थियो । यस कुरामा शंका गर्ने ठाउँ नै छैन । युद्धको मैदान उनीहरूको कब्जामा नै थियो । मानवीय क्षति पनि मुसलमानतर्फ बढी भएको थियो र अति भयानक तरिकाले भएको थियो । मुसलमानको एउटा समूह त वास्तवमा हार खाएर भागेको थियो । युद्धमा मक्की लस्करले गति लिएको थियो तर यी सम्पूर्ण घटनाक्रमका बावजुद केही यस्ता कुराहरू छन् जसको आधारमा यस युद्धलाई बहुदेववादीहरूको विजयको संज्ञा दिन सकिदैन ।

कारण,बहुदेववादीहरूले मुसलमानहरूको केम्पलाई नियन्त्रणमा लिन सकेका थिएनन् साथै मदनी लस्करको एक ठूलो समूह उथलपुथल एवं अव्यवस्थित भएतापनि मैदानबाट भागेका थिएनन् । वीरताका साथ लड्दै आफ्नो कमाण्डरको कमाण्डमा जम्मा भएका थिए । मुसलमानहरूको शक्ति यति कमजोर पनि भएको थिएन कि मक्की फौजले उनीहरूको पिछा गरोस् । यस अतिरिक्त कुनै पनि मुसलमान बहुदेववादीहरूको बन्दी भएनन् । साथसाथै बहुदेववादीहरूले कुनै युद्धप्राप्त हासिल गर्न सकेनन् । बहुदेववादीहरू युद्धको तेस्रो चरणको लागि तयार भएनन् जबकि इस्लामी फौज केम्पमा नै थियो । यसका साथै बहुदेववादीहरू युद्धको मैदानमा एकदुई दिन पनि बसेनन् जबकि विजयी पक्ष एकदुई दिन युद्धको मैदानमा बस्ने त्यो जमानाको नीति थियो । त्यो नै विजयको महत्वपूर्ण प्रतीक मानिन्थ्यो । जब कि बहुदेववादीहरू फटाफट युद्धको मैदान खाली गरेर फर्के । उनीहरूले मुसलमानहरूले भन्दा पहिला नै युद्धको मैदान खाली गरेका थिए । साथसाथै मदनी फौजको धन सम्पत्ति लुट्न उनीहरूमा मदिना प्रवेश गर्ने हिम्मत भएन जबकि मदिना धेरै नजिक थियो र त्यहाँ कुनै पनि फौज थिएन । मदिना फौजबाट एकदम खाली थियो । बाटोमा पनि कुनै अवरोध थिएन ।

यी सम्पूर्ण विवरणको लेखाजोखा गर्ने हो भने बहुदेववादीहरूले केवल एउटा क्षणिक अवसरबाट फाइदा उठाएर मुसलमानहरूलाई अलि बढी क्षति तथा नोक्सान पुऱ्याएको देखिन्छ । नत्र इस्लामी फौजलाई आफ्नो नियन्त्रणमा लिएर उनीहरूको हत्या गर्ने र बन्दी बनाउने काम जुन युद्धको दृष्टिकोणले महत्वपूर्ण हुन्छ उनीहरू त्यसो गर्न असफल थिए । इस्लामी लस्कर आफ्नो ठूलो मानवीय क्षतिको बावजुद उनीहरूको नियन्त्रणबाट भाग्न सफल भयो । अत्यधिक ठाउँमा कहिलेकाहिँ विजय

पक्षलाई नै नोक्सान उठाउनु पर्दछ । तसर्थ यस बारेमा बहुदेववादीहरूलाई विजयको संज्ञा दिन मिल्दैन ।

उता अबु सुफ्यान आफ्नो फौज लिएर फर्कन हतारिएको थियो । युद्धको तेस्रो चरण सुरु भयो भने आफ्नो फौजलाई ठूलो क्षति पुग्न सक्छ र हार व्यहोर्नु पर्छ भन्ने उसलाई डर थियो । यसको पुष्टि अबु सुफ्यानको त्यो कुराबाट पनि हुन्छ जुन उसले हमराउल असद नामक युद्धमा व्यक्त गरेको थियो ।

यसरी यस युद्धलाई एक पक्षको जित र एक पक्षको हारको संज्ञा दिनुभन्दा यसलाई अनिर्णायक लडाइँ भन्न सकिन्छ । जसमा दुवै पक्षले सफलता र नोक्सान व्यहोरेका थिए । साथै मुस्लिम फौज युद्धको मैदानबाट भागेको थिएन र आफ्नो केम्पलाई शुत्रको कब्जामा जानबाट बचाउँदै लडाइँबाट छुट्टिएका थिए । अनिर्णायक लडाइँ यस्तै किसिमको लडाइँलाई भनिन्छ । यस बारे ईशवाणीबाट पनि केही संकेत झल्कन्छ ।

وَلَا تَهِنُوا فِي ابْتِغَاءِ الْقَوْمِ ۖ إِنْ تَكُونُوا تَأْلَمُونَ فَإِنَّهُمْ يَأْلَمُونَ كَمَا تَأْلَمُونَ ۖ وَتَرْجُونَ مِنَ اللَّهِ مَا لَا يَرْجُونَ (النساء: 104)

बहुदेववादीहरूको पिछा गर्न अल्छी नगर । यदि तिमीलाई दु:ख भएको छ भने उनीहरूलाई पनि दु:ख भएको छ । तिमीहरूले अल्लाहसँग त्यो चीजको आसा गरेका छौ जसको आसा उनीहरूले गरेका छैनन् । (अल् निसा:१०४)

यस श्लोकमा अल्लाहले दु:ख दिने र दु:ख पाउनेमा एकअर्काको उदाहरण दिएका छन् । यसको अर्थ दुवै पक्षको अवस्था एउटै थियो । दुवै असफल अवस्थामा फिर्ता भएका थिए ।

## यस युद्ध बारे कुरआनको टिप्पणी

कुरआन अवतरण भएपछि कुरआनले यस युद्धको एक एक चरणको विवरण प्रस्तुत गरेको छ । यस युद्ध बारे टिप्पणी गर्ने क्रममा कुरआनले ती कारणहरू पनि उल्लेख गरेको छ जसले गर्दा मुसलमानहरूले ठूलो क्षति व्यहोर्नु परेको थियो । यस किसिमको निर्णायक अवसरमा मोमिन अर्थात त्यो समुदाय जसलाई अन्य समुदामाथि प्रधानता थियो र जसलाई महान तथा उच्च उद्देश्य प्राप्तिको लागि सृष्टि गरिएको थियो उनीहरूमध्ये विभिन्न समूहहरूको कमजोरीहरूलाई कुरआनले औँल्याएको छ ।

त्यसैगरी कुरआनले मुनाफिकहरूको धारणालाई व्यक्त गर्दै उनीहरूको वास्तविकताको पर्दा उघारेको छ र उनीहरूको छातीमा अल्लाह र ईशदूतप्रति लुकेको शत्रुताको पर्दा पनि खोलिदिएको छ । त्यसैगरी सीधासादा मुसलमानमा मुनाफिक र उनका भारदार यहुदीहरूले जुन भ्रम फैलाएका थिए कुरआनले त्यसको अन्त्य गर्दै ती प्रशंसनीय जुक्ति र उद्देश्यतर्फ इशारा गरेको छ जो त्यस युद्धको उपलब्धि थियो ।

यस युद्ध बारे सुरह आले इमरानमा साठी वटा श्लोकहरू अवतरण भएका छन् । युद्धको प्रथम चरण बारे उल्लेख छ ।

وَإِذْ غَدَوْتَ مِنْ أَهْلِكَ تُبَوِّئُ الْمُؤْمِنِينَ مَقَاعِدَ لِلْقِتَالِ ( آل عمران : 121)

याद गर त्यो समयलाई जब तिमीले एका बिहानै आफ्नो घरबाट निस्केर मोमिनहरूलाई लडाइँको मैदानमा तैनात गरिरहेका थियौ । (आले इमरान:१२१)

त्यसपछि यस युद्धको परिणाम र रहस्य बारे विस्तृत चर्चा गरिएको छ । अल्लाहले भनेका छन् :

مَا كَانَ اللَّهُ لِيَذَرَ الْمُؤْمِنِينَ عَلَىٰ مَا أَنْتُمْ عَلَيْهِ حَتَّىٰ يَمِيزَ الْخَبِيثَ مِنَ الطَّيِّبِ ۗ وَمَا كَانَ اللَّهُ لِيُطْلِعَكُمْ عَلَى الْغَيْبِ وَلَٰكِنَّ اللَّهَ يَجْتَبِي مِنْ رُسُلِهِ مَنْ يَشَاءُ ۖ فَآمِنُوا بِاللَّهِ وَرُسُلِهِ ۚ وَإِنْ تُؤْمِنُوا وَتَتَّقُوا فَلَكُمْ أَجْرٌ عَظِيمٌ ( آل عمران :179 )

अल्लाहले पवित्रतालाई अपवित्रताबाट अलग नगरेसम्म मोमिनहरूलाई तिमीहरूमा त्यत्तिकै छोड्ने छैनन् । अल्लाहले तिमीहरूलाई प्रोक्षको खबर दिँदैन । तर उनले आफ्नो दूतमध्ये जसलाई चाहन्छन् नियुक्त गर्दछन् । तथर्स अल्लाह र उनका दूतमाथि आस्था राख । यदि तिमीहरूले आस्था तथा ईशभय राख्यौ भने तिमीहरूको लागि ठूलो प्रतिफल छ । (आले इमरान:१७९)

## युद्धमा ईश्वरीय रहस्य र तत्वदर्शीता

महान विद्वान इब्ने कैयमले यस विषय बारे विस्तृत रूपमा लेखेका छन् ।[१] हाफिज इब्ने हजर भन्छन् : विद्वानहरूरुको भनाई छ, उहुदको युद्ध र त्यसमा मुसलमानहरूले व्यहोर्नु परेको नोक्सानमा इश्वरीय तत्वदर्शीता तथा रहस्यहरू थिए । जस्तै, अल्लाह र ईशदूतको अवज्ञा गर्दा वा नराम्रो काम गर्दा हुने परिणामको बारेमा मुस्लिमहरूलाई जानकारी गराइयो । किनभने तीर चलाउनेहरूलाई मुहम्मदﷺले मोर्चामा डटेर बस्ने जुन आदेश दिनुभएको थियो त्यसको अवज्ञा गरी मोर्चालाई छोडिदिएका थिए । त्यसकारण उनीहरूले क्षति व्यहोर्नु परेको थियो । अर्को, ईशदूतको पनि परीक्षण हुन्छ तर आखिरमा उनीहरूकै विजय हुन्छ । यो युद्ध त्यस नियमको एउटा प्रतीक थियो । यसमा अर्को रहस्य के पनि थियो भने यदि सदैव मोमिनहरूलाई सफलता दिइएको भए इस्लामका शत्रुहरू पनि मोमिनहरूको समूहभित्र घुस्न सक्थे र सज्जन दुर्जनबीच कुनै भिन्नता हुन सक्दैन थियो । यदि मोमिनहरूले सदैव पराजय नै भोग्नु परेको भए मुहम्मदﷺलाई दूत बनाउनुको उद्देश्य नै पूरा हुने थिएन । तसर्थ तत्वदर्शीता अनुसार दुवै अवस्था आओस् र सत्य असत्यबीच फरक होस् । किनभने मुनाफिकहरूको नेफाक मुसलमानलाई थाहा थिएन । यस्तो घटना घटेपछि

१ जादुल मआद भाग २

मुनाफिकहरूले आफ्नो भनाइ र गराइ जाहेर गरे अनि अस्पष्ट कुराहरू पनि स्पष्ट भए । मुसलमानहरूलाई आफ्नै घरमा शत्रुहरू लुकेको कुरा थाहा भयो । तसर्थ मुसलमानहरू उनीहरूको सामना गर्न तयार भए। साथै उनीहरूबाट सचेत पनि भए।

अर्को एक तत्वदर्शीता के पनि थियो भने कुनै ठाउँमा सहयोग ढिलो आउँदा दयनीय अवस्था सृजना हुन्छ जसले गर्दा मनको घमण्ड टुट्छ। तसर्थ मोमिनहरूले त्यस कठिनाइको सामना गरे र त्यसमा उनीहरूले धैर्यधारण पनि गरे । तर मुनाफिकहरूमा रूने कराउने अवस्था सृजना भयो ।

एक अर्को रहस्य के पनि थियो भने अल्लाहले मोमिनहरूको सम्मानको लागि स्वर्गमा जुन उच्च स्तर तयार गरेका छन् त्यहाँ केवल सामान्य कर्मले पुऱ्याउन सक्दैन। त्यसैले कठिनाइहरू झेलेर ती स्तरलाई मोमिनहरूले प्राप्त गर्न सकुन्।

अर्को रहस्य के पनि थियो भने शहादत प्राप्ति अल्लाहका मित्रहरूको सबैभन्दा उच्च कोटि हो। तसर्थ त्यो कोटि उनीहरूलाई प्रदान गरियो।

अर्को रहस्य के पनि थियो भने अल्लाहले आफ्नो शुत्रहरूको विनाश गर्न चाहेका थिए। तसर्थ त्यसको लागि त्यसको कारक तत्व पनि उपलब्ध गराइ दिए। जस्तै, नास्तिकत्व, अत्याचार लगायत अल्लाहका मित्रहरूलाई सताउने जस्ता क्रियाकलाप आदि। फेरि उनीहरूको कर्मको नतिजामा मोमिनहरूलाई पापबाट पवित्र गरियो र बहुदेववादीहरूलाई नाश गरियो।[१]

१ फतहुल बारी भाग ७

## उहुदपछिको सशस्त्र संघर्ष

उहुद युद्धको असफलताले गर्दा मुसलमानको प्रतिष्ठा तथा साखमा अति नराम्रो प्रभाव परेको थियो । शत्रुहरूको मनमस्तिष्कबाट उनीहरूप्रतिको भय हटदै गएको थियो । जसले गर्दा मुसलमानको आन्तरिक तथा वाह्य समस्या झन् बढ्दै गयो । मदिनामा चारैतिरबाट खतराको बादल लाग्न थाल्यो । यहुद,मुनाफिक र पाखे मानिसहरूले खुलेर दुस्मनीको प्रदर्शन गर्न थाले । हरेक समूहले मुसलामनलाई दुःख दिन थाल्यो । त्यति मात्र नभई उनीहरूले मुसलमानलाई सिध्याउने र जरोबाट उखेल्ने प्रचुर इच्छा गरे । तसर्थ दुई महिना नवित्दै बनु असदले मदिनामा छापा मार्ने तयारी गऱ्यो । उता हिजरी सम्बत ४ साल सफरको महिनामा अजल र कारहका कबिलाले षड्यन्त्रकारी ढंगले यस्तो चाल चल्यो जसमा दश जना साथीहरूले ज्यान गुमाउनु पऱ्यो । त्यसैगरी त्यही महिनामा बनु आमिरका सरदारले घातपूर्ण चाल चल्दै सत्तरी जना सहाबीहरूलाई शहिद गऱ्यो । यो घटना बिअरे मउनाको नामबाट प्रसिद्ध छ । त्यसैबीच बनु नजिरले पनि खुलेआम दुस्मनी गरी मुहम्मद ﷺ को हत्या गर्ने कोसिस गरेको थियो । उता बनु गत्फानको पनि हिम्मत बलियो भइसकेको थियो । त्यसकारण उसले पनि ४ हिजरी जमादिउल औवल महिनामा मदिनामा आक्रमण गर्ने योजना बनाएको थियो ।

फलतः उहुदको युद्धमा मुसलमानको दबाब समाप्त भएको कारण मुसलमानहरूले लामो समयसम्म निरन्तर खतरा झेल्नु परेको थियो । तर मुहम्मद ﷺ ले आफ्नो उच्च रणनीति अपनाएर सम्पूर्ण खतराहरूको दिशा नै फेरिदिनुभयो र मुसलमानको प्रभुत्व यथावत अवस्थामा फिर्ता ल्याइदिनुभयो । उनीहरूलाई उहाँले फेरि इज्जत तथा प्रतिष्ठाको उच्च स्थानमा पुऱ्याइदिनुभयो । त्यसै क्रममा उहाँले सबैभन्दा पहिला हमराउल असदसम्म बहुदेववादीहरूको पिछा गर्नुभयो र यस कारवाहीबाट उहाँको लस्करको इज्जत धेरै हदसम्म बच्यो । किनभने त्यो कदम संयमित एंव सशक्त युद्धकदम भएकोले विरोधीहरू विशेष गरी यहुदीहरू हैरान भए । फेरि उहाँले निरन्तर यस्तो सशस्त्र संघर्षयुक्त कारवाही गर्नुभयो कि उनीहरूभित्र मुसलमानहरूको पुरानो भय वहाल मात्र भएन त्यसमा झन् वृद्धि भयो । अगाडिको पृष्ठमा त्यसै बारे केही विवरण प्रस्तुत गरिदैछ ।

### अबु सल्मा नामक युद्ध

उहुदको युद्धमा लडेका मुसलमान विरुद्ध सबैभन्दा पहिला बनु असद विन खुजैमा नामक कबिला निस्क्यो । खुवैलिदका दुई जना छोरा तलहा र सलमा आफ्नो समुदाय र अनुयायीहरूलाई लिएर बनु असदलाई मुहम्मद ﷺ माथि आक्रमण गर्ने निम्तो दिँदै हिंडेका छन् भन्ने खबर मदिनामा पुग्यो । मुहम्मद ﷺ ले तुरुन्तै अनसार र

मुहाजिरबाट १५० जनामा सम्मिलित एउटा टोली तयार गर्नुभयो । त्यस टोलीको कमाण्डर अबु सल्मालाई बनाउनुभयो झण्डा पनि उनैलाई दिएर पठाउनुभयो । अबु सल्माले बनु असदमाथि उनीहरू तयार हुनुभन्दा पहिला नै आक्रमण गरे र उनीहरू तितरवितर हुँदै भागे । मुस्लिम टोली उनीहरूको उँट तथा बाखा कब्जा गरी सकुशल मदिना फिर्ता आए । उनीहरूसँग लडाइँ गर्न पनि परेन ।

त्यो फौजी टोली हिजरी सम्बत ४ साल पहिलो महिनाको औंसीको दिन पठाइएको थियो । उहुदको लडाइँमा लागेको अबु सल्माको घाउ फर्कने क्रममा फुट्यो जसले गर्दा उनको अचानक निधन भयो ।[1]

## अब्दुल्लाह बिन उनैसको संघर्ष

त्यसै महिनाको ५ तारिखको दिन खालिद विन सुफ्यान हजलीले मुसलमानमाथि आक्रमण गर्न फौज जम्मा गरिरहेको खबर प्राप्त भयो । मुहम्मदﷺले त्यसको प्रतिकार गर्न अब्दुल्लाह विन उनैसलाई पठाउनुभयो ।

अब्दुल्लाह विन उनैस मदिनादेखि बाहिर केही दिन बसेर मोहर्रम महिनाको २३ तारिखमा फिर्ता भए । उनले खालिदको हत्या गरी उसको टाउको पनि साथमा ल्याएका थिए । उहाँको सेवामा उपस्थित भएर उसको टाउको देखाएपछि मुहम्मदﷺले उनलाई एउटा लट्ठी दिँदै भन्नुभयो यो लट्ठी तिम्रो र मेरो बीचमा महाप्रलयको दिन चिनारी बन्ने छ । तसर्थ उनको निधन हुन लाग्दा उनले त्यो लट्ठी पनि आफ्नो साथमा दफन गर्न भनेका थिए ।[2]

## रजिअको घटना

त्यसै वर्ष हिजरी सम्बत ४ साल सफर महिनामा मुहम्मदﷺकहाँ अजल र कारह कबिलाका केही मान्छेहरू आए । उनीहरूले आफ्नो समुदायमा इस्लाम बारे केही चर्चा भएको कुरा बताए । तसर्थ उनीहरूले इस्लाम धर्म बारे शिक्षा दिन र कुरआन सिकाउनको लागि आफ्नो साथमा केही व्यक्तिहरूलाई पठाइदिन मुहम्मदﷺसँग माग गरे । इब्ने इसहाकको भनाई अनुसार ६ जना र बुखारीको हदिस अनुसार १० जनालाई उहाँले पठाइदिनुभयो । इब्ने इसहाकको भनाई अनुसार मुर्शिद विन अबी मुर्शिद गनवीलाई र बुखारीको हदिस अनुसार उहाँले आसिम विन उमर विन खत्ताबको हजुर बुवा आसिम विन सामितलाई त्यस टोलीको प्रमुख नियुक्त गर्नुभयो । जब उनीहरू राविग र जिद्दाबीच हुजैलको रजिअ नामी मुहानमा पुगे अनि

---

१ जादुल मआद भाग २

२ जादुल मआद भाग २, इब्ने हेशाम भाग २

हुजैल र कारहका उल्लेखित व्यक्तिहरूले अजलको एक शाखा बनु लह्यानलाई उनीहरूमाथि आक्रमण गर्न लगायो । बनु लहियानका एक सय जति तीरबाजहरू उनीहरूको खोजीमा हिँडे र पाइलाको निशान हेर्दै जाँदा उनीहरूलाई भेटाए । मुहम्मदﷺका साथीहरू एउटा डाँडोमा गएर बसे । बनु लहियानले उनीहरूलाई आफ्नो घेरामा लिदै भन्यो : तिमीहरूको लागि एउटा प्रतिज्ञा छ । यदि तिमीहरू हामी भएको ठाउँमा झर्यौ भने तिमीमध्ये कुनै पनि व्यक्तिको हामीले हत्या गर्ने छैनौं । आसिमले त्यहाँबाट झर्न अस्वीकार गरे र आफ्नो साथीलाई लिएर उनीहरूमाथि आक्रमण गर्न सुरु गरे । आखिरकार तीरबाट सात जना साथीहरू शहिद भए र खुबैब, जैद विन दस्ना र एक जना साथी गरी तीन जना बाँकी बचेका थिए । त्यसपछि फेरि अबु लह्यानले आफ्नो सम्झौता दोहोऱ्यायो । त्यो सम्झौतामा तीनै जना साथीहरू उनीहरू भएको ठाउँमा झरे तर उनीहरूले आफ्नो नियन्त्रणमा लिने वित्तिकै आफ्नो प्रतिज्ञा भंग गर्दै उनीहरूले ती तीनै जना साथीहरूलाई नालको फित्ताले बाँधे । तिमीहरूले दिने धोकाको यो पहिलो कडी हो भन्दै तेस्रो सहाबीले उनीहरूसँग जान अस्वीकार गरे । उनीहरूले उनलाई घिसारेर लैजाने कोसिस गरे तर लैजान नसकेपछि उनको हत्या गरे । खुबैब र जैदलाई मक्का लगेर बेचिदिए । ती दुवै साथीहरूले बदरको युद्धमा कुरैशका सरदारहरूको हत्या गरेका थिए ।

खुबैब केही साल कुरैशको बन्दीमा रहे । त्यसपछि कुरैशले उनको हत्या गर्ने विचार गऱ्यो । उनीहरूले उनलाई हरमभन्दा बाहिर तन्इम भन्ने ठाउँमा लिएर गए । उनीहरूले उनलाई फाँसीको फन्दामा चढाउन लाग्दा उनले भने: मलाई दुई रकअत नमाज पढ्न देउ । बहुदेववादीहरूले दुई रकअत नमाज पढ्न दिए र उनले नमाज पढे । उनले नमाज पढेर भ्याएपछि भने : तिमीहरूले मलाई डरले यस्तो गर्दैछ नभनेको भए मैले अँझै लामो नमाज पढ्ने थिएँ । त्यसपछि उनले भने : हे अल्लाह ! उनीहरूलाई एकएक जनालाई गनेर तितरवितर गरी मार्नु र एक जनालाई पनि बाँकी नराख्नु । त्यसपछि उनले केही पंक्तिहरू भने जसको अर्थ यस प्रकार छ :

मानिसहरू मेरो वरिपरि जम्मा भएका छन् । आफ्ना कबिलालाई उत्तेजित गरेर ल्याएका छन् । ठूलो भिड जम्मा गरेका छन् । पुरूषका साथसाथै महिलालाई पनि ल्याएका छन् । मलाई एउटा बलियो रूख नजिक लगिएको छ । म आफ्नो विवशता र मेरो बधस्थलमा दलहरूले निम्त्याएको यातनाबाट अल्लाहसँग मदत माग्दछु । हे सातौँ आकाशको स्वामी , ममाथि मेरो शत्रुले जे सोच गरेका छन् त्यसमा मलाई धैर्य गर्ने प्रेरणा प्रदान गर । उनीहरूले मलाई टुक्रा टुक्रा गरेका छन् । मेरो दाना पानी पनि खराब भएको छ । उनीहरूले मलाई नास्तिक हुन भनेका छन् तर मृत्यु मेरो लागि त्यो भन्दा सानो र सजिलो कुरा हो । मेरो आँखा विनाआँसु रुदैछ । म मुसलमान भएको अवस्थामा मलाई जसरी मारिए पनि त्यसको कुनै परवाह छैन ।

यो जीवन त अल्लाहको निम्ति हो । उसले चाह्यो भने अंगभंग गरिएको शरीरलाई जोडेर कृपादृष्टि गर्नेछन् ।

त्यसपछि अबु सुफ्यानले सोध्यो, के तिम्रो ठाउँमा मुहम्मद ﷺ भएको भए तिमीलाई राम्रो लाग्छ ? हामीले उनको टाउको काट्ने तर तिमी आफ्नो परिवारमा बस्ने, यो कुरा तिमीलाई राम्रो लाग्छ ? उनले भने लाग्दैन । अल्लाहको कसम मलाई यो पनि सह्य हुन सक्दैन कि म आफ्नो परिवारसँग बसुँ र आफु भएको ठाउँमा मुहम्मद ﷺलाई काँडो बिजोस् र उहाँलाई दुःख होस् ।

त्यसपछि बहुदेववादीहरूले उनलाई फाँसीको फन्दामा झुण्ड्याए । उनको लास रेखदेख गर्न दुई जनालाई खटाए । तर अमर बिन उमैया जमरी त्यहाँ आए र उनीहरूलाई छलेर रातीमा त्यो लास लगेर दफन गरिदिए । खुबैबको हत्या उक्बा बिन हारिस्ले गऱ्यो किनभने खुबैबले उसको बुबालाई बदरको युद्धमा मारेका थिए ।

सही बुखारीमा वर्णन गरिएको छ, खुबैब पहिला बुजरुक व्यक्ति हुन् जसले आफ्नो हत्याको समयमा दुई रकअत नमाज पढ्ने तरिका अपनाएका थिए । उनले जेलमा अंगुर खाँदै गरेको पनि देखियो । जबकि त्यति बेला मक्कामा खजुर पनि पाइँदैन थियो ।

त्यस घटनामा गिरिफ्तार हुने साथीमध्ये अर्को साथी जैद बिन दस्ना थिए । उनलाई सफ्वान बिन उमैयाले किनेर आफ्नो बुबाको बदलामा हत्या गऱ्यो ।

कुरैशले आसिमको शव पहिचान गर्न उनको शरीरको कुनै अंग काटेर ल्याउन मानिसहरूलाई पठायो । किनभने उनले बदरको युद्धमा कुरैशको एक महान व्यक्तिको हत्या गरेका थिए । तर अल्लाहले उनीहरूको अगाडि स्यालको बथान पठाइदिए जसले गर्दा कुरैशबाट नै उनको शवको संरक्षण भयो । उनीहरूले उनको कुनै अंग पनि भेटाउन सकेनन् । वास्तवमा आसिमले अल्लाहसँग आफ्नो लासको कुनै अंग बहुदेववादीहरूले छुन नपाओस् र उनले पनि कुनै बहुदेववादीलाई छुन नपरोस् भन्ने प्रार्थना गरेका थिए । उमरलाई त्यस बारे थाहा भएपछि उनले भने, अल्लाहले मोमिनहरूको संरक्षण जीवित अवस्थामा झैं मृत्यु पश्चात पनि गर्दा रहेछन् । [१]

## बिअरे मउनाको घटना

जुन महिनामा रजिअको घटना घटेको थियो त्यही महिनामा बिअरे मउनामा पनि ठूलो दूर्घटना भयो । त्यो घटना रजिअको घटनाभन्दा ठूलो थियो ।

त्यस घटनाको संक्षिप्त विवरण यस प्रकार छ । अबु बराअ आमिर बिन मालिक जो मलाइबुल असिन्न अर्थात तीरबाजको उपनामबाट प्रसिद्ध थियो त्यो व्यक्ति मदिना मुहम्मद ﷺकहाँ आयो । उहाँले उसलाई इस्लामको निम्तो दिनुभयो ।

---

१ इब्ने हेशाम भाग २, जादुल मआद भाग २, सही बुखारी भाग २

उसले इस्लाम स्वीकारेन तर त्यसबाट टाढा पनि भागेन । उसले भन्यो, हे ईशदूत यदि तपाईंले नजदवासीकहाँ धर्म प्रचार गर्न आफ्ना साथीहरूलाई पठाउनुभयो भने शायद उनीहरूले तपाईंको निम्तो स्वीकार्न सक्छन् । मुहम्मदﷺले भन्नुभयो, मलाई आफ्नो साथीहरूप्रति नजदवासीबाट खतरा महसुस भएको छ । अबु बराअले भन्यो, डर नमान्नु होस् उनीहरू मेरो संरक्षणमा हुनेछन् । त्यो कुरा सुनेर मुहम्मदﷺले इब्ने इस्हाकको भनाई अनुसार ४० जना र बुखारीको हदिस अनुसार ७० जना साथीहरूलाई उसको साथमा पठाउनुभयो । तर ७० जना भन्ने भनाई नै ठिक छ । मुन्जिर विन अमर जो बनु साइदा कबिलाका थिए र मुअतेकुन् लिलमौत अर्थात मृत्युबाट मुक्ति पाएका उपनामबाट प्रसिद्ध थिए मुहम्मदﷺले उनलाई त्यस टोलीको प्रतिनिधि नियुक्त गर्नुभयो । त्यस टोलीका साथीहरू वरिष्ठ विद्वान एंव विज्ञ थिए । उनीहरूले दिनमा दाउरा काटेर बेच्ने गर्थे र त्यसको रकमले सुफ्फामा रहेका विद्यार्थीहरूको लागि सौदा किन्थे साथै उनीहरूलाई कुरआनको शिक्षा दिन्थे, रातमा अल्लाहसँग प्रार्थना गर्थे, नमाज पढ्थे । उनीहरू जाने क्रममा मउनाको मुहानमा पुगे । यो कुवा बनु आमिर र हुर्रा बनी सुलैमको बीचमा अवस्थित थियो । त्यहाँ पाल टाँगेर बसेपछि ती साथीहरूले उम्मे सुलैमको भाई हराम विन मिलहानलाई मुहम्मदﷺको चिठी दिएर अल्लाहको शत्रु आमिर विन तुफैलकहाँ पठाए । उसले चिठी लिएन उल्टै एक जनालाई उनीमाथि आक्रमण गर्न इशारा गऱ्यो र एक जनाले हराम विन मिलहानमाथि पछाडिबाट जोडले भाला प्रहार गऱ्यो । त्यो भाला उनलाई छेद पार्दै आरपार भयो । आफ्नो रगत हेरेर हराम विन मिलहानले भने : अल्लाह महान छन् , काबाको स्वामीको कसम म सफल भएको छु ।

त्यो घटना घटाए लगतै अल्लाहको शत्रु आमिरले बाँकी अरू सहाबीहरूमाथि पनि आक्रमण गर्न आफ्नो कबिला बनी आमिरलाई आह्वान गऱ्यो । तर अबु बराअले उनीहरूलाई शरण दिएको कारण कबिलाले उसको आह्वानलाई सुने पनि नसुने झै गऱ्यो । उसले उनीहरूबाट निरास भएर बनु सुलैमलाई आवाज दियो । बनु सुलैमका तीन कबिला असिया, रअल र जकवान उसको आवाज सुन्ना साथ हाजिर भयो र सहाबीहरूमाथि एक्कासी आक्रमण गऱ्यो । उनीहरूको प्रतिकार गर्ने क्रममा सहाबीहरू सबै जना शहिद भए । उनीहरूमध्ये कअब विन जैद मात्र बाँचेका थिए । उनलाई शहिदहरूको माझबाट घाइते अवस्थामा उठाएर ल्याइयो । उनी खन्दकको युद्धसम्म जीवित रहे । त्यस अतिरिक्त एक दिन जैद समेत दुई जना सहाबी अमर विन उमैया र मुन्जिर विन उक्बा विन आमिरले एउटा गौचरमा उँट चराइरहेका थिए । उनीहरूले गौचरको प्रवेशद्वारमा चराहरू उडेको देखेर त्यहाँ गए । त्यसपछि मुन्जिर आफ्नो साथीहरूसँग गएर बहुदेववादीहरूको विरुद्ध लड्दालड्दै शहिद भए । अमर विन उमैया जमरीलाई कैद गरियो । उनको बारेमा उनको सम्बन्ध कबिला मुजरसँग

छ भन्ने थाहा भएपछि आमिरले उनको निधारको कपाल काटेर आफ्नो आमाको तर्फबाट एक जना गुलाम मुक्त गर्ने कसमलाई पूरा गर्नको लागि उनलाई मुक्त गरिदियो ।

अमर विन उमैया जमरी यस दुःखद घटनाको खबर लिएर मदिना पुगे । सत्तरी जना मुस्लिम विद्वानको शहादतले उहुदको घटनालाई झनै चर्कायो । तर फरक के थियो भने उहुदका शहिदहरू आमुन्नेसामुन्ने युद्धमा मारिएका थिए भने ती निहत्था सहाबीहरू एक लज्जास्पद धोकाबाट मारिएका थिए ।

अमर विन उमैया फर्कने क्रममा कनात नामक उपत्यकाको किनारामा अवस्थित करकर भन्ने ठाउँमा पुगेर एउटा रूखको छायामा बसे । त्यहाँ बनु केलाबको दुई जना व्यक्ति पनि आएका थिए । ती दुवै आरामसँग सुतेपछि उनले उनीहरूको हत्या गरिदिए । उनले आफ्नो साथीहरूको बदला लिएको सोचे । तर ती दुवैसँग मुहम्मदﷺको सम्झौता भएको थियो । त्यो कुरा अमरलाई थाहा थिएन । उनी मदिना आएर आफुले गरेको कारवाही बारे मुहम्मदﷺलाई अवगत गराए । मुहम्मदﷺले भन्नुभयो तिमीले यस्तो व्यक्तिको हत्या गरेका छौ जसको जरिमाना मैले अनिवार्य तिर्नु पर्नेछ । त्यसपछि मुसलमान र मुसलमानका ठुलाबडा व्यक्तिहरू यहुदीलाई जरिमाना तिर्ने कार्यक्रममा व्यस्त भए ।[1] यै कुरा बनी नजिरको युद्धको युद्धघटक बन्यो । यसको बारेमा अगाडि विवरण आउँदैछ ।

केही दिन अघि घटेका[2] रजिअ र मउनाको दुःखद घटनाले मुहम्मदﷺलाई अति दुखित तुल्याएको थियो ।[3] उहाँलाई यति पीडा भएको थियो कि जुन कबिलाले ती सहाबीहरूको नरसंहार गरेको थियो उसको विनाशको लागि एक महिनासम्म निरन्तर उहाँले प्रार्थना गर्नुभयो । बुखारीमा अनसमार्फत वर्णन गरिए अनुसार उहाँले आफ्ना साथीहरूलाई बिअरे मउनामा शहिद गरेकाहरूको विनाशको लागि प्रार्थना गर्नुभयो । उहाँले फजरको नमाजमा रअल, जकवान, लहियान र असियालाई लक्षित गरी उनीहरूको विनाशको लागि प्रार्थना गर्नुहुन्थ्यो । असियाले अल्लाह र ईशदूतको अवज्ञा गरेको थियो । अल्लाहले त्यस बारेमा कुरआनको श्लोक अवतरण गरेका थिए तर पछि वदर गरिदिए । त्यो श्लोक यसप्रकार छ : हाम्रो समुदायलाई सुचित गरिदेऊ ।

१ इब्ने हेशाम भाग २, जादुल मआद भाग २, सही बुखारी भाग २
२ सअदको भनाइ अनुसार रजिअ र मउना युद्धको खबर अल्लाहका संदेष्टलाई एकै रातमा दिइएको थियो ।
3 सअदले अनसमार्फत वर्णन गरेका छन् : अल्लाहका संदेष्टा भन्नुहुन्छ मलाई बिअरे मउनालको घटनाले यति मर्माहित बनाएको थियो त्यति मर्माहित म कहिल्यै भएको थिइनँ ।

हामीले आफ्नो पालनकर्तालाई भेट्दा ऊ हामीसँग प्रसन्न थियो र हामी पनि प्रसन्न थियौं । त्यसपछि ईशदूतले उनीहरू विरुद्ध प्रार्थना गर्न छोडिदिनुभयो ।[1]

## बनी नजिरको युद्ध

यहुदी र मुनाफिकहरूले मुसलमानसँग डाह तथा इर्ष्या गर्थे भन्ने कुरा वर्णन गरिसकिएको छ । उनीहरू मैदानमा लड्ने वीर होइन षडयन्त्रकारी एवं कपटी थिए । त्यसैले युद्धको सट्टा कपट एवं दुस्मनी प्रदर्शन गर्ने गर्थे । मुसलमानसँग गरेको प्रतिज्ञाको बावजुद उनीहरूलाई दु:ख एवं पीडा दिन विभिन्न बहाना र षड्यन्त्रको खोजिमा हुन्थे । तर बनु कैनुकालाई देशनिकाला गरिएपछि र कअब विन अश्रफको हत्यापछि उनीहरूको हौसला टुटेको थियो । उनीहरू डराएर चुप लागेका थिए तर उहुदको युद्धपछि उनीहरूको आँट फेरि दरिलो भयो । उनीहरूले खुलेआम दुस्मनी देखाउँदै समभ्फौता उल्लंघन गरे । मदिनाका मुनाफिकहरू मक्काका बहुदेववादीहरूसँग भित्रभित्रै साँठगाँठ गरिरहेका थिए । उनीहरूले मुसलमानको विरुद्धमा बहुदेववादीहरूको सहयोग गरे ।[2]

मुहम्मदﷺले सबै कुरा थाहा हुँदाहुँदै पनि धैर्य गर्नुभयो । रजिअ र मउनाको घटनापछि उनीहरूको आँट भ्फन् बलियो भयो र उनीहरूले मुहम्मदﷺलाई नै अन्त्य गर्ने योजना बनाए ।

त्यसको विवरण यसप्रकार छ : मुहम्मदﷺ आफ्नो साथमा केही साथीहरूलाई लिएर यहुदीकहाँ जानुभयो र उनीहरूसँग बनु केलाबका ती दुई जना मृतक जसलाई अमर विन उमैयाले गल्तीले हत्या गरिदिएका थिए उनको जरिमाना सम्बन्धी सहयोग गर्न छलफल गर्नुभयो । सम्भ्फौता भएको हुँदा उनीहरूको क्षतिपूर्ति दिन जरूरी थियो । उनीहरूले भने, हे अबुल कासिम ! यहाँ बस्नुहोस् हामीले तपाईंको काम गरिदिने छौं । उहाँ घरको गारोमा आडेस् लगाएर बस्नुभयो र उनीहरूले दिएको बचनको प्रतीक्षा गर्नुभयो । उहाँको साथमा अबु बकर,उमर,अली र अन्य साथीहरूको एउटा टोली पनि थियो ।

उता यहुदीहरू एकान्तमा जुटदा शैतान पनि उनीहरूको साथमा आयो । जुन दुष्कर्म गर्ने काम उनीहरूको भाग्यमा लेखिएको थियो शैतानले त्यसलाई भ्फन् पक्का बनाइदियो । भन्नुको अर्थ यहुदीहरूले मुहम्मदﷺको हत्या गर्ने आपसी सल्लाह गरिरहेका थिए । उनीहरूले भने : यो जाँतोको ढुंगा माथि लगेर मुहम्मदको टाउको कसले फोर्न सक्छ ? त्यसमा एक जना दुर्जन यहुदी अमर विन जिहाश तयार भयो ।

---

१ सही बुखारी भाग २

२ औनुल माअबुद भाग ३

उनीहरूमध्ये सलाम विन मश्कमले भन्यो : त्यसो नगर किनभने उनलाई तिमीहरूको योजना बारे खबर हुनेछ । दोस्रो कुरा उनीहरू र हामीबीच जुन सम्झौता छ त्यसको उल्लंघन पनि हुन्छ । तर उनीहरूले उसको कुरा अस्वीकार गरी आफ्नो योजनालाई कार्यान्वयन गर्न अडिग भए ।

उता अल्लाहको तर्फबाट मुहम्मदﷺकहाँ अल्लाहका फरिश्ता जिब्रइल आए । उहाँलाई यहुदीको योजनाबारे जानकारी दिए । उहाँ झटपट उठेर मदिनातर्फ लाग्नुभयो । पछि सहाबीहरूले उहाँलाई बाटोमा भेटाए । साथीहरूले भने, तपाईं उठेर हिँडनुभयो तर हामीले बुझ्न सकेनौं । उहाँले यहुदीहरूको षडयन्त्र बारे बताउनुभयो ।

मदिना वापस आउने वित्तिकै उहाँले मुहम्मद विन मस्लमालाई बनी नजिरकहाँ निम्न वारेन्ट दिँदै पठाउनुभयो : तिमीहरू मदिनाबाट निस्कओ, अब मकहाँ बस्न पाउँदैनौ, तिमीहरूलाई दश दिनको मियाद दिइन्छ त्यसपछि जो कोही त्यहाँ भेटिन्छ उसको गर्दन काटिने छ । त्यस वारेण्टपछि यहुदीहरूले देश छाड्नुबाहेक अरू कुनै उपाय सोच्न सकेनन् । तसर्थ उनीहरूले केही दिन यात्राको तयारी गरिरहे । त्यसैबीच मुनाफिकको सरदार अब्दुल्लाह विन उबैले उनीहरूलाई यसप्रकार खबर पठायो : आफ्नो ठाउँ नछाड, डटेर बस, आफ्नो घरबार नछोड, मसँग दुई हजार योद्धाहरू छन् । उनीहरूले किल्लाभित्र पसेर तिमीहरूको सुरक्षा गर्नको लागि ज्यान दिनेछन्, यदि तिमीहरूलाई निकालियो भने हामी पनि तिमीहरूको साथमा निस्कनेछौं, तिमीहरूको बारेमा कसैसँग झुक्ने छैनौं, तिमीहरूसँग युद्ध गरियो भने तिमीहरूको सहयोग गर्न तयार छौं । तिम्रा मित्र बनु कुरैजा र गत्फानले पनि तिमीहरूको सहयोग गर्नेछन् ।

त्यो संदेश पाएर यहुदीहरूमा पून:आत्मविश्वास पलायो । उनीहरूले देशबाट निस्कनुभन्दा लडाइँ गर्ने निर्णय गरे । मुनाफिकको सरदार अब्दुल्लाह विन उबैले जे भनेको छ त्यो पूरा गर्नेछ भन्ने कुरामा उनीहरूको सरदार हुयै बिन अख्तबलाई पूर्ण विश्वास थियो । त्यसकारण उनीहरूले हामीहरू आफ्नो घरबार छोड्दैनौं जे गर्नुछ गर भनी मुहम्मदﷺकहाँ जवाबी पत्र पठाए ।

मुसलमानको लागि त्यो अवस्था अतिनै नाजुक थियो भन्ने कुरामा कुनै दुईमत छैन । किनभने उनीहरूको लागि आफ्नो इतिहासको यस नाजुक तथा कठिन मोडमा शत्रुसँग टक्राउनु सहज थिएन । परिणाम खतरापूर्ण हुन सक्थ्यो । सारा अरब मुसलमानको विरुद्धमा थियो । मुसलमानको दुई वटा इस्लाम प्रचारक समूहको निर्मम हत्या गरिएको थियो । उता बनी नजिरका यहुदीहरू यति शक्तिशाली थिए कि उनीहरू सजिलै हतियार त्यागी आत्मसमर्पण गर्ने वाला थिएनन् । उनीहरूसँगको लडाइँमा विभिन्न खतराहरू थिए । तर विअरे मउनाको दुखदायी घटना हुनुभन्दा पहिला र त्यसपछिको परिस्थितिबाट जुन अवस्था सृजना भएको थियो त्यसले गर्दा

मुसलमानहरू हत्याहिंसा एवं सम्झौता उल्लंघन गर्ने जस्ता अपराधिक घटनाबाट सचेत थिए र ती अपराधका अपराधीहरूसँग शहिद मुसलमानहरूको बदला लिने भावना प्रचुर थियो । तसर्थ उनीहरूले बनु नजिर विरुद्ध लड्ने निर्णय गरे चाहे त्यसको परिणाम जे सुकै किन नहोस् । किनभने बनु नजिरले मुहम्मदﷺको हत्या गर्ने योजना बनाएको थियो । मुहम्मदﷺले हुयै बिन अख्तबको तर्फबाट जवाफी पत्र पाएपछि उहाँ र उहाँका सहाबीहरू अल्लाहु अक्बरको नारा लगाएर लडाइँको लागि तयार भए । इब्ने उम्मे मक्तुमलाई मदिनाको व्यवस्थापनको इन्चार्ज बनाएर उनीहरू बनु नजिरको क्षेत्रतर्फ लागे । झण्डा अली बिन अबी तालिबको हातमा थियो । बनु नजिरको क्षेत्रमा पुगेर उनीहरूले तिनीहरूको घेराउ गरे ।

उता बनु नजिरले आफ्नो खाडल तथा किल्लामा शरण लिएर किल्ला भित्रको चारदिवारीबाट तीर र ढुंगा वर्षायो । खजुरको बगैँचाहरू उनीहरूको लागि रक्षक बनेका थिए । तसर्थ उहाँले ती खजुरको रूख काटेर जलाउने आदेश दिनुभयो । त्यसैलाई लक्षित गरी हस्सानले भनेका छन् :

وهان على سراة بنى لوي　　حريق بالبويرة مستطير

अनुवाद छ : बुवैरहमा (बनु नजिरको खजुरको बगैँचाको नाम) आगोको मुस्लो निस्कनु पनि बनी लुअयीका सरदारहरूको लागि सामान्य कुरा थियो । त्यसको बारेमा अल्लाहले एउटा श्लोक अवतरण गरेका छन् :

مَا قَطَعْتُمْ مِنْ لِينَةٍ أَوْ تَرَكْتُمُوهَا قَائِمَةً عَلَىٰ أُصُولِهَا فَبِإِذْنِ اللَّهِ وَلِيُخْزِيَ الْفَاسِقِينَ
( الحشر : 5 )

तिमीहरूले खजुरको जुन रूख काट्यौ वा जुन रूख छोड्यौ त्यो सबै अल्लाहको अनुमतिमा भएको थियो । त्यसो गर्नुको कारण अल्लाहले ती अवज्ञाकारीहरूलाई अपमान गर्नु थियो । (अल हश्र:५)

जे होस्, उनीहरूको घेराउ गरिएपछि बनु कुरैजा उनीहरूबाट अलग भयो । अब्दुल्लाह बिन उबैले पनि बेइमानी गऱ्यो । उनीहरूको मित्र कबिला गत्फान पनि सहयोग गर्न आएन । अन्ततः कुनै पनि उनीहरूको मदत गर्न वा उनीहरूको दुःखमा साथ दिन तयार भएनन् । त्यसैले अल्लाहले उनीहरूको घटनाको उदाहरण यसरी वर्णन गरेका छन् ।

كَمَثَلِ الشَّيْطَانِ إِذْ قَالَ لِلْإِنْسَانِ اكْفُرْ فَلَمَّا كَفَرَ قَالَ إِنِّي بَرِيءٌ مِنْكَ إِنِّي أَخَافُ اللَّهَ رَبَّ الْعَالَمِينَ ( الحشر : 16 )

शैतान जस्तै हुन्, जब शैतानले मानिससँग भन्छ, इन्कार गर, जब मानिसले इन्कार गर्छ अनि उसलले भन्छ म तिमीहरूबाट अलग छु म त संसारका पालनकर्तासँग डराउँछु । (अल् हश्र:१६)

त्यहाँ उनीहरूलाई धेरै लामो समयसम्म घेराउ गरिएन । केवल ६ रातसम्म घेराउ गरिएको थियो । केही भनाई अनुसार १५ रातसम्म । त्यस अवधिमा अल्लाहले उनीहरूको मनोबललाई निरूत्साहित बनाइदिए । उनीहरूको हौसला टुट्यो । उनीहरू हतियार त्याग्न तयार भए । हामी मदिनाबाट निस्कन तयार छौँ भन्ने कुरा मुहम्मदﷺलाई भन्न पठाए । उहाँले उनीहरूको देश छाड्ने प्रस्तावलाई स्वीकार्नुभयो । उहाँले उनीहरूलाई आफ्नो हतियारबाहेक उँटले बोक्न सक्ने अन्य सम्पूर्ण सरसामान र बालबच्चा समेत लैजाने स्वीकृति दिनुभयो ।

बनु नजिरले त्यस स्वीकृतिपछि आफ्नो हतियार छाड्यो र घरका झ्याल ढोका पनि साथमा लैजानको लागि आफ्नो घरबार भत्काउन थाल्यो । कुनै कुनैले त छानोको कडी र गारोको किल्ला पनि लगे । त्यसपछि महिला तथा बालबच्चाहरूलाई सवारीमा बसालेर ६ सय उँटको भारी लिएर हिँडे । अधिकांश यहुदी र उनका अगुवाहरू जस्तै हुयै विन अख्तब र सलाम विन अबील हकिक आदि खैबरतिर लागे । एउटा जमात सिरिया मुलुकतिर लाग्यो । केवल दुई जना व्यक्ति यामैन विन अमर र अबु सअद विन वहबले इस्लाम कबुल गरे । त्यसकारण उनीहरूको मालसामानमा हात लगाइएन ।

सर्तअनुसार मुहम्मदﷺले बनु नजिरको हतियार, जमिन, घर र बगैँचाहरू कब्जामा लिनुभयो । हतियारमा पचास वटा ढाल, पचास वटा फलामे टोपी र तीन सय चालीस वटा तरवार थियो ।

बनु नजिरका ती घर जमिन र बगैँचाहरूमा केवल मुहम्मदﷺको हक थियो । ती सामानहरू आफ्नो लागि राख्ने वा अरूलाई दिने भन्नेमा उहाँको पूर्ण अधिकार थियो । त्यसकारण उहाँले युद्धप्राप्त झैँ त्यसबाट पाँचौ भाग निकाल्नु भएन । किनभने अल्लाहले त्यो माल उहाँलाई माले फइको रूपमा दिएका थिए । मुसलमानहरूले आफ्नो घोडा तथा उँट प्रयोग गरी युद्ध गरेर त्यसलाई हासिल गरेका थिएनन् । त्यसकारण उहाँले आफ्नो विशेष अधिकार प्रयोग गरी त्यो सम्पूर्ण माल केवल मुहाजिरहरूमा भाग लगाइदिनुभयो । तर दुई जना सहाबी अबु दुजाना र सहल विन हुनैफलाई उनीहरूको गरिबीको कारण केही भाग प्रदान गर्नुभयो । त्यसमध्ये एउटा सानो भाग उहाँले आफ्नो लागि पनि राख्नुभयो । त्यसबाट उहाँले आफ्नो श्रीमतीहरूको वर्षभरीको खर्च चलाउनु हुन्थ्यो । त्यसपछि शेष रहेको माल जिहादको लागि हतियार तथा घोडा  खरिद गर्नमा खर्च गर्नुभयो ।

बनु नजिरको युद्ध हिजरी सम्बत ४ साल रब्बीअल औवल महिना तद्नुसार इस्वी सम्बत ६२५ अगस्त महिनामा भएको थियो । अल्लाहले त्यस बारेमा पूर्ण सुरह (सुरह हश्र) अवतरण गरे । त्यसमा यहुदीहरूलाई देशनिकाला गरिएको चित्रण गरिनुका साथै मुनाफिकहरूको चालबाजीको पोल खोलिएको छ । त्यसैगरी त्यसमा

माल फइ बारे निर्देशन गरिनुका साथै मुहाजिर तथा अन्सारको प्रशंसा गरिएको छ । साथै युद्धरणनीतिको उद्देश्यले शत्रुहरूको बोटविरूवा काट्न सकिन्छ, त्यसमा आगो पनि लागउन सकिन्छ र त्यसो गर्दैमा जमिनमा फसाद हुने होइन भन्ने कुराको वर्णन गरिएकोछ । त्यसपछि मोमिनहरूलाई ईशभय अपनाउन र महाप्रलयको तयारी गर्न निर्देशन गरिएको छ । ती सम्पूर्ण विवरणपछि अल्लाहले आफ्नो प्रशंसा गर्दै आफ्नो नाम तथा विशेषताको वर्णन गरी यो सुरह टुंग्याएका छन् ।

इब्ने अब्बास भन्छन् : यस सुरहलाई सुरह बनु नजिर भन ।[१]

यस युद्ध बारे इब्ने इसहाक तथा अन्य जीवनीकारहरूको विवरणको सारांश हो यो । अबु दाउद र अब्दुर्रज्जाकले त्यस युद्धको एक अर्को कारण बताएका छन् जो यस प्रकार छ । जब बदरको युद्ध भयो । बदरको युद्धपछि कुरैशले यहुदीहरूलाई तिमीहरुसँग ढाल तथा किल्लाहरू छन् तसर्थ तिमीहरूले मुहम्मद विरुद्ध लडाइँमा निस्कओ नत्र हामीले तिमीहरूलाई यस्तो उस्तो गरिदिनेछौँ र तिम्रो महिलामाथि दुर्व्यवहार गर्नेछौँ भनी पत्र लेख्यो । यहुदीहरूले त्यो पत्र पाएपछि बनु नजिरले षड्यन्त्र रच्ने निर्णय गऱ्यो । फलस्वरूप उनीहरूले मुहम्मदﷺकहाँ खबर पठाए, तपाईँ आफ्नो साथीहरूमध्ये तीस जनालाई लिएर हामीतिर आउनुहोस् र हामी पनि तीस जना विद्वानलाई लिएर निस्कन्छौँ । तपाईँ र हाम्रो बीचमा पर्ने फलानो ठाउँमा हाम्रो भेट होस् । उनीहरूले तपाईंको कुरा सुन्ने छन् । यदि उनीहरूले तपाईंको कुरा साँचो माने र तपाईंमाथि विश्वास गरे भने हामी सबैले इस्लाम स्वीकार्ने छौँ ।

त्यस प्रस्तावलाई स्वीकार गर्दै मुहम्मदﷺ तीस जना साथीहरूलाई लिएर निस्कनुभयो । यहुदीहरूको तर्फबाट पनि तीस जना वुद्धिजीवी आए । एउटा खुला ठाउँमा पुगेपछि यहुदीहरूले आपसमा भने : उनीहरू तीस जना छन् , उनीहरूमध्ये प्रत्येक व्यक्ति अरूभन्दा पहिला मर्न चाहन्छ, त्यस्तो अवस्थामा तिमीहरू उनीहरूकहाँ कसरी पुग्न सक्छौ ? त्यसपछि उनीहरूले मुहम्मदﷺलाई के खबर पठाए भने यदि हामी सबै गरी ६० जना भयौँ भने तपाईँ कसरी सम्झाउनु हुन्छ र हामीले कसरी सम्झने ? त्यसकारण तपाईँ तीन जना ल्याउनुहोस् र हामी पनि तीन जना ल्याउछौँ । यही कुरा उचित हुन्छ र हामी सबैले तपाईंको कुरा सुन्ने छौँ । अन्ततः मुहम्मदﷺ तीन जना सहाबीहरू लिएर जानुभयो । उता यहुदीहरूले मुहम्मदﷺको हत्या गर्नको लागि भालाहरू लुकाएर राखेका थिए । तर बनु नजिरकी एक जना सज्जन महिलाले आफ्नो भतिजो जो एक अन्सारी मुसलमान थिए उनीसँग मुहम्मदﷺतर्फ यहुदीहरूको षडयन्त्र बारे खबर दिएर पठाइन् । उनी छिटोछिटो मुहम्मदﷺकहाँ उनीहरूभन्दा पहिला पुगे र गोप्य रूपमा उनीहरूको बारेमा बताए । मुहम्मदﷺ

१ इब्ने हेशाम भाग २, जादुल मआद भाग २, सही बुखारी भाग २

त्यहींबाट फर्कनुभयो र भोलिपल्ट साथीहरूको दलबलका साथ गएर उनीहरूलाई घेर्नुभयो । उहाँले उनीहरूसँग भन्नुभयो, जबसम्म तिमीहरूले सम्झौता गर्दैनौ तबसम्म तिमीहरूप्रति विश्वास गर्न सकिदैन । उनीहरूले कुनै पनि प्रकारको सम्झौता गर्न अस्वीकार गरे । त्यसकारण उहाँ र उहाँका साथीहरूले त्यो दिन उनीहरूको विरुद्ध लडाइँ लडे । भोलिपल्ट घोडचढी दस्ता लिएर मुहम्मदﷺ बनु कुरैजा भएतिर जानुभयो । बनु नजिरलाई आफ्नो अवस्थामा छोडिदिनुभयो । बनु कुरैजालाई पनि कुनै एक कुरामा सम्झौता गर्ने प्रस्ताव गर्नुभयो । उनीहरूले सम्झौता गरे । तसर्थ उहाँहरू उनीहरूबाट फर्कनुभयो । भोलिपल्ट दस्ता लिएर बनु नजिर भएतिर जानुभयो । उनीहरूसँग युद्ध भयो । आखिरकार उनीहरूले हतियारबाहेक उँटमा बोकाउन सक्ने अन्य मालसामान लिएर घरबार छोडी जान स्वीकार गरे । तसर्थ बनु नजिर आएर आफ्नो सामान घरका ढोका, दाउरा जेजति उँटमा बोकाउन सक्थ्यो उँटमा बोकायो । उनीहरूले आफैले आफ्नो घरबार भत्काएर भताभुंग पारे । काम लाग्ने काठहरू लोड गरे । सिरिया उनीहरूको पहिलो शरण स्थल र ठेगाना बन्यो ।[१]

## नजदको युद्ध

बनु नजिरको युद्धमा कुनै खास योगदान विना मुसलमानहरूलाई शान्दार सफलता हासिल भएको थियो । त्यसबाट मदिनामा स्थापित मुसलमानहरूको सत्ता बलियो भयो भने मुनाफिकहरूमाथि कालो बादल छायो । अब उनीहरूमय खुलेर कुनै प्रदर्शन गर्ने आँट आएन । त्यसपछि मुहम्मदﷺले ती पाखे मानिसहरूतर्फ आफ्नो ध्यानकेन्द्रित गर्नुभयो जसले उहुदको युद्धमा मुसलमानहरूलाई अति कठिनाइमा पारेका थिए साथै अपराधिक तरिकाले इस्लामका प्रचारकहरूमाथि आक्रमण गरी उनीहरूलाई मृत्युघाटमा पुऱ्याएका थिए । उनीहरूको आँट अति बलियो हुँदै गएको थियो र मदिनामाथि आक्रमण गर्न सोचिरहेका थिए ।

तसर्थ मुहम्मदﷺ बनु नजिरको युद्धपछि ती पाखे मानिसहरूको कारवाही गर्न तयार हुन नपाउँदै उहाँलाई बनु गत्फानका दुई वटा कबिला बनु महरिब र बनु सअलबाले लडाइँको लागि पाखे मानिसहरू र अरबी देहातीहरूको दल जम्मा गरिरहेको खबर पुग्यो । त्यो खबर पाउना साथ कठोर पाखेहरूलाई त्रसित गर्न र मुसलमान विरुद्ध गर्न खोजेको उनीहरूको कारवाहीलाई निरुत्साहित तुल्याउन मुहम्मदﷺले नजदमाथि आक्रमण गर्ने निर्णय गरी नजदको मरुभूमिमा टाढासम्म जानुभयो ।

---

१ सुनन् अबु दाऊद भाग २

उता अपराधी पाखेहरू जो लुटमारमा व्यस्त थिए मुसलमानहरूको तर्फबाट हुन लागेको अचानक आक्रमणको खबर पाउने वित्तिकै डराएर भागे र पहाडको टुप्पोमा गएर लुके । मुसलमानहरू लुटेरा कबिलाहरूमाथि आफ्नो धाक जमाएर सकुशल मदिना फिर्ता भए ।

जीवनीकारहरूले यस बारेमा एक निश्चित युद्धको नाम उल्लेख गरेका छन् जो हिजरी सम्बत ४ साल रब्बीअल औवलको महिनामा नजदको भूमिमा भएको थियो । त्यसै युद्धलाई जातुर्रेकाको युद्ध भनेर नामाकरण गरेका छन् । सत्य तथ्य खोतल्ने हो भने नजदको भूमिमा युद्ध भएको कुरामा शंका गर्ने ठाउँ भेटिदैन । किनभने मदिनाको परिस्थिति पनि केही त्यस्तै थियो । अबु सुफ्यानले उहुदको युद्धबाट फिर्ता हुँदा मुसलमानलाई बदरको मैदानमा आगामी वर्ष युद्ध गर्ने जुन चेतावनी दिएको थियो र जसलाई मुसलमानहरूले पनि स्वीकारेका थिए त्यसको समय नजिकिँदै थियो । पाखे तथा अरबी देहातीहरूलाई अपराध तथा आडम्बर गतिविधिमा छोडेर मदिना खाली गरेर बदरको घमसान युद्धमा जान युद्धरणनीतिको दृष्टिले अलि कति पनि उचित थिएन । बरू बदरमा हुने सम्भावित घमसान युद्धमा जानुभन्दा पहिला ती पाखे तथा देहाती अरबीहरूको घमण्ड तोड्नुका साथै उनीहरूको मदिना जाने आँट पनि निरुत्साहित गर्नु जरुरी थियो ।

हिजरी सम्बत ४ साल रब्बीअल औवलमा भएको त्यो युद्ध नै जातुर्रेकाको युद्ध थियो भन्नु मेरो अध्ययन अनुसार सही छैन । किनभने जातुर्रेकाको युद्धमा अबु हुरैरा र अबु मुसा अश्अरी सरिक थिए । अबु हुरैरा उहुदको युद्धभन्दा केही दिन पहिला मात्र इस्लाममा प्रवेश गरेका थिए । त्यसैगरी अबु मुसा अश्अरी मुसलमान भएर यमन हुँदै जाँदा उनको डुङ्गा हब्शाको किनारामा पुगेर रोकिएको थियो । मुहम्मदﷺ खैबरमा हुँदा उनी हब्शाबाट फिर्ता आएका थिए । यसरी उनको मुहम्मदﷺसँग खैबरमा नै पहिलो भेट भएको थियो । तसर्थ जातुर्रेकाको युद्ध खैबरको युद्धपछि नै भएको थियो ।

हिजरी सम्बत ४ सालमा एक लामो अवधिपछि जातुर्रेकाको युद्ध भएको थियो । किनभने मुहम्मदﷺले जातुर्रेकाको युद्धमा सलातुल खौफ[१] अर्थात खतरा अवस्थामा पढिने नमाज पनि पढ्नुभएको थियो । सलातुल खौफ सबैभन्दापहिला असफान्को युद्धमा पढिएको थियो । असफान्को युद्ध खन्दकको युद्धपछि भएको हो भन्ने कुरामा

---

१ युद्ध अवस्थामा पढिने नमाजलाई सलातुल खौफ भनिन्छ । नमाज पढने तरीका यस प्रकार छ : हतियारधारी आधा सैनिक नमाज पढाउने इमामको पछाडि नमाज पढदछन् बाँकी रहेका आधा सैनिकले सुरक्षा दिइरहेका हुन्छन् । एक रकअतपछि सुरक्षा दिने सैनिक नमाज इमामको पछाडि आउँछन् र इमामको पछाडि रहेका सैनिकले सुरक्षा दिन्छन् । इमामले दोस्रो रकअत समाप्त गरेपछि दुवै सैनिकले पालैपालो आफनो नमाज पूरा गर्छन् । यस नमाजका अन्य तरीकाहरु पनि छन् जुन युद्ध अनुसार अपनाइन्छ । विवरण हदिसका किताबहरुमा उल्लेख छ ।

कुनै दुईमत छैन । जबकि खन्दकको युद्ध हिजरी सम्बत ५ सालको दौरान भएको थियो । उस्फान्को युद्ध हुदैयिबा यात्राअन्तर्गतको एउटा घटना थियो । हुदैवियाको यात्रा हिजरी सम्बत ६ सालको आखिरमा गरिएको थियो । त्यहाँबाट फिर्ता भएर मुहम्मदﷺ खैबरतिर लाग्नुभयो । त्यो दृष्टिकोणबाट पनि जातुर्रेकाको युद्ध खैबरको जमानाभन्दा पछि नै भएको प्रमाणित हुन्छ ।

## बदरको दोस्रो युद्ध

अरबी देहातीको घमण्डलाई तोडेर उनीहरूको अपराधबाट सुरक्षित भइसकेपछि मुसलमानहरूले आफ्नो ठूलो शत्रु कुरैशसँग युद्ध गर्ने तयारी सुरु गरे । किनभने त्यो साल पुरा हुनै लागेको थियो र उहुदमा तोकिएको समय नजिकिदै थियो । अबु सुफ्यान र उसको दलसँग युद्ध गर्ने र दुवै पक्षमध्ये जो सही मार्गमा छन् र दीर्घकालिन अस्तित्वको जो हकदार छ परिस्थिति उनीहरूको हकमा होस् भन्ने हेतुले तत्वदर्शीका साथ युद्धको नेतृत्व गर्ने दायित्व मुहम्मदﷺ र उहाँका साथीहरूमाथि आएको थियो ।

तसर्थ हिजरी सम्बत ४ साल शअबान महिना तद्नुसार ६२६ इस्वीमा मुहम्मदﷺ मदिनाको व्यवस्थापन अब्दुल्लाह विन रवाहालाई सुम्पिएर त्यस निश्चित युद्धको लागि बदरतर्फ लाग्नुभयो । उहाँको साथमा १५०० फौज र दश वटा घोडा थिए । उहाँले आफ्नो फौजको झण्डा अलीलाई दिनुभयो र बदर पुगेर पाल टाँगी बहुदेववादीहरूको प्रतीक्षामा बस्नुभयो ।

अर्कोतर्फ अबु सुफ्यान पनि पचास सवार समेत दुई हजार फौजको दल लिएर निस्क्यो र मक्काबाट केही टाढाको उपत्यका मरुज्जहरान् पुगेर मुजिन्न नामक प्रसिद्ध मुहानमा गएर पाल टाँगेर बस्यो । तर ऊ मक्काबाट हिँड्दा नै सुस्त तथा संकोचित थियो । पटक पटक मुसलमानविरुद्ध भएको विगतको लडाइँको नतिजा बारे सोच्थ्यो र डर एवं त्रासले थरथराउँथ्यो । मरुज्जहरान् पुगेपछि उसको हौसलाले जवाफ दिन थाल्यो र फर्कने बहाना खोज्यो । आखिरकार आफ्ना साथीहरूसँग भन्यो: कुरैशका साथी हो ! हरियालीले जतातते भरिपूर्ण भएको स्थितिमा युद्ध गर्न उचित हुन्छ । त्यो समयमा जनावरहरू पनि चर्न पाउँछन् र तिमीहरूले पनि दूध खान पाउँछौ । अहिले खडेरी छ तसर्थ म फिर्ता जादैछु र तिमीहरू पनि हिँड ।

फौजको सबै दस्ताभित्र त्रास छाएको जस्तो लाग्थ्यो । अबु सुफ्यानको त्यो सुझावमा कसैले विरोध गरेनन् । सबै फिर्ता भए । कसैले पनि यात्रा जारी राख्ने र मुसलमान विरुद्ध लड्ने सुझाव दिएनन् ।

उता मुसलमानहरूले बदरमा आठ दिनसम्म बसेर शत्रुहरूको प्रतीक्षा गरिरहे । त्यसबीचमा उनीहरूले आफ्नो व्यापारिक सामान दोब्बर मूल्यमा बेचे । त्यसपछि उनीहरू मदिना फिर्ता भए । युद्धको अंकुश उनीहरूको हातमा थियो । मनोबल बढेको

थियो । चारैतिर उनीहरूको पकड थियो । त्यो युद्ध मोइद, दोस्रो बदर, अन्तिम बदर र सानो बदरको नामबाट प्रसिद्ध छ ।[१]

## दुमतुल् जन्दलको युद्ध

मुहम्मद ﷺ बदरबाट फर्कँदा चारैतिर अमन शान्ति स्थापित भइसकेको थियो । इस्लामी शासन सत्ताका कारण चारैतिर अमन शान्तिको वसन्त चलेको थियो । त्यसपछि बल्ल उहाँले अरबको अन्तिम सिमानासम्म आफ्नो ध्यान केन्द्रित गर्ने मौका पाउनुभयो । परिस्थितिमा मुसलमानको नियन्त्रण होस् र मित्रदेखि लिएर शत्रुसम्म सबैले त्यसको अनुभूति गरोस् र त्यसलाई स्वीकारोस् भन्ने दृष्टिकोणले त्यस अमन शान्तिको आवश्यकता पनि थियो ।

तसर्थ बदरको सानो युद्धपछि ६ महिनासम्म मुहम्मद ﷺ अमन शान्तिका साथ मदिनामा बस्नुभयो । त्यसपछि सिरिया नजिक दुमतुल जन्दलको वपिरिका कबिलाहरूले काफेलामाथि डाँका गरेका छन् र त्यहाँबाट आवतजावत गर्नेहरूको सामान लुटिदै छ भन्ने खबर मुहम्मद ﷺ लाई पुग्यो । उनीहरूले मदिनामाथि आक्रमण गर्नको लागि एक ठूलो दल तयार गरेका छन् भन्ने कुरा पनि थाहा भयो । त्यो सूचना पाउना साथ मुहम्मद ﷺ ले सबा विन अरफा गिफारीलाई मदिनामा आफ्नो कायमुकाम बनाई एक हजार मुसलमानहरूलाई लिएर हिँडनुभयो । त्यो घटना २५ रब्बीअल औवल ५ हिजरीको हो । बाटो देखाउनको लागि बनु अजराह कबिलाको मज्कुर नामक एक जना व्यक्तिलाई साथमा लगिएको थियो ।

त्यस युद्धमा शत्रुमाथि अचानक आक्रमण गर्न सकियोस् भन्ने हेतुले उहाँहरू रातमा यात्रा गर्नुहुन्थ्यो र दिनमा लुकेर बस्नुहुन्थ्यो । उहाँहरू उनीहरूको नजिक पुग्दा उनीहरू त्यहाँबाट निस्किसकेको खबर प्राप्त भयो । त्यसकारण मुसलमानहरूले उनीहरूको जनावर तथा गोठालेहरूमाथि आक्रमण गरे । उनीहरूमध्ये केही हात लागे भने केही भागे ।

दुमतुल जन्दलको वासिन्दाहरू जताजता फर्केका थिए उतैउतै भागे । मुसलमानहरू दौमतको मैदानमा पुग्दा उनीहरूले कसैलाई पनि भेटाएनन् । केही दिन त्यहाँ बसेर उहाँले विभिन्न दस्ताहरूलाई यताउता पठाउनुभयो । तर कोही पनि भेटिएन । अन्तिममा उहाँ मदिना वापस आउनुभयो । त्यस युद्धमा उयैना विन हिस्नसँग सम्झौता भएको थियो ।

दुमत, सिरियाको सिमानामा पर्ने एउटा सहर थियो । त्यहाँबाट दिमश्क पाँच रात र मदिना पन्ध्र रातको यात्रा बराबरको दुरी छ ।

---

१ इब्ने हेशाम भाग २, जादुल मआद भाग २

यिनै अचानक तथा निर्णायक कदमहरू र दुरदर्शी विचारमा आधारित योजनाद्वारा मुहम्मदﷺ इस्लामी शासनमा अमन चैन वहाल गर्ने र परिस्थितिमाथि नियन्त्रण गर्ने सफलता हासिल गर्नुभयो । समयको गतिलाई मुसलमानको पक्षमा मोडिदिनुभयो । उहाँहरूलाई चारैतिरबाट घेरेको आन्तरिक तथा वाह्य कठिनाइलाई उहाँले न्युन गर्नुभयो । मुनाफिकहरू डराएर चुपचाप बसे । यहुदको एक कबिलालाई देशनिकाला गरियो । अर्कोले छिमेकीको हक अदा गर्ने प्रतिज्ञा गऱ्यो । खाते तथा अरबी देहातीहरू कमजोर भए । कुरैशहरू मुसलमान विरुद्ध टक्राउन मानेनन् । तसर्थ मुसलमानहरूलाई इस्लामको प्रचारप्रसार गर्ने र अल्लाहको संदेशको फैलाउने अवसर प्राप्त भयो ।

# अहजाबको युद्ध

एक वर्षभन्दा बढी लामो अवधिको निरन्तर सशस्त्र संघर्ष तथा कारवाहीपछि खाडी मुलुक अरबमा शान्ति छायो । चारैतिर अमन चैन र शान्ति तथा स्थिरताको चहलपहल भयो । यहुदीहरूले आफ्नो धुर्तता, षडयन्त्र र धोकाबाजीको कारण अपमान तथा वेइज्जती जस्तो तीतो मजा चाख्नु पऱ्यो । तर पनि उनीहरूलाई अँझै होस् आएन । उनीहरूले आफ्नो धोका, छलकपट र षड्यन्त्रको तीतो परिणामबाट पनि कुनै पाठ सिकेनन् । तसर्थ खैबर पुगेर उनीहरूले मुसलमान र बहुदेववादीबीच चलिरहेको सशस्त्र संघर्षको नतिजाको प्रतीक्षा गरिरहे । तर जब समयले मुसलमानको साथ दियो रातदिनको चक्रब्युहले उनीहरूको पकडलाई झन् व्यापक बनाइदियो र दूरदूरसम्म उनीहरूको साशन स्थापित भयो । त्यो कुरा देखेर उनीहरू डाहले झन् जल्न थाले । उनीहरूले पूनःनयाँ ढंगको षड्यन्त्र गर्न थाले । उनीहरू मुसलमानलाई मेटाउने उद्देश्यले उनीहरूमाथि अन्तिम आक्रमण गर्ने तयारीमा जुटे । तर उनीहरूलाई प्रत्येक्ष रूपमा मुसलमानसँग लडाइँ गर्ने हिम्मत भएन । त्यसकारण त्यस उद्देश्यलाई पूरा गर्नको लागि उनीहरूले जुन भयानक योजना बनाए त्यसको विवरण निम्न लिखित छ ।

बनु नजिरका बीस जना सरदार र नेताहरू मक्काका कुरैशकहाँ गए । उनीहरूलाई मुहम्मदﷺ विरुद्ध युद्ध गर्न प्रोत्साहित गर्दै आफ्नो सहयोग दिने विश्वास दिलाए । कुरैशलाई उनीहरूको कुरा मान्य भयो । उहुदको युद्धमा उनीहरूले मुसलमानसँग बदरको मैदानमा लड्ने प्रतिज्ञा गरे तापनि त्यसलाई भंग गरेका थिए । त्यसकारण अब तोकिएको युद्धद्वारा आफ्नो प्रतिष्ठा कायम राख्ने र आफुले गरेको बचन पनि पूरा गर्ने उनीहरूको सोच थियो ।

त्यसपछि यहुदको टोली बनु गत्फानकहाँ गएर कुरैशलाई झैं उनीहरूलाई पनि युद्धको लागि प्रोत्साहन गऱ्यो । फलतः उनीहरू पनि तयार भए । त्यसपछि त्यस कबिलाले अरबका अन्य कबिलाहरूकहाँ घुम्दै उनीहरूलाई युद्धको लागि प्रेरित गरे । ती कबिलाहरूबाट पनि धेरै मानिसहरू तयार भए । यसरी यहुदी राजनीतिज्ञहरूले काफिरहरूका ठूलाठूला दलहरूलाई मुहम्मदﷺको आन्दोलन र मुसलमान विरुद्ध भडकाएर युद्धको लागि तयार गर्नमा ठूलो सफलता हासिल गरे ।

त्यसपछि तोकिएको योजना बमोजिम दक्षिणबाट कुरैश, केनाना र तहामा बसोबास गरेका अन्य मित्र कबिलाहरू मदिनातर्फ लागे । उनीहरू सबैको कमाण्डर अबु सुफ्यान थियो । लडाकुको संख्या चार हजार थियो । त्यो लस्कर मर्रुज्जहरान पुगेपछि बनु सुलैम पनि सामिल भयो । पूर्वबाट गत्फानी कबिलाहरू फजारह,मुर्राह र अश्जअ मदिनातर्फ लागे । फजारहको कमाण्डर उयैना विन हिस्न थियो । बनु

मर्राहको कमाण्डर बनु औफ थियो भने विन अश्जअको कमाण्डर मस्अर विन रखिला थियो । त्यसमा बनु असद र अन्य कबिलाका अत्यधिक मानिसहरू आएका थिए ।

ती सम्पूर्ण कबिलाहरू निर्धारित समय र निश्चित योजना बमोजिम मदिनातिर लागे । फलस्वरूप केही दिनमा नै मदिनाभित्र दशौं हजार फौजको एउटा विशाल लस्कर जम्मा भयो । त्यो लस्कर जति मदिनाको सम्पूर्ण जनसंख्या पनि थिएन । आक्रमणकारीको उर्लिएको त्यो भेल मदिनाको चारदिवारीमा अचानक पुगेको भए मुसलमानहरूको लागि ठूलो खतरा हुन सक्थ्यो । उनीहरूको जरो नै उखेलिने थियो । उनीहरू पूर्ण रूपले सिद्धिन्थे । तर मदिनाको नेतृत्व अति सतर्क एवं सचेत थियो । उनीहरूले सदा परिस्थितिमाथि नजर राख्थे । परिस्थितिलाई मद्देनजर गर्दै सम्भावित घटनाको अड्कल गरी त्यसको सामनाको लागि उचित कदम पनि चाल्थे । तसर्थ काफिरहरूको वृहत लस्कर तयार हुना साथ मदिनाका गुप्तचर समूहले आफ्नो नेतृत्वलाई त्यस बारे खबर दियो ।

खबर पाउने वित्तिकै मुहम्मद ﷺ ले आफ्नो कमाण्डरहरूको उच्च सल्लाहकार समितिको बैठक बोलाउनुभयो । प्रतिकारात्मक रणनीति बारे विमर्श गर्नुभयो । सल्लाहकार समितिका सदस्यहरूले विचारविमर्श गर्ने क्रममा सलमान फारसीको एउटा प्रस्तावमाथि सहमति गरे । उनले आफ्नो प्रस्ताव निम्न शब्दमा प्रस्तुत गरे । हे ! ईशदूत फारसमा जब हामीलाई घेरामा लिइन्थ्यो त्यतिखेर हामीले आफ्नो वरिपरि खाडल खन्ने गर्थ्यौं ।

प्रतिकार गर्नको लागि त्यो एउटा रहस्यमय सुझाव थियो । अरबवासीहरू त्यसबाट अनविज्ञ थिए । मुहम्मद ﷺ ले त्यो सुझावलाई स्वीकार गरी त्यसलाई तुरुन्तै कार्यान्वयन गर्नको लागि प्रत्येक दश जनालाई चालीस हात खाडल खन्ने काममा लगाउनुभयो । मुसलमानहरूले मेहनत र बडो उत्साहका साथ खाडल खन्न सुरु गरे । मुहम्मद ﷺ ले त्यस कामको लागि प्रेरित गर्दै आफु पनि सामिल हुनुभयो । तसर्थ बुखारीमा सहल विन सअदमार्फत वर्णन गरिएको छ, उनी भन्छन् : हामीहरू मुहम्मद ﷺ को साथमा खन्दकमा थियौं मानिसहरूले खाडल खनिरहेका थिए र हामीहरूले पिठ्युँमा माटो बोकिरहेका थियौं त्यसैबीच मुहम्मद ﷺ ले भन्नुभयो :

(اللهم لا عيش إلا عيش الآخرة فاغفر للمهاجرين والأنصار)

हे ! अल्लाह, जीवन त केवल महाप्रलयको जीवन हो तसर्थ मुहाजिर तथा अन्सारहरूलाई क्षमा गरिदेऊ ।[१]

एक अर्को हदिसमा अनसमार्फत वर्णन गरिएको छ उनी भन्छन् : मुहम्मद ﷺ खन्दकतिर आउँदा उहाँले मुहाजिर तथा अन्सारलाई विहानको चिसोमा खाडल

---

१ सही बुखारी भाग २

खनिरहेको देख्नुभयो । उनीहरूसँग खाडल खन्ने कुनै नोकर पनि थिएन । उहाँले उनीहरूको दुःख र उनीहरू भोकाएको देखेर भन्नुभयो:

(اللهم لا عيش إلا عيش الآخرة فاغفر للانصار والمهاجرة )

हे ! अल्लाह जीवन त केवल महाप्रलयको जीवन हो तसर्थ अन्सार तथा मुहाजिरहरूलाई क्षमा गरिदेऊ ।

अन्सार र मुहाजिरहरूले जवाफमा भने :

نحن الذين بايعوا محمدا    على الجهاد ما بقينا ابدا

हामी ती व्यक्ति हौं जसले बाँचुन्जेल मुहम्मदﷺको साथमा जिहाद गर्ने प्रतिज्ञा गरेका छौं ।[१]

बुखारीको एक अर्को हदिसमा बराअ विन आजिबमार्फत वर्णन गरिएको छ, उनी भन्छन् : मैले मुहम्मदﷺलाई खन्दकमा माटो बोकिरहेको देखें । उहाँको ज्यान पनि धुलोमैलो भएको थियो । उहाँको केश पनि बाक्लो थियो । त्यसै बेला उहाँले अब्दुल्लाह विन रवाहाले रचेको पंक्तिहरू भनेको मैले सुनें । उहाँले माटो उठाउँदै निम्न कुरा भन्नुहुन्थ्यो :

اللهم لو لا انت ما اهتدينا    ولا تصدقنا ولا صلينا
فانزلنا سكينة علينا    وثبت الأقدام ان لاقينا
ان الا ولى رغبوا علينا    وان ارادو فتنة ابينا

हे ! अल्लाह यदि तिमी नभएको भए हामी सही मार्गमा हुने थिएनौं । न हामीले दान दिने थियौं न नमाज पढ्ने थियौं । तसर्थ हामीलाई शान्ति देऊ । युद्ध भएको खण्डमा हाम्रो कदमलाई बलियो बनाइदेऊ । उनीहरूले हाम्रो विरुद्ध मानिसहरूलाई भड्काएका छन् । यदि उनीहरूले कुनै अस्थिरता चाहेका छन् भने हामी कदापि चुप लागेर बस्न सक्दैनौं ।

बराअ भन्छन् : उहाँले अन्तिम श्लोक लय हालेर बाचन गर्नुभयो । एक अर्को हदिसमा अन्तिम श्लोक यस प्रकार थियो :

ان الا ولى قد بغوا علينا    وان ارادو فتنة ابينا

अनुवाद छ : उनीहरूले हामीमाथि अत्याचार गरेका छन् । यदि हामीलाई फसाउने प्रयास गरे भने हामी कदापि झुक्ने छैनौं ।[२]

मुसलमानहरूले एकातर्फ सक्रिय भएर काम गरिरहेका थिए भने अर्कोतर्फ भोकको पीडा सहिरहेका थिए । त्यसको कल्पना गर्ने हो भने मुटु पनि चर्किन्छ ।

---

१ सही बुखारी भाग २
२ सही बुखारी भाग २

अनस भन्छन् : खन्दक खन्नेहरूका लागि दुई सेर जौँको ढिडो बनाइन्थ्यो । मानिसहरू भोकाएका हुन्थे । ढिडोको स्वाद पनि नराम्रो हुन्थ्यो र बासना पनि नराम्रो आउँथ्यो ।[१]

अबु तलहा भन्छन् : हामीले मुहम्मदﷺसँग भोक लागेको कुरा भन्यौँ । हामीहरूले भोकका कारण पेटमा बाँधेको एक एक ढुंगा देखाउँदा मुहम्मदﷺले पनि आफ्नो पेट खोलेर दुई वटा ढुंगा देखाउनुभयो । खन्दक खन्दा ईशदूत्वको कैयन चमत्कारहरू पनि देखिए । बुखारी नामक हदिसमा जाबिर बिन अब्दुल्लाहमार्फत वर्णन गरिएको छ : उनले मुहम्मदﷺलाई अति भोकाएको देखेर बाख्राको एउटा पाठो ल्याएर बध गरे । उनकी श्रीमतीले २.५ किलो जति गहुँ पिँधिन र उनले मुहम्मदﷺसँग गोप्य रूपमा केही साथीहरूलाई लिएर भोजनको लागि आउन भने । तर मुहम्मदﷺ खन्दकमा रहेका करिब एक हजार जना सबै साथीहरूलाई लिएर जानुभयो । सबै साथीहरूले यति थोरै खानामा पेटभरी खाँदा पनि ताउलाको मासु जतिको तत्तिनै रह्यो । भाँडो भरिएर उम्लिरहेको थियो । मुछिएको पिठो पनि जतिको तत्तिनै रह्यो । त्यसबाट रोटी पकाउदै गरे ।[२]

नोमान बिन बशिरको बहिनीले खन्दक भएको ठाउँमा आफ्नो दाइ र मामाको लागि दुई सेर खजुर लिएर आइन् । मुहम्मदﷺले त्यो खजुर माग्नुभयो र एउटा कपडामा राखेर खाडल खन्नेहरूलाई बोलाउनुभयो । उनीहरूले त्यो खजुर खादै जाँदा खजुर बढ्दै गयो । खाडल खन्नेहरू सबैले खाएपछि पनि खजुर कपडाको किनाराबाट फालिदै थियो ।[३]

त्यही आयाममा यी दुई वटा चमत्कारभन्दा अँझ ठूलो चमत्कार पनि देखियो । इमाम बुखारीले जाबिरमार्फत वर्णन गरेका छन् , जाबिर भन्छन् : हामीहरूले खाडल खन्ने क्रममा एउटा साह्रो ढुंगा निकाल्न सकेनौँ । मानिसहरू मुहम्मदﷺको सेवामा हाजिर भएर खाडलमा एउटा ढुंगाको टुक्रा बाधक बनेको कुरा सुनाए । उहाँले भन्नुभयो,म आउँदैछु । त्यहाँ जान लाग्दा उहाँको पेटमा ढुंगा बाँधिएको देखियो । हामीहरूले पनि तीन दिनदेखि केही खाएका थिएनौँ । उहाँले कोदालीले हानेपछि त्यो टुक्रा धुलोपिठो भयो ।[४]

बराअ भन्छन् : खन्दक खन्दा केही ठाउँमा साह्रो चट्टान भेटियो । त्यसमा कोदाली हान्दा कोदाली पनि उछ्रिट्टन्थ्यो तर त्यो कत्ति पनि फुट्दैन थियो । हामीले मुहम्मदﷺसँग त्यस बारे भन्यौँ । उहाँ आउनुभयो र बिस्मिल्लाह पढेर कोदाली

१ सही बुखारी भाग २
२ सही बुखारी भाग २
3 इब्ने हेशाम भाग २
४ सही बुखारी भाग २

हानेपछि त्यो ढुंगा फुट्यो । उहाँले भन्नुभयो : अल्लाहु अक्बर, मलाई सिरियाको चाबीहरू दिइएको छ, अल्लाहको कसम मैले यतिखेर त्यहाँका राता महलहरू देखिरहेको छु । त्यसपछि एक पटक फेरि हान्नुभयो जसबाट अर्को टुक्रा पनि फुट्यो । उहाँले भन्नुभयो : अल्लाहु अक्बर, मलाई फारस प्रदान गरिएको छ, अल्लाहको कसम मैले यतिखेर मदायनको सेतो महल देखिरहेको छु । तेस्रो पटक बिस्मिल्लाह पढेर हान्दा बाँकी सबै चट्टानहरू फुटे । त्यसपछि उहाँले भन्नुभयो । अल्लाहु अक्बर मलाई यमनको चाबी दिइएको छ, अल्लाहको कसम मैले यतिखेर आफ्नो ठाउँबाट सन्आका ढोकाहरू देखिरहेको छु ।[१]

इब्ने इस्हाकले यसै प्रकारको हदिस सलमान फारसीमार्फत उल्लेख गरेका छन् ।

मदिना उत्तरबाहेक चारैतिरबाट पहाड तथा खजुरका बगैंचाले घरिएको थियो । मुहम्मदﷺ एक विशिष्ट एवं अनुभवी कमाण्डर भएको नाताले मदिनामा त्यो ठूलो लस्करको आक्रमण उत्तरतिरबाट नै हुन सक्छ भन्ने उहाँलाई लागेको थियो । त्यसकारण उहाँले त्यसैतर्फ खाडल खन्न लगाउनुभयो ।

मुसलमानले खाडल खन्ने काम जारी राखे । दिनभरी खाडल खन्थे, राती घर फर्कन्थे । मदिनामा काफिरहरूको शक्तिशाली लस्कर पुग्नुअघि नै निर्धारित योजना बमोजिम खाडल तयार भयो ।[२]

उता कुरैशीहरू आफ्नो चार हजार फौज लिई मदिना गएर जरफ र जआबाको दोभान रौमामा पाल टाँगेर बसे । अर्को तर्फबाट गत्फान र उनका नजदी सहयात्रीहरू ६ हजार फौजका साथ आएर उहुदको पूर्वी सिमाना जनब नकमी भन्ने ठाउँमा पाल टाँगेर बसे ।

وَلَمَّا رَأَى الْمُؤْمِنُونَ الْأَحْزَابَ قَالُوا هَٰذَا مَا وَعَدَنَا اللَّهُ وَرَسُولُهُ وَصَدَقَ اللَّهُ وَرَسُولُهُ ۚ وَمَا زَادَهُمْ إِلَّا إِيمَانًا وَتَسْلِيمًا (الأحزاب : 22)

मुस्लिमहरूले ती मोर्चाहरूलाई देखेर भने : यो त त्यो फौज हो जसको बारेमा अल्लाह र ईशदूतले हामीलाई बचन दिएका थिए । अल्लाह र ईशदूतले सही भनेका थिए । त्यसबाट उनीहरूको मनोबल तथा आज्ञापालनामा झन् बृद्धि भयो ।
(अल् अहजाब:२२)

तर त्यो लस्करलाई देखेर मुनाफिक र कमजोर इमान भएका व्यक्तिहरू डराए ।

وَإِذْ يَقُولُ الْمُنَافِقُونَ وَالَّذِينَ فِي قُلُوبِهِمْ مَرَضٌ مَا وَعَدَنَا اللَّهُ وَرَسُولُهُ إِلَّا غُرُورًا

---

१ सुनन् नेसई भाग २, मुस्नद अनुसार यी शब्द नेसईका होइनन् । नेसइमा अन रजुलिम् मिनस्सहाबाह छ ।
२ इब्ने हेशाम भाग २

(الأحزاب : 12)

मुनाफिक तथा मनमा खोट भएका व्यक्तिहरूले भनेः अल्लाह र ईशदूतले हामीलाई जे बचन दिएका थिए त्यो धोका थियो । (अल् अहजाबः१२)

जे होस्, त्यस लस्करको सामना गर्नको लागि मुहम्मदﷺ पनि तीन हजार फौज लिएर आउनुभयो । सलअ पहाडलाई पछाडिपट्टि पारी मुसलमानहरू किल्लामा गएर बसे । अगाडि खाडल थियो जो मुसलमान र काफिरबीच बाधक बनेको थियो । **हा मिम् ला यन्सुरुन्** यो मुसलमानहरूको कोड शब्द थियो । मदिनाको व्यवस्थापनको जिम्मेवारी इब्ने उम्मे मक्तुमलाई सुम्पिइएको थियो । महिला तथा बालबच्चाहरूलाई मदिनाको किल्ला तथा सुरूङ्गहरूमा सुरक्षित गरिएको थियो ।

आक्रमण गर्ने नियतले अगाडि बढ्दै जाँदा बहुदेववादीहरूले एउटा फराकिलो खाडल देखे जो उनीहरू र मदिनाको बीचमा बाधक बनेको थियो । उनीहरूले बाध्य भई त्यसको घेराउ गर्न पऱ्यो । उनीहरू आफ्नो घरबाट त्यसको लागि तयार भएर आएका पनि थिएनन् । किनभने उनीहरूको भनाई अनुसार प्रतिकारको यस रणनीतिबाट अरबवासीहरू अनविज्ञ थिए । तसर्थ उनीहरूले आफ्नो रणनीतिमा यस समस्यालाई कतै राखेका थिएनन् ।

बहुदेववादीहरू खाडलनिर पुगेर रिस तथा क्रोधले भन्भनाइरहेका थिए । तल झर्नको लागि सानो बाटो खोजिरहेका थिए । बहुदेववादीहरूले खाडलनिर आउने आँट गर्न, हाम फालेर आउन र माटोले खाडल पुरेर पार हुनको लागि बाटो बनाउन नसकुन् भनेर उता मुसलमानहरूले उनीहरूको गतिविधिमाथि कडा नजर राखेका थिए साथै उनीहरूमाथि तीरको वर्षा पनि वर्षाएका थिए ।

उता कुरैशका सवारहरूलाई खाडल घेराउ गरी त्यसको परिणामको प्रतीक्षा गरेर बस्न गाह्रो भइरहेको थियो । किनभने त्यो गर्नु उनीहरूको बानी र शानको विपरित थियो । तसर्थ उनीहरूको एउटा समूहले जसमा अमर विन अब्दुद्, इक्रिमाह विन अबी जहल र जरार विन खत्ताब लगायतका व्यक्तिहरू थिए एउटा साँघुरो ठाउँबाट खाडल पार गरे । उनीहरूको घोडाहरू खाडल तथा सलअ पहाडको बीचमा दौडन थाले । उताबाट अली विन अबु तालिब केही मुसलमानहरूलाई लिएर निस्के । घोडा ओरालेको ठाउँलाई नियन्त्रणमा लिएर उनीहरू फर्कने बाटो नै बन्द गरिदिए । त्यहाँ अमर विन अब्दुद्ले लडाइँको लागि चुनौती दियो । अली उसको सामना गर्न सामुन्ने आए । उनले उसलाई उत्तेजित गराउने खालको कुरा भने । फलस्वरूप ऊ उत्तेजित भएर घोडाबाट हाम फाल्यो । ऊ घोडाको काँठी काटेर घोडाको शिरमा थप्पड हानेर अलीको सामुन्ने आयो । ऊ बडो बहादुर र वीरयोद्धा थियो । दुवैबीच घमसान टक्राउ भयो । एकले अर्कामाथि अगाडि बढ्दै आक्रमण गऱ्यो । आखिरकार

अलीले उसलाई सिद्धयाइदिए । बाँकी बहुदेववादीहरू भागेर खाडलपारी गए । उनीहरू त्रसित भएर भाग्दा अकरमाले आफ्नो भाला पनि छोडेको थियो ।

बहुदेववादीहरूले खाडल पार गर्न वा त्यसलाई सम्याएर बाटो बनाउनको लागि अति जमर्को पनि गरे । तर मुसलमानहरूले उनीहरूलाई त्यसो गर्न दिएनन् । उनीहरूमाथि तीर प्रहार गरेर उनीहरूलाई घाइते बनाए साथै उनीहरूको तर्फबाट वर्षाइएको तीरको सामना गरेर उनीहरूको कोसिसलाई असफल तुल्याए ।

उनीहरूको प्रतिकार गर्ने क्रममा मुहम्मदﷺ र सहाबीहरूको कुनै कुनै नमाज पनि छुटेको थियो । बुखारी र मुस्लिममा जाबिरमार्फत वर्णन गरिएको छ, उनी भन्छन् : खन्दकको दिन उमर विन खत्ताब आएर काफिरहरूलाई सराप्दै भने : हे ईशदूत आज सुर्य अस्ताउनै लाग्दा बडो मुस्किलले नमाज पढेँ । ईशदूतले भनन्नुभयो, अल्लाहको कसम मैले त अहिलेसम्म नमाज पढेकै छैन । त्यसपछि हामी मुहम्मदﷺको साथमा वतहान नामक ठाउँमा झर्यौं । उहाँले नमाजको लागि वजु बनाउनुभयो र हामीले पनि वजु बनायौँ अनि उहाँले असरको नमाज पढ्नुभयो । त्यतिखेर सुर्य अस्ताइसकेको थियो । त्यसपछि मगिरबको नमाज पढ्नुभयो । [१]

नमाज छुट्दा मुहम्मदﷺ बडो दुखित हुनुभयो र बहुदेववादीहरूको निन्दा गर्दै प्रार्थना गर्नुभयो । बुखारीमा अलीमार्फत वर्णन गरिएको छ, उनी भन्छन् : खन्दकको दिन मुहम्मदﷺले भन्नुभयो : अल्लाहले यी बहुदेववादी, यिनका घर र चिहानमा आगो भरिदेउन् । किनभने उनीहरूले हामीलाई सुर्यास्तसम्म असरको नमाजबाट बन्चित गराए ।[२]

मुस्नद अहमद र मुस्नद शाफी नामक हदिसमा वर्णन गरिएको छ, बहुदेववादीहरूले उहाँलाई असर, मगिरब र इशाको नमाजबाट बन्चित गराएका थिए । तसर्थ उहाँले सबै नमाज एकै समयमा पढ्नुभयो । इमाम नबवी भन्छन्, यी सम्पूर्ण हदिसहरूको अन्तर्सम्बन्धलाई हेर्दा खन्दकको युद्ध कैयन दिनसम्म चलिरहेको कारण एक दिन एउटा समस्या र अर्को दिन अर्को समस्या उब्जेको देखिन्छ ।[3]

बहुदेववादीहरूको खाडल पार गर्ने प्रयास र मुसलमानहरूको तर्फबाट त्यसको प्रतिकार निरन्तर रहेको कुरा उल्लेखित घटनाबाट पनि प्रष्ट हुन्छ । दुवै फौजबीच खाडल बाधक बनेकोले घमसान एवं रक्तपात युद्ध हुन सकेन केवल तीर हानाहान मात्र भयो ।

---

१ सही बुखारी भाग २
२ सही बुखारी भाग २

3 विश्लेषण सही मुस्लिम भाग १ विश्लेषक : नववी

तीर हानाहान गर्दा दुवैपक्षबाट केही व्यक्तिहरू मारिएका थिए । तर उनीहरूको संख्या भने अति न्युन थियो । अर्थात मुसलमानको तर्फबाट ६ जना र १० जना बहुदेववादीहरूको तर्फबाट मारिएका थिए । एक दुई जना तरवारको चोटबाट मारिएका थिए ।

तीर हानाहान गर्दा सअद विन मुआजलाई पनि एउटा तीर लागेको थियो । त्यसबाट उनको हातको नसा काटिएको थियो । उनलाई हिबान विन अरका नामक कुरैशीको तीर लागेको थियो । घाइते भएपछि सअदले अल्लाहसँग प्रार्थना गर्दै भने : हे ! अल्लाह तपाईंलाई थाहा छ जुन जातिले तपाईंको दूतलाई मिथ्या ठहर गऱ्यो र उहाँलाई बाहिर निकाल्यो त्यो जाति विरुद्ध जिहाद गर्न मलाई जति चाहना छ त्यति अरु कुनै जातिसँग छैन । हे ! अल्लाह, तपाईंले हामी र उनीहरूबीचको युद्धलाई अन्तिम चरणमा पुऱ्याउनु भएको छ भन्ने मलाई लागेको छ । तसर्थ यदि कुरैश विरुद्ध कुनै युद्ध बाँकी छ भने मलाई पनि त्यसको लागि जीवित राख्नु, म उनीहरूसँग तपाईंको मार्गमा जिहाद गर्नेछु । यदि तपाईंले युद्धविराम गरिदिनु भएको छ भने यसै घाउलाई मेरो मृत्युको कारण बनाइदिनु ।[1] उनको प्रार्थनाको अन्तिम शब्द थियो : जबसम्म बनु कुरैजाको मामिला बारे मेरो मनलाई सन्तुष्टि हुँदैन तबसम्म मलाई मृत्यु नदिनु ।[2] जेहोस् एकातर्फ मुसलमानहरूले युद्धमा यिनै कठिनाइलाई झेलिरहेका थिए भने अर्कोतर्फ बिखालु तथा घातक सर्पहरू जस्ता मानिसहरू आफ्नो बिलमा सल्बलाइरहेका थिए । साथै मुसलमानहरूलाई डस्ने प्रयासमा थिए । तसर्थ बनु कुरैजाको महा अपराधी हुयै विन अखतब बनु कुरैजाकहाँ आएर उनीहरूका सरदार कअब विन असद कर्जीकहाँ हाजिर भयो । सअद विन कअब त्यो व्यक्ति थियो जसलाई कुरैजाको तर्फबाट सम्झौता गर्ने अधिकार प्राप्त थियो । उसले मुहम्मदﷺसँग युद्धको अवसरमा उहाँको सहयोग गर्ने बाचा पनि गरेको थियो, जस्तै पछाडिको पृष्ठमा उल्लेख गरिएको छ । हुयै आएर उसको ढोका ढक्ढक्यायो, उसले भित्रबाट ढोका बन्द गरेको थियो । तर हुयैले उसँग अनेक थरीका कुरा गरी उसलाई ढोका खोल्न बाध्य बनायो । हुयैले भन्यो: हे कअब, म तिमीकहाँ आजको प्रतिष्ठा तथा उर्लेको सागर लिएर आएको छु । मैले कुरैशलाई उसको सरदार र नेताहरू समेत ल्याएर रौमा नामक दोभानमा उतारिदिएको छु साथै बनु गत्फानलाई पनि उसको सरदार तथा नेताहरू समेत ल्याएर उहुद नजिक जनब नकमी भन्ने ठाउँमा जम्मा

---

१ सही बुखारी भाग २
२ इब्ने हेशाम भाग २

गरेको छु । उनीहरूले मसँग मुहम्मदﷺ र उसका साथीहरूलाई पूर्ण रूपले नसिद्धयाउञ्जेल त्यहाँबाट नहट्ने परण गरेका छन् ।

कअबले भन्यो : अल्लाहको कसम तिमीले मकहाँ युगको अपमान र वर्षिसकेको बादल लिएर आएका छौ जसमा केवल गर्जन् छ, त्यसमा अरू केही छैन । हुयै, तिमीमाथि अपसोच छ । मलाई आफ्नो हालमा छोड । मैले मुहम्मदﷺमा सत्यता तथा इमानदारी बाहेक अरू केही देखेको छैन ।

तर हुयैले उसलाई निरन्तर फकाउँदै, मनाउदै रह्यो र आफ्नो कुरा मान्न बाध्य बनायो । तर उसले उसँग एउटा सम्झौता गऱ्यो, यदि कुरैशहरू मोहम्मदलाई नसिद्धयाई फर्के भने म पनि तिमीहरूको साथमा किल्लामा जानेछु । तिमीहरूको परिणाम जे हुन्छ मेरो पनि त्यही होस् । हुयैसँगको यस सम्झौतापछि कअब विन असदले मुहम्मदﷺसँग भएको सम्झौता भंग गऱ्यो । मुसलमानप्रति रहेको दायित्वबाट हात धोएर  उनीहरूको विरुद्धमा बहुदेववादीको तर्फबाट युद्धमा सामिल भयो ।[1]

त्यसपछि बनु कुरैजाका यहुदीहरू पूर्णरूपमा युद्धको तयारीमा व्यस्त भए । इब्ने इस्हाकको बयान छ, सफिया विन्त अब्दुल मुत्तलिब हस्सान विन सावितको फारिग नामी किल्लाभित्र थिइन् । त्यहाँ हस्सान बालबालिका तथा महिलाहरूको साथमा थिए । सफिया भन्छिन् , हामीहरू भएको ठाउँबाट एक जना यहुदी जाँदै थियो । त्यो व्यक्ति किल्ला वरिपरि घुम्न थाल्यो । त्यो कुरा त्यति बेलाको हो जब बनु कुरैजा मुहम्मदﷺसँग गरेको सम्झौतालाई भंग गरी युद्धमा होमिएको थियो । हामी र उसको बीचमा हाम्रोतर्फ बाट प्रतिकार गर्ने कोही पनि थिएन । मुहम्मदﷺ र मुसलमानहरू शत्रुको सामना गर्न तयार थिए । हामीमाथि आक्रमण भएको खण्डमा पनि उहाँ शत्रुलाई छोडेर आउने स्थितिमा हुनुहुन्थेन । त्यसैले मैले भनें, हे हस्सान ! त्यो यहुदी किल्ला वरिपरि घुमिरहेको छ । उसले हाम्रो कमजोरी बारे आफ्नो साथीहरूलाई बताउँछ कि भन्ने मलाई डर लागेको छ । उता मुहम्मदﷺ र अन्य मुसलमान साथीहरू युद्धमा बाझिएका कारण हाम्रो सहयोग गर्न आउने अवस्थामा छैनन् । तसर्थ तपाईं जानुहोस् र त्यसको हत्या गरिदिनुस् । हस्सानले भने, तपाईंलाई थाहा छ । मैले त्यसो गर्न सक्दिनँ । सफिया भन्छिन् : त्यसपछि मैले नै कम्मर कसें । एउटा दाउरा लिएर किल्लाबाट झरेर त्यो यहुदी भएको ठाउँमा गएँ र त्यही दाउराले हानेर उसको अन्त्य गरिदिएँ । किल्लाभित्र आएर हस्सानसँग भनें ,जानु त्यसको

---

१ इब्ने हेशाम भाग २

हतियार र अन्य सामान निकाल्नु । ऊ पुरूष भएकोले मैले उसको हतियार निकालिनँ । हस्सानले भने : मलाई उसको हतियार र सामानको कुनै आवश्यकता छैन ।[१]

वास्तवमा मुसलमान बालबालिका तथा महिलाको सुरक्षामा मुहम्मदﷺकी फुपुले दिएकी योगदानको यहुदीहरूमाथि नकारात्मक छाप पऱ्यो । त्यस कारवाहीले गर्दा यहुदीलाई किल्ला तथा सुरुङ्गभित्र मुसलमानको सुरक्षा बल छ भन्ने भान पऱ्यो । त्यहाँ कुनै पनि लस्कर थिएन । त्यस कारवाहीपछि यहुदीहरूलाई फर्केर त्यहाँ जाने आँट भएन । तर बहुदेववादीहरूसँग भएको एकताको सम्बन्धलाई कायम राख्न उनीहरूलाई निरन्तर हातहतियार पुऱ्याइरहे । त्यसै क्रममा मुसलमानहरूले उनीहरूको सामानमध्ये बीस वटा उँटमाथि कब्जा गरे ।

मुहम्मदﷺलाई यहुदीहरूले सम्झौता भंग गरेको खबर हुनासाथ बनु कुरैजाको योजनाको पत्ता लगाएर त्यसको आधारमा उचित सैन्य कारवाही गर्न सकियोस् भनेर उहाँले त्यसको अनुसन्धानतर्फ ध्यानाकर्षण गर्नुभयो । तसर्थ त्यस खबरको बारेमा छानविन गर्न सअद विन मुआज, सअद विन उबादह, अब्दुल्लाह विन रवाहा र खवात विन जुबैरलाई पठाउँनुभयो र उनीहरूसँग भन्नुभयो । तिमीहरू जाऊ, बनु कुरैजाको बारेमा जे खबर प्राप्त भएको छ त्यो सही छ वा छैन पत्ता लगाऊ । यदि खबर सही छ भने आएर मलाई मात्र भन । त्यो पनि सांकेतिक भाषामा ताकि मानिसहरूको आत्मबल नघटोस् । यदि उनीहरू सम्झौतामा कायमै छन् भने मानिसहरूलाई त्यसको सूचना देऊ । जब उनीहरू बनु कुरैजानिर पुगे उनीहरूलाई अति तुच्छ पाए । उनीहरूले खुलेर सराप्न थाले । दुस्मनीको कुरा गरे । मुहम्मदﷺको अपमान गरे । उनीहरूले भने : मुहम्मद को हो ? हामी र मुहम्मदबीच न कुनै सम्झौता छ न प्रतिज्ञा । त्यो कुरा सुनेर ती सहाबीहरू वापस फर्के । मुहम्मदﷺको सेवामा उपस्थित भएर त्यहाँको परिस्थिति बारे इशारा गर्दै यति मात्र भने : अजल र वकारह । त्यस भनाइको अर्थ थियो, जसरी अजल र वकारहले रजिअका सहाबीहरूसँग सम्झौता गरी उल्लंघन गरेका थिए त्यसरी नै यी यहुदीहरूले पनि गरेका छन् ।

ती सहाबीहरूले त्यो खबर गोप्य राख्ने प्रयास गर्दागर्दै आम मुसलमानहरूलाई पनि थाहा भयो र उनीहरूमा भयानक खतरा सृजना भयो ।

वास्तवमा त्यतिखेर मुसलमानहरूलाई अति नाजुक परिस्थितिको सामना थियो । पछाडि बनु कुरैजा थियो जसको आक्रमण रोक्न उनीहरूको बीचमा कोही थिएन । अगाडि बहुदेववादीहरूको सशस्त्र लस्कर थियो जसलाई छोड्न सम्भव नै थिएन । उता मुसलमान बालबालिका र महिलाहरू यहुदी नजिक थिए । उनीहरुको सुरक्षाको

१ इब्ने हेशाम भाग २

लागि कोही थिएन । त्यसकारण मानिसहरू ज्यादै भयभीत थिए । त्यस अवस्थालाई कुरआनले यसरी चित्रण गरेको छ :

إِذْ زَاغَتِ الْأَبْصَارُ وَبَلَغَتِ الْقُلُوبُ الْحَنَاجِرَ وَتَظُنُّونَ بِاللَّهِ الظُّنُونَا هُنَالِكَ ابْتُلِيَ الْمُؤْمِنُونَ وَزُلْزِلُوا زِلْزَالًا شَدِيدًا (الأحزاب : 10 -11 )

जब आँखा तिर्मिराउन लागेका थिए, घाँटीमा घिडघिडा लागेको थियो र तिमीहरूले अल्लाहको बारेमा विभिन्न सोच गर्न थालेका थियौ त्यतिखेर मुसलमानको परीक्षण गरिएको थियो । उनीहरूलाई कठोर दुःख र कष्टबाट पेलिएको थियो ।
(अल् अहजाबः१०,११)

त्यसै बेला मुनाफिकहरूको दहीचिउरेपन पनि जाहिर भयो । उनीहरूले भने : मुहम्मदले त हामीसँग कैसर र किस्राको ढुकुटी पाउनेछौ भनेर बचन दिएका थिए तर यहाँ त हग्नमुत्न पनि गाह्रो छ । केही मुनाफिकहरूले त आफ्ना सरदारहरूसँग यतिसम्म भने : हाम्रा शत्रुको अगाडि हाम्रा घरहरू खुल्लै छन् हामीलाई आफ्नो घरको सुरक्षा गर्न जान अनुमति दिनुहोस् । किनभने हाम्रो घरबार सहरबाहिर छ । परिस्थिति अति नै बिग्रेकोले बनु सल्माका कदम काँप्न थाले । उनीहरूले हार मान्ने सोच बनाए । यिनै व्यक्तिहरूको बारेमा अल्लाहले यसरी भनेका छन् :

وَإِذْ يَقُولُ الْمُنَافِقُونَ وَالَّذِينَ فِي قُلُوبِهِمْ مَرَضٌ مَا وَعَدَنَا اللَّهُ وَرَسُولُهُ إِلَّا غُرُورًا وَإِذْ قَالَتْ طَائِفَةٌ مِنْهُمْ يَا أَهْلَ يَثْرِبَ لَا مُقَامَ لَكُمْ فَارْجِعُوا ۚ وَيَسْتَأْذِنُ فَرِيقٌ مِنْهُمُ النَّبِيَّ يَقُولُونَ إِنَّ بُيُوتَنَا عَوْرَةٌ وَمَا هِيَ بِعَوْرَةٍ ۖ إِنْ يُرِيدُونَ إِلَّا فِرَارًا (الأحزاب : 12 -13 )

त्यतिखेर मुनाफिक र मनमा खोट भएकाहरूले भनिरहेका थिए, अल्लाह र ईशदूतले हामीसँग जे बाचा गरेका थिए त्यो केवल धोका थियो । उनीहरूको एक समूहले भन्यो ऐ यस्रीबवासी हो, तिमीहरूको लागि यहाँ बस्नु व्यर्थ छ तसर्थ फिर्ता होऊ । उनीहरूमध्ये एक समूहले मुहम्मदﷺसँग अनुमति माग्दै भन्यो, हाम्रा घरहरू खुल्ला छन् । तर ती घरहरू खुल्ला थिएनन् । उनीहरूले केवल भाग्न चाहेका थिए ।
(अल् अहजाबः१२,१३ )

एकातर्फ लस्करको यो हाल थियो । अर्कोतर्फ मुहम्मदﷺले बनु कुरैजाको तर्फबाट सम्झौता भंग गरिएको खबर सुनेर आफ्नो अनुहार एवं चेहरा कपडाले छोपेर धेरै बेरसम्म उत्तानो परेर सुत्नुभयो । त्यो हालत देखेर मानिसहरूमा झन् त्रास बढ्न थाल्यो । तर मुहम्मदﷺलाई आसाको किरण जाग्यो । उहाँ अल्लाहु अक्बर भन्दै उठ्नुभयो र भन्नुभयो : मुसलमानहरू हो, अल्लाहको तर्फबाट मदत तथा सहयोगको शुभसूचना सुन । त्यसपछि उहाँले आउने परिस्थितिको सामना गर्ने बारे योजना बनाउनुभयो । मुसलमानलाई सचेत नभएको देखेर यहुदीको तर्फबाट मुसलमानका बालबालिका तथा महिलामाथि अचानक कुनै आक्रमण नहोस् भनी त्यसै योजना अन्तर्गत मदिनाको सुरक्षाको लागि एउटा दस्ता पठाउनुभयो । त्यस अवस्थामा शत्रुका

विभिन्न समूहको सम्बन्धलाई एकअर्काबाट विच्छेद गर्ने खालको एउटा निर्णायक कदमको आवश्यकता थियो । त्यस उद्देश्यलाई पूरा गर्नको निम्ति उहाँले बनु गतफानका दुवै सरदार उयैना बिन हिस्न र हारिस बिन औफसँग मदिनाको एक तिहाई अन्नबाली दिने सर्तमा सम्झौता गरी ती दुवै सरदारलाई आफ्नो कबिलालाई लिएर वापस फर्काउने बारे सोच्नुभयो । मुसलमानहरूले कुरैशसँग एकलो लड्ने आफ्नो युद्ध क्षमताको अन्दाजा लगाइसकेका थिए । साथै मुसलमानहरू युद्ध गर्न तयार होउन् भनी त्यस प्रस्तावमा केही छलफल पनि भयो । जब मुहम्मदﷺले सअद विन मुआज र सअद विन उबादहसमक्ष आफ्नो प्रस्ताव बारे विमर्श गर्नुभयो उनीहरूले एक स्वर भएर भने, हे ईशदूत यदि यो आदेश अल्लाहको तर्फबाट तपाईंलाई दिइएको छ भने त्यसमा केही भन्नु छैन, यदि तपाईंले केवल हाम्रो लागि यस्तो गर्न लाग्नुभएको हो भने हामीलाई यसको आवश्यकता छैन । जब हामी सबै बहुदेववादी थियौं तब उनीहरूले हामीबाट पाहुना सत्कार वा किनबेचबाहेक एउटा दानाको पनि आसा गर्न सक्दैनन् थिए । तर अहिले अल्लाहले हामीलाई इस्लाम मार्गदर्शन दिएको छ, तपाईंको माध्यमबाट सम्मान दिएको छ, के हामीले उनीहरूलाई आफ्नो माल दिने ? अल्लाहको कसम हामीले उनीहरूलाई अब केवल आफ्नो तरवारको मार दिनेछौं । उहाँले उनी दुवैको सुझावलाई पारित गर्दै भन्नुभयो : सारा अरबले आफ्नो कमान तानेर तिमीहरूमाथि प्रहार गर्न लागेको देखेर मैले तिमीहरूको लागि यस्तो गर्न लागेको थिएँ ।

त्यसपछि अल्लाहले शत्रुबीच फुट पारिदिए र उनीहरूको गठबन्धन फौजले पराजय भोग्नु पर्‍यो । उनीहरूको तरवारको धार नै गयो । भयो के भने गत्फानको एक जना व्यक्ति जसको नाम नुऐम बिन मस्उद आमिर अश्जइ मुहम्मदﷺकहाँ आएर भन्यो, हे ईशदूत म मुसलामन भएको छु । तर मेरो समुदायलाई मैले इस्लाम स्वीकारेको कुरा थाहा छैन । तसर्थ मलाई केही सुझाव दिनुहोस् । मुहम्मदﷺले भन्नुभयो, तिमी केवल एकलै छौ, तिमीले सैन्य कारवाही त गर्न सक्दैनौ तर जति सक्छौ उनीहरूलाई फुटाऊ र उनीहरूलाई निरुत्साहित तुल्याऊ । किनभने युद्ध रणनीतिको नाम हो । त्यो कुरा सुनेर नुऐम तुरुन्तै बनु कुरैजाकहाँ पुगे । पूर्वकालदेखि नै उनको उनीहरूसँग राम्रो सम्बन्ध थियो । त्यहाँ गएर उनले उनीहरूसँग भने, तपाईंहरुलाई थाहा छ । मेरो तपाईंहरूसँग माया तथा विशेष सम्बन्ध छ । उनीहरूले भने, हो हजुर । नुऐमले भने : हेर्नुस्, कुरैशीहरूको समस्या तपाईंहरूको भन्दा भिन्न छ । यो क्षेत्र तपाईंहरूको आफ्नो क्षेत्र हो, यहाँ तपाईंहरूको घरबार छ, धनसम्पत्ति छ , बालबच्चाहरू छन्, तपाईंहरू यसलाई छोडेर कतै जान सक्नुहुन्न । तर कुरैश र गत्फान मुहम्मद विरुद्ध युद्ध गर्न आउँदा तपाईंहरूले मुहम्मदको विरुद्ध उनीहरूको साथ दिनुभयो । उनीहरूको त यहाँ न घर छ न धनसम्पत्ति न बालबच्चा ।

त्यसकारण मौका पाए भने उनीहरूले केही चाल चल्न सक्लान् नत्र आफ्नो लुगालत्ता बाँधेर यहाँबाट विदाइ लिनेछन् । त्यसपछि तपाईं र मुहम्मद बाँकी रहनु हुनेछ । तसर्थ उनले तपाईंहरूसँग जसरी चाहन्छन् बदला लिनेछन् । त्यो कुरा सुनेर बनु कुरैजाका कान ठाडा भए । उनीहरूले भने, नुऐम ! भन, अब के छ विकल्प ? उनले भने, हेर्नुहोस् , कुरैशले जबसम्म तपाईंहरूलाई आफ्नो केही व्यक्ति जमानी बनाएर दिदैनन् तबसम्म उनीहरूसँग युद्धमा शरिक नहुनु । कुरैजाले भन्यो : तपाईंले अति उचित सुझाव दिनुभयो ।

त्यसपछि नईम सीधा कुरैशकहाँ गएर भने : तपाईंप्रति मेरो जुन मायाँ तथा उपकार छ त्यो तपाईंलाई थाहा नै छ । उनीहरूले भने, हो हजुर हो । नईमले भने , ठीक छ, यहुदले मुहम्मद र उनका साथीहरूसँग गरेको जुन प्रतिज्ञा भंग गरेका थिए त्यसमा उनीहरू पछुताएका छन् । उनीहरूमा के प्रत्राचार भएको छ भने यहुदीले तपाईंहरूसँग केही जमानत लिएर मुहम्मदलाई दिन र तपाईंहरूको विरुद्ध मुहम्मदसँग आफ्नो कुराकानी गर्न तयार छन् । तसर्थ उनीहरूले जमानत मागे भने नदिनु । त्यसपछि उनले गत्फानकहाँ गएर पनि त्यही कुरा भने । उनीहरूको कान पनि ठाडा भए ।

त्यसपछि शुक्रबार राती कुरैशले यहुदीहरूकहाँ हामी जोखिमपूर्ण ठाउँमा छौं भनी खबर पठायो । घोडा तथा उँटहरू मर्दैछन् । तसर्थ उताबाट तपाईं र यताबाट हामी तयार भएर मुहम्मदमाथि आक्रमण गरौं । यहुदीहरूले उनीहरूलाई जवाफमा भने, आज त शनिबार हो । तपाईंहरूलाई थाहा छ हामीभन्दा पहिला जुन मानिसहरूले शनिबारको दिनलाई अवज्ञा गरेका थिए उनीहरूले अति नराम्रो दण्ड भोग्नु परेको थियो । साथै तपाईंहरूले आफ्ना केही मानिसहरूलाई हाम्रो लागि जमानत नदिएसम्म हामी युद्धमा शरिक हुन सक्दैनौं । कुरैश र गत्फानले भने : अल्लाहको कसम नईमले सत्य भनेका थिए । कुरैशले यहुदीहरूलाई जावफमा भने, अल्लाहको कसम हामीले तपाईंहरूलाई कुनै पनि व्यक्ति जमानतमा दिन सक्दैनौं । तसर्थ मुहम्मदमाथि दुवै तर्फबाट आक्रमण गर्न तपाईंहरू पनि हामीहरूको साथमा निस्कनुहोस् । त्यो सुनेर कुरैजाले आपसमा भन्यो : नुऐमले हामीसँग साँचो नै भनेका रहेका छन् । यसरी दुवै पक्षको विश्वास एक अर्काबाट टुट्यो । उनीहरूको समूहमा फुट पऱ्यो र उनीहरूको हौसला पनि टुट्यो । त्यसैबीच मुसलमानहरूले अल्लाहसँग प्रार्थना गरिरहेका थिए : हे, अल्लाह हामीलाई क्षमा गरिदेऊ र खतराबाट सुरक्षित राखिदेऊ । मोहम्मदﷺले पनि प्रार्थना गर्नुभयो । हे किताब अवतरण गर्ने वाला र

छिटो हिसाब लिने वाला अल्लाह ! उनीहरूको लस्करलाई पराजित गरिदेऊ । हे अल्लाह उनीहरूलाई पराजित गरिदेऊ र अँठ्याएर राखिदेऊ ।[1]

आखिकार अल्लाहले आफ्नो दूत र मुसलमानहरूको प्रार्थना स्वीकार्‍यो । फलस्वरूप बहुदेववादीहरूको समूहमा फुट पर्‍यो र उनीहरू निरुत्साहित भए । अल्लाहको आदेशमा उनीहरूमाथि तेज आँधि आयो । त्यसले उनीहरूको पाल उखेलिदियो, कसौँडीहरू उडाएर लग्यो साथै क्याम्पका किल्लाहरू उखेल्यो । कुनै पनि चीज बाँकी रहेन । त्यसका साथसाथै फरिश्ताहरूको लस्कर पनि पठायो । त्यसले उनीहरूको सत्यानाश गर्‍यो । उनीहरूको मनमा त्रास सृजना गर्‍यो ।

कठ्यांग्रिदो जाडो रातमा मुहम्मदﷺले हुजैफा बिन यमानलाई बहुदेववादीहरूको खबर लिन पठाउनुभयो । उनी त्यहाँ पुग्दा त्यहाँ पनि त्यही अवस्था थियो । बहुदेववादीहरू फर्कन तयार भइसकेका थिए । हुजैफाले वापस फर्केर मुहम्मदﷺको सेवामा उपस्थित भएर उनीहरू फर्कन लागेको खबर दिए । तसर्थ विहान उठेर हेर्दा मुहम्मदﷺले मैदान खाली देख्नुभयो । अल्लाहले शत्रुहरूलाई कुनै उपलब्धि हासिल गर्न नदिई रिस र क्रोधका साथ फर्काए, उनीहरूको विरुद्ध युद्ध गर्न अल्लाह एक्लै प्रयाप्त थिए । जे होस् यसरी अल्लाहले आफ्नो बचन पूरा गरिदिए । आफ्नो लस्करलाई इज्जत दिए,आफ्नो उपासकहरूको मदत गरे । एक्लैले सबै फौजलाई परातिज गरे । त्यसपछि मुहम्मदﷺ मदिना फर्कनुभयो ।

सही भनाई अनुसार खन्दकको युद्ध हिजरी सम्बत ५ साल शौवाल महिनामा भएको थियो । बहुदेववादीहरूले एक महिनासम्म मुहम्मदﷺ र मुसलमानहरूलाई आफ्नो घेरामा राखेका थिए । इतिहासका सबै पानाहरू खोतल्ने हो भने घेराउ शौवाल महिनामा शुरु भएर जिकअदामा समाप्त भएको देखिन्छ । इब्ने सअदको भनाई अनुसार मुहम्मदﷺ बुधबारको दिन फर्कनु भएको थियो र जिकअदाको महिना समाप्त हुनमा केवल ७ दिन बाँकी थियो ।

अहजाबको युद्धमा कुनै ठूलो नोक्सान भएन । त्यो केवल कोल्ड वार थियो । युद्धमा कुनै रक्तपात नभएता पनि त्यो युद्ध इस्लामी इतिहासको एक निर्णायक युद्ध थियो । फलस्वरूप त्यस युद्धमा बहुदेववादीको हौसला टुटयो, अरबको कुनै पनि शक्तिले मदिनामा जम्मा भएको मुसलमानहरूको सानो शक्तिलाई अन्त्य गर्न नसक्ने कुरा पनि प्रष्ट भयो । किनभने अहजाबको युद्धमा अरबीहरूले जति ठूलो शक्ति जुटाएका थिए त्यति ठूलो शक्ति जुटाउन अब अरबवासीहरूको लागि सम्भव थिएन । त्यसकारण मदिना फर्केर मुहम्मदﷺले भन्नुभएको थियो : अब हामीहरूको तर्फबाट उनीहरूमाथि आक्रमण हुनेछ र उनीहरूले हामीमाथि आक्रमण गर्न सक्ने छैनन् र हाम्रो लस्कर उनीहरूतर्फ बढ्नेछ ।

---

१ सही बुखारी भाग १,२

# बनु कुरैजाको युद्ध

जुन दिन मुहम्मदﷺ अहजाबको युद्धबाट फर्कनु भएको थियो त्यसै दिन दिउँसोको समयमा उहाँ उम्मे सल्माको घर स्नान गरिरहँदा फरिश्ता जिब्रइल आएर भने : फरिश्ताहरूले युद्धविराम नगर्दै तपाईंले युद्धविराम गर्नुभयो ? म पनि समुदायको पिछा गरेर वापस आउँदैछु । उठनु होस् आफ्ना साथीहरूलई लिएर बनु कुरैजातर्फ लाग्नुहोस् । म पनि अगाडि जाँदैछु, उनीहरूको किल्लामा तहल्का मच्चाइदिन्छु र उनीहरूलाई भयभीत बनाउँछु । त्यो कुरा भनेर जिब्रइल फरिश्ताहरूको साथमा फर्के ।

उता मुहम्मदﷺले सहाबीहरूलाई असरको नमाज बनु कुरैजामा पढ्नु पर्छ भनी एक जना साथीलाई सूचना दिन पठाउनुभयो । त्यसपछि मदिनाको व्यवस्थापनको जिम्मेवारी इब्ने उम्मे मक्तुमलाई सुम्पिनुभयो र झण्डा दिएर अलीलाई अगाडि पठाउनुभयो । उनी बनु कुरैजाको किल्लाको नजिक पुगेपछि बनु कुरैजाले मुहम्मदﷺलाई परस्पर मनपरी गाली गऱ्यो ।

ठिक त्यसैबेला मुहम्मदﷺ पनि अन्सार र मुहाजिरहरूको साथमा त्यहाँ पुग्नुभयो । उहाँ बनु कुरैजाको घरबारनिर पुगेर अना नामी एउटा कुवामा झर्नुभयो । युद्धको विगुल सुनेर आम मुसलमानहरू पनि तुरुन्तै बनु कुरैजाको घरबारतिर लागे । बाटोमा असरको नमाजको समय हुन लाग्दा केही साथीहरूले हामीलाई आदेश गरिए बमोजिम बनु कुरैजाको गाउँमा पुगेर नै नमाज पढ्ने हो भन्ने कुरा गरे । केहीले असरको नमाज इशाको नमाजको समयमा पढे । केही साथीहरूले भने, उहाँको भनाईको मतलब यस्तो थिएन परन्तु छिटोभन्दा छिटो त्यहाँ पुग्नु पर्छ भन्ने थियो । त्यसकारण उनीहरूले बाटोमा नै नमाज पढे । त्यो कुरा मुहम्मदﷺलाई सुनाउँदा उहाँले कसैलाई केही भन्नुभएन ।

जसोतसो इस्लामी फौज विभिन्न समूहमा विभाजित भई बनु कुरैजाको गाउँमा पुगेर मुहम्मदﷺको साथमा सामिल भयो । त्यसपछि बनु कुरैजाको किल्लालाई आफ्नो घेरामा लियो । त्यस लस्करमा तीन हजार जति फौज र तीस वटा घोडा थिए ।

राम्रोसँग घेराउ भएपछि यहुदीको सरदार कअब विन् असदले उनीहरूको सामुन्ने तीन वटा प्रस्ताव राख्यो ।

१, इस्लाम स्वीकारौं र मुहम्मदﷺको धर्ममा प्रवेश गरी आफ्नो धनजन तथा बालबच्चाको सुरक्षा गरौं । कअब विन असदले प्रस्ताव प्रस्तुत गर्ने क्रममा भनेको थियो : अल्लाहको कसम उनी ईशदूत हुन् भन्ने कुरा छर्लङ्ग भइसकेको छ साथै उनकै बारेमा तिमीहरूले आफ्नो किताबमा पढ्ने गर्थ्यौ ।

२ वा आफ्नो बालबच्चा तथा श्रीमतीहरूलाई आफ्नो हातले हत्या गरौं र तरवार लिएर मुहम्मद विरुद्ध पूर्ण शक्ति लगाएर लडौं । त्यसपछि कि त विजयी भइन्छ कि पराजित ।

३ वा शनिबारको दिन मुहम्मद र उनका साथीहरूमाथि एक्कासी आक्रमण गरौं । किनभने उनीहरू त्यो दिन लडाइँ हुँदैन भन्ने कुरामा निर्धक्क छन् ।

तर यहुदीहरूले यी तीन वटा प्रस्तावमध्ये एउटा पनि स्वीकारेनन् । त्यसपछि उनीहरूको सरदार कअब बिन असदले भन्यो : तिमीहरूले आफ्नो आमाको कोखबाट जन्म लिएदेखि एक रात पनि सतर्कताका साथ गुजारेका छैनौ ।

यी तीन वटै प्रस्तावलाई अस्वीकार गरेपछि यहुदीहरूको सामुन्ने मुहम्मद ﷺको अगाडि आफ्नो तरवार त्याग्नु र आफ्नो भाग्यको निर्णय उहाँमाथि छोड्नु बाहेक अरू कुनै उपाय थिएन । तर हतियार त्यागेपछिको परिणाम बुझ्न भनी उनीहरूले आफ्नो हतियार त्याग्नुभन्दा पहिला आफ्ना केही मुसलमान मित्रहरूसँग सम्पर्क गर्न चाहे । तसर्थ अबु लुबाबालाई आफुहरू भएको ठाउँमा पठाउनुहोस् हामी उनीहरूसँग केही सल्लाह गर्न चाहन्छौं भनी मुहम्मद ﷺलाई संदेश पठाए । अबु लुबाबा उनीहरूका मित्र थिए । उनीहरूको बालबच्चा तथा बगैंचा पनि त्यसै क्षेत्रमा थियो । अबु लुबाबा उनीहरू भएतिर पुग्ना साथ उनीहरूका पुरुष साथीहरू उनलाई देखेर उनीतर्फ दौडे । महिला तथा बालबच्चाहरू उनको सामुन्ने डाँको छोडेर रुन थाले । त्यो स्थिति देखेर अबु लुबाबा दुखित भए । यहुदीहरूले भने, हे ! अबु लुबाबा के तपाईंले हामीहरूलाई मुहम्मदको अगाडि आत्मसमर्पण गर भन्ने चाहनु हुन्छ ? उनले जवाफमा भने, गर । उनले घाँटीतिर इशारा गर्दै भने, यसको अर्थ तिमीहरूको हत्या गरिने छ । उनीहरूसँग त्यो कुरा भनेर उनलाई आफुले अल्लाह र ईशदूतसँग बेइमानी गरेको कुरा बोध भयो । तसर्थ उनी मुहम्मद ﷺकहाँ जानुको सट्टा मस्जिदे नबवीमा गएर आफुले आफुलाई एउटा खामोमा बाँधे । मुहम्मद ﷺले मात्र आफ्नो पवित्र हातले खोलुन् भनी अल्लाहको कसम खाए । उनले अब आगामी दिनहरूमा बनु कुरैजाको जमिनमा पनि प्रवेश नगर्ने कसम खाए । उता मुहम्मद ﷺलाई पनि उनी फर्कनमा ढिलो भएको कुरा थाहा थियो । उहाँलाई पूर्ण विवरण थाहा भएपछि उहाँले भन्नुभयो यदि ऊ सिदै मकहाँ आएको भए म उनको क्षमाको लागि प्रार्थना गर्ने थिएँ । तर उनी आफैले त्यो काम गरिसकेपछि अल्लाहले उनको क्षमा नस्वीकारेसम्म मैले उनलाई त्यो ठाउँबाट फुकाउन मिल्दैन ।

उता अबु लुबाबाले हतियार नत्याग्न इशारा गर्दा पनि बनु कुरैजाले मुहम्मद ﷺको सामुन्ने हतियार त्याग्ने निर्णय गरे । उहाँले जे उचित ठान्नु हुन्थ्यो त्यही फैसला गर्नु हुन्थ्यो । बनु कुरैजासँग लामो समयसम्म नाकाबन्दीमा गुजारा गर्न सक्ने प्रयाप्त परिमाणमा सरसामान पानीको मुहान, कुवा र बलियो एवं सुरक्षित

किल्ला पनि थियो । अर्कोतर्फ मुसलमान खुल्ला मैदानमा कठोर जाडो र भोकको कठिनाइहरू भोलिरहेका थिए । अहजाब युद्धभन्दा पहिलादेखि नै निरन्तर युद्धमा व्यस्त भएका कारण उनीहरू एकदमै थाकेका पनि थिए । बनु कुरैजाको युद्ध वास्तवमा निसशस्त्र तर निर्णायक युद्ध थियो । अल्लाहले इस्लामका शत्रुहरूलाई भयभीत पारेका थिए । उनीहरूको हौसला टुटिरहेको थियो । अली विन अबी तालिब र जुबैर विन औवामले त्यसतर्फ कदम चालेपछि त भन् उनीहरूको हौसला टुट्यो । अलीले गर्जेर भने, हे साथी हो, अब म कि त हमजा भैँ शहिद हुनेछु कि उनीहरूको किल्ला कब्जा गर्नेछु ।

अलीको त्यो आँटिलो कुरा सुन्ना साथ बनु कुरैजाले आफुलाई मुहम्मदﷺले जे निर्णय उचित ठान्नु हुन्छ त्यो गरुन् भनी उहाँको अगाडि आत्मसमर्पण गरे । मुहम्मदﷺले उनीहरूलाई बाँध्ने आदेश दिनुभयो । तसर्थ मुहम्मद विन मस्लमाको संरक्षणमा उनीहरूको हात बाँधियो । महिला तथा बालबालिकाहरूलाई पुरुषबाट अलग गरियो । अवस कबिलाका मान्छेहरूले मुहम्मदﷺसँग अनुरोध गर्दै भने : तपाईँले बनु कैनुकासित जुन व्यवहार गर्नुभएको थियो त्यो तपाईँलाई थाहा नै छ । बनु कैनुका हाम्रा दाजुभाइका मित्र थिए तसर्थ यिनीहरू हाम्रा मित्र हुन् यिनीहरूमाथि दया गरिदिनुहोस् । उहाँले भन्नुभयो : के तिमीहरूमध्ये कसैले उनीहरूको बारेमा निर्णय गरे तिमीहरू सहमत हुन्छौ ? उनीहरूले भने, अवश्य । उहाँले भन्नुभयो ,त्यसो भए यो मामिला सअद विन मुआजको हातमा दिइन्छ । अवसका मान्छेहरूले भने, यसमा हामी सहमत छौँ ।

त्यसपछि उहाँले सअद विन मुआजलाई बोलाउन पठाउनुभयो । उनी मदिनामा थिए । उनी लस्करको साथमा आएका थिएनन् । किनभने खन्दकको लडाइँमा उनको औँलाको नसा काटिएकोले उनी घाइते अवस्थामा थिए । उनलाई गधाको सवारीमा मुहम्मदﷺकहाँ ल्याइयो । उनी नजिक आउनासाथ उनका कबिलाले उनलाई चारैतिरबाट घेरेर उनीसँग भने : सअद आफ्नो मित्रहरूको पक्षमा सकारात्मक निर्णय गरिदिनु । मुहम्मदﷺले उनलाई हाकिम बनाउनुको कारण पनि उनीहरूको भलाईको निम्ति थियो । तर उनी चुपचाप थिए कुनै जवाफ दिएका थिएनन् । मानिसहरूले धेरै अनुरोध गरेपछि उनले भने , अब समय आएको छ । सअदलाई अल्लाहको निम्ति कसैको अपहेलना गर्नुमा कुनै परवाह हुने छैन । त्यो कुरा सुनेर केही मानिसहरू त्यति बेला नै मदिनातिर लागे । उनले बन्दीहरूको बारेमा मृत्युदण्ड दिने निर्णय सुनाए ।

सअद मुहम्मदﷺकहाँ पुगेपछि मुहम्मदﷺले भन्नुभयो, हे मानिसहरू हो, आफ्नो अगुवातिर जाओ । उनीहरूले उनलाई सवारीबाट ओरालेपछि मुहम्मदﷺले भन्नुभयो : हे सअद, मानिसहरूले तिम्रो निर्णयको प्रतीक्षा गरेका छन् । सअदले भने,

के मेरो निर्णय उनीहरूलाई मान्य हुन्छ र ? मानिसहरूले भने, अवश्य । उनले भने मुसलमानहरूलाई पनि मान्य हुन्छ र ? मानिसहरूले भने, अवश्य हुन्छ । उनले भने : जो यहाँ छन् उनीहरूलाई पनि मान्य हुन्छ ? उनको इशारा मुहम्मदﷺ बसेको ठाउँतिर थियो । तर उनले उहाँको आदरको कारण आफ्नो चेहरा अर्कैतिर फर्काएका थिए । उहाँले जवाफमा भन्नुभयो, मलाई पनि स्वीकार्य हुने छ । सअदले भने : मैले उनीहरूको बारेमा बन्दीहरूको हत्या गरिनु र उनीहरूको बालबच्चा तथा महिलालाई बन्दी बनाइनु पर्ने निर्णय गरेको छु । साथै उनीहरूको धनसम्पत्ति बाँडफाँड गरिनु पर्नेछ । मुहम्मदﷺले सअदसँग भन्नुभयो : तिमीले उनीहरूको बारेमा त्यही निर्णय गरेका छौ जुन निर्णय सातौं आकाशमाथि बाट अल्लाहले गरेका छन् ।

सअदको त्यो निर्णय अति न्यायोचित थियो । किनभने बनु कुरैजाले मुसलमानको मृत्यु र जीवनको संघारमा जुन जोखिमपूर्ण सम्झौता भंग गरेका थिए त्यो त थियो नै । त्यस बाहेक उनीहरूले मुसलमानलाई अन्त्य गर्न देड हजार तरवार, दुई हजार भाला, तीन सय युद्धवस्त्र र पाँच सय ढाल तयार गरेका थिए । मुसलमानहरूले विजय हासिल गरेपछि ती सबै हातहतियार कब्जा गरे ।

त्यसपछि बनु कुरैजालाई मुहम्मदﷺको आदेशमा मदिना ल्याएर बनु नज्जार कबिलाकी एक जना महिला जो हारिसकी छोरी थिइन् उनैको घरमा बन्दी बनाइयो । मदिनाको बजारमा खाडल खनियो । पुरूष बन्दीहरूलाई एकएक समूह बनाएर लगियो र खाडलमा उनीहरूको घाँटी रेटियो । कारबाही सुरू भएको केही छणपछि बाँकी कैदीहरूले आफ्नो सरदार कअब विन असदसँग भने : तिमीलाई के थाहा हामीमाथि के वितेको छ ? उसले भन्यो : कहाँ के भन्नु पर्छ भन्ने तिमीहरूलाई थाहा छैन । मृत्यु निश्चित छ र मृत्यु भएको व्यक्ति फर्केर आउने वाला पनि छैन । अल्लाहको कसम यो हत्या नै हो । अन्तत : ती सबै जनाको हत्या गरियो ।

त्यस कारवाहीपछि ती धोकेबाज एवं अभिशापहरूको पूर्णरूपमा अन्त्य भयो जसले सम्झौता उल्लंघन गरेका थिए । मुसलमानहरूलाई सिध्याउनको लागि खतरापूर्ण तथा नाजुक घडीमा उनीहरूले शत्रुहरूको सहयोग गरी युद्धनाइकेको भूमिका निर्वाह गरेका थिए । त्यसकारण उनीहरू वास्तवमा फाँसीका हकदार बने ।

बनु कुरैजा नासिने क्रममा बनु नजिरको पिचास र अहजाब युद्धको महाअपराधी हुयै विन अख्तब पनि नासियो । ऊ माई सफियाको बाउ थियो । कुरैश तथा गत्फान फिर्ता भएपछि जब बनु कुरैजाको घेराउ गरियो र उनीहरू किल्लामा बन्द भए अनि ऊ पनि किल्लामा बन्द भयो । किनभने अहजाबको युद्धमा उसले कअब बिन असदलाई धोका तथा बेइमानी गर्न उसकाउँदा उसले यसको बचन पनि दिएको थियो । अब उसले आफुले दिएको बचन पूरा गर्दै थियो । उसलाई मुहम्मदﷺकहाँ उपस्थित गराउँदा उसले केवल एक जोडा कपडा लगाएको थियो ।

साथै उसलाई युद्धप्राप्तको रूपमा सामिल नगरियोस् भनेर उसले कपडालाई चारैतिर बाट एक औला जति च्यातेको थियो । उसको दुवै हात घाँटीको पछाडिपट्टि रस्सीले बाँधिएको थियो । उसले मुहम्मदﷺलाई सम्बोधन गर्दै भन्यो, तपाईंसित गरेको दुस्मनीमा कुनै आत्मालोचना गरेको छैन । तर अल्लाहसित जो टक्राउँछ त्यो पराजित हुन्छ । त्यसपछि मानिसहरूलाई सम्बोधन गर्दै भन्यो : अल्लाहको निर्णयप्रति कुनै आपत्ति छैन । यो त भाग्यमा नै लेखिएको थियो र यो एउटा महाहत्या हो जसलाई अल्लाहले बनी इस्राइलको खप्परमा लेखिदिएका थिए । त्यसपछि ऊ बस्यो अनि उसलाई मृत्युदण्ड दिइयो ।

यस घटनामा बनु कुरैजाको एक जना महिलालाई पनि मृत्युदण्ड दिइयो । किनभने उसले खल्लाद बिन सुवैदलाई जाँतोको ढुंगाले हानेर उनको हत्या गरेकी थिई । त्यसको बदलामा उसलाई मृत्युदण्ड दिइयो ।

मुहम्मदﷺले नाभिमुनि रौँ पलाएका सबै जनालाई मृत्युदण्ड दिने आदेश दिनुभयो । अतिया कर्जीको नाभिमुनि रौँ पलाएको थिएन त्यसकारण उनलाई जीवित छाडियो । उनले मुसलमान भएर सहाबीको दर्जा पाए ।

साबित विन कैसले जुबैर विन बाता र उनका परिवारलाई आफ्नो लागि दान गरियोस् भनी निवेदन हालेका थिए । किनभने जुबैरले सावितमाथि केही गुण लाएका थिए । उनको निवेदन स्वीकार गरियो । त्यसपछि सावितले जुबैरसँग भने : मुहम्मदﷺले तिमी र तिम्रा परिवारलाई उपहार स्वरूप मलाई दिनुभएको छ । म ती सबैलाई तिम्रो हवाला गर्छु अर्थात तिमी सबै मुक्त हुनेछौ । तर जब जुबैर विन बाताले उसको समुदायलाई मृत्युदण्ड दिइएको कुरा थाहा पायो उसले भन्यो : हे सावित तिमीमाथि मैले जुन गुण लाएको थिएँ त्यसको कसम खाएर भन्दैछु मलाई मेरा साथीहरू भएको ठाउँमा पुऱ्याइदेऊ । फलस्वरूप उसलाई पनि मृत्युदण्ड दिई उसको यहुदी साथीहरूकहाँ पुऱ्याइयो । तर सावितले जुबैरको छोरा अब्दुर्रहमानलाई जीवित छाडिदिए । उनी इस्लाम स्वीकारी सहाबी बन्न पुगे । त्यसैगरी बनु नज्जारकी एक जना महिला उम्मे मुन्जिर सलमा विन्ते कैसले समवाल कर्जीको छोरा रेफाअलाई आफ्नो लागि दान दिन आग्रह गरिन् । उनको आग्रह पनि स्वीकारियो र रेफाअलाई उनको हवाला गरियो । उनले रेफाअलाई जीवित राखिन् र उनी पनि इस्लाम स्वीकारी सहाबी भए ।

केही व्यक्तिहरूले पनि त्यसै रात हतियार त्याग्नु भन्दा पहिला नै इस्लाम स्वीकारे । तसर्थ उनीहरूको धनजन र परिवारहरू सुरक्षित रहे । त्यसै रात बनु कुरैजाले तोडेको सम्झौतामा सहभागी नभएको एक जना व्यक्ति अमर बाहिर निस्क्यो । पहरेदारीमा रहेका कमाण्डर मुहम्मद विन मस्लमाले उसलाई देखे , चिने र छाडिदिए । फेरि ऊ कता गयो थाहा भएन ।

बनु कुरैजाबाट हासिल भएको युद्धप्राप्तबाट मुहम्मदﷺले पाँचौं भाग निकालेर उनीहरूमा बाँडिदिनुभयो । घोडचढीहरूलाई तीन भाग (एक भाग लडाकुहरू र दुई भाग घोडाको लागि) र पैदल योद्धाहरूलाई एक भाग दिनुभयो । कैदी तथा बालबच्चाहरूलाई सअद बिन जैद अन्सारीको संरक्षणमा नजद पठाइयो र त्यसको बदलामा घोडा खरिद गरियो ।

मुहम्मदﷺले आफ्नो लागि बनु कुरैजाकी महिलामध्ये रैहाना बिन्त अमर बिन खनाकालाई रोज्नुभयो । इब्ने इस्हाकको भनाई अनुसार उनी उहाँको मृत्युसम्म उहाँको मातहतमा बसिन् ।[1] तर कलबीको बयान अनुसार मुहम्मदﷺले उनलाई ६ हिजरीमा मुक्त गरी उनीसँग विवाह गर्नु भएको थियो । उहाँ हिज्जतुल वदाअबाट फर्केर आउँदा उनको निधन भएको थियो । उहाँले उनलाई जन्नतुल बकिअमा दफन गरिदिनुभयो ।[2]

बनु कुरैजाको मामिला सकिएपछि सअद बिन मुआजको त्यो प्रार्थना स्वीकार हुने समय आयो जसको वर्णन अहजाबको युद्धमा गरिएको छ । उनको घाउ फुट्यो । त्यति खेर उनी मस्जिदे नबवी नजिक थिए । मुहम्मदﷺले उनको हेरचाह गर्न सजिलो होस् भन्ने हेतुले उनको लागि त्यहाँ पाल लगाइ दिनुभयो । माई आइशाको बयान अनुसार ओठको घाउ फुटेर बगेको थियो । मस्जिदमा बनु गिफारका केही पाल लागेको थियो । उनको रगत बगेको देखेर उनीहरूलाई घिन लाग्यो । उनीहरूले भने : हे पालवासी हो तिमीहरूबाट हामीतर्फ यो के बगिरहेको छ ? उनीहरूले हेर्दा सअद बिन मुआजको घाउबाट रगत बगिरहेको देखे । त्यसै घाउका कारण उनको निधन भयो । [3]

बुखारी तथा मुस्लिम नामक हदिसमा जाविरमार्फत वर्णन गरिएको छ : मुहम्मदﷺले भन्नुभयो : सअद बिन मुआजको निधनले गर्दा ईश्वरको राजगद्दी हल्लियो । इमाम तिर्मिजीले एउटा हदिस वर्णन गरेका छन् र त्यसलाई उनले सही सावित गरेका छन् । त्यसमा भनिएको छ : सअद बिन मुआजको चिता उठाउँदा मुनाफिकहरूले भने : उनको चिता हलुको छ ,त्यसमा मुहम्मदﷺले भन्नुभयो उनको शव फरिश्ताहरूले उठाएका छन् ।[4] बनु कुरैजालाई घेराबन्दी गर्दा एक जना मुसलमान शहिद भएका थिए जसको नाम खल्लाद बिन सुवैद थियो । उनलाई बनु

---

१ इब्ने हेशाम भाग २
२ तलकिहुल फहुम

3 सही बुखारी भाग २

४ तिर्मिजी भाग २

कुरैजाको एक जना महिलाले जाँतोको ढंगाले हानेर मारेकी थिई । त्यसबाहेक अक्काशाका भाइ अबु सिनान् विन मुहसिनको पनि घेराबन्दीमा रहेको अवस्थामा निधन भएको थियो ।

अबु लुबाबहको बारेमा भन्ने हो भने, उनी त झन् ६ रातसम्म निरन्तर खम्बामा बाँधिएका थिए । प्रत्येक नमाजको समयमा उनकी श्रीमतीले उनलाई नमाज पढ्न खोलिदिन्थिन् । नमाज पढेर फेरि त्यही खम्बामा बाँधिन्थे । एका विहानी मुहम्मदﷺमाथि उनको क्षमा बारे वाणी अवतरण भयो । त्यति बेला उहाँ उम्मे सल्माको घरमा हुनु हुन्थ्यो । अबु लुबाबहको बयान छ : उम्मे सल्माले आफ्नो कोठाको ढोकामा उभिएर मलाई भनिन् , हे अबु लुबाबह अब खुसी होऊ ! अल्लाहले तिम्रो क्षमा स्वीकार गरेका छन् । त्यो कुरा सुनेर सहाबीहरू उनलाई खोल्न दौडे । तर मुहम्मदﷺले बाहेक कसैले आफुलाई नखोलोस् भनी उनले खोल्न अस्वीकार गरे । मुहम्मदﷺ फजरको नमाज पढ्न जाँदा उनलाई खोलिदिनुभयो ।

त्यो घटना हिजरी सम्बत ५ साल जिल् कअदाको महिनामा भएको थियो । त्यतिखेर पच्चीस दिनसम्म घेराबन्दी भएको थियो ।[1] अल्लाहले त्यो घटना र अहजाबको युद्ध बारे सुरह अहजाबमा अत्यधिक श्लोकहरू अवतरण गरेका छन् । दुवै युद्धको महत्वपूर्ण पाठ वर्णन गरेका छन् । मुस्लिम र मुनाफिकहरूको स्थितिलाई वर्णन गरेका छन् । शत्रुभित्र रहेको विभिन्न गुटको आपसी फुट र उनीहरूको कमजोरीलाई वर्णन गरेका छन् । साथै इसाईहरूले सम्झौता भंग गर्दा भोगेको परिणामको पुष्टि पनि गरेका छन् ।



१ इब्ने हेशाम भाग २,सही बुखारी भाग २, जादुल मआद भाग २, अब्दुल्लाहको मुख्तसर सिरतुर्रसुल

# अहजाब र कुरैजा युद्धपछिको सशस्त्र संघर्ष

## १,सलाम बिन अबुल हुकैकको हत्या

सलाम बिन अबुल हुकैक जसको उपनाम अबु राफे थियो, ऊ महाअपराधीहरूमध्ये एक थियो । उसले मुसलमान विरुद्ध बहुदेववादीहरूलाई भड्काउनमा ठूलो भूमिका निर्वाह गरेको थियो । साथै धनसम्पत्तिद्वारा उनीहरूको मदत गरेको थियो ।[1] त्यसबाहेक उसले मुहम्मद ﷺ लाई पनि दुःख दिने गर्थ्यो । मुसलमानहरूले बनु कुरैजाबाट फुर्सद पाएपछि खजरज कबिलाका मानिसहरूले मुहम्मद ﷺ सँग उसको हत्या गर्ने अनुमति मागे । किनभने यसअघि कअब विन अशरफ्को हत्या अवस कबिलाका सहाबीहरूले गरेका थिए । त्यसकारण खजरजका सहाबीहरूले पनि उनीहरूले गरे जस्तै काम गर्ने इच्छा गरे । तसर्थ उनीहरूले तुरून्त अनूमति मागे ।

मोहम्मद ﷺ ले उनीहरूलाई अनुमति त दिनुभयो तर महिला तथा बालबालिकाको हत्या नगर्ने आदेश पनि दिनुभयो । त्यसपछि पाँच जनाको एउटा सानो टोली त्यस संघर्षको लागि निस्क्यो । उनीहरू सबै खजरज कबिलाको साख बनु सल्माका सहाबीहरू थिए । उनीहरूका कमाण्डर अब्दुल्लाह बिन अतिक थिए ।

त्यो टोली सीधै खैबरतिर लाग्यो । किनभने अबु राफेको किल्ला त्यतै थियो । त्यहाँ पुग्दा घाम अस्ताइसकेको थियो । मानिसहरू आफ्नो चौपाया लिएर वापस फर्किसकेका थिए । अब्दुल्लाह बिन अतिकले आफ्ना साथीहरूसँग भने : तिमीहरू यहाँ बस । म जान्छु र पालेहरूसँग भित्र जानको लागि केही बहाना गर्छु । त्यसपछि उनी ढोकानिर गएर आफ्नो टाउकोमा कपडा हालेर दिसा गर्न बसे झैं गरे । पालेले ढोकाबाट बोलाएर भन्यो । हे साथी, भित्र आउने भए आऊ नत्र म ढोका बन्द गरिदिन्छु ।

अब्दुल्लाह बिन अतिक भन्छन् : म भित्र पसेर लुकें । सबै जना भित्र आएपछि पालेले ढोका बन्द गरेर चाबी एउटा किल्लामा झुण्ड्यायो । चारैतिर सुनसान भएपछि मैले चाबी लिएर ढोका खोलें । अबु राफे माथिल्लो तलामा बस्थ्यो । त्यहाँ बैठक बसेको थियो । बैठक समाप्त भएपछि मानिसहरू हिंडे र म माथिको तलामा चढें । मैले जुन ढोका खोल्थें त्यसलाई भित्रबाट बन्द पनि गर्थें । यदि मानिसहरूले मेरो बारेमा थाहा पाए पनि उनीहरू आउनुभन्दा पहिला नै अबु राफेको हत्या गर्नेछु भन्ने मेरो सोच थियो । यसरी म ऊ भएको ठाउँमा पुगें । ऊ आफ्नो बालबच्चाको साथ एउटा अँध्यारो कोठामा थियो । तर मलाई उ कोठामा कहाँनिर छ भन्ने कुरा थाहा

---

१ फत्हुलबारी भाग ७

थिएन। त्यसैले मैले बोलाएँ : अबु राफे ! उसले सोध्यो , को हो ? उसको स्वर सुन्ने वित्तिकै मैले ऊमाथि तरवार प्रहार गरेँ। म त्यतिखेर आत्तिएँ। त्यसकारण मैले केही गर्न सकिनँ। ऊ चिच्यायो म कोठाबाट बाहिर निस्केँ र टाढा गएर बसेँ। फेरि फर्केँ। स्वर बदलेर भनेँ , अबु राफे ! यो कसको आवाज हो ? उसले भन्यो , तिम्रो आमाको नाश होस्। एक जनाले कोठामा ममाथि तरवार हान्यो। अब्दुल्लाह बिन अतिक भन्छन् : यस पटक मैले जोड्ले तरवार हानेँ। ऊ रगतमा लतपतियो तर पनि ऊ मरेन। मैले फेरि तरवारको चुचोले उसको पेटमा घोचेँ। तरवार छेद गर्दै उसको पिठ्युँसम्म पुग्यो। उसको हत्या भयो भन्ने मलाई लागेपछि म एकएक ढोका खोल्दै बाहिर निस्केँ। भऱ्यांबाट ओर्लने क्रममा भुइँमा झरिसकेको छु भन्ने सोचेर खुट्टा भुइँमा राख्न खोज्दा लोटेँ। जुनेली रात थियो। खुट्टा मर्क्यो। मैले आफ्नो पगरीले बेसरी खुट्टा बाँधेर ढोकानिर आएर बसेँ। ऊ मरेको निश्चित भएपछि मात्र यहाँबाट जान्छु भनी मनमनै भनेँ। अन्ततः भाले बासेपछि मृत्युको खबर दिने एक जना व्यक्ति किल्लाको टुप्पोमा चढ्यो। मैले हेजाजका व्यापारी अबु राफेको मृत्युको दुःखद खबर दिँदैछु भनरे उसले ठूलो स्वरमा भन्यो। म आफ्नो साथीहरू भएको ठाउँमा गएर यहाँबाट भागौँ भनेर साथीहरूलाई भनेँ। अल्लाहले अबु राफेलाई उसको अन्तिम गन्तव्यमा पुऱ्याइदिए। म मुहम्मदﷺको सेवामा हाजिर भएँ र उहाँलाई यस घटना बारे बताएँ। उहाँले भन्नुभयो, आफ्नो खुट्टा पसार। मैले आफ्नो खुट्टा पसारेँ। उहाँले त्यसमा आफ्नो हातले मालिश गरिदिनुभयो। त्यसपछि मलाई कुनै चोटै नलागेको अनुभूति भयो।[१]

यो कुरा बुखारी नामक हदिसको किताबमा उल्लेख छ। इब्ने इस्हाकमार्फत वर्णन गरिएको हदिस अनुसार : अबु राफेको घरमा पाँचै जना सहाबीहरू घुसेका थिए। सबै जना उसको हत्यामा संलग्न थिए। जुन साथीले उमाथि तरवारको भार राखेर उसको हत्या गरेका थिए उनी अब्दुल्लाह बिन उनैस थिए। त्यस हदिसमा उनीहरूले रातीमा अबु राफेको हत्या गरेको कुरा पनि उल्लेख छ। अब्दुल्लाह बिन अतिकको तिघ्रा भाँचिएपछि उनीहरूले उनलाई उठाएर ल्याएका थिए। किल्लाको वारिपारि एउटा नहर बगेको थियो त्यसैमा उनीहरू लुकेका थिए। उता यहुदीहरूले आगो जलाएर यताउता खोज तलास गरिरहेका थिए। निरास भएर आफ्नो मृतक अबु राफे भएतिर फर्के। सहाबीहरू वापस हुँदा उनीहरूले अब्दुल्लाह विन अतिकलाई बोकेर मुहम्मदﷺकहाँ ल्याए।[२] त्यो संघर्ष हिजरी सम्बत ५ साल जिल कअदा वा जिल हिज्जको महिनामा भएको थियो।[३]

---

१ सही बुखारी भाग २
२ इब्ने हेशाम भाग २
3 रहमतुल लिल् आलमीन भाग २

जब मुहम्मदﷺले अहजाब र बनु कुरैजाको युद्धबाट फुर्सद पाउनुभयो र युद्धका दोषीहरूको कारवाही गर्नुभयो अनि उहाँले ती कबिला र ती अरबी देहातीहरू जो अमन शान्तिको मार्गमा वाधक बनेका थिए र सशक्त शक्ति परिचालन नगर्दासम्म चुपचाप नबसेकाले उनीहरूमाथि कारवाही गर्न आक्रमण सुरु गर्नुभयो ।

तल यस किसिमका युद्ध तथा संघर्षहरूको संक्षिप्त विवरण उल्लेख गरिदैछ ।

## २ मुहम्मद बिन मस्लमाको संघर्ष

यस दस्तालाई नजदभित्र बकरात क्षेत्रमा जरियाको वरिपरि करता नामी ठाउँमा पठाइएको थियो । जरिया र मदिनाबीच सात रातको यात्रा बराबरको दुरी छ । हिजरी सम्बत ६ साल मुहर्रम महिनाको १० तारिखमा यो दस्ता त्यहाँ प्रस्थान गरेको थियो । उनीहरूको निशाना बनु बकर विन केलाबको एउटा साखामा थियो । मुसलमानहरूले छापा मारेपछि सबै मानिसहरू भागे । मुसलमानहरूले चौपाया तथा बाख्राहरू कब्जा गरे । मोहर्रम महिनाको एक दिन बाँकी रहँदा उनीहरू मदिना फर्केर आए । उनीहरूले बनु हनिफाका सरदार सुमामह विन उसाल हनफीलाई पनि समातेर ल्याएका थिए । ऊ आफ्नो भेष बदलेर मुसैलेमा बिन कज्जाबको आदेशमा मुहम्मदﷺको हत्या गर्न आएको थियो ।[१] तर मुसलमानले उसलाई गिरिफतार गरी मदिना ल्याएर मस्जिदे नबवीको एउटा खामोमा बाँधे । मुहम्मदﷺ आएपछि उहाँले उसँग सोधपुछ गर्नुभयो । समामह, तिमीसँग के छ ? उसले भन्यो , मसँग भलाई छ । यदि तिमीहरूले मेरो हत्या गऱ्यौ भने त्यो ठूलै हत्या हुनेछ यदि ममाथि गुण लगायौ भने त्यो ठूलो गुण हुनेछ । यदि धनसम्पत्ति चाहिएको छ भने कति चाहियो माग । त्यसपछि मुहम्मदﷺले उसलाई त्यति कै छोडिदिनुभयो । मुहम्मदﷺ त्यहाँबाट हिँड्न लाग्दा फेरि त्यही प्रश्नहरू गर्नुभयो । समामहले फेरि त्यही जवाफ दियो । मुहम्मदﷺले तेस्रो पटक पनि त्यही प्रश्नहरू गर्नुभयो । उसले फेरि पनि त्यही जवाफ दियो । त्यसपछि मुहम्मदﷺले सहाबीहरूसँग समामहलाई मुक्त गरिदिन भन्नुभयो । उनीहरूले उसलाई मुक्त गरिदिए । सुमामह मस्जिदे नबवी नजिक खजुरको एउटा बगैंचामा गए र स्नान गरी मुहम्मदﷺकहाँ आएर इस्लाममा प्रवेश भए । उनी भन्छन् : अल्लाहको कसम यस धर्तीमा पहिला उहाँको अनुहारभन्दा नराम्रो अनुहार मेरो नजरमा कसैको लाग्थेन । तर अब उहाँको अनुहार सबैको अनुहारभन्दा प्यारो छ । अल्लाहको कसम उहाँले ल्याउनु भएको धर्मभन्दा नराम्रो धर्म मेरो नजरमा अरू कुनै लाग्थेन । तर अब उहाँले ल्याउनु भएको धर्म अन्य सबै धर्मभन्दा प्यारो लागेको छ । उहाँको फौजले मलाई जतिबेला गिरिफतार गरेका थिए त्यतिबेला म उमराह गर्न

१ सिरत हलबीया भाग २

लागेको थिएँ । मुहम्मदﷺले उनलाई शुभसूचना दिनुभयो र उनलाई उमराह गर्न दिन आदेश दिनुभयो । उनी कुरैशतिर जाँदा कुरैशीहरूले सोधे, सुमामह के तिमी अधर्मी भएका छौ ? उनले जवाफमा भने छैन । मैले त मुहम्मदﷺको हातमा इस्लाम स्वीकार गरेको छु । सुन, अल्लाहको कसम मुहम्मदﷺले अनुमति नदिएसम्म अब समामहको तर्फबाट तिमीहरूकहाँ गहुँको एउटा गेडा पनि आउन सक्दैन । सुमामह मक्कावासीहरूको निम्ति खेत सरह नै थिए । समामहले आफ्नो देशतिर गएर मक्कावासीको लागि खाद्य पदार्थमा नाका बन्दी लगाइदिए । जसले गर्दा कुरैशहरू सक्त कठिनाइमा परे । उनीहरूले आफ्नो नातापाताको वास्ता जनाउँदै समामहलाई खाद्य पदार्थमा नाकाबन्दी नलगाउन आग्रह गरिदिन भनी मुहम्मदﷺलाई चिठी लेखे । मुहम्मदﷺले चिठी लेखिदिनुभयो ।[१]

## ३ बनु लह्यानको युद्ध

बनु लह्यान ती मानिसहरू हुन् जसले रजीअ भन्ने ठाउँमा मुहम्मदﷺको दश जना सहाबीहरूलाई धोका दिई घेरेर आठ जनाको हत्या गरेका थिए र दुई जनालाई मक्कावासीहरूको हातमा बेचेका थिए । त्यहाँ उनीहरूको निर्मम हत्या गरिएको थियो । उनीहरूको इलाका हिजाजभित्र धेरै टाढा मक्काको सिमाना नजिक थियो । त्यतिबेला मुसलमान, कुरैश र अरबीहरूबीच ठूलो दुस्मनी थियो । त्यसकारण मुहम्मदﷺले त्यस क्षेत्रभित्र गएर शत्रुहरूको सामना गर्न उचित ठान्नु भएन । तर जब काफिरहरूको विभिन्न दलभित्र फुट पर्‍यो, उनीहरूको हौसला टुट्यो र उनीहरूले परिस्थितिको अगाडि घुँडा टेके अनि मुहम्मदﷺले बनु लह्यानसँग रजीअमा हत्या गरिएकाहरूको बदला लिने बेला आएको छ भन्ने कुरा महसुस गर्नु भयो । तसर्थ मुहम्मदﷺ हिजरी सम्बत ६ साल रब्बीअल औवल वा जमादिल उलाको महिनामा दुई सय जना सहाबीहरू लिएर उनीहरू भएतिर जानुभयो । मदिनामा इब्ने उम्मे मक्तुमलाई आफ्नो प्रतिनिधि बनाएर सिरियातिर जाने कुरा गर्नुभयो । त्यसपछि उहाँ आक्रमण गर्दै अमज र उस्फानबीच गरान नामी उपत्यका जहाँ उहाँका सहाबीहरूको हत्या गरिएको थियो त्यहाँ पुग्नुभयो । उनीहरूको लागि अल्लाहसँग कृपा गर्न प्रार्थना गर्नुभयो । उता बनु लह्यानलाई उहाँहरू आएको खबर भएको थियो । त्यस कारण उनीहरू पहाडको शिखरतिर भागे । उनीहरूको कुनै पनि व्यक्ति हात परेन । उहाँ उनीहरूको भूमिमा दुई दिनसम्म बस्नुभयो । त्यस बीचमा उहाँले छापामार दल पनि पठाउनुभयो । तर बनु लह्यान कबिला भटिएन । त्यसपछि उहाँ उस्फानतिर लाग्नुभयो । त्यहाँबाट उहाँले कुरैशलाई आफ्नो आगमनको खबर होस् भनेर दश

१ जादुल मआद भाग २ सही बुखारी हदिस नं४३७३ फतहुलबारी भाग ७

घोडचढी सवारलाई कुराउल गमीम तर्फ पठाउनुभयो। त्यसपछि उहाँ पूरै चौध दिन मदिनाबाहिर विताएर मदिना वापस फर्कनुभयो।

त्यस संघर्षबाट फुर्सद पाएपछि मुहम्मद ﷺ ले निरन्तर सशस्त्रबल तथा छापामार टोली पठाइरहनु भयो। उनीहरूको बारेमा तल वर्णन गरिएको छ।

## ४ सरिया गमर

हिजरी सम्बत ६ साल रब्बीअल औवल वा रब्बीअल आखिरको महिनामा अक्काशा विन मुहसीनलाई चालीस जना सहाबीहरूको कमाण्डर बनाई गमरातर्फ पठाउनुभयो। गमर बनु असदको एक मुहानको नाम थियो। मुसलमान आएको खबर सुनेर शत्रुहरू भागे र मुसलमानहरू उनीहरूबाट दुई सय उँट लिएर मदिना आए।

## ५ सरिया जुल कस्सा १

हिजरी सम्बत ६ सालको रब्बिअल औवल वा आखिरको महिनामा मुहम्मद बिन मस्लमाको नेतृत्वमा दश जना सहाबीहरूलाई जुलकस्सातिर पठाइयो। त्यो ठाउँ बनु सअलबामा अवस्थित थियो। शत्रुहरूको संख्या एक सय थियो जो लुकेर बसेको थियो सहाबीहरू सुतेपछि उनीहरूले अचानक आक्रमण गरेर सहाबीहरूको हत्या गरे। मुहम्मद बिन मस्लमा मात्र बच्न सफल भए। उनी पनि घाइते भएका थिए।

## ६ सरीया जुल कस्सा २

मोहम्मद बिन मस्लमाको साथीहरूको हत्यापछि रब्बिअल आखिर ६ सालमा मुहम्मद ﷺ ले अबु उबैदा बिन जर्राहलाई जुल कस्सातिर पठाउनुभयो। उनले चालीस जना साथीहरू लिएर माथि उल्लेखित सहाबीहरू शहिद गरिएको ठाउँमा गए। रातभरि पैदल यात्रा गरेर एका विहानी बनु सअलबामाथि छापा मारे। तर बनु सअलबा छिटोछिटो पहाडतिर गएर लुक्यो जसले गर्दा मुसलमानहरूले पक्रन सकेनन्। मुसलमानहरूले केवल एक जनालाई मात्र गिरिफ्तार गर्न सफल भए। त्यो व्यक्ति पनि पछि मुसलमान भयो। चौपाया तथा बाखाहरू भने सहाबीहरूले हात पारे।

## ७ सरिया जमुम्

त्यो दस्ता जैद बिन हारिसको नेतृत्वमा हिजरी सम्बत ६ साल रब्बिअल आखिर महिनामा जमुम्तर्फ पठाइएको थियो। जमुम मर्रुज्जहरानमा बनु सुलैमको एक मुहानको नाम हो। जैद त्यहाँ पुगेपछि कबिला मुजैनीयाकी एक जना महिला जसको नाम हलिमा थियो गिरिफतार भई। उसले बनु सुलैमको एउटा ठाउँको ठेगाना बताई जहाँ अधिक बाखा तथा जनावरहरू र बन्दीहरू फेला परे। जैद ती सबै वस्तु लिएर मदिना फर्के। मुहम्मद ﷺ ले त्यस मुजैनी महिलालाई मुक्त गरी उसको विवाह गरिदिनुभयो।

## ८ सरिया इस

त्यो छापामार टोली एक सय सत्तरी जनामा सम्मिलित थियो । त्यस छापामारको नेतृत्व पनि जैद बिन हारिसालाई नै दिएर उनलाई हिजरी सम्बत ६ साल जमादिउल औवल महिनामा इसतर्फ पठाइएको थियो । त्यस संघर्षमा कुरैशको एउटा त्यो काफेलाको माल सामान हात लाग्यो जो काफेला मुहम्मदﷺको जुवाइँ अबुल आसको नेतृत्वमा यात्रा गरिरहेको थियो । उनी गिरिफतार त भएनन् तर भागेर सीधै मदिना गएर जैनबकहाँ शरण लिए । अबुल आसले उनलाई मुहम्मदﷺसँग छापामारले उनीहरूको सामान फर्काउन् भनेर भन्न लगाए । जैनबले त्यो कुरा मुहम्मदﷺलाई भनेपछि मुहम्मदﷺले कुनै दबाव नदिई सहाबीहरूलाई सामान फिर्ता गर्न आग्रह गर्नुभयो । सहाबीहरूले सबै सामान फर्काइदिए । अबुल आसले सबै माल सामान लिएर मक्का गई सबै सामान आफ्नो मालिकलाई बुझाए । त्यसपछि उनी इस्लाममा प्रवेश गरेर मदिना फर्के । मुहम्मदﷺले पहिलाको निकाहमा नै जैनबलाई उनको हवाला गरिदिनुभयो । यो कुरा सही हदिसबाट पनि प्रमाणित छ । [1]

उहाँले पहिलो निकाहको आधारमा किन हवाला गर्नुभयो भने त्यति बेलासम्म काफिरसँग मुस्लिम महिलाको विवाह अवैध गरिएको आदेश अवतरण भएको थिएन । एउटा हदिसमा वर्णन भए अनुसार उहाँले उनको नयाँ निकाह गरी विदाई गर्नुभएको थियो वा उनलाई ६ वर्षपछि विदाई गरिएको थियो । तर यस हदिसमा कुनै अर्थ र विश्वसनीय आधार छैन ।[2] त्यो कुरा यी दुवै दृष्टिकोणले कमजोर छ । यस कमजोर हदिसको आधारमा बहस गर्नेहरू विवादास्पद देखिन्छन् । उनीहरू भन्छन् , अबुल आस ८ हिजरीको आखिरमा मक्का विजय हुनुभन्दा पहिला मुसलमान भएका थिए र ८ हिजरीको शुरुमा जैनबको मृत्यु भएको थियो । यी दुवै कुरा सही मानिने हो भने विवाद व्यापक रूपमा देखिन्छ । अबुल आसले इस्लाम कबुल गरेर हिजरत गरी मदिना आउँदा जैनब जीवित कहाँ थिइन् र ? मैले यस विषयमा बुलुगुल मराम नामक किताबको फुट नोटमा विस्तृत व्याख्या गरेको छु ।[3]

यस कुरा बाहेक मुहम्मदﷺले हुदैबिया सन्धि गरेर कुरैशको काफेलामाथि छापा मार्न मुसलमानलाई पठाउनु भएको थियो भन्ने कुराको कल्पना पनि गर्न सकिदैन । हुदैबिया सन्धिको उल्लंघन मुस्लिमले होइन कुरैशले नै गरेका थिए भन्ने कुरामा सबै जीवनीकारहरू  एक मत छन् ।

---

१ औनुल माअबुद
२ तोहफतुल अहवजी भाग २
3 यस संघर्षलाई इब्ने हजरले फतहुलबारीमा हिजरी सम्बत ६ सालको घटनामा समावेश गरेका छन् भाग ७

प्रख्यात मगाजी मुसा बिन उक्बाको विचारमा यो घटना ७ हिजरीमा अबु बसिर र उनको साथीहरूको बीचमा भएको थियो । तर यस कुराको प्रमाण न त सही हदिसमा छ न कमजोर हदिसमा ।

## ९ सरिया तरफ वा तुरुक

त्यस छापामार टोलीको नेतृत्व पनि जैद बिन हारिसालाई दिएर जमादिउल आखिर महिनामा तरफबाट तरक नामी ठाउँतिर पठाइएको थियो । त्यो ठाउँ बनु सअलबाको क्षेत्रमा अवस्थित थियो । जैदको साथमा केवल १५ जना साथीहरू थिए । तर देहाती अरबीहरू उनीहरू आएको सुइँको पाउने वित्तिकै भागे । उनीहरूलाई मुहम्मदﷺ आउदै हुनुहुन्छ भन्ने कुराको डर थियो । जैद चार वटा उँट कब्जा गरेर चार दिनपछि फिर्ता भए ।

## १० सरिया वादिउलकुरा

त्यो छापामार टोलीमा १२ जना थिए । त्यसको कमाण्डर पनि जैद नै थिए । उनी रजब महिना हिजरी सम्बत ६ सालमा उपत्यका अलकुरातिर गए । उनको उद्देश्य शत्रुहरूको गतिविधि पत्ता लगाउनु थियो । तर उपत्यका अलकुराका वासीहरूले छापामार टोलीमाथि आक्रमण गरी उनीहरूलाई शहिद गरिदिए । उनीहरूमध्ये तीन जना मात्र बचेका थिए । ती तीन जनामध्ये जैद पनि थिए ।[१]

## ११ सरिया खब्त

त्यो संघर्ष हिजरी सम्बत ८ साल रजब महिनामा भएको थियो । तर परिवेशलाई हेर्ने हो भने त्यो घटना हुदैबियाभन्दा पहिला भएको देखिन्छ । जाबिरको बयान छः मुहम्मदﷺले तीन सय सवारीहरूको एउटा टोली पठाउनु भएको थियो । हाम्रा कमाण्डर अबु उबैदा बिन जर्राह थिए । हाम्रो उद्देश्य कुरैशको एउटा काफेला पत्ता लगाउनु थियो । हामी त्यस संघर्षमा अति भोकाएका थियौँ । त्यसले गर्दा पात झारेर खान बाध्य भयौँ । त्यसै कारणले त्यसको नाम जैश खब्त पऱ्यो । खब्त झारिएको पातलाई भनिन्छ । केही सिप नलागेपछि एक जना साथीले तीन वटा उँट वध गऱ्यो । त्यसपछि फेरि तीन वटा उँट । फेरि तीन वटा उँट वध गऱ्यो । तर त्यसपछि अबु उबैदाले रोके । त्यसपछि समुन्द्रको छालले अम्बर नामी एउटा माछा बाहिर फ्याँक्यो । त्यो माछा हामीले १५ दिनसम्म खायौँ र त्यसको तेल पनि लगाउने गऱ्यौँ र हामी दरिलो भयौँ । अबु उबैदाले माछाको ढाडबाट एउटा काँडा निकाले । उनले लस्करका सबैभन्दा अग्लो मान्छे र अग्लो उँट हेरेर अग्लो मान्छेलाई त्यस

१ रहमतुल लिल् आलमीन भाग २, यी युद्धको विवरण रहमतुल लिल् आलमीन , जादुल मआद भाग २, तलकिहुल फहुमको फुट नोटमा पनि हेर्न सकिन्छ ।

काँडामा सवार गरे । ऊ त्यसबाट हिँडेर मूनिबाट निस्क्यो । हामीले त्यस माछाको मासु राख्यौं । मदिना पुगेर मुहम्मदﷺसँग त्यसको बारेमा बतायौं । उहाँले त्यसको बारेमा भन्नुभयो : त्यो त अल्लाहको तर्फबाट प्रदान गरिएको खाना थियो । केही भए हामीलाई पनि खुवाऊ । हामीले मुहम्मदﷺकहाँ केही मासु पठायौं ।[१] घटनाको विवरण समाप्त भयो ।

माथिको सन्दर्भले त्यो घटना हुदैबियाभन्दा पहिलाको हो भन्ने कुरा पुष्टि गर्दछ । किनभने हुदैबियाको सन्धिपछि मुसलमानले कुरैशी काफेलाविरुद्ध कुनै संघर्ष गरेनन् ।



१ सही बुखारी भाग २ , सही मुस्लिम भाग २

# बनी मुस्तलिकको युद्ध

युद्धको दृष्टिकोणले यो कुनै ठूलो युद्ध त होइन तर पनि त्यसको ठूलो महत्व छ । किनभने त्यस युद्धमा यस्ता घटनाहरू घटेका थिए जसकारण इस्लामी समाजमा त्रास तथा आतंक मच्चिएको थियो । परिणाम स्वरूप एकातिर मुनाफिकहरूको पोल खुल्यो भने अर्कोतर्फ दण्डसम्बन्धी यस्तो कानून अवतरण भयो जसको आधारमा इस्लामी समाजले उच्च, आदर्श र स्वच्छ समाजको रूप लियो । हामी पहिला युद्धको बारेमा वर्णन गर्नेछौँ । त्यसपछि घटनाहरूको विवरण प्रस्तुत गर्नेछौँ ।

यो युद्ध आम जीवनीकारको भनाइ अनुसार हिजरी सम्बत ५ सालमा र इब्ने इस्हाक अनुसार हिजरी सम्बत ६ सालमा भएको थियो ।[1] कारण, बनु मुस्तलकको सरदार हारिस बिन अबी जर्रार मुहम्मदﷺविरुद्ध युद्ध गर्न आफ्नो कबिला र अन्य अरबीहरूको साथमा आउँदैछ भन्ने खबर मुहम्मदﷺलाई प्राप्त भयो । मुहम्मदﷺले त्यो खबरको बारेमा छानबिन गर्न बुरैदा बिन हुसैब अस्लमालाई पठाउनुभयो । त्यस

---

१ यसको तर्क यसरी दिइएको छ, युद्धबाट फर्कने क्रममा गुरुमा आइशामाथि मिथ्यारोपणको घटना घट्यो । ज्ञात रहोस् यो घटना जैनबसँग अल्लाहका संदेष्टाको विवाह भएपछि र मुसलमान महिलाको निम्ति पर्दाको आदेश अवतरण भएपछि घटेको थियो । तथापी जैनबको विवाह हिजरी सम्बत ५ सालको अन्तिम अर्थात जिल्हज ५ सालमा भएको थियो । यो युद्ध हिजरी सम्बत ५साल शाबानको महिनामा भएको थियो भन्ने कुरामा सबैको एक मत छ । तसर्थ यो युद्ध हिजरी सम्बत ५ सालमा नभएर हिजरी सम्बत ६ साल शअबान महिनामा नै हुन पर्छ । जुन जीवनीकारहरुले युद्धको मिति हिजरी सम्बत ५ साल बताउँछन् उनीहरुको तर्क यो छ । गुरुमा आइशामाथि लगाइएको मिथ्यारोपण विषय हदिसमा सअद विन मुआज र सअद विन उबादहबीच यस बारे चर्को भनाभन भएको कुरा उल्लेख छ । ज्ञात रहोस् सअद विन मुआज ५ हिजरीमा बनु कुरैजा युद्धमा वितेका थिए । तसर्थ मिथ्यारोपणको समयमा उनको उपस्थितिले यो युद्ध हिजरी सम्बत ६ सालमा नभइ हिजरी सम्बत ५ सालमा भएको कुरा पुष्टि गर्दछ ।

यसको जवाफ पहिलो पक्षले यसरी दिए : मिथ्यारोपण सम्बन्धी हदिसमा सअद विन मुआजको जिकिर हदिस वर्णन गर्ने व्यक्तिले भुलेर गरेका हुन् । किनभने यै हदिस गुरुमा आइशाबाट इब्ने इस्हाकले विश्वसनीय स्रोत जोहरीबाट र जोहरीले अब्दुल्लाह विन उत्बा र अब्दुल्लाहले आइशाबाट वर्णन गरेका छन् । यस हदिसमा सअदको जिकिर नभई उसैद विन हुजैरको जिकिर छ । तसर्थ इमाम अबु मुहम्मद विन हजमले यसैलाई सही ठानेका छन् र सअद विन मुआजको जिकिर गरिएको कुरा केवल भूल हो । हेर्नुहोस् जादुल मआद भाग २,

तसर्थ मेरो नजरमा पनि पहिलो पक्षका तर्कहरु बढी गहकिला लाग्छन् । तसर्थ हामीलाई यै कुराबाट असहमती थियो । तर विचार गर्ने हो भने यस तर्कको केन्द्रविन्दु जैनबको विवाह हो जुन अल्लाहका संदेष्टासँग हिजरी सम्बत ५ सालको अन्तिमतिर भएको थियो । जबकि यसमा केही सन्दर्भबाहेक अरु कुनै बलियो प्रमाण छैन । मिथ्यारोपणको घटना र त्यसपछि सअद विन मुआजको उपस्थितिको प्रमाण विभिन्न सही हदिसहरुमा छ । जसलाई भ्रम भन्नु उचित हुन्न । जैनबको विवाह हिजरी सम्बत ४ सालको अन्तिमतिर र हिजरी सम्बत ५ सालको शुरुमा भएको पनि हदिसमा उल्लेख छ । त्यसकारण मिथ्यारोपणको घटना र बनी मुस्तलक युद्ध शअबान ५ हिजरीमा भएको धेरै सम्भावना देखिन्छ ।

कबिलातिर गएर उनले हारिस बिन जर्रारसँग भेटवार्ता गरी वापस फर्केर परिस्थिति बारे मुहम्मदﷺलाई बताए ।

त्यस खबरको सत्यता बारे पूर्ण विश्वास भएपछि उहाँले सहाबीहरूलाई युद्धको तयारी गर्न आदेश दिनुभयो र तुरुन्तै त्यसतर्फ प्रस्थान हुनुभयो । शअबान महिनाको २ तारिखको दिन उनीहरू त्यसतर्फ गए । त्यस युद्धमा उहाँको साथमा मुनाफिकहरूको एउटा समूह पनि सामिल थियो जसले त्यसअघि कुनै पनि युद्धमा भाग लिएको थिएन । उहाँले मदिनाको व्यवस्थापनको जिम्मेवारी जैद बिन हारिसालाई दिनुभयो । केही भनाई अनुसार उहाँले मदिनाको व्यवस्थापनको जिम्मेवारी अबु जर वा नुमैलाह बिन अब्दुल्लाह लैसीलाई दिनुभएको थियो । हारिस बिन जर्रारले इस्लामी लस्कर बारे खबर पत्ता लगाउन  एक जना जासुसलाई पठाएको थियो । तर मुसलमानहरूले उसलाई गिरिफतार गरी उसको हत्या गरिदिएका थिए ।

हारिस बिन अबी जर्रार र उसको साथीहरूलाई मुहम्मदﷺको प्रस्थान र आफ्नो जासुसको हत्याको खबरले निकै भयभीत बनायो । अरबीहरू जो उसको साथमा थिए सबै उथलपुथल भए । मुहम्मदﷺ मुरैसिअ[1] नामक मुहानमा पुगे लगतै बनु मुस्तलक युद्ध गर्न सक्रिय भयो । मुहम्मदﷺ र सहाबीहरूले पनि युद्धको लागि पंक्ति बनाए । इस्लामी लस्करको झण्डा अबु बकरको हातमा थियो भने अन्सारको झण्डा सअद बिन उबादहको हातमा थियो । केही बेर दुवै पक्षबीच वाण हानाहान भयो । त्यसपछि मुहम्मदﷺको आदेशमा साथीहरूले एक्कासी आक्रमण गरे । उनीहरू विजय भए र बहुदेववादीहरूले पराजय भोगे । केहीले पिटाइ खाए । महिला तथा बालबच्चाहरूलाई बन्दी बनाइयो । केही जनावर तथा बाखा पनि हात लागे । मुसलमानको तर्फबाट केवल एक जना मारिएको थियो । उनलाई एक जना अन्सार साथीले शत्रु सम्झेर गल्तीले शहिद गरेका थिए ।

यस युद्ध बारे जीवनीकारहरूको यै भनाई छ । तर इब्ने कैयमले यसलाई एक भ्रम हो भनी लेखेका छन् । किनभने यस युद्धमा लडाइँ भएको थिएन । मुहम्मदﷺले मुहानमाथि छापा मारेर महिला तथा बालबच्चा र जनावरलाई कब्जा गर्नुभएको थियो । जस्तै सही हदिसमा वर्णन छ : मुहम्मदﷺले बनु मुस्तलकमाथि उनीहरू असतर्क रहेको अवस्थामा छापा मार्नु भएको थियो ।[2]

बन्दीहरूमा जुवैरिया पनि थिइन् । उनी बनु मुस्तलकका सरदार हारिस बिन अबी जर्रारकी छोरी थिइन् । उनी साबित बिन कैसको भागमा परिन् । साबितले

---

१ मुरैसिअ कुदैद वरिपरि समुन्द्रको किनारामा बनु मुस्तलकको एउटा मुहानको नाम हो ।
२ सही बुखारी भाग १, फतहुल बारी भाग ५

उनलाई मुकातिबा[1] (अर्थात पैसा तिरेर मुक्त हुने दासिका)को रूपमा राखे । त्यसपछि मुहम्मदﷺले उनको तर्फबाट तय गरिएको रकम दिई उनलाई मुक्त गरेर उनीसँग विवाह गर्नुभयो । उनीसँग उहाँले विवाह गरेकाले मुसलमानहरूले बनु मुस्तलकका एक सय घर परिवारलाई जो मुसलमान बनेका थिए मुक्त गरिदिए । मुस्लिमहरूले बन्दी बनेका दास दासिकाहरूलाई यिनीहरू मुहम्मदﷺका ससुराली हुन् भनेर भन्न थाले ।[2]

यो त्यस युद्धको एउटा चिनो हो । बाँकी यस युद्धमा घटेका घटनाहरूको कारणी मुनाफिकको सरदार अब्दुल्लाह बिन उबै र उसका साथीहरू थिए । तसर्थ इस्लामी समाजमा उनीहरूको व्यवहार तथा गतिविधिको एक झलक प्रस्तुत गरेपछि यसको विवरण प्रस्तुत गर्न अनुचित नहोला ।

## बनु मुस्तलिकको युद्धभन्दा पहिला मुनाफिकहरूको गतिविधि

हामीले वर्णन गरेका छौं, अब्दुल्लाह बिन उबैलाई इस्लाम, मुसलमान र खास गरी मुहम्मदﷺसँग ठूलो जलन थियो । किनभने अवस र खजरज उसको नेतृत्वलाई स्वीकार्न सहमत भइसकेका थिए । उसलाई ताज पहिराउनको लागि मुंगाको श्रीपेच बनाइएको अवस्थमा मदिनामा इस्लामको किरण झुल्क्यो । मानिसहरूको ध्यान अब्दुल्लाह बिन उबैबाट हट्यो । त्यसकारण उसलाई मुहम्मदﷺले उसको राज खोसेको भान भयो ।

उसको त्यो डाह हिजरतको आरम्भदेखि नै प्रष्ट भएको थियो । त्यति बेला उसले इस्लाम लिएको घोषणा पनि गरेको थिएन । इस्लाममा प्रवेश गरेको घोषणा गरेपछि पनि उसको चाल जस्ताको तस्तै थियो । उसले इस्लाम प्रकट गर्नुअघि एक चोटि मुहम्मदﷺले गधामा सवार भई सअद बिन उबादहको हालखबर सोध्न जाँदै हुनुहुन्थ्यो । बाटोमा एउटा बैठक बसेको थियो । जसमा अब्दुल्लाह बिन उबै पनि थियो । उसले आफ्नो नाक छोपेर भन्यो धुलो नउडाऊ । त्यसपछि मुहम्मदﷺले त्यो बैठकमा कुरआनको श्लोक पढ्नुभयो । उसले भन्यो तपाईँ आफ्नो घरमा बस्नुहोस् हाम्रो बैठकमा हामीलाई न घेर्नुहोस् ।[3]

त्यो कुरा उसले इस्लाम प्रकट गर्नुअघिको हो । तर बदरको युद्धपछि परिस्थितिको मोड देखेर उसले इस्लाम प्रकट त गऱ्यो तर ऊ इस्लाम मुसलमान र मुहम्मदﷺको शत्रु नै रहृयो । उसले इस्लामी समाजमा फुट हाल्न र इस्लामी

---

१ मुकातिब त्यो दास वा दासिकालाई भनिन्छ जसले मुक्त हुनको लागि आफनो मालिकलाई निश्चित रकम दिने सहमती गरेको हुन्छ ।
२ जादुल मआद भाग २, इब्ने हेशाम
3 इब्ने हेशाम भाग १, सही बुखारी भाग २, सही मुस्लिम भाग २

आवाजलाई कमजोर पार्न उसले निरन्तर कोसिस गरिरहयो । उसले इस्लामी शत्रुसँग निरन्तर सम्पर्क राख्थ्यो । तसर्थ उसले बनु कैनुकाको मामिलामा मूर्ख्याइँ तरीकाले हस्तक्षेप गरेको थियो । जसको बारेमा पछाडिका पृष्ठहरूमा उल्लेख भइसकेको छ । त्यसैगरी उसले उहुदको युद्धमा पनि अपराध, धोका, मुसलमानभित्र फुट, उनीहरूभित्र आतंक, विखण्डन तथा उथलपुथल मच्चाउने प्रयास गरेको थियो । यसको बारेमा पनि उल्लेख भइसकेको छ ।

त्यो मुनाफिकको षड्यन्त्र र धोका कतिसम्म थियो भने इस्लामको घोषणा गरेपछि प्रत्येक शुक्रबार मुहम्मदﷺ प्रवचन दिन आउँदा ऊ पहिला उभिएर तिमीहरूको बीचमा उहाँ ईशदूत आउनु भएको छ भन्थ्यो । अल्लाहले उहाँद्वारा तिमीहरूलाई इज्जत एवं सम्मान दिएको छ । तसर्थ उहाँको मदत गर । उहाँको साथ देउ, उहाँको कुरा सुन र मान । आफ्नो कुरा राखेर ऊ बस्थ्यो अनि मुहम्मदﷺ उठेर प्रवचन दिनुहुन्थ्यो । उसको ढिपीपन र निर्लज्जतापनले त्यतिखेर सीमा नाघ्यो जब उहुदको युद्धपछि पहिलो शुक्रबारको दिन आयो । कारण त्यो व्यक्ति त्यस युद्धमा आफ्नो फोहर कुटनीतिको बावजुद उहाँले प्रवचन दिनुभन्दा पहिला उभियो र त्यही कुरा दोहोऱ्याउन थाल्यो जुन उसले पहिला भन्ने गर्थ्यो । तर यस पटक भने मुसलामनहरूले चारैतिरबाट उसको कपडा तानेर भने : हे अल्लाहको शत्रु, बस । तिमीले जुन हरकत गरेका छौ अब तिमी यस्तो कुरा गर्ने लायक छैनौ । त्यो कुरा सुनेर ऊ मानिसहरूको काँध फान्दै बड्बडाउँदै बाहिर निस्क्यो : मैले उनको समर्थनमा बोल्न उठ्दा कुनै अपराधिक कुरा गरेको जस्तो भयो । संयोगले बाहिर ढोकामा एक जना अन्सारसँग उसको भेट भयो । उनले उसँग भने । तिम्रो नाश होस् । वापस फर्क । मुहम्मदﷺले तिम्रो क्षमाको लागि प्रार्थना गरिदिनु हुनेछ । उसले भन्यो, अल्लाहको कसम उहाँले मेरो लागि प्रार्थना गरुन् भन्ने म चाहदिनँ ।[१]

त्यस बाहेक उसले बनु नजिरसँग पनि सम्पर्क गरिरहेको थियो । उनीहरूसँग मिलेर पर्दापछाडि मुसलमानको विरुद्ध षड्यन्त्र गरिरहन्थ्यो ।

त्यसैगरी इब्ने उबै र उसका साथीहरूले खन्दकको युद्धमा मुसलमानभित्र त्रास एवं आतंक मच्चाउन र उनीहरूलाई तर्साउन विभिन्न जुक्ति गरेका थिए । जसको विवरण अल्लाहले सुरह अहजाबको निम्नलिखित श्लोकमा गरेका छन् ।

وَإِذْ يَقُولُ الْمُنَافِقُونَ وَالَّذِينَ فِي قُلُوبِهِمْ مَرَضٌ مَا وَعَدَنَا اللَّهُ وَرَسُولُهُ إِلَّا غُرُورًا وَإِذْ قَالَتْ طَائِفَةٌ مِنْهُمْ يَا أَهْلَ يَثْرِبَ لَا مُقَامَ لَكُمْ فَارْجِعُوا ۚ وَيَسْتَأْذِنُ فَرِيقٌ مِنْهُمُ النَّبِيَّ يَقُولُونَ إِنَّ بُيُوتَنَا عَوْرَةٌ وَمَا هِيَ بِعَوْرَةٍ ۖ إِنْ يُرِيدُونَ إِلَّا فِرَارًا وَلَوْ دُخِلَتْ عَلَيْهِمْ مِنْ أَقْطَارِهَا ثُمَّ سُئِلُوا الْفِتْنَةَ لَآتَوْهَا وَمَا تَلَبَّثُوا بِهَا إِلَّا يَسِيرًا وَلَقَدْ كَانُوا عَاهَدُوا اللَّهَ مِنْ قَبْلُ لَا يُوَلُّونَ الْأَدْبَارَ ۚ وَكَانَ عَهْدُ

११ इब्ने हेशाम भाग २

اللَّهِ مَسْئُولًا قُلْ لَنْ يَنْفَعَكُمُ الْفِرَارُ إِنْ فَرَرْتُمْ مِنَ الْمَوْتِ أَوِ الْقَتْلِ وَإِذًا لَا تُمَتَّعُونَ إِلَّا قَلِيلًا قُلْ مَنْ ذَا الَّذِي يَعْصِمُكُمْ مِنَ اللَّهِ إِنْ أَرَادَ بِكُمْ سُوءًا أَوْ أَرَادَ بِكُمْ رَحْمَةً ۚ وَلَا يَجِدُونَ لَهُمْ مِنْ دُونِ اللَّهِ وَلِيًّا وَلَا نَصِيرًا قَدْ يَعْلَمُ اللَّهُ الْمُعَوِّقِينَ مِنْكُمْ وَالْقَائِلِينَ لِإِخْوَانِهِمْ هَلُمَّ إِلَيْنَا ۖ وَلَا يَأْتُونَ الْبَأْسَ إِلَّا قَلِيلًا أَشِحَّةً عَلَيْكُمْ ۖ فَإِذَا جَاءَ الْخَوْفُ رَأَيْتَهُمْ يَنْظُرُونَ إِلَيْكَ تَدُورُ أَعْيُنُهُمْ كَالَّذِي يُغْشَىٰ عَلَيْهِ مِنَ الْمَوْتِ ۖ فَإِذَا ذَهَبَ الْخَوْفُ سَلَقُوكُمْ بِأَلْسِنَةٍ حِدَادٍ أَشِحَّةً عَلَى الْخَيْرِ ۚ أُولَٰئِكَ لَمْ يُؤْمِنُوا فَأَحْبَطَ اللَّهُ أَعْمَالَهُمْ ۚ وَكَانَ ذَٰلِكَ عَلَى اللَّهِ يَسِيرًا يَحْسَبُونَ الْأَحْزَابَ لَمْ يَذْهَبُوا ۖ وَإِنْ يَأْتِ الْأَحْزَابُ يَوَدُّوا لَوْ أَنَّهُمْ بَادُونَ فِي الْأَعْرَابِ يَسْأَلُونَ عَنْ أَنْبَائِكُمْ ۖ وَلَوْ كَانُوا فِيكُمْ مَا قَاتَلُوا إِلَّا قَلِيلًا (الأحزاب: ١٢ – ٢٠)

मुनाफिकहरू र ती व्यक्तिहरू जसको मनमा खोट थियो उनीहरूले भनिरहेका थिए हामीसँग अल्लाह र उनका दूतले जुन बाचा गरेका थिए त्यो केवल धोका थियो । उनीहरूमध्ये एउटा समूहले भन्यो : हे यस्रीबवासीहरू हो, तिमीहरूको यहाँ बस्नु कुनै औचित्य छैन तसर्थ फर्किहाल । उनीहरूको एकअर्को समूहले मुहम्मदﷺसँग हामीहरूको घर खुल्ला छन् भनेर अनुमति माग्दै थियो । तर उनीहरूको घरबार खुल्ला थिएनन् । उनीहरू केवल भाग्न चाहन्थे । यदि मदिनाको चारैतिरबाट उनीहरूमाथि आक्रमण गरिएको भए र उनीहरूलाई हिंसा गर्न भनिएको भए उनीहरू जान्थे र केही बेर मात्र लड्ने थिए । उनीहरूले यसअघि भाग्दैनौं भनेर अल्लाहसँग बाचा गरेका थिए । अल्लासँग गरेको बाचा बारे सोधपुछ हुनेछ । तपाईं भनिदिनुहोस् : तिमी मृत्यु वा हत्याबाट भाग्दै छौ भने यसले तिमीलाई लाभ पुऱ्याउने छैन । त्यस अवस्थामा पनि तिमीहरूले कमै लाभ पाउने छौ । तपाईं सोध्नुहोस्, को छ तिमीहरूलाई अल्लाहबाट बचाउने यदि उसले तिमीहरूमाथि राम्रो वा नराम्रो गर्न चाहेमा ? उनीहरूले अल्लाह बाहेक न त कोही मित्र पाउने छन् न सहयोगी । अल्लाहले तिमीहरूमध्ये ती व्यक्तिहरूलाई राम्रोसँग चिन्दछ जसले बाधा अड्चन हालेका छन् र आफ्नो भाइहरूसँग भनेका छन्, हाम्रो साथमा आऊ । युद्ध गर्न कहिलेकाहिँ मात्र आउँछन् । तिमीहरूको साथ दिन कन्जुस्याइँ गर्दछन् । अनि जब भय र डरको समय आउँछ तब तपाईंले उनीहरूलाई देख्नु हुनेछ कि उनीहरू तपाईंतिर हेरिराख्नेछन् र उनका आँखाहरू त्यसरी घुम्छन् जस्तो कोही मर्दा छटपटाउँछ । किन्तु जब भय समाप्त हुन्छ तब उनीहरूले आफ्नो चिपले मुखले ठुलठुला कुरा गर्न थाल्छन् । यिनीहरू धनका धेरै लोभी छन् । उनीहरूले इमान ल्याएका छैनन् तसर्थ अल्लाहले उनीहरूको सबै कर्मलाई नष्ट गरिदिएका छन् र यो कुरा अल्लाहको लागि अति सजिलो छ । उनीहरू(मुनाफिकहरू)ले ठानिराखेका छन् कि सैन्य दलहरू अझै गएका छैनन् र फौज आएको खण्डमा तिनीहरू मरुभूमि बाहिर देहातीहरूकहाँ जान चाहने छन् । त्यहीँबाट तिम्रो बारेमा खबर लिने छन् । यदि उनीहरू तिम्रो साथमा भएता पनि लडाइँमा केही छिन मात्र सामिल हुने थिए । (अल् अहजाब: १२–२०)

उपरोक्त श्लोकहरूमा त्यसको सांदर्भिकताका साथ मुनाफिकहरूको सोच , उनीहरूको व्यवहार, उनीहरूको मनोविज्ञान, स्वार्थी तथा अवसरवादी भावनाको एक पूर्ण चित्ररेखा खिँचिएको छ ।

यी सबै कुरा हुँदाहुँदै पनि यहुदी, मुनाफिक र बहुदेववादी लगायत इस्लामका सम्पूर्ण शत्रुहरूलाई इस्लामी विजयको रहस्य केवल भौतिक सामग्री, फौजी हतियार र अत्यधिक फौजी शक्ति थिएन भन्ने कुरा राम्रोसँग थाहा थियो । किन्तु त्यसको कारण ईश्वरीय शक्ति र उनीहरूको नैतिक शक्ति थियो जसबाट पूरा इस्लामी समाज र इस्लामसँग सम्बन्ध राख्ने हरेक व्यक्ति लाभान्वित छन् । त्यस लाभको मुख्य कारक र नैतिक चमत्कारको सीमाका सबैभन्दा उच्च नमुना पनि उहाँ नै हुनुहुन्छ भन्ने कुरा इस्लामका शत्रुहरूलाई थाहा थियो ।

त्यसैगरी इस्लामविरोधी शत्रुहरूले चार पाँच वर्षसम्म सत्तामा रहँदा इस्लाम धर्म र धर्मावलम्बिहरूलाई हतियारको बलमा सखाप पार्न असम्भव छ भन्ने कुरा बुझिसकेका थिए । त्यसकारण उनीहरूले नैतिकताको आधारमा इस्लाम विरुद्ध व्यापक रूपमा प्रोपेकण्डा गरी युद्ध छेड्ने निर्णय गरे । यसको पहिलो निशाना मुहम्मदﷺलाई बनाउने निर्णय गरे । किनभने मुनाफिकहरू मुसलमानको शत्रुहरूमध्ये पाँचौं नम्बरमा थिए । उनीहरू मदिनाभित्र नै बस्थे । मुसलमानसित विना कुनै रोकटोक मिलजुल गर्न सक्थे । मौका पाउना साथ उनीहरूको भावनालाई कुनै पनि बेला भड्काउन सक्थे । त्यसकारण प्रोपेकण्डा गर्ने जिम्मेवारी यिनै मुनाफिकहरूले लिएका थिए वा उनीहरूलाई दिइएको थियो र अब्दुल्लाह बिन उबैले जो मुनाफिकहरूको सरदार थियो उसले त्यस जिम्मेवारीको नेतृत्व सम्हालेको थियो ।

उनीहरूको कार्यक्रम त्यति बेला खुलेर सामुन्ने आयो जब जैद बिन हारिसाले जैनबलाई तलाक दिएका थिए र मुहम्मदﷺले उनीसँग विवाह गरेका थिए । किनकि अरबीहरूले परम्परादेखि धर्मपुत्रलाई आफ्नो सत्य पुत्र ठान्ने गर्थे । उसकी श्रीमतीलाई आफ्नो आफ्नै पुत्रकी श्रीमती झैं ठानेर विवाह गर्न अवैद्य ठान्दथे । त्यसकारण जब मुहम्मदﷺले जैनबसँग विवाह गर्नुभयो मुनाफिकहरूलाई आफुले सोचे जस्तो मुहम्मदﷺ विरुद्ध षड्यन्त्र रच्न दुई वटा कमजोर पक्ष पाए ।

एउटा कुरा त जैनब उहाँको पाँचौ श्रीमती थिइन् । जबकि कुरआनले चारभन्दा बढी विवाह गर्ने अनुमति दिइएको थिएन, त्यसकारण विवाह कसरी जायज हुन सक्छ र ?

अर्को कुरा जैनब उहाँको धर्मपुत्रकी श्रीमती थिइन् । त्यसकारण अरबको परम्परा अनुसार उनीसँग विवाह गर्न ठूलो अपराध र महापाप थियो । तसर्थ त्यस विषयमा ठूलो षड्यन्त्र गरियो । साथै विभिन्न प्रकारको उपन्यास रचियो । भन्नेहरूले यतिसम्म भने, मुहम्मदﷺले जैनबलाई अचानक देखे र उनको सुन्दरताबाट आकर्षित

भएर उनलाई मन पराउनुभयो । उनको धर्मपुत्र जैदलाई त्यस बारे खबर भएपछि उनले जैनबलाई मुहम्मदﷺको लागि छोडिदिए ।

मुनाफिकहरूले त्यस बारे निकै प्रोपेकण्डा गरे जसकारण त्यसको प्रभाव अँझसम्म किताबहरू, हदिस र कुरआनको व्याख्यामा भेटिन्छ । त्यतिखेर त्यस प्रोपेकण्डाले सीधासादा कमजोर मुसलमानमा नराम्रो असर पारेको थियो जसले गर्दा कुरआनमा त्यस बारे स्पष्ट श्लोक अवतरण भयो । त्यस श्लोकमा उनीहरुले गरेको शंका उपशंका पूर्णरुपमा निर्मूल पारिएको छ । कुरआनको सुरहको आरम्भ पनि त्यसै श्लोकबाट भएको कुराले त्यस षड्यन्त्रलाई कति व्यापक गरिएको थियो भन्ने प्रष्ट पार्छ ।

يَا أَيُّهَا النَّبِيُّ اتَّقِ اللَّهَ وَلَا تُطِعِ الْكَافِرِينَ وَالْمُنَافِقِينَ ۗ إِنَّ اللَّهَ كَانَ عَلِيمًا حَكِيمًا (الأحزاب: ١)

हे ईशदूत, अल्लाहसँग डराऊ, काफिर र मुनाफिकहरूसँग नडराऊ, किनकि अल्लाह ज्ञाता छन् र तत्वदर्शी पनि । (अल् अहजाब:१)

मुनाफिकहरूको गतिविधि र कारवाहीको यो एउटा हल्का संकेत र त्यसको छोटो रूपरेखा मात्र हो । मुहम्मदﷺले ती सम्पूर्ण गतिविधिहरू अति नै धैर्यता र संयमताका साथ सहनु भएको थियो । आम मुसलमानहरू पनि उनीहरूको दुष्टताबाट आफुलाई जोगाउँदै धैर्य गरी बसेका थिए । किनभने अल्लाहले मुनाफिकहरूलाई विस्तारै विस्तारै बेइज्जत गर्नेछ भन्ने कुरा उनीहरूलाई अनुभूति भएको थियो । फलस्वरूप कुरआनमा वर्णन गरिएको छ :

أَوَلَا يَرَوْنَ أَنَّهُمْ يُفْتَنُونَ فِي كُلِّ عَامٍ مَرَّةً أَوْ مَرَّتَيْنِ ثُمَّ لَا يَتُوبُونَ وَلَا هُمْ يَذَّكَّرُونَ (التوبة: ١٢٦)

के उनीहरूले आफुहरू हरेक वर्ष एक वा दुई पटक संकटमा परेको देखेका छैनन् ? तैपनि उनीहरूले न त क्षमायाचना गर्छन न सबक सिक्छन् । (अत्तौबा:१२६)

## मुस्तलकको युद्धमा मुनाफिकहरुको भूमिका

जब मुस्तलकको युद्ध भयो मुनाफिकहरू पनि त्यसमा सहभागी भए । उनीहरूले ठीक त्यही गरे जुन कुरा अल्लाहले निम्न श्लोकमा वयान गरेका छन् :

لَوْ خَرَجُوا فِيكُمْ مَا زَادُوكُمْ إِلَّا خَبَالًا وَلَأَوْضَعُوا خِلَالَكُمْ يَبْغُونَكُمُ الْفِتْنَةَ (التوبة :47 )

यदि उनीहरू तिमीहरूको साथमा निस्केका भए तिमीहरूको अँझ बढी विनाश गर्थे । उनीहरूले तिमीहरूमाझ घोडा दौडाउँथे र तिमीहरुमा उदण्डता मच्चाउन खोज्थे । (अत्तौबा:४७)

त्यस युद्धमा उनीहरूले धोका फेर्ने दुईटा अवसर पाए । त्यसको फाइदा उठाउँदै उनीहरूले मुसलमान समूहभित्र विशेष गरी अस्थिरता र विखण्डता सृजना गरे । मुहम्मदﷺविरुद्ध घृणित प्रोपेकण्डा गरे । ती दुईटा मौकाको केही व्याख्या विशलेषण यस प्रकार छ ।

## मदिनाबाट तुच्छ मान्छेलाई निकाल्ने कुरा

बनु मुस्तलकको युद्ध सकिएपछि मुहम्मदﷺ मुरैसिअ नामक मुहानमा गएर बस्नु भएको थियो । ठिक त्यसै बेला केही मान्छेहरू पानी लिन आए । उनीहरूमध्ये उमर बिन खत्ताबको एक जना मजदुर पनि थियो । जसको नाम जहजाह गिफारी थियो । पानी भर्ने ठाउँमा एक जना व्यक्ति सिनान बिन वबर जुहनीसँग उसको ठेलठाल भयो । दुवै लड्न लागे । जुहनीले आवाज दियो, हे अन्सारको जमात मेरो मदत गर,जहजाहले पनि मुहाजिरको जमातलाई हे, मुहाजिरको जमात मेरो मदत गर भन्दै गुहार्यो । खबर पाउने वित्तिकै मुहम्मदﷺले त्यहाँ गएर भन्नुभयो, म तिमीहरूको बीचमा हुँदा पनि तिमीहरूले अनपढ गवाँरले झैँ गुहारिरहेका छौ । यसलाई छोड , यो दुर्गन्धित छ ।

त्यस घटनाको खबर अब्दुल्लाह बिन उबै सलुलले पाएपछि उसले रिसाउँदै भन्यो के उनीहरूले यस्तो क्रियाकलाप गरेका हुन ? उनीहरू हाम्रो क्षेत्रमा आएर हाम्रो नै विरोधी बनेका छन् ? अल्लाहको कसम हामी र उनीहरूको स्थिति हेर्दा त त्यही उखान सत्य लाग्छ जसलाई पहिलाका मानिसहरूले भन्ने गर्थे : पालेको कुकुरले आफुलाई नै टोक्छ । सुन, यदि हामी मदिना फर्क्यौं भने हामीहरूको सम्मानित व्यक्तिले घृणित व्यक्तिलाई निकालेर बाहिर गर्नेछ । उसले फेरि मानिसहरूतिर ध्यानकेन्द्रित गर्दै भन्यो: यो दुःख तिमीहरूले खुदै कमाएका हौँ । तिमीहरूले नै उनीहरूलाई आफ्नो शहरमा ल्याएका हौ र आफ्नो धनसम्पत्ति पनि बाँडेर दियौ । हेर तिमीहरूसँग जे छ यदि तिमीहरूले दिन बन्द गर्‍यौ भने उनीहरू तिमीहरूको शहर छोडेर अन्य ठाउँतिर लाग्ने छन् । त्यतिखेर बैठकमा एक जवान सहाबी जैद बिन अरकम पनि उपस्थित थिए । उनले आएर आफ्नो काकालाई सम्पूर्ण कुरा सुनाए । उनको काकाले मुहम्मदﷺलाई खबर दिए । त्यति बेला उमर बिन खत्ताब पनि थिए । उनले मुहम्मदﷺसँग भने, हजुर अब्बाद बिन बिश्रलाई उसको हत्या गर्न भनिदिनु होस् । उहाँले भन्नुभयो, यो कसरी हुन सक्छ । मानिसहरूले पनि भन्ने छन्, मुहम्मदﷺले आफ्नो साथीहरूको हत्या गरिरहेको छ ? हुँदैन बरू तिमी यहाँ बाट गई हाल । यस्तो घडीमा उहाँ प्रस्थान गर्नु हुन्न थियो । मानिसहरू हिँडेपछि उसैद बिन खुजैर निस्के । सलाम गरेर भने, के आज तपाईं बेटाइममा हिँड्नु भएको थियो ? उहाँले भन्नुभयो, तिम्रो साथी इब्ने उबैले जे कुरा भनेका थिए के तिमीलाई त्यसको खबर भएन ? उनले सोधे, उसले के भनेको थियो र ? मुहम्मदﷺले भन्नुभयो, ऊ मदिना फर्क्यो भने सम्मानित व्यक्तिले घृणित व्यक्तिलाई मदिनाबाट बाहिर निकाल्ने छ । हे मुहम्मदﷺ यदि तपाईंले चाहनुभयो भने उसलाई मादिनाबाट निकाल्न सक्नुहुन्छ । अल्लाहको कसम तपाईं सम्मानित हुनुहुन्छ र ऊ घृणित छ । त्यसपछि

उनले भने हे ईशदूत ऊमाथि दया गर्नुहोस् । किनकि अल्लाहले तपाईंलाई हामीबीच त्यति खेर ल्यायो जति बेला उसका समूहले उसको सम्मानको लागि मुंगाको ताज बनाइरहेको थियो । त्यसकारण उसलाई तपाईंले नै उसको राजगद्दी खोस्नुभएको हो भन्ने लागेको छ ।

उहाँ दिनरात हिँडिरहनु भयो । दोस्रो दिन पनि घामले पोल्ने बेलासम्म यात्रा जारी राख्नुभयो । त्यसपछि सवारी बाट झरेर पाल टाँगेर बस्न लाग्दा मानिसहरू वेपत्ता भए । उहाँको उद्देश्य पनि मानिसहरूले बसेर गफ गर्ने मौका नपाओस् भन्ने नै थियो ।

जैद बिन अरकमले भण्डाफोर गरेको कुरा उता अब्दुल्लाह बिन उबैलाई थाहा भएपछि ऊ मुहम्मदﷺको सेवामा उपस्थित भयो । उसले अल्लाहको कसम खाएर भन्यो कि उसले जे कुरा भनेको छ त्यो कुरा मैले भनेको होइन र मुखमा पनि त्यो कुरा ल्याएको छैन । ठिक त्यसैबेला अन्सारका केही मानिसहरू पनि उपस्थित थिए, उनीहरूले भने : हे मुहम्मदﷺ जैद अँझै केटाकेटी छ । हुन सक्छ उसलाई भ्रम भयो होला । उसले जे भनेको थियो त्यो कुरा सही भन्न सकेन होला वा सम्झन सकेन होला । फलस्वरूप उहाँले अब्दुल्लाह बिन उबैको कुरालाई साँचो मान्नुभयो । जैद भन्छन् त्यस कुराबाट म यति दुखित भएँ त्यति दुखित म कहिल्यै भएको थिइनँ । दुखित अवस्थामा म आफ्नो घरमा बसिरहेँ । यहाँसम्म कि अल्लाहले सुरह मुनाफिकुन अवतरण गरे । जसमा दुवै कुरा उल्लेख छ ।

यी तिनै मुनाफिकहरू हुन् जसले भनेका थिए कि मुहम्मदको साथमा भएकाहरूमा खर्च नगर ताकि उनीहरू यहाँबाट निस्कुन् (सुरह मुनाफिक)

यी मुनाफिकहरू भन्छन् यदि हामी मदिना फर्कौं भने त्यहाँबाट सम्मानित मानिसहरूले घृणित मानिसहरूलाई निकालेर बाहिर गर्नेछन् । (सुरह मुनाफिक)

जैद भन्छन्, मुहम्मदﷺले मलाई बोलाएर यी श्लोकहरू पढेर सुनाउँदै भन्नुभयो अल्लाहले तिम्रो समर्थन गरेका छन् ।[१]

त्यस मुनाफिकको छोरा जसको नाम अब्दुल्लाह थियो उसको दाँजोमा उनी एकदमै भिन्न,सरल स्वभाव र विशिष्ट सहाबामध्ये थिए । उनी आफ्नो बाउसँग अलग भएका थिए । उनी मदिनाको प्रवेशद्वारमा तरवार लिएर खडा भए । जब उनको बाउ अब्दुल्लाह बिन उबै त्यहाँ पुग्यो अनि उनले भने : यहाँबाट अगाडि जान पाउँदैनौ जबसम्म मुहम्मदﷺले अनुमति दिनुहुन्न । किनभने मुहम्मदﷺ सम्मानित हुनुहुन्छ, तिमी घृणित छौ । त्यसपछि मुहम्मदﷺ त्यहाँ आउनुभयो । उहाँले उसलाई मदिना प्रवेश गर्ने आदेश दिएपछि मात्र छोराले बाउको लागि बाटो खोलिदिए ।

१ सही बुखारी भाग १,सही मुस्लिम हदिस नं ३५८४, तिर्मिजी हदिस नं ३३१२,इब्ने हेशाम

अब्दुल्लाह बिन उबैको यिनै छोराले मुहम्मदﷺसँग भनेका थिए, हे मुहम्मदﷺ यदि तपाईंले उसको हत्या गर्न चाहनुहुन्छ भने मलाई भन्नु । आल्लाहको कसम म उसको टाउको तपाईंको सेवामा हाजिर गरिदिने छु ।[1]

## २ इफ्कको घटना

त्यस संघर्षको दोस्रो महत्वपूर्ण घटना इफ्कको घटना थियो । त्यस घटनाको सारांश यस प्रकार छ : मुहम्मदﷺले यात्रा गर्दा आफ्नी पवित्र श्रीमतीहरूबीच चिट्ठा थुताउनु हुन्थ्यो र जसको नाममा चिट्ठा पर्थ्यो उसलाई आफ्नो साथमा लिएर जानु हुन्थ्यो । यस युद्धको अवसरामा चिट्ठा आइशाको नाउँमा निस्क्यो । उहाँले उनलाई आफ्नो साथमा लिएर जानुभयो । युद्धबाट फर्कंदा उहाँहरू कुनै एक ठाउँमा बस्नुभयो । आइशाले दिसापिसाब गर्न जाँदा आफ्नी बहिनीले दिएको गहना हराइन । थाहा पाउने वित्तिकै तुरुन्तै त्यहाँ फर्किन् जहाँ गहना हराएको थियो । त्यसैबीच ती मानिसहरू पनि आए जसले उनी बसेको काठी उँटको पिठ्युँमा राखेका थिए । उनीहरूले उनी काठीभित्र छिन् भन्ने कुरा सोचेर त्यो काठी उँटमाथि राखे । काठी हलुको हुँदा पनि उनीहरूले त्यति ध्यान दिएनन् किनकि आइशा त्यतिबेला बालिका नै थिइन् । उनको ज्यान मोटो वा भारी थिएन । अर्को कुरा धेरै जनाले काठी उठाएका थिए त्यसकारण पनि काठी हलुका भएकोमा कसैलाई आश्चर्य लागेन । यदि एक दुई जनाले उठाएको भए थाहा हुने थियो ।

जे होस् आइशा गहना खोजेर आफु बसेको ठाउँमा पुग्दा सबै लश्करहरू गइसकेका थिए र मैदान पूर्णरूपमा खाली थियो । त्यहाँ न त कुनै बोलाउने वाला थियो न कुनै जवाफ दिनेवाला । उनी मानिसहरूले मलाई भेटाएनन् भने फर्केर यहीं आउने छन् भन्ने सोचमा त्यहीं बसिन् । तर अल्लाह आफ्नो कुरामा सक्षम छन् । उनले सातौं आकाशबाट जे निर्णय गर्न चाहन्छन् गर्छन् । अन्ततः आइशालाई निद्रा लाग्यो र उनी त्यहीं सुतिन् । त्यसपछि सफ्वान् बिन मुअत्तलले इन्ना लिल्लाहे वइन्ना यलैहे राजेउन् पढेको सुनेर उठिन् । ओहो मुहम्मदﷺकी श्रीमती ? सफ्वान लश्करको पछाडि सुतेका थिए । उनको पनि बढी सुत्ने बानी थियो । उनले आइशालाई देख्ने वित्तिकै चिनिहाले । किनभने पर्दाको आदेश अवतरण हुनुभन्दा पहिला पनि उनले उनलाई देखेका थिए । उनले इन्ना लिल्लाहे वइन्ना यलैहे राजेउन पढेर आफ्नो सवारीलाई आइशाको नजिक ल्याए । आइशा सवारीमाथि सवार भइन् । सफ्वानले इन्ना लिल्लाहे वइन्ना यलैहे राजेउन बाहेक अरु कुनै शब्द आफ्नो मुखबाट निकालेनन् । उनी चुपचाप सवारीको लगाम समातेर पैदल यात्रा गरी लश्करमा सामिल हुन पुगे । त्यो ठिक दिउँसोको समय थियो । लस्कर पाल टाँगेर

[1] इब्ने हेशाम भाग २, अब्दुल्लाहको सिरत हलबीया

बसिसकेको थियो । उनलाई त्यो अवस्थामा देखेर केही मानिसहरूले आआफ्नो ढंगले सोच्न थाले । अल्लाहको शत्रु अब्दुल्लाह बिन उबैलाई आफ्नो धोका फेर्ने एउटा अर्को अवसर मिल्यो । तसर्थ उसमा आफ्नो नफाक (दैचियुरेपन) र डाहको जुन आगो सल्केको थियो उसले त्यो देखाएरै छाड्यो । अर्थात बलात्कारको झुटो आरोप लगाई घटनाको तानाबाना बुन्ने, आरोपमा रङ्ग भर्ने र त्यसको प्रचारप्रसार गर्ने काम शुरु गऱ्यो । उसका साथीहरूले पनि उसको कुरालाई आधार बनाएर उसको साथ दिन थाले । उनीहरू मदिना आएपछि मिथ्यारोपणीहरूले व्यापक षड्यन्त्र गरे । उता मुहम्मदﷺ चुपचाप हुनुहुन्थ्यो । उहाँ केही बोल्नुभएको थिएन । तर जब लामो अवधिसम्म ईशवाणी अवतरण भएन अनि मुहम्मदﷺले आफ्ना विशेष साथीहरूसँग आफुबाट आइशालाई अलग गर्ने बारे सल्लाह गर्नुभयो । अलीले इशारा गर्दै मुहम्मदﷺलाई आइशाबाट अलग भई अरूसँग विवाह गर्ने सल्लाह दिए । तर उसामा लगायतका साथीहरूले उनलाई आफ्नो बन्धनबाट विच्छेद नगर्न र शत्रुहरूको कुरा नसुन्न सल्लाह दिए । त्यसपछि उहाँ मञ्चमा उभिएर अब्दुल्लाह बिन उबैबाट गरिएको षड्यन्त्रबाट कसरी छुटकारा हासिल गर्ने होला भन्नेतर्फ आफ्नो ध्यान केन्द्रित गर्नुभयो । त्यसमा उसैद बिन खुजैरले उसको हत्या गर्ने कुरा व्यक्त गरे । तर सअद बिन उबादह जो अब्दुल्लाह बिन उबैको कबिला खजरजका सरदार थिए उनमा जातीय इज्जत प्रवल भयो । दुवै जनाबीच भनाभन भयो । जसले गर्दा दुवै कबिलाका मानिसहरू भड्कन थाले । मुहम्मदﷺले बढो मुस्किलले उनीहरूलाई सम्झाउनुभयो र आफू पनि मौन बस्नुभयो ।

उता आइशा युद्धबाट आउने वित्तिकै बेरामी भइन् र एक महिनासम्म निरन्तर बेरामी भइन् । उनलाई त्यस मिथ्यारोपणको बारेमा केही पनि थाहा थिएन । तर उनको मनमा त्यस कुराको चिन्ता थियो कि बेरामीको हालतमा मुहम्मदﷺले जसरी हेरचाह गर्नुहुन्थ्यो त्यो कुरा अहिले देखिएको छैन । सन्चो लागेपछि उनी उम्मे मिस्तहसँग दिसाबिसाब गर्न मैदानतिर गइन् । संयोगले उम्मे मिस्तह आफ्नो पछ्यौरीमा झेल्टिएर लडिन् । त्यसो हुँदा उनले आफ्नो छोरालाई सरापिन् । आइशाले उनको त्यस गतिविधिलाई देखेर हप्क्याइन् । उनले आइशालाई आफ्नो छोरा पनि मिथ्यारोपणमा सामिल छ भन्नको लागि इफ्कको घटना सुनाइन् । आइशा दिसापिसाब गरेर फर्केपछि त्यस घटनाको सत्यतथ्य पत्ता लगाउन आफ्नो माइत जान मुहम्मदﷺसँग अनुमति मागिन् । अनुमति पाउना साथ उनी माइत गइन् । स्थिति बारे राम्रोसँग थाहा भएपछि उनी एक्कासी रून थालिन् । उनको एक दिन दुई रात रोएर बित्यो । त्यस अवधिभरी उनलाई न त निद्रा लाग्थ्यो न आँखाबाट आँसु नै रोकिन्थ्यो । रुँदारुँदा मुटु पनि फुट्छ होला भन्ने उनलाई महसुस भयो । त्यसै अवस्थामा मुहम्मदﷺ आउनुभयो । अल्लाहको प्रशंसा गरेर खुत्बा पढ्दै भन्नुभयो । हे

आइशा मलाई तिम्रो बारेमा यस्तो यस्तो कुरा थाहा भएको छ । यदि तिमी यी कुराहरूबाट पवित्र छौ भने अल्लाहले अवश्य यस बारे सफाइ अवतरण गरिदिने छन् । यदि भुलचुकमा तिमीसित गल्ती भएको छ भने अल्लाहसँग माफी माग र क्षमा याचना गर । किनभने कसैले गल्ती गरेर त्यसलाई स्वीकारी क्षमायाचना गर्छ भने अल्लाहले उसको क्षमायाचना स्वीकार गर्छन् ।

त्यसपछि बल्ल माई आइशाको आँखाका आँसु रोकियो । उनलाई आँखाबाट एक थोपा आँसु नआए जस्तो लाग्यो । उनले आफ्नो बुबा आमासँग उहाँलाई जवाफ दिन भनिन् । तर जवाफ के दिने हो भन्ने उनीहरूलाई थाहा थिएन । त्यसपछि आइशाले खुदै भनिन् : अल्लाहको कसम मलाई थाहा छ ती कुराहरू सुन्दासुन्दा तपाईंहरूको मनमा बसिसकेका छन् । तपाईंहरूले त्यसलाई सही पनि ठान्नु भएको छ । म त्यसबाट निर्दोष छु भन्ने कुरा अल्लाहलाई थाहा छ । मैले म निर्दोष छु भने पनि तपाईंहरूले विश्वास गर्नुहुन्न । जब कि अल्लाहलाई थाहा छ म त्यसबाट निर्दोष छु । यस्तो परिस्थितिमा अल्लाहको कसम म र तपाईंहरूको लागि त्यो कुरा उदाहरण हुनेछ जुन युसुफको बुबाले भनेका थिए : धैर्यता नै उत्तम कुरा हो । तिमीहरूले जे भनेका छौ त्यसमा अल्लाहसँग सहयोग माग्दछु ।

त्यो कुरा सुनेर आइशा अर्कोतर्फ फर्केर सुतिन् । त्यसैबेला मुहम्मदﷺमाथि वाणी अवतरण हुन थाल्यो । उहाँमाथि वाणी अवतरण हुँदाको कठिन् अवस्था समाप्त भएपछि उहाँ मुस्काउनु भयो । उहाँले जुन पहिलो कुरा भन्नुभएको थियो निम्न छ : हे आइशा, अल्लाहले तिमीलाई निर्दोष घोषणा गरिदिएका छन् । त्यो कुरा सुनेर आइशाकी आमाले भनिन्, हे आइशा, उठ । मुहम्मदﷺको कृतज्ञा व्यक्त गर । उनले आफुलाई निर्दोष घोषणा गरिएको र मुहम्मदﷺसँग भएको मायाको कारण अलिकति जिस्के झै गरेर भनिन् । अल्लाहको कसम म त उहाँनिर जान्न म केवल अल्लाहको प्रशंसा गर्छु ।

त्यस अवसरमा इफ्कको बारेमा कुरआनको जुन श्लोक अवतरण भए ती श्लोक सुरह नूरका दश श्लोकहरू हुन् । ती श्लोकहरू ( **इन्नल्लजिन जाउ बिल्इफ्के उस्बतुन मिन्कुम**) बाट शुरु हुन्छ ।

त्यसपछि झुटो आरोप लगाएको दोषमा मिस्तह बिन असासा, हस्सान बिन सावित र हमना बिन्त जहशलाई ८०,८० कोर्रा लगाइयो ।[१] तर अपराधी अब्दुल्लाह बिन उबैको पिठ्युँ त्यो सजायबाट जोगियो । जबकि मिथ्यारोपणको प्रथम सूचिमा ऊ नै थियो । उसैले त्यो समस्यामा सबैभन्दा ठूलो भूमिका खेलेको थियो । उसलाई

१ इस्लामी कानुन अनुसार कसैले कसैमाथि बलात्कारको आरोप लगाएर त्यसको प्रमाण जुटाउन सकेन भने उसलाई ८० कोर्रा लगाइन्छ ।

सजाय नदिनुको कारण के थियो भने जुन व्यक्तिहरूलाई सजाय दिइन्छ महाप्रलयमा उनीहरूको सजाय कम हुन्छ र पाप पखालिन्छ । अब्दुल्लाह बिन उबैलाई अल्लाहले आखिरतमा ठूलो दण्ड दिने घोषणा गरिदिएका थिए । त्यसै कारणले गर्दा होला उसको हत्या गरिएन ।[१]

एक महिनापछि मदिनामा शंका उपशंका र त्रासबाट लागेको बादल हट्यो । अब्दुल्लाह बिन उबै यति बेइज्जत भयो उसले फेरि टाउको ठाडो गर्नै सकेन । इब्ने इसहाक भन्छन् : त्यसपछि उसले कुनै पनि नराम्रो काम गर्दा उसैको जातिले उसलाई गाली गर्थ्यो । उसलाई हप्काउँथे । त्यस अवस्थालाई देखेर मुहम्मदﷺले उमरसँग भन्नुभयो : हे उमर , के विचार छ ? हेर , अल्लाहको कसम यदि तिमीले त्यो दिन उसको हत्या गरिदिएको भए जुन दिन तिमीले मसँग उसको हत्या गर्ने बारे भनेका थियौ धेरै मानिसहरू भड्कन्थे । तर आज तिनै मानिसलाई उसको हत्या गर्न भन्ने हो भने उनीहरू उसको हत्या गर्न तयार हुन्छन् । उमरले भने : अल्लाहको कसम मलाई राम्ररी थाहा छ,मुहम्मदﷺको व्यवहार मेरो व्यवहारभन्दा धेरै उच्च छ ।[२]

१ सही बुखारी भाग १, जादुल मआद भाग २, इब्ने हेशाम भाग २
२ इब्ने हेशाम भाग २

# मुरैसिअ युद्धपछिको सशस्त्र संघर्ष

## दियारे बनी कल्बको संघर्ष, इलाका दुमतुल जन्दल

त्यो संघर्ष टोली अब्दुर्रहमान बिन औफको नेतृत्वमा हिजरी सम्बत ६ साल शाबानको महिनामा पठाइएको थियो । मुहम्मदﷺले उनलाई आफ्नो सामुन्ने राखेर आफ्नो हातले पगरी बाँधिदिनुभएको थियो । लडाइँमा सबैभन्दा राम्रो रणनीति अपनाउन उपदेश दिदै उहाँले भन्नुभयो : यदि उनीहरूले तिम्रो आज्ञा पालना गरे भने उनीहरूको राजाकी छोरीसँग विवाह गर । अब्दुर्रहमानले त्यहाँ पुगेर तीन दिनसम्म लगातार इस्लामको निम्तो दिए । अन्तिममा त्यो समुदायले इस्लाम कबुल गऱ्यो । त्यसपछि अब्दुर्रहमानले अस्बगकी छोरी तमाजिरसँग विवाह गरे । अब्दुर्रहमानको छोरा अबु सल्माकी आमा उनी नै हुन् । ती महिलाको बुबा आफ्नो समुदायका सरदार थिए ।

## दियारे बनी सअद बिन बकरको संघर्ष, इलाका फदक

त्यो संघर्ष टोली हिजरी सम्बत ६ साल शाबान महिनामा अलीको नेतृत्वमा पठाइएको थियो । मुहम्मदﷺलाई बनु सअदको एउटा समूहले यहुदीहरूलाई दुःख दिन खोजेको कुरा थाहा भयो । त्यसकारण मुहम्मदﷺले अलीलाई दुई सय जना व्यक्तिहरूको साथमा पठाउनुभयो । त्यो टोली दिनमा लुक्ने र राती यात्रा गर्ने गर्थ्यो । आखिरकार एक जना जासुस फेला पऱ्यो र उसले आफुहरूले खैबरको खजुरको बदलामा सहयोग दिने प्रस्ताव गरेको कुरा स्वीकार्यो । उसले बनु सअदले गुटबन्दी गरेको ठाउँ पनि बतायो । अन्ततः अलीले उनीहरूमाथि रातारात छापा मारेर पाँच सय उँट र दुई हजार बाख्रामाथि कब्जा गरे । तर बनु सअद भने आफ्नो बालबच्चा तथा महिलाहरू लिएर भाग्न सफल भयो । उनीहरूको सरदार वबर बिन अलिम थियो ।

## वादिउलकुराको संघर्ष

त्यो संघर्ष टोली अबु बकर वा जैद बिन हारिसाको नेतृत्वमा हिजरी सम्बत ६ साल रमजानको महिनामा पठाइएको थियो । बनु फजारहको एक समूहले अज्ञात रूपमा मुहम्मदﷺको हत्या गर्ने योजना बनाएको थियो । तसर्थ मुहम्मदﷺले अबु बकरलाई पठाउनुभयो । सलमा बिन अक्वअ भन्छन्, त्यस संघर्षमा म पनि उनको साथमा थिएँ । हामीले फजरको नमाज पढपछि उनको आदेशमा हामीले छापा मारेर मुहानमाथि कब्जा गऱ्यौं । अबु बकरले केही मानिसहरूको हत्या गरिदिए । मैले एउटा समूहलाई देखे जसमा महिला तथा बालबालिकाहरू पनि थिए । उनीहरू मभन्दा पहिला पहाडमा चढछन् कि भन्ने मलाई डर भयो । त्यसकारण म उनीहरूतर्फ गएँ र

पहाडको बीचबाट तीर चलाएँ। तीर देखेर उनीहरू रोकिए। उनीहरूमा उम्मे कुरफा नामी एक जना महिला पनि थिई उसको टाउकोमा छालाको एउटा पूरानो कोट थियो। उसको साथमा उसकी छोरी पनि थिई। ऊ अरब कै सुन्दर केटीहरूमध्ये एक थिई। मैले उनीहरूलाई लखेड्दै अबु बकरतर्फ लगेँ। उनले त्यो केटी मलाई दिए। तर मैले उसँग दुर्व्यवहार गरेको थिइनँ। पछि मुहम्मदﷺले सलमा बिन अक्वअसँग मागेर मक्कामा बेच्नुभयो। त्यसको बदलामा त्यहाँको कैयन मुस्लिम कैदीहरूलाई मुक्ति गराउनुभयो।[१]

उम्मे कुरफा एक पिचाशी महिला थिई। मुहम्मदﷺको हत्या गर्ने योजना बनाइ रहन्थी। त्यस उद्देश्यको लागि उसले आफ्नो खान्दानका तीस जना योद्धालाई तयार पारेकी थिई। उसले आफ्नो कुनीतिको फल पायो। फलस्वरुप उसका तीस जना योद्धाहरु पनि मारिए।

## उरैनिन्को संघर्ष

त्यो संघर्ष हिजरी सम्बत ६ साल शौवाल महिनामा कुर्ज बिन जाबिर फेहरीको नेतृत्वमा पठाइएको थियो।[२] अकल र उरैनाका केही व्यक्तिहरू मदिना आएर देखावटी रूपमा इस्लाम स्वीकारी मदिनामा नै बसेका थिए। तर उनीहरूलाई मदिनाको वातावरण राम्रो लागेन। मुहम्मदﷺले उनीहरूलाई केही उँट दिएर गौचरतिर पठाउनुभयो र उँटको दूध र पिसाब पिउने निर्देशन दिनुभयो। उनीहरू स्वस्थ भएपछि उनीहरूले मुहम्मदﷺको गोठालेको हत्या गरी उँटलाई खेदेर लगे। इस्लाममा प्रवेश गरेपछि पनि उनीहरूले इन्कार गरे। तसर्थ मुहम्मदﷺले उनीहरूलाई खोज्न कुर्ज बिन जाबिर फेहरीलाई बीस जना सहाबीहरूको साथमा पठाउनुभयो र अल्लाहसँग प्रार्थना गर्नुभयो। हे अल्लाह, उरैनीहरूको बाटो अँध्यारो र अति साँघुरो बनाइदेऊ। अल्लाहले उहाँको प्रार्थना स्वीकार गरी उनीहरूको बाटो अँध्यारो बनाइदिए। अन्ततः उनीहरू समातिए। उनीहरूले मुस्लिम गोठालेहरूसित जुन व्यवहार गरेका थिए त्यसको सट्टामा उनीहरूका हात खुट्टा काटिए, उनीहरूको आँखा फोरियो र हर्रा नामक एउटा ठाउँमा उनीहरूलाई छाडियो। त्यहाँ उनीहरू



---

१ सही मुस्लिम भाग २, भनिन्छ यो संघर्ष हिजरी सम्बत ७ सालमा भएको थियो।
२ यी तिनै कुर्ज बिन जाबिर फेहरी हुन् जसले बदरको युद्धभन्दा पहिला सफ्वान युद्धमा मदिनाका पशूमाथि छापा मारेका थिए। पछि उनले इस्लाम स्वीकारे र विजयी मक्कामा सहीद भए।

जमिन खन्दाखन्दै आफ्नो जीवनको अन्तिम चरणमा पुगे ।[१] उनीहरूको घटना बुखारी नामक हदिसमा अनसमार्फत वर्णन गरिएको छ । [२]

जीवनीकारहरूले त्यसपछिका अरू संघर्षहरू पनि उल्लेख गरेका छन् जसलाई अमर बिन उमैया जमरीले सल्मा बिन अबी सल्माको साथमा हिजरी सम्बत ६ साल शौवालको महिनामा गरेका थिए । त्यसको विवरण यस प्रकार छ । अमर बिन उमैया अबु सुफ्यानको हत्या गर्न मक्का गएका थिए । किनभने अबु सुफ्यानले मुहम्मदﷺको हत्या गर्न एक जना अरबीलाई मदिना पठाएको थियो । तर दुवै पक्ष आफ्नो लक्ष्यमा सफल हुन सकेनन् । जीवनीकारहरू भन्छन् : त्यस संघर्षमा अमर बिन उमैयाले तीन जना काफिरहरूको हत्या गरी खुबैबको लास उठाएर लगेका थिए । यद्यपि खुबैबको शहादतको घटना रजिअको केही दिन वा केही महिनापछि घटेको थियो । रजिअको घटना हिजरी सम्बत ४ सालको हो । त्यसकारण मैले बुझ्न सकिनँ, के ती दुवै घटना दुइटा अलग अलग यात्रामा भएका हुन् ? तर जीवनीकारहरू ती दुवै घटनामा चुकेका छन् । त्यसकारण उनीहरूले ती दुवैलाई एउटै यात्राको घटना भनी उल्लेख गरेका छन् । वा के दुवै घटना एउटै यात्रामा घटेका थिए ? तर जीवनीकारहरूले साल तोक्नमा गल्ती गरेका छन् । त्यसकारण उनीहरूले त्यस घटनालाई हिजरी सम्बत ४ सालको सट्टा हिजरी सम्बत ६ सालको घटनामा उल्लेख गरेका छन् । विद्वान सुलैमान मन्सुरीले पनि त्यस घटनालाई सशस्त्र संघर्ष मान्न इन्कार गरेका छन् । अल्लाह नै सर्वज्ञाता छन् ।

यी हुन् ती संघर्ष र युद्धहरू जो अहजाब र कुरैजाको युद्धपछि भएका थिए । ती संघर्ष वा युद्धमध्ये कुनैमा पनि घमासान युद्ध भएन । कुनैकुनैमा सानोतिनो झडप मात्र भयो । तसर्थ ती संघर्षहरूलाई युद्ध भनिनु भन्दा फौजी तथा छापामार गस्ती र कारवाही गतिबिधि भन्नु उचित होला । त्यसको उद्देश्य ढिपी गर्ने पाखेहरू र घमण्ड गर्ने शत्रुहरूलाई त्रसित गर्नु थियो । परिस्थितिलाई नियाल्ने हो भने अहजाबको युद्धपछि स्थितिमा परिवर्तन आउन लागेको कुरा प्रष्ट देखिन्छ । साथै इस्लामी शत्रुहरूको हौसला टुटेको देखिन्छ । अब उनीहरूमा इस्लामको आह्वानलाई तोड्ने र त्यसको स्वाभिमानलाई मेटाउने आशा पनि बाँकी रहेन । तर त्यो परिवर्तित स्थिति तब मात्र प्रष्ट भयो जब मुसलमानहरूले हुदैबियाको सन्धिबाट फुर्सद पाएका थिए । त्यो सन्धि वास्तवमा इस्लामी शक्तिलाई स्वीकारिनु र त्यस शक्तिलाई अब अरबको टापुमा टिक्नु र स्थीर रहनुबाट कसैले पनि रोक्न सक्दैन भन्ने सत्य प्रमाण थियो ।

---

१ जादुल मआद भाग २
२ सही बुखारी भाग २

# हुदैबीयाको सन्धि जिल् कअदा ६ सालमा

जब अरब टापुको परिस्थिति अत्यधिक रूपमा मुसलमानहरूको पक्षमा हुदै गयो अनि इस्लामी आह्वानको सफलता र महान विजयका लक्षणहरू विस्तारै विस्तारै देखिन थाले । मस्जिदे हराम, जसको ढोका बहुदेववादीहरूले मुसलमानको लागि ६ वर्षसम्म बन्द गरेर राखेका थिए अब मुसलमानहरूको लागि त्यो खोलिने भूमिकाको आरम्भ भयो ।

मुहम्मदﷺले मदिनामा निम्न सपना देख्नुहुन्छ : उहाँ र उहाँका सहाबीहरूले मक्कामा प्रवेश गरेका छन्, उहाँले काबाको चाबी लिनुभएको छ र सहाबीहरू समेत उहाँले काबाको परिक्रमा (तवाफ) र उमराह गर्नुभएको छ । केही साथीहरूले आफ्नो कपाल पनि खौरिका छन् र केहीले काटेका छन् । मुहम्मदﷺले साथीहरूलाई आफुले देखेको सपना सुनाउँदा उनीहरू अति प्रसन्न भए । उनीहरूले त्यस वर्ष मक्कामा प्रवेश गर्न पाइन्छ भन्ने कुरा सोचे । मुहम्मदﷺले सहाबीहरूलाई आफुले उमराह गर्ने कुरा पनि बताउनुभयो । त्यसकारण सहाबीहरू पनि यात्राको लागि तयार भए ।

## मुसलमानहरु प्रस्थान भएको घोषणा

मुहम्मदﷺले आफ्नो साथमा जान मदिना तथा मदिना वरिपरि बसेका मानिसहरूलाई सूचित गर्नुभयो । तर अधिक मानिसहरूले ढिलाई गरे । मुहम्मदﷺले आफ्नो लुगा धुनुभयो । मदिनामा इब्ने उम्मे मक्तुम वा नुमैलाह लैसीलाई आफ्नो प्रतिनिधि बनाउनुभयो र कस्वा नामी आफ्नो उँटनीमा सवार भएर हिजरी सम्बत ६ साल जिकअदा महिनाको एक तारिख सोमबारको दिन उहाँ निस्कनुभयो । उहाँको साथमा उहाँकी श्रीमती उम्मे सलमा पनि थिइन् । चौध सय वा भनिन्छ पंध्र सय साथीहरू उहाँका सहयात्री थिए । उहाँले बटुवाहरूले बाटो हिँड्दा लिने हतियार र खोलभित्र बन्द तरवारबाहेक कुनै प्रकारको हतियार लिनुभएको थिएन ।

## मुसलमानहरू मक्कातर्फ प्रस्थान

मुहम्मदﷺको गन्तव्य मक्का थियो । जुलहुलैफा पुगेर उहाँले बलि दिइने जनावर हदीलाई[१] माला लगाइदिनुभयो, जुरो चिरेर चिनो बनाइदिनुभयो । मानिसहरूलाई उहाँले युद्ध गर्नुहुने छैन भन्ने कुरा थाहा होस् भनी उमराहको लागि उहाँले एहराम बाँध्नुभयो । उहाँले खुजाअ कबिलाको एक जना जासुसलाई कुरैशको

१ हज तथा उमराह गर्नेहरुले मेना वा मक्कामा बलि दिने जनावरलाई हदी भनिन्छ । अज्ञानी युगमा बलि दिइने जनावर भेडा बाखा भए त्यसको गलामा चिन्हको रुपमा माला लगाउने चलन थियो र उँटको जुँडो चिरेर रगत पोतिन्थ्यो । यस किसिमका जनावरसँग कसैले छेडछाड गर्दैन थियो । इस्लामले यस संस्कारलाई यथावतै राख्यो ।

गतिविधि पत्ता लगाउन अगाडि पठाउनुभयो । उस्फान नामक ठाउँमा पुग्दा कअब बिन लुऐले तपाईंको सामना गर्नको लागि अहाबिश[1] (सहयोगी कबिला) लाई जम्मा गरेर राखेको छ र अरू जमातहरू पनि ल्याएको छ साथै तपाईंहरूसँग लड्ने र तपाईंहरूलाई काबाबाट रोक्ने निर्णय गरेका छन् भनी जासुसले खबर दियो । त्यस सूचनापछि मुहम्मदﷺले आफ्ना साथीहरूसँग परामर्श गरेर भन्नुभयो : तिमीहरूको के विचार छ, ती मानिसहरू बारे जो कुरैशको सहयोगको लागि डटेका छन् हामीहरूले उनीहरूमाथि आक्रमण गरौं वा उनीहरूलाई कब्जा गरौं ? त्यसपछि यदि उनीहरू चुप लागे भने युद्धको मार, दुःख र पीडाबाट हार खाएर चुपचाप लाग्ने छन्, यदि भागे भने पनि अल्लाहले कुनै न कुनैको हत्या गरिदिनेछ । कि तिमीहरूको विचार हामी काबा नै जाऔं र जो बाटोमा बाधाक बन्छ उसँग लडाइँ गरौं भन्ने छ ? त्यो कुरा सुनेर अबु बकरले भने : अल्लाह र ईशदूतलाई बढी थाहा छ । हामी उमराह गर्न आएका हौं कसैसँग लड्न होइन । तर जो हामी र काबाबीच बाधक बन्छ उसँग लडाइँ गर्नेछौं । मुहम्मदﷺले भन्नुभयो: ठिक छ ल, अब हिँडौं । फलस्वरूप मानिसहरूले यात्रा जारी राखे ।

## काबाबाट मुसलमानहरूलाई रोक्ने प्रयास

मुहम्मदﷺले प्रस्थान गर्नुभएको कुरा थाहा भएपछि कुरैशले सल्लाहकार समितिको बैठक बोलायो र जसरी हुन्छ मुसलमानहरूलाई काबाबाट रोक्ने निर्णय गऱ्यो । साथै मुहम्मदﷺले अहाबिशबाट गौरवताका सथा आफ्नो यात्रा जारी राख्दा बनी कअबको एक जना व्यक्ति आएर उहाँलाई कुरैशीहरू तुबा भन्ने ठाउँमा बसेका छन् र खालिद बिन वलिद दुई सय घोडचढी सवारको टोली लिएर कुराउल गमिम भन्ने ठाउँमा तयार भएर बसेका छन् भन्ने खबर दियो । कुराउल गमिम मक्का राजमार्ग र गोरेटो बाटोको बीचमा अवस्थित छ । खालिदले मुसलमानहरूलाई रोक्ने प्रयास पनि गरे ।  उनले आफ्नो सवारहरूलाई त्यो ठाउँमा तैनात गरे जहाँबाट दुवै पक्षले एकअर्कालाई देखिरहेको थियो । खालिदले मुसलमानहरूलाई जोहरको नमाजमा रुकु र सजदा गरेको देखेर भन्यो, उनीहरू अनजान अवस्थामा थिए यदि हामीले

---

१ शब्द हब्शी भएको कारण उनीहरु हब्शी जातिका काला मानिस होइनन् । बनु केनानह र अन्य कबिलाहरुका केही शाखाहरु थिए । हुब्शी शब्दले त्यो पहाडलाई प्रतिबिम्ब गर्दछ जो नोमान उपत्यकाको फेदीमा अवस्थित थियो । त्यहाँबाट मक्काको दुरी ६ मिल छ । त्यस पहाडको पाखामा जम्मा भएर बनु हारिस बिन अब्द मनात विन केनानह, बनु मुस्तलक हया विन सअद विन अमर र बनुल हौन विन खुजैमाहरुले कुरैशसँग प्रतिज्ञा गरेका थिए । उनीहरुले अल्लाहको कसम खाएर भनेका थिए जबसम्म रात अँध्यारो र दिन उज्यालो रहन्छ र हुब्शी पहाड आफनो ठाउँमा रहन्छ तबसम्म हामी अरुको विरुद्ध एक हुने छौं । (मुअजमुल बुल्दान भाग २, अल मुन्मिक )

उनीहरूमाथि आक्रमण गरेको भए उनीहरूलाई मार्न सक्थ्यौं । त्यसपछि उसले भन्यो, असरको नमाजमा अचानक आक्रमण गर्ने हो । तर अल्लाहले त्यही बेला सलातुल खौफ अर्थात युद्धअवस्थाको विशेष नमाजको आदेश अवतरण गरे जसले गर्दा खालिदको हातबाट त्यो अवसर पनि गुम्यो ।

## रक्तपात युद्धबाट जोगिने प्रयास र बाटो परिवर्तन

मुहम्मदﷺ कुराउल गमिमको राजमार्ग छाडी एक अर्को गोरेटो बाटोतिर लाग्नुभयो जो उपत्यकाबीच हुँदै गएको थियो । उहाँ आफ्नो दाहिने तर्फ हुम्शको बीचबाट गौरवताका साथ हिँड्दै त्यो बाटो लाग्नुभयो जुन सनियतुल मरारतिर निस्केको थियो । सनियतुल मरारबाट हुदैबियामा झरिन्छ । हुदैबिया मक्काको ओरालो क्षेत्रमा अवस्थित छ । त्यो बाटो लाग्दाको फाइदा के भयो भने कुराउल गमिमको राजमार्ग जो तन्इम हुँदै हरमसम्म पुगेको थियो त्यहाँ खालिद बिन वलिदको सशस्त्र टोली तैनात थियो । त्यो टोली देब्रेतिर छुट्यो । खालिद बिन वलिदले मुसलमानहरूबाट उडेको धुलो देखेर मुसलमानहरूले बाटो बदलिएको कुरो थाहा पाए अनि उनी आफ्नो घोडा कुदाएर कुरैशलाई त्यस नयाँ परिस्थितिको खतराबाट सचेत गर्न तीव्रगतिमा मक्का पुगे ।

उता मुहम्मदﷺले आफ्नो यात्रा निरन्तर जारी राख्नुभयो । उहाँ सनियतुल मरार् भन्ने ठाउँमा पुगेपछि उहाँको उँटनी बस्यो । मानिसहरूले उँटनीलाई भने : तल झर, तल झर । तर उँटनी बसिरह्यो । मानिसहरूले भने : कस्वा अडियो । उहाँले भन्नुभयो कस्वा अडिएको छैन र यसको रोकिने बानी पनि छैन । तर उसलाई त्यो हस्तीले रोकेको छ जसले हात्तीलाई रोकेको थियो । मुहम्मदﷺले भन्नुभयो: त्यो जातको कसम जसको हातमा मेरो ज्यान छ उनीहरूले अल्लाहको निषेधित वस्तुको आदर गरिने खाले कुनै पनि कुराको माग गर्ने छैनन् र मैले उनीहरूको कुरालाई अवश्य स्वीकार्ने छु । त्यसपछि मुहम्मदﷺले उँटनीलाई हक्ल्याउँदा उँटनी जुरुक्क उठयो । फेरि उहाँले अलिकति बाटो परिवर्तन गर्नुभयो र हुदैबियाको एउटा मुहानमा झर्नुभयो । त्यहाँ थोरै पानी थियो । मानिसहरूले थोरथोरै पानी भर्दा केही छिनमा नै पानी सिद्धयो । अब मानिसहरूले मुहम्मदﷺसँग तिर्खा लागेको कुरा भने । उहाँले वाण राख्ने तर्कसबाट एउटा तीर निकाल्नुभयो र त्यसलाई मुहानमा हाल्ने आदेश दिनुभयो । मानिसहरूले त्यसै गरे । त्यसपछि मूलबाट पानी निरन्तर निस्किरह्यो र सबैले तिर्खा मेटुञ्जेल पानी पिएर फर्के ।

## बुदैल बिन वरकासँग भेट

मुहम्मदﷺ निश्चिन्त भएपछि बुदैल बिन वरका खुजाई आफ्ना कबिला खुजाअका केही व्यक्तिहरूको साथमा उपस्थित भयो । तहामाका वासीहरूमध्ये त्यो

कबिला मुहम्मदﷺको समर्थनमा थियो । बुदैलले भन्यो : मैले कअब बिन लुऐलाई हेरेर आएको छु , उनीहरू हुदैबियामा प्रयाप्त पानी भएको क्षेत्रमा बसेका छन् । उनीहरूको साथमा महिला तथा बालबच्चाहरू पनि छन् । उनीहरूले तपाईंविरुद्ध लड्ने र तपाईंलाई काबाबाट रोक्ने अठोट गरेका छन् । मुहम्मदﷺले भन्नुभयो : हामी कसैसँग लड्न आएका होइनौं । लडाइँले कुरैशको कमर भाँचिसकेको छ र ठूलो नोक्सान पुऱ्याएको छ । तसर्थ यदि उनीहरू हाम्रो बाटोबाट हट्न चाहन्छन् भने म त्यसको लागि कुनै मिति तय गर्छु । यदि चाहन्छन् भने मानिसहरू जुन मार्गमा लागेका छन् त्यो मार्गमा प्रवेश गरुन् । यसो नगरे पनि उनीहरूलाई शान्ति त प्राप्त हुने नै छ ।

यदि उनीहरूलाई लडाइँबाहेक अरू कुनै कुरा स्वीकार्य छैन भने अल्लाहको कसम म उनीहरूसँग धर्मको बारेमा तबसम्म लडाइँ गर्नेछु जबसम्म मेरो गर्दन अलग हुँदैन वा जबसम्म अल्लाहले आफ्नो कुरा लागु गर्दैनन् ।

बुदैलले भन्यो : तपाईंले जे भन्नुभएको छ त्यो कुरा म कुरैशसमक्ष पुऱ्याउँछु । त्यसपछि उसले कुरैशकहाँ गएर भन्यो : म उही साहेबकहाँ बाट आउदैछु , मैले उनीबाट एउटा कुरा सुनेको छु , तिमीहरूलाई चाहिएको छ भने भन्छु । त्यो कुरा सुनेर मूर्खहरूले भने तिमीले उसको कुनै कुरा हामीसँग भन्न आवश्यक छैन । तर बुद्धिजीवीहरूले भने : ल सुनाऊ, तिमीले के सुनेका छौ ? बुदैलले भन्यो : मैले उनलाई यो यो कुरा भनेको सुनेको छु । त्यो कुरा सुनेर कुरैशले मिक्रज बिन हफसलाई पठायो । मुहम्मदﷺले उसलाई देखेर भन्नुभयो : ऊ धोकेबाज व्यक्ति हो । जब उ मुहम्मदﷺकहाँ आएर कुरा गर्न थाल्यो अनि मुहम्मदﷺले उसँग पनि त्यही कुरा गर्नुभयो जुन बुदैल र उसका साथीहरूसँग भन्नुभएको थियो । उसले कुरैशकहाँ गएर सम्पूर्ण कुराहरू बतायो ।

## कुरैशको दूत

त्यसपछि हलिस बिन अल्कमा नामक एक जना व्यक्तिले भन्यो मलाई उसकहाँ जान देऊ । कुरैशीहरूले उसलाई जान दिए । ऊ त्यहाँ पुग्नासाथ मुहम्मदﷺले भन्नुभयो : त्यो फलानो व्यक्ति हो । उसको सम्बन्ध त्यो जातिसँग छ जसले बलिका जनावरहरूलाई अति आदर गर्दछ । तसर्थ तिमीहरूले जनावरहरूलाई उभ्याओ । सहाबीहरूले जनावरहरूलाई उभ्याए र आफुहरूले पनि लब्बैक भन्दै उसको स्वागत गरे । उसले त्यो चाल देखेर भन्यो : अल्लाहको जात पवित्र छ, उनीहरूलाई काबाबाट रोक्नु कदापि उचित हुँदैन । ऊ त्यहींबाट आफ्नो साथीहरूतिर गएर भन्यो : मैले बलिका जनावरहरूलाई देखेको छु जसका घाँटीमा माला छन्, जुरो चिरिएको छ । त्यसकारण उनीहरूलाई काबाबाट रोक्नु मैले उचित ठान्दिनँ । त्यो कुरा सुनेर कुरैश र त्यो व्यक्तिबीच कुरा भइरहँदा ऊ तात्न थाल्यो ।

त्यही अवस्थामा उरवा बिन मस्उद सकफीले हस्तक्षेप गर्दै भन्यो । त्यो व्यक्तिले तिमीहरूको सामुन्ने एउटा राम्रो सुझाव दिएको छ । तसर्थ त्यसलाई स्वीकर । मलाई पनि उनीहरूकहाँ जान देऊ । कुरैशीहरूले भने , जाऊ । ऊ मुहम्मदﷺकहाँ गयो । कुराकानी शुरु भयो । मुहम्मदﷺले उसँग पनि त्यही कुरा भन्नुभयो जुन बुदैलसँग भन्नुभएको थियो । त्यसमा उरवाले भन्यो : हे मुहम्मद, यदि तपाईंले आफ्नो जातिलाई तहसनहस गरिदिनुभयो भने के हुन्छ ? के तपाईंले अरबको बारेमा सुन्नुभएको छ तपाईंभन्दा पहिला कसैले आफ्नो जातिलाई तहसनहस गरेको थियो ? यदि अर्को परिस्थिति सृजना भयो भने अल्लाहको कसम मैले यस्ता बदमाश अनुहार देख्दै छु जो तपाईंलाई छाडेर भाग्ने खालका छन् । उसको कुरा सुनेर अबु बकरले भने : लातको लिङ्गमा झुण्डिएको छाला चुस, के हामी मुहम्मदﷺलाई छाडेर भाग्न सक्छौं ? उरवाले सोध्यो त्यो को हो ? मानिसहरूले जवाफ दिए, अबु बकर हुन् । उसले अबु बकरलाई सम्बोधन गर्दै भन्यो : अल्लाहको कसम तिमीले ममाथि लगाएको एउटा गुणमा प्रतिगुण लगाएको भए मैले अवश्य तिम्रो कुराको जवाफ दिन्थे ।

त्यसपछि फेरि उरवाले मुहम्मदﷺसँग कुरा गर्न थाल्यो । उसले मुहम्मदﷺसँग कुरा गर्दागर्दै उहाँको दाह्री समात्थ्यो । मुगिराह बिन शअबा मुहम्मदﷺको साथमा उभिएका थिए । उनको हातमा तरवार थियो । जब उरवाले मुहम्मदﷺको दाह्री समात्न खोज्थ्यो उनले तरवारको खोलले उसको हातमा हान्दै आफ्नो हात मुहम्मदﷺको दाह्रीबाट टाढा राख भन्थे । उरवाले आफ्नो शिर ठाडो गरेर भन्यो, को हो यो व्यक्ति ? मानिसहरूले जवाफ दिए, मुगिराह हुन् । उसले भन्यो, हे धोकेबाज तिम्रो धोकेबाजीको बारेमा के मलाई थाहा छैन ? घटना के थियो भने इस्लामभन्दा पहिला मुगिराह केही मानिसहरूको साथमा थिए । उनीहरूको हत्या गरी उनीहरूको मालसमान लिएर आए अनि मुसलमान भए । त्यसमा मुहम्मदﷺले भन्नुभएको थियो : तिमीले इस्लाम स्वीकारेको कुराको कदर गर्छु तर मालसमानसित मलाई कुनै सरोकार छैन ।

उरवाले मुहम्मदﷺको साथमा बसेर सहाबीहरूको सम्बन्धको दृश्य हेर्न थाल्यो अनि आफ्ना साथीहरूकहाँ आएर भन्यो : हे साथी हो, म कैसर, किस्रा र नजाशी जस्ता राजाहरूकहाँ गए तर कुनै राजालाई उसको प्रजाले त्यति सम्मान गरेको देखिनँ जति मुहम्मदﷺलाई उनको अनुयायीहरूले सम्मान गरेका छन् । अल्लाहको कसम मुहम्मदको थुक कुनै साथीको हातमा पर्दा त्यो व्यक्तिले थुकलाई आफ्नो अनुहार र शरीरमा लगाउँथ्यो । जब उनले कुनै आदेश जारी गर्थे सबै त्यसको पालना गर्न तत्पर रहन्थे । जब उहाँ वजु गर्थे उहाँको वजुको पानी लिन सबै लड्थे । आदरका

कारण उनलाई उनीहरूले नजर गाडेर पनि हेर्दैनन् थिए । उनीहरूले तिमीहरूको बारेमा एउटा उचित सुझाव प्रस्तुत गरेका छन् त्यसलाई स्वीकार ।

## उनै हुन् जसले उनीहरूको हात तिमीबाट रोकेका थिए

कुरैशका जोसिला तथा लडाकु जवानहरूले आफ्ना नेताहरूलाई सम्झौता गर्ने पक्षमा देखेपछि उनीहरूले सम्झौता हुन नदिनको निम्ति हस्तक्षेप गर्ने सोच बनाए । युद्धको आगो भड्काउनको लागि उनीहरूले रातीमा त्यहाँबाट कसैले थाहा नपाउने गरी निस्केर मुसलमानहरूको केम्पमा घुसेर आतंक मच्चाउने निर्णय गरे । उनीहरूले त्यो नीतिलाई कार्यान्वयन गर्न व्यवहारिक कदम पनि चाले । तसर्थ रातीको अँध्यारोमा सत्तरी वा असी जना जवानहरू तन्इम नामक पहाडबाट झरेर लुकीछिपी मुसलमानको केम्पमा घुस्ने प्रयास गरे तर इस्लामी पहरेदारको कमाण्डर मुहम्मद बिन मुस्लिमाले उनीहरूलाई गिरिफ्तार गरे । मुहम्मदﷺले उनीहरूलाई सम्झौता गर्ने उद्देश्यले माफ गरी मुक्त गरिदिनुभयो । त्यसै बारेमा अल्लाहको वाणी अवतरण भयो :

وَهُوَ الَّذِي كَفَّ أَيْدِيَهُمْ عَنْكُمْ وَأَيْدِيَكُمْ عَنْهُمْ بِبَطْنِ مَكَّةَ مِنْ بَعْدِ أَنْ أَظْفَرَكُمْ عَلَيْهِمْ ۚ (الفتح: ٢٤)

उनै हुन् जसले मक्कामा तिमीहरूबाट उनीहरूको हात रोकेका थिए र तिम्रो हात उनीहरूबाट । जबकि उसले तिमीहरूलाई उनीहरूमाथि प्रभुत्व दिएको थियो । (अल् फतह :२४)

## उस्मान संन्देश लिएर जाने दूतको पदमा

मुहम्मदﷺले कुरैशको सामुन्ने आफ्नो तत्काल यात्राको उद्देश्य राम्रोसँग बताउन एक जना दूत पठाउने सोच गर्नुभयो । त्यस जिम्मेवारीको लागि उहाँले उमरलाई बोलाउनुभयो । तर उनले आफुले त्यो काम गर्न नसक्ने कारण प्रस्तुत गर्दै भने : यदि  मलाई दुःख दिइयो भने मक्कामा बनी कअबका कुनै पनि व्यक्तिले मेरो साथ दिने छैन । तपाईं उसमानलाई पठाउनुहोस् किनभने उनको खान्दान पनि मक्कामा छ । उनले तपाईंको सन्देश राम्रोसँग पुऱ्याउन सक्छन् । उहाँले उसमानलाई बोलाउनुभयो र कुरैशकहाँ जाने आदेश दिँदै भन्नुभयो : उनीहरूलाई भन, हामी लड्न आएका होइनौं उमराह गर्न आएका हौं । उनीहरूलाई इस्लामको निमन्त्रणा पनि देऊ । साथै मुहम्मदﷺले उसमानसँग मक्काका मुस्लिम पुरुष तथा महिलालाई विजयको शुभसूचना दिन र अल्लाहले अब इस्लाम धर्मलाई मक्कामा प्रकट गरिदिने तथा विजय प्रदान गर्नेवाला छ र इमानको कारण कसैलाई पनि अब त्यहाँ लुक्नु पर्ने अवस्था आउने छैन भन्ने खबर पनि दिन भन्नुभयो ।

उस्मान उहाँको संदेश लिएर गए । बलदह नामक ठाउँमा कुरैशको नजिकबाट जाँदै गर्दा उनीहरूले सोधे : कहाँ जाँदै छौ ? उनले भने मलाई मुहम्मदﷺले यो यो

संदेश दिएर पठाउनु भएको छ । कुरैशीहरूले भने, हामीले तिम्रो कुरा थाहा पायौं, जाऊ आफ्नो काममा । उता अब्बान बिन सइद बिन आस उठेर उस्मानको स्वागत गरे र आफ्नो घोडाको काठी कसेर उस्मानलाई सवार गरे । साथमा बसालेर आफ्नो बासस्थानमा लिएर गए । त्यहाँ पुगेर उस्मानले कुरैशका नेताहरूलाई मुहम्मदﷺको संदेश सुनाए । उनले संदेश सुनाएर सकेपछि कुरैशीहरूले उनलाई काबाको तवाफ अर्थात परिक्रमा गर्ने प्रस्ताव गरे । तर उनले त्यो प्रस्तावलाई स्वीकारेनन् । किनभने उनले मुहम्मदﷺले भन्दा पहिला तवाफ अर्थात परिक्रमा गर्न अनुचित ठाने ।

## उस्मानको शहादतको हल्ला र बैअते रिजवान

उस्मानले दूतको आफ्नो जिम्मेवारी पूरा गरेपछि कुरैशले उनलाई रोके । उनीहरूले आगामी परिस्थिति बारे आपसी परामर्श गरी कुनै ठोस निर्णय लिने र उस्मानलाई उनले ल्याएको संदेशको जवाफ दिएर फर्काउने सोच गरेका थिए । उस्मान त्यहाँ धेरै दिनसम्म बसेकाले मुसलमानभित्र उनको हत्या भएको हल्ला फैलियो । मुहम्मदﷺले त्यो खबर सुनेर भन्नुभयो : हामीहरू यहाँबाट तबसम्म हट्ने छैनौं जबसम्म उनीहरूसँग लड्दैनौं । त्यसपछि उहाँले सहाबीहरूलाई त्यस कुरामा प्रतिज्ञा गर्न आग्रह गर्नुभयो । सहाबीहरू तयार भए । हामी युद्ध छोडेर भाग्दैनौं भनी प्रतिज्ञा गरे । एउटा समूहले मृत्युलाई अंगाल्ने बाचा गर्दै भन्यो, मर्छौं तर युद्धको मैदान छोडेर भाग्दैनौं । सबैभन्दा पहिला अबु सिनान बिन असदीले बाचा गरे । सल्मा बिन अकुले तीन चोटि बाचा गरे, शुरुमा, बीचमा र अन्तमा । मुहम्मदﷺले आफ्नो हात समातेर यो उस्मानको हात हो भन्नुभयो । युद्ध गर्ने प्रतिज्ञा पूरा भए लगत्तै उस्मान पनि आए । उनले पनि प्रतिज्ञा गरे । त्यस प्रतिज्ञामा एक जना मुनाफिक सामिल भएन । उसको नाम जद्दु बिन कैस थियो ।

मुहम्मदﷺले त्यो प्रतिज्ञा एउटा रूखमुनि बसेर गर्नुभएको थियो । उमरले उहाँको हातलाई सहारा दिएका थिए । मअकल बिन यसारले रूखको हाँगाहरु मुहम्मदﷺको शिरबाट हटाएका थिए । त्यसै प्रतिज्ञाको नाम बैअते रिजवान हो । त्यसैको बारेमा अल्लाहले निम्न वाणी अवतरण गरे :

لَقَدْ رَضِيَ اللَّهُ عَنِ الْمُؤْمِنِينَ إِذْ يُبَايِعُونَكَ تحت الشجرة (الفتح: ١٨)

अल्लाह मोमिनसँग प्रसन्न भए जब उनीहरूले तपाईंसँग रुखमुनि बसेर प्रतिज्ञा गरेका थिए । (अल् फतह:१८)

## सम्झौता र सम्झौताका धाराहरू

जे होस् कुरैशहरुले परिस्थितिको लचकतालाई अनुभव गरेर तुरुन्तै सुहैल बिन अमरलाई सम्झौताको कार्यक्रम तय गर्न पठाए । अरबवासीमा मुस्लिमहरू हाम्रो शहरमा जबरजस्ती प्रवेश गरेका थिए भन्ने भ्रम नपरोस् भनेर यस वर्ष मुस्लिमहरूलाई

अवश्य फर्कनु पर्छ भन्ने कुरा सम्झौतामा समावेश गर्न जोड दिएर पठाए । ती कुराहरू लिएर सुहेल बिन अमर उहाँकहाँ आयो । मुहम्मदﷺले उसलाई आएको देखेर सहाबीहरूसँग भन्नुभयो : तिमीहरूको कुरा तिमीहरूको निम्ति सरल गरिएको छ । उसलाई पठाउनुको अर्थ यो हो कि कुरैशले सम्झौता गर्न चाहेको छ । सुहेलले उहाँकहाँ आएर धेरै लामो समयसम्म कुराकानी गऱ्यो । अन्तिममा दुवै पक्षमा सम्झौताका धाराहरू तय गरियो जुन निम्न लिखित छन् :

१ मुहम्मदﷺ यस वर्ष मक्का प्रवेश नगरी वापस फर्कने र आगामी वर्ष मुसलमानहरू मक्का आउने छन् । तीन दिनसम्म यहाँ बस्ने छन् । उनीहरूको साथमा यात्राको हतियार मात्र हुनेछ । तरवार खोलमा बन्द रहने छन् । उनीहरूको सामुन्ने कुनै पनि प्रकारको बाधा खडा गरिने छैन ।

२ दश वर्षसम्म दुवै पक्षले युद्धविराम गर्ने छन् । त्यस अवधिमा मानिसहरू शान्त वातावरणमा बस्ने छन् । कसैले कसैमाथि हात उठाउने छैन ।

३ जो मुहम्मदﷺको धर्ममा प्रवेश गर्न चाहन्छ गर्न सक्छ । कबिला जुन पक्षमा सामिल हुन्छ ऊ उसको एक अंग मानिनेछ । तसर्थ ती कबिलामध्ये कुनै पनि कबिलामाथि ज्यादती भयो भने स्वयम त्यस पक्षमाथिको ज्यादती मानिनेछ ।

४ कुरैशको कुनै पनि व्यक्ति आफ्नो अविभावकको अनुमतिविना भागेर मुहम्मदﷺकहाँ गयो भने मुहम्मदﷺले उसलाई फर्काउने छन् तर मुहम्मदﷺको साथीमध्ये कुनै व्यक्ति शरण लिन कुरैशकहाँ गयो भने कुरैशले त्यो व्यक्तिलाई फर्काउने छैन ।

त्यसपछि उहाँले अलीलाई बोलाएर त्यस सम्झौतालाई लिखित रूप दिन भन्नुभयो जुन यस प्रकार छ :

बिस्मिल्लाहिर्रहमानिर्रहिम ।

सुहेलले भन्यो : हामीलाई थाहा छैन रहमान के हो ? तपाईँ यसरी लेख्नु, हे अल्लाह तिम्रो नामबाट । मुहम्मदﷺले अलीलाई त्यही लेख्ने आदेश दिनुभयो । त्यसपछि उहाँले लेख्न पठाउनुभयो : यो त्यो कुरा हो जसमा ईशदूत मुहम्मदले सम्झौता गरेका छन् । त्यसमा सुहेलले भन्यो : यदि तपाईंलाई हामीले ईशदूत मानेको भए तपाईंलाई काबाबाट पनि रोक्ने थिएनौं र लडाइँ पनि गर्ने थिएनौं । तपाईँ मुहम्मद बिन अब्दुल्लाह लेखाउनुहोस् । उहाँले भन्नुभयो : म ईशदूत नै हुँ तिमीहरूले मिथ्या ठाने पनि । त्यसपछि अलीलाई शब्द रसुलुल्लाह मेटाएर मुहम्मद बिन अब्दुल्लाह लेख्ने आदेश दिनुभयो । तर अलीले त्यो शब्द मेटाउन सकेनन् । तसर्थ उहाँले आफ्नो हातले मेटाउनुभयो । त्यसपछि पूर्ण मस्यौदा लेखे ।

सम्झौता पूरा भएपछि खुजाअ ईशदूतको पक्षमा सामिल भयो । उनीहरू अब्दुल मुत्तलिबको जमानादेखि नै बनु हाशिमका मित्र थिए जस्तै किताबको आरम्भमा

उल्लेख छ । तसर्थ उनीहरूको सम्झौतामा सामिल हुनु वास्तवमा त्यही प्राचीन मित्रताको सत्यता तथा दृढताको प्रतीक थियो । अर्को कुरा बनु बकर कुरैशको सम्झौतामा सामिल भयो ।

## अबु जन्दलको फिर्ती

सम्झौताको मस्यौदा लेखिदै थियो सुहेलको छोरा अबु जन्दल आफ्नो हत्कडी घिसार्दै आए । उनी मक्काको तल्लो क्षेत्रबाट निस्केर आएका थिए । उनले त्यहाँ आएर मुसलमानको अगाडि आत्मसमर्पण गरे । सुहेलले भन्यो : यो पहिलो व्यक्तिलाई फिर्ता गर्ने माग गरी तपाईंसँग म यो सम्झौता घोषित गर्दछु । मुहम्मदﷺले भन्नुभयो : अहिले त हामीले आफ्नो मस्यौदा लेखन पूरा गरेका पनि छैनौं । उसले भन्यो : त्यसो भए तपाईंसँग कुनै कुरामा सम्झौता गर्दिनँ । मुहम्मदﷺले भन्नुभयो : ठिक छ तिमी यसलाई मेरो निम्ति छोडिदेऊ । उसले भन्यो : म तपाईंको निम्ति पनि छोड्न सक्तिन । उहाँले भन्नुभयो : होइन, यति त गरिदेऊ । उसले भन्यो : हुँदैन म यति पनि गर्न सक्तिन । त्यसपछि सुहेलले अबु जन्दलको गालामा झापड हान्यो र बहुदेववादीतर्फ फर्काउन उसको सर्टको कालर समातेर घिसार्‍यो । अबु जन्दल जोडजोडले चिल्लाएर भन्न थाले : मुसलमान हो , के मलाई बहुदेववादी तर्फ फर्काइने हो ? उनीहरूले त मेरो धर्म बारे मलाई दुःख दिन्छन् ? मुहम्मदﷺले भन्नुभयो : अबु जन्दल धैर्य गर । यसलाई पुण्य सम्झ । हामीले कुरैशसँग सम्झौता गरेका छौं । हामी र उनीहरूले यस सम्बन्धमा अल्लाहलाई साक्षी बनाएका छौं । त्यसकारण हामी सम्झौता उल्लंघन गर्न चाहदैनौं ।

त्यसपछि उमर उफ्रेर अबु जन्दल भएको ठाउँमा पुगे । उनको साथमा हिँड्दै कुरा भनेका थिए : अबु जन्दल धैर्य गर उनीहरू बहुदेववादी हुन् । उनीहरूको रगत कुकुरको रगत सरह हो । आफ्नो तरवारको खोल पनि उनको नजिक लगिरहेका थिए । उमर भन्छन् :उनले तरवार लिएर आफ्नो बुवाको टाउको उडाउँछन् कि भन्ने मलाई लागेको थियो । तर उनले आफ्नो बुवाको बारेमा कन्जुस्याइँ गरे । त्यसपछि सम्झौता लागू भयो ।

## उमराह समापन गर्नको लागि बलि तथा कपाल कटाई

सम्झौताको मस्यौदा लेखाएर सकेपछि मुहम्मदﷺले भन्नुभयो : उठ र आआफ्नो जनावरको बलि देऊ । तर कोही पनि उठेन । उहाँले त्यो कुरा तीन चोटि भन्दा पनि कोही उठेन । उहाँ उम्मे सलमाकहाँ जानुभयो । मानिसहरूले देखाएको त्यस व्यवहारलाई वयान गर्नुभयो । उम्मे सलमाले भनिन् : हे ईशदूत, के तपाईंले मैले भनेको मान्नु हुन्छ ? तपाईं जानुहोस् र कसैलाई केही नभनी आफ्नो जनावर बध गर्नुहोस् र कपाल काट्ने व्यक्तिलाई बोलाएर कपाल काट्नुहोस् । त्यसपछि

मुहम्मदﷺ बाहिर निस्कनुभयो र कसैलाई केही नभनी त्यसै गर्नुभयो । अर्थात आफ्नो बलिको जनावर बध गर्नुभयो । मानिसहरूले त्यो देखेर आआफ्नो जनावर बध गर्न थाले । त्यसपछि एकअर्काको कपाल खौँरन थाले । आफ्नो व्यवहारप्रति पछुताएकाले एकअर्काको हत्या नै गर्छन् कि जस्तो अवस्था सृजना भयो । त्यस अवसरमा गाई तथा उँट सात सात जनाको तर्फबाट बलि दिइयो । ईशदूतले अबु जहलको उँट बध गर्नुभयो । त्यसको नाकमा चाँदीको फूली थियो । त्यो उँट बध गर्नुको कारण बहुदेववादीलाई पीडा दिनु थियो । त्यसपछि मुहम्मदﷺले कपाल खौँरनेहरूको हकमा तीन चोटि क्षमा याचनाको प्रार्थना गर्नुभयो र कैँचिले कपाल काट्नेहरूको हकमा एक चोटि । त्यसै यात्रामा अल्लाहले कअब बिन अजराहको बारेमा निम्न वाणी अवतरण गरे : जुन कुनै व्यक्तिहरूले बाध्यतावश आफ्नो कपाल एहराम लगाएको हालतमा काट्यो भने उसले वर्त बसोस् वा दान दियोस् वा बलिको रूपमा जरिमाना दियोस् ।

## हिजरत गरेकी महिलाले वापस फर्कन इन्कार गरिन्

त्यसपछि केही मोमिन महिलाहरू आइन् । उनीहरूको अविभावकले हुदैबियामा भएको सम्झौता बमोजिम उनीहरूलाई वापस गर्न माग गरे । उहाँले सम्झौताको दफा अन्तर्गत जुन शब्द लेखिएको थियो त्यसको आधारमा त्यो मागलाई अस्वीकार गर्नुभयो : यो सम्झौता यस सर्तमा गरिएको छ कि हाम्रो तर्फबाट कोही पुरूष तपाईँकहाँ गयो भने तपाईँले अवश्य फर्काउनु पर्नेछ चाहे त्यो पुरूष तपाईँको धर्मावलम्बी नै किन नहोस् ।[१]

त्यस सम्झौतामा महिला शब्द उल्लेख भएको थिएन । अल्लाहले यस सम्बन्धी निम्न वाणी अवतरण गरे ।

يَا أَيُّهَا الَّذِينَ آمَنُوا إِذَا جَاءَكُمُ الْمُؤْمِنَاتُ مُهَاجِرَاتٍ فَامْتَحِنُوهُنَّ ۖ اللَّهُ أَعْلَمُ بِإِيمَانِهِنَّ ۖ فَإِنْ عَلِمْتُمُوهُنَّ مُؤْمِنَاتٍ فَلَا تَرْجِعُوهُنَّ إِلَى الْكُفَّارِ ۖ لَا هُنَّ حِلٌّ لَهُمْ وَلَا هُمْ يَحِلُّونَ لَهُنَّ ۖ وَآتُوهُمْ مَا أَنْفَقُوا ۚ وَلَا جُنَاحَ عَلَيْكُمْ أَنْ تَنْكِحُوهُنَّ إِذَا آتَيْتُمُوهُنَّ أُجُورَهُنَّ ۚ وَلَا تُمْسِكُوا بِعِصَمِ الْكَوَافِرِ
(الممتحنة: ١٠)

हे मोमिनहरू हो, तिमीहरूकहाँ मोमिन महिला हिजरत गरेर आइन् भने उनीहरूको परीक्षण गर । उनको इमानको बारेमा अल्लाहलाई राम्रोसँग थाहा छ । यदि उनीहरू मुस्लिम भएको थाहा पायौ भने उनीहरूलाई काफिरतिर नफर्काऊ । न त काफिरको लागि उनीहरू जायज छन् न काफिर उनीहरूको लागि जायज छन् । तर काफिर लोग्नेले आफ्नो श्रीमतीलाई दिएको महर फिर्ता गर । उनीहरूको महर दिएपछि उनीहरूसँग विवाह गर्नुमा कुनै पाप छैन । साथै काफिर महिलालाई आफ्नो वैवाहित सम्बन्धमा नराख । (अल् मुमतहिना:१०)

---

१ सही बुखारी भाग १

त्यो वाणी अवतरण भएपछि कुनै मोमिन महिला हिजरत गरेर आउँदा मुहम्मदﷺले अल्लाहको त्यस आदेश बमोजिम उनीहरूको परीक्षण गर्नुहुन्थ्यो ।

हे ईशदूत, तपाईंकहाँ मोमिन महिलाहरू आएर अल्लाहको साथमा कसैलाई साझेदार बनाउने छैनन्, चोरी गर्ने छैनन् , अवैध यौनसम्पर्क गर्ने छैनन्, आफ्नो सन्तानको हत्या गर्ने छैनन् , कसैमाथि दुर्व्यसनको आरोप लगाउने छैनन् र कुनै राम्रो कुरामा तिम्रो अवज्ञा गर्ने छैनन् भन्ने कुराको उनीहरूले प्रतिज्ञा गरिन् भने उनीहरूको (बैअत) प्रतिज्ञालाई स्वीकार्नु । उनीहरूको हकमा अल्लाहसँग क्षमायाचनाको प्रार्थना गर्नु । अल्लाह अवश्य क्षमा गर्नेवाला तथा कृपालु छन् । (अल् मुमतहिना:१२)

तसर्थ जुन महिलाले त्यस श्लोकमा बयान गरिएको सर्त पूरा गर्थिन् उहाँले उनीहरूसँग भन्नुहुन्थ्यो, मैले तिमीहरूको प्रतिज्ञा स्वीकारेको छु । त्यसपछि उहाँले उनीहरूलाई वापस फर्काउनु भएन ।

त्यस आदेश बमोजिम मुसलमानहरूले आफ्ना काफिर श्रीमतीहरूलाई तलाक दिए । त्यसबेला उमरसँग दुईटी बहुदेववादी श्रीमती थिइन् । उनले ती दुवैलाई तलाक दिए । एक जनासँग मुआवियाले विवाह गरे भने अर्कोसँग सफ्वानले ।

## सम्झौताका दफाहरूको उपलब्धि

हुदैबियाको सम्झौताको दफाहरूलाई जो कोहीले त्यसको परिवेश समेत अवलोकन गर्‍यो भने उसलाई त्यो सम्झौता मुसलमानको हकमा महान विजय थियो भन्नुमा कुनै आशंका रहने छैन । किनभने कुरैशीहरूले त्यस बेलासम्म मुसलमानहरूको अस्तित्व स्वीकार गरेका थिएनन् र उनीहरूलाई नाश गर्ने सोच गरेर बसेका थिए । उनीहरू एक दिन न एक दिन मुसलमानको शक्ति टुट्ने छ भन्ने प्रतीक्षामा थिए । त्यस बाहेक कुरैशीहरू अरब टापुका धर्मगुरु र सांसारिक ठेकेदार भएका नाताले इस्लामी प्रचारप्रसार र आम मानिसहरूबीच पूर्ण रूपमा बाधा खडा गर्ने प्रयास गर्दथे । त्यस परिवेशलाई हेर्ने हो भने उनीहरूले सम्झौता गर्न लचकता देखाउनु नै मुसलमानको शक्तिलाई स्वीकार्नु सरह थियो र कुरैशीहरूले मुस्लिम शक्तिलाई कुल्चिन सक्तैनन् भन्ने सूचना पनि थियो । तेस्रो दफालाई हेर्ने हो भने कुरैशलाई सांसारिक ठेकेदारी र धर्मगुरुको जुन पद प्राप्त थियो त्यसलाई उनीहरूले एकदमै बिर्सिसकेको अवस्था देखिन्छ । उनीहरूलाई केवल आफ्नो फिकर थियो । अन्य मानिसहरूको के हुन्छ भन्नेमा उनीहरूलाई कुनै मतलब पनि थिएन । अर्थात पूरै अरब टापुले इस्लाम स्वीकार गरे पनि उनीहरूलाई त्यस बारे कुनै आपत्ति हुने भएन । उनीहरूले त्यसमा कुनै प्रकारको हस्तक्षेप गर्ने छैनन् । कुरैशको उद्देश्य र सोचको हिसाबले के यो उनीहरूको ठूलो पराजय थिएन ? साथै मुसलमानहरूको उद्देश्यको हिसाबले के यो उनीहरूको ठूलो विजय थिएन ? आखिर इस्लाम र इस्लामशत्रुबीच जुन रक्तपात युद्ध भयो त्यसको लक्ष्य एवं उद्देश्य मानिसहरूलाई पूर्ण मुक्ति र

स्वतन्त्रता हासिल होस् भन्ने बाहेक अरु के थियो र ? अर्थात आफ्नो इच्छा बमोजिम जो मुसलमान हुन चाहन्छ मुस्लिम बनोस् जो काफिर भएर बस्न चाहन्छ उ काफिर नै रहोस् । कुनै पनि शक्ति उनीहरूको इच्छा र चाहनाको विरुद्ध बाधक नबनोस् । मुसलमानको उद्देश्य शत्रुहरूको मालसमान लुटने, उनीहरूको हत्या गर्ने र उनीहरूलाई जबरजस्ती मुसलमान बनाउने थिएन ।

तपाईंले देख्न सक्नुहुन्छ, त्यस सम्झौतापछि मुसलमानहरूलाई आफ्नो उल्लेखित उद्देश्य त्यसका सबै पक्ष र आवश्यक कुराहरु समेत प्राप्त भयो । त्यो उद्देश्य जसरी हासिल भएको थियो युद्धमा पूर्ण विजय प्राप्त हुँदा पनि हासिल हुन सक्दैन थियो । त्यस स्वतन्त्रताले गर्दा मुसलमानहरूले इस्लाम प्रचारप्रसारको मैदानमा ठूलो सफलता प्राप्त गरे । तसर्थ मुसलमानको सैन्य शक्तिले त्यस सम्झौताअघि कहिल्यै पनि तीन हजार नाघेको थिएन । दुई वर्षभित्र मक्का विजयको अवसरमा दश हजार फौज तयार भयो ।

दफा न.२ पनि वास्तवमा त्यस विजयको एउटा अंग हो । किनभने युद्धको आरम्भ मुसलमानहरूले होइन बहुदेववादीहरूले नै गरेका थिए । अल्लाहको भनाई छ : पहिलो पटक तिमीसँग उनीहरूले सुरु गरे ।

जहाँसम्म मुसलमानको फौजी गस्ती र छापामार टोलीको कुरा छ उनीहरूको उद्देश्य केवल कुरैशले आफ्नो मूर्खता एवं घमण्डको कारण अल्लाहको मार्गमा बाधा अड्चन् खडा नगरून् र समानताको आधारमा व्यवहार गरुन् भन्ने थियो । अर्थात हरेक पक्ष आआफ्नो परिधिभित्र रहेर काम गर्न स्वतन्त्र होस् भन्ने थियो । अब सोच्नुहोस्, दश वर्षको युद्धविरामको सम्झौता घमण्ड त्यागनु र अल्लाहको मार्गमा बाधा अड्चन् खडा नगर्ने प्रतिज्ञा नै त थियो । यसको अर्थ युद्धको सुरुवात गर्ने वाला कमजोर तथा निहत्था भएको कारण आफनो उद्देश्यमा विफल भयो ।

पहिलो दफाको कुरा पनि मुसलमानहरूको असफलता होइन, सफलताको प्रतीक हो । वास्तवमा त्यो दफा त्यो प्रतिबन्ध समाप्तिको घोषणा थियो जुन कुरैशले मुसलमानमाथि हरमको मस्जिदमा प्रवेशको सम्बन्धमा लगाएको थियो । तर त्यस दफामा कुरैशको लागि सन्तोषजनक कुरा के थियो भने उनीहरूले मुसलमानहरूलाई एक सालको लागि रोक्न सफल भए । तर त्यो अल्पकालिन तथा अस्तित्वहीन लाभ थियो ।

त्यस सम्झौता अन्तर्गत त्यो कुरा पनि सोचनिय छ । जब कुरैशले मुसलमानलाई तीन वटा फाइदा दिएर एउटा फाइदा हासिल गरेका थिए जस्तै दफा न.४ मा उल्लेख छ । तर त्यो फाइदा पनि अति सानो र अस्तित्वहीन थियो । त्यसमा मुसमालनहरूको कुनै नोक्सानी थिएन । किनभने उनीहरूलाई थाहा थियो अब कुनै पनि व्यक्ति मुसलमान रहुञ्जेल अल्लाह, ईशदूत र इस्लामी शहरबाट भाग्न सक्दैन ।

भाग्ने उपाय भनेको इस्लामलाई त्याग्नु थियो । चाहे खुलेआम त्यागोस् चाहे गोप्य रुपमा । कसैले इस्लाम त्याग्दैमा मुसलमानहरूलाई कुनै नोक्सान हुनेवाला पनि थिएन बरु इस्लामी समाजमा त्यस्तो व्यक्ति नभएको नै ठिक थियो । त्यसै कारणले मुहम्मदﷺले भन्नुभएको थियो : जो व्यक्ति हामीलाई छाडेर बहुदेववादीतर्फ भाग्यो अल्लाहले उसको नाश गऱ्यो ।[१]

बाँकी ती मक्कावासीहरू जो मुसलमान भइसकेका थिए वा हुन बाँकी थिए सम्झौता अनुसार उनीहरूको लागि मदिनामा शरण लिन ठाउँ थिएन । तर अल्लाहको धर्ती फराकिलो थियो । के हब्शाको भूमिले त्यस्तो कठिन घडीमा मुसलमानलाई बास दिएन होला जुन अवस्थामा मदिनावासीहरू इस्लामको नाम पनि जान्दैनन् थिए ? त्यसैगरी आज पनि धर्तीको कुनै पनि भागले मुसलमानको लागि आफ्नो काख खुल्ला गर्न सक्छ । त्यसै कुरालाई मुहम्मदﷺले यसरी भन्नु भएको छ : जो व्यक्ति हामीकहाँ आउनेछ अल्लाहले उसको लागि फराकिलो ठाउँ एंव निकासको लागि बाटो बनाइदिने छ । (मुस्लिम)

त्यस किसिमको संरक्षणबाट कुरैशले बाह्य रूपमा इज्जत तथा सम्मान पाएका थिए तर त्यो कुरा वास्तवमा कुरैशहरूको मनमा त्रास,पीडा,दबाव र पराजयको प्रतीक थियो । यसबाट ज्ञात हुन्छ उनीहरू आफ्नो मूर्तिपुजारी समाज बारे अति डराएका थिए । हाम्रो सामाजिक संरचना भासिएको ढाप र पहिरो जान लागेको भिरमा छ । त्यो कुनै पनि समयमा टुट्न सक्छ भन्ने कुरा उनीहरूलाई महसुस भइसकेको थियो । त्यसकारण त्यसको सुरक्षाको लागि माथि उल्लेख गरिएको सुरक्षा हासिल गर्न जरूरी थियो । अर्कोतर्फ कुरैशले त्यहाँ शरण लिने कुनै पनि मुसलमानलाई फिर्ता बोलाउने छैन भन्ने सर्तलाई मुहम्मदﷺले कबुल गर्नुभएको थियो । त्यो पनि आफ्नो समाजको स्वाधिनता र शक्तिमा पूर्ण विश्वास भएको एउटा प्रतीक थियो । त्यस प्रकारको सर्तबाट कुनै आपत्ति आउँछ भन्ने उहाँलाई कत्ति पनि डर थिएन ।

## मुसलमान शोकग्रस्त र उमरको वार्तालाप

यी थिए सम्झौताका दफाहरू । तर ती दफाहरूमा दुईटा यस्ता प्रत्यक्ष नकारात्मक कुराहरू थिए जसले गर्दा मुसलमानहरूलाई ठूलो चोट र पीडा भएको थियो । एउटा कुरा, मुहम्मदﷺ काबामा गएर तवाफ नगरी वापस हुनुभएको थियो । अर्को कुरा उहाँ ईशदूत हुनुका साथै हकमा हुनुहुन्थ्यो त्यसका साथै अल्लाहले आफ्नो धर्मलाई विजय गर्ने बचन पनि दिएका थिए । त्यस्तो हुँदाहुँदै पनि उहाँले कुरैशको दबाबमा सम्झौता गर्नु भएको थियो । ती दुईटा कुराले मुसलमानहरूमा विभिन्न

---

१ सही मुस्लिम भाग २

आशंका, शंका, संकोच र उपशंका उब्जाइरहेको थियो । अर्कोतर्फ मुसलमानको भावना यति टुटेको थियो कि उनीहरू सम्झौताका दफाहरूको गहिराई र परिणाममाथि सोचविचार गर्नुको सट्टा शोकग्रस्त भएका थिए । सबैभन्दा बढी शोक उमरलाई भएको थियो । तसर्थ उनले मुहम्मदﷺकहाँ उपस्थित भएर भने : हे ईशदूत, के हामी सत्यमा छैनौं ? उनीहरू असत्यमा छैनन् ? उहाँले भन्नुभयो, अवश्य । उनले भने हाम्रा मृतकहरू स्वर्गमा र उनीहरूका मृतकहरू नर्कमा छैनन् ? उहाँले भन्नुभयो, अवश्य छन् । उनले भने, किन हामीले आफ्नो धर्मको बारेमा दबाव कबुल गरेका हौं ? यही स्थितिमा हामी फर्कने हो ? के अल्लाहले अँझसम्म हामी र उनीहरूको बीचमा फैसला गरेको छैन ? उहाँले भन्नुभयो, हे खत्ताबको छोरा, म अल्लाहको दूत हुँ र मैले उसको अवज्ञा गर्न सक्तिनँ । उसले मेरो मदत गर्नेछ । उसले मलाई कदापि बरबाद गर्ने छैन । उनले भने : हामीले काबामा गएर तवाफ गर्ने छौं भनेर के तपाईंले भन्नु भएको थिएन ? उहाँले भन्नुभयो, अवश्य । तर मैले यो पनि भनेको थिएँ, हामी यसै वर्ष आउने छौं । उनले भने, होइन । उहाँले भन्नुभयो, जे होस् तिमीहरू काबामा आउने छौ र परिक्रमा गर्ने छौं ।

त्यसपछि उमर रिसाएर अबु बकरकहाँ पुगे । उनले मुहम्मदﷺसँग भनेको कुरा बताए । उनले पनि त्यही जवाफ दिए जुन मुहम्मदﷺले दिनुभएको थियो । अन्तिममा उनले यति कुरा भने, जीवन रहेसम्म आफ्नो कुरामा अडिग बस्नु । किनभने अल्लाहको कसम तपाईं हकमा हुनहुन्छ ।

त्यसपछि निम्न वाणी अवतरण भयो : हामीले तिमीहरूलाई पूर्ण विजय प्रदान गरेका छौं । (अलफतह :१) त्यस वाणीमा त्यस सम्झौतालाई महान विजय घोषित गरियो । त्यो वाणी अवतरण भएपछि मुहम्मदﷺले उमरलाई बोलाएर वाणी पढेर सुनाउनुभयो । उनले भन्न थाले, हे ईशदूत, के यही विजय हो? उहाँले भन्नुभयो, हो । त्यसपछि उनको मन शान्त भयो र उनी वापस फर्के ।

उमरलाई आफ्नो कमजोरीको अनुभूति भएपछि उनी पछुताए । उनको बयान छ, त्यो दिन मैले जुन गल्ती गरेको थिएँ वा जुन कुरा भनेको थिएँ त्यो कुराले डराएर धेरै पुण्य गरें । बराबर दानदक्षिणा दिइराखें, व्रत बसें ,नमाज पढें । दासीहरूलाई मुक्त गरिदिएँ । यति गर्दा पनि मेरो कुनै भलो हुन्छ भन्ने लागेको थिएन ।[१]

## कमजोर मुसलमानको समस्या समाधान

मुहम्मदﷺ मदिना आएर शान्त भएपछि एक जना मुसलमान जसलाई मक्कामा यातना दिइएको थियो लुकीछुपी भागेर आए । उनको नाम अबु बसिर थियो । उनको

१ फतहुलबारी भाग ७, सही बुखारी भाग १,२, सही मुस्लिम भाग २, इब्ने हेशाम भाग २ जादुल मआद भाग २, जौजीको तारिख उमर विन खत्ताब

सम्बन्ध सकिफ कबिलासँग थियो । उनी कुरैशका मित्र पनि थिए । कुरैशले उनलाई फर्काउन दुई जनालाई पठाए । हामी र तपाईँ बीच जुन सम्झौता भएको छ त्यसलाई कार्यान्वयन गर्नुहोस् भन्न पठाए । मुहम्मदﷺले अबु बसिरलाई उनीहरूको हवाला गरिदिनुभयो । उनीहरू दुवै उनलाई लिएर फर्के । जुल् हुलैफा पुगेपछि त्यहाँ झरेर खजुर खान थाले । अबु बसिरले भने, हे फलानो, अल्लाहको कसम तिम्रो तरवार त अति राम्रो छ नि । उसले त्यो तरवार खोलबाट निकालेर भन्यो : अँ अँ, अल्लाहको कसम यो अति राम्रो छ । मैले त्यसलाई पटक पटक खेलाएको छु । अबु बसिरले भने, मलाई देखाऊ म पनि हेर्छु । अबु बसिरले तरवार लिने वित्तिकै उसलाई मारेर सुताइदिए ।

दोस्रो व्यक्ति भागेर मदिना आयो र दगुर्दै मस्जिदे नबवीमा घुस्यो । मुहम्मदﷺले उसलाई देखेर भन्नुभयो : ऊ कुनै आपतमा छ । त्यो व्यक्तिले मुहम्मदﷺकहाँ आएर भन्यो : मेरो साथीको हत्या गरिएको छ र मेरो पनि हत्या हुनेवाला थियो । त्यसै बेला अबु बसिर पनि आए र उनले भने : हे ईशदूत, अल्लाहले तपाईंको बाचा पूरा गरिदिए । तपाईंले मलाई उनीहरूतर्फ फिर्ता पठाउनुभएको थियो र अल्लाहले मलाई मुक्त गरिदिए । मुहम्मदﷺले दोस्रो व्यक्तिको बारेमा भन्नुभयो : उसको आमाको नाश होस् । उसले कुनै साथी पायो भने युद्धको आगो भड्काउने छ । त्यो कुरा सुनेर अबु बसिरको मनमा फेरि उनलाई काफिरहरूको हवाला गरिँदै छ भन्ने लाग्यो । त्यसकारण उनी मदिनाबाट निस्केर समुन्द्रको किनारातिर भागे । उता अबु जन्दल बिन सुहेल पनि छुटेर भागे र अबु बसिरसँग मिले । त्यसपछि कुरैशको जो व्यक्ति पनि भाग्थ्यो अबु बसिरसँग मिल्थ्यो । यसरी उनीहरुको एउटा समूह नै जम्मा भयो । त्यसपछि उनीहरूले सिरिया आउने जानेवाला कुनै पनि बटुवाहरूको पत्तो पाउने वित्तिकै हस्तक्षेप गरी मारपिट गरेर उनीहरूको माल खोस्थे । कुरैशहरूले उनीहरूबाट हार खाएर मुहम्मदﷺलाई अल्लाह र नातेदारीको वास्ता दिँदै उनीहरूलाई आफु भएको ठाउँमा बोलाउनु होस् र जो तपाईंकहाँ आउनेछ ऊ सुरक्षित रहनेछ भन्ने संदेश पठाए । त्यसपछि मुहम्मदﷺले उनीहरूलाई बोलाउनुभयो र उनीहरू मदिना आए ।[१]

## कुरैशका ठूला बडाले स्वीकारे इस्लाम

त्यस सम्झौतापछि हिजरी सम्बत ७ सालको सुरुमा अमर बिन आस, खालिद बिन वलिद र उस्मान बिन तलहा मुसलमान भए । उनीहरू मुहम्मदﷺकहाँ हाजिर भएपछि मुहम्मदﷺले भन्नुभयो : मक्काले आफ्नो हृदयका टुक्राहरूलाई हाम्रो हवाला गर्‍यो ।[२]

---

१ फतहुलबारी भाग ७, सही बुखारी भाग १,२, सही मुस्लिम भाग २, इब्ने हेशाम भाग २ जादुल मआद भाग २, जौजीको तारिख उमर बिन खत्ताब
२ यी सहाबीहरुले कहिले इस्लाम स्वीकारे भन्ने बारेमा ठूलो मतभेद छ । अस्माउर रेजालका सामान्य किताबहरुमा यो कुरा हिजरी सम्बत ८ सालको बताइएको छ । तर नजाशी बादशाहकहाँ

# दोस्रो चरण
## नयाँ परिवर्तन

हुदैबिया सम्झौता वास्तवमा इस्लाम र मुसलमानको जीवनमा एउटा नयाँ परिवर्तनको शुत्रपात थियो । किनभने इस्लामविरुद्ध कुरैश सबैभन्दा बलियो, अडियल र लडाकु जातिको रूपमा चिनिन्थ्यो । त्यसकारण युद्धको मैदानबाट पराजित भएर उनीहरू अमन शान्तितर्फ लागेकाले अहजाब युद्धका तीन वटा शक्ति कुरैश, गत्फान र यहुदीमध्येको सबैभन्दा बलियो शक्ति टुट्यो । उनीहरूमध्ये कुरैश नै पूरा अरब टापुमा मूर्ति पूजाको प्रतिनिधि एंव नायिके थियो । त्यसकारण युद्धको मैदानबाट उनीहरू हट्ने बित्तिकै अरू मूर्ति पूजारीहरूको उत्साह सेलायो र दुस्मनीमा केही हदसम्म परिवर्तन आयो । फलस्वरूप हामी देख्न सक्छौं त्यस सम्झौतापछि गत्फानको तर्फबाट कुनै ठूलो संघर्ष तथा विद्रोह भएन । उनीहरूले यदि केही गरेका थिए भने पनि यहुदीले भड्काएको कारण गरेका थिए ।

जहाँसम्म यहुदीहरूको सम्बन्ध छ, यस्रीबबाट निकालिएपछि उनीहरूले खैबरलाई आफ्नो षड्यन्त्र तथा चालबाजी गर्ने अड्डा बनाए । त्यहाँ उनीहरूको शैतानले टाउको उठाउन लागेको थियो । फसादको आगो भड्काउनमा व्यस्त थियो । उनीहरूले मदिना वरिपरिका बासिन्दालाई भड्काउँथे । साथै मुहम्मदﷺ र मुसलमानहरूलाई समाप्त गर्ने वा कमसेकम उनीहरूलाई ठूलो नोक्सान पुऱ्याउने सोचमा रहन्थे । त्यसकारण हुदैबियापछि मुहम्मदﷺले सबैभन्दा पहिलो र निर्णायक कदम फसादको त्यही अड्डा विरुद्ध उठाउनुभयो ।

हुदैबियापछि स्थापित भएको अमन शान्तिमा मुसलमानहरूको लागि इस्लामी आह्वानलाई अगाडि बढाउने तथा इस्लाम प्रचारप्रसार गर्ने महत्वपूर्ण अवसर प्राप्त भयो । त्यसकारण उनीहरूको गतिविधि युद्धमा गरिने गतिविधिभन्द पनि बढी थियो । तसर्थ त्यस अवधिलाई दुई भागमा विभाजित गर्न उचित होला ।

१ इस्लामी प्रचारप्रसारको गतिविधि र राजा रजौटाहरूलाई पत्राचार ।
२ युद्ध सक्रियता ।

त्यस चरणको युद्ध सक्रियतालाई उल्लेख गर्नुभन्दा पहिला राजारजौटा तथा सरदारहरूसँग गरिएको पत्राचारको विवरण वर्णन गर्नु अनुचित नहोला । किनभने स्वाभाविक रूपमा इस्लामी आह्वान प्रथम छ । त्यो नै मुख्य कारक थियो जसको लागि मुसलमानहरूले विभिन्न कठिनाइ, दुःख,कष्ट, युद्ध, उपद्र र अस्थिरताको सामना गर्नु परेको थियो ।

---

अमर विन आसले इस्लाम स्वीकारेको कुरा हिजरी सम्बत ७ सालमा भएको प्रख्यात छ । त्यति बेला नै अमर विन आस हब्शाबाट फर्केर आउँदा खालिद र उस्मान पनि मुसलमान भएका थिए । उनी हब्शाबाट आएर मदिना जाँदा उनीहरुसँग बाटोमा भेट भएको थियो । ती तीनै जनाले अल्लाहका संदेष्टाको सेवामा हाजिर भई इस्लाम स्वीकारेका थिए । तसर्थ उनीहरुले हिजरी सम्बत ७ सालको शुरुमा इस्लाम स्वीकारेको पुष्टि हुन्छ ।

## राजा तथा सरदारहरूको नाउँमा पत्राचार

हिजरी सम्बत ६ सालको अन्तिमतिर मुहम्मदﷺ हुदैबियाबाट फर्केपछि उहाँले राजा तथा सरदारहरूको नाउँमा पत्र लेखेर उनीहरूलाई इस्लामको निम्तो दिनुभयो ।

मुहम्मदﷺले पत्र लेख्न थालनी गर्दा उहाँलाई राजाहरूले छाप लागेको पत्रलाई मात्र स्वीकार्छन भन्ने सुझाव आयो । त्यसकारण मुहम्मदﷺले चाँदीको औंठी बनाउनुभयो जसमा मुहम्मद रसुलुल्लाह लेखिएको थियो । त्यो तीन पंक्तिमा थियो । मुहम्मद एक पंक्तिमा ,रसुल दोस्रोमा र अल्लाह तेस्रोमा । त्यै त्यस छापको लोगो थियो ।[1]

त्यसपछि मुहम्मदﷺले अनुभवी साथीहरूलाई आफ्नो दूत नियुक्त गर्नुभयो र उनीहरूलाई पत्र दिएर राजाहरूकहाँ पठाउनुभयो । विद्वान मनसुरीको भनाइ अनुसार उहाँले आफ्ना दूतहरूलाई आफु खैबरतिर लाग्नुभन्दा केही दिन पहिला हिजरी सम्बत ७ साल मोहर्रम एक तारिखमा पठाउनु भएको थियो ।[2] अगाडि ती पत्रहरू र त्यसबाट झल्किएको केही असर बारे प्रस्तुत गरिदैछ ।

### १, हबशाको शाह नजाशीको नाउँमा पत्र

नजाशीको नाम अस्हमा बिन अब्जर थियो । मुहम्मदﷺले उसको नाउँमा जुन पत्र अमर बिन उमैयालाई दिएर हिजरी सम्बत ६ सालको अन्तिम वा ७ सालको आरम्भमा पठाउनुभएको थियो त्यस पत्रको नकल तबरीले वयान गरेका छन् । तर त्यो पत्रलाई सरसरी हेर्ने हो भने मुहम्मदﷺले हुदैबियापछि नै लेखेको पत्र जस्तो लाग्दैन । त्यो पत्र त्यति बेलाको लाग्छ जब मुहम्मदﷺले मक्की युगमा जाफरलाई हब्शातर्फ हिजरत गर्दा दिनु भएको थियो । किनभने पत्रको अन्तिममा मुहाजिरहरूको वर्णन यी शब्दहरूमा गरिएको छ ।

मैले आफ्नो काकाको छोरा भाइ जाफरलाई तपाईंकहाँ एक जमातको साथमा पठाएको छु । उनीहरू तपाईंकहाँ पुगे भने उनीहरूलाई शरण दिनु र उनीहरूमाथि अत्याचार नगर्नु ।

बैहकीले इब्ने अब्बासमार्फत एक अर्को पत्रको एउटा अनुच्छेद नकल गरेका छन् जुन मुहम्मदﷺले नजाशीको नाउँमा पठाउनु भएको थियो । त्यस पत्रको अनुवाद यस प्रकार छ :

यो पत्र ईशदूत मुहम्मदको तर्फबाट नजाशी अस्हमाको नाममा ।

---

१ सही बुखारी भाग २
२ रहमतुल लिल् आलमिन भाग १

सत्य मार्गदर्शन अनुशरण गर्ने, अल्लाह र उसको दूतमाथि आस्था राख्नेहरूको निम्ति शान्ति छ । म गवाही दिन्छु एक अल्लाहबाहेक कोही पनि पूजनीय शक्ति छैन । उसलाई न त श्रीमतीको आवश्यकता छ न सन्तानको । म यो पनि गवाही दिन्छु मुहम्मद उसको उपासक र दूत हो । म तिमीलाई इस्लामको निम्तो दिन्छु किनभने म अल्लाहको दूत हुँ । इस्लाम ल्यायौ भने शान्तिमा रहने छौ । हे अहले किताब यस्तो कुरातर्फ आऊ जुन कुरा तिमी र हामीबीच समान छ । त्यो के हो भने हामी अल्लाहबाहेक कसैको पूजा नगरौं, उसको स्वाभिमानमा कसैलाई साझेदार नबनाऔं, हामीहरूमध्ये कसैले कसैलाई आफ्नो पालनकर्ता नबनाओस् । यदि उनले अस्वीकार गरे भने भनिदेऊ साक्षी बस्नुस् हामी मुसलमान हौं । यदि तिमीले इस्लाम अस्वीकार गऱ्यौ भने तिम्रो समुदाय क्रिश्चियनको पाप पनि तिमीमाथि भार बन्नेछ ।[1]

डाक्टर हमिदुल्लाहले पनि एउटा पत्रको नकल वर्णन गरेका छन् जो निकट विगतमा प्राप्त भएको छ । एउटा शब्दको परिवर्तनको साथमा विद्वान इब्ने कैयमले त्यो पत्र आफ्नो किताब जादुल मआदमा पनि वर्णन गरेका छन् । डाक्टर हमिदुल्लाहले त्यस पत्रको खोजीमा धेरै मिहिनेत गरे । नयाँ युगको अविष्कारहरूलाई सदुपयोग गर्दै उनले त्यस पत्रको नकल यस किताबमा गाभेका छन् ।

त्यस पत्रको अनुवाद यस प्रकार छ ।

बिस्मिल्लाहिर्रहमानिर्रहीम

ईशदूत मुहम्मदको तर्फबाट हब्शाका महाराजाको नाउँमा ।

सत्य मार्गदर्शन अनुशरण गर्नेहरूको निम्ति शान्ति छ । म तपाईंसँग उही अल्लाहको प्रशंसा गर्दछु जसबाहेक कोही पनि पूजनीय शक्ति छैन । ऊ सुन्दरम् एंव शिवम छ । अमन दिनेवाला पनि उनै हुन् र संरक्षण गर्ने वाला पनि । म गवाही दिन्छु मरयमका छोरा इसा अल्लाहले दिएको आत्मा र उसका शब्द हुन् । अल्लाहले त्यसलाई पवित्र तथा चोखी महिला मरयममा हालिदिए । उसको आत्मा र फुँकबाट मरयम इसाको निम्ति गर्भवती भइन् जसरी आदमलाई अल्लाहले माटोबाट सृष्टि गरेका थिए । म एक अल्लाह जसको कुनै साझेदार छैन उसको तर्फ र उसको पालना गर्न एकअर्कालाई सहयोग गर्नेतर्फ निम्तो दिन्छु । साथै यस कुराको तिमीहरूलाई निम्तो दिन्छु कि तिमीहरू मेरो अनुकरण गर र जो कुरा ममाथि अवतरण भएको छ त्यसमा आस्था राख । किनभने म ईशदूत हुँ । म तिमी र तिमीहरूको लश्करलाई अल्लाहतर्फ बोलाउँछु । मैले प्रचारप्रसार गरिदिएँको छु तसर्थ

१ बैहकीका दलायलुल नुबुवत भाग २, हाकिम भाग २

मेरो उपदेश स्वीकार गर । त्यो व्यक्तिमाथि शान्ति होस् जसले मार्गदर्शनको अनुकरण गर्छ ।[१]

डाक्टर हमिदुल्लाहले दृढ विश्वासका साथ भनेका छन्,त्यही पत्र मुहम्मदﷺले हुदैबियापछि हब्शाका राजालाई पठाउनु भएको थियो । त्यसको सत्यता बारे छानविन गर्ने हो भने कुनै आशंका नरहेको प्रष्ट हुन्छ । मुहम्मदﷺले त्यही पत्र नै हुदैबियापछि पठाएका हुन् भन्ने बारे कुनै प्रमाण छैन । बैहकीले जुन पत्र इब्ने अब्बासमार्फत नकल गरेका छन् त्यसको भाव ती पत्रसँग बढी मिल्दोजुल्दो छ जुन पत्र मुहम्मदﷺले हुदैबियापछि इसाई राजा तथा सरदारहरूलाई पठाउनुभएको थियो । किनभने मुहम्मदﷺले ती पत्रहरूमा कुरआनको श्लोक (या अहलिल किताबे तआलौ एला कलेमतीन सवाइन्) लेख्नुभएको थियो । बैहकीले वर्णन गरेको पत्रमा पनि त्यो श्लोक उल्लेख छ । त्यस बाहेक त्यस पत्रमा अस्हमाको नाउँ पनि किटान गरिएको छ । जबकि डाक्टर हमिदुल्लाहले नकल गरेको पत्रमा कसैको नाम किटान गरिएको छैन । त्यसैले मेरो विचारमा डाक्टरले नकल गरेको पत्र वास्तवमा त्यो होइन जुन मुहम्मदﷺले अस्हमाको मृत्युपछि उनको प्रतिनिधिको नाउमा लेख्नुभएको थियो । त्यसैकारणले होला त्यसमा कसैको नाम छैन ।

त्यसको क्रमिकता बारे मसँग कुनै प्रमाण छैन । त्यसको आधार केवल ती आन्तरिक प्रमाणहरू हुन् जो ती पत्रहरूको विषय वस्तुबाट प्राप्त हुन्छ । तर डाक्टर हमिदुल्लाहमाथि आश्चर्य छ मौसुफले इब्ने अब्बासमार्फत बैहकीले वर्णन गरेको पत्रलाई पूर्ण विश्वासका साथ मुहम्मदﷺको पत्र बताएका छन् जुन उहाँले अस्हमाको मृत्युपछि प्रतिनिधिहरूलाई लेख्नुभएको थियो । जबकि  त्यस पत्रमा अस्हमाको नाम किटान गरिएको छ । अल्लाह नै सर्वज्ञाता छन् ।[२]

जेहोस्, अमर बिन उमैया जमरीले मुहम्मदﷺको पत्र राजालाई दिएपछि राजाले पत्र स्वीकारे र आफ्नो गद्दीबाट तल झरे अनि उनले जाफर बिन अबी तालिबको हातमा इस्लाम कबुल गरे । त्यसपछि उनले मुहम्मदﷺलाई प्रतिउत्तर लेखे जुन यस प्रकार छ :

बिस्मिल्लाहिर्रहमानिर्रहीम

राजाको तर्फबाट मुहम्मदﷺको नाउँमा ।

हे ईशदूत तपाईंमाथि अल्लाहको कृपादृष्टि, शान्ति र दया होस् । अल्लाहबाहेक कुनै पूजनीय शक्ति छैन ।

---

१ डा. हमिदुल्लाहद्वारा लिखित अल्लाहका संदेष्टाको राजनैतिक जीवन, जादुल मआद भाग ३
२ डा. हमिदुल्लाहद्वारा लिखित मुहम्मदको राजनैतिक जीवन

महोदय,

हे ईशदूत मैले तपाईंको पत्र पाएँ । जसमा तपाईंले इसाको कुरा उल्लेख गर्नुभएको छ । आकाश र धर्तीका पालनकर्ताको कसम तपाईंले इसाको बारेमा जुन कुरा उल्लेख गर्नु भएको छ उनी त्यो भन्दा एक रत्ति बराबर पनि बढी थिएनन् ।[१] उनी तपाईंले उल्लेख गरे जस्तै थिए । तपाईंले हामीकहाँ जे पठाउनु भएको थियो हामीले त्यसलाई बुझ्यौं, तपाईंको काकाको छोरा र साथीहरूको सत्कार गर्‍यौं । म गवाही दिन्छु तपाईं अल्लाहको सत्य दूत हुनुहुन्छ । मैले तपाईंसँग प्रण गरेको छु साथै तपाईंको भाइसँग पनि । उनको हातमा अल्लाहको लागि इस्लाम कबुल गरेको छु ।[२]

मुहम्मदﷺले राजासँग जाफर र शरणार्थी साथीहरूलाई वापस गर्न पनि माग गर्नु भएको थियो । तसर्थ उनले अमर बिन उमैया जमरीसँग उनीहरूलाई पठाउन दुईटा डुंगाको व्यवस्था गरिदिए । एउटा डुंगामा जाफर, अबु मुसा अश्अरी र अन्य साथीहरू सवार थिए । उनीहरू सीधै खैबर पुगेर मुहम्मदﷺको सेवामा उपस्थित भए । दोस्रो डुंगामा बालबच्चाहरू सवार थिए । उनीहरू सीधै मदिना गए ।[३]

उल्लेखित राजाको निधन तबुकको युद्धपछि हिजरी सम्बत ९ साल रजबको महिनामा भएको थियो । मुहम्मदﷺले उनको निधन भएको दिनै साथीहरूलाई खबर दिनु भएको थियो । उनीप्रति गायबाना नमाजे जनाजह पढ्नुभयो । उनको निधनपछि दोस्रो राजा उनको कायममुकाम भएर राजगद्दीमा बसेपछि मुहम्मदﷺले उसलाई पनि एउटा पत्र लेख्नुभयो तर उसले इस्लाम स्वीकार्यो वा स्वीकारेन थाहा हुन सकेन ।[४]

## २ यजिप्टको शाह मुकौकिसको नाममा पत्र

मुहम्मदﷺले एउटा पत्र जरिज बिन मत्तिको[५] नाउँमा पठाउनुभयो । उसको उपनाम मुकौकिस थियो । ऊ मिस्र र इस्कन्दरियाको राजा थियो । पत्र यस प्रकार छ :

बिस्मिल्लाहिर्रहमानिर्रहीम ।

ईशदूत मुहम्मदﷺको तर्फबाट राजा मुकौकिस किब्तीलाई ।

मार्गदर्शनको अनुकरण गर्नेहरूमाथि शान्ति होस् ।

---

१ इसा सम्बन्धी यो वाक्यले डा. हमिदुल्लाहको यस कुरालाई समर्थन गरेको छ, उनले उल्लेख गरेको पत्र अस्हमाको थियो ।

२ जादुल मआद भाग २

3 इब्ने हेशाम भाग २

४ सही मुस्लिममा उल्लेख भएको हदिसबाट यस कुराको पुष्टि गर्न सकिन्छ ।

५ यो नाम विद्वान मन्सुरीले रहमतुल लिल् आलमिनमा उल्लेख गरेका छन् । डा. हमिदुल्लाहले उसको नाम बिनयामिन बताएका छन् । डा.हमिदुल्लाहले लेखेको मुहम्मदﷺको राजनैतिक जीवन हेर्नुहोस्

म तिमीलाई इस्लामको निम्तो दिन्छु । इस्लाम स्वीकार शान्ति हुनेछ । इस्लाम स्वीकार अल्लाहले तिमीलाई दोब्बर पुण्य दिनेछन् । यदि तिमीले यसलाई अस्वीकार गऱ्यौ भने किब्तीको पाप पनि तिमीमाथि हुनेछ । हे किब्तीहरू, एउटा यस्तो कुरातर्फ आऊ जुन तिमी र हामीबीच समान छ । अर्थात अल्लाहबाहेक हामीले कसैलाई नपूजौं । उसका साथमा कसैलाई साझेदार नबनाऔं, हामीमध्ये कसैले अल्लाहबाहेक कसैलाई पालनकर्ता नसम्झौं । यदि उनले अस्वीकार गरे भने भनिदेऊ साक्षी बस हामी त मुसलमान हौं ।[१]

त्यो पत्र पुऱ्याउन हातिब बिन अबी बल्तआलाई नियुक्त गरियो । उनले मुकौकिसको दरवारमा पुगेर भने, यस धर्तीमा तिमीभन्दा पहिला यस्तो व्यक्ति थियो जसले आफुलाई सर्वश्रेष्ठ पालनकर्ता सम्झन्थ्यो । अल्लाहले उसको विकारलाई शुरुदेखि अन्तिमसम्मका मानिसहरूको लागि प्रेरणादायी बनायो । पहिला त उसको माध्यमबाट मानिसहरूसँग बदला लियो । त्यसपछि ऊसँग बदला लियो । तसर्थ अरूबाट पाठ सिक । तिम्रो विकारबाट अरुले सबक सिक्न नपरोस् ।

मुकौकिसले भन्यो : हाम्रो यो धर्म हामी छोड्न सक्दैनौं जबसम्म योभन्दा राम्रो धर्म पाउँदैनौं । हातिबले भने : हामी तिमीलाई इस्लामको निम्तो दिन्छौं जसलाई अल्लाहले सम्पूर्ण धर्ममा उत्तम बनाएका छन् । हेर, ईशदूतले मानिसहरूलाई इस्लामको निम्तो दिंदा उनको विरुद्धमा कुरैश सबैभन्दा कठोर साबित भयो । यहुदीले घोर शत्रुता अपनायो । इसाई सबैभन्दा निकट देखिए । मेरो उमेरको कसम, जसरी मुसाले इसाको बारेमा शुभसूचना दिएका थिए त्यसरी नै इसाले मुहम्मद ﷺ को बारेमा शुभसूचना दिएका छन् । हामी तिमीहरूलाई कुरआन अपनाउने आह्वान गर्दछौं जसरी तिमीहरू तौरात अपनाउनेहरूलाई इन्जील अपनाउन निम्तो दिन्छौ । जुन ईशदूतले जुन समुदायलाई भेटाउँछ त्यो समुदाय उसको अनुयायी बन्छ । त्यसकारण त्यो समुदायले त्यस ईशदूतको अनुकरण गर्नु अनिवार्य हुन्छ किनभने तिमीले उनको जमाना पाएका छौ । हामीले तिमीहरूलाई इसाई धर्मबाट रोक्दैनौं बरू त्यसैको आदेश दिन्छौं ।

मुकौकिसले भन्यो : मैले यस ईशदूतको बारेमा सोच्दा उसले कुनै नराम्रो कामको आदेश दिएको पाएको छैन र कुनै राम्रो कुराबाट रोकेको पनि छैन । उनी न त पथभ्रष्ट जादुगर हुन् न ज्योतिषी । मैले त उनमा इश्दूतत्व हुने संकेतहरू देखेको छु । उनले अप्रत्यक्षलाई प्रत्यक्ष देखाउँछन् र परोक्षको खबर दिन्छन् । म अँझै सोच्छु ।

---

१ जादुल मआद भाग ३ मा यो पत्र छ । डा. हमिदुल्लाहले जुन प्रतिलिपि प्रकाश गरेका छन् त्यसमा र मआदको यस वाक्यमा केवल दुइटा हरफको फरक छ । डा. हमिदुल्लाहद्वारा लिखित मुहम्मदको राजनैतिक जीवन हेर्नुहोस्

मुकौकिसले मुहम्मदﷺको पत्र लिएर हात्तीको दाँतबाट बनाइएको एउटा डब्बामा राखेर त्यसलाई बन्द गरी आफ्नी एक जना नोकरनीलाई दियो । त्यसपछि अरबी लेख्न सक्ने एक जना लेखनदासलाई बोलाएर मुहम्मदﷺको पत्रको उत्तर दिँदै निम्न पत्र लेखायो ।

बिस्मिल्लाहिर्रहमानिर्रहीम

मुहम्मद बिन अब्दुल्लाहको लागि मुकौकिसको तर्फबाट ।

तपाईँलाई सलाम । मैले तपाईँको पत्र पढेँ । त्यसमा तपाईँले उल्लेख गरेको कुरा र निम्तोप्रति सोचविचार गरेँ । एक जना ईशदूतको आगमन बाँकी छ भन्ने कुरा मलाई थाहा थियो । मलाई लाग्थ्यो त्यो सिरियामा उदाउने छ । मैले तपाईँको दूतको सम्मान एंव सत्कार गरेँ । तपाईँको सेवामा दुई जना नोकरनी पठाउँदै छु जसलाई किब्तीबीच ठूलो सम्मान प्राप्त छ । कपडा पनि पठाउँदै छु र तपाईँको सवारीको लागि उपहार स्वरूप एउटा खच्चर पनि । तपाईँलाई सलाम ।

मुकौकिसले त्यसमा कुनै कुरा थपेन । उसले इस्लाम स्वीकारेन । दुई जना नोकरनी मारिया र सिरिन थिए । खच्चरको नाम दलदल थियो जो मुआवियाको युगसम्म जिउँदो रह्यो ।[1]

मुहम्मदﷺले मारियालाई आफ्नो विवाह बन्धनमा राख्नुभयो । मारियाको गर्भबाट उहाँको छोरा इब्राहीम जन्मे । सिरिनलाई उहाँले हस्सान बिन साबितसँग विवाह गरिदिनुभयो ।

## ३ फारसका राजा खुस्रु प्रवेजको नाममा पत्र

मुहम्मदﷺले फारसका राजालाई पनि एउटा पत्र पठाउनु भएको थियो जुन यस प्रकार छ ।

मुहम्मदﷺको तर्फबाट फारसको महाराजलाई ।

सत्य मार्गदर्शन अनुशरण गर्नेहरूको निम्ति शान्ति छ जसले अल्लाह र ईशदूतमाथि आस्था राख्दछन् । साथै गवाही दिउन् कि अल्लाह बाहेक कोही पनि पुजनीय शक्ति छैन । ऊ एउटै छ उसको कोही साझेदार छैन । मुहम्मदﷺ उनका दूत तथा भक्त हुन् । म तिमीलाई अल्लाहतर्फ बोलाउँछु । किनभने म अल्लाहको तर्फबाट सम्पूर्ण मानवको लागि दूत हुँ । जो जीवित छ उसलाई नराम्रो कर्मको परिणामबाट सचेत गरियोस् र काफिरहरूको सामु हक प्रमाणित होस् । इस्लाम स्वीकार शान्ति पाउने छौ । यदि इन्कार गर्‍यौ भने मजुसीहरूको पाप पनि तिमीमाथि आउने छ ।

---

१ जादुल मआद भाग ३

त्यो पत्र लैजानको लागि मुहम्मदﷺले अब्दुल्लाह बिन हुजाफा सहमीलाई नियुक्त गर्नुभयो । उनले त्यो पत्र बहरैनका राष्ट्रपतिलाई दिए । बहरैनको राष्ट्रपतिले त्यो पत्र आफ्नो कुनै मान्छेद्वारा किस्रासम्म पुऱ्यायो वा सहमीलाई पठायो भन्ने कुरामा इतिहास अनविज्ञ छ । जेहोस् जब त्यो पत्र किस्रालाई पढेर सुनाइयो उसले त्यसलाई च्यातिदियो । घमण्डमा लिप्त हुँदै भन्यो : मेरा प्रजाहरूमध्ये एक जना तुच्छ व्यक्तिले आफ्नो नाम मेरो नामभन्दा पहिला लेख्ने ? मुहम्मदﷺलाई त्यस बारे जानकारी प्राप्त भएपछि उहाँले भन्नुभयो : अल्लाहले उसको राजगद्दीलाई टुक्राटुक्रा गरिदिओस् । भयो पनि मुहम्मदﷺले भने जस्तै । त्यसपछि किस्राले त्यो व्यक्ति जुन हेजाजमा छ उसकहाँ आफ्नो दुई जना बलियो व्यक्तिहरूलाई पठाएर उसलाई मकहाँ उपस्थित गर्न भनी यमनको मन्त्री बाजानलाई पत्र लेख्यो । बाजानले त्यस आदेशको पालना गर्दै दुई जना व्यक्तिलाई छान्यो । एक जना कहरमान बानवीया थियो । ऊ गणितिज्ञ र फारसी भाषी थियो । दोस्रो अख्सर खुस्रु थियो । ऊ पनि फारसी थियो ।[1] उसले उनीहरूलाई एउटा पत्र दिएर मुहम्मदﷺकहाँ पठायो । त्यस पत्रमा उहाँलाई उनीहरूको साथमा किस्राकहाँ उपस्थित हुने आदेश दिइएको थियो । उनीहरू मदिना पुगेर मुहम्मदﷺको सामुन्ने आएपछि उनीमध्ये एक जनाले भन्यो: राजा किस्राले राजा बाजानलाई एउटा पत्रमार्फत तपाईंकहाँ कुनै व्यक्ति पठाएर तपाईंलाई किस्राकहाँ उपस्थित हुन भनेका छन् । बाजानले त्यस कामको लागि मलाई तपाईंकहाँ पठाएका छन्, तपाईं मसँग हिँड्नुहोस् । ती दुवै जनाले धम्कीपूर्ण कुरा पनि गरे । उहाँले उनीहरूलाई भोलि भेट्न आदेश दिनुभयो ।

मदिनामा त्यो रोचक कुरा भइरहेकै बेला उता खुस्रु प्रवेजको घरमा उसको विरुद्ध ठूलो विद्रोहको आगो सल्क्यो र कैसरको फौजबाट फारसी फौजले निरन्तर पराजय भोगेपछि खुस्रुको छोरा शेरवीयाले आफ्नो बाउको हत्या गरी ऊ आफै राजगद्दीमा बस्यो । त्यो घटना हिजरी सम्बत ७ साल जमादिउल औवल १० तारिखको हो ।[2] मुहम्मदﷺलाई त्यस घटनाको खबर ईशवाणीद्वारा भएको थियो । जब विहान दुवै फारसी प्रतिनिधिहरू उहाँकहाँ उपस्थित भए उहाँले उनीहरूलाई त्यस घटना बारे बताउनुभयो । तपाईंले के भन्दै हुनुहुन्छ ? के अलिकति पनि होशमा हुनुहुन्छ ? हामीले तपाईंको सानो कुरालाई पनि दोषमा गनेका छौं । के तपाईंले भनेको यस कुरालाई राजा कहाँ लेखी पठाऔं ? उहाँले भन्नुभयो, ठिक छ । उसलाई मेरो यस कुराको खबर देऊ । साथै उसलाई भनिदेऊ कि मेरो धर्म र मेरो सत्ता त्यहाँसम्म पुग्नेछ जहाँसम्म किस्रा पुगेको छ र त्यो भन्दापनि अगाडि बढेर त्यो

१ तारिख इबने खल्दुन भाग २
२ फतहुल बारी भाग ८, तारिख इबने खल्दुन भाग २

ठाउँसम्म पुग्ने छ जहाँसम्म उँट तथा घोडाको पाइला पुग्न सक्दैन । तिमीहरूले उसँग भनिदेऊ, यदि उसले इस्लाम कबुल गऱ्यो भने सत्ताको मातेहतमा रहेको सबै कुरा दिइनेछ र उसलाई आफ्नो समुदायको राजा पनि बनाइनेछ । त्यसपछि उनी दुवै मदिनाबाट फर्केर बाजानकहाँ गए र उसलाई सबै विवरण बताए । केही समयपछि एउटा पत्र आयो जसमा शेरवीयाद्वारा आफ्नो बाउको हत्या गरिएको कुरा उल्लेख थियो । शेरवीयाले आफ्नो पत्रमा यो निर्देशन पनि दिएको थियो : जुन व्यक्तिको बारेमा मेरो बुबाले लेखेका थिए उसलाई दोस्रो आदेश नआउन्जेल सम्म नभड्काऊ । त्यस घटनापछि बाजान र उसका फारसी साथी जो यमनमा थिए मुसलमान भए । [१]

## ४ इटालीका राजालाई पत्र

बुखारी नामक किताबमा उल्लेखित लामो हदिसमा त्यस पत्रको नकल वर्णन गरिएको छ जुन मुहम्मदﷺले इटालीका शाह हिरक्ल्लाई लेख्नुभएको थियो ।

बिस्मिल्लाहिर्रहमानिर्रहीम ।

ईशदूत मुहम्मदﷺको तर्फबाट शाह हिरक्ल्लाई ।

मार्गदर्शनको अनुकरण गर्ने व्यक्तिलाई सलाम । इस्लाम स्वीकार शान्ति पाउने छौ । इस्लाम स्वीकार अल्लाहले तिमीलाई दोब्बर पुण्य दिने छन् । यदि तिमीले यसलाई अस्वीकार गऱ्यौ भने अरिसीहरूको पाप पनि तिमीमाथि हुनेछ । हे अहले किताब हो , एउटा यस्तो कुरातर्फ आऊ जुन तिमी र हामीबीच समान छ । त्यो के हो भने अल्लाहबाहेक हामीले कसैलाई नपूजौं । उसको साथमा कसैलाई साझेदार नबनाऔं, हामीमध्ये कसैले अल्लाहबाहेक कसैलाई पालनकर्ता नबनाऔं । अब यदि उनीले अस्वीकार गरे भने भनिदेऊ साक्षी बस हामी त मुसलमान हौं । [२]

त्यो पत्र पुऱ्याउनको लागि मुहम्मदﷺले दिह्या कलबीलाई नियुक्त गर्नुभयो । उहाँले उनलाई निर्देशन दिदै भन्नुभयो : यो पत्र बस्राका हाकिमको हवाला गरिदेऊ । उसले त्यो पत्र शाहकहाँ पुऱ्याउने छ । त्यसपछि भएको कुराको विवरण बुखारी नामक हदिसमा इब्ने अब्बास मार्फत वर्णन गरिएको छ । उनी भन्छन्, अबु सुफ्यान बिन हरबको बयान छ : हिरक्ल्ले उसलाई कुरैशको एक टोली समेत बोलायो । त्यो टोली हुदैबियाको सम्झौता अन्तर्गत मुहम्मदﷺ र कुरैशबीच तय भएको शान्तिकालमा सिरियाको मुलुकतिर व्यापार गर्न गएको थियो । त्यो टोली बैतुल

१ मुहाजिराते खुजरा भाग १, फतहुलबारी भाग ८
२ सही बुखारी भाग १

मुक्कद्दिसनिर उसकहाँ उपस्थित भयो ।[१] हिरक्ल्ले उनीहरूलाई आफ्नो दरवारमा बोलायो । त्यहाँ उसको वरिपरि इटालीका ठूलाबडा मानिसहरू पनि थिए । उसले आफ्नो प्रवक्ता र उसलाई बोलाएर भन्यो, जुन व्यक्तिले आफुलाई ईशदूत भनेको छ उसको सबैभन्दा नजिकको नाता तिमीहरूमध्ये कसको छ ? अबु सुफ्यानले भने , म नै उनको सबैभन्दा नजिकको नातेदार हुँ । हिरक्ल्ले भन्यो उसलाई मेरो नजिक गर र उसको साथीहरूलाई पनि नजिक गरी उसको पछाडि बसाल । त्यसपछि हिरक्ल्ले भन्यो, म यस व्यक्तिसँग ईशदूतको बारेमा केही प्रश्नहरू गर्छु यदि उसले झुट बोल्यो भने तिमीहरूले उसलाई झुट्टा भन । अबु सुफ्यान भन्छन् ,अल्लाहको कसम यदि मलाई झुट बोलेर बदनामी हुन्छ भन्ने डर नभएको भए म उहाँको बारेमा ऊसँग झुट बोल्थेँ ।

अबु सुफ्यान भन्छन् : हिरक्ल्ले मसँग प्रथम प्रश्न मुहम्मदﷺसँग हामीमा उनको वंश कस्तो छ भनेर सोध्यो ।

| | |
|---|---|
| मैले भनेँ : | उनी सबैभन्दा उच्च वंशका हुन् । |
| हिरक्ल्ले सोध्यो : | यस्तो कुरा पहिला तिमीहरूमध्ये कसैले भनेको थियो ? |
| मैले भनेँ : | भनेको थिएन । |
| हिरक्ल्ले सोध्यो: | के उसको बाउबाजे कोही राजा थिए ? |
| मैले भनेँ : | थिएन । |
| हिरक्ल्ले सोध्यो : | ठूलाबडाले उसलाई मानेका छन् कि साना कमजोरहरूले ? |
| मैले भनेँ : | कमजोरहरूले । |
| हिरक्ल्ले सोध्यो : | उनीहरूको संख्या बढ्दै छ कि घट्दै छ ? |
| मैले भनेँ : | बढ्दै छ । |
| हिरक्ल्ले सोध्यो : | के कुनै व्यक्ति यस धर्ममा प्रवेश गरेर असन्तुष्ट भई यसबाट निस्केको छ ? |
| मैले भनेँ : | छैन । |
| हिरक्ल्ले सोध्यो : | उसले जुन कुरा भनेको छ त्यो कुरा भन्नुभन्दा |

१ त्यतिबेला राजा अल्लाहको प्रार्थना गर्न हुम्सबाट बैतुल मक्दिस गएको थियो । किनभने अल्लाहले उसको हातबाट फारसलाई पराजय गरिदिएका थिए । सही मुस्लिम भाग २ हेर्नुहोस् । फारसीहरुले खुसरु प्रवेजको हत्या गरेपछि इटालीहरुसँग उनीहरुबाट कब्जा गरिएको जग्गा फिर्ता गर्ने सर्तमा सम्झौता गरे । त्यो सलिब पनि फिर्ता गरिदिए जसको बारेमा इसालाई फाँसी दिइएको थियो भन्ने इसाईहरुको आस्था छ । यस सम्झौतापछि राजाले सलिबलाई आफ्नो ठाउँमा स्थापित गर्न र त्यस विजयप्रति अल्लाहको प्रार्थना गर्नको लागि ६२९ इस्वी तदनुसार ७ हिजरीमा बैतुल मक्दिस आएको थियो ।

पहिला तिमीहरूले उसलाई झुट्टा ठान्थ्यो ?

मैले भनें : ठान्दैन थियौं ।

हिरक्ल्ले सोध्यो : के उसले सम्झौता उल्लंघन गर्ने गर्छ ?

मैले भने: गर्दैन । तर अहिले हामीले उसँग एक अवधिको लागि सम्झौता गरेकाछौं त्यसमा उसले के गर्छ थाहा छैन । अबु सुफ्यान भन्छन् यो वाक्यबाहेक मैले अरू केही भन्न पाइनँ ।

हिरक्ल्ले सोध्यो : के तिमीहरूले उसँग युद्ध गरेका छौ ?

मैले भनें : गरेकाछौं ।

हिरक्ल्ले सोध्यो : तिमीहरू र उनीहरूबीचको युद्ध कस्तो भयो ?

मैले भनें : हामी र उनीहरूबीचको युद्ध बराबरमा रह्यो । हामीले पनि उनीहरूलाई पराजय गर्थ्यौं र उनीहरूले पनि हामीलाई पराजित गर्थे ।

हिरक्ल्ले सोध्यो : तिमीहरूलाई कुन कुराको आदेश दिन्छ ?

मैले भनें : उसले भन्छ, केवल एक ईश्वरको पूजा गर,उसको साथमा कसैलाई साझेदार नबनाउ,तिम्रो बाउबाजेले जे भनेका थिए त्यसलाई छोडिदेऊ । उसले हामीलाई नमाज,सच्चाइ ईशभय, पवित्रता र नातेदारसँग राम्रो व्यवहार गर्ने आदेश दिन्छ ।

त्यसपछि हिरक्ल्ले आफ्नो प्रवक्तासँग अबु सुफ्यानलाई भन्न पठायो : मैले तिमीसित ईशदूतको जात सोधेको थिएँ तिमीले उसलाई सबैभन्दा उच्च जातिको बतायौ । यसको नियम पनि यस्तै हुन्छ । ईशदूतहरू आफ्नो जातिमध्ये सबैभन्दा उच्च जातका चुनिन्छन् ।

मैले सोधेँ, ती कुराहरू ऊभन्दा पहिला तिमीलाई कसैले भनेको थियो ? तिमीले थिएन भनी उत्तर दियौ । मेरो भनाई के छ भने यदि उसले भनेको कुरा पहिला कसैले भनेको भए उसले पहिला भनिएको कुरा नकल गर्दैछ भन्न हुन्थ्यो ।

मैले सोधेँ, के उसको बाउबाजे कोही राजा थिए ? तिमीले थिएनन् भनी उत्तर दियौ । मेरो विचारमा यदि उसको बाउबाजे कोही राजा भएको भए त्यो व्यक्ति आफ्नो बाउबाजेको राजको अभिलासी छ भन्न हुन्थ्यो ।

मैले सोधेँ, के उसले जुन कुरा बताएको छ त्यो कुरा भन्नुभन्दा पहिला तिमीहरूले उसलाई झूट्टा ठान्थ्यौ ? तिमीले ठान्दैन थियौं भनी उत्तर दियौ । मलाई राम्रोसँग थाहा छ जसले मानिसहरूको बारेमा झुट बोल्दैन ऊ अल्लाहको बारेमा पनि झुट बोल्न सक्दैन ।

मैले सोधेँ, ठूलाबडाले उसको अनुकरण गरेका छन् कि सामान्य मानिसहरूले ? तिमीले सामान्य मानिसहरूले भनेर उत्तर दियौ । वास्तवमा यस्तै मानिसहरू ईशदूतका अनुयायी बन्दछन् ।

मैले सोधेँ, उसको धर्ममा प्रवेश गरेपछि कुनै व्यक्ति असन्तुष्ट भएर धर्म छोडेको छ ? तिमीले भन्यौ छोडेको छैन । वास्तवमा इमानको प्रसन्नताले हृदयलाई छोएपछि उसले छोडन सक्दैन ।

मैले सोधेँ, के उसले धोका दिन्छ ? तिमीले भन्यौ दिँदैन । ईशदूतहरू यस्तै हुन्छन् । उनीहरूले धोका दिदैनन् ।

मैले सोधेँ, उसले के के कुराको आदेश दिन्छ ? तिमीले भन्यौ, उसले अल्लाहको उपासना गर्न , कसैलाई उसको साथी नठान्न, मूर्ति पूजा नगर्न र नमाज पढ्न, सत्य बोल्न, ईशभय राख्न र पवित्रताको आदेश दिन्छ ।

तिमीले जे जे बताएको छौ यदि ती कुराहरू सत्य छन् भने त्यो व्यक्ति छिटो नै म बसेको ठाउँको मालिक बन्ने छ । ईशदूत आउने वाला छ भन्ने कुरा मलाई थाहा थियो । तर त्यो ईशदूत तिमीहरूमा आउँछ भन्ने सोचेको थिएन । म उसकहाँ पुग्न सक्ने सम्भव भएको भए मैले उसँग अवश्य भेट गर्थें । उसको साथमा भएको भए उसको खुट्टा धुन्थेँ ।

त्यसपछि हिरक्ल्ले मुहम्मदﷺको पत्र मागेर पढ्यो । पत्र पढिसकेपछि त्यहाँ स्वरहरू गुन्जिए, हुहल्ला भयो । हिरक्ल्ले हामीहरूलाई बाहिर निकाल्ने आदेश दियो र हामीलाई बाहिर निस्कन भनियो । हामीलाई बाहिर निकालिएपछि मैले आफ्नो साथीसँग भनेँ : अबु कब्शाको[1] छोराको मामिला धेरै गम्भीर हुँदै छ । उसँग इटालीको राजा बनु अस्फर[2] पनि डराउँछ । त्यसपछि मलाई पनि मुहम्मदﷺको धर्म नै विजय हुनेछ भन्ने विश्वास हुन थाल्यो । अल्लाहले मभित्र पनि इस्लामको ज्योति बालिदिए ।[3]

राजामाथि मुहम्मदﷺको पत्रको जुन प्रभाव पर्‍यो त्यसलाई अबु सुफ्यानले पनि देखे । मुहम्मदﷺको त्यस पत्रले गर्दा राजाले मुहम्मदﷺको पत्र पुर्‍याउने व्यक्ति

---

१ अबु कब्शाको छोरा भनेर अल्लाहका संदेष्टालाई भनिएको छ । अबु कब्शा रज्ज बिन गालिबको उपनाम हो । ऊ वहब बिन अब्द मनाफको बाजे थियो । वहब अल्लाहका संदेष्टाका बाजे थिए । अबु कब्शा बहुदेववादी थियो । ऊ सिरिया गएर इसाइ बनेको थियो । जब अल्लाहका संदेष्टाले कुरैशको धर्मको विरोध गर्नुभयो र सत्य धर्म लिएर आउनुभयो अनि उहाँलाई हिंसा गर्न उनीहरुले यो नाम प्रयोग गर्न थाले । बैहकीको दलायल नुबुवत भाग १, लाबीको सिरत नवबीया हेर्नुहोस् । जे होस् अबु कब्शा साधारण व्यक्ति हो । अरबको चलन अनुसार कुनै व्यक्तिको अपमान गर्नको लागि उसको वंशको साधारण व्यक्तिको नामबाट उसलाई पुकारिन्थ्यो ।

२ बनु अस्फर अर्थात अस्फरका संतान,अस्फरको अर्थ हुन्छ पहेलो, इटालियनलाई बनु अस्फर भनिन्छ । किनभने इटालीको जुन व्यक्तिबाट इटालियन वंश चल्यो उसको उपनाम अस्फर थियो ।

3 सही बुखारी भाग १, मुस्लिम भाग २

दिह्या कल्बीलाई धनसम्पत्ति तथा उपहार प्रदान गऱ्यो । तर दिह्या कल्बीले ती उपहार लिएर फर्कँदा हसमी नामक ठाउँमा जुजाम कबिलाका केही व्यक्तिहरूले उनीमाथि डकेती गरी सबै मालसामान लुटेर लगे । दिह्या कल्बी मदिना पुगेर आफ्नो घर नगई सीधै मुहम्मदﷺको सेवामा हाजिर भए र आफ्नो घट्ना बारे सुनाए । सबै कुरा सुनिसकेपछि मुहम्मदﷺले जैद बिन हारिसाको नेतृत्वमा पाँच सय साथीहरूको एउटा टोली हसमीतर्फ पठाउनुभयो । जैदले जुजाम कबिलामाथि अचानक आक्रमण गरी उनीहरूको अत्यधिक मान्छेहरूको हत्या गरिदिए । उनीहरूको जनावर र महिलाहरूलाई कब्जा गरी ल्याए । जनावरमध्ये एक हजार उँट र पाँच हजार बाखा थिए । बन्दीहरूमा एक सय महिला र बच्चाहरू थिए ।

जुजाम कबिलासँग पहिलादेखि नै सम्झौता हुँदै आएको थियो । त्यसकारण कबिलाको एक जना सरदार जैद बिन रेफाअ जुजामीले मुहम्मदﷺकहाँ आएर आपत्ति व्यक्त गर्न थाले । जैद बिन रेफाअले त्यस कबिलाका केही व्यक्तिहरू समेत इस्लाम स्वीकारिसकेका थिए । दिह्यामाथि डकेती हुँदा उनले उनको मदत पनि गरेका थिए । त्यसकारण मुहम्मदﷺले उनको दुखेसोलाई स्वीकार्दै मालसमान तथा बन्दीहरूलाई फर्काइदिनुभयो ।

युद्ध बारे लेख्ने लेखकहरूले यस घटनालाई हुदैबीया सम्झौताअघिको घटना बताएका छन् । तर यो ठूलो गल्ती हो । किनभने राजाहरूकहाँ पत्र पठाउने काम हुदैबीया सम्झौतापछि भएको थियो । तसर्थ विद्वान इबने कैयमले त्यो घटना हुदैबीया सम्झौतापछिको हो भनी उल्लेख गरेका छन् ।[१]

## ५ मुन्जिर बिन सावीलाई पत्र

मोहम्मदﷺले बहरैनका हाकिम मुन्जिर बिन सावीलाई पत्र लेखेर उसलाई पनि इस्लामको निम्तो दिनुभयो । उहाँले त्यो पत्र अला बिन अल हजरमीको हात पठाउनुभयो । प्रतिउत्तरमा मुन्जिरले मुहम्मदﷺलाई लेख्यो ।

हे ईशदूत, मैले तपाईंको पत्र बहरैनवासीलाई पढेर सुनाएँ । केही मानिसहरूले इस्लामलाई राम्रो मानेर इस्लाममा प्रवेश गरे । केहीले नराम्रो माने । मेरो मुलुकमा यहुदी र मजुसी पनि छन् । तसर्थ त्यस बारेमा आफ्नो आदेश जारी गर्नुहोस् । त्यसको जवाफमा मुहम्मदﷺले निम्न पत्र लेख्नुभयो :

बिस्मिल्लाहिर्रहमानिर्रहिम

मुहम्मदﷺको तर्फबाट मुन्जिर बिन सावीलाई ।



१ जादुल माआद भाग २, फुट नोट तलकिहुल फहुम

तिमीलाई सलाम छ । साथै त्यो अल्लाहको प्रशंसा गर्दछु जसबाहेक कोही पनि पूजनीय छैन । म गवाही दिन्छु कि मुहम्मद उसको उपासक तथा दूत हुन् ।

महोदय,

म तिमीलाई अल्लाहको स्मरण गराउँछु । जो व्यक्तिले भलाइ गर्छ र अर्काको राम्रो चाहन्छ त्यो उसले त्यो आफ्नो लागि गरेको हुन्छ । मैले पठाएको दूतको जसले आज्ञा पालना गऱ्यो उसले मेरो आदेशको पालना गऱ्यो, जसले उनीहरूसँग राम्रो व्यवहार गऱ्यो उसले मसँग राम्रो व्यवहार गऱ्यो । मेरो दुतले तिम्रो प्रशंसा गरेको छ र मैले तिम्रो समुदायको बारेमा तिम्रो सिफारिश कबुल गरेको छु । तसर्थ मुसलमानहरूले जुन हालतमा इमान ल्याएका छन् उनीहरूलाई त्यही हालतमा छोडिदेऊ । मैले पाप गर्नेहरूलाई माफ गरेको छु तसर्थ यसलाई स्वीकार । जबसम्म सुधारात्मक कार्य एवं सीधा बाटो अपनाउने छौ हामीले तिम्रो पदबाट तिमीलाई पदच्युत गर्ने छैनौं र जो यहुदी वा मजुसीको धर्ममा रहन्छन् उनीहरूमाथि कर लाग्नेछ ।[१]

## ६ यमामहको हाकिम हुजाह बिन अलीलाई पत्र

मोहम्मदﷺले यमामहको हाकिम हुजाह बिन अलीलाई निम्नलिखित पत्र लेख्नुभयो ।

बिस्मिल्लाहिर्रहमानिर्रहीम

मुहम्मदﷺको तर्फबाट हुजाह बिन अलीको नाममा ।

सत्य मार्गदर्शन स्वीकार्नेलाई सलाम । तिमीलाई थाहा हुनु पर्छ मेरो धर्म घोडा तथा उँटको पाइला पुग्ने अन्तिम सिमानासम्म विजय हुनेछ । तसर्थ इस्लाम स्वीकार शान्तिमा रहने छौ । तिम्रो मातेहतमा जे जे छ त्यसलाई यथास्थितिमा छाडिदिने छु ।

त्यो पत्र पुऱ्याउनको लागि सलित बिन अमर आमरीलाई दूतको रूपमा चुनियो । सलित बिन अमर आमरी छाप लागेको त्यो पत्र लिएर हुजाह बिन अलीकहाँ गए । उसले उनको स्वागत तथा सत्कार गऱ्यो । सलितले उसलाई पत्र पढेर सुनाएपछि उसले मध्यम स्तरको जवाफ दिँदै मुहम्मदﷺलाई लेख्यो : तपाईंले जुन कुराको लागि निम्तो दिँदै हुनुहुन्छ त्यसको राम्रो पक्ष बारे कुनै प्रश्न छैन । अरबमाथि मेरो पकड छ । त्यसकारण कुनै काम मेरो जिम्मा लगाउनुहोस् । म तपाईंको अनुकरण गर्छु । उसले सलितलाई उपहार पनि दियो । उनलाई हजरमा बनेको कपडा

---

१ जादुल मआद भाग ३, यो पत्र निकट भुतकालमा प्राप्त भएको हो । डा. हमिदुल्लाहले यस पत्रको प्रतिलिपि प्रकाश गरेका छन् । जादुल मआदको वाक्य र यस प्रतिलिपिमा केवल एक शब्दको भिन्नता छ ।

पनि दियो । सलित ती उपहार लिई फर्केर मुहम्मदﷺको सेवामा उपस्थित भएपछि सम्पूर्ण विवरण बताए । मुहम्मदﷺले उसको पत्र पढेर भन्नुभयो : उसले मसँग जमिनको एउटा टुक्रा मागे पनि म उसलाई दिन्न । ऊ आफै पनि सत्यानाश हुनेछ र जे उसको हातमा छ त्यो पनि नाश हुनेछ । मुहम्मदﷺ मक्कामा विजय हासिल गरेर फर्केपछि फरिश्ता जिब्रइलले हुजाहको मृत्यु भएको छ भनी मुहम्मदﷺलाई खबर दिए ।

मुहम्मदﷺले भन्नुभयो : सुन, यमामहमा एक जना झुट्टो व्यक्ति पैदा हुनेवाला छ जसको मपछि हत्या गरिने छ । एक जनाले सोध्यो ,हे ईशदूत कसले उसको हत्या गर्नेछ ? उहाँले भन्नुभयो : तिमी र तिम्रा साथीहरूले । वास्तवमा भयो पनि त्यस्तै ।[१]

## ७ पेरिसका हाकिम हारिस बिन अबी शमर गस्सानीको नाम पत्र

मुहम्मदﷺको तर्फबाट हारिस बिन अबी शमर गस्सानीलाई ।

बिस्मिल्लाहिर्रहमानिर्रहीम ।

सत्य मार्गदर्शन अनुशरण गर्नेहरू, इमान ल्याउनेहरू र स्वीकार्नेहरूको निम्ति शान्ति छ । म आह्वान गर्छु, अल्लाहमाथि आस्था राख जो एउटै छ र जसको कोही साझेदार छैन तिम्रो राज स्थिर रहने छ ।

त्यो पत्र असद बिन खुजैमा कबिलासँग सम्बन्धित एक जना सहाबी शुजाअ बिन वहबको हातबाट पठाइयो । जब उनले त्यो पत्र हारिसलाई दिए उसले भन्यो : मेरो राज कसले खोस्न सक्छ ? म उमाथि यथाशीग्रह आक्रमण गर्नेवाला छु । उसले इस्लाम स्वीकारेन [२] उल्टै कैसरसँग मुहम्मदﷺविरुद्ध युद्ध गर्ने अनूमति माग्यो । तर उसले उसलाई उसको सोचदेखि टाढा राख्यो । त्यसपछि हारिसले शुजाअ बिन वहबलाई लत्ताकपडा तथा बाटो खर्च दिएर राम्रोसँग फर्कायो ।

## ८ शाह ओम्मानलाई पत्र

मोहम्मदﷺले एउटा पत्र शाह अम्मान जैफर र उसका भाइ अब्दको नाममा लेख्नुभयो । उनीहरूको बाबुको नाम जलन्दी थियो । पत्रको विषय वस्तु यसप्रकार छ :

मुहम्मद बिन अब्दुल्लाहको तर्फबाट जलन्दीका दुवै छोरा जैफर र अब्दको नाम

बिस्मिल्लाहिर्रहमानिर्रहीम ।

सत्य मार्गदर्शन अनुशरण गर्नेहरूको निम्ति शान्ति । म तिमी दुवैलाई इस्लामको निम्तो दिन्छु । इस्लाम स्वीकार शान्तिमा रहने छौ । किनभने म अल्लाहको

---

१ जादुल मआद भाग ३

२ जादुल मआद भाग ३, मुहाजिरात तारिखुल उमम् भाग १

तर्फबाट सम्पूर्ण मानवको लागि ईशदूत हुँ । तसर्थ जो जीवित छन् उनीहरूलाई नराम्रो कर्मको परिणामबाट सचेत गर्दछु र काफिरहरूको सामुन्ने हक प्रमाणित गर्दछु । यदि तिमी दुवैले इस्लाम स्वीकार गर्‍यौ भने तिमी दुवैलाई हाकिम बनाइदिने छु । यदि इस्लाम स्वीकारेनौ भने तिमीहरूको राज खोसिनेछ । तिमीहरूको भूमिमा घोडाको आक्रमण हुने छ । साथै तिमीहरूको राजमा मेरो ईशदूतत्व विजय हुने छ ।

त्यो पत्र लिएर जानको लागि अमर बिन आसलाई डाकियाको हैसियतमा चुनियो । उनी भन्छन् म पत्र लिएर अम्मान पुगे । अब्दसँग भेट गरेँ । दुवै भाइमध्ये ऊ नम्र तथा दूरदर्शी थियो ।

मैले भनेँ : म तिमी र तिम्रो भाइकहाँ मुहम्मदﷺको डाकिया बनेर आएको छु ।

उसले भन्यो : मेरो दाइ उमेर र राजपदमा मभन्दा माथि छन् । त्यसकारण तिम्रो पत्र कबुल गर्न म तिमीलाई उनकहाँ पुर्‍याइदिन्छु ।

उसले सोध्यो : तिमीहरूले के कुराको निम्तो दिन्छौ ?

मैले भनेँ : हामीहरूले एक ईश्वरमाथि आस्था राख्ने निम्तो दिन्छौँ । उसको कुनै पनि साझेदार छैन । उबाहेक जसको पूजा गरिएको छ त्यो छोडिदिनु । साथै यो कुरा पनि स्वीकार्नु कि मुहम्मदﷺ ईशदूत तथा उपासक हुन् ।

अब्दले भन्यो : हे अमर, तिमी आफ्नो समुदायको सरदारका छोरा हौ । तिम्रो बुबाले के गरे ? हामीले उनको कुरा मान्नु पर्छ ।

मैले भनेँ : उनको त मुहम्मदﷺमाथि आस्था राख्नुभन्दा पहिला नै निधन भयो । तर उनले इस्लाम कबुल गरेका भए र मुहम्मदﷺलाई सत्य ठानेका भए हुने थियो । म पनि स्वयम उनको कुरा मान्थे तर अल्लाहले मलाई इस्लाम मार्गदर्शन प्रदान गरेका छन्

अब्दले सोध्यो : तिमीले उनलाई कहिले स्वीकारेका हौ ?

मैले भनेँ : केही दिनअघि ।

उसले सोध्यो : तिमीले कहाँ इस्लाम कबुल गर्‍यौ ?

मैले भनेँ : शाह नजाशीकहाँ र उनी पनि मुसलमान भएका छन् ।

अब्दले सोध्यो : उसको प्रजाले राजतन्त्रको बारेमा के गर्‍यो ?

मैले भनेँ : यथावतै राखेका छन् र उनको अनुकरण गरेका छन् ।

उसले सोध्यो : पादरीका गुरुहरू र सन्यासीहरूले पनि उसको अनुकरण गरेका छन् ?

मैले भनेँ : अँ ।

अब्दले भन्यो : हे अम्र,के भन्दै छौ तिमीले ? सुन मानिसको बानीहरूमध्ये झुटभन्दा खराप बानी अरू कुनै हुन सक्दैन ।

मैले भनें : मैले झुट बोलेको छैन र हामीले यसलाई जायज पनि ठान्दैनौं ।
अब्दले भन्यो : मेरो विचारमा हिरक्ल्लाई नजाशीले इस्लाम स्वीकारेको थाहा छैन ।
मैले भनें : किन छैन ?
अब्दले सोध्यो : तिमीलाई त्यो कुरा कसरी जानकारी भयो ?
मैले भनें : नजाशीले हिरक्ल्लाई कर दिन्थे तर जब उनले इस्लाम कबुल गरे र मुहम्मदﷺलाई ईशदूत माने तब उनले भने : अल्लाहको कसम यदि उसले मसँग एक पैसा पनि माग्यो भने म दिन्नँ । जब त्यस बारे हिरक्ल्लाई थाहा भयो उसको भाइ यनाकले भन्यो : के तिमीले आफ्नो नोकरलाई त्यतिकै छोडिदिन्छौ जसले तिमीलाई कर तिरेको छैन ? तिम्रो धर्मलाई नमानी अर्काको धर्म मानेको छ ? हिरक्ल्ले भन्यो : जसले जुन धर्म मानेको छ उसले आफ्नो लागि मानेको छ । त्यसकारण मैले उसलाई के गर्न सक्छु र ? अल्लाहको कसम , यदि मलाई आफ्नो राजको लोभ नभएको भए मैले पनि उसले मानेको धर्म मान्थेँ ।
अब्दले भन्यो : अमर, तिमीले के भन्दै छौ ?
मैले भनें : अल्लाहको कसम मैले तिमीसँग सत्य कुरा भन्दैछु ।
अब्दले भन्यो : ठीक छ मलाई बताउ उनले के कुराको आदेश दिन्छन् र कुन कुराबाट रोक्छन् ?
मैले भनें : उनले अल्लाहको आदेशको पालना गर्न भन्छन् र उसको अवज्ञाबाट रोक्दछन् । उपकार तथा भाइचाराको आदेश दिन्छन्, अत्याचार बलात्कार,मधपान र ढुंगामूर्ति र सलिबको पूजा गर्नबाट रोक्दछन् ।
अब्दले भन्यो : त्यो त अति राम्रो कुरा हो जसतर्फ उनले बोलाएका छन् । यदि मेरो दाइले पनि त्यो कुरा स्वीकारे भने हामीहरू मुहम्मदﷺकहाँ गई इमान ल्याउने छौं र उनलाई सत्य ठान्ने छौं । तर मेरो दाइलाई ती कुराहरूभन्दा बढी आफ्नो राजको लोभ छ । त्यसकारण उसले त्यसलाई छोड्न सक्दैन ।
मैले भनें : यदि उनले इस्लाम कबुल गरे भने ईशदूतले उनलाई उनको राज यथावतै राखिदिने छन् र समुदायका धनीहरूबाट दानदक्षिणा लिएर उनीहरूको गरिबमा बाँटिदिने छन् ।
अब्दले भन्यो : यो त धेरै राम्रो कुरा हो, सदका भनेको के हो भन त ?
उत्तरमा मैले भनें: विभिन्न किसिमको मालसम्पत्तिमा मुहम्मदﷺले निर्धारण गर्नुभएको दानदक्षिणाको विवरण बताएँ । जब उँटको बारेमा कुरा चल्यो अनि उसले भन्यो, हे अमर हाम्रा जनावरहरूबाट पनि दान लिइने छ जो आफै चर्छन्?
मैले भनें : अँ
अब्दले भन्यो : अल्लाहको कसम,मेरो प्रजाले आफ्नो महान मुलुक र अत्यधिक जनसंख्या हुँदा हुँदै पनि यो धर्म मान्लान् भन्ने लागेको थिएन ।

अमर बिन आस भन्छन् ,म उसको स्वागत कक्षमा केही दिन बसेँ । उसले आफ्नो दाइकहाँ गएर मेरो सम्पूर्ण कुरा सुनाउने गर्थ्यो । एक दिन उसले मलाई बोलायो । म भित्र प्रवेश भएँ । रजौटाहरूले मेरो पाखुरा समातेका थिए । उसले उनीहरूलाई पाखुरा छोड्न भन्यो । मलाई छोडियो । म बस्न चाहेँ तर रजौटाहरूले बस्न दिएनन् । मैले राजातिर हेरेपछि उसले भन्यो : आफ्नो कुरा भन । मैले बन्द पत्र उसलाई दिएँ । उसले पत्र खोलेर पढ्यो । पत्र पूरा पढिसकेपछि उसले त्यो पत्र आफ्नो भाइलाई दियो । भाइले पनि पत्र पढ्यो । तर राजाभन्दा उसको भाइ नरम दिल भएको मलाई लाग्यो ।

राजाले सोध्यो : कुरैशले के गऱ्यो ?

मैले भनेँ : सबैले उनको अनुसरण गरे । कुनैले धर्मप्रति लगाव भएको कारण र कुनैले लडाइँबाट पराजित भएको कारण ।

राजाले सोध्यो : उनको साथमा कस्ता मानिसहरू छन् ?

मैले भनेँ : सबै छन् । उनीहरूले स्वइच्छाले इस्लाम स्वीकारेका छन् र त्यसलाई अन्य सम्पूर्ण कुरामाथि प्राथमिकता दिएका छन् । उनीहरूलाई अल्लाहको मार्गदर्शन र आफ्नो विवेकद्वारा आफुहरू पथभ्रष्ट भएको कुरा थाहा भयो । अब यस क्षेत्रमा तपाईं बाहेक अरू कोही बाँकी छ भन्ने मलाई लाग्दैन । अब यदि तपाईंले इस्लाम स्वीकार गर्नु भएन र मुहम्मदﷺलाई ईशदूत मान्नु भएन भने घोडसवारहरूले तपाईंहरूलाई किचेर थिचोमिचो गरिदिने छ र तपाईंको प्रतिष्ठालाई अपमान गरिदिने छ । तसर्थ इस्लाम स्वीकार गर्नुहोस् शान्ति पाउनु हुनेछ । ईशदूतले तपाईंलाई तपाईंको समुदायको हाकिम बनाइदिने छन् र तपाईंमाथि न कुनै घोडसवारले आक्रमण गर्नेछ न पैदल लस्करले ।

राजाले भन्यो : आज छोड, भोलि आऊ ।

त्यसपछि म उसको भाइकहाँ गएँ ।

उसले भन्यो : अमर, मलाई आसा छ यदि राजको लोभ प्रबल भएन भने उसले इस्लाम स्वीकार्ने छ । दोस्रो दिन फेरि म राजाकहाँ गएँ तर उसले भित्र प्रवेश गर्ने अनुमति दिएन । तसर्थ म उसको भाइकहाँ फर्कें र राजासम्म मेरो पहुँच हुन सकेन भनेर भनेँ । उसको भाइले मलाई ऊ भएको ठाउँमा पुऱ्यायो ।

उसले भन्यो : मैले तिम्रो निम्तोमा विचार गरेँ । यदि मैले आफ्नो राज यस्तो व्यक्तिलाई सुम्पिएँ जसको घोडसवारहरू यहाँसम्म पुग्न सकेनन् भने म अरबमा सबैभन्दा निर्बल ठानिने छु । यदि घोडसवार यहाँ पुग्यो भने पनि उनीहरूले यस्तो चेत पाउने छन् कि यसभन्दा अघि कहिल्यै पाएका थिएनन् होला ।

मैले भनेँ : ठिक छ, म भोलि जाँदैछु ।

उसलाई मेरो फिर्ती बारे विश्वास भएपछि उसले आफ्नो भाइसँग एकान्तमा कुरा गर्दै भन्यो : त्यो ईशदूत जसले मानिसहरूमाथि विजय हासिल गरेको छ उसको दाँजोमा हाम्रो कुनै अस्तित्व छैन । जुन व्यक्तिहरूलाई उसले यो संदेश पठाएको छ उनीहरूले त्यसलाई स्वीकार गरेका छन् ।

दोस्रो दिन विहानै मलाई बोलाइयो र उनी दुवै दाजुभाइले इस्लाम कबुल गरे र मुहम्मदﷺलाई ईशदूत माने । दानदक्षिणा उठाउनेहरू र आम मानिसहरूबीच निर्णय गर्न मलाई स्वतन्त्रता दिए र मेरो विरोध गर्नेहरूको विरुद्ध सहयोगी बने ।[१]

त्यस घटनाको संदर्भलाई हेर्ने हो भने अन्य राजाहरूभन्दा ती दुवै राजाकहाँ पत्र ढिलो गएको देखिन्छ । त्यो घटना मक्का विजय भए पछिको हो ।

ती पत्रद्वारा मुहम्मदﷺले आफ्नो संदेश सबै राजाहरूकहाँ पुऱ्याउनुभयो । त्यसको प्रतिउत्तरमा कसैले इस्लाम स्वीकारे भने कसैले इन्कार पनि गरे । तर इन्कारीहरूको पनि ध्यान त्यसतर्फ अवश्य केन्द्रित भयो । उनीहरूको सामुन्ने उहाँको धर्म र नाम परिचित भयो ।

१ जादुल मआद भाग ३

# हुदैबीया सम्झौतापछि सशस्त्र संघर्ष

## गाबा वा जिल करदको युद्ध

त्यो संघर्ष वास्तवमा बनु फजारहको एउटा समूहलाई गिरिफतार गर्नको लागि भएको थियो जसले मुहम्मदﷺको जनावरलाई डकेती गरेर लगेको थियो ।

हुदैबीया सम्झौतापछि र खैबरको युद्धअघिको त्यो सबैभन्दा पहिलो युद्ध थियो जसको सामना मुहम्मदﷺले गर्नु भएको थियो । विद्वान बुखारीले त्यस सम्बन्धमा एक अलग अध्याय कायम गरी त्यो युद्धलाई खैबरको युद्धभन्दा तीन दिन पहिला मात्र भएको बताएका छन् । यै कुरा त्यस युद्धका अग्रसर सलमा बिन अक्वअबाट पनि वर्णन गरिएको छ । उनको भनाइ बुखारी नामक हदिसमा हेर्न सकिन्छ । अधिकांश योद्धाहरू भन्छन्: त्यो युद्ध हुदैबीया सम्झौता अघिको हो । तर अधिकांश योद्धाको कुराभन्दा बुखारीमा वर्णन गरिएको कुरा नै बढी सही छ ।[१]

त्यस युद्धका नायक सलमा बिन अक्वअमार्फत जुन कुरा वर्णन गरिएको छ त्यसको संक्षिप्त विवरण यस प्रकार छ । मुहम्मदﷺले आफ्नो सवारीका उँटहरू चराउन आफ्नो गुलाम रबाहलाई पठाउनुभयो । म पनि अबु तलहाको घोडा समेत उसको साथमा थिएँ । एकाविहानै अचानक अब्दुर्रहमान फुज्जारीले उँटमाथि छापा मारेर उँट लग्यो र गोठालेको पनि हत्या गर्‍यो । मैले रबाहलाई भनेँ, यो घोडा लिएर अबु तलहाकहाँ पुर्‍याइदेऊ र मुहम्मदﷺलाई यस बारे खबर पनि देऊ । स्वयम मैले एउटा डाँडोमा उभिएर मदिनातिर हेरेँ । तीन चोटि गुहारेँ, एकाविहानै आक्रमण भयो ! आक्रमण भयो !! त्यसपछि म आक्रमणकारीको पिछा गर्न निस्कँे । उनीहरूलाई वाण हान्दै भनेँ । म अक्वअको छोरा हुँ । आजको दिन दूध खानेहरूको दिन हो । अर्थात कसले आमाको दूध खाएको छ भन्ने कुरा थाहा हुनेछ ।

सलमा बिन अक्वअ भन्छन् : मैले उनीहरूलाई निरन्तर वाण हानेर अंगछेद गरिरहेँ । कुनै सवार फर्केर मतर्फ आउँदा म रूखको आड लिएर बस्थेँ र उसलाई वाण हानेर घाइते बनाइदिन्थेँ । उनीहरू पहाडको गोरेटो बाटोमा आएपछि म पहाडमा चढेँ । त्यसपछि उनीहरूमाथि ढुंगा बर्षाउन थालेँ । यसरी निरन्तर मैले उनीहरूको पिछा गरिरहेँ र मुहम्मदﷺको सबै उँट आफ्नो नियन्त्रणमा लिएँ । उनीहरूले ती उँट मेरो निम्ति छाडिदिए तर पनि मैले उनीहरूको पिछा गर्न छाडिनँ । उनीहरूमाथि वाणको वर्षा गरिरहेँ र उनीहरूले आफ्नो भारी हलुका गर्न भारीबाट तीसभन्दा बढी बर्को, र तीसभन्दा बढी भाला फ्याँकिदिए । उनीहरूले फ्याँकेको त्यो

१ जादुल मआद भाग २ । सही बुखारी भाग २,सही मुस्लिम भाग २, फतहुलबारी भाग ७, अबु सईदमाफर्त वर्णन गरिएको हदिसले यस युद्धलाई हुदैबियाभन्दा पछि भएको प्रमाणित गरेको छ । सही मुस्लिम पाठ : हज हदिस नं ४७५

मालसामान शत्रुबाट खोसिएको माल हो भन्ने कुरा मुहम्मदﷺ र साथीहरूले चिनुन् भनेर मालसामान फ्याँकेको ठाउँमा चिनारीको लागि केही ढुंगा थुपारिदिन्थेँ । त्यसपछि उनीहरू एउटा उपत्यकाको साँघुरो घुम्तिमा बसेर दिउँसोको खाना खान लागे । म पनि डाँडोको टुप्पोमा गएर बसेँ । मलाई देखेर उनीहरूको तर्फबाट चार जना व्यक्ति म भएतिर आए । उनीहरू मेरो कुरा सुन्न सक्ने ठाउँसम्म आएपछि मैले भनेँ : के तिमीहरूले मलाई चिन्छौ ? म सलमा बिन अक्वअ हुँ । तिमीमध्ये जसको मैले पिछा गर्ने छु त्यसलाई अवश्य भेटाउने छु तर तिमीमध्ये कसैले मेरो पिछा गऱ्यो भने मलाई भेटाउन सक्दैन । त्यो कुरा सुनेर उनीहरू चारै जना फर्के । म आफ्नो ठाउँमा बसिरहेँ । त्यसपछि मैले मुहम्मदﷺको सवारहरूलाई देखेँ । उनीहरू बोटविरुवाको घारीबाट आउँदै थिए । सबैभन्दा अगाडि अख्रम थिए । उनको पछाडि अबु कतादाह र कतादाहको पछाडि मेक्दाद बिन अस्वद थिए । लडाइँको मैदानमा पुगेपछि अब्दुर्रहमान र अख्रमबीच टक्कर भयो । अख्रमले अब्दुर्रहमानको घोडालाई घाइते बनाइदिए तर अब्दुर्रहमानले भाला हानेर अख्रमलाई शहिद गरी आफ्नो घोडा भएतिर गयो । त्यसै बेला अबु कतादह अब्दुर्रहमानको सामुन्ने गएर उसलाई भाला हानेर घाइते बनाइदिए । त्यसपछि बाँकी अन्य आक्रमणकारीहरू पनि भागे । हामीहरूले उनीहरूलाई लखेट्यौँ । म उफ्रदै दगुरिरहेको थिएँ । घाम अस्ताउनुभन्दा केही अघि उनीहरू एउटा उपत्यकातर्फ लागे जहाँ करद नामक एउटा पानीको मूल थियो । उनीहरू तिर्खाएका थिए र पानी खान चाहन्थे तर मैले उनीहरूलाई भगाएँ र एक थोपा पानी खान पनि दिइनँ । मुहम्मदﷺ र साथीहरू घाम अस्ताएपछि मकहाँ आइपुगे । मैले भनेँ : हे मुहम्मदﷺ उनीहरू तिर्खाएका छन् यदि तपाईंले मेरो साथमा सय जना साथीहरूलाई पठाउनुभयो भने मैले उनीहरूको जनावर पनि खोसेर ल्याउन सक्छु र उनीहरूको टाउको काटेर तपाईंको सेवामा हाजिर गरिदिन सक्छु । उहाँले भन्नुभयो : हे अक्वअका छोरा यदि तिमी होसमा छौ भने अब नम्र बन । त्यसपछि मुहम्मदﷺले भन्नुभयो : त्यति बेला बनु गत्फानमा उनीहरूको सत्कार गरिँदै छ । त्यस युद्धको बारेमा मुहम्मदﷺले विवेचना गर्दै भन्नुभयो : हाम्रा योद्धाहरूमा आजको सबैभन्दा उत्तम घोडचढी योद्धा अबु कतादह र पैदल योद्धा सल्मा हुन् । उहाँले मलाई दुई भाग दिनुभयो एक भाग पैदल योद्धा र अर्को घोडचढी योद्धाको भाग । मदिना फर्कँदा उहाँले मलाई आफ्नो अज्बा नामी उँटमा आफ्नो पछाडि सवार गर्नुभयो । त्यस युद्धभर मुहम्मदﷺले मदिनाको व्यवस्थापनको जिम्मेवारी इब्ने उम्मे मक्तुमलाई सुम्पिनु भएको थियो र त्यस युद्धको झण्डा मेक्दाद बिन अमरलाई दिनुभएको थियो ।[१]

---

१ जादुल मआद भाग २ । सही बुखारी भाग २, सही मुस्लिम भाग २, फतहुलबारी भाग ७, अबु सईदमाफर्त वर्णन गरिएको हदिसले यस युद्धलाई हुदैबियाभन्दा पछि भएको प्रमाणित गरेको छ । सही मुस्लिम पाठ : हज हदिस नं ४७५

# खैबर र वादीउलकुराको युद्ध मोहर्रम ७ हिजरी

खैबर मदिनाको उत्तरी भागमा मदिनादेखि १७० किलो मिटर दुरीमा अवस्थित एउटा ठूलो शहर थियो । त्यहाँ किल्ला र खेतीबारी पनि थियो । अहिले त्यो ठाउँमा बस्ती बसेको छ । त्यहाँको हावा पानी त्यति स्वच्छ छैन ।

## युद्धको कारण

हुदैबिया सम्झौतापछि मुहम्मदﷺ अहजाब युद्धका तीन विरोधी शक्तिमध्ये सबैभन्दा बलियो शक्ति कुरैशबाट निश्चिन्त हुनुभयो अनि बाँकी दुई शक्ति यहुदी र नजदका कबिलासँग पनि निर्णायक कुरा गर्न चाहनुभयो । त्यसको उद्देश्य चारैतर्फ पूर्ण शान्ति छाओस् र सबै क्षेत्रमा अमन चैन होस् भन्ने थियो । साथै मुसलमानहरू निरन्तर रुपमा चलेको रक्तपात युद्धबाट मुक्त भएर केवल अल्लाहको संदेश प्रचार प्रसारमा लागुन् ।

किनभने खैबर षड्यन्त्रकारी तथा धोकेबाजहरूको गढ, शैनिक ट्रेनिङ्ग केन्द्र र लडाइँ तथा युद्धको आगो भड्काउने एउटा अड्डा थियो । त्यसकारण त्यो ठाउँ मुसलमानको नजरको पहिलो सुचीमा थियो ।

के खैबरको परिस्थिति वास्तवमा यस्तै थियो वा केही भिन्न ? यस सम्बन्धमा बिर्सन नहुने कुरा के हो भने खैबरवासीले नै खन्दकको युद्धमा बहुदेववादीको सम्पूर्ण समूहलाई मुसलमानमाथि आक्रमण गर्न ल्याएका थिए । उनीहरूले बनु कुरैजालाई पनि षडयन्त्र गर्न उत्तेजित गरेका थिए । उनीहरूले इस्लामी समाजको पाचौं सूचीमा रहेका मुनाफिक र खन्दक युद्धका तेस्रो समूह गत्फान तथा पाखे अरबीहरुसँग निरन्तर सम्बन्ध बनाउनुका साथै आफुहरूले पनि युद्धको लागि तयारी गरिरहेका थिए । आफ्नो ती गतिविधिबाट मुसलमानहरूलाई अपठ्यारोमा पारेका थिए । मुहम्मदﷺको हत्या गर्ने योजना पनि बनाएका थिए । त्यस किसिमको परिस्थितिले गर्दा बाध्य भई मुसलमानहरूलाई पटक पटक आफ्नो सशस्त्र टोली पठाउनु पेरको थियो । ती षड्यन्त्रकारी तथा छलकपटीहरूका नाइके जस्तै सलाम बिन अबील हुकैक र उसैर बिन रिजामको अन्त्य पनि गर्नु परेको थियो । तर मुसलमानको नजर भने तिनीहरूभन्दा ती यहुदीहरूमाथि टिकेको थियो । मुसलमानहरूले आफ्नो कारवाही गर्न अलिकति ढिलो गरेका भए एक अर्को शक्ति कुरैश जो यहुदीहरूभन्दा ठूलो शक्तिशाली र लडाकु थियो मुसलमानको सामुन्ने आउँथ्यो । त्यसकारण मुसलमानहरूले उनीहरूलाई छोडेर यहुदीहरूको सामना गर्न उचित ठानेनन् । तर कुरैशविरुद्ध लडाइँ समाप्त हुने वित्तिकै ती यहुदी दोषीहरूको खबर लिने र उनीहरूको विरुद्ध निर्णायक कारवाही गर्ने दिन नजिकियो ।

## खैबरतर्फ प्रस्थान

इबने इसहाकको भनाई छ, मुहम्मदﷺ हुदैबियाबाट फर्केर जिल हिज्जको पूरा महिना र मुहर्रम महिनाको केही दिन मदिनामा बस्नु भएको थियो । मुहर्रम महिनाका बाँकी खैबर गएर विताउनुभयो थियो ।

कुरआनका विश्लेषकहरूको भनाइ छ : खैबर अल्लाहले दिएको बचन थियो जसको बारेमा उनले आफनो वाणीमा भनेका थिए :

وَعَدَكُمُ اللَّهُ مَغَانِمَ كَثِيرَةً تَأْخُذُونَهَا فَعَجَّلَ لَكُمْ (الفتح:٢٠)

अल्लाहले तिमीलाई अत्यधिक युद्धप्राप्तको बचन दिएको छ जसलाई तिमीले प्राप्त गर्ने छौ । फलस्वरूप उनले यसलाई तत्कालै प्रदान गरिदिए । (अल् फत्ह:२०)

(जसलाई तत्काल प्रदान गरिदिए) यसको अर्थ हुदैबियाको सम्झौता हो ,साथै अत्येधिक युद्धप्राप्तको अर्थ खैबर हो ।

## इस्लामी लश्करको संख्या

मुनाफिक र कमजोर इमानवालाहरू हुदैबियाको संघर्षमा मुहम्मदﷺसँग नगई आफ्नो घरमा बसेका थिए । त्यसकारण अल्लाहले आफ्नो दूतलाई उनीहरूको बारेमा यो आदेश दिए :

سَيَقُولُ الْمُخَلَّفُونَ إِذَا انطَلَقْتُمْ إِلَىٰ مَغَانِمَ لِتَأْخُذُوهَا ذَرُونَا نَتَّبِعْكُمْ ۖ يُرِيدُونَ أَنْ يُبَدِّلُوا كَلَامَ اللَّهِ ۚ قُلْ لَنْ تَتَّبِعُونَا كَذَٰلِكُمْ قَالَ اللَّهُ مِنْ قَبْلُ ۖ فَسَيَقُولُونَ بَلْ تَحْسُدُونَنَا ۚ بَلْ كَانُوا لَا يَفْقَهُونَ إِلَّا قَلِيلًا (الفتح: ١٥)

तिमीहरू युद्धप्राप्त लिन जाने बेलामा ती पछाडि बस्नेहरूले भन्नेछन् हामीलाई आफ्नो साथमा जान देऊ । उनीहरू अल्लाहको बचन परिवर्तन गर्न चाहन्छन् । तिमी उनीहरूलाई भनिदेऊ, तिमीहरू हामीसँग कदापि जान पाउँदैनौ । अल्लाहले पहिलादेखि नै यस कुराको निर्णय गरेका छन् । त्यसमा उनीहरूले भन्नेछन्, होइन, तिमीहरू हामीसँग डाहा गर्दैछौ । साँचो कुरा के हो भने उनीहरू अबुझ छन् । (अल् फत्ह:१५)

तसर्थ मुहम्मदﷺ खैबर प्रस्थान गर्न लाग्दा उहाँले आफ्नो साथमा ती व्यक्तिहरू जान पाउँछन् जसलाई वास्तवमा जिहाद गर्ने इच्छा छ भनी सूचना दिनुभयो । त्यस सूचनाको आधारमा उहाँको साथमा ती व्यक्तिहरू मात्र जान पाए जुन व्यक्तिहरूले हुदैबियामा रूखमूनि बसेर रिजवान नामक प्रतिज्ञा गरेका थिए । उनीहरूको संख्या केवल १४ सय मात्र थियो ।

त्यस युद्धको अवधिभर मदिनाको व्यवस्थापनको जिम्मेवारी सिबाअ बिन अर्फता गिफारीलाई र इबने इसहाकको भनाइ आनुसार नुमैलाह बिन अब्दुल्लाह लैसीलाई दिइएको थियो । विश्लेषकहरूको विचारमा पहिलो भनाई बढी सही छ ।[1]

---

१ फतहुलबारी भाग ७, जादुल मआद भाग २

त्यस अवसरमा अबु हुरैराह पनि मुसलमान भएर मदिना आउँदा सिबाअ बिन अर्फताले फजरको नमाज पढाइरहेका थिए । नमाज पढाएर भ्याएपछि अबु हुरैराह उनको अगाडि आए । उनले बाटो खर्च उपलब्ध गराए । अबु हुरैराह मुहम्मदﷺसँग भेट गर्न खैबरतर्फ लागे । मुहम्मदﷺ भएको ठाउँमा पुग्दा खैबरमाथि विजय प्राप्त भइसकेको थियो । मुहम्मदﷺले अन्य मुसलमानहरूसँग सल्लाह गरी अबु हुरैराह र उनका साथीहरूलाई पनि युद्धप्राप्तमा शामिल गराउनुभयो ।

## यहुदीहरूको समर्थन गर्न मुनाफिकहरूको सक्रियता

त्यस अवसरमा यहुदीहरूको समर्थन गर्न मुनाफिकहरूले खासै भागदौड गरेका थिए । मुनाफिकको सरदार अब्दुल्लाह बिन उबैले खैबरको यहुदीहरूलाई निम्न संदेश पठायो : मुहम्मद अहिले तिमीहरूतर्फ आउँदै छ , तसर्थ तिमीहरू सचेत भएर बस, तयारी गर र नडराऊ । किनभने तिमीहरूको संख्या र हातहतियार उनीहरूको भन्दा बढी छ । मुहम्मदको साथी थोरै तथा निहत्था छन् । उनीहरूको साथमा हतियार पनि कमै छ ।

खैबरवासीहरूलाई यस कुराको खबर भएपछि उनीहरूले केनानह बिन अबील हुकैक र हुजा बिन कैसलाई मदत माग्न बनु गत्फानकहाँ पठाए । किनभने त्यो कबिला खैबरका यहुदीहरूको मित्र र मुसलमानविरुद्ध उनीहरूको सहयोगी थियो । यदि मुसलमानमाथि यहुदीहरूको विजय भयो भने यहुदीहरूले खैबरमा हुने उत्पादनको आधा भाग उसलाई दिने प्रस्ताव पनि गरे ।

## खैबरको मार्ग

मुहम्मदﷺ खैबर जाँदा अजर नामी पहाड हुँदै जानु भयो । त्यसपछि सहबाअ नामक उपत्यका हुँदै रजिअ नामक उपत्यकातिर पुग्नुभयो । रजिअ नामक उपत्यका त्यो उपत्यका होइन जहाँ अजल र कारहको गद्दारीका कारण बनु लह्यानको हातबाट आठ जना सहाबीहरू शहिद गरिएका थिए र जैद र खुबैबलाई गिरिफतार गरी मक्कामा शहिद गरिएको थियो ।

रजिअबाट बनु गत्फानको बस्ती एक दिन एक रातको यात्रा बराबरको दुरीमा थियो । बनु गत्फानीहरुले तयारी गरी यहुदीहरूको सहयोग गर्न खैबरतिर लागे । जाँदै गर्दा बाटोमा उनीहरूले पछाडि केही होहल्ला सुने । उनीहरुलाई मुसलमानहरूले उनीहरूको बालबच्चा तथा जनावरमाथि आक्रमण गरे जस्तो लाग्यो । त्यसैले उनीहरू त्यहीँबाट फर्के र खैबरलाई मुसलमानहरूको निम्ति खुला छोडिदिए ।

त्यसपछि मुहम्मदﷺले ती दुवै सिपालु बटुवालाई बोलाउनुभयो जो बाटो देखाउनमा खटाइएका थिए । उनीहरूमध्ये एक जनाको नाम हुसैल थियो । उनी दुवैसँग मुहम्मदﷺले यस्तो मार्ग बारे सोध्न चाहनुभयो जहाँबाट गएर सीधै खैबरको

उत्तरबाट अर्थात मदिनालाई छाडेर सिरियाबाट प्रवेश हुन सकियोस् । त्यसको उद्देश्य एकातर्फ यहुदीहरूको सिरिया भाग्ने बाटो बन्द होस् र अर्कोतर्फ बनु गत्फान र यहुदीबीच बाधा बनी उनीहरूको तर्फबाट हुन सक्ने सहयोग पनि रोकियोस् भन्ने थियो ।

एक जना बटुवाले भन्यो । हे ! ईशदूत म तपाईंलाई यस्तो मार्गबाट लैजान्छु जहाँ चौतर्फी बाटोहरु छुटिन्छन् । सबै मार्गबाट तपाईं गन्तव्यसम्म पुग्न सक्नुहुन्छ । उहाँले उसलाई सबै बाटोको नाउँ भन्न भन्नुभयो । उसले भन्यो : एउटा हुजन नामक बाटो छ तर त्यो धेरै खतरनाक छ । उहाँले त्यस मार्गबाट जान अस्वीकार गर्नुभयो । उसले अर्को बाटोको नाउँ शाश हो र यसमा कठिनाइ छ भनेर भन्यो । उहाँले त्यसलाई पनि अस्वीकार गर्नुभयो । उसले हातिब नामक तेस्रो बाटोको बारेमा भन्यो उहाँले त्यस मार्गबाट जान पनि इनकार गर्नुभयो । हुसैलले भन्यो : अब एउटै बाटो बाँकी छ । उमरले सोधे त्यसको नाम के हो ? हुसैलले मर्हब हो भनी जवाफ दियो । मुहम्मदﷺले त्यै बाटो जान उचित ठान्नुभयो ।

## बाटोमा घटेका केही घटनाहरू

१,सलमा बिन अक्वअको बयान छ, हामीहरू मुहम्मदﷺको साथमा खैबरतिर गयौं । रातीको यात्रा थियो । एक जनाले आमिरसँग भन्यो , हे आमिर : हामीलाई आफ्नो केही रोचक घटना सुनाउनु न । आमिर कवि थिए । सवारीबाट झरेर समुदायको बारेमा गीत गाउन थाले ।

اللهم لو لا انت ما اهتدينا		ولا تصدقنا ولا صلينا
فاغفر فداء لك ما اتقينا		وثبت الاقدام ان لاقينا
و القين سكينة علينا		انا اذا صيح بنا ابينا
وبالصياح عولوا علينا

गीतको अनुवाद यस प्रकार छ : हे अल्लाह यदि तपाईं नभएको भए हामीले मार्गदर्शन पाउने थिएनौं । न हामीले दान गर्थ्यौं न नमाज पढथ्यौं । हामीले तपाईंको लागि बलिदान दिन्छौं । हामीलाई क्षमा गर्नु । हामीले लडाइँ गऱ्यौं भने हामीलाई दृढता प्रदान गर्नु । हाम्रो मन शान्त बनाइदेऊ । हामीलाई चुनौती दिइँदा हामीले गौरव गर्छौं । किनकि चुनौतीले गर्दा मानिसहरूले हामीमाथि विश्वास गरेका छन् ।

मोहम्मदﷺले सोध्नुभयो,को हो जातीय गीत गाउने व्यक्ति ? मानिसहरूले आमिर बिन अक्वअ हो भनी जवाफ दिए । उहाँले भन्नुभयो, अल्लाहले उनीमाथि

कृपा गरुन् । समुदायको एक जनाले भन्यो : अब त उनको शहादत अपरिहार्य भयो । उहाँले हामीलाई उनीबाट किन अँझै फाइदा लिने मौका दिनु भएन ?[१]

सहाबीहरूलाई थाहा थियो, युद्धको मौकामा मुहम्मदﷺले विषेश कुनै साथीको लागि दुवा गर्दा त्यो व्यक्ति शहिद हुन्थ्यो ।[२] त्यही घटना खबैरको युद्धमा आमिर बिन अक्वअमाथि साकार भयो । त्यसकारण उनीहरूले सोधे, किन उनको लामो जीवनको लागि प्रार्थना गरिएन ? उनीबाट हामीलाई अँझ बढी लाभ हुने थियो ।

२, खैबर नजिकै एउटा उपत्यकामा उहाँले असरको नमाज पढ्नुभयो । त्यसपछि बाटोमा खाने कुरा माग्दा सातु मात्र ल्याइयो । सातु घोलियो । उहाँले पनि खानुभयो र साथीहरूले पनि खाए । त्यसपछि उहाँ मग्रिबको नमाज पढ्न उठ्दा मुख मात्र खोकल्नुभयो । साथीहरूले पनि मुख मात्र खोकले । उहाँले नयाँ वजु नगरी नमाज पढ्नुभयो ।[३] पहिला गरेको वजुमा नै नमाज पढ्नुभयो । त्यसपछि उहाँले इशाको नमाज पढ्नुभयो । [४]

३, उहाँहरू खैबरको धेरै नजिक पुग्नुभयो र शहर पनि देखिन थाल्यो । उहाँले साथीहरूलाई रोकिने आदेश दिनुभयो । लश्कर रोकिएपछि उहाँले प्रार्थना गर्नुभयो ।

हे अल्लाह, हे सातौं आकाश र जुन वस्तुमाथि त्यसको छायाँ परेको छ, त्यसको पालनकर्ता । हे सातौं धर्ती र जुन वस्तुलाई त्यसले उठाएको छ, त्यसको पालनकर्ता । शैतान र जसलाई शैतानले पथभ्रष्ट गरेको छ तिनीहरूको पालनकर्ता । हामी तपाईंसँग यस बस्ती र यसका वासीहरूको भलाइको लागि प्रार्थना गर्दछौं । यस वस्तीको विकार, यसका वासिन्दाहरूको विकार र यसमा जे छ ती सबैको विकारबाट शरण माग्दछौं । [५]

## इस्लामी लश्कर खैबरको फेदीमा

मुसलमानहरूले युद्ध सुरु हुनुभन्दा अघिल्लो रात खैबर नजिक बिताएका थिए तर यहुदीहरूले सुइँको पनि पाएनन् । मुहम्मदﷺको बानी थियो, उहाँ रातमा जुन समुदायको वस्ती नजिक पुग्नु हुन्थ्यो विहान नहुँदासम्म त्यहाँ जानुहुन्न थियो । तसर्थ जब विहानी भयो उहाँले फजरको नमाज पढ्नुभयो । त्यसपछि मुसलमानहरू सवार भएर खैबरतर्फ बढे । उता खैबरवासी निश्चिन्त भएर आफ्नो कुदाली र हाँसिया

१ सही बुखारी भाग २, सही मुस्लिम भाग २
२ सही मुस्लिम भाग २
३ बुखारी भाग २
४ वाकदीको मगाजी अध्याय : खैबर युद्ध

५ इब्ने हेशाम भाग २

लिएर खेततिर निस्कँदा अचानक लश्करलाई देखेर अल्लाहको कसम मुहम्मद लश्कर लिएर आएका छन् भनी चिच्याउँदै शहरतिर भागे । मुहम्मदﷺले त्यो दृश्य देखेर हे अल्लाह खैबरको नाश हुने भयो भन्ने कुरा गर्नुभयो । जब हामी कुनै जातिको मैदानमा जान्छौँ डरपोक मानिसहरूको विहानी खराब हुन्छ ।[१]

## खैबरका किल्लाहरू

खैबरको वस्ती दुई क्षेत्रमा विभाजित थियो । एउटा क्षेत्रमा निम्नलिखित किल्लाहरू थिए । १,हिस्न नाइम २ हिस्न सुअब बिन मुआज ३, हिस्न जुबैर ४, हिस्न उबै ५, हिस्न नेजार । ती किल्लाहरूमध्ये तीन वटा मुख्य किल्लामा सम्मिलित क्षेत्र नजात थियो भने बाँकी दुई किल्लामा सम्मिलित क्षेत्र शक नामबाट परिचित थियो । खैबर वस्तीको अर्को क्षेत्र कुतैबा थियो । त्यसमा केवल तीन वटा किल्ला थिए ।

१, हिस्न कमुस (त्यो किल्ला बनु नजिर कबिलाको खान्दान अबुल हुकैकको थियो) २, हिस्न वतिह ३, हिस्न सुलालिम

ती आठ वटा किल्लाबाहेक अरू पनि किल्ला तथा सुरूङहरू थिए । तर ती किल्लाहरू साना थिए र सुरक्षाको हिसाबले अन्य किल्लाहरू जस्ता बलिया थिएनन् ।

जहाँसम्म युद्धको सम्बन्ध छ, युद्ध केवल पहिला क्षेत्रमा भएको थियो र दोस्रो क्षेत्रका तीनै वटा किल्लाहरू अत्येधिक लडाकु हुँदा पनि विनायुद्ध मुसलमानहरूलाई दिइयो ।

## लश्करको केम्प

मुहम्मदﷺले लश्करको केम्प लगाउन एउटा ठाउँ हेर्नुभयो । त्यसमा हब्बाब बिन मुन्जिर आएर मुहम्मदﷺसँग भने : यस ठाउँमा केम्प राख्न अल्लाहले आदेश दिएका हुन् कि केवल तपाईंको युद्ध रणनीति हो ? उहाँले भन्नुभयो : यो त केवल एउटा सल्लाह तथा विचार हो । उनले भने : हे ईशदूत यो ठाउँ नजातको किल्लादेखि धेरै नजिक छ र खैबरका सबै लडाकुहरू त्यसै किल्लामा छन् । उनीहरूले हामीहरूको सम्पूर्ण गतिविधि थाहा पाउने छन् तर हामीलाई उनीहरूको बारेमा कुनै खबर प्राप्त हुन सक्दैन । उनीहरूको तर्फबाट प्रहार गरिएको वाण हामीलाई लाग्ने छ तर हामीहरूको वाण उनीहरूसम्म पुग्न सक्दैन । हामीहरू उनीहरूको रात्री आक्रमणबाट पनि सुरक्षित रहन सक्दैछौँ । अर्को कुरा त्यो ठाउँ खजुरको रूखको बीचमा छ । पहाडको फेदीमा छ । त्यहाँको जमिन पनि अनुकुल छ । तसर्थ यस्तो ठाउँमा केम्प राख्न भन्नुहोस् जो ती खराबीबाट मुक्त होस् । हामी त्यतै गएर केम्प

---

१ सही बुखारी भाग २

राखौं । मुहम्मदﷺले भन्नुभयो : तिमीले अति राम्रो सुझाव दियौ । त्यसपछि उहाँ अर्को ठाउँतिर सर्नुभयो ।

## युद्धको तयारी र विजयको खुशखबर

जुन रात मुहम्मदﷺ खैबरको सिमानामा प्रवेश गर्नुभएको थियो त्यो रात उहाँले भन्नुभयो : मैले भोलि झण्डा यस्तो व्यक्तिलाई दिनेछु जसले अल्लाह र अल्लाहका दूतसँग बढी माया गर्दछ र जोसँग अल्लाह र ईशदूतले माया गर्दछन् । विहान भएपछि साथीहरू मुहम्मदﷺकहाँ हाजिर भए । हरेकले भोलि झण्डा मैले पाउने छु भनी आस लगाएका थिए । मुहम्मदﷺले सोध्नुभयो, अली कहाँ छन् ? साथीहरूले जवाफ दिए , हे मुहम्मदﷺ उनको आँखा दुखेको छ ।[१] उहाँले भन्नुभयो , उनलाई बोलाऊ । उनलाई हाजिर गरियो । मुहम्मदﷺले उनको आँखामा थुक लगाएर प्रार्थना गर्नुभयो । उनलाई सन्चो लाग्यो । उनलाई कुनै दुःख नभए झैं भयो । त्यसपछि उनलाई झण्डा दिइयो । उनले भने : हे मुहम्मदﷺ म उनीहरू विरुद्ध उनीहरु मुसलमान नहोउञ्जेल लड्छु । उहाँले भन्नुभयो : उनीहरू मैदानमा नझरुन्जेल आरामसँग जाऊ । त्यसपछि उनीहरूलाई इस्लामको निम्तो देऊ । इस्लाममा उनीहरूमाथि अल्लाहको जुन हक छ त्यसको बारेमा सचेत गरिदेऊ । अल्लाहको कसम तिमीद्वारा कुनै व्यक्तिलाई अल्लाहले मार्गदर्शन दियो भने त्यो तिम्रो लागि राता उँटभन्दा पनि बहुमुल्य हुनेछ ।[२]

## युद्धको आरम्भ तथा नाइम नामी किल्लामाथि विजय हासिल

जेहोस् यहुदीहरू लश्कर देख्ने वित्तिकै शहरतिर भागे आफ्नो किल्लामा बन्द भए । उनीहरू युद्धको लागि तयार हुनु स्वभाविक थियो । मुसलमानहरूले सबैभन्दा पहिला नाइम किल्लामा आक्रमण गरे । किनभने त्यो किल्ला ठाउँको अनूकुलता र रणनीतिको हिसाबले यहुदीहरूको पहिलो प्रतिकारात्मक छेकबार थियो । त्यो किल्ला मर्हब नामी शक्तिशाली तथा बहादुर यहुदीको किल्ला थियो जसमा एक हजार मानिसहरूको अँटाउन सक्थ्यो ।

अली बिन अबी तालिब मुस्लिम फौजीहरूलाई लिएर त्यस किल्लातिर गए र उनीहरूलाई इस्लामको निम्तो दिए । उनीहरूले उनको निम्तोलाई ठोक्राए । आफ्नो सरदार मर्हबको नेतृत्वमा मुसलमानको विरुद्ध खडा भए । मैदानमा उत्रेर सबैभन्दा

---

१ यसै रोगको कारण उहाँ पहिला पछाडि पर्नु भएको थियो । पछि लस्करमा शामिल हुनुभयो ।
२ सही बुखारी भाग २, कैयन कोसिसका वावजुद खैबरको एउटा किल्ला विजय गर्न असफलता खेप्नु परेपछि अलीलाई झण्डा दिइएको थियो भन्ने अन्य स्रोतमा उल्लेख छ । तर रिसर्चरहरुले पहिलो भनाइलाई नै बढी प्राथमिकता दिएका छन् ।

पहिला मरहबले लड्ने निम्तो दियो । त्यस परिवेशलाई सलमा बिन अक्वअले यसरी वर्णन गरेका छन् : जब हामी खैबर पुग्यौं अनि उनीहरूको राजा मरहब आफ्नो तरवार लिएर घमण्ड गर्दै उफ्रदै आएर भन्यो: खैबरलाई थाहा छ म मरहब हुँ । हतियारधारी, बहादुर र अनुभवी छु । उसको सामना गर्न मेरो काका आमिरले निस्केर भने : खैबरलाई थाहा छ म आमिर हुँ । म हतियारधारी, शक्तिशाली र बहादुर छु ।

त्यसपछि दुवैले एकअर्कामाथि आक्रमण गरे । मरहबको तरवार मेरो काकाको ढालमा घुस्यो । आमिरले उसलाई तलबाट हान्न खोजे तर उनको तरवार खस्यो । उनले यहुदीको तिघ्रामा हान्दा तरवारको चुच्चो उछुट्टिएर उनको घुँडामा लाग्यो । आखिरकार त्यसै घाउबाट उनको मृत्यु भयो । मुहम्मदﷺले आफ्नो दुईटा औंला जोडेर उनको बारेमा भन्नुभयो : उनको लागि दुईटा पुण्य छन् । एक त उनी अति बहादुर मुजाहिद थिए र अर्को कुरा उनी अरबको धर्तीमा सबैभन्दा बढी हिँडेका थिए ।[१]

आमिर घाइते भएपछि मरहबको सामना गर्न अली गए । सलमा बिन अक्वअ भन्छन्, त्यस बेला अलीले शायरी भनेका थिए । शायरीको अर्थ निम्नलिखित छ : म त्यो व्यक्ति हुँ जसको नाम मेरी आमाले सिँह राखेकी छन् । बनको सिँह जस्तै खतरनाक छु । मैले ईँटाको जवाफ ढुंगाले दिनेछु । त्यसपछि उनले मरहबको टाउकोमा तरवार हान्दा ऊ त्यहीं ढल्यो । त्यसपछि अलीको हातबाट विजय प्राप्त भयो ।[२]

युद्ध जारी रहेकै बेला अली यहुदीको किल्लाको नजिक पुगेपछि एक जना यहुदीले किल्लाको माथिबाट च्याएर भन्यो : तिमी को हौ ? अलीले जवाफ दिए ,अली । यहुदीले भन्यो : त्यो किताबको कसम जो मुसामाथि अवतरण गरिएको छ तिमीहरू उच्च छौ । त्यसपछि मरहबको भाइ यासिर कसले मसँग प्रतिस्पर्धा गर्न सक्छ भन्दै निस्क्यो । उसको त्यस चुनौतीको सामना गर्न जुबैर मैदानमा आए । उनकी आमा सफियाले भनिन् : हे ईशदूत ,के मेरो छोरा मारिने छ ? उहाँले भन्नुभयो : मारिने छैन बरु तिम्रो छोराले उसको हत्या गर्नेछ । फलस्वरूप जुबैरले यासिरको हत्या गरिदिए ।

त्यसपछि हिस्न नाइम नजिक घमसान युद्ध भयो । त्यहाँ कैयन यहुदी सरदारहरू मारिए । त्यसले गर्दा बाँकी यहुदीहरूमा लड्ने हिम्मत रहेन । उनीहरूले मुसलमानहरूको आक्रमण रोक्न सकेनन् । केही स्रोत अनुसार त्यो युद्ध धेरै दिनसम्म

---

१ सही मुस्लिम भाग २ अध्याय : खैबर युद्ध, करद युद्ध,सही बुखारी भाग २
२ मर्हबको हत्यारा बारे स्रोतमा ठूलो मतभेद छ र कुन दिन उसको हत्या भएको थियो र कुन दिन त्यो किल्ला विजय भएको थियो भन्नेमा पनि ठूलो मतभेद छ । सही हदिसको सन्दर्भमा पनि कतै न कतै यसको मतभेद पाइन्छ । हामीले माथि जुन तर्तिब उल्लेख गरेका छौं त्यो बुखारीको हदिसको सन्दर्भलाई मद्देनजर गरी राखेका हौं ।

चलेको थियो । त्यसमा मुसलमानहरूलाई कठिन प्रतिस्पर्धाको सामना गर्नु पर्दा पनि यहुदीहरूको मुसलमानलाई पराजित गर्ने आस समाप्त भयो । त्यसकारण उनीहरू लुकीछिपी त्यस किल्लाबाट निस्केर सुअब किल्लामा गए । अन्ततः मुसलमानहरूले नाइम किल्लामाथि कब्जा गरे ।

## सअब बिन मुआज किल्लामाथि विजय

नाइम किल्लापछि सअब किल्ला सुरक्षा तथा शक्तिको दृष्टिले दोस्रो श्रेणीको बलियो किल्ला थियो । मुसलमानहरूले मुन्जिरको नेतृत्वमा त्यसमाथि आक्रमण गरी तीन दिनसम्म त्यसलाई आफ्नो घेरामा लिएर राखे । तेस्रो दिन मुहम्मदﷺले त्यस किल्लामाथि विजय हासिल गर्न विशेष प्रार्थना गर्नुभयो ।

इब्ने इसहाकको बयान छ, अस्लमको शाखा बनु सहमका मानिसहरू मुहम्मदﷺको सेवामा उपस्थित भएर भने : हामीहरू थाकिसकेका छौं र हामीसँग केही छैन । उहाँले भन्नुभयो : हे अल्लाह तपाईंलाई उनीहरूको अवस्था थाहा छ । तपाईंलाई थाहा छ, उनीहरूसँग तागत छैन र मसँग पनि उनीहरूलाई दिन केही छैन । तसर्थ उनीहरूलाई यहुदीको सबैभन्दा महत्वपूर्ण किल्लामाथि विजय देऊ । जहाँ सबैभन्दा बढी खाद्य वस्तु र मासु हासिल होस् । त्यसपछि मानिसहरूले आक्रमण गरे । अल्लाहले सअब बिन मुआजको किल्लामाथि विजय प्रदान गरिदिए । खैबरको त्यो किल्लामा जति खाद्य पदार्थ र मासु थियो अन्य कुनै किल्लामा थिएन ।[१]

मोहम्मदﷺले प्रार्थना गरेपछि साथीहरूलाई त्यहाँ आक्रमण गर्न आदेश दिँदा बनु अस्लमका मानिसहरू नै अगाडि अगाडि थिए । त्यहाँ पनि किल्लाभित्र भीषण लडाइँ तथा नरसंहार भयो । अन्ततः दिन अस्ताउनुभन्दा पहिला नै किल्लामाथि विजय प्राप्त भयो । मुसलमानहरूले त्यहाँ केही मिन्जनिक नामक हतियार र टेंक हात पारे ।[२]

इबने इसहाकको भनाइ अनुसार त्यहाँ अनिकाल परेको थियो जसले गर्दा मानिसहरूले गधा बध गरी पकाउन थाले । तर मुहम्मदﷺलाई त्यसको बारेमा थाहा भएपछि उहाँले घरेलु गधाको मासु खान अवैद्य गरिदिनुभयो ।

## जुबैर किल्लामाथि विजय

नाइम किल्ला र सुअब किल्लामाथि विजय हासिल गरेपछि यहुदीहरू नजातका सबै किल्लाबाट निस्केर जुबैर किल्लामा गएर जम्मा भए । त्यो किल्ला

१ इब्ने हेशाम भाग २

२ काठबाट बनाइएको बन्द गाडी जस्तो डब्बा जसको तलबाट मानिसहरु घुसेर किल्लाको माथिल्लो भागसम्म पुग्थे र शत्रुको आक्रमणबाट जोगिदै फसिलमा प्वाल गर्थे । यसैलाई दबाबह भनिन्थ्यो । अहिलेको युगमा टेंकलाई दबाबह भन्न सकिन्छ ।

सुरक्षित तथा पहाडको टाकुरोमा अवस्थित थियो । बाटो यति कठिन थियो कि न त सवारी नै जान सक्थ्यो न पदयात्री । त्यसकारण मुहम्मदﷺले त्यसको वरिपरि तीन दिनसम्म घेराबन्दी गरेर बस्नुभयो । त्यसपछि एक जना यहुदी आएर भन्यो : हे कासिमको बुबा, तपाईंले एक महिनासम्म घेराबन्दी गरेपनि उनीहरूलाई कुनै असर पर्ने छैन । उनीहरूसँग पिउने पानी र पानीका मुहानहरू छन् । उनीहरू रातरातै त्यहाँ जान्छन् र पानी लिएर किल्लामा आउँछन् । त्यसकारण तपाइँहरूबाट उनीहरु सुरक्षित छन् । यदि तपाइँहरूले उनीहरूको पानी बन्द गरिदिनुभयो भने उनीहरूले तपाइँको सामुन्ने आफ्नो घुँडा टेक्नु पर्छ । त्यो सूचना पाएपछि उहाँले उनीहरूको पानीको मुहान बन्द गरिदिनुभयो । त्यसपछि यहुदीहरूले बाहिर निस्केर घमसान लडाइँ लडे जसमा कैयन मुसलमानहरू र करिब दश जना यहुदी पनि मारिएका थिए । तर किल्लामाथि भने विजय हासिल भयो ।

## उबै किल्लामाथि विजय

जुबैर नामक किल्लाबाट हार खाएर यहुदीहरू उबै नामक किल्लामा बन्द भए । मुसलमानहरूले त्यसको पनि घेराउ गरे । त्यस पटक दुई जना शक्तिशाली यहुदी एकपछि अर्को गरी लड्ने निम्तो दिँदै मैदानमा निस्के । दुवै जना मुसलमान वीरहरूद्वारा मारिए । दोस्रो यहुदीको हत्या लाल पट्टी लगाएका वीरयोद्धा अबु दुजाना सिमाक बिन खर्शा अन्सारीले गरेका थिए । दोस्रो यहुदीको हत्या गरेर तेज गतिमा किल्लामा पसे । उनको साथमा मुसलमानको लश्कर पनि किल्लामा घुस्यो । किल्लाभित्र केही छिन घमसान लडाइँ भयो र यहुदीहरू किल्लाबाट भाग्न थाले । अन्तिममा सबै यहुदीहरू भागेर नज्जार नामक किल्लामा गए । त्यो किल्ला खैबरको पहिलो क्षेत्रको अन्तिम किल्ला थियो ।

## नज्जार नामक किल्लामाथि विजय

त्यो किल्ला त्यस क्षेत्रको सबैभन्दा बलियो किल्ला थियो । मुसलामनहरूले आफ्नो सबै तागत लगाएर पनि त्यस किल्लामा प्रवेश गर्न सक्दैनन भन्ने यहुदीहरूको विश्वास थियो । त्यसकारण उनीहरू महिला बालबच्चा समेत त्यहाँ बसेका थिए । जबकि पहिलाका किल्लाहरूमा महिला र बालबच्चालाई राखेका थिएनन् ।

मुसलमानहरूले त्यस किल्लाको सशक्त रूपमा घेराउ गरेर दबाब दिइरहे । तर किल्ला पहाडको टाकुरामा भएको कारण त्यहाँ घुस्ने कुनै बाटो देखिएको थिएन । उता यहुदीहरूले पनि किल्लाबाट बाहिर निस्केर मुसलमानसँग लड्ने हिम्मत गरेनन् । तर मुसलमानहरूमाथि वाण तथा ढुंगामूढा वर्षाएर उनीहरू विरुद्ध लडाइँ गरिरहे ।

जब त्यस किल्लालाई कब्जा गर्न मुसलमानहरूलाई धेरै कठिन भयो अनि मुहम्मदﷺले मिन्जनिक नामक हतियार गाढ्ने आदेश दिनुभयो । मुसलमानहरूले केही

गोला फ्याँकेर पर्खाल छेद गरी किल्लाभित्र पसेको हुन सक्छ । त्यसपछि किल्लाभित्र भीषण लडाइँ भयो । यहुदीहरूले अति नराम्रो तरिकाले पराजय भोग्नुपऱ्यो । किनभने अन्य किल्लाबाट झैं त्यस किल्लाबाट उनीहरू लुकेर भाग्न सकेनन् । उनीहरू हतार गरेर भाग्दा उनीहरूले आफ्ना महिला र बालबच्चालाई साथमा लैजान सकेनन् । उनीहरूलाई मुसलमानको दयामा छाडिदिए ।

त्यस बलियो किल्लालाई कब्जा गरेपछि खैबरको पहिलो क्षेत्र अर्थात नजात र शक किल्लामाथि विजय हासिल भयो । त्यस क्षेत्रमा सानातिना अन्य किल्लाहरू पनि थिए । तर त्यो किल्ला कब्जा भएपछि यहुदीहरू बाँकी अन्य किल्लालाई पनि छाडेर खैबरको दोस्रो क्षेत्र अर्थात कुतैबातिर भागे ।

## खैबरको दोस्रो क्षेत्रमाथि विजय

नजात र शकको क्षेत्रमाथि विजय हासिल गरेर मुहम्मदﷺ कुतैबा,वतिह र सलालिमको क्षेत्रतिर लाग्नुभयो । सलालिम, बनु नजिरको एक जना प्रसिद्ध यहुदी अबुल हुकैकको किल्ला थियो । उता नजात  र शक क्षेत्रबाट पराजय भोगेर भागेका सबै यहुदीहरू त्यहाँ गएर बलियो तरिकाले किल्लाबन्द भएर बसेका थिए ।

त्यहाँको तीन वटा किल्लामध्ये कुनै किल्लामा युद्ध भयो कि भएन भन्ने बारे युद्ध बारे लेख्ने लेखकहरूबीच ठूलो मतभेद छ । इस्हाकको भनाइ अनुसार कमुस नामक किल्लामाथि कब्जा गर्न लडाइँ भएको थियो । त्यसको परिवेशबाट त्यो किल्ला युद्धबाट नै कब्जामा आएको थियो भन्ने पुष्टि हुन्छ । यहुदीहरूको तर्फबाट आत्मसमर्पणको त्यहाँ कुनै कुरा भएको थिएन ।[१]

तर वाकदीले प्रष्ट भनेका छन्, त्यहाँका तीनवटै किल्ला वार्ताद्वारा मुसलमानहरूको हवाला गरिएको थियो । कमुस नामक किल्लाको लागि युद्धपछि केही विवादास्पद कुराकानी भएको हुन सक्छ । तर बाँकी दुई वटा किल्ला युद्धविना नै मुसलमानको हवाला गरिएको थियो ।

मुहम्मदﷺले कुतैबा आएर त्यहाँको वासीहरूलाई सक्त घेराउमा लिनुभयो । त्यो घेराउ १४ दिनसम्म जारी रह्यो । यहुदीहरू आफ्नो किल्लाबाट निस्केनन् । त्यसपछि मुहम्मदﷺले मिन्जनिक नामक हतियार गाड्ने आदेश दिनुभयो । यहुदीहरूलाई अब आफ्नो विनाश हुने विश्वास भएपछि उनीहरूले मुहम्मदﷺसँग सम्झौता गर्न प्रस्ताव गरे ।

---

१ इब्ने हेशाम भाग २

## सम्झौताको लागि वार्ता

सर्वप्रथम अबिल हुकैकको छोराले मुहम्मद ﷺ कहाँ कुराकानी गर्ने अनुमति माग्दै सन्देश पठायो । मुहम्मद ﷺ ले सकारात्मक जवाफ दिनुभयो । जब उसले मुहम्मद ﷺ को तर्फबाट अनुमति पायो अनि मुहम्मदकहाँ आएर निम्नलिखित सर्तमा सम्झौता गऱ्यो : किल्लामा जुन फौजीहरू छन् उनीहरूलाई सुरक्षित छाडिदिनु पर्नेछ । साथै उनीहरूको बालबच्चा उनीहरूकै साथमा रहने छन् अर्थात उनीहरूलाई दास बनाइने छैन । बरू उनीहरू आफ्नो बालबच्चाहरू लिएर खैबरको जमिनबाट निस्कने छन् । साथै उनीहरूले आफ्नो मालसामान, बगैंचा, जमिन, सुनचाँदी, घोडा र युद्धवस्त्र मुहम्मद ﷺ लाई सुम्पिने छन् र आफुले लगाउने कपडा मात्र लिएर जानेछन् ।[1] मुहम्मद ﷺ ले भन्नुभयो यदि तिमीहरूले मबाट केही लुकाएका छौ भने अल्लाह र अल्लाहका दूत जिम्मेवार हुने छैनन् । यहुदीहरूले त्यो सर्त स्वीकार गर्दै सम्झौता गरे ।[2] त्यस सम्झौतापछि उनीहरूले तीनवटै किल्ला मुसलमानहरूको हवाला गरिदिए । यसरी खैबरमा पूर्ण रूपले मुसलमानको कब्जा भयो ।

## अबुल हुकैकका दुवै छोराको धूर्तता र उनीहरूको हत्या

त्यो सम्झौता भए लगत्तै अबुल हुकैकका दुवै छोराले अत्यधिक सामान लुकाएका थिए । ती दुवैले मालसामान र हैइ बिन अख्तबका गहना भएको छाला लुकाए । त्यो गहना हैइ बिन अख्तबले मदिनाबाट बनु नजिरलाई देशनिकाला गर्दा आफ्नो साथमा ल्याएको थियो ।

इब्ने इसहाकको बयान अनुसार मुहम्मद ﷺ कहाँ केनानाह बिन अबिल हुकैकलाई ल्याइयो । उसँग बनु नजिरको खजाना थियो । मुहम्मद ﷺ ले सोधपुछ गर्दा उसले खजाना भएको ठाउँ बारे बताउन अस्वीकार गऱ्यो । त्यसपछि एक जना यहुदीले आएर उसको बारेमा भन्यो, मैले उसलाई सधैं त्यस विरानो ठाउँमा घुमेको देख्थेँ । मुहम्मद ﷺ ले केनानसँग भन्नुभयो : यदि हामीले तिमीबाट खजाना पायौं भने तिम्रो हत्या गरिने छ ? उसले भन्यो ठिक छ । उहाँले विरानो ठाउँ खन्ने आदेश दिनुभयो । त्यहाँबाट केही खजाना निस्क्यो । त्यसपछि बाँकी रहेको खजाना बारे सोधपुछ गर्दा उसले त्यस बारे पनि इन्कार गऱ्यो । त्यसपछि उसलाई मुहम्मद ﷺ ले जुबैरको हवाला गरी उसँग जे जति छ सबै सामान हामीलाई नदिएसम्म यातना दिन

---

१ अबु दाऊदमा उल्लेखित हदिस अनुसार अल्लाहका संदेष्टाले यहुदीहरुसँग यस सर्तमा सम्झौता गर्नुभएको थियो कि यहुदीहरुलाई खैबरबाट निकाला गरिदा आफ्नो सवारी साधनमा जति मालसामान लोड गर्न सक्छन् उनीहरुले त्यति लैजान पाउने छन् भन्ने मुसलमानको तर्फबाट अनुमति हुने छ । अबु दाऊद भाग २

२ जादुल मआद भाग २

आदेश दिनुभयो । जुबैरले उसको छातीमा जोड्ले हान्दा उसको ज्यान जान लाग्यो । त्यसपछि मुहम्मदﷺले उसलाई मुहम्मद बिन मस्लमाको हवाला गरिदिनुभयो र उनले मुहम्मद बिन मस्लमाको बदलामा उसको हत्या गरिदिए । महमुद शीतलको लागि नाइम किल्लाको पर्खाल तल बस्दा उसले माथिबाट जाँतोका पाटा खसालेर उनको हत्या गरेको थियो ।

इब्ने कैयमको बयान अनुसार मुहम्मदﷺले अबिल हुकैकको दुवै छोराको हत्या गर्ने आदेश दिनुभएको थियो । उनीहरू दुवैले मालसामान लुकाएको बारेमा उनीहरूको काकाको छोराले गवाही दिएको थियो ।

त्यसपछि मोहम्मदﷺले हैइ बिन अख्तबकी छोरी सफियालाई बन्दी बनाउनुभयो । ऊ केनानाह बिन अबिल हुकैककी श्रीमती थिई । हालै उसको विदाइ भएको थियो ।

## युद्धप्राप्त वितरण

मुहम्मदﷺले यहुदीहरूलाई खैबरबाट निकाला गर्ने सोच गर्नुभयो । किनभने सम्झौतामा पनि त्यै कुरा तय भएको थियो । तर यहुदीहरूले भने : हे मुहम्मद हामीलाई त्यसै ठाउँमा बस्न दिनुहोस् । त्यसको संरक्षण हामीले गर्नेछौं । किनभने हामीलाई त्यसको बारेमा तपाईंलाईभन्दा बढी जानकारी छ । अर्कोतर्फ मुहम्मदﷺ र उहाँका साथीहरूसँग त्यति धेरै दासीहरू थिएनन् जसले त्यस जमिनको संरक्षण गर्न सकुन् र यहाँ खनजोत गर्न सकुन् । साथै साथीहरूलाई त्यो काम गर्ने फुर्सद पनि थिएन । त्यसकारण उहाँले खैबरको जमिन यहुदीहरूलाई सबै खेती तथा फलफुलको आधा भाग दिइने छ र उनीहरूलाई त्यहाँ बस्न दिने वा देशनिकाला गर्ने काम मुहम्मदﷺको इच्छा बमोजिम हुनेछ भन्ने सर्तमा हवाला गरिदिनुभयो । त्यसपछि अब्दुल्लाह बिन रवाहाले खैबरको उब्जनीको हिसाब लगाउँने गर्थे ।

खैबरलाई ३६ भागमा विभाजित गरियो । हरेक भागको एक सय भाग लगाइयो । यसरी जम्मा ३६०० भाग भए । त्यसमा १८०० भाग मुहम्मदﷺ र मुसलमानहरूको थियो । आम मुसलमानको झैं मुहम्मदﷺको पनि एक भाग थियो । बाँकी १८०० को एक भाग मुहम्मदﷺले मुसलमानहरूको संगठनात्मक कामकाज र प्रकोपको लागि अलग छुट्याउनुभयो । अल्लाहको तर्फबाट हुदैबियावासीलाई उपहार प्रदान गरिएको कारण खैबरलाई १८०० भागमा विभाजित गरियो । जो उपस्थित थिए उनीहरूको लागि पनि जो उपस्थित थिएनन् उनीहरूको लागि पनि भाग लगाइयो । हुदैबियावासीको संख्या चौध सय थियो । खैबर आउँदा जुन मानिसहरूले आफ्नो साथमा दुई सय घोडा ल्याएका थिए । ती घोडालाई पनि भाग दिइएको थियो । घोडाको भाग फौजीको भन्दा दोब्बर थियो । खैबरलाई १८०० भागमा विभाजित

गरेपछि दुई सय सवारहरूले तीन तीन सय गरी ६०० भाग पाए र बाँकी बाह्र सय पैदल फौजीले एक एक भाग गरी बाह्र सय भाग पाए ।[१]

खैबरमा प्राप्त गरिएको युद्धप्राप्तको अन्दाजा सही बुखारीमा उमरमार्फत वर्णन गरिएको हदिसबाट हुन्छ । उनले भने : खैबरमाथि कब्जा गरेपछि हामी सन्तुष्ट भयौं । माई आइशामार्फत वर्णन गरिएको हदिसमा छ : खैबरमाथि विजय प्राप्त भएपछि हामीले भन्यौं ,अब हामीले पेटभरी खजुर खान पाउछौं ।[२] साथै मुहम्मदﷺ मदिना फर्कदा मुहाजिरहरूले अन्सारलाई खजुरका ती रूखहरू फिर्ता गरिदिए जुन अन्सारले उनीहरूलाई सहयोग स्वरूप दिएका थिए । किनभने उनीहरूलाई खैबरमा प्रयाप्त खजुर तथा माल हासिल भएको थियो ।[३]

## जाफर बिन अबी तालिब र साथी अश्अरीको आगमन

त्यसै युद्धमा जाफर बिन अबी तालिब मुहम्मदﷺको सेवामा उपस्थित भए । उनको साथमा अश्अरी अर्थात अबु मुसा र उनका साथीहरू पनि थिए ।

अबु मुसा अश्अरीको बयान छ, उनी भन्छन् : ओम्मानमा हामीलाई मुहम्मदﷺ ईशदूत भएको कुरा थाहा भएपछि म र मेरा दुई जना भाइ आफ्नो समुदायका पचास जना व्यक्तिहरू समेत देश छोडेर डुंगामा सवार भएर उहाँको सेवामा हिंड्यौं । डुंगाबाट हामी नजाशी बादशाहको देशमा पुग्यौं । त्यहाँ जाफर र उनका साथीहरूसँग भेट भयो । उनीहरूले हामीलाई मुहम्मदﷺले पठाउनु भएको हो र हामीलाई यहाँ बस्न भन्नु भएको छ भने । तपाईंहरू पनि हामीसँग बस्नुहोस् । फलत हामीहरू पनि उनीहरूको साथमा बस्यौं । मुहम्मदﷺकहाँ त्यति बेला पुग्यौं जब उहाँले खैबर कब्जा गरिसक्नु भएको थियो । उहाँले हाम्रो लागि पनि भाग लगाउनुभयो । तर हामी बाहेक अन्य व्यक्तिको लागि जो खैबरमा उपस्थित थिएनन् कुनै हिस्सा लगाउनु भएन । केवल युद्धमा शामिल हुनेहरूको लागि मात्र भाग लगाउनुभयो । तर जाफर र उनका साथीहरूसँगै हाम्रो डुंगामा आउनेहरूको लागि भाग लगाउनुभयो । उनीहरूको लागि पनि युद्धप्राप्तमा भाग लगाउनुभयो ।[४]

---

१ जादुल मआद भाग २
२ सही बुखारी भाग ३
३ जादुल मआद भाग २, सही मुस्लिम भाग २
४ सही बुखारी भाग १, फतहुलबारी भाग ७

जाफर मुहम्मदﷺको सेवामा पुगेपछि उहाँले उनीहरूको स्वागत गर्नुभयो र उनीहरूलाई अंगालो हाल्दै भन्नुभयो : म किन खुसी छु मलाई नै थाहा छैन । खैबरमाथि विजय हासिल गर्नाले हो कि जाफरको आगमनले हो ।[1]

स्मरण रहोस् उनीहरूलाई बोलाउन मुहम्मदﷺले अमर बिन उमैया जमरीलाई शाह नजाशीकहाँ पठाउनु भएको थियो र उनीहरूलाई आफुकहाँ पठाउन नजाशीसँग भन्नु भएको थियो । फलस्वरूप शाह नजाशीले उनीहरूलाई दुईवटा डुंगामा सवार गरेर पठायो । उनीहरू जम्मा सोह्र जना व्यक्ति थिए । उनीहरूको साथमा बाँकी रहेका बालबच्चा तथा महिलाहरू पनि थिए । बाँकी मानिसहरू पहिला नै मदिना आएका थिए ।[2]

## सफियासँग विवाह

माथि उल्लेख गरिएको छ,जब सफियाको लोग्ने केनानाह बिन अबील हुकैकको आफ्नो बेइमानीको कारण हत्या भयो अनि सफियालाई पनि बन्दी महिलाहरूको साथमा बन्दी बनाइयो । बन्दी महिलाहरूलाई जम्मा गरिएपछि दिह्या बिन खलिफा कल्बी मुहम्मदﷺकहाँ आएर भने : बन्दी बनाइएका महिलाहरूमध्ये मलाई एक जना महिला दिनुहोस् । उहाँले भन्नुभयो एउटी दासिनी लिएर जाऊ । उनले त्यहाँ गएर हुयैकी छोरी सफियालाई रोजे । त्यसपछि एक जनाले मुहम्मदﷺकहाँ आएर भन्यो : हे ईशदूत के तपाईंले बनु कुरैजा र बनु नजिरकी नेतृ सफियालाई दिह्याको हवाला गर्नु भएको हो ? उनी त तपाईंसँग मात्र सुहाउँछिन् । उहाँले भन्नुभयो,: दिह्या र सफियालाई बोलाऊ । उनी दिह्या र सफियालाई लिएर हाजिर भए । उहाँले उनलाई देखेपछि दिह्यालाई दासिनी महिलामध्ये कुनै अर्की महिला रोज्न भन्नुभयो । त्यसपछि उहाँले सफियालाई इस्लामको निम्तो दिनुभयो । उनले इस्लाम स्वीकारिन् । त्यसपछि उहाँले उनलाई मुक्त गरी उनीसँग विवाह गर्नुभयो । उनको मुक्तिलाई नै मोहर घोषित गर्नुभयो । मदिना फर्कने क्रममा सद सहबा भन्ने ठाउँमा पुगेपछि उनी मुहम्मदﷺको निम्ति जायज भइन् । सुलैमकी आमाले उहाँको लागि उनलाई बनाउश्रृंगार गरी राती उहाँसँग विदाइ गरिदिइन् । उहाँले वेहुलाको हैसियतमा उनीसँग सुहाग रात मनाउनुभयो । खजुर घियु र सातु तयार गरी विवाहको भोज खुवाउनुभयो । बाटोमा तीन दिनसम्म नयाँ वेहुलाको रूपमा उनीसँग रात बिताउनुभयो ।[3] त्यति बेला उहाँले उनको अनुहारमा निलो दाग

१ जादुल मआद भाग २, जअ मुअजमुल सगिर भाग १
२ तारिख खिज्री भाग १

3 सही बुखारी भाग १ जादुल मआद भाग २

देखेर भन्नुभयो : यो के हो ? उनले भनिन् : हे ईशदूत तपाईं खैबर आउनुभन्दा पहिला मैले सपनामा चन्द्रमालाई आफ्नो फुटेर मेरो काखमा खसेको देखेकी थिएँ । अल्लाहको कसम मलाई तपाईंको बारेमा केही पनि थाहा थिएन । मैले त्यो सपना आफ्नो श्रीमानसँग भन्दा उनले मलाई तिमीले मदिनाको शाहलाई चाहेकी छौ भनेर झापड हानेका थिए ।[१] त्यसकारण यस्तो दाग परेको हो ।

## बिखालु बाखाको मासु खुवाइएको घटना

खैबरमाथि विजय प्राप्त गरेर मुहम्मदﷺ स्थिर भएपछि सलाम बिन मश्कम्की श्रीमती जैनब बिन्त हारिसले उहाँकहाँ बाखाको भुटेको मासु पठाई । उसले मुहम्मदﷺलाई कुन अंगको मासु मन पर्छ भन्ने कुरा सोधिसकेकी थिई । उहाँलाई गोडा मन पर्छ भनेर भनिएपछि उसले गोडामा खुब बिख हाली । बाँकी अंगमा पनि बिख मिलाई । त्यो मासु लिएर मुहम्मदﷺकहाँ आई । मुहम्मदﷺको सामुन्ने राखेपछि उहाँले गोडा लिएर चपाउनुभयो तर नखाइकन थुकिदिनुभयो । उहाँले भन्नुभयो त्यो भाँडामा विष मिलाइएको छ । त्यसपछि उहाँले जैनबलाई बोलाउनुभयो । उसले स्वीकार गरी । तिमीले यस्तो किन गरेकी भनेर उहाँले सोध्नुभयो । उसले जवाफ दिई, यदि तपाईं शाह हो भने हामीलाई तपाईंबाट छुट्कारा मिल्नेछ यदि ईशदूत हो भने तपाईंलाई यसको बारेमा जानकारी हुनेछ भन्ने कुरा सोचेर । त्यो कुरा सुनेर उहाँले उसलाई माफ गरिदिनुभयो ।

त्यस अवसरमा उहाँसँग बशिर बिन बराअ पनि थिए । उनले एक गास खाइसकेका थिए । त्यसबाट उनको मृत्यु भयो ।

उहाँले त्यो आइमाइको मृत्युदण्ड दिनुभएको थियो वा माफ गिरिदिनुभएको थियो त्यस बारेमा मतभेद छ । त्यस कुरालाई यसरी संयोजन गरिएको छ । पहिला उहाँले उसलाई माफ गरिदिनुभयो तर विषका कारण बशिरको मृत्यु भएपछि मृत्युदण्डको रूपमा उसको पनि हत्या गरिदिनुभयो ।[२]

## खैबर युद्धमा दुवै पक्षका मृतकहरू

खैबरको विभिन्न झडपमा मुसलमानको तर्फबाट जम्मा १६ जना शहिद भएका थिए । चार जना कुरैश कबिलाबाट, एक जना अश्जअ कबिलाबाट, एक जना अस्लम कबिलाबाट र एक जना खैबरवासीबाट र बाँकी अनसारबाट ।

---

१ जादुल मआद भाग २, इब्ने हेशाम भाग २
२ जादुल मआद भाग २, फतहुलबारी भाग ७, वास्तविक घटना विस्तृत र संक्षिप्त दुवै प्रकारले वर्णन गरिएको छ । सही बुखारी भाग १, इब्ने हेशाम भाग २

एक अर्को भनाइ यस प्रकार छ । सबै झडपमा १८ जना मुसलमान शहिद भएका थिए । विद्वान मनसुरीले १९ जना बताएका छन् । उनी भन्छन्, जीवनीकारहरूले खैबरमा शहिद भएकाको संख्या १५ बताएका छन् तर मैले अनुसन्धान गर्दा २३ जनाको नाम पाएँ । जुनैफ बिन वायलाको नाम वाकदीले उल्लेख गरेका छन् भने जुनैफ बिन हबिबको नाम केवल तबरीले उल्लेख गरेका छन् । बशिर बिन बराअको मृत्यु युद्धपछि विष खुवाइएको कारणले भएको थियो जुन विष जैनब बिन्त हारिसले मुहम्मदﷺको लागि पठाएकी थिई । बशिर बिन अब्दुल मुन्जिरको बारेमा दुइमत छ । १ बदरमा शहिद भएका थिए २ खैबरमा शहिद भएका थिए । मेरो विचारमा पहिलो कुरा नै बढी सही लाग्छ ।[१] विरोधी पक्ष यहुदीको तर्फबाट ९३ जना मारिएका थिए ।

## फदक

खैबर पुगेपछि मुहम्मदﷺले फदकका यहुदीहरूलाई इस्लामको निम्तो दिनको लागि महिसा बिन मस्उदलाई फदक पठाउनु भएको थियो । फदकवासीले इस्लाम स्वीकार्नमा ढिलाइ गरे । तर अल्लाहले खैबरमाथि मुसलमानहरूलाई विजय प्रदान गरेपछि उनीहरू डराए । उनीहरूले मुहम्मदﷺकहाँ आफ्नो मान्छे पठाएर खैबरले झैँ फदकले पनि आधा उत्पादन दिने सर्तमा सम्झौता गर्ने प्रस्ताव गरे । उहाँले उनीहरूको प्रस्तावलाई स्वीकार गर्नुभयो । यसरी फदकको जमिन पनि मुहम्मदﷺको अधीनमा भयो । किनभने मुसलमानहरूले त्यहाँ युद्ध गर्नु परेको थिएन ।[२] फदक नामक ठाउँलाई अहिले हायतको नामबाट चिनिन्छ । त्यो अहिले हायलको क्षेत्रमा छ । मदिनाबाट त्यसको दुरी करिब २५० कि.मी. छ ।

## वादीउलकुरा

मुहम्मदﷺ खैबरबाट फुर्सद पाएपछि कुरा नामक उपत्यकातिर लाग्नुभयो । त्यहाँ पनि यहुदीहरूको एउटा जमात थियो । उनीहरूको साथमा अरबीहरूको पनि एउटा जमात थियो ।

मुसलमान त्यहाँ झर्दा उनीहरूले मुसलमानमाथि तीर वर्षाए । त्यहाँ उनीहरू पहिलादेखि नै तैनात थिए । त्यहाँ मुहम्मदﷺको एक जना गुलाम मारियो । सहाबीहरूले उनी स्वर्गवासी भए भन्दा मुहम्मदﷺले भन्नुभयो : होइन ,त्यो जातको कसम जसको हातमा मेरो ज्यान छ उसले खैबरको युद्धप्राप्त भाग लगाउनुभन्दा

---

१ रहमतुल लिल् आलमिन भाग २
२ इब्ने हेशाम भाग २

पहिला एउटा बर्को चोरेको थियो त्यो आगो बनेर उमाथि दन्केको छ । सहाबीहरूले मुहम्मदﷺको कुरा सुनेपछि एक जना व्यक्ति एउटा वा दुईवटा तक्मा लिएर उहाँको सेवामा उपस्थित भयो । मुहम्मदﷺले भन्नुभयो : त्यो एउटा वा दुईटा तक्मा आगोको हो ।[१]

त्यसपछि मुहम्मदﷺले युद्धको लागि सहाबीहरूलाई पंक्तिबद्ध गर्नुभयो । लश्करको झण्डा सअद बिन उबादहलाई दिनुभयो । एउटा झण्डा हब्बाब बिन मुन्जिरलाई र अर्को झण्डा अब्बाद बिन बिश्रलाई दिनुभयो । त्यसपछि उहाँले यहुदीहरूलाई इस्लामको निमन्त्रणा दिनुभयो । उनीहरूले अस्वीकार गरे । उनीहरूबाट एक जना लड्न मैदानमा आयो । मुसलमानको तर्फबाट जुबैर बिन औवामले अगाडि बढेर उसको हत्या गरिदिए । फेरि अर्को व्यक्ति आयो जुबैरले उसको पनि हत्या गरिदिए । त्यसपछि पनि एक जना मैदानमा आयो । त्यसको सामना गर्न अली निस्के र उनले उसको हत्या गरिदिए । यसरी विस्तारै विस्तारै उनीहरूको तर्फबाट ११ जनाको हत्या भयो । जब कुनै एक जना यहुदीको हत्या हुन्थ्यो अनि मुहम्मदﷺले उनीहरूलाई इस्लमाको निम्तो दिनुहुन्थ्यो ।

नमाजको समय हुँदा मुहम्मदﷺले साथीहरूलाई नमाज पढाउनु हुन्थ्यो । त्यसपछि फेरि यहुदीतर्फ फर्केर उनीहरूलाई इस्लामको निमन्त्रणा दिनुहुन्थ्यो । यसरी लडाइँ गर्दागर्दा दिन डुब्यो । दोस्रो दिन विहान उहाँ जानुभयो । घाम झुल्केर भाला बराबर जति पनि माथि नआउँदै उनीहरूले आफुसँग भएको सम्पूर्ण मालसामान मुहम्मदﷺलाई सुम्पिदिए । अर्थात उहाँले शक्तिको भरमा विजय प्राप्त गर्नुभयो । अल्लाहले उनीहरूको मालसामान युद्धप्राप्तको रूपमा प्रदान गरिदिए । सहाबीहरूले अत्यधिक मालसमान हात पारे । मुहम्मदﷺलाई कुर्रा नामक उपत्यकामा चार दिनसम्म बस्नु पऱ्यो । युद्धप्राप्तको रूपमा जुन मालसामान हात लागेको थियो साहबीहरूमा भाग लगाइदिनुभयो । तर खजुरका बगैंचा तथा जमिन यहुदीहरूलाई नै छाडिदिनुभयो र त्यसको बारेमा पनि उनीहरूसँग मामिला तय गर्नुभयो ।[२]

## तुऐमा

तुऐमाका यहुदीहरूलाई खैबर,फदक र कुर्रा उपत्यकावासीहरूले आत्मसमर्पण गरेको खबर भएपछि उनीहरूले मुसलमानविरुद्ध लडाइँको प्रदर्शन गर्नुको सट्टा आफ्नो तर्फबाट मान्छेलाई पठाएर सम्झौता गर्ने प्रस्ताव गरे । मुहम्मदﷺले उनीहरूको प्रस्ताव स्वीकार्नुभयो । अनि ती यहुदीहरू आफ्नो धनसम्पत्तिका मालिक

---

१ सही बुखारी भाग २

२ जादुल मआद भाग २

आफै बने ।[१] त्यस बारेमा उहाँले एउटा कागज लेखाउनुभयो जुन यस प्रकार छ :यो लिखित कुरा मुहम्मदﷺको तर्फबाट बनु आदियाको लागि हो । उनीहरूको लागि जमानत छ । उनीहरूमाथि कर छ । त्यसमा न त उनीहरूमाथि अत्याचार गरिने छ न उनीहरूलाई देशनिकाला गरिनेछ । यो सम्झौता सदाको लागि हुनेछ । त्यो कागज खालिदले लेखेका थिए । [२]

## मदिना फिर्ता

मुहम्मदﷺ मदिना फर्कनुभयो । फर्कने क्रममा मानिसहरू एउटा उपत्यकामा पुगेर ठूलो स्वरले अल्लाहु अक्बरको नारा लगाउन थाले । मुहम्मदﷺले भन्नुभयो : विस्तारै विस्तारै भन किनभने तिमीले कुनै लाटो तथा अनुपस्थित हस्तीलाई पुकारेका छैनौ । तिमीहरूले त त्यो हस्तीलाई पुकारेका छौ जसले सुन्दछ र जो नजिक छ । [३]

बाटोमा रातभरी यात्रा गरिरहँदा मुहम्मदﷺ रातको अन्तिम पहरमा बाटोको कुनै ठाउँमा बस्नुभयो र बिलाललाई नमाजको लागि उठाउन भनेर उहाँ सुत्नुभयो । बिलाल पनि निदाए । उनी पूर्वतर्फ आफ्नो सवारीमा अडेस लगाएर बसिरहँदा सुतेका थिए । कुनै पनि उठ्न सकेनन् । घाम झुल्कियो । त्यसपछि सबैभन्दा पहिला मुहम्मदﷺ उठ्नुभयो र अरूलाई पनि उठाउनुभयो । उहाँ त्यस उपत्यकाबाट हिँडेर अर्को ठाउँमा जानुभयो र फजरको नमाज पढाउनुभयो । भनिन्छ, त्यो घटना कुनै अर्को यात्रामा घटेको थियो ।[४] खैबरमा भएको झडपको विवरणलाई नियाल्ने हो भने खैबरबाट मुहम्मदﷺको फिर्ती कि त हिजरी सम्बत ७ साल सफरको अन्तिममा भएको थियो कि रब्बिअल औवल महिनामा ।

## सरिया अबान बिन सइद

गरिमामय तथा पवित्र महिना वितेपछि मदिनालाई पूर्ण रूपमा खाली छोड्नु रणनीति एवं तत्वदर्शी विपरित हो भन्ने कुरा मोहम्मदﷺलाई अन्य कमाण्डरहरूभन्दा राम्रोसँग थाहा थियो । किनभने मदिनाको वरिपरि बसेका पाखे मानिसहरू चोरी तथा डकैती गर्न मुसलमानहरू असचेत भएको अवस्थाको खोजीमा हुन्थे । त्यसैकारणले जुन दिनहरूमा उहाँ खैबर जानुभएको थियो तिनै दिनहरूमा उहाँले ती पाखेहरूलाई डर देखाउनको लागि अबान बिन सइदको नेतृत्वमा नजदतर्फ एक छापामार टोली

---

१ जादुल मआद भाग २
२ इब्ने सइद भाग २
३ सही बुखारी भाग २
४ इब्ने हेशाम भाग २, यो घटना प्रसिद्ध छ र सबै हदिसका किताबहरुमा उल्लेख छ । जादुल मआदमा हेर्नुहोस् भाग २,

पठाउनुभयो । अबान आफ्नो जिम्मेवारी पूरा गरेर फर्कँदा खैबरमा मुहम्मदﷺसँग उनको भेट भयो । त्यति बेला उहाँले खैबरमाथि विजय हासिल गरिसक्नु भएको थियो ।

त्यो छापामार टोली हिजरी सम्बत ७ साल सफर महिनामा पठाइएको थियो होला । त्यस बारे बुखारीमा उल्लेख छ ।[१] हाफिज इब्ने हजर भन्छन् : मलाई त्यसको बारेमा थाहा हुन सकेन ।[२]

१ सही बुखारी भाग २
२ फतहुलबारी भाग ७

# जातुर्रेकाको युद्ध

अहजाबका तीन वटा बलिया शक्तिमध्ये दुई शक्तिलाई परास्त गरेपछि तेस्रो शक्तितिर ध्यानकेन्द्रित गर्ने मुहम्मदﷺले पूर्ण अवसर पाउनुभयो । तेस्रो शक्ति भनेको दुई वटा पाखे कबिलाहरू थिए जुन नजदको मरुभूमिमा पाल टाँगेर बसेका थिए । त्यहाँ बसेर लुटमारको गतिविधिमा क्रियाशील थिए ।

ती पाखेहरू कुनै वस्ती तथा शहरका वासी थिएनन् । उनीहरूको बास घर तथा किल्लामा थिएन । त्यसकारण मक्कावासी र खैबरवासीलाई भन्दा उनीहरूलाई पूर्ण रूपमा नियन्त्रण गर्न र उनीहरूको दंगाफसादको आगो निभाउन अति कठिन थियो । त्यसकारण उनीहरूलाई डर देखाउन र त्रसित पार्न उनीहरूको विरुद्ध भय देखाउने खालको कारबाही नै लाभदायक हुन सक्थ्यो ।

तसर्थ ती पाखेहरूलाई त्रास तथा डर देखाउनको लागि र केही भनाइ अनुसार मदिनामा छापा मार्नको लागि जम्मा भएका पाखेहरूलाई तितरवितर गर्नको लागि मुहम्मदﷺले एउटा आतंकित आक्रमण गर्नुभयो । त्यै युद्ध जातुर्रेकाको नामबाट परिचित छ ।

युद्ध बारे चर्चा गर्ने आम लेखकहरूले त्यस युद्धलाई हिजरी सम्बत ४ सालको भनेका छन् । तर इमाम बुखारीले त्यसलाई हिजरी सम्बत ७ सालको बताएका छन् । त्यस युद्धमा अबु मुसा अश्अरी तथा अबु हुरैराह शरिक भएको कारण त्यो युद्ध खैबरको युद्धभन्दा पछि भएको प्रमाणित हुन्छ । रब्बिअल औवलको महिना थियो । किनभने अबु हुरैराह त्यति बेला मदिनामा गएर इस्लाम स्वीकारेका थिए जब मुहम्मदﷺ खैबरको लागि मदिनाबाट निस्किसक्नु भएको थियो । त्यसैगरी अबु हुरैराह मुसलमान भएर सोझै मुहम्मदﷺको सेवामा उपस्थित हुन खैबर पुगे । उनी पुग्दा खैबरमाथि विजय प्राप्त भइसकेको थियो । तसर्थ जातुर्रेकाको युद्धमा उनी दुवै शरिक भएका कारण त्यो युद्ध खैबरपछि कुनै समयमा भएको कुरा प्रमाणित हुन्छ ।

जीवनीकारहरूले त्यस युद्धको बारेमा जे कुरा भनेका छन् त्यसको सारांश यस प्रकार छ । मुहम्मदﷺले अन्मार बनु गत्फानका दुई शाखा बनु सअलबा र बनी महारिबको बैठकको खबर सुनेर मदिनाको व्यवस्थापनको जिम्मेवारी अबु जर वा उस्मान बिन अफ्फानलाई सुम्पिनुभयो र तुरुन्तै चार सय सात जना साथीहरूको साथमा नजद शहरतिर लाग्नुभयो । मदिनाबाट दुई दिन बराबरको दुरीमा रहेको नखला भन्ने ठाउँमा पुगेपछि बनु गत्फानको एक जमातसँग सामना भयो तर युद्ध भने भएन । त्यस अवसरमा मुहम्मदﷺले युद्धको अवस्थामा पढिने नमाज पढाउनुभयो । बुखारीमा नमाजको लागि अकामत भनिएको कुरा उल्लेख छ । उहाँले एक समूहलाई दुई रकअत नमाज पढाउनुभयो । त्यसपछि त्यो समूह पछाडि गयो फेरि उहाँले अर्को

समूहलाई दुई रकअत पढाउनुभयो । यसरी मुहम्मदﷺको चार रकअत भयो र अन्य समूहको दुई रकअत भयो ।[1]

सही बुखारीमा अबु मुसामार्फत वर्णन गरिएको छ, उनी भन्छन् : हामीहरू मुहम्मदﷺको साथमा निस्केका थियौँ । हामीहरू ६ जना थियौँ । उँट केवल एउटा थियो । हामीहरू पालैपालो सवार हुन्थ्यौँ । जसले गर्दा हाम्रो खुट्टामा छेदैछेद भयो । मेरो खुट्टामा पनि चोट लागेर नङ झरेको थियो । त्यसकारण हामीले आफ्नो खुट्टामा पूरानो कपडाको झुत्रा बाँधेका थियौँ । जसले गर्दा त्यस युद्धको नाम जातुर्रिका अर्थात झुत्रा वाला पऱ्यो । किनभने हामीहरूले आफ्नो खुट्टामा झुत्रा तथा पट्टीहरू बेरेका थियौँ ।[2]

सही बुखारीमा जाबिरमार्फत वर्णन गरिएको छ, उनी भन्छन् : हामीहरू जातुर्रेकामा मुहम्मदﷺको साथमा थियौँ । हामी रूखको छायाँमा बस्दा उहाँको लागि छायाँ छोडिदिन्थ्यौँ । एक चोटि मुहम्मदﷺ कुनै ठाउँमा बस्नुभएको थियो । मानिसहरू रूखको छायाँको शीतलमा बस्न यताउता काँडेदार रूखतिर गए । मुहम्मदﷺ पनि एउटा रूखतिर जानुभयो र त्यही रूखमा आफ्नो तरवार झुन्डाएर सुत्नुभयो । जाबिर भन्छन् : हामीलाई एक झप्का निद्रा लागे लगत्तै एक जना बहुदेववादी आएर मुहम्मदﷺको तरवार निकालेर भन्यो, के तिमी मसँग डराउँछौ ? उहाँﷺले भन्नुभयो: डराउँदिनँ । उसले भन्यो तेसो भए मबाट तिमीलाई कसले बचाउँछ ? उहाँﷺले भन्नुभयो: अल्लाहले ।

जाबिर भन्छन्, अचानक मुहम्मदﷺले हामीलाई गुहार्नुभयो । हामी त्यहाँ पुग्दा एक जना पाखे अरबीलाई देख्यौँ जो मुहम्मदﷺको साथमा बसेको थियो । उहाँﷺले भन्नुभयो, म सुतेको थिएँ उसले मेरो तरवार निकाल्यो । म बिउँझेँ । उसले निकालेको तरवार उसको हातमा थियो । उसले मलाई भन्यो । तिमीलाई मबाट कसले बचाउँछ ? मैले भनेँ : अल्लाहले । हेर, यही व्यक्ति हो जो यहाँ बसेको छ । मोहम्मादﷺले उसको निन्दा गर्नु भएन ।

अबु अवानामार्फत वर्णन गरिएको हदिसमा थप अरू विवरण छ । जब उहाँﷺले उसको प्रश्नको जवाफमा अल्लाह भन्नुभयो उसको हातबाट तरवार खस्यो त्यसपछि मुहम्मदﷺले तरवार उठाएर भन्नुभयो अब तिमीलाई मबाट कसले बचाउँछ ? उसले भन्यो : तपाईंले, मलाई माफ गरिदिनुहोस् । उहाँﷺले भन्नुभयो, के तिमीले अल्लाहबाहेक कुनै पूजनीय छैन र म अल्लाहको दूत हुँ भनी मान्न तयार छौ ? उसले

१ सही बुखारी भाग १
२ सही बुखारी भाग २, सही मुस्लिम भाग २

भन्यो, मैले तपाईंसँग लडाइँ गर्ने छैन र तपाईं विरुद्ध लडाइँ गर्नेहरूको साथ पनि दिने छैन भनी बाचा गर्दछु । जाबिरको भनाइ छ , त्यसपछि उहाँﷺले उसलाई उसको बाटोमा छाडिदिनुभयो । उसले आफ्नो समुदायमा गएर भन्यो : म तिमीहरूकहाँ महामानवबाट आउँदैछु । [१]

सही बुखारीमा वर्णन गरिएको हदिस जसलाई मुसद्दद्ले अबु अवानाबाट र उनले अबु बशरमार्फत वर्णन गरेका छन् , त्यसमा भनिएको छ , त्यस व्यक्तिको नाउँ गौरिस बिन हारिस थियो ।[२] इब्ने हजर भन्छन् :वाकदी अनुसार त्यस घटनाको विवरण यस प्रकार बयान गरिएको छ : त्यो पाखे अरबीको नाउँ दउसुर थियो र उसले इस्लाम कबुल गरेको थियो । तर वाकदीको कुराबाट ती दुईटा अलग अलग घटना थिए जुन अलग अलग युद्धमा घटेका थिए भन्ने कुरा झल्कन्छ । अल्लाह नै सर्वज्ञाता छन् ।[३]

त्यस युद्धबाट फिर्ता हुँदा सहाबीहरूले एक जना बहुदेववादी महिलालाई गिरिफतार गरेपछि उसको लोग्नेले मुहम्मदका साथीहरूको नरसंहार गर्छु भनी कसम खाएको थियो । फलत: ऊ रातको समयमा आयो । मुहम्मदﷺले शत्रुबाट मुसलमानहरूलाई सुरक्षित राख्नको लागि दुई जना व्यक्ति अब्बाद बिन बिश्र र अम्मार बिन यासिरलाई पहरा दिने जिम्मा लगाउनु भएको थियो । ऊ आउँदा अब्बाद बिन बिश्र नमाज पढिरहेका थिए । उसले नमाज पढेको अवस्थामा नै अब्बाद बिन बिश्रलाई वाण हान्यो तर उनले नमाज नतोडी वाण निकालेर फ्याँके । उसले फेरि दोस्रो र तेस्रो पटक वाण हान्यो तर पनि उनले नमाज तोडेनन् र सलाम फेरेर नमाज समापन गरे । अनि आफ्नो साथीलाई उठाए । साथीले त्यो अवस्था देखेर सुब्हानल्लाह भन्दै भने : किन मलाई नउठाएको ? मैले एउटा सुरह पढिरहेको थिएँ र त्यसलाई तोड्न चाहिन ।[४]

कठोर मन भएका अरबीहरूलाई डर देखाउन त्यस युद्धले ठूलो भूमिका खेल्यो । यदि त्यस युद्धपछि भएका झडपलाई नियाल्ने हो भने गत्फानका कबिलाले त्यस युद्धपछि टाउको उठाउने आँट पनि नगरेको र कमजोर भएर आत्मसमर्पण गरी अन्तिममा इस्लाम स्वीकारेको साथै ती अरबीहरूको कैयन कबिलाहरू मक्काको विजयमा र हुनैनको युद्धमा मुसलमानको साथमा रहेको लगायत उनीहरूलाई हुनैन युद्धको युद्धप्राप्तबाट भाग दिइएको कुरा पुष्टि हुन्छ । त्यसपछि फेरि मक्काबाट फिर्ता

---

१ अब्दुल्लाह नजदीको मुख्तसर सिरत, फतहुलबारी भाग ७
२ सही बुखारी भाग २
३ फतहुलबारी भाग ७
४ जादुल मआद भाग २, इबने हेशाम भाग २, जादुल मआद भाग २, फतहुलबारी भाग ७

भएपछि उनीहरूकहाँ दानदक्षिणा असुल गर्न इस्लामी कर्मचारीहरू पठाइएको र उनीहरूले आफ्नो दानदक्षिणा व्यवस्थित रूपमा अदा गरेको पाइन्छ।

जे होस् त्यस रणनीतिपछि खन्दकको युद्धमा मदिनामाथि आक्रमण गर्ने ती तीनै वटा शक्ति टुट्यो जसले गर्दा सम्पूर्ण इलाकामा अमन शान्ति छायो । उनीहरूमध्येका केही कबिलाले केही इलाकामा हंगामा गरेका थिए त्यसलाई मुसलमानहरूले सजिलैसँग नियन्त्रणमा लिए । त्यति मात्र नभई त्यस युद्धपछि ठूला ठूला शहर तथा राज्यहरूमाथि विजयको आरम्भ भयो । किनभने त्यस युद्धपछि राज्यको आन्तरिक परिस्थिति पूर्ण रूपले मुसलमानको नियन्त्रणमा आइसकेको थियो ।

## ७ हिजरीका केही सराया (झडपहरु)

त्यस युद्धबाट फिर्ता भएपछि मुहम्मदﷺ ७ हिजरीको शौवाल महिनासम्म मदिनामा बस्नुभयो । त्यस अवधिभरी त्यहाँबाट कैयन छापामार टोली पठाउनुभयो । केहीको विवरण निम्नलिखित छ ।

### १, सरिया कुदैद (सफर वा रब्बिअल औवल ७ हिजरी)

त्यो छापामार टोली गालिब बिन अब्दुल्लाह बिन लैसीको नेतृत्वमा कुदैदतर्फ बनु मलुह कबिलालाई त्रसित बनाउनको लागि पठाइएको थियो । कारण, बनु मलुहले बशर बिन सुवैदका साथीहरूको हत्या गरेको थियो । त्यसैको बदला लिनको लागि त्यस छापामार टोलीलाई पठाइएको थियो । त्यो छापामार टोलीले रातको समयमा छापा मारेर अत्यधिक मानिसहरूको हत्या गरेको थियो । साथै जनावर समेत कब्जा गरेर ल्याएको थियो । उता पछाडिबाट शत्रुहरूको एउटा ठूलो फौजले मुसलमानको पिछा गर्‍यो । उनीहरूलाई भेटाउन लाग्दा वर्षा भयो र भीषण बाढी आयो । त्यो बाढी वारिपारि रहेका मुसलमान र शत्रुबीच बाधक बन्यो । यसरी मुसलमानहरूले बाँकी यात्रा पनि राम्ररी तय गरे ।

### २, सरिया हस्मी (जमादिउल आखिर ७ हिजरी)

त्यस बारे विभिन्न देशका राजाहरूको नाउँमा पत्र पठाइएको पाठ अन्तर्गत चर्चा गरिसकिएको छ ।

### ३, सरिया तुरबा (शअबान ७ हिजरी)

त्यो छापामार टोली उमर बिन खत्ताबको नेतृत्वमा पठाइएको थियो । उनको साथमा तीस जना साथीहरू थिए । उनीहरू रातको समयमा यात्रा गर्थे र दिनमा लुकेर बस्थे । तर उनीहरूको बारेमा थाहा पाएपछि बनु हवाजिनका मानिसहरू भागे । उमर त्यो इलाकामा पुगे । तर त्यहाँ कोही भेटिएन र उनी मदिना फर्के ।

### सरिया फदक (शअबान ७ हिजरी)

त्यो छापामार टोली बशीर बिन सअद अन्सारीको नेतृत्वमा तीस जना साथीहरूको साथ बनु मुर्रालाई तर्साउन पठाइएको थियो । बशीर उनीहरूको क्षेत्रमा गएर भेडा बाखा लिएर मदिना फर्कदा राती शत्रुले फेला पार्‍यो । मुसलमानहरूले अडिग भएर वाण हाने । वाण पनि सिद्धयो । उनीहरू निहत्था भए जसले गर्दा सबै जनाको हत्या भयो । केवल बशीर जीवित थिए । उनलाई घाइते अवस्थामा फदक ल्याइयो । उनले चोटपटक ठिक हुन्जेलसम्म यहुदीहरूकहाँ विश्राम गरे । त्यसपछि उनी मदिना आए ।

## ५,सरिया मिफआ ( रमजान ७ हिजरी)

त्यो छापामार टोली गालिब बिन अब्दुल्लाह लैसीको नेतृत्वमा बनु अवाल र बनु अब्द बिन सअलबा विरुद्ध त्रसित पार्न पठाइएको थियो । भनिन्छ, जुहैनीया कबिलाको शाखा हुरुकातलाई डर देखाउनको लागि पठाइएको थियो । मुसलमान छापामारको संख्या एक सय तीस थियो । उनीहरूले शत्रुमाथि अचानक आक्रमण गरिदिए । जसले टाउको उठाउने प्रयास गर्‍यो उसको पनि हत्या गरिदिए । त्यसपछि भेडा बाखा कब्जा गरेर ल्याए । त्यसै झडपमा उसामा बिन जैदले नुहैक बिन मर्दासलाई जसले ईश्वर एक छन् भन्ने कुरा स्वीकार गर्दा पनि उसको हत्या गरिदिएका थिए । त्यसमा मुहम्मदﷺले रिसाएर भन्नुभयो : उसको छाती चिरेर किन उसको मन हेरेनौ, ऊ साचो थियो कि झुट्टा ?

## ६, सरिया खैबर (शौवाल ७ हिजरी)

त्यो छापामार टोलीमा तीस जना थिए । अब्दुल्लाह बिन रवाहाको नेतृत्वमा पठाइएको थियो । कारण, उसैर वा बशीर बिन जिरामले बनु गत्फानलाई मुसलमानमाथि आक्रमण गर्न संगठित गरिरहेको थियो । मुसलमानले असैरलाई मोहाम्मदﷺले तिमीलाई खैबरको मन्त्री बनाइदिनु हुनेछ भनेर बचन दिलाए । उनीहरूले उसलाई उसको तीस जना साथीहरू समेत जान तयार गराए । तर करकरह नियार भन्ने ठाउँमा पुगेर दुवै पक्षबीच अविश्वासको वातावरण सृजना भयो । जसले गर्दा असैर र उसका साथीहरूले ज्यान फाल्नु पर्‍यो ।

## ७, सरिया यमन व जब्बार (शौवाल ७ हिजरी)

भनिन्छ, जब्बार बनु गत्फानको एक अर्को भनाइ अनुसार बनु फजारह र बनु अजरहको इलाकाको नाम थियो । त्यहाँ बशीर बिन सअद अन्सारीलाई तीन सय साथीहरूको साथमा पठाइयो । कारण एउटा ठूलो जमातलाई फुटाउनु थियो जो मदिनामा आक्रमण गर्न जम्मा भइरहेको थियो । मुसलमानहरूले राती यात्रा गर्थे दिनमा लुकेर बस्थे । शत्रुहरू बशीर आएको खबर पाउने वित्तिकै भागे । बशीरले अत्यधिक पाल्तु जनावर कब्जा गरेर ल्याए । साथै दुई जना व्यक्तिलाई युद्धबन्दी बनाए । ती दुवैलाई लिएर मुहम्मदﷺको सेवामा हाजिर भएपछि उनीहरू दुवैले इस्लाम स्वीकारे ।

## ८, सरिया गाबा

त्यस सरायालाई इब्ने कैयमले उमराह कजाभन्दा पहिला ७ हिजरीको सरायामा गन्ती गरेका छन् । कारण जशम बिन मुआविया कबिलाको एक जना व्यक्ति धेरै मानिसहरूलाई लिएर गाबा आयो । उसले बनु कैसलाई मुसलमान विरुद्ध

लडाउन चाहन्थ्यो । मुहम्मदﷺले त्यसको बारेमा पत्ता लगाउन अबु हदर्दलाई दुई जना साथीको साथमा पठाउनुभयो । घाम अस्ताउँदा उनीहरू ती मानिसहरू भएको ठाउँमा पुगे । अबु हदर्द एक ठाउँमा लुके । उनका दुवै साथी अर्को ठाउँमा लुके । उनीहरूका गोठालेहरूले केही ढिलो गरे । रात पर्न लाग्यो । त्यसैले उनीहरूको सरदार एकलै उठ्यो र हिँड्यो । अबु हदर्द लुकेको ठाउँबाट जाँदा उनले उमाथि वाण हाने । त्यो वाण छाती छेद गर्दै मुटुमा लाग्यो र केही बोल्न नपाई ऊ ढल्यो । अबु हदर्द टाउको काटेर नारा लगाउँदै लस्करतिर दौडे । उनका दुवै साथीले पनि नारा लगाए । शत्रुहरू भाग्न थाले । त्यसपछि उनीहरूले उँट बाखा कब्जा गरेर ल्याए । [१]



१ जादुल मआद भाग २, इबने हेशाम भाग २, रहमतुल लिल् आलमिन भाग २, जादुल मआद भाग २, तलकिहुल फहुम, अब्दुल्लाह नजदीको मुख्तसर सिरत

## उमराहे कजा

इमाम हाकिम भन्छन् : विश्वसनीय स्रोतबाट प्राप्त खबर अनुसार जिल कअदा महिनाको चन्द्रमा देखिएपछि उहाँले साथीहरूलाई सबैले आफ्नो उमराह उमराहे कजाको रूपमा अदा गर्न र हुदैबियामा सामिल भएका कुनै पनि व्यक्ति त्यसमा पछि नपर्न निर्देशन दिनुभयो । फलस्वरूप त्यस अवसरमा शहिद भएका बाहेक सबै मानिसहरू गए । हुदैबियावासी मात्र नभई अन्य केही मानिसहरू पनि उमराह गर्न साथमा निस्के । यसरी उमराह गर्नेहरूको संख्या दुई हजार पुग्यो । उनीहरू बाहेक महिला तथा बालबालिकाहरू पनि साथमा थिए ।[१]

त्यस अवसरमा मुहम्मदﷺले मदिनाको कायम मुकाम उवैफ बिन अजब्त दैली वा अबु रहम गिफारीलाई बनाउनुभयो । साथमा साठी वटा उँट लिएर जानुभयो । त्यसको देखरेखको जिम्मेवारी नाजिया बिन जुन्दुबलाई दिनुभयो । उहाँले जुल हुलैफाबाट उमराहको लागि एहराम बाँधेर तलबीया पढ्नुभयो । उहाँसँगै साथीहरूले पनि तलबीया पढे । कुरैशले कतै सम्झौता उल्लंघन गर्छन कि भन्ने शंकाले गर्दा उहाँ सशस्त्र लडाकुका साथ तयार भएर निस्कनुभयो । उपत्यकामा पुगेर उनीहरूले ढाल, सुपर, भाला सबै कुरा त्यहीँ राखे । ती सामानहरूको सुरक्षाको लागि उनीहरूले औस बिन खौली अन्सारीको मातहतमा दुई सय जना व्यक्तिलाई त्यहीँ तैनात गरे र सवारहरूको हतियार र खोलमा बन्द तरवार लिएर मक्कामा प्रवेश गरे ।[२]

मुहम्मदﷺ मक्कामा प्रवेश हुँदा आफ्नो कस्वा नामी उँटमा सवार हुनुहुन्थ्यो । मुसलमानहरूको प्रदर्शन हेर्न बहुदेववादीहरू घरबाट निस्केर उत्तरतर्फ अवस्थित कुऐकआन नामक पहाडतिर आए । उनीहरूले एक आपसमा कुरा गर्दै भनेका थिए : तिमीकहाँ यस्तो जमात आउँदैछ जसलाई यस्रीबको गर्मीले कमजोर बनाएको छ । त्यसकारण मुहम्मदﷺले सहाबीहरूलाई पहिलो तीन चक्करमा दौडने तर रुक्ने यमानी र हजरे अस्वदबीच विस्तारै हिँड्ने निदेर्शन दिनुभयो । सातै चक्कर दौडेर पूरा गर्न निर्देशन दिनु भएन । किनभने उद्देश्य केवल कृपा र दया प्राप्त गर्नु थियो । उहाँले त्यस प्रकारको निर्देशन दिनुको कारण केवल बहुदेववादीहरूको सामु आफ्नो शक्ति प्रदर्शन गर्नु थियो ।[३] त्यसपछि उहाँले सहाबीहरूलाई इजतेबा गर्ने निर्देशन दिनुभयो । इजतेबाको अर्थ आफ्नो दाहिने काँध खुला राख्नु र कपडा दाहिने काँधको तलबाट बेरेर अगाडि पछाडिबाट त्यसको दुवै छेउ देब्रे काँधमा हाल्नु हो ।

---

१ फतहुलबारी भाग ७
२ फतहुल्बारी भाग ७, जादुल मआद भाग २
3 सही बुखारी  भाग १ सही मुस्लिम भाग १

मुहम्मदﷺ मक्का त्यो पहाडी उपत्यका हुँदै जानुभयो जो हजुनमा निस्कन्थ्यो । बहुदेववादीहरू उहाँलाई हेर्न ताँती लगाएर बसेका थिए । उहाँले लब्बैकको नारा लगाइरहनु भएको थियो । उहाँले आफ्नो लाठीले हजरे अस्वदलाई छोएर परिक्रमा गर्नुभयो । त्यति बेला अब्दुल्लाह बिन रवाहा आफ्नो तरवार बोकेर मुहम्मदﷺको अगाडि अगाडि हिँडदै कविताका पंक्तिहरू पढदै थिए । त्यसको अनुवाद निम्न छ :

हे काफिरका सपूतहरू ! उहाँको लागि बाटो छाडिदेऊ, बाटो छाडिदेऊ । सम्पूर्ण भलो ईशदूतमा छ । दयालु ईश्वरले आफ्नो ग्रन्थमा अवतरण गरेका छन् । अर्थात यस्ता ग्रन्थमा जसलाई उनको दूतका लागि पाठ गरिन्छ । हे पालनकर्ता म उनको कुरामा विश्वास गर्दछु र त्यसलाई सत्य ठान्दछु । उत्तम हत्या ईश्वरको मार्गमा गरिएको हत्या हो । आज हामी उसले अवतरण गरे बमोजिम तिमीहरूलाई यस्तो मार हान्नेछौं जसले तिमीहरूको खप्पर फुट्ने छ र मित्रबाट मित्रलाई फुटाउने छ ।[१]

अनसमार्फत वर्णन गरिएको छ, त्यो पंक्ति सुनेर उमरले भने : हे रवाहा , तिमीले ईशदूत र ईश्वरले निषेधित गरिएको ठाउँ हरममा यो कविता पढ्दै छौ ? मुहम्मदﷺले भन्नुभयो : हे उमर उनलाई पढ्न देऊ । किनभने यस कविताले उनीहरूलाई वाणलेभन्दा पनि बढी चोट परेको छ ।[२]

ईशदूत र मुसलमानहरूले दौडेर तीन चक्कर लगाए । बहुदेववादीहरूले त्यो दृश्य देखेर भने : जुन मानिसहरूको बारेमा हामीले उनीहरूलाई जरोले लट्ठ बनाएको छ भनेर भनेका थियौं तिनीहरू त यी यी मानिसहरूभन्दा पनि बलिया रहेछन् ।[३]

परिक्रमा सिद्धयाएपछि मुहम्मदﷺले सफा र मरवा पहाडमा दौड लगाउनुभयो । त्यति खेर उहाँले बलि गर्न ल्याएका जनावरहरू मरवा पहाडमा रोकेर राखिएका थिए । उहाँले सइ गरेर भ्याएपछि भन्नुभयो, मरवाह पहाड लगायत मक्काको सम्पूर्ण गल्लीहरू बलिस्थल हुन् । त्यसपछि मरवा पहाड नजिक जनावरलाई बलि गरी आफ्नो कपाल खौरनुभयो । मुसलमानहरूले पनि त्यसै गरे । त्यसपछि केही मानिसहरूलाई याजुजतिर हतियारको सुरक्षाको लागि पठाइयो र जुन व्यक्तिहरूले त्यहाँ सुरक्षा दिइरहेका थिए उनीहरू आएर उमराह गरे ।

१ स्रोतमा यी कविताभित्र धेरै घोचपेच छ ।
२ जामे तिर्मिजी भाग २
3 सही मुस्लिम भाग १

मुहम्मद ﷺ मक्कामा तीन दिनसम्म बस्नुभयो । चौथो दिन विहान भएपछि बहुदेववादीहरूले अलीनिर आएर भने : आफ्नो गुरूसँग यहाँबाट जान भन । किनभने मियाद सिद्धिसक्यो । त्यसपछि मुहम्मद ﷺ मक्काबाट प्रस्थान हुनुभयो र सरिफ नामक ठाउँमा गएर बस्नुभयो ।

मक्काबाट उहाँ जान लाग्दा हमजाकी छोरी काका काका पुकार्दै पछिपछि आइन् । उनलाई अलीले समाते । त्यसपछि अली, जाफर र जैदबीच उनको बारेमा विवाद भयो । हरेकले उनलाई पाल्न आफू बढी हकदार रहेको दावी गरे । मुहम्मद ﷺले जाफरको हकमा निर्णय गरिदिनुभयो किनभने जाफरकी श्रीमती उनकी सानीआमा पर्ने थिइन् ।

उमराहको अवसरमा मुहम्मद ﷺले हारिस आमिरियाकी छोरी मैमुनासँग विवाह गर्नुभयो । विवाहको लागि मुहम्मद ﷺले मक्का पुग्नुभन्दा पहिला नै जाफरलाई आफुभन्दा अगाडि मैमुनाकहाँ पठाउनुभयो । उनले आफ्नो मामिला अब्बासलाई सुम्पिदिए । किनभने मैमुनाकी बहिनी उम्मे फजल उनकी श्रीमती थिइन् । अब्बासले मैमुनाको विवाह मुहम्मद ﷺसँग गरिदिए । मक्काबाट फिर्ता हुँदा उहाँले अबु राफेलाई मैमुनालाई उहाँको सेवामा ल्याउन भनी पछाडि छोडिदिनुभयो । उहाँ सरिफ भन्ने ठाउँमा पुगेपछि मैमुनालाई पनि उहाँको सेवामा उपस्थित गराइयो । [१]

त्यस उमराहको नाम उमराहे कजा किन पऱ्यो भने त्यो उमराह हुदैबियाको अवसरमा गरिनु पर्ने उमराहको बदलामा गरिएको थियो । वा त्यो उमराह हुदैबियामा तय गरिएको सम्झौता बमोजिम थियो । सम्झौतालाई अरबीमा कजा भनिन्छ । त्यसै तर्कलाई विज्ञहरूले सही मानेका छन् । साथै त्यो उमराह चार वटा नामले परिचित छ । उमराहे कजा, उमराहे कजिया,उमराहे केसास र उमराहे सुलह । [२]

१ जादुल मआद भाग २,
२ जादुल मआद भाग २, फतहुलबारी भाग ७

# केही अन्य सरायाहरू

## १, सरिया अबुल औजाअ (जिल हिज्ज ७ हिजरी)

मोहम्मदﷺले पचास जनाको टोली अबुल औजाअको नेतृत्वमा बनु सुलैमलाई इस्लामको निमन्त्रणा दिन पठाउनु भएको थियो। बनु सुलैमलाई इस्लामको निमन्त्रणा दिँदा उनीहरूले प्रतिउत्तरमा भने, जुन कुराको तिमीले निमन्त्रणा दिएका छौ त्यसको हामीलाई कुनै खाँचो छैन। त्यसपछि उनीहरूले घमसान लडाइँ लडे जसमा अबुल औजा घाइते भएका थिए। मुसलमानहरूले पनि शत्रुका दुई जनालाई बन्दी बनाएका थिए।

## २, सरिया गालिब बिन अब्दुल्लाह (सफर ८ हिजरी)

उनलाई दुई सय जना व्यक्तिहरूको टोलीको नेतृत्व दिई फदक वरिपरि पठाइएको थियो जहाँ बशीर बिन सअदका साथीहरूलाई शहिद गरिएको थियो। उनीहरूले शत्रुहरूको जनावर कब्जा गर्नुका साथै उनीहरूका कैयन व्यक्तिहरूको हत्या गरेका थिए।

## ३, सरिया जातु अतलह (रब्बिउल औवल ८ हिजरी)

त्यस सरायाको विवरण यस प्रकार छ। बनु कुजाअले मुसलमानमाथि आक्रमण गर्नको लागि ठूलो जमात जम्मा गरेको थियो। मुहम्मदﷺलाई थाहा भएपछि उहाँले कअब बिन उमैरको नेतृत्वमा केवल १५ जना साथीहरूलाई त्यसतर्फ पठाउनुभयो। उनीहरूसँग सामना भएपछि साथीहरूले इस्लामको निमन्त्रणा दिए। उनीहरूले इस्लाम स्वीकार्नुको सट्टा सम्पूर्ण सहाबीहरूलाई वाण हानेर अंगभंग गरी शहिद गरिदिए। एक जना मात्र बाँच्न सफल भएका थिए। उनलाई मृतकहरूको बीचबाट उठाएर ल्याइएको थियो।[1]

## ४, सरिया जातुल इर्क (रब्बिउल औवल ८ हिजरी)

त्यस घटनाको विवरण यस प्रकार छ। बनु हवाजिनले पटकपटक मुसलमानहरूलाई दुःख दिएको थियो। त्यसकारण उहाँले २५ जना साथीहरूको टोलीको नेतृत्व दिई शुजाअ बिन वहब असदीलाई उनीहरूतर्फ पठाउनुभयो। उनीहरूले शत्रुहरूको जनावर कब्जा गरी ल्याए। तर झडपको अवस्था भने सृजना भएन।[2]

---

१ रहमतुल लिल् आलमीन भाग २

२ रहमतुल लिल् आलमीन भाग २, तलकिहुल फहुम

# मुताह युद्ध

मुताह जोर्डन स्थित बल्का नजिक एउटा वस्तीको नाम थियो । त्यहाँबाट बैतुल मक्दिस दुई मिलको दुरीमा अवस्थित छ । तल चर्चा गरिने युद्ध त्यै ठाउँमा भएको थियो ।

मुहम्मदﷺको जीवनमा मुसलमानलाई लड्नु परेको त्यो सबैभन्दा महासंग्राम थियो र त्यै युद्ध इसाइ मुलुकहरूमाथि विजय हासिल गर्ने भूमिका सावित भयो । त्यो युद्ध हिजरी सम्बत ८ साल जमादिउल औवल महिना तदानुसार सेप्टेम्बर ६२९ मा भएको थियो ।

## युद्धको कारण

त्यस युद्धको कारण ईशदूतले हारिस बिन उमैर अजदीलाई आफ्नो पत्र दिएर बसरा नामक राजाकहाँ पठाउँदा इटालीयन राजाको मन्त्री शरहबिल बिन अमर गस्सानी जो बल्कामा कार्यरत थियो उसले उनलाई गिरिफतार गरी बाँधेर उनको हत्या गऱ्यो ।

स्मरण रहोस् त्यतिबेला राजदूत तथा प्रतिनिधिहरूको हत्या गर्नु महाअपराध थियो । त्यसलाई युद्धको घोषणा गरे सरी वा युद्धभन्दा पनि गम्भीर रूपमा लिइन्थ्यो । मुहम्मदﷺलाई त्यस कुराले ठूलो चोट पुऱ्यायो । जसले गर्दा उहाँले त्यस क्षेत्रमा शैन्य कारबाही गर्न तीन हजार फौजको लश्कर तयार गर्नुभयो ।[१] त्यो सबैभन्दा ठूलो इस्लामी लश्कर थियो जुन त्यसअघि अहजाबको युद्ध बाहेक अन्य कुनै पनि युद्धमा जम्मा गर्न सकिएको थिएन ।

## लश्करका कमाण्डरहरूलाई मुहम्मदﷺको निर्देशन

मुहम्मदﷺले जैद बिन हारिसालाई त्यस लश्करको कमाण्डर नियुक्त गर्दै भन्नुभयो, जैद मारिए भने जाफर र जाफर मारिए भने अब्दुल्लाह बिन रवाहा कमाण्डर हुनेछन् ।[२] उहाँले लश्करको लागि सेतो झण्डा बनाएर जैद बिन हारिसालाई प्रदान गर्नुभयो । लश्करलाई निर्देशन दिँदै उहाँले भन्नुभयो : हारिस बिन उमैरलाई हत्या गरिएको ठाउँमा गएर त्यहाँका वासिन्दालाई इस्लामको निम्तो दिनु । यदि उनीहरूले इस्लाम स्वीकारे भने ठिकै छ नत्र अल्लाहसँग मदत माग्नु र युद्ध गर्नु । साथै उहाँले भन्नुभयो : अल्लाहको नामबाट अल्लाहको मार्गमा अल्लाहका शत्रुविरुद्ध युद्ध गर्नु । उल्लंघन नगर्नु, बेइमानी नगर्नु ,कुनै बालबालिका तथा महिला, मृत्युको मूखमा

१ जादुल मआद भाग २, फतहुलबारी भाग ७
२ सही बुखारी भाग २

रहेका वृद्धहरू र चर्चमा रहेका तपस्वीहरूको हत्या नगर्नु । खजुर तथा अन्य कुनै पनि बोटबिरुवा नकाट्नु र कुनै पनि भवनलाई ध्वस्त नगर्नु ।[१]

## इस्लामी लश्करको प्रस्थान र अब्दुल्लाह बिन रवाहा शोकग्रस्त

इस्लामी लश्कर प्रस्थानको लागि तयार भएपछि सहाबीहरूले मुहम्मदﷺद्वारा नियुक्त कमाण्डरलाई सलामी दिँदै विदाई गर्दा कमाण्डर अब्दुल्लाह बिन रवाहा रोए । सहाबीहरूले सोधे : किन रुँदै हुनुहुन्छ तपाईँ ? उनले भने: संसारको मायाले वा तपाईँहरूसँगको नाताले गर्दा होइन, मुहम्मदﷺले कुरआनको त्यो श्लोक पढेको सुनेर म रोएको हुँ जसमा नर्कको वर्णन गरिएको छ । श्लोकको अनुवाद यस प्रकार छ : तिमीहरूमध्ये हरेक व्यक्ति नर्कमा जानेछ किनभने यो तिम्रो पालनकर्ताको निर्णय हो ।

नर्कमा गइयो भने कसरी फर्कन सकिएला मलाई थाहा छैन । मुसलमानहरूले भने : अल्लाहले शान्ति प्रदान गरून् , तपाईँहरूको सहयोगी बनुन्, तपाईँहरूको तर्फबाट प्रतिकार गरून् र तपाईँहरूलाई पुण्य तथा युद्धप्राप्तका साथ हामीतर्फ फर्काउन् । अब्दुल्लाह बिन रवाहा भन्छन् :

لكننى اسال الرحمن مغفرة    وضربة قرع تقذف الزبد
او طعنة بيدي حران مهجزة    بحرية تنفذ الا حشاء والكبد
حتى يقال اذا مروا على حدثى    يا راشدالله من غاز وقد رشدا

अनुवाद छ : म दयालु अल्लाहसँग क्षमायाचना चाहन्छु । साथै गिद्दी फोर्ने तरवारको मार वा कुनै भाला हान्नेको हातबाट पेटलाई छेद गर्ने मारको माग गर्दछु । मानिसहरूले मेरो चिहानबाट हिँडदा भनुन्, यो वीरयोद्धा हो जसलाई अल्लाहले सत्य मार्गदर्शन दियो र उसले मार्गदर्शन पायो ।

त्यसपछि लश्कर त्यहाँबाट प्रस्थान भयो । मुहम्मदﷺले उनलाई विदाई गर्न उनको साथमा सिनियतुल वेदाअसम्म जानुभयो र त्यहाँबाट लश्करलाई विदाई गर्नुभयो ।[२]

## इस्लामी लश्करको पहल र लश्करलाई भयानक परिस्थितिको सामना

इस्लामी लश्कर उत्तरबाट बढ्दै मआन नामक ठाउँमा पुग्यो । त्यो क्षेत्र हिजाजको सिमाना जोर्डनमा अवस्थित छ । लश्कर त्यहाँ केम्प लगाएर बस्यो ।

---

१ अब्दुल्लाह नजदीको मुख्तसर सिरत, यो हदिस विना कुनै विवरण मुस्लिम, दाऊद, तिर्मिजी,इबने माजामा उल्लेख छ ।
२ इब्ने हेशाम भाग २ जादुल मआद भाग २,

जासुसहरूले इटालियन बादशाह हिरक्ल् बल्का नामक क्षेत्रको माअब भन्ने ठाउँमा एक लाख इटालियन लश्करको साथ केम्प लगाएर बसेको छ र उसको झण्डामूनि लखम,जुजाम, बिलकिन् बहरा र बेली कबिलाहरूका थप एक लाख जना मानिसहरू जम्मा भएका छन् भन्ने खबर दिए ।

## मआनमा सल्लाहकार समितिको बैठक

मुसलमानहरूले यति शक्तिशाली लश्करसँग सामना गर्नुपर्छ भन्ने कुरा सोचेका पनि थिएनन् । त्यस लश्करसँग उनीहरूले धेरै टाढाको ठाउँमा अचानक सामना गर्नु पर्‍यो । तीन हजार जनाको लश्कर दुई लाख जनाको उर्लिएको सागरसँग भिड्ने कि के गर्ने भन्ने उनीहरूमा प्रश्न उठ्यो । मुसलमानहरू चकित थिए र त्यसै कठिन घडीमा उनीहरूले मआनभित्र चिन्तन र सल्लाह गर्दा दुई रात विताए । केहीले भने: शत्रुहरूको संख्या बारे मुहम्मदﷺलाई पत्र लेखी खबर दिनु पर्‍यो त्यसपछि उहाँको तर्फबाट कि त थप सहयोग पाइन्छ कि कुनै सुझाव पाइन्छ र त्यसको हामीले पालना गरौंला ।

तर अब्दुल्लाह बिन रवाहाले त्यस सुझावलाई मानेनन् र साथीहरूलाई प्रोत्साहित गर्दै भने : अल्लाहको कसम तिमीहरू जुन कुराबाट पछि हट्दैछौ त्यो त त्यो शहादत प्राप्ति हो जसलाई हासिल गर्न तिमीहरू निस्केका छौ । याद रहोस् शत्रुसँग हाम्रो लडाइँ संख्या, शक्ति र बलको आधारमा हुने होइन । हामी त केवल त्यो मार्गको आधारमा लड्छौं जुन मार्ग अल्लाहले हामीलाई प्रदान गरेका छन् । तसर्थ अगाडि बढ । हामीले दुई वटा शुभकुरामध्ये एउटा कुरा अवश्य हासिल गर्नेछौं । हामीले कि त सफलता पाउने छौं कि शहादत । अन्ततः अब्दुल्लाह बिन रवाहाले प्रस्तुत गरेको सुझाव नै पारित भयो ।

## इस्लामी लश्कर शत्रुतर्फ बढ्दै

इस्लामी लश्कर मआनमा दुई रात विताएर शत्रुतिर बढ्यो र बल्काको मशारिफ नामक वस्तीमा हिरक्ल्को फौजसँग सामना भयो । त्यसपछि शत्रु धेरै नजिक आयो अनि मुसलमानहरू मुताहतिर समेटिएर केम्पमा एकबद्ध भए । त्यसपछि युद्ध गर्न लश्करलाई व्यवस्थित गरियो । दाहिनेतर्फ कत्बा बिन अबु कतादह उजरी र देब्रेतिर उबादह बिन मालिक अन्सारीलाई खटाइयो ।

## युद्धको शुरुवात र कमाण्डरहरूको एकएक गरी शहादत प्राप्ति

त्यसपछि मुताहमा नै दुवै पक्षबीच भिडन्त भयो र अति नराम्रो तरिकाले लडाइँ शुरु भयो । तीन हजारको फौजको समूहले दुई लाखको ठूलो जत्थाबाट गरिएको उपद्रवी आक्रमणको मुकाबला गरिरहेको थियो । युद्ध अति अनौठो थियो ।

संसारले मुकदर्शक बनी हेरिरहेको थियो । तर वसन्त मौसमको बतास झैँ जब इमानको बतास चल्छ तब त्यस्तै चमत्कारहरू पनि प्रकट हुन्छन् ।

सर्वप्रथम ईशदूतका प्रिय साथी जैद बिन हारिसाले झण्डा लिएर निडर भई लडे । इस्लामी लडाकुहरूबाहेक अन्यत्र कतै पनि त्यसको उदाहरण भेटिदैन । उनी लड्दालड्दै शत्रुको भालाहरूबीच गोलमाल हुँदै शहादत प्राप्त गरी जमिनमा ढले ।

त्यसपछि जाफरको पालो थियो । उनले लम्केर झण्डा उठाएर उदाहरणीय लडाइँ शुरु गरे । जब लडाइँ उत्पात हुँदै गयो अनि उनी आफ्नो कालो घोडाको पिठ्यूँबाट झरे । घोडाको पट्ठा काटेर निरन्तर प्रतिकार गर्दै आक्रमण गरिरहे । शत्रुको मारबाट उनको दाहिने हात पनि काटियो । त्यसपछि उनले देब्रे हातले झण्डा समाते र निरन्तर त्यसलाई उठाइराखे । देब्रे हात पनि काटियो । त्यसपछि काटिएको पाखुराको सहाराले छातीमा राखेर शहादत प्राप्तिसम्म झण्डालाई उठाइरहे । भनिन्छ एक जना इटालियनले उनलाई यस्तो मार हान्यो कि उनी दुई टुक्रा भए । अल्लाहले उनको दुईटा काटिएका पाखुराको बदलामा स्वर्गमा दुई वटा पाखुरा प्रदान गरिदिने छन् जसको सहाराले उनी जहाँ चाहन्छन् त्यहाँ उड्ने छन् । त्यसैकारण उनको उपनाम जाफर तैयार र जाफर जुल जनाहतान पर्‍यो । (तैयारको अर्थ उड्ने वाला र जुल जनाहतानको अर्थ दुईटा पखेटा वाला)

इमाम बुखारीले नाफेमार्फत उमरको छोराको यो बयान वर्णन गरेका छन् । उमर भन्छन् , मैले मुताह युद्धको दिन शहिद गरिएका जाफरको शरीरमा भाला तथा तरवारबाट लागेको पचासभन्दा बढी चोट गनेको थिएँ । ती चोटमध्ये कुनै पनि चोट पछाडि लागेको थिएन ।[1]

एक अर्को हदिसमा उमरको छोराले भनेका छन् म पनि त्यस युद्धमा मुसलमानको साथमा थिए । हामीले जाफर बिन अबी तालिबलाई खोज्दा मृतकको माझमा भेटायौँ । उनको शरीरमा भाला तथा वाणका नब्बेभन्दा बढी चोट देख्यौँ । नाफेमार्फत इब्ने उमरद्वारा वर्णन गरिएको हदिसमा यति थप गरिएको छ, हामीले ती सबै चोट उनको शरीरको अगाडिको भागमा देख्यौँ ।[2]

त्यस किसिमको वीरतापूर्ण लडाइँपछि जाफर पनि शहिद भए । त्यसपछि झण्डा अब्दुल्लाह बिन रवाहाले उठाए र आफ्नो घोडामा सवार भएर अगाडि बढ्दै भिड्न अग्रसर भए तर उनलाई अलिकति डर भयो र अलिकति पछाडि पनि हटे । तर त्यसपछि उनले भन्न थाले :

اقسمت يا نفس لتنزلنه كارهة او لتطاوعنه

१ सही बुखारी भाग २

२ फतहुलबारी भाग ७, दुवै हदिसमा उल्लेख भएको तीरको संख्यामा मतभेद छ । फतहुलबारी हेर्नुहोस् ।

ان اجلب الناس وشدوا الرنة      مالى اراك تكرهين الجنة

अनुवाद छ : हे आत्मा मैले कसम खाएको छु, खुसीका साथ होस् वा बाध्य भएर होस् सामना गर्न झर । मानिसले वाण तानेर युद्ध जारी राख्दाराख्दै मैले तिमीलाई किन स्वर्गबाट पिठ्यूँ फर्काएको देख्दैछु ।

त्यसपछि उनी सामना गर्न उत्रे । त्यतिबेला नै उनको काकाको छोरा हड्डी मिसिएको ताजा मासु लिएर आएर भन्यो यो खाएर आफ्नो पिठ्यूँ बलियो बनाऊ । किनभने आजका दिनहरूमा तिमीहरूलाई कठिन परिस्थितिको सामना गर्नु परेको छ । उनले हड्डी एक चोटि लुछेर फ्याँकिदिए अनि तरवार लिएर अगाडि बढेर लड्दालड्दै शहिद भए ।

## झण्डा, अल्लाहको तलवारको हातमा

त्यस अवसरमा कबिला बनु अजलानका एक जना साबित बिन अरकम नामक सहाबीले लम्केर झण्डा उठाउँदै भने : मुसलमानहरू हो, आफ्नो कुनै साथीलाई कमाण्डर बनाऊ, सहाबीले भने : तपाईँले नै यो जिम्मेवारी लिनुहोस् । उनले भने मैले यो काम गर्न सक्दिनँ । त्यसपछि सहाबीले खालिद बिन वलिदलाई कमाण्डर चुने । झण्डा सम्हालेपछि उनी वीरतापूर्ण लडाइँ लडे । बुखारीमा स्वयम खालिद बिन वलिदमार्फत वर्णन गरिएको हदिसमा उनले भनेका छन् : मुताह युद्धको दिन मेरो हातबाट नौ वटा तरवार भाँचियो र मेरो हातमा यमनको सानो तरवार मात्र बाँकी रह्यो । एक अर्को हदिसमा उनको बयान छ, मुताहको युद्धमा मेरो हातबाट नौ वटा तरवार भाँचियो र यमनको एउटा सानो तरवार मेरो हातमा टाँसिएर बस्यो । [१]

उता मुहम्मदﷺले मुताह युद्धको दिन युद्धको मैदानबाट कुनै खबर नआउँदा पनि ईशवाणीको आधारमा युद्ध बारे खबर दिँदै भन्नुभयो : झण्डा जैदले लिएका थिए र उनलाई शहीद गरियो त्यसपछि झण्डा जाफरले लिए उनी पनि शहीद गरिए त्यसपछि इबने रवाहाले झण्डा समाते उनलाई पनि शहीद गरियो । त्यतिबेला उहाँको आँखा आँसुमग्न थियो । अन्तिममा झण्डा अल्लाहको तरवारले लिए र उनी यस्तो लडाइँ लडे त्यसैबाट अल्लाहले उनलाई विजयी गराए । [२]

---

१ सही बुखारी भाग २

२ सही बुखारी भाग २

## युद्धको अन्त्य

अति वीरता ,बहादुरी र ज्यानको आहुतीको बावजुद पनि मुसलमानको त्यो सानो लश्कर शक्तिशाली इटालियन लश्करको उर्लिएको सागर अगाडि डट्नु आश्चर्यजनक कुरा थियो । त्यस नाजुक मोडमा खालिद बिन वलिदले मुसलमानहरूलाई त्यस मारबाट जसमा उनी आफै होमिएका थिए जोगाएर आफ्नो सीप र कमालको राम्रो प्रदर्शन गरे ।

युद्धको अन्तिम परिणाम के भयो यस बारे हदिसरूमा धेरै मतभेद छ । सबै हदिसलाई औँल्याउने हो भने युद्धको पहिलो दिन खालिद बिन वलिद डटिरहेको कुरा पुष्टि हुन्छ । तर उनले यस्तो युद्धनीति महसुस गरिरहेका थिए जसको आधारमा उनले इटालियनलाई भयभीत गरी मुसलमानहरूलाई पछाडि हटाउन खोजेका थिए । त्यसको उद्देश्य इटालियन फौजमा उनीहरूको पिछा गर्ने आँट नहोस् भन्ने थियो । किनभने उनलाई थाहा थियो यदि मुसलमानहरू भागे भने र इटालियन फौजले पिछा गऱ्यो भने मुसलमानलाई उनीहरूको पंजाबाट बचाउन अति कठिन हुनेछ ।

भोलिपल्ट विहान उनले लश्करको ढाँचा नै परिवर्तन गरेर त्यसको एक नयाँ तर्तिब बनाए । अगाडिको पंक्तिलाई पछाडि र पछाडिको पंक्ति अगाडि सारे । दाहिने समूहलाई देब्रेतिर र देब्रेपट्टि रहेकालाई दाहिनेतिर गरिदिए । त्यो नीति देखेर शत्रुहरूले झस्केर भने, उसले कतैबाट सहयोग पाएको छ क्या हो ? किन्तु इटालियन फौज शुरुदेखि नै डराएका थिए ।

उता दुवै फौज आमुन्ने सामुन्ने भयो । केही छिन झडप भइसकेपछि खालिद बिन वलिदले आफ्नो फौजको व्यवस्थापन सुरक्षित राख्नको लागि मुसलमानहरूलाई थोरै पछाडि सार्न थाले तर इटालियन फौज उनीहरूले हामीलाई धोका दिइरहेका छन् र कुनै चाल चलेर हामीलाई मरुभूमिको फाँटमा धकेल्न खोजेका छन् भन्ने सोचले गर्दा पिछा गर्ने उनीहरूको आँट भएन । परिणाम स्वरूप शत्रु आफ्नो घरतिर फर्क्यो । मुसलमानको पिछा गर्ने कुरा पनि सोचेन । उता मुसलमानहरू सकुशल त्यसबाट निस्केर मदिना फर्के ।[1]

## दुवै पक्षका मृतकहरू

त्यस युद्धमा मुसलमानको तर्फबाट बाह्र जना शहिद भएका थिए । इटालियन फौजका मृतकहरूको संख्या भने थाहा हुन सकेन । युद्धको विवरणलाई खोतल्ने हो भने उनीहरूको ठूलो संख्या मारिएको पुष्टि हुन्छ । किनभने युद्धमा खालिद बिन वलिद एकलैले नौ वटा तरवार भाँचे भने घाइते तथा मर्नेहरूको संख्या कति थियो होला भन्ने कुरा राम्रैसँग अनुमान गर्न सकिन्छ ।

---

१ फतहुल्बारी भाग ७, जादुल मआद भाग २

## युद्धको प्रभाव

जुन बदला लिनको निम्ति युद्धको कठिनाइ झेलिएको थियो मुसलमानले त्यो बदला त लिन सकेनन् तर त्यस युद्धले मुसलमानको इज्जत र प्रतिष्ठालाई बढायो । त्यसबाट सारा अरबवासीहरू चकित भए । किनभने इटाली त्यतिबेला विश्वकै शक्तिशाली राष्ट्र थियो । अरबले उनीहरूसँग टक्राउनु आत्महत्या गर्नु सरह ठानेका थिए । त्यसकारण तीन हजारको सानो फौज दुई लाखको ठूलो फौजसँग टक्राएर कुनै खास नोक्सान नभोगी फर्कनु रहस्यमय घटनाभन्दा कम थिएन । त्यस युद्धबाट अरबीहरूले अहिलेसम्म जुन किसिमका मानिसहरूको सामना गरेका थिए मुसलमान तिनीहरूभन्दा अलग एक अर्कै किसिमका मानिसहरू हुन् , उनीहरूलाई अल्लाहको तर्फबाट मदत तथा समर्थन प्राप्त छ र उनको लिडर वास्तवमा अल्लाहका दूत नै हुन् भन्ने वास्तविकता खुल्यो । त्यसकारण ती हट्धर्मी कबिलाहरू जुन मुसलमान विरुद्ध निरन्तर संघर्षमा थिए त्यस युद्धपछि उनीहरू इस्लामतर्फ झुकेको हामी देख्न सक्छौं । अन्ततः बनु सुलैम, अश्जअ, गत्फान, जुब्यान र फुज्जारह आदि कबिलाहरूले इस्लाम स्वीकारे ।

त्यसै युद्धबाट इटालियन विरुद्ध रक्तपात युद्ध शुरु भयो र त्यै युद्ध आगामी दिनहरूमा इटाली राष्ट्रहरूमाथि विजय र दुरदुर इलाकासम्म मुसलमानहरूको सत्ता गर्ने भूमिका साबित भयो ।

## सरिया जातुस्सुलासिल

मुताह युद्धको अन्तर्गत सिराह स्थित मशारिफ नामक ठाउँमा रहेका अरब कबिलाहरू मुसलमानको विरुद्धमा लड्न इटालियन झण्डामूनि जम्मा भएका छन् भन्ने कुरा मुहम्मदﷺलाई जानकारी भएपछि त्यस क्षेत्रमा उनीहरूले उहाँको विरुद्ध पुनः त्यति ठूलो फौज जम्मा गर्न नसकुन् भन्ने हेतुले उहाँले अरब र इटालियनबीच फुट हाल्ने र अर्को तर्फ उनीहरूसँग मित्रताको सम्बन्ध राख्ने दुरदर्शी रणनीतिको आवश्यकता महसुस गर्नुभयो ।

यस उद्देश्यको लागि उहाँले अमर बिन आसलाई नियुक्त गर्नुभयो । किनभने उनकी हजुर आमाको बेली नामक कबिलासँग सम्बन्ध थियो । तसर्थ मुताह युद्धपछि तुरुन्तै उहाँले उनीहरूको मन शान्त गर्नको लागि अमर बिन आसलाई हिजरी सम्बत ८ साल जमादिल आखिर महिनामा त्यसतर्फ पठाउनुभयो । बनु कुजाअले मदिनावरिपरि आक्रमण गर्न एउटा टोली जम्मा गरिरहेको छ भन्ने खबर पनि इस्लामी गुप्तचर विभागले दिएको कुरा बताइन्छ । तसर्थ मुहम्मदﷺले अमर बिन आसलाई त्यतै पठाउनुभयो । सम्भवत दुवै कारण थियो होला ।

जे होस्, मुहम्मदﷺले अमर बिन आसको लागि सेतो ध्वजा तयार गरिदिनुभयो साथै कालो रंगको सानासाना झण्डाहरू पनि दिनुभयो । उनको साथमा

ठूलाबडा मुहाजिर तथा अन्सारहरू सम्मिलित तीन सयको एउटा टोली पठाउनुभयो । उनीहरूको साथमा तीस वटा घोडा पनि थिए । साथै बेली ,उजराह र बिल्किन कबिलाका जुन मानिसहरूसँग भेट हुन्छ तिनीहरूसँग मदत माग्ने निर्देशन पनि दिनुभयो । उनीहरू रातमा यात्रा गर्थे र दिनमा लुकेर बस्थे । शत्रुनजिक पुगेपछि उनीहरूलाई शत्रुको ठूलो संख्या रहेको कुरा थाहा भयो । त्यसकारण अमर बिन आसले राफे बिन मुकैस जुहनीलाई सहयोग माग्न मुहम्मदﷺकहाँ पठाए । मुहम्मदﷺले अबु उबैदाह बिन जर्राहलाई झण्डा दिएर दुई सय फौजका साथमा पठाउनुभयो । जसमा मुहाजिरहरूको सरदार अबु बकर, उमर लगायत अन्सारका सरदारहरू पनि थिए । मुहम्मदﷺले अबु उबैदाह बिन जर्राहलाई अमर बिन आससँग भेट गरी दुवै मिलेर काम गर्न र विवाद नगर्न निर्देशन पनि दिनुभएको थियो । त्यहाँ पुगेपछि अबु उबैदाह बिन जर्राहले नमाजको लागि इमामत गर्न चाहे । अमर बिन आसले भने तपाईं सहयोगीको रूपमा आउनुभएको छ । कमाण्डर म हुँ । अबु उबैदाहले उनको कुरा माने र नमाज अमरले नै पढाए ।

सहयोग थपिएछि इस्लामी फौज कुजाअको क्षेत्रतिर बढ्यो । त्यस क्षेत्रलाई कुल्चदै उनीहरू टाढा सिमानासम्म पुगे । अन्तिममा एउटा लश्करसँग सामना भयो । मुसलमानहरूले त्यसमाथि आक्रमण गरेपछि त्यो लश्कर तितरवितर भयो ।

त्यसपछि औफ बिन मालिक अश्जइलाई डाकिया बनाएर मुहम्मदﷺकहाँ पठाइयो । उनले मुसलमानहरू सकुशल फर्केको सूचना दिए र युद्धको विवरण पनि सुनाए । जातुल सुलासिल कुरा नामक उपत्यकाभन्दा अगाडि एउटा क्षेत्रको नाम थियो । त्यहाँबाट मदिनाको दुरी दश दिन बराबरको छ । इब्ने इसहाकको भनाई अनुसार मुसलमानहरू जुजाम नामक कबिलाको भूमिमा अवस्थित सुलासिल नामक मुहानमा झरेका थिए । त्यसै कारणले त्यस युद्धको नाम जातुल सुलासिल परेको बताइन्छ ।[१]

## सरिया खजराह

संघर्षको कारण, नजदभित्र मुहारिब कबिलाको क्षेत्रको खजराह नामी ठाउँमा गत्फान कबिलाले फौज जम्मा गरिरहेको थियो । तसर्थ उनीहरूको सामना गर्नको लागि मुहम्मदﷺले अबु कतादहको नेतृत्वमा पन्ध्र जनाको एउटा टोली त्यसतर्फ पठाउनुभयो । त्यहाँ गएर उनीहरूले शत्रुका कैयन व्यक्तिहरूको हत्या गरे,अधिक व्यक्तिहरूलाई बन्दी बनाए र युद्धप्राप्त पनि हासिल गरे । त्यस संघर्षमा उनीहरू पन्ध्र दिनसम्म मदिनाबाहिर बसेका थिए ।[२]

---

१ इब्ने हेशाम भाग २, जादुल मआद भाग २
२ तलकीहुल फहुम

# मक्का विजय

इब्ने कैयम लेख्छन्, मक्काको विजय महान विजय थियो । त्यसबाट अल्लाहले आफ्नो धर्म, ईशदूत, इस्लामी फौज र मुस्लिम समूहलाई गौरव प्रदान गर्नुका साथै आफ्नो शहर र घरलाई विश्वको लागि मार्ग दर्शनको केन्द्र बनाए । त्यसका साथसाथै काफिर तथा बहुदेववादीको कब्जाबाट मुक्ति दिए । त्यस विजयले आकाशवासीमा खुसीको लहर दौडियो उनको इज्जतको लहर जौजा नामक आकाशीय धरहराको शिखरमा पुग्यो । फलस्वरूप मानिसहरू अल्लाहको मार्गमा फौजका फौज प्रवेश भए । प्रकाश एवं उज्यालोले धर्तीको मुहार चम्कियो ।[१]

## युद्धको कारण

हुदैबियासन्धि बारे चर्चा गर्ने क्रममा हामीले वर्णन गरिसकेका छौं कि त्यसको एउटा दफामा उल्लेख भए बमोजिम मुहम्मद ﷺ को सम्झौतामा जो सामिल हुन चाहन्छ उसको लागि ढोका खुला छ र जो कुरैशको सम्झौतालाई मान्न चाहन्छ उसको लागि पनि ढोका खुला छ । जो कबिला जुन जमातसँग शामिल हुनेछ त्यो कबिला उसको एक अंग मानिने छ । तसर्थ यदि कुनै कबिलामाथि कुनै आक्रमण तथा अत्याचार गरियो भने पूरा जमातमाथि आक्रमण र अत्याचार गरिएको मानिने छ ।

त्यस दफा अनुसार बनु खुजाअ नामक कबिला मुहम्मद ﷺ को करारमा र बनु बकर कुरैशको साथमा सामिल भयो । यसरी दुवै कबिला एकअर्काबाट सुरक्षित तथा निश्चिन्त भए । दुवै कबिलाको एक आपसमा प्राचीनकालदेखि नै दुस्मनी तथा तनाव चल्दै आएको थियो । त्यसकारण जब इस्लामको आगमन हुन थाल्यो, हुदैबियासन्धि भयो र दुवै पक्ष एकअर्काबाट सुरक्षित भए अनि बनु बकरले त्यसलाई सुनौलो अवसर ठान्यो र बनु खुजाअसँग पूरानो बदला लिन खोज्यो । फलस्वरूप नौफल विन मुआविया दैलीले बनु बकरको एउटा जमातलाई हात लिएर शआबान महिना ८ हिजरीमा बनु खुजाअमाथि अँध्यारो रातमा आक्रमण गऱ्यो । त्यतिबेला बनु खुजाअ वितिर नामक मुहानमा क्याम्प लगाएर बसेको थियो । उनीहरूको कैयन व्यक्तिहरू मारिए । केही छिन झडप र लडाइँ पनि भयो । उता कुरैशले बनु बकरलाई हतियार दिएर सहयोग गरेको थियो । त्यति मात्र नभई उनीहरूका केही मानिसहरू पनि अँध्यारो रातको फाइदा उठाउदै लडाइँमा शरिक भए । जेहोस् आक्रमणकारीहरूले बनु खुजाअलाई लखेट्दै मक्काको पवित्र क्षेत्रसम्म पुऱ्याए । मक्काको निषेधित एंव

---

१ जादुल मआद भाग २

पवित्र क्षेत्रमा पुगेपछि बनु बकरले भन्यो : हे नौफल अब त हामी निषेधित क्षेत्रमा प्रवेश भएका छौँ । ईश्वरसँग डराऊ , इश्वरसँग डराऊ । त्यसको अति नराम्रो जवाफ दिँदै भन्यो: बनु बकर आज कुनै ईश्वर छैन आफ्नो बदला चुकाइ हाल । मेरो उमेरको कसम, तिमीहरूले निषेधित क्षेत्रमा चोरी गर्न सक्छौ भने के आफ्नो बदला लिन सक्दैनौ ?

उता बनु खुजाअ कबिलाले मक्का पुगेर बुदैल विन वरकाअ खुजाइ र आफ्नो गुलाम राफेको घरमा गएर शरण लिए साथै अमर विन सालिम खुजाइ त्यहाँबाट निस्केर मदिनातिर लागे र मदिना पुगेर मुहम्मदﷺको सामुन्ने खडा भए । त्यतिबेला उहाँ मस्जिदे नबवीमा सहाबीहरूको बीचमा हुनुहुन्थ्यो । अमर बिन सालिमले भने :

يا رب انى ناشد محمدا    حلفنا وحلف ابيه الا تلدا
قد كنتم ولدا وكنا والدا    ثمة اسلمنا ولم ننزع يدا
فانصر هداك الله نصرا ايدا    وادع عباد الله ياتوا مددا
فيهم رسول الله قد تجردا    ابيض مثل البدر يسمو صعدا
ان سيم خفا وجهه تربدا    في فيلق كا لبحر يجرى مزبدا
ان قرشا اخلفوك الموعد    و نقضوا ميثاقك الموكدا
وجعلوا لى فى كداء رصدا    وزعموا ان لست ادعوا احدا
وهم اذل واقل عددا    هم بيتونا يا الوتير هجدا

अनूवाद छः :

हे पालनकर्ता म मुहम्मदﷺलाई उनको करार र उनको बुबाको पूरानो सम्झौताप्रति धन्यवाद दिन्छु । तपाईंहरू केटाकेटी हुनुहुन्थ्यो हामी छोराछोरीका बाउ आमा थियौं । हामीले अनुकरण गऱ्यौं र कहिले पनि गद्दारी गरेनौं । अल्लाहले तपाईंलाई मार्गदर्शन प्रदान गरून् । तपाईंले पूर्ण सहयोग गर्नुहोस् र अल्लाहका उपासकलाई पनि मदतको लागि पुकार्नुहोस् । उनीहरू मदत गर्न आउँने छन् । उनीहरूसँग पूर्णिमाको चन्द्रमा जस्ता सुन्दर ईशदूत पनि हतियार बोकेर आउनु हुनेछ । यदि उहाँमाथि अत्याचार एवं उहाँको अपमान गरियो भने अनुहारबाट नै रिसको भाव देखिने छ । उहाँ त्यो लश्करमा जानुहुने छ जो उर्लिएको सागर झैं छ । कुरैशले उहाँको सम्झौता उल्लंघन गरेको छ र उहाँको करार तोडेको छ । उनीहरू मेरो घातमा बसेका छन् र मैले मदतको लागि कसैलाई पुकार्न सक्दिनँ भन्ठानेका छन् । यद्यपि उनीहरू अति तुच्छ छन् र संख्यामा पनि थोरै छन् । उनीहरूले वितिरमाथि राती आक्रमण गरी हाम्रा मानिसहरूलाई नमाज पढेको अवस्थामा हत्या गरे ।

मुहम्मदﷺले भन्नुभयो : हे अमर बिन सालिम तिम्रो मदत हुँदैछ । त्यसपछि आकाशमा बादलको एउटा मुस्लो देखियो । उहाँले भन्नुभयो : यो बादल बनु कअबको मदतको लागि चम्किएको हो ।

त्यसपछि बुदैल खुजाइको नेतृत्वमा बनु खुजाअको एउटा टोली मदिना आयो र मुहम्मदﷺलाई आफ्ना मृतकहरूको र कुरैशले बनु बकरको सहयोग गरेको कुरा बारे बतायो । त्यसपछि त्यो टोली मक्का फर्क्यो ।

## हुदैबियासन्धि पुनर्वहाल गर्न अबु सुफ्यान मदिनामा

कुरैश र उसका सहयोगीहरूले जे गरेका थिए सम्झौताको खुला उल्लंघन थियो त्यो । त्यसो गर्न कुनै रूपमा पनि जायज थिएन । त्यसकारण कुरैशलाई पनि आफुले सम्झौता उल्लंघन गरेको कुराको अनुभूति तुरून्तै भयो । उनीहरूले त्यसबाट हुन सक्ने भावी दुष्परिणामलाई मद्देनजर गरी सल्लाहकार समितिको एउटा बैठक बोलाए । त्यस बैठकमा उनीहरूले आफ्नो कमाण्डर अबु सुफ्यानलाई प्रतिनिधि बनाई सम्झौता पूनर्वहाल गराउन मदिना पठाए ।

उता मुहम्मदﷺले आफ्ना साथीहरूसँग कुरैशले सम्झौता उल्लंघन गरेपछिको गतिविधि बारे जानकारी दिँदै भन्नुभयो : मलाई अबु सुफ्यान सम्झौता पूनर्वहाल गर्न र सम्झौताको मियाद थप्न आएको कुरा थाहा भएको छ ।

उता अबु सुफ्यान आफुहरूले तय गरेको निर्णय अनुसार हिँडयो । उस्फान नामक ठाउँमा पुगेपछि उसको भेट बुदैल विन वरकाअसँग भयो । बुदैल मदिनाबाट आउँदै थिए । अबु सुफ्यानले उनी मुहम्मदﷺबाट आउँदै छन् भन्ने कुरा बुझिहाल्यो । उसले सोध्यो, बुदैल कहाँबाट आउँदै छौ ? बुदैलले जवाफ दिए ,म खुजाअको साथमा तट तथा उपत्यकातिर गएको थिएँ । उसले सोध्यो के तिमी मुहम्मदﷺकहाँ गएनौ ? बुदैलले भने, गइनँ ।

बुदैल मक्कातर्फ गएपछि अबु सुफ्यानले भन्यो : यदि ऊ मदिना गएको भए उसले त्यहाँ आफ्नो उँटलाई गुठुलीको आहार खुवायो होला । तसर्थ अबु सुफ्यान त्यो ठाउँमा गयो जहाँ बुदैलले आफ्नो उँटलाई बाँधेका थिए । अबु सुफ्यानले उँटको गोबर लिएर फुटाएपछि उसले खजुरको गुठुली देख्यो । अबु सुफ्यानले भन्यो : बुदैल मुहम्मदﷺकहाँ अवश्य गएको थियो ।

जे होस्, अबु सुफ्यान मदिना पुगेपछि आफ्नी छोरी उम्मे हबिबाको घर गयो । ऊ मुहम्मदﷺको विस्तारामा बस्न खोज्दा उनले विस्तारा उठाइन् । अबु सुफ्यानले भन्यो : हे छोरी के तिमीले मलाई यस विस्तारामा बस्ने लायक ठानिनौ ? उनले भनिन् : यो मुहम्मदﷺको ओछ्यान हो र तपाईं अपवित्र बहुदेववादी हुनुहुन्छ । अबु सुफ्यानले भन्न थाल्यो : मबाट विदाइ भएपछि तिमी पनि बिग्रेकी रहेछौ ।

त्यसपछि अबु सुफ्यान त्यहाँबाट निस्केर मुहम्मदﷺकहाँ आयो र उहाँसँग कुराकानी गर्न लाग्यो । उहाँले उसलाई कुनै जवाफ दिनुभएन । त्यसपछि उ अबु बकरकहाँ गयो र उनलाई मुहम्मदﷺसँग कुराकानी गर्न पाउँ भनी सिफारिश गर्न भन्यो । उनले जवाफ दिँदै भने , मैले यसो गर्न सक्दिनँ । त्यसपछि अबु सुफ्यान उमरकहाँ गयो र उनीसँग कुराकानी गऱ्यो । उनले भने : के मैले तिमीहरूको लागि मुहम्मदﷺसँग सिफारिश गर्ने ? अल्लाहको कसम, दाउराको टुक्राले मात्र भए पनि म तिमीहरू विरुद्ध जिहाद गर्नेछु । त्यसपछि ऊ अलिकहाँ गयो । त्यहाँ फातिमा पनि थिइन् । हसन पनि थिए । उनी त्यतिखेर बालखै थिए । उसको सामुन्ने उफ्रिदै हिँडिरहेका थिए । अबु सुफ्यानले भन्यो : हे अली तिम्रो मसँग रगतको गहिरो नाता छ । म एउटा समस्याले आएको हुँ । जसरी म विफल भएर आएको छु मलाई फेरि विफल भएर फर्कन नपरोस् । तिमी मेरो लागि मुहम्मदﷺसँग सिफारिश गरिदेऊ । अलीले भने: अबु सुफ्यान तिमीमाथि अपसोच छ । मुहम्मदﷺले एउटा कुराको निर्णय गरिसक्नु भएको छ । हामीले त्यस बारेमा मुहम्मदﷺसँग कुनै कुरा गर्न सक्दैनौँ । त्यसपछि उसले फातिमातर्फ फर्केर भन्यो : के तपाईंले आफ्नो छोरालाई मानिसहरूको बीचमा शरण दिइयोस् भनी सूचना दिन पठाउन सक्नुहुन्छ ? यसबाट ऊ सदाको लागि अरबको सरदार बन्न सक्छ ? उनले भनिन् : मेरो छोरा मानिसहरूको बीचमा शरण दिइयोस् भनी घोषणा गर्ने लायक भएको छैन । मुहम्मदﷺ हुँदाहुँदै कसैले पनि शरण दिन सक्दैन ।

ती प्रयासहरूमा असफल भएपछि अबु सुफ्यानलाई संसार नै अँध्यारो लाग्न थाल्यो । त्रसित,तनाव र निराशाको हालतमा उसले अलीसँग भन्यो : हे हसनको बाऊ , मामिला जटिल बन्दै गएको छ । तसर्थ कुनै बाटो बताऊ । अलीले भने मैले तिम्रो लागि कुनै उचित उपाय भेटाइन । तर तिमी बनु केनानहको सरदार हौ,मानिसहरूसित शरण माग । त्यसपछि आफ्नो भूमितिर फर्केर जाऊ । अबु सुफ्यानले भन्यो, के तिम्रो विचारमा मेरो लागि यो उचित हुन्छ ? अलीले भने अल्लाहको कसम त्यो पनि उचित छैन तर त्यो बाहेक अर्को कुनै उपाय नै छैन । त्यसपछि अबु सुफ्यानले मस्जिदमा उभिएर भन्यो । हे मानिस हो, म मानिसहरूबीच शान्तिको घोषणा गर्दछु । त्यसपछि आफ्नो उँटमा सवार भएर मक्का फर्क्यो ।

ऊ कुरैशकहाँ गएपछि उनीहरूले उसँग के भयो भनी सोधे । अबु सुफ्यानले भन्यो : म मुहम्मदकहाँ गएर कुराकानी गरेँ तर उनले कुनै जवाफ दिएनन् । त्यसपछि अबु बकरकहाँ गएँ उनमा कुनै भलो देखिनँ, त्यसपछि उमरकहाँ गएँ उनी त झन् कठोर शत्रु देखिए । त्यसपछि अलीकहाँ गएँ उनलाई नम्र पाएँ । उनले मलाई एउटा सुझाव दिए र मैले त्यसै सुझाव अनुसार काम गरेको छु । तर त्यो सुझाव फाइदाजनक छ कि छैन थाहा छैन । मानिसहरूले सोधे, के सुझाव दिएका छन् ?

उसले भन्यो : मानिसहरू बीच शान्तिको घोषणा गर भनेर उनले मलाई भने र मैले पनि त्यसै गरेँ ।

कुरैशीले सोधे : के मुहम्मदले त्यो कुरा लागू गरिदिए ? अबु सुफ्यानले भन्यो गरेका छैनन् । मानिसहरूले भने : तिम्रो नास होस् । उसले तिमीलाई छकायो । अुब सुफ्यानले भन्यो : त्यसबाहेक अन्य कुनै उपाय देखिएन ।

## युद्धको तयारी र गोपनीयता

तिब्रानीमा वर्णन गरिएको हदिसबाट ज्ञात हुन्छ कि सम्झौता उल्लंघन हुनुभन्दा तीन दिन पहिला मुहम्मदﷺले माई आइशलाई आफ्नो सामान तयार गर्न र त्यसलाई गोप्य राख्न भन्नुभयो । त्यसपछि अबु बकर माई आइशाकहाँ आएर सोधे : छोरी यो केको तयारी हो ? उनले भनिन् , मलाई थाहा छैन । अबु बकरले भने, अहिले इटालियनहरू विरुद्ध युद्ध गर्ने अवस्था छैन । मुहम्मदﷺले कता जाने योजना बनाउँदै हुनुहुन्छ ? माई आइशाले भनिन् अल्लाहको कसम मलाई थाहा छैन । तेस्रो दिन विहानै अमर विन सालिम खुजाइ चालीस जना सवार लिएर पुग्यो । उसले **या रब्बी इन्नी नाशिद मुहम्मदन** जस्ता शायरी भनेपछि सम्झौता उल्लंघन भएको कुरा थाहा भयो । त्यसपछि बुदैल आयो साथसाथै अबु सुफ्यान पनि आयो । सहाबीहरूलाई परिस्थिति बारे सही कुराको ज्ञान भयो । त्यसपछि माहम्मदﷺले तयारीको लागि निर्देशन दिँदै भन्नुभयो : मक्का जानु छ । साथै उहाँले यो प्रार्थना पनि गर्नुभयो : हे अल्लाह हाम्रो बारेमा खबर लिएर जाने जासुसलाई कुरैशसम्म जान रोकिदेऊ वा उसलाई समातिदेऊ । हामीलाई उनीहरूको इलाकामा अचानक पुग्ने अवसर प्रदान गर ।

त्यसपछि त्यस कुरालाई गोप्य राख्नको लागि मुहम्मदﷺले हिजरी सम्बत ८ साल रमजान महिनामा अबु कतादाह विन रबयीको नेतृत्वमा आठ सय जना सहाबीहरूको छापामार टोली बतने इजमतर्फ पठाउनुभयो । त्यो ठाउँ जिल खशब र जिल मरवाहबीच मदिनाबाट ३६ मिलको दुरीमा अवस्थित छ । त्यो छापामार टोली पठाउनुको उद्देश्य कुरैशीहरूमा मुहम्मदﷺ त्यस क्षेत्रतिर गएका छन् भन्ने भ्रम मात्र सृजना गर्नु थियो । फलस्वरूप त्यो खबर चारैतिर फैलियो । छापामार टोली आफ्नो निश्चित ठाउँमा पुगेपछि मुहम्मदﷺ मक्कातर्फ जानुभएको छ भन्ने खबर भयो र त्यो छापामार टोली पनि आएर उहाँसँग मिल्यो । [१]

१ त्यै सरियामा आमिर बिन अज्बतसँग हुँदा आमिरले इस्लामी रीति अनुसार सलाम गरेको थियो । तर महलम बिन जसामहले पूर्वाग्रहीका कारण उसको हत्या गरिदियो । उसको उँट र सामान कब्जा गऱ्यो । त्यसैको बारेमा यो इशवाणी अवतरण भयो । अनुवाद छ : जसले तिमीलाई सलाम गर्छ उसलाई तिमी मोमिन होइन नभन । त्यसपछि साथीहरुले महलमलाई अल्लाहका संदेष्टाकहाँ

उता हातिब बिन अबी बल्ताअले कुरैशलाई चिठी लेखी मुहम्मदले मक्कामा आक्रमण गर्नेवाला छन् भन्ने खबर दिएर पठायो । उसले त्यो पत्र कुरैशकहाँ पुऱ्याउन एउटी महिलालाई उपहार पनि दियो । महिलाले आफ्नो शिरको चुल्ठीमा चिठी लुकाएर ऊ मक्का गई । मुहम्मदﷺलाई हातिबले गरेको त्यस गतिविधि बारे आकाशबाट खबर गरियो । तसर्थ उहाँले अली, मेकदाद,जुबैर, अबु मुर्सिद गनवीसँग भन्नुभयो : जाओ, रौजाए खाखसम्म पुग, त्यहाँ उँटको काठीमा सवार भएर आउँदै गरेकी एउटी महिला भेटिने छ । उसँग कुरैशको नाममा एउटा पत्र छ । ती सहाबीहरू घोडामा सवार भएर तीव्रगतिमा त्यसतर्फ लागे । त्यहाँ पुग्दा त्यो महिला त्यहीँ थिई । उनीहरूले उसलाई तल झर्न भने र उसँग सोधे, के तिम्रो साथमा कुनै चिठी छ ? उसले मसँग कुनै चिठी छैन भनी जवाफ दिई । उनीहरूले उसको काठी खोजतलाश गरे तर केही भेटाएनन् । अलीले भने: अल्लाहको कसम खाएर भन्छु न त मुहम्मदﷺले झुट बोल्नु भएको छ न हामीले । चिठी दिने भए देऊ नत्र तिमीलाई नंग्याइदिने छौं । उसले त्यो कठोर भाव देखेर भनी ,आफ्नो अनुहार उता फर्काऊ । उनीहरूले आफ्नो अनुहार अर्कोतर्फ फर्काएपछि उसले आफ्नो चुल्ठी खोलेर चिठी निकालेर उनीहरूलाई दिई । उनीहरू पत्र लिएर मुहम्मदﷺको सेवामा उपस्थित भए । पत्र खोलेर हेर्दा त्यसमा लेखिएको थियो : हातिबको तर्फबाट कुरैशको नाममा । त्यस पत्रमा कुरैशलाई मुहम्मदﷺको प्रस्थान बारे खबर गरिएको थियो ।[1] मुहम्मदﷺले हातिबलाई बोलाएर सोध्नुभयो , हातिब यो के हो ? उनले भने, हे ईशदूत मेरो बारेमा कुनै नराम्रो कदम नउठाउनु । अल्लाहको कसम मलाई अल्लाह र उनको दूतमाथि आस्था छ । मैले न त धर्म छोडेको छु न म नै बदलिएको छु । कुरा केवल के हो भने म कुरैशको मान्छे होइन तर म उनीहरूसँग मिलेर बसेको थिएँ र मेरा बालबच्चाहरू पनि त्यहाँ छन् । मेरो बालबच्चाको हेरबिचार गरिदिने कुरैशमा मेरा कुनै नातापाता छैन । तर जुन मानिसहरू तपाईंको साथमा छन् उनीहरूको त्यहाँ

---

लिएर आए ताकि उहाँले उनको निम्ति क्षमाको प्रर्थाना गरिदिउन् । तर जब महलम अल्लाहका संदेष्टाको सामुने आयो अनि अल्लाहाका संदेष्टाले तीन पटक भन्नुभयो :हे अल्लाह महलमलाई क्षमा नगर । त्यसपछि महलम आफ्नो कपडाले आसु पुस्दै उठ्यो । इबने इसहाकको भनाई अनुसार उसको समुदायका मानिसहरुले भने पछि अल्लाहका संदेष्टाले उनको क्षमाको लागि अल्लाहसँग प्रार्थना गरिदिनु भएको थियो । जादुल मआद भाग २, इबने हेशाम भाग २

१ सुहेलीले युद्ध सम्बन्धी पत्रको विषयमा यस्तो वयान गरेका छन् : हे कुरैशका जमात, अल्लाहका संदेष्टाले रातको भेल जस्तो लस्कर लिएर तिमीतर्फ आउँदै छन् । यदि उहाँ एक्लै आए भने पनि अल्लाहले उहाँको मदत गर्ने छ र उहाँसँग आफ्नो बचन पूरा गर्ने छ । तसर्थ तिमीहरुले आफ्नो बारेमा सोच । वाकदीले आफ्नो मुर्सल सनदमा वर्णन गरेका छन् : हातिबले सुहेल विन अमर, सफवान विन उमैया र अकरलाई लेखेको थियो : अल्लाहका संदेष्टाले मानिसहरुमा युद्धको घोषणा गरिदिएका छन् । मलाई लाग्छ उनले तिमीहरुसँग नै युद्ध गर्ने छन् । म तिमीहरुमाथि एउटा गुण लगाउन चाहन्छु । फतहुल बारी भाग ७

नातेदार छन् जसले उनीहरूको सुरक्षा गर्ने छन् । तर मेरो त्यस्तो अवस्था छैन र उनीहरूमाथि गुण लगाउँदा उनीहरूले त्यसको बदलामा मेरो बालबच्चाको सुरक्षा गर्छन कि भनेर मैले उनीहरूमाथि गुण लगाएँ । त्यसमा उमरले भने : हे ईशदूत, मलाई छोडनुहोस् म उसको गर्दन उडाइदिन्छु । किनभने उसले अल्लाह र अल्लाहको दूतसँग बेइमानी गरेको छ र ऊ मुनाफिक भएको छ । मुहम्मदﷺले भन्नुभयो, हेर ऊ बदरको युद्धमा शामिल थियो । हे उमर, तिमीलाई के थाहा ? अल्लाहले बदरमा शामिल हुनेहरूसँग तिमीहरूले जे गरे पनि म क्षमा गरिदिन्छु भनेका पो छन् कि ? त्यो कुरा सुनेर उमरका नयन आँसुमग्न भए र उनले भने: अल्लाह र अल्लाहका दूतलाई सही कुरा थाहा छ ।[१]

यसरी अल्लाहले जासुसहरूलाई समात्यो र मुसलमानहरूको युद्ध गतिविधि बारे कुरैशलाई कुनै खबर पुग्न सकेन ।

## इस्लामी लश्कर मक्काको मार्गमा

हिजरी सम्बत ८ साल रमजान महिनाको १० तारिखको दिन मुहम्मदﷺले मदिनाबाट मक्कातर्फ प्रस्थान गर्नुभयो । उहाँको साथमा दश हजार सहाबीहरू थिए । मदिनाका लागि अबु रुह्म गिफारी नियुक्त भए ।

जुहफा वा त्योभन्दा अलि माथि उहाँका काका अब्बास भेटिए । उनी इस्लाम स्वीकारी बालबच्चा सहित आफ्नो जन्मथलो छाडेर आएका थिए । अबवा नामक ठाउँमा उहाँको काकाको छोरा अबु सुफ्यान र फुपुको छोरा अब्दुल्लाह बिन उमैया भेटिए । उहाँले उनी दुवैलाई देखेर आफ्नो अनुहार पछाडि फर्काउनुभयो । किनभने ती दुवैले उहाँलाई धेरै दुःख दिने गर्थे त्यसका साथै उहाँको खिसी पनि गर्थे । त्यो देखेर उम्मे सल्माले भनिन् तपाईंको काकाको छोरा र फुपुको छोरा तपाईंको नजरमा सबैभन्दा घृणित हुनु हुँदैन । उता अलीले अबु सुफ्यानसँग भने, मुहम्मदﷺकहाँ जाउ र त्यो कुरा भन जुन युसुफका भाइहरूले उनीसँग भनेका थिए । अर्थात : अल्लाहको कसम अल्लाहले तपाईंलाई हामीमाथि प्रधानता दिएको छ । हामी वास्तवमा पापी थियौं । (१२:९१) किनभने उहाँलाई तपाईंको भन्दा बढी कसैको जवाफ मन पर्दैन । तसर्थ अबु सुफ्यानले त्यै कुरा भने र जवाफमा मुहम्मदﷺमाथि ईशवाणी अवतरण भयो :

قَالَ لَا تَثْرِيبَ عَلَيْكُمُ الْيَوْمَ ۖ يَغْفِرُ اللَّهُ لَكُمْ ۖ وَهُوَ أَرْحَمُ الرَّاحِمِينَ (يوسف: ٩٢ )

आज तिमीलाई कुनै निन्दा गरिने छैन अल्लाहले तिमीलाई क्षमा गरुन् र उनी दया गर्नेहरुमा सबैभन्दा बढी दयालु छन् । (युसुफ:९२ )

त्यो कुरा सुनेर अबु सुफ्यानले कविताका केही पंक्तिहरू सुनाए :

---

१ सही बुखारी भाग १ , बुखारीको अन्य हदिसमा जुबैर र अबु मुर्सिदको नाम थप गरिएको छ ।

لعمرك انى حين احمل راية  لتغلب خيل اللات خيل
لكالمدلج الحيران اظلم ليلة   فهدا اوانى حين اهدى فاهتدى
هدانى هاد غير نفسى ودلنى  على الله من طردته كل مطرد

अनुवाद छ : : तिम्रो उमेरको कसम, मुहम्मदﷺको घोडचढी सवारमाथि लातका घोडचढी सवारलाई विजय गराउन झण्डा उठाउँदा मेरो अवस्था अँध्यारो रातमा अलपत्र परेको यात्रु झैँ थियो । तर अहिले म सत्यमार्ग लिन इच्छुक छु तसर्थ मलाई सत्यमार्ग देखाइयोस् । मलाई आफ्नो आत्माले होइन एक जना मार्गदर्शकले सत्यमार्ग दिएको हो । सत्यमार्ग त्यही व्यक्तिले देखाएको हो जसलाई मैले हरेक मोडमा धुत्कारेको थिएँ ।

त्यो कुरा सुनेर मुहम्मदﷺले प्रेम भावमा उनको छाती ठोक्दै तिमीले हरेक मोडमा मलाई धुत्कारेका थियौ भनेर भन्नुभयो ।[१]

## मर्रुज्जहरानमा इस्लामी लश्करको क्याम्प

मुहम्मदﷺले आफ्नो यात्रा जारी राख्नुभयो । उहाँ र सहाबीहरू रोजा बस्नुभएको थियो । उस्फान र कुदैद भन्ने ठाउँबीच कदिद नामी मुहानमा पुगेपछि रोजा तोड्नुभयो ।[२] उहाँको साथमा रहेका सहाबीहरूले पनि व्रत तोडे । त्यसपछि उहाँले यात्रा जारी राख्नुभयो । बेलुका मर्रुज्जहरान नामक ठाउँमा पुगेपछि फातिमा नामक उपत्यकामा झर्नुभयो । त्यहाँ उहाँको निर्देशनमा सहाबीहरूले विभिन्न ठाउँमा आगो जलाए । यसरी दश हजार चुलो जल्यो । मुहम्मदﷺले उमरलाई पहरा दिन खटाउनुभयो ।

## अबु सुफ्यान ईशदूतत्वको दरवारमा

मर्रुज्जहरानमा पाल लगाएर बसिसकेपछि अब्बास मुहम्मदﷺको सेतो खच्चरमा सवार भएर निस्के । उनको उद्देश्य कुनै दाउरे वा व्यक्ति भेटियो भने उसँग कुरैशकहाँ खबर पुऱ्याएर मुहम्मदﷺले मक्कामा प्रवेश गर्नुभन्दा पहिला नै उनीहरू मुहम्मदﷺकहाँ आएर शान्ति मागून् भन्ने थियो ।

---

१ पछि अबु सुफ्यानमा इस्लामका धेरै गुणहरु देखिए । भनिन्छ उनले इस्लाम स्वीकारेदेखि शर्मको कारण अल्लाहका संदेष्टालाई टाउको उठाएर हेरेनन् । अल्लाहका संदेष्टाले पनि उनीलाई माया गर्नुहुन्थ्यो । उनलाई स्वर्गको शुभसूचना दिनुहुन्थ्यो । उहाँले भन्नुहुन्थ्यो : उनी हम्जाको कायममुकाम साबित हुनेछन् । जब उनको मृत्युको समय आयो उनले भने : ममाथि नरुनु । किनभने मैले इस्लाम स्वीकारेपछि कुनै पाप गरेको छैन । जादुल मआद भाग २
२ सही बुखारी भाग २

अल्लाहले कुरैशकहाँ कुनै पनि खबर पुऱ्याउन निषेध गरिदिएका थिए । त्यसकारण उनीहरूलाई परिस्थिति बारे कुनै जानकारी भएन । उनीहरू उल्टै डर एवं त्रासमा पिल्सिएका थिए । अबु सुफ्यान बाहिर निस्केर हालखबर लिइरहन्थ्यो । त्यतिबेला पनि अबु सुफ्यान, हकिम विन हेजाम र बुदैल हालखबर पत्ता लगाउन निस्केका थिए ।

अब्बासको वयान छ , म मुहम्मदﷺको खच्चरमा सवार भएर जादै थिएँ । मैले अबु सुफ्यान र बुदैल बोलेको सुनें । उनीहरू एक आपसमा कुराकानी गर्दै थिए । अबु सुफ्यानले भन्दै थियो : अल्लाहको कसम मैले आज रातीको जस्तो आगो र लश्कर त कहिल्यै पनि देखेको थिइनँ । जवाफमा बुदैलले भन्यो :अल्लाहको कसम, उनीहरू त बनु खुजाअ हुन् । युद्धले उनीहरूलाई लछारेको छ । त्यसमा अबु सुफ्यानले भन्यो, बनु खुजाअ त्यो आगो र लश्करभन्दा धेरै कमजोर तथा तुच्छ छन् ।

अब्बास भन्छन् , मैले उसको स्वर चिनेर उसलाई बोलाएँ , हे अबु हन्जला । उसले पनि मेरो स्वर सुन्ना साथ सोध्यो अबुल फजल हो ? मैले भनें हो । केही कुरा छ कि भनेर उसले सोध्यो । मेरा बाउआमा तिमीमाथि बलिदान होउन् । मैले भने : मानिसहरूको साथमा देखिएका उहाँ ईशदूत हुन् । अब कुरैशको नाश हुनेछ ।

उसले भन्यो, अब पनि केको बहाना हो ? मेरा बाउआमाको कसम यदि उनीहरूले तिमीलाई भेटाए भने तिम्रो गर्दन उडाउने छन् । तसर्थ मेरो खच्चरपछाडि सवार होऊ म तिमीलाई ईशदूतकहाँ लैजान्छु र तिम्रो सुरक्षाको लागि आग्रह गर्छु । त्यसपछि अबु सुफ्यान मेरो पछाडि बस्यो तर उसका दुवै साथी भने फर्केर गए ।

अब्बास भन्छन् , म अबु सुफ्यानलाई लिएर गएँ । कुनै जमातनिर हिँडदा सबैले सोध्थे को हो त्यो ? तर उनीहरूले मुहम्मदﷺको खच्चर र मलाई त्यसमा सवार भएको देखेर भन्ने गर्थे, खच्चरको पछाडि सवार हुने मुहम्मदﷺको काका होलान् । म उमरको जमातनिर बाट हिँडदा उनले सोधे को हो ? उनी उठेर मतिर आए । उनले अबु सुफ्यानलाई देखेर भने : ए अबु सुफ्यान हो, अल्लाहको शत्रु । सर्वप्रथम अल्लाहको गुण गाउँछु किनभने उनले सम्झौता विना नै उसलाई नियन्त्रणमा गरिदिएका छन् । त्यसपछि उनी निस्केर मुहम्मदﷺ भएतिर दौडे । मैले पनि खच्चरलाई दौडाएँ । म अगाडि बढें । खच्चर उफेर मुहम्मदﷺकहाँ गयो । उमर पनि त्यतिबेला नै पुगे र भने : हे ईशदूत, ऊ अबु सुफ्यान हो । मलाई उसको गर्दन काट्ने अनूमति दिनुहोस् । मैले भनें, हे ईशदूत मैले उसलाई शरण दिएको छु । त्यसपछि म मुहम्मदﷺको सामुन्ने बसेर उहाँको टाउको मुसार्दै भनें : आज राती मबाहेक कसैले तपाईंसँग कुरा गर्न पाउँदैन । जब अबु सुफ्यानको बारेमा उमरले पटकपटक बोले अनि मैले भनें , एक छिन पर्ख । यदि ऊ बनु अदी बिन कअबको मान्छे भएको भए तिमीले यस्तो कुरा गर्दैन थियौ । उमरले भने अब्बास चुप लाग ।

खत्ताबले इस्लाम स्वीकारेका भए त्यो भन्दा बढी तिमीले इस्लाम स्वीकारेको कुरा मलाई प्रिय छ । मुख्य कारण तिमीले इस्लाम स्वीकारेको मुहम्मदﷺलाई खत्ताबले इस्लाम स्वीकारे भन्दा बढी प्रिय छ ।

मुहम्मदﷺले भन्नुभयो, अब्बास अबु सुफ्यानलाई आफ्नो कोठामा लैजाऊ र भोलि विहान मकहाँ लिएर आऊ । उहाँको आदेश बमोजिम मैले उनलाई कोठामा लिएर गएँ र विहान उहाँको सेवामा हाजिर गरिदिएँ । उहाँले उनलाई देखेर भन्नुभयो । अबु सुफ्यान तिमीमाथि अपसोच छ । अल्लाहबाहेक कोही पूजनीय हुन सक्दैन भन्ने कुरा बुझ्ने बेला अँझै आएको छैन क्या हो ? अबु सुफ्यानले भने, मेरा आमा बुबा तपाईंमाथि बलिदान होउन् । तपाईं कति विवेकशील, दयालु र कृपालु हुनुहुन्छ भन्ने कुरा मलाई बोध भइसकेको छ । यदि अल्लाहबाहेक पनि कोही ईश्वर भएको भए अहिलेसम्म मेरो लागि केही गरिदिन्थ्यो होला ।

उहाँले भन्नुभयो : अबु सुफ्यान तिमीमाथि अपसोच छ । के म ईशदूत हुँ भन्ने ज्ञान तिमी भित्र अझै पसेको छैन । अबु सुफ्यानले भने, मेरा आमाबुबा तपाईंमाथि बलिदान होउन् । तपाईं कति सज्जन, दयालु र कृपालु हुनुहुन्छ भन्ने कुरामा मलाई अलिकति पनि शंका छैन । त्यसमा अब्बासले भने : हे अबु सुफ्यान टाउको काटिनुभन्दा पहिला नै इस्लाम स्वीकार । यस कुराको साक्षी देऊ कि अल्लाहबाहेक कोही पनि पूजनीय छैन र मुहम्मदﷺ ईशदूत हुन् । त्यसपछि अबु सुफ्यानले इस्लाम स्वीकारे र सत्यताको गवाही दिए ।

अब्बासले भने : हे ईशदूत सुफ्यानलाई सम्मानित हुन मन पर्छ तसर्थ कुनै सम्मान प्रदान गरिदिनुहोस् । उहाँले भन्नुभयो ठिक छ । जो व्यक्ति अबु सुफ्यानको घर आउँछ उसलाई शान्ति छ र जसले आफ्नो ढोका बन्द गर्छ उसको लागि पनि शान्ति छ र जो हरमभित्र प्रवेश गर्छ उसको लागि पनि शान्ति छ ।

## इस्लामी लश्कर मक्कातर्फ

हिजरी सम्बत ८ साल रमजान महिनाको १७ तारिख मंगलबारको दिन विहान मुहम्मदﷺ मर्रुज्जहरानबाट मक्कातर्फ प्रस्थान हुनुभयो र अबु सुफ्यानले अल्लाहको फौज देख्न सकून् भन्ने हेतुले उनलाई उपत्यकाको गोरेटोमा पहाडको नाकानिर रोकेर राख्न भनी उहाँले अब्बासलाई आदेश दिनुभयो । अब्बासले त्यसै गरे । उता कबिलाहरू आआफ्नो झण्डा लिएर जाँदै थिए । त्यहाँबाट एउटा कबिला जाँदा अबु सुफ्यानले अब्बाससँग कुन कबिला हो भनी सोध्थे । जवाफमा अब्बासले यी बनु सुलैम हुन् भनेर भन्थे । अबु सुफ्यानले भने मलाई बनु सुलैमसँग के सरोकार ? फेरि अर्को कबिला त्यहाँबाट जाँदा अबु सुफ्यानले सोधे को हुन् तिनीहरू हे अब्बास ? उनले भने मुजैना हुन् । अबु सुफ्यानले भने मलाई मुजैनासँग के सरोकार ? सबै

कबिलाहरू एकएक गरी गयो । जुन कुनै कबिला त्यहाँबाट जान्थ्यो अबु सुफ्यानले उनीहरूको बारेमा जरुर सोध्थे । अब्बासले उनीहरूको बारेमा बताउँदा उनले भन्थे, मलाई ऊसँग के मतलब ? आखिरकार मुहम्मदﷺ आफ्नो हरियो जमात लिएर आउनुभयो । उहाँ अन्सार र मुहाजिरहरूबीच रोकिनु भएको थियो । त्यहाँ मानिसहरूभन्दा बढी फलामे छेकबार देखिन्थ्यो । अबु सुफ्यानले भने अल्लाह पवित्र छन् । हे अब्बास उनीहरू को हुन् ? उनले भने अन्सार र मुहाजिरबीच उनी मुहम्मदﷺ हुन् । अबु सुफ्यानले भने : उनीसँग को टक्राउन सक्छ र ? उनले फेरि भने । तिम्रो भतिजाको राज त अति शक्तिशाली छ । अब्बासले भने यै त ईशदूतत्व हो । अबु सुफ्यानले भने, ए हो । अब त यही भनिने छ ।

त्यस अवसरमा एउटा घटना घट्यो । अन्सारको झण्डा सअद विन उबादहको हातमा थियो । उनले अबु सुफ्याननिर जाँदै भने :आजको दिन रक्तपात एवं काटमारको दिन हो आज अवैधलाई वैध गरिने छ ।

आज अल्लाहले कुरैशको लागि अपमान लेखेका छन् । त्यसपछि त्यहाँबाट मुहम्मदﷺ जाँदा सुफ्यानले भने : हे ईशदूत तपाईंले सअदले भनेको कुरा सुन्नुभएन ? मुहम्मदﷺले सोध्नुभयो के भनेको छ र ? अबु सुफ्यानले भने : यो यो कुरा भनेको छ । त्यो कुरा सुनेर उस्मान र अब्दुर्रहमान बिन औफले भने कतै सअदले कुरैशमा काटमार मच्चाउँछन् कि भन्ने डर लागेको छ । मुहम्मदﷺले भन्नुभयो, त्यस्तो हुँदैन । आजको दिन त काबाको सम्मान गरिने दिन हो । आजको दिन अल्लाहले कुरैशलाई सम्मान प्रदान गर्नेछ । त्यसपछि उहाँले कुनै व्यक्तिलाई पठाएर सअदको हातबाट झण्डा ल्याउन भन्नुभयो र उनको छोरा कैसलाई झण्डा दिनुभयो । अर्थात झण्डा उनको हातबाट छुटेको थिएन । भनिन्छ उहाँले झण्डा जुबैरको हवाला गरिदिनु भएको थियो ।

## इस्लामी लश्कर अचानक कुरैशमाथि

मोहम्मदﷺ अबु सुफ्यान भएको ठाउँबाट जाँदा अब्बासले उनीसँग भने : दौडेर आफ्नो समुदायतिर जाऊ । अबु सुफ्यानले तेज गतिमा मक्का गएर ठूलो स्वर गरी पुकारे : हे कुरैशी हो उनी मुहम्मद हुन् । उनले तिमीहरू विरुद्ध यति ठूलो फौज ल्याएका छन् त्यसको सामना तिमीहरू गर्न सक्दैनौ । तसर्थ जो अबु सुफ्यानको घरभित्र पस्नेछ ऊ सुरक्षित रहनेछ । त्यो कुरा सुनेर उनकी श्रीमती हिन्दा विन्त उत्बा उठेर उनको जुँगा समातेर भनी : हान यस हट्टाकट्टा मोटेलाई । नाश होस् यस्तो लण्ठुको ।

अबु सुफ्यानले जवाफमा भने : तिम्रो नाश होस् । हेर यस महिलाले गर्दा तिमीहरूको ज्यान जाला । किनभने मुहम्मदﷺले यस्तो लश्कर ल्याएका छन् जसको

सामना तिमीहरू गर्न सक्दैनौ । त्यसकारण जो अबु सुफ्यानको घर पस्छ उ सुरक्षित रहन्छ । मानिसहरूले भने : अल्लाहले तिम्रो हत्या गरुन् । तिम्रो घर हामीमध्ये कतिको काम आउन सक्छ र ? अबु सुफ्यानले भने, जो आफ्नो घरको ढोका बन्द गरी बस्छ ऊ पनि सुरक्षित रहने छ । जो हरममा प्रवेश गर्छ ऊ पनि सुरक्षित रहने छ । त्यो कुरा सुनेर मानिसहरू आफ्नो आफ्नो घरतिर भागे तर आफ्ना गुण्डा किसिमका व्यक्तिहरूलाई अगाडि बढाउदै भने : यदि कुरैशलाई कुनै सफलता मिल्यो भने हामी तिमीहरूको साथमा हुने छौं र यदि तिमीहरूमाथि मार पऱ्यो भने हामीसँग जे माग गरिनेछ त्यो दिन तयार छौं । कुरैशका ती मूर्ख गुण्डाहरू मुसलमान विरुद्ध लड्न इक्रिमाह बिन अबि जहल, सफवान बिन उमैया र सुहैल बिन अमरको नेतृत्वमा खन्दमाभित्र जम्मा भए । उनीहरूमा बनु बकरको एक जना व्यक्ति हम्मास बिन कैस पनि थियो जसले यसअघि हतियार तयार गर्दै थियो । उसकी श्रीमतीले सोधी, केको तयारी हो यो ? उसले भन्यो, मुहम्मद र उसका साथीहरू विरुद्ध लड्ने तयारी । उसको जवाफ सुनेर उसकी श्रीमतीले भनी अल्लाहको कसम अल्लाह र मुहम्मदﷺको अगाडि कुनै कुरा टिक्दैन । उसले भन्यो : मलाई आशा छ उसका केही साथीहरूलाई तिम्रो गुलाम बनाइदिने छु । उसले फेरि भन्यो : यदि ऊ मेरो सामुन्ने आयो भने मेरो कुनै दोष हुने छैन । यी हतियार र लामो भाला स्वाट्ट निस्कने धारी हुन् ।

## इस्लामी लश्कर जितुवामा

मोहम्मदﷺ मर्रुज्जहरानबाट जितुवा पुग्नुभयो । त्यसै बीच अल्लाहले प्रदान गरेको विजयको सम्मान गर्दै उहाँले आफ्नो शिर झुकाउँदा दाह्रीले काठीको काठलाई पनि छोयो । जितुवामा उहाँले फौजको तर्तिब मिलाउनुका साथै फौजलाई विभाजन गर्नुभयो । खालिद बिन वलिदलाई आफ्नो साथमा राख्नुभयो । त्यसमा अस्लम, सुलैम, गिफार, मुजैना, जुहैनाह र अन्य केही कबिला शामिल थिए । मक्काको फेदीबाट प्रवेश गर्न र कुरैशमध्ये कोही बाधक बनेको खण्डमा सफामा उहाँसँग भेट नहुँदासम्म उनीहरूको हत्या नगर्न खालिद बिन वलिदलाई निर्देशन गरियो ।

जुबैर बिन औवाम देब्रेतिर थिए । उनको साथमा मुहम्मदﷺको झण्डा थियो । उहाँले उनलाई मक्काको माथिल्लो भागबाट प्रवेश गरी हजुनमा आफ्नो झण्डा गाडेर त्यहीँ बस्न आदेश दिनुभयो ।

उबैदाहलाई पैदल सवारीमा चयन गरिएको थियो । उहाँले उनीहरूलाई बतन उपत्यकाको मार्गमा लगेर मक्कामा मुहम्मदﷺको सामुन्ने आउन आदेश दिनुभयो ।

## मक्कामा इस्लामी लश्कर प्रवेश

यी निर्देशनहरूपछि सबै टोलीहरू आआफ्नो निश्चित ठाउँतिर गए ।

खालिद तथा उनका साथीहरूको अवरोधमा जो आयो उनीहरूले त्यसलाई सुताइदिए । उनका साथीहरूमध्ये पनि कुर्ज बिन फेहरी र खुनैस बिन खालिदले शहादत प्राप्त गरेका थिए । कारण उनीहरू दुवै फौजबाट छुटेर एकअर्को मार्गतर्फ लागेका थिए र त्यसै दौरान उनीहरूको हत्या गरियो । खन्दकमा पुगेपछि खालिद बिन वलिद र उनका साथीहरूको भिडन्त कुरैशका गुण्डाहरूसँग भयो । मामुली झडपमा बाह्र जना बहुदेववादीहरू मारिए । त्यसपछि भागदौड मच्चियो । हमास बिन कैस जो मुसलमानहरू विरुद्ध लड्न हतियार मर्मत गर्ने गर्थ्यो ऊ पनि भागेर आफ्नो घरतिर गएर पस्यो र उसले आफ्नी श्रीमतीसँग भन्यो : ढोका बन्द गर । उसकी श्रीमतीले सोधी ऊ कहाँ गयो जसको बारेमा तिमी कुरा गर्थ्यौ ? उसले भन्यो : यदि तिमीले खन्दामाको युद्ध देखेकी भए तिमीले कत्ति खिसी गर्ने थिइनौ, सफवान र इक्रिमाह पनि भागे । नांगो तरवारले हाम्रो स्वागत गरियो । ती तरवारहरूले हात र टाउको काट्दा तरवार बजेको छन्छन् स्वर बाहेक केही सुनिएको थिएन ।

त्यसपछि खालिद विन वलिद मक्काको गल्ली तथा कुनाकाप्चातिर घुम्दै सफा नामक पहाडतिर मुहम्मदﷺ भएको ठाउँमा गए । उता जुबैरले अगाडि बढेर हजुनमा विजयी मस्जिदनिर मुहम्मदﷺको झण्डा गाडिदिए र उहाँको लागि एउटा स्तम्भ पनि बनाए । उनी मुहम्मदﷺ नआउन्जेल त्यहीँ बसिरहे ।

## मस्जिदे हराममा मुहम्मदﷺको प्रवेश र मस्जिदबाट मूर्ति निकाला

त्यसपछि मुहम्मदﷺ उठ्नुभयो । अगाडि पछाडि र वरिपरि रहेका अन्सार तथा मुहाजिरहरूको जमातसँगै मस्जिदे हराममा आउनुभयो । अगाडि बढेर हजरे अस्वदलाई चुम्बन दिनुभयो त्यसपछि काबाको परिक्रमा गर्नुभयो । त्यतिबेला उहाँको हातमा एउटा हतियार थियो काबा वरिपरि र त्यसको छतमा रहेका तीन सय साठी वटा मूर्तिलाई उहाँले आफ्नो हतियारले फोर्दै भन्नुभयो : सत्य आयो, असत्य परास्त भयो, असत्य परास्त हुने चीज हो । सत्य आयो, असत्यको चहलपहल अन्त्य भयो । र उहाँले मूर्तिलाई हान्दा मूर्तिहरू घोप्टो ढल्थे ।

उहाँले काबाको तवाफ अर्थात परिक्रमा आफ्नो उँटनीमा सवार भएर गर्नुभएको थियो । एहराम नबाँधेकाले केवल तवाफ मात्र गर्नुभयो । परिक्रमा पूरा गरेपछि उस्मान बिन तलहालाई बोलाएर उनीसँग काबाको चाबी लिनुभयो । त्यसपछि उहाँको आदेशमा काबा खोलियो । भित्र प्रवेश गर्दा त्यहाँ केही चित्रहरू भेटिए । ती चित्रहरूमा इब्राहीम र इस्माइलको चित्र पनि थियो । उनीहरूको हातमा जोतिषी धनुष पनि थियो । त्यो दृश्य देखेर उहाँले भन्नुभयो : अल्लाहले यी

बहुदेववादीहरूको नाश गरुन् । अल्लाहको कसम यी दुवै ईशदूतहरूले कहिल्यै पनि जोतिषी धनुषको प्रयोग गरेनन् । उहाँले काबाभित्र काठद्वारा बनाइएको परेवा पनि देख्नुभयो । त्यसलाई उहाँले फुटाइदिनुभयो । साथै त्यहाँका चित्रहरू उहाँको आदेशमा मेटाइयो ।

## काबामा मुहम्मदﷺको नमाज र कुरैशसँग सम्बोधन

त्यसपछि उहाँले भित्रबाट ढोका बन्द गर्नुभयो । उसामा र बिलाल पनि भित्रै थिए । उहाँ ढोकानिरको गारोमा चढेर गारोबाट तीन हातको दुरीमा गएर त्यहीँ बस्नुभयो । उहाँको देब्रेपट्टि दुई वटा खामा थिए । एउटा खामा दाहिने तर्फ थियो भने तीन वटा खामा पछाडि थिए । त्यतिखेर काबामा ६ वटा खामा थिए । उहाँले त्यहीँ नमाज पढ्नुभयो । त्यसपछि काबाको तवाफ गर्नुभयो । गारोको प्रत्येक कुनामा पुग्दा अल्लाहु अक्बर भन्नुभयो । त्यसपछि ढोका खोल्नुभयो । कुरैश मस्जिदमा ताँती लगाएर खचाखच भरिएका थिए । उनीहरू मुहम्मद ﷺले के गर्दा रहेछन् भनी प्रतीक्षामा बसेका थिए । उहाँले ढोकाको दुवै पल्ला समातेर तल बसेका कुरैशलाई निम्न सम्बोधन गर्नुभयो ।

अल्लाह बाहेक कुनै पूजनीय छैन । ऊ एउटै छ । उसको कुनै पनि साभ्ती छैन । उसले आफ्नो बचन पूरा गरेर देखाएको छ । आफ्नो उपासकहरूको सहयोग गरेको छ र एकलैले सम्पूर्ण जत्थालाई पराजित गरेको छ । सुन, अल्लाहको घरको स्याहार संभार गर्नु र हाजीहरूलाई पानी पिलाउनेदेखि लिएर सम्पूर्ण सम्मानजनक कामकाज र सुरक्षा दिने काम मेरो जिम्मामा हुने छ । याद राख, भ्तुक्किएर लाठी वा कोर्राबाट हत्या गरियो भने त्यसको प्रतिदण्ड छ । अर्थात सय वटा उँट जसमध्ये चालीस वटा उँट गर्भालु हुनु पर्छ ।

हे कुरैशी हो , अल्लाहले तिमीहरूको अज्ञानता तथा पुर्ख्यौली घमण्डलाई तोडिसकेको छ । सबै मानिसहरू आदमका सन्तान हुन् र आदम माटोबाट बनाइएका हुन् । त्यसपछि निम्न ईशवाणी अवतरण भयो:

يَا أَيُّهَا النَّاسُ إِنَّا خَلَقْنَاكُمْ مِنْ ذَكَرٍ وَأُنْثَىٰ وَجَعَلْنَاكُمْ شُعُوبًا وَقَبَائِلَ لِتَعَارَفُوا ۚ إِنَّ أَكْرَمَكُمْ عِنْدَ اللَّهِ أَتْقَاكُمْ ۚ إِنَّ اللَّهَ عَلِيمٌ خَبِيرٌ (الحجرات: ١٣)

हे मानव हामीले तिमीहरूलाई एउटा पुरुष र एउटा महिलाबाट सृष्टि गरेका हौं र तिमीहरू एकअर्कासँग परिचित हुन सक भनी तिमीहरुको विभिन्न वंश तथा जात बनायौं । निसंदेह अल्लाहकहाँ तिमीहरूमध्ये सबैभन्दा उच्च त्यो व्यक्ति हुनेछ जोसँग सबैभन्दा बढी ईशभय छ । निसंदेह अल्लाह सर्वज्ञाता एंव खबर राख्नेवाला छन् (अल् हुजुरात:१३)

## आज कुनै कारवाही हुने छैन

उहाँले भन्नुभयो : कुरैशीहरू हो, तिमीहरूको के विचार छ ? मैले तिमीहरूमाथि कस्तो व्यवहार गरेको छु ? उनीहरूले जवाफ दिए , राम्रो व्यवहार । तपाईँ हाम्रो दयालु दाइ हुनुहुन्छ र दयालु दाइका छोरा हुनुहुन्छ । उहाँले भन्नुभयो : मैले तिमीहरूसँग त्यही कुरा भन्दै छु जुन कुरा युसुफले आफ्नो भाइहरूसँग भनेका थिए । आज तिमीहरूमाथि कुनै कारवाही गरिने छैन, जाऊ ।

## काबाको चाबी

मुहम्मदﷺ मस्जिदे हराममा गएर बस्नुभयो । काबाको चाबी लिएर अलीले हाजिर हुँदै भने : हजुर , हामीलाई हाजीहरूलाई पानी पिलाउने सम्मानजनक कामको साथसाथै काबाको स्यहार संभार जस्तो गरिमामय काम पनि प्रदान गरिदिनुस् । अल्लाहले तपाईँमाथि कृपादृष्टि गरुन् । एक अर्को हदिस बमोजिम त्यो अनुरोध अब्बासले गरेका थिए । मुहम्मदﷺले भन्नुभयो : उस्मान विन तलहा कहाँ छन् ? उनलाई बोलाइयो । उहाँले भन्नुभयो : उस्मान, यो चाबी लेऊ । आजको दिन पुण्य कमाउने एवं आज्ञापालना गर्ने दिन हो । तबकाते इब्ने सअदमार्फत वर्णन गरिएको हदिस अनुसार उहाँले चाबी दिने बेलामा भन्नुभएको थियो : यो चाबी सदाको लागि लेऊ । तिमीहरूबाट यो चाबी त्यो व्यक्तिले मात्र खोस्ने छ जो अत्याचारी बन्नेछ । हे उसमान अल्लाहले तिमीहरूलाई आफ्नो घरको रखवाला बनाएको छ । तसर्थ अल्लाहको यस घरबाट तिमीहरूले जे आर्जन गर्छौ त्यो राम्रो तरिकाले खाऊ ।

## काबाको छतमाथि बिलालले दिए आजान

नमाजको समय भएको थियो । मुहम्मदﷺले बिलाललाई काबामाथि चढेर आजान दिन निर्देशन गर्नुभयो । त्यतिबेला अबु सुफ्यान विन हरब, यताब विन उसैद र हारिस बिन हेशाम काबाको बराम्दामा बसेका थिए । यताबले भन्यो : अल्लाहले उसैदलाई आजान नसुन्ने सम्मान दिएका छन् । किनभने उसले अजान सुनेको भए यसलाई मन पराउँदै थियो । त्यसमा हारिसले भन्यो : यदि मलाई उनी सत्य छन् भनी थाहा भएको भए मैले उनको अनुकरण गर्थें । त्यसमा अबु सुफ्यानले भन्यो : म त केही भन्दिनँ किनभने यदि म बोलेँ भने यी कण कणले पनि मेरो विरुद्ध खबर दिने छन् । त्यसपछि ईशदूत उनीहरू भएको ठाउँमा गएर भन्नुभयो : केही बेरअघि तिमीहरूले जे कुरा गरेका थियौ मलाई थाहा भएको छ । मुहम्मदﷺले उनीहरूले गरेको कुरा भन्नुभयो । त्यो सुनेर हारिस र यताबले भने : हामी गवाही दिन्छौँ तपाईँ ईशदूत हुनुहुन्छ । किनकि अल्लाहको कसम हामीसँग हाम्रो कुरा सुनेर तपाईँलाई खबर दिने कुनै व्यक्ति नै थिएन ।

## विजय तथा कृतज्ञताको नमाज

त्यसै दिन मुहम्मदﷺ अबु तालिबकी छोरी उम्मे हानीकहाँ जानुभयो र स्नान गरी आठ रकाअत नमाज पढ्नुभयो । त्यो समय सुर्य झुल्केपछिको समय थियो । त्यसै कारणले कसैले त्यस नमाजलाई जुहाको नमाज सम्झे भने कसैले विजयको नमाज सम्झे । उम्मे हानीले आफ्नो दुवै देवरलाई शरण दिएर राखेकी थिइन् । उहाँले भन्नुभयो : हे उम्मे हानी जसलाई तिमीले शरण दिएकी छौ त्यसलाई हामीले पनि शरण दिएका छौं । उहाँको भनाइँको अर्थ थियो उम्मे हानीको भाइ अलीले ती दुवैको हत्या गर्न खोजेका थिए । त्यस कारण उम्मे हानीले ती दुवैलाई घरभित्र लुकाएर ढोका बन्द गरेकी थिइन् । जब मुहम्मदﷺ जानुभयो अनि उम्मे हानीले उनीहरूको बारेमा सोधिन् र मुहम्मदﷺले उनीहरूको बारेमा भन्नुभएको कुरा थाहा पाइन् ।

## ठूला दोषीहरूलाई हत्या गर्ने घोषणा

विजयको दिन मुहम्मदﷺले ठूला दोषीहरूमध्ये नौ जनाको हत्या गर्ने घोषणा गर्दै त्यसको आदेश दिनुभयो : काबाको पर्दामुनि भेटिए भने पनि उनीहरूको हत्या गरियोस् । उनीहरूको नाम यस प्रकार छ । अब्दुल उज्जा बिन अख्तल, अब्दुल्लाह बिन अबी सरह, इक्रिमाह बिन अबु जहल, हारिस बिन नुफैल,मुकैस बिन सबाबह,हेबार बिन अस्वद र इब्ने अख्तलको दुई जना दासिका जसले मुहम्मदﷺको खिसी काट्ने गरेका थिए । सारह जो अब्दुल मुत्तलिबको सन्तानमध्ये एक जनाकी दासिका थिई । उसँग हातिबको पत्र भेटिएको थियो ।

अब्दुल्लाह बिन अबी सरह बारे उस्मानले उसलाई मुहम्मदﷺकहाँ लगेर उसको हत्या नगर्न सिफारिश गरे र उहाँले उनलाई जीवनदान दिँदै उसले इस्लाम स्वीकारेको कुरा मान्नुभयो । तर त्योभन्दा पहिला कुनै सहाबीले उनको हत्या गरिदिन्छ कि भनेर केही बेर उहाँ चुपचाप बस्नुभयो । किनभने उसले यसअघि पनि इस्लाम स्वीकारेर हिजरत गरी मदिना आएको थियो । फेरि ऊ अधर्मी भएको थियो । तर यसपश्चात भने उनमा इस्लामी व्यवहार झल्कियो ।

इक्रिमाह बिन अबु जहल भागेर यमनतर्फ गए । उनकी श्रीमतीले मुहम्मदﷺकहाँ आएर उसको सुरक्षाको लागि आग्रह गरिन् । उहाँले उनलाई सुरक्षा प्रदान गर्नुभयो । त्यसपछि उनी आफ्नो श्रीमान इक्रिमाहको पछिपछि गएर उनलाई आफ्नो साथमा लिएर आइन् । फर्केर आएपछि उनले इस्लाम स्वीकारे । त्यसपछि उनी दृढताका साथ इस्लाममा कायम रहे ।

इब्ने खतल काबाको पर्दा समातेर झुण्डेको थियो । एक जना सहाबीले मुहम्मदﷺकहाँ आएर त्यस बारे बताए । उहाँले उसको हत्या गरिदिन भन्नुभयो र उनले उसको हत्या गरिदिए ।

मुकैस बिन सबाबको हत्या नुमैलाह बिन अब्दुल्लाहले गरे । मुकैस पनि पहिला मुसलमान थियो । तर ऊ एक जना अन्सारीको हत्या गरी अधर्मी बनेको थियो र भागेर बहुदेववादीहरूतिर गएको थियो ।

हारिस जसले मक्कामा मुहम्मदﷺलाई अति दुःख दिने गर्थ्यो उसको हत्या अलीले गरे ।

हेबार बिन अस्वद, त्यो व्यक्ति हो जसले मुहम्मदﷺकी छोरी जैनबलाई हिजरतको मौकामा अति नराम्रो पाराले सराप्दा उनी उँटको काठीबाट खसेर ढुंगामाथि बज्रेकी थिइन् जसले गर्दा उनको गर्भ खसेको थियो । त्यही व्यक्ति विजयको दिन भागेर आइकन मुसलमान बन्यो र इस्लाममा कायम रह्यो ।

इब्ने खतलकी दुई जना दासिकामध्ये एक जनाको हत्या गरियो । एक जनाको लागि सुरक्षा मागियो र उनले इस्लाम स्वीकारिन् । त्यसै गरी सारहको लागि पनि अमनको भिख मागियो र उनले पनि इस्लाम स्वीकारिन् । नौ जनामध्ये चार जनाको हत्या गरियो पाँच जनालाई जीवनदान दिइयो र उनीहरूले इस्लाम स्वीकारे ।

हाफिज इब्ने हजर लेख्छन् : जुन व्यक्तिहरूको हत्या गर्ने घोषणा गरिएको थियो त्यसमा अबु मशरले हारिस बिन तलातुल खुजाइको नाम पनि उल्लेख गरेका छन् । उसको हत्या अलीले गरेका थिए । इमाम हाकिमले त्यस सूचिमा कअब बिन जुहैरको नाम पनि उल्लेख गरेका छन् । कअबको घटना प्रसिद्ध छ । उसले पछि आएर इस्लाम स्वीकारेर मुहम्मदﷺको प्रशंसा गरेको थियो । त्यसै सूचिमा वहशी बिन हरब र अबु सुफ्यानकी श्रीमती हिन्दा विन्त उत्बा पनि थिए । उनीहरूले पनि इस्लाम स्वीकारे । इब्ने खतलकी दासिका अर्नबको हत्या गरियो र उम्मे सअदको पनि हत्या भयो, जस्तै इब्ने इस्हाकले वर्णन गरेका छन् । यसरी पुरुषको संख्या आठ र महिलाको संख्या ६ पुग्छ । ती दुवै दासिका अर्नब र उम्मे सअद हुन सक्छन् । विवाद केवल नाम र उपनामले गर्दा भएको हुन सक्छ ।[१]

## सफ्वान बिन उमैया र फजालह बिन उमैर इस्लाममा प्रवेश

सफवान्को हत्याको घोषणा नभएता पनि कुरैशको शीर्ष नेता भएकोले उसलाई आफ्नो ज्यानको खतरा थियो । त्यसकारण ऊ पनि भाग्यो । उमैर बिन वहब जह्मीले मुहम्मदﷺकहाँ आएर उसको लागि सुरक्षाको भिख मागे । उहाँले

१ फतहुलबारी भाग ८

उसलाई सुरक्षा दिनुभयो र चिनोको रूपमा मक्कामा प्रवेश गर्दा लगाउनुभएको आफ्नो पगरी पनि दिनुभयो । उमैर सफवानकहाँ जाँदा ऊ जिद्दाबाट यमन जानको लागि समुन्द्रको यात्रा गर्ने तयारी गरिरहेको थियो । उमैरले उसलाई फर्काएर ल्याए । उसले मुहम्मद ﷺ सँग दुई महिनाको समय माग्यो । मुहम्मद ﷺ ले उसलाई चार महिनाको समय दिनुभयो । त्यसपछि सफवानले पनि इस्लाम स्वीकार्यो । उसकी श्रीमती पहिला नै मुस्लिम बनिसकेकी थिइन् । उहाँले उनीहरू दुवैलाई इस्लाम लिनुभन्दा अघिको विवाहमा नै यथावत राखिदिनुभयो ।

फजालह एक बहादुर व्यक्ति थियो । मुहम्मद ﷺ ले काबाको तवाफ गरिरहँदा ऊ उहाँको हत्या गर्ने नियतले आएको थियो । तर मुहम्मद ﷺ ले उसको मनको कुरा उसँग भन्नुभयो र त्यतिकैमा ऊ मुसलमान बन्यो ।

## विजयको दोस्रो दिन मुहम्मद ﷺ को सम्बोधन

विजयको दोस्रो दिन प्रवचन दिन मुहम्मद ﷺ फेरि मानिसहरूको माझमा उपस्थित हुनुभयो । उहाँले अल्लाहको प्रशंसा गरेर भन्नुभयो । हे मानिसहरू हो, अल्लाहले जुन दिन आकाश बनाए त्यसै दिन मक्कालाई पवित्र शहर घोषित गरे । अल्लाहले पवित्र शहर घोषित गरेकाले मक्का महाप्रलयसम्म पवित्र रहने छ । तसर्थ जुन व्यक्तिलाई अल्लाह र प्रलोकमाथि आस्था छ उनीहरूको निम्ति यहाँ रक्तपात गर्न र कुनै पनि बोट विरुवा काट्न निषेध छ । ईशदूत मुहम्मद ﷺ ले यहाँ युद्ध गरेका थिए भनी जसले युद्ध गर्ने बाटो खोज्छ उनीहरूसँग भनिदेऊ, अल्लाहले मुहम्मद ﷺ लाई अनुमति दिएका थिए तर तिमीहरूलाई अनुमति छैन । मेरो लागि पनि एक दिन एक छिनको निम्ति खुला गरिएको थियो । आज पनि यसको पवित्रता पहिला जत्तिकै छ । यहाँ उपस्थित हुनेले अनुपस्थित हुनेलाई बताओस् ।

एक अर्को हदिसमा थप निम्न कुरा पनि उल्लेख गरिएको छ : मक्काको काँडो पनि नकाटियोस्, सिकार नगरियोस् ,कसैबाट हराएको कुनै वस्तुलाई कसैले नउठाओस् तर सूचना गर्ने उद्देश्यले मात्र । त्यहाँको घाँस पनि नउखेलियोस् । अब्बासले इज्खिर नामी घाँसको बारेमा सोधे । उहाँले त्यसको बारेमा भने अनुमति दिनुभयो ।

बनु खुजाअले त्यसै दिन बनु लैसको एक जना व्यक्तिको हत्या गरेको थियो । किनभने बनु लैसद्वारा इस्लामपूर्व उसको एक जना व्यक्ति मारिएको थियो । मुहम्मद ﷺ ले त्यस बारे भन्नुभयो : खुजाअका मानिसहरू हो ! कसैको हत्या गर्नबाट आफ्नो हातलाई रोक । यदि हत्या नै शुभकार्य भएको भए कतिपय व्यक्तिको हत्या भइसक्ने थियो । तिमीहरूले त्यो व्यक्तिको हत्या गरेका छौ जसको प्रतिदान मैले अवश्य दिनु पर्नेछ । म यस पदमा भएको नाताले अबदेखि कसैले कसैको हत्या गरे

भने मृतकका अविभावकलाई दुईटा कुराको अख्तियार दिन्छु । चाहे त उनीहरूले हत्याराको हत्या गरुन् चाहे उनीहरूले क्षतिपूर्ति लिउन् ।

एक अर्को भनाइ अनुसार त्यो कुरा सुनेर यमनको एक जना जसको नाम अबु शाह थियो उसले उठेर भन्यो : हे ईशदूत मलाई लिखित दिनुहोस् । उहाँले भन्नुभयो : अबु शाहलाई यो कुरा लेखेर देऊ ।[१]

## अन्सारहरूलाई चिन्ता

ज्ञात रहोस् मक्का नै मुहम्मदﷺको शहर, जन्मथलो र देश हो । मक्कामाथि विजय प्राप्त गरिसकेपछि अन्सारहरूले एक आपसमा भने : अल्लाहले मुहम्मदﷺलाई उहाँको भूमि र शहर विजय गरिदिएका छन्, के अब उहाँ त्यहीं बस्नु हुन्छ ? त्यतिखेर उहाँ सफा पहाडमा हात उठाएर प्रार्थना गरिरहनु भएको थियो । प्रार्थनापछि सोध्नुभयो तिमीहरूले के कुरा गरिरहेका थियौ ? उनीहरूले भने , केही पनि होइन । उहाँले पटक पटक सोधेपछि उनीहरूले कुरा खोले । उहाँले भन्नुभयो अब जिउनु र मर्नु तिमीहरूको साथमा नै छ ।

## सपथ

जब अल्लाहले मुहम्मदﷺ र मुसलमानहरूको लागि मक्का विजय गरिदिए अनि मक्कावासीहरूमा सत्यता खुल्यो । इस्लाम बाहेक कुनै पनि सफल मार्ग छैन भन्ने कुरा मान्न उनीहरू बाध्य भए । त्यसकारण उनीहरू इस्लामको सपथ लिन जम्मा भए । मुहम्मदﷺले सफा पहाडमा बसेर मानिसहरूलाई सपथ ग्रहण गराउन शुरु गर्नुभयो । उमर बिन खत्ताब तल बसेर मानिसहरूलाई सपथ ग्रहण गराइरहेका थिए । मानिसहरूले सकेसम्म उहाँको आज्ञापालन गर्ने प्रतिज्ञा गरे ।

मुदारिक नामक पुस्तकमा उल्लेखित भनाइ अनुसार त्यस अवसरमा मुहम्मदﷺले पुरुषहरूलाई इस्लामको सपथ ग्रहण गराइसकेपछि महिलाहरूलाई पनि सफा पहाडमा सपथ ग्रहण गराउन सुरु गर्नुभयो । उमर उहाँको आदेश बमोजिम तल बसेर महिलाहरूलाई सपथ ग्रहण गराइरहेका थिए । उनीहरूसँग मुहम्मदﷺको कुरा आदानप्रदान गरिरहेका थिए । त्यसै अवसरमा अबु सुफ्यानकी श्रीमती हिन्दा बिन्त उत्बा पनि भेष बदलेर आई । हमजाको लाससँग उसले जुन दुर्व्यवहार गरेकी थिई त्यसले गर्दा ऊ मुहम्मदﷺले चिन्नु हुन्छ कि भनेर डराइरहेकी थिई । उता मुहम्मदﷺले सपथ ग्रहण गराउने क्रममा निम्न कुरा भन्न लगाउनुभयो : म यस कुराको प्रतिज्ञा गर्छु कि अल्लाह बाहेक कसैको पूजा गर्ने छैन । उमरले त्यसै कुरालाई दोहऱ्याएर महिलाहरूलाई पनि त्यसै कुराको सपथ ग्रहण गराए । अर्थात उनीहरूले

१ सही बुखारी भाग १, सही मुस्लिम भाग १, इब्ने हेशाम भाग २, सुनन् अबु दाऊद

अल्लाहसँग कसैलाई साभ्की ठहऱ्याउने छैनन् । त्यसपछि मुहम्मदﷺले भन्न लगाउनुभयो : चोरी गर्ने छैनौ ,त्यसमा हिन्दाले भनी अबु सुफ्यान कन्जुस छन् । यदि उसको मालबाट मैले केही लिएँ भने ? अबु सुफ्यान त्यतिबेला त्यहीँ उपस्थित थिए । उनले भने, तिम्रो लागि सबै कुरा जायज छ । मुहम्मदﷺ मुस्काउनुभयो । उहाँले हिन्दालाई चिन्नुभयो । तिमी नै हिन्दा हौ ? हे ईशदूत जे भयो माफ गरिदिनुहोस् अल्लाहले तपाईंलाई माफ गरिदिने छन् ।

त्यसपछि उहाँले भन्नुभयो : अवैध यौनसम्पर्क गर्नु हुँदैन । त्यो कुरा सुनेर हिन्दाले भनी के स्वतन्त्र नारीले पनि अवैध यौनसम्पर्क गर्छे र ? त्यसपछि उहाँले भन्नुभयो :आफ्नो सन्तानको हत्या गर्नु हुँदैन । हिन्दाले भनी हामीले त बाल्यावस्थामा उनीहरूलाई पालनपोषण गऱ्यौं तर पछि तपाईंहरूले उनीहरूको हत्या गर्नुभयो । तसर्थ तपाई र उनीहरू व्यहोर्नुहोस् । स्मरण रहोस्, हिन्दाको छोरा हन्जला बिन अबु सुफ्यान बदरको युद्धमा मारिएको थियो । हिन्दाको त्यो कुरा सुनेर उमर हाँस्दाहाँस्दा उत्तानो परे, मुहम्मदﷺ पनि हाँस्नुभयो ।

त्यसपछि उहाँले भन्नुभयो : मिथ्यारोपण गर्नु हुँदैन । हिन्दाले भनी मिथ्यारोपण त अति नराम्रो कुरा हो । तपाईंले हामीलाई सत्यमार्ग तथा नैतिकताको ज्ञान दिनुभएको छ । त्यसपछि उहाँले भन्नुभयो: कुनै भलो कुरामा मुहम्मदﷺको अवज्ञा गर्नु हुँदैन । हिन्दाले भनी, अल्लाहको कसम हामी तपाईंको अवज्ञा गर्ने नियत लिएर यस सभामा बसेका होइनौं ।

हिन्दाले आफ्नो घर फर्केर आफ्नो मूर्ति फुटाइन् । हामी आजसम्म तिमी बारे भ्रममा थियौं भन्दै उनले ती मूर्तिहरू फुटाएकी थिइन् ।

सही बुखारी अनुसार, हिन्दा बिन्ते उत्बाले आएर भनिन् : हे ईशदूत पहिला मलाई धर्तीमा रहेका क्याम्पहरूमध्ये तपाईंको क्याम्पवासी अपमानित हुँदा मलाई बढी खुसी लाग्थ्यो । तर आज धर्तीमा रहेका सम्पूर्ण क्याम्पवासीमध्ये तपाईंको क्याम्पवासीहरू मलाई बढी प्यारा लागेका छन् । उहाँले भन्नुभयो : त्यो जातको कसम जसको हातमा मेरो ज्यान छ । मसँग अरू कुराहरू पनि छन् ।

हिन्दाले भनी, हे ईशदूत अबु सुफ्यान कन्जुस छ , उसको सम्पत्तिबाट आफ्नो केटाकेटीको पालनपोषण जायज छ कि छैन ? उहाँले भन्नुभयो : सही तरिकाले खर्च गर्नुमा कुनै पाप छैन । [१]

---

१ सही बुखारी फतहुलबारी भाग ७ हदिस नं ३८२५, ७१६१

## मक्कामा मुहम्मदﷺको बसाइँ र कामकारवाहीहरू

मक्कामा मुहम्मदﷺ १९ दिनसम्म बस्नुभयो । त्यस अवधिमा उहाँले इस्लामी नीतिनियम नविकरण गर्नुभयो । मानिसहरूलाई ईशभय तथा सत्यमार्गको शिक्षा दिनुभयो । तिनै दिनहरूमा उहाँको निर्देशनमा अबु उसैद खुजाइले पुनः नयाँ तरिकाले हरमको चारैतिर खामाहरू गाडे । उहाँले इस्लामको प्रचार प्रसार गर्न र मक्कावरिपरि रहेका मूर्तिहरू फुटाउनको लागि विभिन्न छापामार टोली पनि पठाउनुभयो । यसरी सम्पूर्ण मूर्ति फुटाइए । उहाँको प्रवक्ताले अल्लाह र महाप्रलयमाथि आस्था राख्नेहरूले मक्काका सम्पूर्ण मूर्तिहरू फुटाउन् भनी सूचना दिए ।

## छापामार टोली र आन्दोलन

१, मक्का विजय भएपछि मुहम्मदﷺले २५ रमजान ८ हिजरीमा खालिद बिन वलिदको कमाण्डमा उज्जा नामी मूर्ति फुटाउन एउटा छापामार टोली पठाउनुभयो । उज्जा नख्ला नामक ठाउँमा स्थापित थियो । कुरैश तथा बनु केनानाको सबै मानिसहरूले त्यसको पूजा गर्थे । त्यो नै उनीहरूको सबैभन्दा ठूलो मूर्ति थियो । बनु शैबान त्यसको पूजारी थियो । तीस जना सहाबीहरूको साथमा नख्ला गएर खालिद बिन वलिदले त्यो मूर्ति फुटाए । फर्केर आएपछि मुहम्मदﷺले उनीसँग तिमीले त्यहाँ केही देखेका थियौ भनी सोध्नुभयो । खालिदले भने, हामीले केही देखेनौं । उहाँले भन्नुभयो : त्यसको अर्थ तिमीहरूले राम्रोसँग त्यसलाई फुटाएनौ । फेरि जाऊ र राम्रोसँग त्यसलाई फुटाऊ । खालिद बिन वलिद मुर्मुराउँदै तरवार निकाले त्यसतर्फ गए । यसपटक उनीहरूको सामुन्ने झुत्रो कपाल भएकी एउटी काली नग्न महिला निस्की । पूजारीले चिच्याउँदै त्यसलाई पुकाऱ्यो । ठिक त्यसै बेला खालिद बिन वलिदले त्यो महिलामाथि यस्तो मार हाने त्यसबाट ऊ दुई टुक्रा भई । त्यसपछि उनले मुहम्मदﷺकहाँ आएर खबर दिए । उहाँले भन्नुभयो : त्यही महिला उज्जा हो । अब यस मुलुकमा कहिल्यै उसको पूजा नहुने भएकोले ऊ निराश छे ।

२, त्यसपछि अमर बिन आसलाई त्यसै महिनामा सुवाअ नामी मूर्ति फुटाउन पठाउनुभयो । त्यो मूर्ति मक्काबाट तीन मिलको दुरीमा अवस्थित रहात नामक ठाउँमा बनु हुजैलको मूर्ति थियो । अमर त्यहाँ पुग्दा पूजारीले सोध्यो : तिमीलाई के चाहियो ? अमरले भने ,मुहम्मदﷺले मलाई यो मूर्ति फुटाउन आदेश दिनुभएको छ । उसले भन्यो : यसलाई फुटाउन तिम्रो तागत छैन । उनले भने : किन ? उसले भन्यो तिमीलाई रोकिने छ । अमरले भने :के तिमी अँझै पनि पथभ्रष्टमा छौ ? तिमीमाथि अफसोच छ । के यसले सुन्न वा देख्न सक्छ र ? त्यसपछि मूर्तिनिर गएर उनले मूर्ति फुटाए र सहाबीहरूलाई उसको ढुकुटी तोडफोड गर्ने आदेश दिए । तर त्यहाँ केही

भेटिएन । उनीहरूले पूजारीसँग सोधे, कस्तो लाग्यो ? उसले भन्यो मलाई अल्लाहमाथि आस्था छ ।

३, त्यसै महिनामा सअद बिन जैद अश्हलीलाई बीस जना सवार दिएर मनात मूर्ति भएको ठाउँमा पठाइयो । त्यो मूर्ति कुदैदनिर मुशल्लल्वासी अवस, खज्रज र गस्सान नामी कबिलाहरूको मूर्ति थियो । सअद त्यहाँ पुग्दा त्यसको पूजारीले उनीसँग सोध्यो : तिमीलाई के चाहियो ? उनले भने म मनातलाई फुटाउन चाहन्छु । उसले भन्यो जे गर्न मन लागेको छ गर । सअद मनाततिर बढ्दै जाँदा एक जना झुत्रो कपाल भएकी काली नग्न महिला निस्की । ऊ आफ्नो छाती पिट्दै अलापविलाप गर्दै थिई । पूजारीले उसँग भन्यो : मनात , तिम्रो अवज्ञाकारीलाई पक्र । ठिक त्यै बेला सअदले तरवार हानेर उसलाई सदाको लागि सुताइदिए । त्यसपछि अगाडि बढेर मूर्ति तोडफोड गरे । ढुकुटीमा भने केही भेटिएन ।

४, उज्जा मूर्तिलाई तोडेर आउने वित्तिकै खालिद बिन वलिदलाई मुहम्मदﷺले रमजानको महिना ८ हिजरीमा बनु जजिमातिर पठाउनुभयो । उद्देश्य कसैमाथि आक्रमण गर्नु थिएन केवल इस्लामको प्रसार प्रचार थियो । खालिद मुहाजिर तथा अन्सार र बनु सुलैमका केही व्यक्तिहरूलाई लिएर प्रस्थान भए । बनु जजिमाकहाँ पुगेर उनीहरूलाई इस्लामको निम्तो दिए । उनीहरूले हामीले इस्लाम स्वीकार्यौं भन्नुको सट्टा हामीले आफ्नो धर्म छाड्यौं भने । त्यो कुरा सुनेर खालिद बिन वलिदले उनीहरूको हत्या तथा पकडधकड सुरु गरिदिए । बन्दी बनाइएका एकएक जनालाई आफ्नो प्रत्येक साथीहरूको हवाला गरिदिए । त्यसपछि एक दिन सबै साथीहरूलाई आआफ्नो कैदीको हत्या गर्ने आदेश दिए । तर उमरको छोरा र उनका साथीहरूले उनको यो आदेश मान्न अस्विकार गरे । मुहम्मदﷺकहाँ आएपछि उनीहरूले त्यस बारे बताए । मुहम्मदﷺले आफ्नो दुवै हात उठाएर दुई पटक भन्नुभयो : हे अल्लाह खालिदले जे गर्‍यो त्यसबाट म मुक्ति चाहन्छु ।[१]

त्यस अवसरमा केवल बनु सुलैमका मानिसहरूले आफ्नो कैदीको हत्या गरेका थिए । अन्सार र मुहाजिरहरूले हत्या गरेका थिएनन् । मुहम्मदﷺले अलीलाई पठाएर मृतकहरूको प्रतिदान र क्षतिपूर्ति दिनुभयो । त्यस सम्बन्धमा खालिद बिन वलिद र अब्दुर्रहमान बिन औफबीच केही चकाचर्की र भनाभन पनि भएको थियो । त्यसबारे मुहम्मदﷺलाई खबर भएपछि उहाँले भन्नुभयो : खालिद चुप लाग, मेरा सहाबीहरूलाई केही नभन । अल्लाहको कसम यदि उहुदको पहाड सुन बन्यो र

१ सही बुखारी भाग १

तिमीले त्यो सबै अल्लाहको मार्गमा खर्च गरे पनि मेरा सहाबीहरूले एक विहान वा बेलुका गरेको उपासनाको पुण्य बराबर हुन सक्दैन ।[१]

त्यो युद्ध नै मक्का विजयको युद्ध थियो । त्यै युद्ध निर्णायक युद्ध र महान सफलताको युद्ध थियो जसले मूर्ति पूजारीहरूको शक्तिलाई पूर्ण रूपमा ध्वस्त गरी यसलाई यस्तो तरिकाले परास्त गऱ्यो अरब टापुको कुनै पनि ठाउँमा त्यसका अवशेषहरु बाँकी रहेनन् । किनभने सामान्य कबिलाहरू पनि मूर्ति पुजारी र मुसलमानबीच भइरहेको युद्धको प्रतिफलको प्रतिक्षामा थिए । हरममा त्यो शक्ति नै सत्तासिंह हुन सक्छ जो हकमा छ भन्ने कुरा उनीहरूलाई थाहा थियो । उनीहरूलाई त्यस कुरामा अर्ध शताब्दिभन्दा पहिलादेखि अर्थात अस्हाबे फिल अब्राहा र उसका साथीहरूको घटना घटेदेखि नै दृढ विश्वास थियो ।  किनभने अरबवासीहरूलाई अब्राहा र उसका साथीहरूले काबामा आक्रमण गर्न लाग्दा अल्लाहले उनीहरूलाई ध्वस्त गरिदिएको कुरा थाहा थियो ।

स्मरण रहोस् हुदैबियाको सन्धि मक्का विजयको पहिलो चरण एवं भूमिका थियो । त्यसले गर्दा त्यहाँ अमन शान्तिको चहलपहल थियो । मानिसहरू एक अर्कासँग खुलेर कुराकानी गर्न सक्थे । इस्लामको बारेमा वार्तालाप तथा छलफल हुन्थ्यो । मक्कामा जुन मुसलमानहरू पर्दा पछाडि थिए उनीहरूलाई पनि आफ्नो इस्लाम प्रकट गर्ने तथा प्रचार प्रसार गर्ने र बहस गर्ने अवसर मिल्यो । त्यस परिस्थितिले गर्दा अत्यधिक मानिसहरूले इस्लाम स्वीकारे । इस्लामी लश्करको संख्या गत युद्धहरूमध्ये कुनैमा पनि तीन हजार भन्दा बढी हुन सकेको थिएन तर मक्का विजयको युद्धमा फौजी संख्या दश हजार पुग्यो ।

त्यस निर्णायक युद्धले मानिसहरूको आँखा खोलिदियो र उनीहरूको आँखामा रहेको अन्तिम पर्दा जो इस्लामको मार्गमा बाधक बनेको थियो त्यो पनि हटाइदियो । त्यस विजयपछि अरब टापुको राजनैतिक तथा धार्मिक शिखरमा मुसलमानहरूको सुर्य चम्क्यो । धार्मिक नेतृत्व र विश्व शासनसत्ता उनीहरूको हातमा आयो ।

यसरी हुदैयिबा सन्धिपछि मुसलमानहरूको पक्षमा जुन सकारात्मक परिवर्तन शुरु भयो त्यो मक्का विजयबाट पूरा भयो । त्यसपछि दोस्रो चरण शुरु भयो जो पूर्ण रूपमा मुसलमानहरूको पक्षमा थियो । जसमा सम्पूर्ण कुराहरू मुसलमानको नियन्त्रणमा थियो । अब अरबी कबिलाहरूको सामुन्ने टोलीटोली भएर मुहम्मदﷺको सेवामा उपस्थित भई इस्लाम स्वीकार्नु र उहाँको आह्वान लिएर चौतर्फी फैलनुबाहेक कुनै उपाय थिएन । आगामी दुई वर्षमा त्यसैको तयारी गरियो ।

---

१ इब्ने हेशाम भाग २, सही बुखारी भाग १ फतहुल्बारी भाग ८, सही मुस्लिम भाग १, जादुल मआद भाग२

# तेस्रो चरण

मुहम्मदﷺको जीवनको यो अन्तिम चरण हो । यसले उहाँको इस्लामी आह्वानका ती परिणामहरूलाई झल्काएको छ जुन करिब २३ वर्षको लामो संघर्ष,कठिनाइ,दुःख कष्ट,संकट, द्वन्द्व र लडाइँ एवं रक्तपात युद्धपछि उहाँलाई प्राप्त भएको थियो ।

त्यस लामो अवधिमा मुसलमानहरूले हासिल गरेको सफलतामध्ये मक्काको विजय सबैभन्दा महत्वपूर्ण सफलता थियो । त्यस विजय पश्चात परिस्थितिको दिशा नै बदलियो र अरबको वातावरणमा नयाँ परिवर्तन आयो । त्यो विजयले वास्तवमा विजय हुनुअघि र पछिको युगलाई छुट्याउने सीमारेखाको हैसियत राख्दछ । किनभने कुरैशहरू अरबको नजरमा धर्मका संरक्षक एवं रखवाला थिए । त्यस मामिलामा पूरा अरब कुरैशको अधीनमा थियो ।
तसर्थ कुरैशले आत्मसमर्पण गर्नु अरबको पूरा टापुमा मूर्तिपूजा प्रथाको पूर्ण रूपमा अन्त्य हुनु समान थियो ।

यस अन्तिम चरणलाई दुई भागमा विभाजित गरिएको छ ।
१, संघर्ष तथा युद्ध ।
२, इस्लाममा प्रवेश गर्न विभिन्न समुदाय  र कबिलाहरूको आगमन ।

यी दुवै परिस्थितिको एक अर्कासँग अन्तर्सम्बन्ध छ । यी दुवै परिस्थिति यस चरणको अघिपछि पनि र एकअर्काको बीचमा पनि सृजना भएका थिए । तर मैले यस पुस्तकलाई क्रमबद्ध गर्ने क्रममा एक परिस्थितिलाई अर्को परिस्थितिबाट अलग बयान गरेको छु ।

पछाडिको पृष्ठहरूमा युद्धको वर्णन भएको थियो । अगाडिको युद्ध पनि त्यसैको एउटा अंग हो । तसर्थ यहाँ पहिला युद्धको नै चर्चा गरिदै छ ।

# हुनैन युद्ध

मक्का अचानक आक्रमणपछि विजय भएको थियो । त्यसकारण अरबवासी भयभीत थिए । छिमेकी कबिलाहरूमा पनि त्यो संकटकाल हटाउन सक्ने शक्ति थिएन । त्यसकारण केही अडियल, शक्तिशाली तथा घमण्डी कबिला बाहेक बाँकी सम्पूर्ण कबिलाहरूले आत्मसमर्पण गरे । अडियल कबिलाहरूमध्ये हवाजिन र सकिफ कबिला शीर्ष सूचिमा थिए । उनीहरूको साथमा मुजर, जशम र सअद बिन बकर नामक कबिलाहरू पनि शामिल थिए । ती सबै कबिलाहरूको सम्बन्ध कैस ऐलानसँग थियो । उनीहरूले मुसलमानको अगाडि आत्मसमर्पण गर्दा आफ्नो इज्जत जान्छ भन्ने ठाने । त्यसकारण ती कबिलाहरूले मालिक बिन औफ नसरीकहाँ गएर मुसलमानविरुद्ध लडाइँ गर्ने निर्णय गरे ।

## शत्रुको प्रस्थान र औतासमा क्याम्पबद्धता

त्यस निर्णयपछि मुसलमान विरुद्ध लडाइँ गर्न उनीहरू निस्कँदा जनरल कमाण्डर मालिक बिन औफले उनीहरुको मालसामान र बालबच्चाहरूलाई लिएर उपत्यका औतासमा गई क्याम्प लगाएर बस्यो । त्यो उपत्यका हुनैन् नजिक बनु हवाजिनको क्षेत्रमा अवस्थित थियो । त्यो उपत्यका हुनैनदेखि अलग थियो । हुनैन् जुल मजाजको सीमामा अवस्थित एक अर्को उपत्यका थियो । त्यहाँबाट अरफात हुँदै मक्काको दूरी दश मिलभन्दा बढी छ ।[१]

## युद्धचार्यद्वारा कमाण्डरको निन्दा

औतासमा झरेर मानिसहरू कमाण्डरको वरिपरि जम्मा भए । उनीहरूमा दुरैद बिन सिम्माह पनि थियो । ऊ निकै बूढो भइसकेको थियो र आफ्नो युद्धअनूभव तथा सुझाव दिनुबाहेक अरू केही गर्न सक्ने क्षमता उसमा थिएन । तर ऊ आफ्नो समयको महान रणवीर एवं युद्धचार्य थियो । तिमीहरू कुन उपत्यकामा बसेका छौ भनी उसले सोध्यो । औतासमा बसेका छौं भनी उनीहरूले जवाफ दिए । उसले भन्यो : त्यो त घोडा दौडाउने उत्तम ठाउँ हो । त्यहाँ न त ढुंगा छन् न खाडल छ । न त्यहाँ भिरालो छ । तर किन हो मैले उँट,गधा,बाख्रा र बालबच्चाहरू कराएको स्वर सुनिरहेको छु । मानिसहरूले भने : मालिक बिन औफ्ले फौजीहरूको साथमा बालबच्चा महिला र जनावरहरू पनि ल्याएका छन् । त्यो कुरा सुनेपछि दरिदले मालिक बिन औफलाई बोलाएर सोध्यो । तिमीले यस्तो किन गरेका हौ ? उसले जवाफ दिँदै भन्यो : हरेक व्यक्तिको साथमा आफ्ना बालबच्चा र मालसामान भयो

---

१ फतहुलबारी भाग ८

भने उनीहरू आफ्नो बालबच्चा र मालसामानको संरक्षणको लागि भएपनि जोसिएर लड्छन् कि भन्ने सोचेर मैले यसो गरेको हुँ । दुरैदले भन्यो : अल्लाहको कसम तँ भेडाको गोठाले होस् । हरुवालाई पनि कुनै वस्तुले बचाउन सक्छ ? तिमीहरू विजय भयौ भने पनि केवल तरवार र भालाको आधारमा विजय हुने हौ । हार्‍यौ भने तिमीहरूलाई आफ्नो बालबच्चा र मालप्रति अपहेलित हुनुपर्ने छ । दुरैदले केही कबिलाहरूका सरदारहरूको बारेमा बोल्दै भन्यो : हे मालिक, बनु हवाजिनका महिला र बालबच्चालाई फौजको साथमा ल्याएर तिमीले राम्रो काम गरेका छैनौ । उनीहरूलाई आफ्नो क्षेत्र एवं समुदायको सुरक्षित ठाउँतिर पठाओ र घोडामा सवार भएर अधर्मीहरूसँग लड । तिमीले जित्यौ भने पछाडि बसेकाहरू आएर तिम्रो साथमा सामिल हुनेछन् । यदि तिमीहरूलाई हार भोग्नु पर्‍यो भने तिमीहरूको माल र बालबच्चा त सुरक्षित रहन सक्छन् ।

तर जनरल कमाण्डर मालिकले त्यो सुझाव अस्विकार गर्दै भन्यो : अल्लाहको कसम मैले यसो गर्न सक्दिनँ । तिमी बूढो भइसकेका छौ र तिम्रो बुद्धि पनि बूढो भएको छ । हे बनु हवाजिन, तिमीहरूले मेरो आदेशको पालना गर्ने भए गर नत्र म आफै आत्महत्या गर्छु । अन्ततः मालिकले त्यस युद्धमा दुरैदको सुझाव पनि मान्न चाहेन । बनु हवाजिनले भन्यो : हामीले तपाईंको आदेश मान्छौँ । दुरैदले भन्यो : यस युद्धमा म सामिल पनि छैन र अलग पनि छैन ।

ياليتنى فيها جذع     اخب فيها واضع
اقود وطفاء الدمع     كانها شاة صدع

यदि म जवान भएको भए भागदौड गर्थें र लामालामा कपाल भएका बाख्रा जस्ता घोडाको नेतृत्व गर्थें ।

## शत्रुका जासुसहरू

त्यसपछि मुसलमानहरूको गतिविधि पत्ता लगाउन खटिएका मालिकका जासुसहरू आए । उनीहरू अपांग अवस्थामा थिए । मालिकले भन्यो : तिमीहरूको नाश होस्, तिमीहरूलाई के भयो ? उनीहरूले जवाफ दिए : हामीहरूले निधारमा सेतो धार भएको घोडामाथि सेता सेता मानिसहरूलाई देख्यौं । हामी तपाईंको सामुन्ने जुन अवस्थामा छौं यो त्यसै कारणले भएको हो ।

## ईशदूतका जासुसहरू

उता ईशदूतलाई पनि शत्रु हिंडेको खबर प्राप्त भइसकेको थियो । त्यसकारण उहाँले अबु हदरद अस्लमालाई कुरैशकहाँ गएर बास बसी उनीहरूको गतिविधि बारे पत्ता लगाउन र त्यसको आफुलाई जानकारी दिन निर्देशन दिएर पठाउनुभयो । उनले त्यसै गरे ।

## ईशदूत मक्काबाट हुनैनतर्फ प्रस्थान गर्दै

हिजरी सम्बत ८ साल शौवाल महिना ६ तारिख शनिवारको दिन मुहम्मदﷺ मक्काबाट हिँड्नुभयो । उहाँ मक्का आएको केवल उन्नाइस दिनमा उहाँको साथमा १२००० योद्धाहरू जम्मा भए । मक्का विजय गर्न उहाँको साथमा दश हजार फौज आएका थिए । दुई हजार मक्कावासी थिए । उनीहरुमध्ये अधिकांशले भर्खर भर्खर इस्लाम कबुल गरेका थिए । मुहम्मदﷺले सफ्वान बिन उमैयासँग एक सय वटा युद्धढाल र हातहतियार उधार लिनुभयो र यताब बिन उसैदलाई मक्काको इन्चार्ज नियुक्त गर्नुभयो ।

दिउँसो सूर्य ढल्केपछि एक जना जवान आएर भन्यो : मैले फलानो फलानो पहाडमा चढेर हेर्दा बनु हवाजिन घिस्रेर अगाडि बढेको देखें । उनीहरूको साथमा बालबच्चा, महिला र बाख्राहरू पनि थिए । मुहम्मदﷺले मुस्काउँदै भन्नुभयो : ती सम्पूर्ण वस्तु भोलि मुसलमानको युद्धप्राप्त हुनेछन् । राती भएपछि अनस बिन अबी मुर्सिद गनवीले स्वयम सेवकको रूपमा पहरेदारीको जिम्मेवारी निभाए ।[1]

हुनैन जाँदाखेरि इस्लामी फौजले बयरको एउटा ठूलो हरियो रूख देख्यो । त्यसलाई जातु अन्वात भनिन्थ्यो । बहुदेववादीहरूले त्यसमा आफ्ना हतियारहरू झुन्ड्याउने गरेका थिए साथै त्यसको वरिपरि जनावर वध गर्ने गर्थे र त्यहाँ बजार पनि लगाउने गर्थे । केही फौजीहरूले मुहम्मदﷺसँग भने : उनीहरूको जस्तै हामीहरूको लागि जात अन्वात बनाइदिनुहोस् न । उहाँले भन्नुभयो : अल्लाहको कसम तिमीहरूले त्यस्तो कुरा गर्दैछौ जुन मुसाको समुदायले मुसासँग गरेका थिए : उनीहरूको जस्तै हामीहरूको लागि पनि एउटा भगवान बनाइदिनु । यो कुन तरिका हो ? तिमीहरूले पनि पहिलाका मानिसहरूको तरिका खोज्दै छौ ।[2]

आफ्नो संख्या धेरै देखेर त्यसैबीच केही साथीहरूले भनेका थिए : आज हामी कदापि पराजित हुँदैनौं । त्यो कुरा मुहम्मदﷺलाई अति नराम्रो लाग्यो ।

## इस्लामी लश्करमाथि अचानक धनुषआक्रमण

इस्लामी फौज शौवाल महिनाको १० तारिखको दिन मंगलबार र बुधबारको मध्य रातमा हुनैन पुग्यो । तर मालिक बिन औफले पहिला नै त्यहाँ गएर आफ्नो लश्कर रातको अँध्यारोमा उतारी त्यसलाई बाटोघाटो, गोप्य ठाउँ ,ससाना पहाडको थुम्को र उपत्यकामा तैनात गरेको थियो । मुसलमानहरूलाई देख्ना साथ वाण हानेर छेदैछेद गर्ने र उनीहरूमाथि एक्कासी आक्रमण गर्ने आदेश पनि दिइसकेको थियो ।

---

१ औनुल माअबुद भाग २
२ तिर्मिजी भाग २, मुस्नद अहमद भाग ५

उता मुहम्मदﷺले पनि एका विहानै आफ्नो लश्करलाई व्यवस्थित गर्नुभयो र झण्डा बाँधेर फौजमा वितरण गर्नुभयो । विहानको मिर्मिरेमा नै मानिसहरूले अगाडि गएर उपत्यका हुनैनमा पाइला राखे । उनीहरूलाई त्यहाँ शत्रु छन् भन्ने कुरा थाहा थिएन । ती उपत्यका र ससाना पहाडका थुम्कामा सकिफ र हवाजिनका जवानहरू घात लगाएर बसेका छन् भन्ने कुराको कुनै खबर थिएन । त्यसकारण उनीहरू निश्चिन्त भएर झर्दै थिए । त्यसै वखत उनीहरूमाथि अचानक वाणको वर्षा हुन थाल्यो । साथै उनीहरूमाथि शत्रुले एक्कासी आक्रमण गऱ्यो । अचानक भएको त्यस आक्रमणमा मुसलमानको होस् उड्यो र उनीहरूमा भागदौड मच्चियो । कसैलाई कसैको फिकर भएन । खुला पराजय भोग्नु पऱ्यो । अबु सुफ्यान बिन हरब जो नयाँ मुसलमान बनेका थिए उनले भने : उनीहरू समुन्द्रको तटमा नपुग्दासम्म रोकिने छैनन् । जबला वा कलदाह बिन जुनैदले चिच्याएर भन्यो : हेर, आज जादु असत्य प्रमाणित भयो ।

इब्ने इसहाक भन्छन् : सही बुखारीमा बराअ बिन आजिबमार्फत वर्णन गरिएको कुरा उपरोक्त कुराभन्दा फरक छ । उनको बयान छ : बनु हवाजिनले वाण चलायो । हामीले आक्रमण गर्दा उनीहरू भागे । त्यसपछि हामी युद्धप्राप्त लिन होमियौँ जसले गर्दा वाणद्वारा हामीमाथि आक्रमण भयो ।[१]

सही मुस्लिममा अनसमार्फत वर्णन गरिएको कुरा पनि केही फरक छ । तर केही हदसम्म यस भनाइको समर्थन गर्दछ । अनस भन्छन् : हामीले मक्का विजय गऱ्यौँ अनि हुनैनमाथि आक्रमण गऱ्यौँ । बहुदेववादीहरू जुलुसमा जसरी पंक्ति बनाएर आएका थिए त्यस्तो मैले यसअघि देखेको थिइनँ । अगाडि सवार, त्यसपछि पैदल सवार, त्यसको पछाडि महिला , त्यसको पछाडि भेडा बाखा र त्यसको पछाडि जनावरहरू थिए । हामीहरू ठूलो संख्यामा थियौँ । हाम्रो फौजको दाहिनेतर्फ खालिद बिन वलिद थिए तर हाम्रा सवारहरू पछाडि बस्न थाले । केही ढिलाइ गर्दा हाम्रा सवारहरू भाग्न थाले । अरबी पाखेका साथसाथै ती व्यक्तिहरू पनि भागे जसलाई तिमीहरू चिन्दछौ ।[२]

भागदौड मच्चिएपछि मुहम्मदﷺले दाहिने तर्फ फर्केर आवाज दिनुभयो : हे साथी हो ! मतिर हेर म अब्दुल्लाहको छोरा मुहम्मद हुँ । त्यतिबेला उहाँको साथमा मुहाजिर र अन्सारबाहेक कोही पनि थिएन । इब्ने इसहाकको अनुसार उनीहरूको संख्या नौ वा दश भन्दा बढी थिएन । नोदीको भनाइ अनुसार उहाँको साथमा बाह्र

१ सही बुखारी
२ फतहुलबारी भाग ८

जना व्यक्तिहरू डटेर बसेका थिए । इमाम अहमद र हाकिमले इब्ने मस्उदमार्फत वर्णन गरेका छन् : हुनैनको दिन म मुहम्मदﷺको साथमा थिएँ । मानिसहरू पिठ्यूँ देखाएर भागे तर उहाँको साथमा ८० जना मुहाजिर तथा अन्सारहरू भने डटेर बसेका थिए । हामी आफ्नो ठाउँमा डटेर बस्यौं हामी पिठयूँ देखाएर भागेनौं । तिर्मिजीले इब्ने उमरमार्फत वर्णन गरेको हदिसमा उल्लेख छ : उनी भन्छन् : मैले आफ्नो साथीहरूलाई हुनैनको दिन पिठयूँ फर्काएर भागेको देखेँ र मुहम्मदﷺको साथमा एक सय जना पनि साथीहरू थिएनन् ।[१]

त्यस किसिमका संवेदनशील घडीमा पनि मुहम्मदﷺले वीरता देखाउनुभयो । अर्थात त्यति ठूलो भागदौडको बावजुद उहाँ काफिरहरूको सामुन्ने नै हुनुहुन्थ्यो । अगाडि बढ्नको लागि आफ्नो खच्चरलाई अड्याएर उहाँले भन्नु भएको थियो : म ईशदूत हुँ, म झूटो होइन , अब्दुल मुत्तलिबको छोरा हुँ ।

त्यतिबेला अबु सुफ्यान बिन हारिसले आफ्नो खच्चरको लगाम समातेका थिए । अब्बासले सवारीलाई रोकेका थिए । अगाडि नबढोस् भनेर दुवैले खच्चर रोकेका थिए । त्यसपछि उहाँ आफ्नो सवारीबाट झरेर अल्लाहसँग सहयोगको लागि प्रार्थना गर्नुभयो : हे अल्लाह मदत पठाउनु ।

## मुसलमानहरूको वापसी र युद्धको तयारी

त्यसपछि मुहम्मदﷺले अब्बास जसको स्वर ठूलो थियो उनलाई साथीहरू बोलाउन आदेश दिनुभयो । अब्बासले ठूलो स्वर गरी बोलाए । हे प्रण गरेकाहरू,कहाँ छौ ? उनीहरू मेरो स्वर सुनेर यसरी फर्के जसरी गाई आफ्नो बाच्छाबाच्छीको स्वर सुनेर फर्कन्छ । उनीहरूले जवाफ दिँदै भने आउँदै छौं, आउदै छौं ।[२] सहाबीहरूले आफ्नो उँट फर्काउने कोशिस गर्दागर्दै पनि नफर्केको खण्डमा आफ्नो ढाल उँटको गर्दनमा हालेर आफ्नो तरवार सम्हालेर उँटबाट हाम फाल्थे र उँटलाई छोडेर बोलाइएको ठाउँतिर दौडन्थे । यसरी उहाँको साथमा १०० जना सहाबीहरू जम्मा भएपछि उनीहरूले शत्रुको सामना गर्दै लडाइँ शुरु गरे ।

त्यसपछि अन्सारहरूले स्वर गर्न थाले । ओ अन्सार,ओ अन्सार । त्यो स्वर बनु हारिस बिन खजरजमा विलायो । जसरी मुसलमान टोलीले मैदान छोडेको थियो त्यसरी नै उनीहरू एकको पछाडि अर्को आउँदै गरे । हेर्दाहेर्दै दुवै पक्षबीच घोरघमासान लडाइँ शुरु भयो । मुहम्मदﷺले नजर उठाएर युद्धको मैदानमा हेर्दा घमासानको लडाइँ हुँदै थियो । उहाँले भन्नुभयो : अब चुल्हो तातिसकेको छ ।

१ फतहुलबारी भाग ८, मुस्नद अबी याला भाग ३
२ सही मुस्लिम भाग २

त्यसपछि उहाँले भुइँबाट एक मुठी माटो उठाएर शत्रुतिर फ्याँक्दै भन्नुभयो : अनुहार बिग्रोस् । त्यो माटो यस्तो तरिकाले छरियो त्यसबाट शत्रुको कुनै पनि व्यक्तिको आँखा माटोबाट बच्न सकेन । त्यसपछि उनीहरूको ताँती तितरवितर हुँदै गयो र उनीहरू पछाडि हट्दै गए ।

## शत्रुको हार

माटो फ्याँकेको केही समय नबित्दै शत्रुहरूले हार व्यहोर्नु पर्‍यो । सकिफ नजिक ७० जनाको हत्या भयो । उनीहरूसँग जति धनसम्पत्ति,महिला तथा बालबच्चाहरु थिए सबै मुसलमानहरूको हात लाग्यो । त्यसैलाई अल्लाहले यसरी भनेका छन् :

وَيَوْمَ حُنَيْنٍ ۙ إِذْ أَعْجَبَتْكُمْ كَثْرَتُكُمْ فَلَمْ تُغْنِ عَنْكُمْ شَيْئًا وَضَاقَتْ عَلَيْكُمُ الْأَرْضُ بِمَا رَحُبَتْ ثُمَّ وَلَّيْتُمْ مُدْبِرِينَ ثُمَّ أَنْزَلَ اللَّهُ سَكِينَتَهُ عَلَىٰ رَسُولِهِ وَعَلَى الْمُؤْمِنِينَ وَأَنْزَلَ جُنُودًا لَمْ تَرَوْهَا وَعَذَّبَ الَّذِينَ كَفَرُوا ۚ وَذَٰلِكَ جَزَاءُ الْكَافِرِينَ (التوبة: ٢٥ – ٢٦)

हुनैनको दिन जब तिमीहरूको अत्यधिक संख्याले तिमीहरूलाई घमण्डी बनाएको थियो त्यो तिमीहरूको केही काम आउन सकेन । धर्ती तिमीहरूको लागि फैलनुको सट्टा साँघुरियो । त्यसपछि तिमीहरू पिठयूँ फर्काएर भाग्यौ । अनि अल्लाहले आफ्नो दूत र मोमिनहरूमाथि आफ्नो तर्फबाट शान्ति प्रदान गरे । साथै यस्तो लश्कर अवतरण गरे जसलाई तिमीहरूले कहिल्यै देखेका थिएनौ । काफिरहरूलाई सजाय दियो । यो नै काफिरहरूको प्रतिफल हो । (अत्तौबा:२५,२६)

## पिछा

हार खाएपछि शत्रुको एउटा समूह ताइफतिर भाग्यो र अर्को नखलातिर । एक अर्को समूह औतासको बाटो लाग्यो । मुहम्मदﷺले अबु आमिर अश्अरीको नेतृत्वमा उनीरूको पिछा गर्न एउटा जमात औतासतर्फ पठाउनुभयो । दुवै पक्षबीच केही छिन झडप भयो । त्यसपछि बहुदेववादीहरू भागे । तर झडपमा मुस्लिम कमाण्डर अबु आमिर अश्अरी शहिद भएका थिए । मुसलमानको एक अर्को टोलीले नख्लातिर भागेका बहुदेववादीहरूको पिछा गर्ने क्रममा दुरैद बिन सिम्माहलाई गिरिफतार गरे । उसको हत्या रबिया विन रफिअले गरे ।

पराजित बहुदेववादीहरूको सबैभन्दा ठूलो समूह जुन ताइफतिर भागेको थियो युद्धप्राप्त जम्मा गरेपछि स्वयम मुहम्मदﷺले उनीहरूको पिछा गर्नुभयो ।

## युद्धप्राप्त

युद्धप्राप्त यस प्रकार छ: कैदी ६ हजार, उँट २४ हजार, बाखा ४० हजारभन्दा बढी र चाँदी ४ हजार उकिया थियो । मुहम्मदﷺले ती सबै कुरा जम्मा गर्ने आदेश दिनुभयो । त्यसलाई जिअरानहमा रोकेर मस्उद बिन अमर गिफारीको जिम्मामा

राख्नुभयो । ताइफको युद्धबाट नफर्कुन्जेल युद्धप्राप्त बाँडफाँड गर्नु भएन । कैदीहरूमा शमा बिन्त हारिस सअदिया पनि थिइन् । नातामा उनी मुहम्मदﷺकी दूधे बहिनी पर्थिन् । उनलाई मुहम्मदﷺको सामुन्ने ल्याइयो र उनले आफ्नो परिचय दिइन् अनि मुहम्मदﷺले उनको एउटा चिनोले उनलाई चिन्नुभयो । उहाँले उनको आदर सतकार गर्ने क्रममा आफ्नो बेडशिट पनि बिछ्याइदिनुभयो । उनीमाथि गुण लगाएर उनको समुदायतिर फर्काइदिनुभयो ।

# ताइफ युद्ध

ताइफको युद्ध वास्तवमा हुनैन युद्धको पूरक हो । किनभने बनु हवाजिन र सकिफ कबिलाको अधिकांश मानिसहरू हुनैनको युद्धबाट पराजित भएर आफ्नो जनरल कमाण्डर मालिक बिन औफ नसरीको साथमा भाग्दै ताइफ आएर त्यहाँको किल्लामा बसेका थिए । तसर्थ मुहम्मदﷺ हुनैन युद्धबाट फुर्सद पाएपछि युद्धप्राप्त जिअरानहमा जम्मा गरी हिजरी सम्बत ८ साल शौवालको महिनामा ताइफतिर लाग्नुभयो । त्यस उद्देश्यको लागि उहाँले खालिद बिन वलिदको नेतृत्वमा एक हजार फौजको टोली पठाउनुभयो र आफु पनि त्यसतर्फ जानुभयो । त्यस तर्फ जाने क्रममा उहाँ नख्ला, यमानिया, करने मनाजिल र लिया हुदै जानुभयो । लियामा मालिक बिन औफको एउटा किल्ला थियो । उहाँले त्यसलाई ध्वस्त गर्न आदेश दिनुभयो । त्यसपछि यात्रा जारी राख्दै ताइफ पुग्नुभयो । ताइफको किल्ला नजिक पाल लगाएर उहाँले त्यसको घेराबन्दी गर्नुभयो ।

घेराबन्दीको अवधि लम्बियो । सही मुस्लिममा अनसमार्फत वर्णन गरिएको हदिसमा उल्लेख छ : त्यो घेराबन्दी चालीस दिनसम्म रह्यो । केही जीवनीकारहरूले त्यसको अवधि बीस दिन बताएका छन् । केहीले दश दिन बताएका छन् भने केहीले १८ दिन बताएका छन् र केहीले १५ दिन बताएका छन् ।[1]

घेराबन्दीको अवधिभरी दुवै पक्षबाट वाण हानाहान तथा ढुंगामुढा गरिएका केही घटना पनि घटे । शुरुमा मुसलमानहरूले घेराबन्दी गर्दा किल्लाभित्रबाट उनीहरूमाथि सशक्त रूपमा वाण प्रहार गरियो । मानौं उनीहरूमाथि टिडीको दल एक प्रकारको किराहरू उडेको छ । त्यसबाट कैयन व्यक्तिहरू घाइते र १२ जना मुसलमान शहिद भए । तसर्थ उनीहरूले आफ्नो पाल उठाएर ताइफको मस्जिदमा लैजानु पर्‍यो ।

मोहम्मदﷺले त्यो परिस्थितिको सामना गर्न ताइफको वस्तीमा हतियार गाढ्नुभयो र अत्यधिक गोलाबारुद फ्याक्नुभयो जसले गर्दा किल्लाको गारोमा प्वाल पर्‍यो । मुसलमानको एउटा समूह भित्र पसेर आगो लगाउनको लागि गारो निर पुग्यो । तर शत्रुहरूले उनीहरूमाथि तातो फलामका टुक्राहरू फ्याँके जसले गर्दा मुसलमानहरू बिवश भएर बाहिर निस्के । बाहिर आउँदा शत्रुहरूले उनीहरूमाथि वाण वर्षाए । जसमा केही मुसलमानहरू शहिद भए ।

मोहम्मदﷺले शत्रुहरूलाई पराजित गर्न युद्धरणनीति अपनाउँदै अंगुरका बोटबिरुवाहरू जलाउन निर्देशन दिनुभयो । मुसलमानहरूले अंगुरका अधिक बोटहरू काटिदिए । त्यो गतिविधि देखेर सकिफ कबिलाले अल्लाह र आफ्नो नाताको वास्ता

---

१ फतहुलबारी भाग ८

दिदै बोट नकाट्न आग्रह गऱ्यो । उहाँले अल्लाह र नाताका कारण आफ्नो हात रोक्नुभयो ।

घेराबन्दीको अवस्थामा मुहम्मदﷺले जो दासी किल्लाबाट निस्केर हामीकहाँ आउँछ उसलाई मुक्त गरिने छ भन्ने सूचना दिन पनि भन्नुभयो । त्यस सूचनापछि २३ जना मानिसहरू किल्लाबाहिर आएर मुसलमानमा शामिल भए ।[१] उनीहरूमा अबु बकराह पनि थिए । उनी किल्लाको पर्खालमा चढेर पानी निकाल्ने डोरीबाट झुन्डेर तल झरे । पानी तान्ने डोरीलाई अरबीमा बकराह भनिन्छ त्यसकारण मुहम्मदﷺले उनको उपनाम बकराह राखिदिनुभयो । ती सबै दासीहरूलाई मुहम्मदﷺले मुक्त गरिदिनुभयो । प्रतिव्यक्ति एकएक जनालाई जिम्मा लगाएर उनीहरूको लागि खान बस्नको प्रबन्ध मिलाउन निर्देशन दिनुभयो । त्यो गतिविधिले किल्लामा रहेकाहरूलाई अति सताएको थियो ।

घेराबन्दी लम्बिएपछि किल्ला नियन्त्रणमा आउन सकेन । मुसलमानहरूमाथि वाण तथा तातो फलामको वर्षा भयो । उता किल्लामा रहेका मानिसहरूले सालभरीको निम्ति खाद्य पदार्थ पनि जम्मा गरेका थिए । मुहम्मदﷺले त्यसबारे निर्णय गर्न नौफल बिन मआबिया दैलीसँग सल्लाह गर्नुभयो । उसले भन्यो, स्याल आफ्नो ओडारमा पसिसकेको छ । यदि तपाईँ त्यसमा अडिग रहनुभयो भने समात्न सक्नुहुन्छ । यदि छोडनुभयो भने पनि उनीहरूले केही बिगार्न सक्दैनन् । त्यो कुरा सुनेपछि मुहम्मदﷺले घेराबन्दी समाप्त गर्ने घोषणा गर्नुभयो । उमरमार्फत सहाबीहरूलाई सूचित गरियो । हामी भोलि फर्कदै छौं । तर त्यो कुरा सहाबीहरूलाई मन परेन । उनीहरूले भने : के ताइफलाई कब्जा नगरी फर्कने हो ? ईशदूतले भन्नुभयो ल ठिक छ भोलि लडाइँ गर्न जाऔं । फलस्वरूप उनीहरू लडाइँ गर्न निस्के । चोट पटकबाहेक मात्र खानु परेकाले भोलि नै फर्कने सूचना दिनुभयो । त्यो कुरा सुनेर सहाबीहरू खुसी भए । उनीहरूले केही नबोली आफ्नो यात्राको तयारी गरे । त्यो अवस्था देखेर मुहम्मदﷺ मुस्काउनुभयो ।

त्यसपछि जब सहाबीहरू आफ्नो मालसामान उठाएर हिँडे अनि मुहम्मदﷺले निम्न कुरा भन्न आदेश दिनुभयो : हामी फर्कने वाला, याचना गर्ने वाला, उपासना गर्ने वाला र आफ्नो पालनकर्ताको प्रशंसा गर्ने वाला हौँ ।

केहीले भने : हे ईशदूत तपाईँ सकिफ विरुद्ध प्रार्थना गर्नुहोस् । उहाँले भन्नुभयो : हे अल्लाह सकिफलाई मार्ग दर्शन देखाएर सत्य मार्गमा ल्याऊ ।

---

१ सही बुखारी भाग २

## जिअरानहमा युद्धप्राप्तको भागबण्डा

ताइफबाट घेराबन्दी गरेर फर्केपछि मुहम्मदﷺ जिअरानहमा युद्धप्राप्त वितरण नगरी कैयन दिनसम्म बस्नुभयो । त्यहाँ बस्नुको उद्देश्य हवाजिनको दल फर्केर आएर आफुले गुमाएको सबै सामान फिर्ता लिउन् भन्ने थियो । पर्खेर बस्दा पनि कुनै व्यक्ति नआएपछि युद्धप्राप्तको आस लगाएर बसेका कबिलाहरूका सरदार तथा ठूलाबडाहरूको मुखमा बुजो लगाउन उहाँले युद्धप्राप्त वितरण गरिदिनुभयो । सौभाग्यले मुअल्ले फतुल कुलब[1] अर्थात नयाँ मुस्लिमहरूको मनोबल बढाउन उनीहरुलाई सबैभन्दा पहिला सहयोग प्रदान गरियो साथै उनीहरूलाई ठूलठूलो भाग पनि दिइयो । अबु सुफ्यान बिन हरबलाई ६ किलो चाँदी र एक सय उँट प्रदान गरियो । उसले भन्यो : मेरो छोरा यजिद पनि छ । उसलाई पनि त्यति नै दिइयो । उसले भन्यो : मेरो छोरा मुआविया पनि छ । उहाँले मुआवियालाई पनि त्यति नै दिनुभयो । अर्थात अबु सुफ्यानलाई आफ्नो छोराहरूको भाग समेत लगभग १८ किलो चाँदी र तीन सय उँट दिइयो ।

हकिम बिन हेजामलाई पनि एक सय वटा उँट दिइयो । उसले एक सय वटा उँट थप माग्यो र उसलाई थप एक सय वटा उँट पनि दिइयो । त्यसैगरी सफवान बिन उमैयालाई एक एक सय वटा उँट तीन पटक दिइयो । यसरी उनलाई तीन सय उँट दिइएको थियो ।[2]

हारिस बिन कल्दालाई पनि एक सय उँट दिइयो । त्यसपछि कुरैशी र गैरकुरैशी सरदारहरूलाई सय सय वटा उँट दिइयो र अन्य केही सरदारहरूलाई पचास पचास र चालीस चालीस वटा उँट दिइयो । मुहम्मदﷺले त्यो काम समापन गरेपछि उहाँ ठूलो दानी छन् उहाँलाई अनिकालको कुनै डर छैन भन्ने कुरा प्रख्यात भयो । तसर्थ माल लिन पाखे अरबीहरू पनि उहाँकहाँ हुर्रिए र मुहम्मदﷺलाई एउटा रूखनिर सर्न बाध्य गरिदिए । अचानक उहाँको बर्को रूखको हाँगामा टाँसियो । उहाँले भन्नुभयो, मेरो बर्को देऊ । त्यो जातको कसम जसको हातमा मेरो ज्यान छ मसँग जनावर कमै भए पनि म त्यसलाई बाँटिदिने छु अनि तिमीहरूले मलाई न त कन्जुस ठान्ने छौ न डरपोक र न झुटो मान्ने छौ ।

त्यसपछि उहाँले आफ्नो उँटनिर उभिएर त्यसको काठीबाट केही माल झिक्नुभयो र मान्द्रोमा राखेर ठूलो स्वरमा पुकार्नुभयो : मानिसहरू हो, तिमीहरूको मालमा मेरो निम्ति कुनै भाग छैन, रौं बराबर पनि छैन । केवल पाँचौ भाग छ त्यो पनि तिमीहरूलाई नै दिइने छ ।

---

१ नयाँ मुस्लिमहरुको मनोबल बढाउनको लागि दिइने आर्थिक सहयोग ।
२ काजी अयाजको अल् शेफा बितारिफे हुकुके अल मुस्तफा भाग १

नयाँ मुसलमानहरूलाई माल दिएपछि बाँकी माल बाँकी फौजीहरूमा भागबन्डा गर्नको लागि उहाँले जैद बिन साबितलाई निर्देशन दिनुभयो । उनले भाग लगाएपछि एक जनाको भागमा केवल चार चार वटा उँट र चालीस चालीस वटा बाखा परेको थियो । जो घोडचढी सवार थियो उसको भागमा बाह्र वटा उँट वा एक सय चालीस बाखा परेको थियो ।

## अन्सार शोक तथा व्याकुल अवस्थामा

माल वितरण कार्य एक आदर्श राजनीतिमा आधारित थियो । तर सुरुसुरुमा कसैले बुझ्न सकेनन् । त्यसकारण केही मानिसहरूले विवाद गर्न थाले ।

इब्ने इसहाकले अबु सइद खुद्रीमार्फत वर्णन गरेका छन्, मुहम्मदﷺले कुरैश तथा अन्य कबिलाहरूलाई दान दिएको र अन्सारलाई केही नदिएकोले अन्सारको मनमा केही द्वन्द्व उत्पन्न भयो । उनीहरूमा धेरै कुराहरू खेल्न थाले । एक जनाले त यतिसम्म भन्यो : मुहम्मदﷺले पक्षपात गर्नुभएको छ । त्यसपछि सअद बिन उबादह मुहम्मदﷺकहाँ आएर भने : हे ईशदूत, तपाईंले युद्धप्राप्त जसरी बाड्नुभयो त्यसमा अन्सारहरूको मन तपाईंप्रति कुण्ठिएको छ । तपाईंले युद्धप्राप्त आफ्नो जातिमा बाँडिदिनुभयो र अरबका कबिलाहरूलाई अत्यधिक दान दिनुभयो तर अन्सारलाई केही दिनुभएन । उहाँले भन्नुभयो : हे सअद, त्यसबारे तिम्रो के बिचार छ ? उनले भने म पनि त आफ्नो जातिको एक व्यक्ति हुँ । उहाँले भन्नुभयो : ठिक छ, तिमी आफ्नो जातिलाई यस सानो क्याम्पमा जम्मा गर । सअद गएर अन्सारहरूलाई त्यो सानो क्याम्पमा जम्मा गरे । केही मुहाजिरहरू त्यहाँ आउँदा उनीहरूलाई पनि त्यहाँ प्रवेश गर्न दिए । त्यसपछि केही अन्य मानिसहरू पनि आए तर उनीहरूलाई फर्काइदिए । सबै जम्मा भएपछि सअद मुहम्मदﷺकहाँ आएर भने : अन्सारहरू तपाईंको प्रतीक्षामा छन् । मुहम्मदﷺ उनीहरूको सामुन्ने आएर अल्लाहको प्रशंसा गर्दै भन्नुभयो : हे अन्सारहरू हो, तिमीहरूले त्यो के कुरा गरेका हौ जसको बारेमा मलाई पनि थाहा भएको छ ? मनमा केको रिस राखेका छौ ? तिमीहरू पथभ्रष्ट हुँदा म तिमीहरूकहाँ आएको कुरा साँचो होइन ? अल्लाहले तिमीहरूलाई सत्यमार्ग दिएका छन् । तिमीहरू भिखारी थियौं, के अल्लाहले तिमीहरूलाई धनी बनाएनन् ? तिमीहरू आपसमा शत्रु थियौ, के अल्लाहले तिमीहरूको मन जोडिदिएनन् ? मानिसहरूले भने : अवश्य । हामीमाथि अल्लाह र उनका ईशदूतको ठूलो गुण छ ।

त्यसपछि उहाँले सोध्नुभयो : हे अन्सारहरू हो, किन मलाई जवाफ दिदैनौ ? अन्सारहरूले भने: हे ईशदूत हामीले के जवाफ दिन सक्छौं र ? अल्लाह र उनका दूतको हामीमाथि ठूलो गुण छ । उहाँले भन्नुभयो : तिमीहरूको मनमा जे छ भन्न सक्छौ । तिमीहरूले साँचो कुरा नै भन्ने छौ र तिमीहरूको कुरा साँचो मानिने छ ।

उनीहरूले भने : तपाइँ हामीहरूकहाँ आउँदा हामी पथभ्रष्टमै थियौँ । हामीहरूले तपाइँलाई साँचो ठान्यौँ । तपाइँ हामीकहाँ आउँदा तपाइँमाथि मिथ्यारोपण गरिएको थियो, तपाइँ बेसहारा हुनुहुन्थ्यो त्यतिखेर हामीले तपाइँको मदत गऱ्यौँ । तपाइँलाई धुत्कारिएको थियो हामीले तपाइँलाई शरण दियौँ । तपाइँ संकटमा हुनुहुन्थ्यो हामीले सहारा दियौँ ।

हे अन्सारीहरू हो, तिमीहरू संसारको त्यो एउटा सानो तेन्द्रो घाँसको निम्ति किन रूष्ठ बनेका छौ । त्यसबाट मैले उनीहरु मुस्लिम बनुन् भनेर उनीहरूको मन राख्ने काम गरेको थिएँ जबकि तिमीहरूको निम्ति इस्लामी नियम अनुसार भाग दिएको छु । हे अन्सारहरू हो, के तिमीहरू यस कुराबाट खुसी छैनौ मानिसहरूले उँट र बाखाहरू लिएर जाउन् र तिमीहरू ईशदूतलाई लिएर आफ्नो बासस्थानतिर फर्कओ ? त्यो जातको कसम जसको हातमा मेरो ज्यान छ यदि हिजरत गर्न नपरेको भए म पनि अन्सारको एक व्यक्ति हुने थिएँ । अन्सार र अन्य मानिसहरू अलग अलग मार्गमा हिँडेका भए म अन्सारको मार्गमा नै हिँडने थिएँ । हे अल्लाह, अन्सारमाथि दया गर साथै अन्सारका छोरा र सन्तानमाथि पनि ।

मुहम्मदﷺको त्यो सम्बोधन सुनेपछि अन्सारहरू अति रोए । रूँदाखेरि उनीहरूको दाह्री पनि भिज्यो । उनीहरूले भन्न थाले : हाम्रो भागमा केवल ईशदूत भए हामीलाई पुग्छ । त्यसपछि उहाँ फर्कनुभयो र मानिसहरू पनि हिँडे ।[१]

## हवाजिन टोलीको आगमन

युद्धप्राप्त वितरण भएपछि हवाजिनको टोली मुसलमान भएर आयो । उनीहरू चौध जना थिए । उनीहरूको सरदार एंव प्रवक्ता जुहैर बिन सरद थियो । उनीहरूमा मुहम्मदﷺको दूध` काका अबु बरकान पनि थियो । इब्ने इसहाकको भनाइ अनुसार उनीहरूमा नौ जना गन्यमान्य व्यक्तिहरू पनि थिए । उनीहरूले पनि इस्लाम कबुल गरे । त्यसपछि उहाँसँग कुराकानी गर्दै उनीहरूले भने : हे ईशदूत, तपाइँले जुन मानिसहरूलाई बन्दी बनाउनु भएको छ उनीहरूमा आमा तथा दिदीबहिनी, फुपु र सानीआमाहरू छन् । कुनै पनि समुदायको सम्मान र अपमानका कारक यिनै हुन् ।

तसर्थ हे ईशदूत हामीमाथि आफ्नो कृपादृष्टि गरी गुण लगाइदिनु होस् । तपाइँ त्यो व्यक्ति हुनुहुन्छ जोसँग हामीलाई आसा पनि छ र प्रतीक्षा पनि । तपाइँले ती महिलाहरूमाथि गुण लगाइदिनुहोस् जसको दूध तपाइँले पनि खानु भएको थियो, जसको अमृत सरह दूध ले तपाइँको मुख भोरिन्थ्यो । ज्ञात होस्, आमा भन्नाले मुहम्मदﷺलाई दूध खुवाउने महिला, फुपु र सानीमाँ तथा बहिनीहरू हुन् । उहाँले भन्नुभयो : मकहाँ जुन मानिसहरू छन् तिमीहरूलाई थाहा छ । मलाई साँचो कुरा नै

१ इब्ने हेशाम भाग २,सही बुखारी भाग २

मन पर्छ । तसर्थ तिमीहरूलाई आफ्नो धनसम्पत्ति बढी प्रिय छ कि आफ्नो बालबच्चाहरू ? भन । उनीहरूले भने : हाम्रो लागि जातीय सम्मान जति ठूलो कुरा अरू केही हुन सक्दैन । उहाँले भन्नुभयो : ठिक छ म जोहरको नमाज पढ्छु त्यसपछि तिमीहरूले यो कुरा भन : हामी ईशदूतलाई मुस्लिमहरूतर्फ सिफारिशी र मुस्लिमहरूलाई ईशदूततर्फ सिफारिशी बनाउँदै आग्रह गर्छौं कि हाम्रा मानिसहरू हामीतर्फ फिर्ता गरियोस् । उहाँले नमाज पढिसकेपछि मानिसहरूले त्यही कुरा भने । प्रतिउत्तरमा उहाँले भन्नुभयो : मेरो र बनी अब्दुल मुत्तलिबको भागमा परेकाहरूलाई तिमीहरूको निम्ति मुक्त गरिदै छ । त्यसपछि मुहम्मदﷺले अन्सार र मुहाजिरहरूसँग उनीहरूको भागमा परेकाहरूको बारेमा सोध्नुभयो : उनीहरूले जवाफ दिए ,हामीसँग जे छ त्यो सबै ईशदूतको लागि हो । त्यसपछि अक्रअ बिन हाबिसले भन्यो : मेरो र बनु तमिमको भागमा परेकाहरू तपाईंलाई दिदैनौं । उयैना बिन हिस्नले पनि त्यही कुरा भन्यो : म र बनु फजारहसँग जे छ त्यो तपाईंलाई दिन सक्दैनौं । अब्बास बिन मरदासले पनि त्यही कुरा गर्दै भन्यो: म र बनु सुलैमसँग भएको वस्तु पनि तपाईंको लागि दिन सकिदैन । त्यो कुरा सुनेर बनु सुलैमले भन्यो : हामीसँग जे छ त्यो सबै मुहम्मदﷺको लागि हो । अब्बास बिन मरदासले भन्यो : तिमीहरूले मेरो अपमान गऱ्यौ ।

मुहम्मदﷺले भन्नुभयो , हेर यिनीहरू मुसलमान भएर आएका छन् । त्यसैकारणले मैले उनीहरूको कैदीहरूलाई वितरण गर्न ढिलाइ गरेको थिएँ । मैले उनीहरूलाई दुईटा कुरामा एउटा कुरा रोज्न छुट दिएँ र उनीहरूले आफ्नो बालबच्चा सरह अरू केही वस्तु ठानेन् । तसर्थ जोसँग उनीहरूको कैदी छ खुसीखुसी फिर्ता गरिदेउ । यो कुरा नै उचित हुनेछ । जो आफ्नो अधिकारमा दृढ छन् उनीहरूले पनि उनीहरूको कैदीहरूलाई फिर्ता गरुन् । तर आगामी दिनहरूमा यदि युद्धप्राप्त हासिल भयो भने त्यसबाट सबैभन्दा पहिला उनीहरूलाई एक भागको साँटो ६ भाग दिइने छ । मानिसहरूले भने : हामीहरू मुहम्मदﷺको निम्ति खुसीखुसी दिन तयार छौं । उहाँले भन्नुभयो : तिमीहरूमध्ये को खुसी छ र को छैन भन्ने कुरा बुझ्न सकिनँ । तसर्थ तिमीहरू जाऊ । तिम्रा सरदारहरूले तिमीहरूको समस्या मकहाँ पेश गर्नेछन् । त्यसपछि सबैले उनीहरूको बालबच्चा फिर्ता गरिदिए । केवल उयैना बाँकी थियो । उसको भागमा एउटी बुढी महिला परेकी थिई । उसले फिर्ता गर्न इन्कार गरेको थियो तर अन्तिममा उसले पनि फिर्ता गऱ्यो । मुहम्मदﷺले सबै कैदीहरूलाई एकएक किब्ती दोसल्लाह ओडाएर फिर्ता गर्नुभयो । [१]

१ फतहुल बारी भाग ५

## उमराह गरी मदिना फिर्ती

मुहम्मदﷺले युद्धप्राप्त वितरण गरेर भ्याएपछि जिअरानहबाट नै उमराहको लागि एहराम बाँध्नुभयो र उमराह गर्नुभयो । त्यसपछि यताब बिन उसैदलाई मक्काको प्रमुख नियुक्त गरी मदिना प्रस्थान गर्नुभयो । उहाँ २४ जिल कअदा ८ हिजरीमा मदिना फिर्ता हुनुभयो ।[१]



१ तारिख इबने खल्दुन भाग २,जादुल मआद भाग २, इबने हेशाम भाग २, सही बुखारी भाग २, फतहुलबारी भाग ८

## मक्का विजयपछि छापामार टोली र कर्मचारीहरुको प्रस्थान

त्यो लामो र सफल यात्राबाट फर्केपछि मुहम्मदﷺ लामो समयसम्म मदिनामा बस्नुभयो । त्यस अवधिभरि उहाँले प्रतिनिधि दलहरूको स्वागत गर्नुभयो । सरकारी कर्मचारीहरूलाई यताउता पठाइरहनुभयो । इस्लाम प्रचारकहरूलाई पनि पठाउनुभयो । ती व्यक्तिहरू जसले अल्लाहको मार्गमा प्रवेश गर्नु र अरबमा जागेको धर्म अगाडि आत्मसमर्पण गर्नुको साँटो अहंकार देखाएका थिए उनीहरूलाई पनि नियन्त्रणमा लिनुभयो । यी सम्पूर्ण घटनाको संक्षिप्त खाका यस प्रकार छ :

### जकात संकलकहरू

विगतका बहसहरूबाट मक्का विजय भएपछि मुहम्मदﷺ हिजरी सम्बत ८ सालमा मक्का आउनु भएको थियो भन्ने कुरा प्रष्ट हुन्छ । हिजरी सम्बत ९ सालको चन्द्रमा उदय हुनेवित्तिकै उहाँले कबिलाहरूबाट जकात तथा दानदक्षिणा संकलन गर्न कर्मचारीहरूलाई पठाउनुभयो । त्यसको सूची निम्न छ

| | कर्मचारीको नाम | कबिलाहरूको नाम |
|---|---|---|
| १ | उयैना बिन हिस्न | बनु तमिम |
| २ | यजिद बिन हुसैन | अस्लम र गिफार |
| ३ | अब्बाद बिन बिश्र अश्लमी | सुलैम र मुजैना |
| ४ | राफे बिन मुकैस | जुहैना |
| ५ | अमर बिन आस | बनु फजारह |
| ६ | जहाक बिन सुफ्यान | बनु केलाब |
| ७ | बशिर बिन सुफ्यान | बनु कअब |
| ८ | इब्नु ततबीया अजदी | बनु जबियान |
| ९ | मुहाजिर बिन अबु उमैया | शहर सन्आ |
| १० | जियाद बिन लबीद | हजरे मौतको क्षेत्र |
| ११ | अदी बिन हातिम | तई र बनु असद |
| १२ | मालिक बनु नुवैरह | बनु हन्जला |
| १३ | जबरकान विन बदर | बनु सअदको एउटा शाखा |
| १४ | कैस बिन आसिम | बनु सअद |
| १५ | अला बिन अल हजरमी | बहरैनको क्षेत्र |
| १६ | अली बिन अबी तालिब | नजरान (जकात र कर दुवै संकनलको लागि) |

स्मरण रहोस् सबै कर्मचारीहरूलाई ९ हिजरीमा पठाइएको थिएन । केही कर्मचारीहरू मुतअल्लका नामी कबिलाले इस्लाम स्वीकारेपछि पठाइएका थिए । तर उनीहरूको प्रस्थान गर्ने तयारी भने मोहर्रम महिना ९ हिजरीमा नै भएको थियो । हुदैबिया सन्धिपछि इस्लामी आह्वान र वृहत सफलताको अनुमान त्यसैबाट लगाउन सकिन्छ । मक्का विजय भएपछिको समयमा त झन् मानिसहरू इस्लाममा हुलका हुल प्रवेश गरे ।

## छापामार टोली

कबिलाहरूकहाँ जकात संकलन गर्न कर्मचारी पठाइए झैं अरब टापुका केही इलाकामा अमन शान्ति हुँदाहुँदै पनि विभिन्न क्षेत्रमा केही फौजी टोली पठाउनु पर्‍यो । त्यसको सूची निम्नि लिखित छ ।

## १, उयैना बिन हिस्न फजारीको छापामार टोली : (मोहर्रम ९ हिजरी)

उऐनालाई पचास सवारहरूको नेतृत्व दिएर बनु तमिम तर्फ पठाइयो । कारण बनु तमिमले कबिलाहरूलाई भड्काएर कर दिनबाट रोकेको थियो । त्यो टोलीमा कुनै अन्सार तथा मुहाजिर थिएन ।

उयैना बिन हिस्न राती यात्रा गर्दै र दिनमा छिप्दै अगाडि बढे र मरुभूमिमा रहेका बनु तमिममाथि आक्रमण गरे । उनीहरू पिठ्यूँ फर्काएर भागे । उनीहरूबाट ११ जना पुरुष, २१ जना महिला र ३० जना बालबच्चाहरू गिरिफतार भए । उनीहरूलाई मदिना ल्याएर रमला बिन्त हारिसकहाँ राख्यो ।

उनीहरूको बारेमा कुरा गर्न बनु तमिमबाट दश जना सरदारहरू आए । मुहम्मदﷺको ढोकानिर आएर भने : हे मुहम्मद हामी भएको ठाउँमा आऊ । उहाँ बाहिर निस्कनुभयो । उनीहरूले उहाँसँग टाँसिएर कुरा गर्न थाले । उनीहरू उहाँ भएको ठाउँमा बसिरहँदा उहाँले जोहरको नमाज पढाएर मस्जिदे नबवीको बरन्डामा बस्नुभयो । उनीहरूले गौरव तथा प्रतिष्ठाको आधारमा प्रतिवाद गर्ने इच्छा जाहेर गर्दै आफ्नो प्रवक्ता अत्तारुद बिन हाजिबलाई पेश गरे । उसले भाषण गर्‍यो । मुहम्मदﷺले इस्लामका वक्ता साबित बिन कैस बिन शम्मासलाई निर्देशन दिनुभयो । प्रतिउत्तरमा उनले पनि भाषण गरे । त्यसपछि उनीहरूले आफ्नो कवि जबरकान बिन बदरलाई अगाडि बढाए र उसले घमण्डलाई दर्शाउने खालका केही श्लोक भन्यो । त्यसको जवाफ इस्लामी कवि हस्सान बिन सावितले दिए ।

दुवै वक्ता र कविहरूले आफ्नो कुरा टुंग्याएपछि अक्रअ बिन हाविसले भन्यो : उनीहरूको वक्ता हाम्रो वक्ताभन्दा जोसिलो र उनीहरूको कवि हाम्रो कविभन्दा खब्बिस छ । उनीहरूको स्वर हाम्रो स्वरभन्दा बढी चर्को छ । उनीहरूको कुरा हाम्रो कुराभन्दा उच्च छ । त्यसपछि उनीहरूले पनि इस्लाम स्वीकारे । मुहम्मदﷺले

उनीहरूलाई केही राम्रो उपहार प्रदान गर्नुभयो र उनीहरूको महिला तथा बालबच्चाहरू फिर्ता गरिदिनुभयो ।[१]

## २, कतबा बिन आमिरको छापामार टोली ( ९ हिजरी सफर महिनामा)

यो छापामार टोली तुर्बा नजिक तबालाको क्षेत्रमा खस्अम कबिलाको एउटा शाखातर्फ पठाइएको थियो । कतबा बीस जना लडाकुका साथ प्रस्थान भए । उनीहरूसँग दश वटा उँट थिए जसमा उनीहरू पालैपालो सवार हुन्थे । मुसलमानहरूले एकाबिहानै उनीहरूमाथि आक्रमण गरे । त्यसले गर्दा घमसान लडाइँ भयो । दुवै पक्षबाट अधिक संख्यामा मानिसहरु घाइते भए । कतबासमेत केही साथीहरू शहिद भए । तर पनि मुसलमानहरूले भेडा बाख्रा तथा बालबच्चालाई कब्जा गरी ल्याए ।

## ३, जहाक विन सुफयान छापामार टोली (रब्बिउल औवल ९ हिजरी )

त्यो संघर्ष टोली बनु केलाबलाई इस्लामको निम्ती दिनको लागि पठाइएको थियो तर उनीहरूले इन्कार गर्दै युद्ध गर्न सुरु गरे । मुसलमानहरूले उनीहरूलाई पराजित गरी उनीहरूमध्ये एक जनाको हत्या पनि गरिदिए ।

## ४,अल्कमा बिन मुजज्जिज्को छापामार टोली: (रब्बिअल औवल ९ हिजरी)

उनलाई तीन सय लडाकुको नेतृत्व दिएर जिद्दाको समुन्द्री तटतर्फ पठाइएको थियो । कारण काला जातीका केही हब्शी मानिसहरू जिद्दाको समुन्द्री तटमा जम्मा भएका थिए । उनीहरूले मक्कावासी विरुद्ध डकैती गर्न खोजेका थिए । अल्कमा समुन्द्रमा पसेर एउटा टापुतिर बढे । हब्शीहरू मुसलमानहरू आएको कुरा थाहा पाउना साथ भागे ।[२]

## ५,अली बिन अबी तालिबको छापामार टोली (रब्बिअल औवल ९ हिजरी)

उनीहरूलाई कबिला तईको एउटा कलस नामक मूर्ति ध्वस्त गर्न पठाइएको थियो । उनको कमाण्डमा एक सय उँट र पचास घोडा समेत एक सय पचास जना मानिसहरू थिए । ध्वजा सेतो र ससाना झण्डाहरू काला रंगका थिए ।

१ पवित्र युद्धका लेखेकहरुले यस घटनालाई मोहर्रम ९ हिजरीको बताएका छन् । तर यो कुरा विचरणीय छ । किनभने घटनाको परिवेशले अक्रअ बिन हाबिस त्यसअघि मुसलमान नभएको देखाएको छ । जबकि जीवनीकारहरुको भनाइ अनुसार : जब अल्लाहका संदेष्टाले बनु हवाजिनका कैदीहरुलाई रिहा गर्नको लागि भन्नुभयो तब अक्रअ बिन हाबिसले म र बनु तमिमले फिर्ता गर्दैनौ भनेको थियो । यस कुराले अक्रअ बिन हाबिस मोहर्रम ९ हिजरीभन्दा पहिला नै मुसलमान भएका थिए ।

२ फतहुलबारी भाग ८

मुसलमानहरूले विहानको समयमा हातिम ताईको टोलमा छापा मारेर कलस नामक मूर्तिलाई ध्वस्त गरी जनावर र भेडाबाखा समेत युद्धबन्दीहरूलाई गिरिफतार गरेर फर्के । युद्धबन्दीहरूमा हातिम ताइकी छोरी पनि थिई । हातिम ताइको छोरा भने सिरियातिर भागेको थियो । मुसलमानहरूले कलस नामक ढुकुटीमा तीन वटा तरवार र तीन वटा भालाहरू भेटाएका थिए । उनीहरूले बाटोमा नै युद्धप्राप्त वितरण गरे । तर छनौट गरिएको मालसमान मुहम्मदﷺको लागि अलग गरिदिए । हातिमका सन्तानलाई भने उनीहरूले वितरण गरेनन् ।

मदिना पुगेपछि हातिमकी छोरीले मुहम्मदﷺसँग कृपादृष्टि गर्न आग्रह गर्दै भनिन् । हे ईशदूत, यहाँ जो आउन सक्थ्यो ऊ वेपत्ता छ । बुबा वितिसक्नुभयो । म बुढी छु । सेवा गर्ने तागत छैन । तपाइँ ममाथि गुण लगाउनुहोस् अल्लाहले तपाइँमाथि गुण लाउने छ । उहाँले सोध्नुभयो : तिम्रो लागि को आउन सक्थ्यो । उनले भनिन् : अदी बिन हातिम । उहाँले भन्नुभयो : त्यो व्यक्ति जो अल्लाह र ईशदूतबाट भागेको छ ? त्यसपछि उहाँ अगाडि बढ्नुभयो । दोस्रो दिन पनि उनले त्यही कुरा दोहोऱ्याईन् । उहाँले पनि त्यही कुरा भनिदिनुभयो जुन उहाँले पहिलो दिन भन्नुभएको थियो । तेस्रो दिन पनि उनले त्यही कुरा दोहोऱ्याएपछि मुहम्मदﷺले उनीमाथि गुण लगाउँदै उनलाई मुक्त गरिदिनुभयो । त्यतिबेला उहाँको साथमा एक जना साथी अली थिए । उनले भने : तपाइँ मुहम्मदﷺसँग सवारीको लागि पनि भन्नुस् । उनले सवारीको पनि माग गरिन् । उहाँले सवारी पनि उपलब्ध गराउने आदेश दिनुभयो ।

हातिमकी छोरी फर्केर मुलुक सिरिया आफ्नो दाइ अदीकहाँ गइन् । उनीसँग भेट गरेपछि उनले आफ्नो दाइलाई मुहम्मदﷺको बारेमा बताउँदै भनिन् :मुहम्मदﷺले यस्तो काम गरेका छन् जुन हाम्रा बुबाले पनि गर्न सक्दैनन् थिए । उनीकहाँ करले जानु वा स्वइच्छाले । फलस्वरूप अदी कुनै सुरक्षा तथा पत्रविना उहाँ भएको ठाउँमा उपस्थित भए । उहाँले उनलाई आफ्नो घरमा लिएर जानुभयो । उनी सामुन्ने बसेपछि उहाँले अल्लाहको प्रशंसा गर्दै भन्नुभयो : तिमी के कुराबाट भाग्दै छौ ? के ला इलाह इल्लल्लाह भन्नुबाट ? यदि यही कुरा हो भने के तिमीलाई कुनै अन्य भगवान बारे थाहा छ ? उनले भने : मलाई थाहा छैन । उहाँले केही बेर कुराकानी गरेर भन्नुभयो : के तिमी अल्लाह नै सबैभन्दा महान छन् भन्ने भनाइबाट भाग्दै छौ ? के अल्लाह बाहेक कुनै ठूलो अरु वस्तु बारे तिमीलाई थाहा छ ? उनले भने थाहा छैन । उहाँले भन्नुभयो : यहुदीमाथि अल्लाहको क्रोध छ र क्रिश्चियन पथभ्रष्ट छन् । उनले भने म एकतर्फी मुसलमान हुँ । त्यो कुरा सुनेर मुहम्मदﷺको अनुहार खुसीले चम्कियो । त्यसपछि उहाँको आदेशमा उनलाई एक जना अन्सारीकहाँ राखियो । उनी साँझ विहान नियमित रुपमा मुहम्मदﷺको सेवामा उपस्थित भइराख्थे ।[१]

---

१ जादुल मआद भाग२

इब्ने इसहाकले अदीमार्फत वर्णन गरेका छन् उनी भन्छन् : मुहम्मदﷺले उनलाई आफ्नो घरमा राखेर भन्नुभयो : हे अदी बिन हातिम के तिमी रकुसी थिएनौ ? अदी भन्छन् मैले भने : अवश्य । उहाँले भन्नुभयो के तिमीले आफ्नो जातिमा युद्धप्राप्तको चौथो भाग लिने गर्थेनौ ? मैले भने : अवश्य । उहाँले भन्नुभयो, त्यो तिम्रो लागि जायज थिएन । मैले भने : हो, यस कुराबाट तपाईं अल्लाहको दूत हुनुहुन्छ भन्ने कुरा थाहा भयो । किनभने तपाईंलाई त्यो कुरा थाहा छ जुन अरूलाई थाहा छैन ।[१]

मुस्नद अहमदमा वर्णन गरिएको हदिसमा मुहम्मदﷺले भन्नुभयो : अदी, इस्लाम स्वीकार शान्ति पाउने छौ । मैले भनें म त खुदै एक धर्मको मान्ने वाला हुँ । उहाँले भन्नुभयो : म तिमीहरूको धर्मलाई राम्रोसँग चिन्छु । मैले भने : के तपाईं मेरो धर्मलाई राम्रोसँग बुझ्नु हुन्छ ? उहाँले भन्नुभयो : हो,के तिमी रकुसी होइनौ ? तिमीले आफ्नो जातिको युद्धप्राप्तको चौथो भाग खादैन थियौ ? अवश्य । उहाँले भन्नुभयो, त्यो तिम्रो धर्ममा जायज थिएन । उहाँको त्यस कुराले मलाई झुक्नु पर्‍यो ।[२]

अदीमार्फत सही बुखारीमा वर्णन गरिएको हदिसमा उल्लेख छ । उनी भन्छन् : म मुहम्मदﷺकहाँ बसेको थिएँ । एक जना आएर अनिकालको बारेमा भन्यो । दोस्रो व्यक्ति आएर डकैतीको बारेमा उजुरी गर्‍यो । उहाँले भन्नुभयो : हे अदी, के तिमीले हिराह देखेका छौ ? यदि तिम्रो उमेर लामो भयो भने तिमीले काठीमा बसेकी एक जना महिलालाई हिराहबाट हिँडेर आएको देख्ने छौ । उसले काबाको परिक्रमा गर्नेछे । उसलाई अल्लाहबाहेक कुनै पनि कुराको डर हुने छैन । यदि तिमीले लामो उमेर पायौ भने तिमीले किस्राको ढुकुटीमाथि विजय हासिल गर्नेछौ । यदि तिम्रो जीवन रह्यो भने तिमी देख्ने छौ जो कोहीले मुठीको मुठी सुनचाँदी दान गर्नेछ । उसले त्यसलाई कबुल गर्ने व्यक्तिको खोजी गर्ने छ तर कसैले त्यसलाई कबुल गर्ने छैन । त्यसै हदिसको अन्तिममा अदीको बयान छ मैले सपनामा देखें काठीमा बसेर आएकी महिला हिराहबाट हिँडेर काबाको परिक्रमा गर्दैछे । उसलाई अल्लाहबाहेक कसैको डर छैन । म उनीहरूमध्ये थिएँ जसले किस्रा बिन हरमुजको ढुकुटी कब्जा गरेको थियो । यदि तिमीहरूको जीवन लामो भयो भने अबुल कासिमले भनेका कुरा देख्नेछौ । अर्थात एक जनाले मुट्ठीभरी सुनचाँदी निकाल्ने छ ।[३]

---

१ इब्ने हेशाम भाग २
२ मुस्नद अहमद भाग२
3 सही बुखारी हदिस नं १४१७,३५९५,६०३३,६५३९,६५६३,७४४३,७५१२

# तबुकको युद्ध

मक्काको विजय सत्य र असत्यबीचको एउटा निर्णायक युद्ध थियो । त्यस युद्धपछि अरबवासीलाई मुहम्मदﷺ अल्लाहका दूत हुन् भनी मान्नुमा कुनै संदेह रहेन । त्यसकारण परिस्थिति एकदमै बदलियो । मानिसहरू हुलकाहुल इस्लाममा प्रवेश गर्न थाले । त्यसका केही अनुमान प्रतिनिधि टोली नामक पाठमा गरिने विवरणबाट लगाउन सकिन्छ । केही अनुमान हज्जतुल वेदाको अवसरमा जम्मा भएको संख्याबाट पनि गर्न सकिन्छ । जे होस् आन्तरिक कठिनाइ लगभग समाप्त भइसकेको थियो र मुसलमानहरू ईश्वरीय नीतिनियम र इस्लामी शिक्षा प्रचारप्रसार गर्न केन्द्रित भएका थिए ।

## युद्धको कारण

त्यस शक्तिको ध्यान मदिनामा गडेको थियो जसले अनावश्यक मदिनामा हस्तक्षेप गरिरहेको थियो । त्यो शक्ति इटालीको शक्ति थियो जो तत्काल विश्वको नै सबैभन्दा ठूलो शैनिक शक्ति थियो । पछाडिका पृष्ठमा उल्लेख भए अनुसार त्यो हस्तक्षेपको शुरुवात शरहबिल बिन अमर गस्सानीद्वारा मुहम्मदﷺको दूत हारिस बिन उमैर अजदीको हत्या गरिएको कारणबाट भएको थियो । उनी मुहम्मदﷺको संदेश लिएर बस्राका शाहकहाँ जाँदै थिए । मुहम्मदﷺले उनीपछि जैद बिन हारिसाको नेतृत्वमा एक सशस्त्र टोली पठाउनु भएको थियो जसले तबुक नामक ठाउँमा इटालीयन फौजसँग भयानक टक्कर लियो । त्यो टोली धुर्त अपराधीसँग बदला लिन त सफल भएन तर उनीहरूले अरबमा रहेका टाढा तथा नजिकका सम्पूर्ण वासीहरूमा राम्रो प्रभाव पारे ।

ती प्रभाव र त्यसको नतिजामा अरबवासीभित्र इटालीबाट मुक्ति र मुसलमानसँग मित्रताको जुन भावना जागेको थियो त्यसलाई इटालीयन शाहले कुनै पनि हालतमा त्यतिकै छोड्न सक्दैन थियो । निश्चय उसको लागि त्यो एउटा यस्तो खतरा थियो जो एकबद्ध भएर उसको सिमानातिर बढ्दै थियो । अरबसँग जोडिएको सिमाना सिरियाको लागि चुनौती बन्दै गयो । इटालीसँग जोडिएको अरबको भूभागमा उपद्रव तथा दंगा नहोस् भनी शाह इटालीले मुसलमानको शक्तिलाई एउटा ठूलो शक्ति बन्नुअघि नै सिद्धयाउन जरूरी ठानेको थियो ।

यिनै कारणले गर्दा मुताह युद्धको एक वर्ष नवित्दै इटाली शाहले इटालीयन वासिन्दा र आफ्नो अण्डरमा रहेका अरब कबिला आले गस्सानलाई समेत समावेश गरी शैन्य शक्ति  जुटाएर एउटा निर्णायक युद्धको तयारी गर्न थाल्यो ।

## इटाली र गस्सानको तयारी बारे सामान्य खबरहरू

उता मदिनामा इटालीहरूले मुसलमानको विरुद्ध निर्णायक तथा रक्तपात युद्ध गर्न तयारी गरिरहेको खबर निरन्तर प्रवाह भइरहेको थियो । त्यसकारण मुसलमानहरू निरन्तर चिन्तित बनेका थिए । उनीहरू कुनै अपरिचित आवाज सुन्ना साथ झस्कन्थे । उनीहरूलाई इटालीको फौज आएको जस्तो लाग्थ्यो । त्यसको अन्दाजा त्यो घटनाबाट पनि हुन्छ जब हिजरी सम्बत ९ सालमा मुहम्मदﷺले आफ्नो श्रीमतीहरूसँग रिसाएर एक महिनाको लागि (इला)[१] अर्थात सम्बन्ध विच्छेद गर्नु भएको थियो । उनीहरूलाई छोडेर एउटा तल्लामा गएर एकान्तमा बस्नु भएको थियो । सहाबीहरूलाई शुरुमा वास्तविकता थाहा हुन सकेन । उनीहरूले तलाक दिनुभएको होला भन्ने ठाने । त्यसकारण सहाबीहरूमा निराशा छायो । उमर त्यस घटनालाई बयान गर्दै भन्छन् : मसँग एक जना अन्सारी साथी थियो । म मुहम्मदﷺको साथमा नहुँदा उसले उहाँको बारेमा खबर दिन्थ्यो र ऊ नहुँदा मैले खबर ल्याउँथे । ती दुवै साथी मदिनामा बस्थे । एकअर्काको छिमेकी थिए । पालैपालो मुहम्मदﷺको सेवामा उपस्थित हुन्थे । त्यो अवधिमा हामीलाई शाह गस्सानको पनि डर थियो । उसले हामीमाथि आक्रमण गर्न खोजेको छ भन्ने खबर प्राप्त भएको थियो । उसकै कारण हामी हतियारबन्द थियौं । एक दिन अचानक मेरो अन्सारी साथीले ढोका खोल भन्दै ढोका ढक्ढकाउन थाल्यो । मैले भनें : के गस्सानीहरू आएका छन् ? उनले भने : आएका त छैनन् तर त्यो भन्दा पनि ठूलो समस्या खडा भएको छ । मुहम्मदﷺ आफ्ना श्रीमतीहरूसँग अलग हुनुभएको छ ।[२]

एकअर्को हदिस उमरमार्फत वर्णन गरिएको छ : गस्सानीहरू हामीमाथि आक्रमण गर्नको लागि घोडाको काठी लगाएको कुरा हामीलाई थाहा थियो । एक दिन मेरो साथी आफ्नो पालोमा गएको थियो र राती आएर ढोकामा जोड्ले हान्दै भन्यो: के सुतिसक्यौ ? म त्रसित भएर बाहिर निस्कें । उसले भन्यो : एउटा ठूलो घटना घटेको छ । मैले सोधें, के भयो ? के गस्सानीहरू आएका छन् ? उसले भन्यो आएका त छैनन् तर त्योभन्दा पनि दुःखद घटना घटेको छ, अर्थात मुहम्मदﷺले आफ्नी श्रीमतीहरूलाई तलाक दिनुभयो ।[३]

---

१ श्रीमतीसँग मिलाप नगर्नको लागि कसम खानु । यो अवधि चार महिना वा त्यो भन्दा कम भए इस्लामी कानुन बमोजिम कुनै कानुन लागु हुदैन । यदि चार महिनाभन्दा बढी भयो भने इस्लामी कानुन अनुसार कि त श्रीमानले आफ्नो श्रीमतीलाई राख्ने वा विच्छेद गर्न पाउने प्रावधान छ । सहाबीहरुको भनाइ अनुसार केवल चार महिनाको अवधि नाघेमा विवाह विच्छेद हुन्छ ।

२ सही बुखारी भाग २

3 सही बुखारी भाग १,२

यसबाट त्यो जटिल परिस्थितिको अन्दाजा लगाउन सकिन्छ जुन त्यतिखेर इटालियनद्वारा मुसलमानहरूमाथि सृजना भएको थियो । त्यसका साथसाथै परिस्थिति मुनाफिकहरूको ती षड्यन्त्रले गर्दा झन् जटिल बन्यो जुन उनीहरूले इटालियन मदिनामा आउँदै छन् भन्ने खबर पाएपछि शुरु गरेका थिए । तर पनि ती मुनाफिकहरूले मुहम्मदﷺलाई हरेक मैदानमा सफल भएको र सांसारिक कुनै तागतसँग नडराएको र जो बाधा उहाँको बाटोमा आउँथ्यो त्यो चक्नाचुर भएको कुरा देखिसकेका थिए । ती सम्पूर्ण कुराको बावजुद उनीहरूले मुसलमान विरुद्ध आफ्नो मनमा जुन कपट लुकाएर राखेका थिए र जुन चक्रव्युहको उनीहरूलाई जमानादेखि प्रतीक्षा थियो अब त्यो सफल हुने समय आएको छ भन्ने उनीहरूले आशा राखेका थिए । त्यसै परिकल्पनाको आधारमा उनीहरूले मस्जिदको नाममा षड्यन्त्र तथा धोकाको एउटा टहरा बनाए । त्यो मस्जिद मस्जिदे जर्रारको नामबाट परिचित भयो । त्यसको उद्देश्य मुसलमानहरूलाई फुटाउने, ईशदूत र मुसलमान विरुद्ध लडनेहरूको लागि घातस्थलको रूपमा प्रयोग गर्नु थियो । उनीहरूले मुहम्मदﷺलाई त्यसमा नमाज पढ्न पनि आग्रह गरे । त्यसको उद्देश्य मुसलमानहरूलाई धोका दिनु र मुसलमानहरूको विरुद्ध षड्यन्त्र रचिदै छ भन्ने कुरा उहाँलाई थाहा नहोस् र मुसलमानहरूले त्यस मस्जिदमा आवतजावत गर्नेहरूमाथि नजर नराखुन् भन्ने थियो । त्यसैगरी त्यस मस्जिदले मुनाफिकहरूको सुरक्षाको काम पनि गरोस् भन्ने थियो । तर मुहम्मदﷺले त्यस मस्जिदमा नमाज पढ्न युद्धबाट फिर्ता नहुञ्जेलसम्मको लागि स्थगित गरिदिनुभयो । किनभने उहाँ तयारीमा व्यस्त हुनुहुन्थयो । यसरी मुनाफिकहरू आफ्नो घृणित उद्देश्यमा सफल हुन सकेनन् र अल्लाहले उनीहरूको पोल पहिला नै खोलिदिए । तसर्थ मुहम्मदﷺ युद्धबाट फर्केपछि त्यस मस्जिदमा नमाज पढ्नुको साटो उहाँले त्यसलाई ध्वस्त गराउनुभयो ।

## इटाली र गस्सानको तयारी बारे विशेष सूचनाहरू

मुसलमानहरूले ती परिस्थितिहरूको सामना गरिरहँदा सिरियाबाट तेल लिएर आउने नबतीहरूद्वारा[1] हिरक्ल्ले चालीस हजारको विशाल फौज तयार गरेको र त्यसको नेतृत्व इटालीका महाकमाण्डरलाई दिएको खबर पाए । साथै उसले आफ्नो झण्डामूनि इसाइ, लखम र जुजामलाई पनि शामिल गरेको छ र उनीहरूको प्रत्येक टोली बलका नामक ठाउँमा पुगिसकेका छन् भन्ने खबर मुस्लिमहरूलाई प्राप्त भयो । यसरी एकअर्को ठूलो खतरा मुसलमानको सामुन्ने आयो ।

---

१ नाबित विन इस्माइलका वंश, उनीहरुले एउटा युगमा उत्तरी हेजाजमा ठूलो प्रगति गरेका थिए। तर पछि उनीहरु साधारण किसान तथा व्यापारीको रुपमा झरे ।

## परिस्थिति अँझै जटिल

परिस्थिति झन् जटिल बन्नुको कारण प्रचण्ड गर्मीयाम थियो । मानिसहरू अनिकाल तथा गरिबी जस्ता समस्याबाट पीडित थिए । सवारीहरू पनि कमै थिए । फलफूल पाकेका थिए । त्यसकारण मुस्लिमहरू फलदार रूखको छायाँमा बस्न चाहे । तत्कालै उनीहरू जान चाहेनन् । त्यसमा पनि गन्तव्य धेरै टाढा थियो बाटोघाटो पनि कठिन थियो ।

## मुहम्मदﷺबाट अगाडि बढ्ने निर्णय

मुहम्मदﷺले परिस्थिति तथा बदलिँदो अवस्थालाई अति गहिरिएर नियालिरहनु भएको थियो । उहाँलाई थाहा थियो यदि यस निर्णायक घडीमा इटालियनविरुद्ध लडाइँ गर्नमा अल्छी गरियो र उनीहरूलाई मुसलमानले नियन्त्रणमा लिएको इलाकामा घुस्न दिइयो भने इस्लामी आह्वानमा अति नराम्रो प्रभाव पर्नेछ । मुसलमानहरूको फौजी पहिचान पनि सपाप्त हुनेछ र हुनैन युद्धको ठूलो मारकाटपछि परास्त भएको अज्ञानताले फेरि टाउको उठाउने छ । जुन मुनाफिकहरू मुसलमान विरुद्ध समयको चक्रव्युहको प्रतीक्षामा छन् र अवज्ञाकारी अबु आमिरद्वारा सिरियाले इटालीसँग सम्पर्कमा गरेको छ उनीहरूले त्यतिखेर मुसलमानमाथि पछाडिबाट आक्रमण गर्ने छन् । अगाडिबाट इटाली फौजले रक्तपात आक्रमण गर्नेछ । यसरी ती सम्पूर्ण प्रयासहरू निरर्थ हुने छन् जुन ईशदूत र उहाँका साथीहरूले इस्लामको प्रचारप्रसारका लागि गरेका थिए । अधिक सफलताहरू असफलतामा परिणत हुनेछन् जुन लामो रक्तपात युद्ध र निरन्तर फौजी कारवाहीबाट हासिल भएको थियो ।

मुहम्मदﷺले ती परिणामहरूलाई राम्रोसँग बुझ्नु भएको थियो । तसर्थ दुःख कष्ट र कठिनाइको बावजुद उहाँले इटालियनहरूलाई इस्लामी राज्यमा बढ्ने मौका नदिई स्वयम उनीहरूको क्षेत्र र सीमामा घुसेर उनीहरूको विरुद्ध निर्णायक युद्ध लड्ने निर्णय गर्नुभयो ।

## इटालीविरुद्ध युद्धको तयारी गर्ने घोषणा

त्यो कुरा तय गरिसकेपछि मुहम्मदﷺले साथीहरूलाई लडाइँको लागि तयारी गर्न सूचित गर्नुभयो । अरबका कबिला र मक्कावासीहरूलाई पनि लडाइँको लागि निस्कन संदेश पठाउनुभयो । उहाँको बानी थियो, उहाँले जब कुनै युद्धको इरादा गर्नुहुन्थ्यो त्यतिखेर कुनै अन्य ठाउँतिर जाने जस्तो भान पार्नु हुन्थ्यो । तर संवेदनशील परिस्थिति र गरिबीको कठिनाइका कारण त्यस पटक उहाँले साथीहरूले पूर्ण तयारी गरून् भनेर साथीहरूलाई इटालियनविरुद्ध युद्ध गर्नु छ भनी खुला रूपमा घोषणा गर्नुभयो । त्यस अवसरमा उहाँले मानिसहरूलाई जिहाद गर्न प्रेरित गर्नुभयो । युद्धको लागि प्रोत्साहन गर्न कुरआनको सुरह तौबाको एउटा अनुच्छेद पनि अवतरण

भयो । साथै उहाँले दानदक्षिणाको महत्व बताउनुभयो । अल्लाहको मार्गमा आफ्नो धनजन खर्च गर्न प्रेरित गर्नुभयो ।

## युद्धको तयारीमा मुसलमानहरूको सक्रियाता

मुहम्मदﷺले इटाली विरुद्ध युद्धको आदेश दिनुभएको छ भन्ने कुरा सुन्ने वित्तिकै साथीहरू त्यसमा सक्रिय भए र तीव्र गतिमा तयारी शुरु गर्न थाले । कबिला तथा खान्दानहरू चारैतिरबाट मदिना आउन सुरु गरे । मनमा नफाकको रोग भएकाहरूबाहेक कुनै मुसलमान त्यस युद्धबाट पछि रहन चाहेन । तर मुसलमानहरूमध्ये तीन किसिमका मानिसहरू सही इमानमा हुँदाहुँदै पनि त्यस युद्धमा शामिल हुन सकेनन् । अभाव र भुकमरीमा ग्रसित मानिसहरू पनि इटालियन विरुद्ध हुने युद्धमा सामिल हुन मुहम्मदﷺकहाँ आएर सवारी माग्थे तर उहाँ उनीहरूसँग क्षमा माग्नु हुन्थ्यो : मैले तिमीहरूको लागि कुनै सवारी पाउन सकिनँ । आफुसँग पनि खर्च गर्न केही नभएका कारण साथीहरू दुखित भई आँखाबाट आँसु बगाउँदै फर्के ।

यसरी मुसलमानहरू दानदक्षिणा गर्नमा पनि होडबाजी गर्थे । उस्मानले सिरियाको लागि एउटा टोली तयार गरेका थिए । जसमा सवारीको पिठयूँमा राखिने गद्दी र काठी लगायत दुई सय उँट थिए । लगभग साढे उन्तीस किलो चाँदी थियो । उनले ती सबै कुरा दान गरिदिए । त्यसैगरी एक सय उँट समेत सवारीको पिठयूँमा राखिने गद्दी र काठी पनि दान गरिदिए । त्यसपछि साढे पाँच किलो सुनका सिक्का लिएर मुहम्मदﷺको अगाडि राखिदिए । ईशदूतले त्यसलाई उलटपुलट गर्दै भन्नुभयो : आजको दिनदेखि उस्मानले केही नगरे पनि कुनै नोक्सान हुने छैन ।[१] त्यसपछि उस्मानले फेरि दान गरे । उनले दान गरेको परिमाण नगदबाहेक नौ सय उँट र एक सय घोडा बराबर पुग्यो ।

उता अब्दुर्रहमान बिन औफले उनन्तीस किलो चाँदी लिएर आए । अबु बकरले आफ्नो सारा माल हाजिर गरिदिए । बालबच्चाका लागि अल्लाह र ईशदूत बाहेक केही छाडेनन् । उनको दानको परिमाण चार हजार दिरहम थियो । आफ्नो दान लिएर उनी सबैभन्दा पहिला आएका थिए । उमरले आफ्नो आधा माल दान गरे । अब्बासले पनि धेरै मालसामान ल्याए । तलहा,सअद बिन उबादह र मुहम्मद बिन मस्लमा लगायतका सहाबीहरूले पनि प्रयाप्त मालसामान ल्याए । आसिम बिन अदीले साढे तेह्र टन खजुर लिएर आए । बाँकी सहाबीहरूले पनि एकएक गरी धेरैथोरै मालसामान लिएर आए । कुनै कुनैले एक दुई मुठी दान गरे । उनीहरूसँग त्यो भन्दाबढी क्षमता थिएन । महिलाहरूले आफ्नो गहना, बाली, औँठी, पायल आदि

---

१ तिर्मिजी

मुहम्मदﷺको सेवामा पठाए । त्यस मामिलामा कुनै पनि पछाडि परेनन्, कसैले कन्जुस्याइँ गरेनन् । मुनाफिकहरूले दानदक्षिणामा प्रतिस्पर्धा गर्नेहरूमाथि ठट्टा गर्थे । जुन मानिसहरूसँग आफ्नो परिश्रमबाहेक केही थिएन उनीहरूको खिल्ली उडाउँदै भन्थे : यिनीहरू एकदुई मानो खजुर लिएर इटाली सत्तालाई पराजित गर्न होमिएका छन् ।

## इस्लामी लस्कर तबुकको मार्गमा

उत्साह,जोसजाँगर र क्रियशीलताको आधारमा लस्कर तयार भएपछि मुहम्मदﷺले मुहम्मद बिन मुस्लिमा भनिन्छ सिबाअ बिन अर्फतालाई मदिनाको गवर्नर बनाउनुभयो । साथै अलीलाई आफ्नो परिवारको रेखदेखका लागि मदिनामा नै बस्न भन्नुभयो । तर मुनाफिकहरूले उनीमाथि व्यङग्य प्रहार गरे । उनी मदिनाबाट निस्केर मुहम्मदﷺकहाँ गए । तर उहाँले उनलाई फेरि मदिना फर्काउँदै भन्नुभयो तिमी र मेरोबीचको सम्बन्ध त्यस्तै छ जस्तो मुसा र हारूनको बीचमा थियो तर मपछि कुनै ईशदूत हुन सक्दैन ।

मुहम्मदﷺले त्यो व्यवस्था मिलाएर उत्तरतर्फ प्रस्थान गर्नुभयो । नसइमा उल्लेखित हदिस बमोजिम बिहीबारको दिन थियो र गन्तव्य तबुक थियो । फौज पनि ठूलो थियो । तीस हजार लडाकाहरू थिए । त्योभन्दा पहिला मुसलमानहरूको यति ठूलो लस्कर कहिले जम्मा हुन सकेको थिएन । साथै मुसलमानहरूले माल खर्च गरेर पनि लस्कर पूर्ण रूपमा तयार गर्न सकेका थिएनन् । सवारी र खाद्य पदार्थको कमी थियो । अठार अठार जनाको लागि एउटा उँट थियो जसमा उनीहरू पालैपालो सवार हुन्थे । त्यसैगरी कहिलेकाँहि बाध्य भएर रूखका पातपतिंगा खानु पर्थ्यो । त्यसले ओठ फुट्ने गर्थ्यो । उँटको कमी हुँदाहुँदै पनि उँटको पेटमा बाँकी रहेको पानी खानको लागि बाध्य भएर केही उँट बध गरिए । यसैकारणले त्यस लस्करको नाम जैश उस्राह अर्थात अभावको लस्कर पर्‍यो ।

तबुकको मार्गमा लस्कर हजर अर्थात समुदको वस्ती हुँदै गयो । समुद त्यो जाति थियो जसले कुरा नामक उपत्यकामा ढुंगा तासेर घर निर्माण गरेका थिए । सहाबीहरूले त्यहाँ गएर कुवाको पानी खाए । हिँड्न लाग्दा मुहम्मदﷺले भन्नुभयो : तिमीहरू यहाँ को पानी नखाऊ साथै नमाजको लागि पनि यस पानीले वजु नगर । तिमीहरूले जुन पिठो यस पानीबाट मुछेका छौ त्यो आफुले नखाएर जनावरलाई खुवाइदेऊ । त्यो कुवाबाट पानी निकाल जुन कुवाबाट सालेहعليه السلامको उँटनीले पानी खाने गर्थ्यो ।

बुखारी र मुस्लिम नामक हदिसको किताबमा इब्ने उमरमार्फत वर्णन गरिएको छ : मुहम्मदﷺले समुदको वस्तीबाट हिँड्दाखेरि भन्नुभएको थियो : ती

अत्याचारीहरूको वस्तीबाट नहिँड नत्र तिमीहरूमाथि पनि उनीहरूमा आएको प्रकोप आउन सक्छ । हिँड्नु परे पनि रुदै हिँड । त्यसपछि उहाँले आफ्नो टाउको छोपेर तेजगतिमा त्यो उपत्यका पार गर्नुभयो ।[१]

बाटोमा मानिसहरूलाई पानीको अति आवश्यक पऱ्यो । मानिसहरूले मुहम्मदﷺसँग पानीको लागि भने । उहाँले अल्लासँग प्रार्थना गर्नुभयो । अल्लाहले बादल पठाइदिए र वर्षा पनि भयो । मानिसहरूले पेटभरी पानी खाए । आवश्यकता अनुसार पानी पनि भरे ।

तबुकनिर पुगेपछि उहाँले भन्नुभयो :अल्लाहले चाहयो भने भोलि तिमीहरू तबुकको कुवाँमा पुग्ने छौ तर विहानको पहरभन्दा पहिला पुग्ने छैनौ । त्यहाँ पुगेपछि म नआउञ्जेल कसैले त्यहाँको पानीलाई हात लगाउने छैन । मुआज भन्छन् : हामी भन्दा पहिला त्यहाँ दुई जना व्यक्ति पुगेका थिए । मूलबाट अलिअलि पानी आएको थियो । मुहम्मदﷺले ती दुई जना व्यक्तिहरूसँग सोध्नुभयो, के तिमीहरूले यहाँको पानीलाई हात लगाएका छौ ? उनीहरूले भने : अँ , अल्लाहले जे चाहेको थियो त्यही भयो भनी मुहम्मदﷺले उनीहरूसँग भन्नुभयो । उहाँले मुहानबाट हातमा पानी निकालेपछि त्यहाँ पानी जम्मा भयो । मुहम्मदﷺले त्यहाँ अनुहार र हात धुनुभयो र त्यसलाई कुवाँमा हुँडल्नुभयो । त्यसपछि मुहानबाट अधिक पानी आयो । सहाबीहरूले पेटभरी पानी खाए । मुहम्मदﷺले भन्नुभयो : हे मुआज तिम्रो उमेर लामो भयो भने यस ठाउँमा हरियाली देख्ने छौ ।

बाटोमा केही भनाइ अनुसार तबुकमा पुगेर मुहम्मदﷺले भन्नुभयो : आज राती आँधीबेहरी आउनेछ । आँधीबेहरी आउँदा तिमीहरूमध्ये कोही पनि आफ्नो ठाउँबाट नउठोस् । उँट हुनेहरूले आफ्नो उँट राम्रोसँग दाम्लोले बाँध । भन्दा नभन्दै भयानक आँधीवेहरी आयो । एक जना व्यक्ति उठ्दा आँधीले उसलाई उडाएर तइको दुई पहाडबीच फ्याँकेको थियो ।[२]

यात्रा गर्दा मुहम्मदﷺले जोहर र असरको नमाज एक साथ र मग्रिब र इशाको नमाज एक साथ पढनु हुन्थ्यो । कहिले जमा तकदीम र कहिले जमा ताखिर गर्नु हुन्थ्यो । (जमा तकदीमको मतलब जोहर र असर दुवै नमाज जोहरको समयमा र मग्रिब र इशाको नमाज मग्रिबमा पढ्नु । जमा ताखिरको मतलब जोहर र असर दुवै नमाज असरको समयमा र मग्रिब र इशाको नमाज इशामा पढनु हो)

---

१ सही बुखारी भाग २
२ सही मुस्लिम भाग २

## इस्लामी लस्कर तबुकमा

इस्लामी लस्कर तबुकमा पुगेर पाल टांगेर बस्यो । लस्कर इटाली विरुद्ध युद्ध गर्न तयार थियो । मुहम्मदﷺले लस्करलाई सम्बोधन गर्दै उत्कृष्ट प्रबचन दिनुभयो । उहाँले सटिक कुरा भन्नुभयो । लोकप्रलोकको भलाइतर्फ प्रेरित गर्नुभयो । अल्लाहको दण्डबाट डर देखाउनुभयो साथै राम्रो प्रतिफलको शुभसूचना दिनुभयो । यसरी फौजको आँट बलियो भयो । उनीहरूले खाना खर्च र अन्य सामानको जुन कमी महसुस गरेका थिए त्यो सबै पूरा भयो । अर्कोतर्फ इटालियन र उसका मित्रहरूले मुहम्मदﷺको आगमनको कुरा थाहा पाएपछि उनीहरूमा डर तथा त्रास उत्पन्न भयो । अगाडि बढेर टक्राउने आँट भएन । उनीहरू आफ्नो मुलुकको विभिन्न शहरहरूमा लुके । उनीहरूको त्यो चालले गर्दा मुसलमान फौजको साखमा राम्रो प्रभाव पऱ्यो । युद्धबाट गर्दा पनि प्राप्त हुन नसक्ने राजनैतिक लाभहरू मुसलमानहरूले सजिलैसँग हासिल गरे । त्यसको विवरण यस प्रकार छ : यलाको हाकिम यहना बिन रूबाले मुहम्मदﷺको सेवामा उपस्थित भएर कर दिने बोलकबोल गरेर करार पारित गऱ्यो । जरबा र अजरहका वासीहरूले पनि मुहम्मदﷺको सेवामा उपस्थित भएर कर दिने कबुल गरे । मुहम्मदﷺले उनीहरूको लागि एउटा कागज पनि बनाइदिनुभयो त्यो उनीहरूसँग सुरक्षित थियो । मिनावासीले आफ्नो फलफूलको चौथो भाग दिने गरी सम्झौता गर्न कबुल गरे । मुहम्मदﷺले यलाको हाकिमलाई एउटा कागज लेखिदिनुभयो जुन यस प्रकार छ : बिस्मिल्लाहिर्रहमानिर्रहीम

यो अल्लाह र ईशदूत मुहम्मदﷺको तर्फबाट यहना बिन रुबा र यलाका बासिन्दाहरूको लागि शान्तिसम्झौता पत्र हो । जलथलमा रहेका उनीहरूको डुँगा र बटुवाहरूको जिम्मेवार अल्लाह र ईशदूत छन् । सिरियाली तथा समुन्द्री वासिन्दाहरूमध्ये जो कोही यहनाको साथमा रहने छ उनीहरूको जिम्मेवार पनि अल्लाह र अल्लाहका दूत हुने छन् । तर यदि उनीहरूको कुनै मानिसले नराम्रो काम गऱ्यो भने उनीहरूको मालसामान उसको ज्यानको अगाडि बाधक बन्न सक्ने छैन र जसले उसको माल लिने छ त्यो उसको लागि जायज हुनेछ । उनीहरूलाई कुनै पनि मुहान, समस्थल जमिन र समुन्द्री मार्गबाट हिँड्नुमा कुनै रोकटोक हुने छैन ।

यस अतिरिक्त मुहम्मदﷺले खालिद बिन वलिदलाई चार सय बीस जना सवारहरूको कमाण्ड दिएर दुमतुल जन्दलका हाकिम अकिदरकहाँ पठाउनुभयो । साथै उहाँले भन्नुभयो : तिमीले उसलाई नीलगाईको सिकार गरिरहेको अवस्थामा भेटाउने छौ । खालिद त्यहाँ गए । उनी त्यो ठाउँमा पुगे जहाँबाट किल्ला प्रष्ट देखिएको थियो । त्यहाँबाट अचानक नीलगाई निस्क्यो र किल्लाको ढोकामा आफ्नो सिंग सिउँडन थाल्यो । अकिदर त्यसको सिकारको लागि निस्क्यो । जुनेली रात थियो । खालिद र

उनका साथीहरूले ऊ भएको ठाउँमा गएर उसलाई गिरिफतार गरी मुहम्मदﷺको सेवामा हाजिर गरे । मुहम्मदﷺले उसलाई जीवनदान दिनुभयो र दुई हजार उँट, आठ सय दासीहरू,चार सय युद्धवस्त्र र चार सय भाला दिने सर्तमा उसँग सम्झौता गर्नुभयो । उसले कर दिने पनि कबुल गऱ्यो । अन्ततः उहाँले उसँग यहना समेत दुमाह, तबुक, यला र तुऐमाका सर्तहरूमा मामिला तय गर्नुभयो ।

ती सम्पूर्ण परिस्थितिलाई देखेर ती कबिलाहरू जुन अँझसम्म इटालीका पुच्छर बनेका थिए उनीहरूले अब आफ्नो सरदारहरूमा विश्वास गर्ने समय गयो भन्ने कुरा बुझे । फलस्वरूप उनीहरू मुसलमानहरूको सहयोगी बने । यसरी इस्लामी सत्ताको क्षेत्रसीमा फैलिएर सीधै इटालीको सिमानामा जोडिन पुग्यो । साथै अधिकांश इटालियन मण्डलेहरूको अन्त्य भयो ।

## मदिनातर्फ फिर्ता

इस्लामी लस्कर तबुकबाट विजय भएर फर्क्यो । कुनै झडप भएन । युद्धको मामिलामा अल्लाह नै मोमिनहरूको लागि प्रयाप्त थियो । तर एक ठाउँको घाटीनिर बाह्र जना मुनाफिकहरूले मुहम्मदﷺको हत्या गर्ने प्रयास गरेका थिए । त्यस वखत उहाँ त्यो घाटीबाट जादै हुनुहुन्थ्यो । उहाँको साथमा केवल अम्मार र हुजैफा बिन यमान थिए । अम्मारले उँटनीको लगाम समातेका थिए भने हुजैफाले उँटनी हँकाएका थिए । बाँकी सहाबीहरू टाढा उपत्यकाको फेदीबाट जाँदै थिए । मुनाफिकहरूले त्यस मौकालाई आफ्नो लागि सुनौलो ठानी मुहम्मदﷺतर्फ आफ्नो कदम बढाए । उता मुहम्मदﷺ र उहाँका दुवै साथीले यात्रा गरिरहँदा पछाडिबाट मुनाफिकहरू आएको स्वर सुनियो । ती सबै मुनाफिकहरूले आफ्नो अनुहारमा मुकुण्डो लगाएका थिए । उनीहरूले उहाँमाथि आक्रमण गर्न लाग्दा उहाँले हुजैफालाई उनीहरू भएतिर पठाउनुभयो । उनले उनीहरूको सवारीको टाउकोमा आफ्नो ढालले हाने । त्यसपछि अल्लाहले उनीहरूमा त्रास सृजना गरिदिए । उनीहरू तीव्रगतिमा आफ्ना मानिसहरू भएतिर भागे । त्यसपछि मुहम्मदﷺले उनीहरूको नाम किटान गर्नुभयो । उनीहरूको कुचेष्टा बारे जानकारी गराउनुभयो । त्यसैकारण हुजैफालाई मुहम्मदﷺको गोप्य साथी भनिन्छ । त्यसै घटनाको बारेमा अल्लाहको यो कथन अवतरण भयो । उनीहरूले त्यो काम गर्न सोचेका थिए जुन उनीहरूले गर्न सकेनन् ।

यात्राको अन्तिमतिर टाढैबाट मदिनाको नक्सा देखिएपछि उहाँले भन्नुभयो : त्यो ताबा हो, त्यो उहुद हो, त्यो पहाडले हामीसँग माया गर्छ र हामीले त्योसँग माया

गर्छौं । उता मदिनामा उहाँको आगमनको खबर पुग्यो । महिला बालबालिकाहरू बाहिर निस्के । उनीहरूले सम्मानित तरिकाले लस्करको स्वागत गर्दै निम्न गान गाए ।[१]

طلع البدر علينا من ثنيات الوداع وجب الشكر علينا ما داعاا لله داع

अनुवाद छ : हामीमाथि वेदाको घाटीबाट पूर्णिमाको चन्द्रमा उदायो । हामीले धन्यवाद दिनै पर्छ जबसम्म अल्लाहलाई पुकार्ने वालाले अल्लाहलाई पुकार्छ ।

मुहम्मदﷺ तबुकबाट रजबको महिनामा फर्कनुभयो ।[२] त्यस यात्रामा पूरा पचास दिन लाग्यो । बीस दिन तबुकमा र तीस दिन आउन जानमा । त्यो उहाँको जीवनको अन्तिम पवित्र युद्ध थियो जसमा उहाँ स्वयम शामिल हुनुभएको थियो ।

## मुखल्लेफीन

त्यो युद्ध आफ्नो विशेष परिस्थितिले गर्दा अल्लाहको तर्फबाट एक कठिन परीक्षा पनि थियो । जसबाट मोमिन र गैर मोमिनबीच भिन्नता देखियो । त्यस किसिमको मौकामा अल्लाहको नीति पनि त्यस्तै हुन्छ । अल्लाहको भनाइ छ : अल्लाहले पवित्रबाट अपवित्रलाई नछुट्याई मोमिनहरूलाई तिमीहरूलाई झैं त्यत्तिकै छोड्दैन (३:१७९)

तसर्थ त्यस युद्धमा सम्पूर्ण मोमिनहरूले भाग लिए । त्यस युद्धमा अनुपस्थित हुनुलाई नफाकको लक्षण घोषित गरियो । यति गम्भीर अवस्था थियो कि उहाँसँग कसैको अनुपस्थितिको उजुरी गर्दा उहाँले उसलाई छोड भनेर भन्नुहुन्थ्यो । यदि उभित्र कुनै भलो भए अल्लाहले तिमीहरूकहाँ पुऱ्याइदिने छ र कुनै भलो नभए अल्लाहले तिमीहरूलाई उनीहरूबाट छुट्कारा दिएको कुरा बुझ । त्यस युद्धमा विशेष मजबुरी भएका व्यक्ति र मुनाफिकहरू गएका थिएनन् । मुनाफिकहरुले अल्लाह र ईशदूतसँग इमानको झुटो दावी गरेका थिए र झुटो बहाना बनाएर युद्धमा भाग नलिन अनुमति मागेर पछाडि बसेका थिए वा अनुमति नै नलिकन बसेका थिए । पछाडि बस्नेहरूमा तीन जना सच्चापक्का मुस्लिम व्यक्तिहरू पनि थिए । उनीहरू

---

१ यो भनाई इब्ने कैयमको हो । यस विषयमा चर्चा गरिसकिएको छ ।

२ यै कुरा सही छ । पहिलाका सस्करणमा इब्ने अब्बासप्रति विश्वास गरेर अल्लाहका संदेष्टा रमजानको महिनामा फर्कनुभएको थियो भन्ने जुन कुरा लेखिएको थियो त्यो सही छैन । किनभने यस अर्थमा अल्लाहका संदेष्टा मदिनाबाट तबुकको लागि रजब महिनाको दोस्रो हप्ता बिहीबारको दिन जानुभएको थियो र बिहीबार अक्तुबरको २५ तारिख पर्दछ । यी दिनहरुमा मौसम मध्यम वा जाडोको हुन्छ । साँझ विहान जाडोको अनुभूति हुन्छ । खजुर टिप्ने समय पनि गइसकेको हुन्छ । जबकि सम्पूर्ण हदिसहरुमा अल्लाहका संदेष्टा तबुकको लागि प्रचण्ड गर्मीमा त्यति बेला जानु भएको थियो जब फलफुल पाकेका थिए । यस अतिरिक्त त्यसै वर्ष शआबानको महिनामा उहाँकी छोरी उम्मे कुल्सुमको निधन हुँदा उहाँ मदिना आउनुभएको थियो । तसर्थ रजब महिनामा उहाँ मदिना आइसक्नु भएको थियो र तबुकतर्फ त्यसको पचास दिन पछि जमादिल उलाको महिनामा प्रस्थान हुनु भएको थियो भन्ने भनाई नै बढी सही छ ।

विना कुनै कारण पछाडि बसेका थिए । त्यसकारण अल्लाहले उनीहरूको कठिन परीक्षण गरे । उनीहरूले क्षमायाचना गरेपछि उनीहरूको क्षमायाचना कबुल गरे ।

विवरण यस प्रकार छ । वापसीमा मुहम्मदﷺ मदिनामा प्रवेश गर्दा सर्वप्रथम मस्जिदे नबवीमा जानुभयो, त्यहाँ दुई रकआत नमाज पढ्नुभयो र मानिसहरूको प्रतीक्षामा बस्नुभयो । उता ८० जना[१] मुनाफिकहरू आएर आफुहरू अनुपस्थित भएको कारण देखाउन थाले । कसम खान थाले । उनीहरूले भनेको कुरा सुनेर उहाँले त्यसलाई स्वीकार्नुभयो र प्रतिज्ञा लिनुभयो । क्षमाको लागि प्रार्थना गर्नुभयो । उनीहरूको आन्तरिक कुरा अल्लाहको जिम्मामा छोडिदिनुभयो ।

बाँकी तीन जना सच्चापक्का मोमिन कअब बिन मालिक, मुरारह बिन रबीअ र हेलाल बिन उमैयाले सत्य कुरा स्वीकार्दै भने, हामी त्यत्तिकै युद्धमा उपस्थित भएनौं । त्यो कुरा सुनेर मुहम्मदﷺले साथीहरूलाई ती तीनै जनासँग नबोल्न आदेश दिनुभयो । फलस्वरूप उनीहरूको सामाजिक बाइकाट गरियो । मानिसहरू बदलिए । जमिन उनीहरूको निम्ति भयानक बन्यो । फैलनुको साटो साँघुरियो । उनीहरूलाई मर्नु न बाँच्नु भयो । यति पीडा दिइयो कि चालीस दिनपछि आफ्नी श्रीमतीबाट पनि अलग हुन आदेश भयो । बाइकाट गरिएको पचास दिन वितेपछि अल्लाहले उनीहरूको क्षमायाचना स्वीकार गरिएको वाणी अवतरण गरे :

وَعَلَى الثَّلَاثَةِ الَّذِينَ خُلِّفُوا حَتَّىٰ إِذَا ضَاقَتْ عَلَيْهِمُ الْأَرْضُ بِمَا رَحُبَتْ وَضَاقَتْ عَلَيْهِمْ أَنْفُسُهُمْ وَظَنُّوا أَنْ لَا مَلْجَأَ مِنَ اللَّهِ إِلَّا إِلَيْهِ ثُمَّ تَابَ عَلَيْهِمْ لِيَتُوبُوا ۚ إِنَّ اللَّهَ هُوَ التَّوَّابُ الرَّحِيمُ (التوبة : ١١٨)

अल्लाहले ती तीन जना व्यक्तिहरूको क्षमायाचना कबुल गरे जसको मामिला स्थगित गरिएको थियो । जमिन पनि उनीहरूको लागि फैलनुको साटो साँघुरिएको थियो । उनीहरूलाई मर्नु न बाँच्नु भएको थियो । उनीहरूलाई अल्लाहबाट भागेर अन्त कतै शरण छैन भन्ने थाहा थियो । उनीहरुले क्षमायचना गरुन् भनी अल्लाहले उनीहरूमाथि दया गरे । निसंदेह अल्लाह क्षमावान तथा दयालु छन् । (अत्तौबा : ११८)

त्यस निर्णयपछि सामान्यतया सम्पूर्ण मुसलमान र विशेष गरी ती तीन जना मुसलमानहरू प्रसन्नफुल भए । मानिसहरूले उनीहरूलाई शुभसुचना दिए । खुसीले अनुहार प्रफुल्ल भयो । पुरस्कार तथा दान दिइयो । वास्तवमा त्यो दिन उनीहरूको जीवनको सबैभन्दा महत्वपूर्ण दिन थियो ।

त्यसैगरी जुन मानिसहरू कारणवश युद्धमा शामिल हुन सकेका थिएनन् उनीहरूको बारेमा अल्लाहको भनाई छ :



---

१ वाकदीका अनुसार यो संख्या मुनाफिक अन्सारीहरूको हो । यस बाहेक बहाना बनाउने बनु गिफार आदि अरबीहरुको संख्या पनि ८२ थियो । अब्दुल्लाह बिन उबै र उसको चेला यी बाहेकका थिए । उनीहरुको संख्या धेरै नै थियो , फतहुलबारी भाग ८

لَيْسَ عَلَى الضُّعَفَاءِ وَلَا عَلَى الْمَرْضَىٰ وَلَا عَلَى الَّذِينَ لَا يَجِدُونَ مَا يُنْفِقُونَ حَرَجٌ إِذَا نَصَحُوا لِلَّهِ وَرَسُولِهِ (التوبة: ٩١)

अशक्त,बिरामी र खर्च गर्नको निम्ति केही नपाएकाहरूलाई कुनै दोष छैन यदि उनीहरू अल्लाह र ईशदूतप्रति निष्ठावान छन् भने । (अत्तौबा:९१)

मदिनानिर पुगेर मुहम्मदﷺले उनीहरूको बारेमा भन्नुभयो : मदिनामा केही यस्ता व्यक्तिहरू छन् जुन व्यक्तिहरू तिमीहरूले गरेको हरेक ठाउँको यात्रा र उपत्यकामा साथ थिए । उनीहरू केही कारणवश रोकिएका थिए । मानिसहरूले भने : के उनीहरू मदिनामा बसेर पनि हामीहरूको साथमा थिए ? उहाँले जवाफ दिनुभयो : अँ, मदिनामा बसेर पनि ।

## युद्धको प्रभाव

त्यो युद्ध अरब टापुमा मुसलमानहरूको प्रभुत्वलाई विस्तार गर्न र त्यसलाई बलियो बनाउनमा अति प्रभावशाली सावित भयो । अब अरब टापुमा मुसलमानको शक्तिबाहेक अन्य कुनै पनि तागत टिक्न सक्दैन भन्ने कुरा सबैमा प्रष्ट भयो । यसरी अज्ञानी तथा मुनाफिकहरूले मुसलमान विरुद्ध मौकाको प्रतीक्षा गरी जुन आशा राखेका थिए त्यो पनि मऱ्यो । किनकि उनीहरूको आशाको केन्द्र इटाली शक्ति थियो । त्यस युद्धबाट त्यसको पनि पोल खुल्यो जसबाट उनीहरूको आँट टुटेको थियो । उनीहरूले त्यस घटनाको अगाडि घुँडा टेके । किनकि त्यसबाट भाग्ने र छुट्ने कुनै बाटो थिएन ।

त्यस परिस्थितिले गर्दा अब उनीहरूमा मुनाफिकसँग सुमधुर मामिला गर्ने आवश्यकता पनि थिएन । तसर्थ अल्लाहले उनीहरूविरुद्ध कठोर रवैया अपनाउने आदेश दिए । उनीहरूको दान लिन,उनको अन्त्यष्टिमा प्रार्थना गर्न र उनीहरूको लागि क्षमायाचनाको प्रार्थना गर्न र उनीहरूको चिहानमा जान पनि निषेध गरिदिए । उनीहरूले मस्जिदको नाममा जुन षड्यन्त्रकारी अड्डा बनाएका थिए त्यसलाई ध्वस्त गर्न आदेश दिइयो । उनीहरूको बारेमा यस्ता श्लोकहरू अवतरण भए जसले उनीहरूको पोल खोल्यो । उनीहरूलाई चिन्नमा अब कुनै दुबिधा रहेन । मदिनामा रहेका मुनाफिकहरूमाथि यी श्लोकहरूले प्रश्न खडा गरे ।

त्यस युद्धको प्रभावको अन्दाजा त्यस कुराले पनि लगाउन सकिन्छ जब मक्कामाथि विजय भयो अरबका मानिसहरू मुहम्मदﷺको सेवामा आउन थाले तर त्यस युद्धपछि त झन् ठूलो घूइँचो लाग्यो ।[१]

---

१ इब्ने हेशाम भाग २, जादुल मआद भाग २, सही बुखारी भाग २, सही मुस्लिम भाग २, फतहुलबारी भाग ८

## युद्ध बारे ईशवाणी

त्यस युद्ध बारे सुरह तौबाका विभिन्न श्लोकहरू अवतरण भएका छन् । केही श्लोक युद्ध गर्न जानुभन्दा पहिला, केही युद्धमा जाँदै गर्दा र केही मदिना फर्केपछि अवतरण भए । यी श्लोकहरूमा युद्धको विवरण उल्लेख गरिनुका साथै मुनाफिकहरूको पोल खोलिएको छ । असल मुजाहिदहरूको प्रतिष्ठालाई वर्णन गरिएको छ । सच्चा मोमिन जो युद्धमा गएका थिए र जो जान सकेका थिएनन् उनीहरूको क्षमायाचना स्वीकार गरिएको विवरण उल्लेख छ ।

## त्यस वर्षका केही महत्वपूर्ण घटनाहरू

हिजरी सम्बत ९ सालमा ऐतिहासिक महत्वका असंख्यक घटनाहरू घटे ।

१, तबुकबाट मुहम्मदﷺ फर्केपछि उवैमिर अजलानी र उनकी श्रीमतीबीच लेआन भयो ( लेआन विवाह विच्छेद हुने एक तरिका हो ) ।

२, गामदिया नामक महिलाले मुहम्मदﷺको सेवामा उपस्थित भएर आफुले बलात्कार गरेको स्वीकारेपछि उसलाई मृत्युदण्ड दिइयो । उसको हत्या बच्चा जन्मेर दूध छोडेपछि गरिएको थियो ।

३, हब्शाहका शाह अस्हमाको निधन र मुहम्मदﷺले उनको अन्त्यष्टिको प्रार्थना स्वरूप गायबाना नमाजे जनाजह पढ्नुभयो ।

४, मुहम्मदﷺकी छोरी उम्मे कुल्सुमको निधन भयो । जसबाट उहाँ शोकग्रस्त हुनुभयो । उहाँले उस्मानसँग भन्नुभयो यदि मसँग तेस्री छोरी पनि भएकी भए म उसको विवाह तपाईंसँग गरिदिने थिएँ ।

५,मुहम्मदﷺ तबुकबाट फर्केपछि मुनाफिकको सरदार अब्दुल्लाह बिन उबैको मृत्यु भयो । मुहम्मदﷺले उसको क्षमायाचनाको लागि प्रार्थना गर्नुभयो । उमरले रोक्दा पनि उहाँले उसको नमाजे जनाजह पढाउनुभयो । पछि ईशवाणी अवतरण भयो जसमा उमरको समर्थन गरी मुनाफिकको नमाजे जनाजह पढ्न निषेध गरियो ।

## ९ हिजरीमा अबु बकरको नेतृत्वमा हज सम्पन्न

त्यसै वर्ष जिल कअदा वा जिल् हिज्जको महिनामा मुहम्मदﷺले हज गर्नका लागि अबु बकरलाई हजअध्यक्ष बनाई पठाउनुभयो ।

त्यसपछि सुरह तौबाको प्रारम्भिक अंश अवतरण भयो । जसमा बहुदेववादीहरूसँग गरिएको सम्झौतालाई समान्ताको आधारमा समाप्त गर्ने आदेश दिइयो । त्यो आदेश अवतरण भएपछि मुहम्मदﷺले अलीलाई आफ्नो तर्फबाट सूचना दिन पठाउनुभयो । त्यसो गर्नुको कारण रगत र मालको बारेमा गरिएको सम्झौता बारे अरबको रीतिअनुसार कि त सम्झौता गरेको व्यक्ति वा आफ्नो समुदायको कुनै व्यक्तिद्वारा सूचना दिइन्थ्यो, समुदाय बाहिरको कुनै व्यक्तिले दिएको सूचना मान्य हुँदैन थियो । अबु बकरलाई अलीले अरज वा जज्नान् उपत्यकामा भेटे । अबु बकरले सोधे तिमी अध्यक्ष बनेर आएका हौ कि सदस्य ? अलीले भने म अध्यक्ष होइन सदस्य हुँ । त्यसपछि दुवै अगाडि बढे । अबु बकरले मानिसहरूलाई हज गराए । जब दश तारिख अर्थात कुरबानी गर्ने दिन आयो अनि अलीले जम्राहमा उभिएर मानिसहरूलाई त्यो सूचना दिए जसको बारेमा मुहम्मदﷺले आदेश दिनुभएको थियो । अर्थात सबै सम्झौता समाप्त भएको छ । उनीहरूलाई चार महिनाको समय दिइएको छ ।

सम्झौता नभएकाहरूका लागि पनि चार महिनाको समय छ । तर जुन बहुदेववादीहरूले सम्झौताको पालना गर्नमा न कुनै खालको लापरवाही गरे न मुसलमान विरुद्ध कसैको सहयोग गरे उनीहरूको सम्झौता तोकिएको मियादसम्म यथावत रहनेछ ।

अबु बकरले सहाबीहरूको एक जमात पठाएर आगामी वर्षदेखि कुनै बहुदेववादीले यहाँ हज गर्न पाउने छैन र न कुनै नग्न व्यक्तिले अल्लाहको घरको परिक्रमा गर्न पाउने छ भनी सूचना दिन भने ।

त्यो सूचना वास्तवमा अरब टापुबाट मूर्तिपूजाको समाप्तीको सूचना थियो । अर्थात त्यस वर्षपछि कहिल्यै मूर्तिपूजा गर्न त्यहाँ आउजाउ हुने छैन ।[१]



१ बुखारी भाग १, जादुल मआद भाग ३, इब्ने हेशाम भाग २, सुरह बराअतको शुरुका श्लोकहरुको विश्लेषण

# पवित्र युद्धहरू एक नजरमा

अल्लाहका दूतको तर्फबाट भएको युद्ध, सशस्त्र संघर्ष र सैन्य कारवाहीलाई केलाउने हो भने युद्धको वातावरण,परिवेश,पृष्ठभूमि र परिणामको बारेमा जानकारी भएको जो कोही व्यक्तिले ईशदूत विश्वकै सबैभन्दा विशिष्ट एवं प्रतिभाशाली सैनिक कमाण्डर थिए भन्ने कुरा नस्वीकारी रहन सक्दैन । उहाँको बौद्धिकता सबैभन्दा उत्तम र उहाँको योजना सबैभन्दा दुरदर्शी थियो । उहाँ जसरी ईशदूतत्वको विशेषतामा ईशदूतहरूका सरदार र सबैभन्दा उच्च हुनुहुन्थ्यो त्यसरी नै सैनिक कमाण्डरको विशेषतामा पनि उहाँ एकलो र अनूपम विवेकका मालिक हुनुहुन्थ्यो । फलस्वरूप उहाँले जुन सुकै युद्ध लड्दा त्यस्तो परिस्थिति र दिशालाई ध्यानमा राख्नुभयो जुन तत्वदर्शी र वीरतामा आधारित थियो । कुनै पनि युद्धमा तत्वदर्शी,लस्करको तरतिब, संवेदनशील केन्द्रमा त्यसलाई तैनाती र उचित युद्धस्थलको छनोट लगायत युद्धयोजना आदिमा उहाँबाट कुनै गल्ती भएन । त्यसैकारणले त्यस मामिलामा उहाँलाई कुनै पनि नोक्सान व्यहोर्नु परेन । बरू ती युद्धका सम्पूर्ण गतिविधिमा उहाँले आफ्नो व्यवहारिक कारवाहीबाट प्रमाणित गरिदिनुभयो कि दुनियाँले ठूलाठूला कमाण्डरहरूको जुन नेतृत्वलाई देखेको छ उहाँ त्योभन्दा पनि निकै भिन्न एक अनूपम नेतृत्वका मालिक हुनुहुन्थ्यो । युद्ध गर्दा कुनैबाट पराजित हुने प्रश्नै उठेन । यहाँ त्यो कुरा पनि उल्लेख गर्न जरुरी छ । उहुद र हुनैनको युद्ध हुँदा त्यसमा जे भयो त्यसको कारक मुहम्मदﷺको तत्वदर्शीको भुल थिएन । हुनैनमा फौजीहरूमध्ये केही व्यक्तिहरूको कमजोरी थियो भने उहुदमा उहाँको महत्वपूर्ण तत्वदर्शी र आदेशलाई निर्णायक घडीमा वेवास्ता गरिएको थियो ।

फेरि ती दुवै युद्धमा मुसलमानहरूलाई नोक्सान व्यहोर्नु पर्दा उहाँले जुन बुद्धि लगाउनु भयो त्यो आफैमा एउटा उदाहरण छ । उहाँ शत्रुको अगाडि डटिरहनु भयो । उहाँले आश्चर्यजनक जुक्तिद्वारा त्यसलाई त्यसको उद्देश्यमा विफल बनाइदिनुभयो जस्तै उहुदको युद्धमा भयो । त्यसैगरी उहाँले युद्धको काया नै पल्टाइदिनुभयो जसले गर्दा हार जितमा परिणत भयो, जस्तै हुनैनको युद्धमा भएको थियो । यद्यपि उहुद जस्तो खतरनाक अवस्था र हुनैनमा भएको भागाभागले कमाण्डरहरूको आत्मनिर्णयको शक्ति नै तोडेको थियो । उनीहरूको शक्तिमा अति नराम्रो प्रभाव पारेको थियो । त्यसले गर्दा उनीहरूलाई आफ्नो जीउ बचाउनुबाहेक कुनै फिकर रहेन ।

यो कुरा त युद्धका सैनिक र लडाइँको सम्बन्धमा थियो । बाँकी अन्य कुराहरू पनि अति महत्वपूर्ण छन् । उहाँले ती युद्धद्वारा अमन शान्ति स्थापित गर्नुभयो । फसादको आगो निभाउनुभयो । इस्लाम र बहुदेववादबीच भएको लडाइँमा उहाँले शत्रुको घमण्ड परास्त गर्नुभयो । उनीहरूलाई इस्लामी आह्वानको मार्ग खुला गरी

सम्झौता गर्न बाध्य गराउनुभयो। त्यसैगरी ती युद्धबाट उहाँलाई उहाँका सच्चा साथी को हुन्, मुनाफिक को हो र कसको मनमा धोकाबाजीको भावना लुकेर बसेको छ भन्ने कुरा थाहा भयो।

त्यसैगरी उहाँले युद्धमा आफ्नो व्यवहारिक नमुनाद्वारा मुसलमानहरूको एक शक्तिशाली जमात पनि तयार गर्नुभयो। जसले उहाँपछि इराक र सिरियाको मैदानमा फारस र इरानसँग टक्कर लियो। युद्धयोजना तथा रणनीतिमा उनीहरूका ठूलाठूला कमाण्डरहरूलाई पराजय गरी उनीहरूलाई उनीहरूको धर्ती, धन, बगैचा, मुहान, खेती, विलासीपन, पवित्रस्थल र प्राकृतिक सम्पदाबाट बन्चित गऱ्यो।

त्यसैगरी मुहम्मदﷺले ती युद्धद्वारा मुसलमानहरूको लागि खेतीपाती र रोजगारीको व्यवस्था पनि मिलाउनुभयो। निमुखा र दीनदुखी शरणार्थीहरूको समस्या समाधान गर्नुभयो। हतियार घोडा सरसामान र युद्धखर्च उपलब्ध गराउनुभयो। ती सम्पूर्ण समस्याको समाधान कुनै पनि मानवमाथि अत्याचार एवं ज्यादती नगरी गर्नुभयो।

उहाँले ती सम्पूर्ण कारण र उद्देश्यलाई परिवर्तन गर्नुभयो जसले गर्दा इस्लामपूर्व युद्धको आगो दंकिएको थियो। अर्थात इस्लामपूर्व लुटपाट, हत्याहिंसा, अत्याचार, ज्यादती, बदला, कट्टरपन्थी, कमजोरलाई दबाउने चलन, वस्तीलाई विस्थापित गर्नु, भवन ध्वस्त गर्नु ,महिलाको अपमान गर्नु, वृद्धा,बालबालिकालाई धम्क्याउनु खेतीबारी तथा जनावरहरू मार्नु जमिनमा हिंसा मच्चाउनु आदि इत्यादीको नाम नै युद्ध थियो। तर इस्लामले युद्धको त्यस तुच्छ उद्देश्यको दिशा नै परिवर्तन गरी त्यसलाई जिहादमा परिणत गरिदियो जुन उचित र मुनासिब कारणबाट शुरु हुन्छ। त्यसबाट राम्रो तथा उच्च उद्देश्य प्राप्त गरिन्छ जसलाई हरेक युग र मुलुकमा मानवसमाजको लागि सम्मानित दृष्टिकोणले हेरियो। किनभने अब युद्धको उद्देश्य मानवलाई अन्याय र अत्याचारमा आधारित व्यवस्थाबाट निकालेर इन्साफ एंव न्यायको व्यवस्थामा ल्याउन रह्यो। अर्थात बलियोले निर्बललाई दबाउने व्यवस्थालाई हटाउनु र बलियोलाई निरुत्साहित गर्नु जबसम्म उसबाट कमजोरको हक प्राप्त हुँदैन। त्यसैगरी युद्धको मतलब ती कमजोर पुरुष महिला बालबालिकालाई मुक्ति गर्नु रह्यो जुन व्यक्तिले अल्लाहसँग प्रार्थना गर्छन। हे अल्लाह हामीलाई त्यो वस्तीबाट निकालिदेऊ जसका वासिन्दाहरू अत्याचारी छन्। हाम्रो लागि आफ्नो तर्फबाट सहयोगी पठाइदेऊ। साथै त्यस युद्धको अर्थ अल्लाहको जमिनलाई धोकाबाजी अत्याचारी र पाप एवं विकारबाट पवित्र गरी त्यो ठाउँमा अमन शान्ति सदभाव हक अधिकारको प्राप्ति र मानवीय व्यवस्था स्थापित गर्नु रह्यो।

मुहम्मदﷺले युद्धको उचित नीतिनियम पनि बनाउनुभयो साथै आफ्नो कमाण्डर तथा फौजीलाई त्यसको पालना गर्न अनिवार्य गर्दै कुनै पनि हालतमा

त्यसको परिधिभन्दा बाहिर जाने अनुमति दिनुभएन । सुलेमान बिन बुरैदाहको बयान छ : मुहम्मदﷺले कुनै पनि लस्कर वा छापामार टोलीको कमाण्डर चयन गर्दा उसलाई आफ्नो बारेमा अल्लाहसँग डराउन र मुसलमान साथीहरूलाई भलो काम गर्न वसियत गर्दै भन्नुहुन्थ्यो : अल्लाहको नामले अल्लाहको मार्गमा युद्ध गर जसले अल्लाहको इन्कार गर्छ उसको विरुद्ध युद्ध गर , युद्ध गर तर धोका नदेऊ , प्रतिज्ञा नतोड , अंङ्गभंग नगर र कुनै बालबालिकाको हत्या नगर ।

त्यसैगरी उहाँले नम्रता अपनाउने आदेश दिँदै भन्नुभयो : नम्र बन कसैलाई बाध्य नबनाऊ,मानिसलाई आराम देऊ, पिठ्यूँ देखाएर नभाग ।[१] रातको समयमा उहाँ कुनै समुदायकहाँ पुगे पनि विहान नभएसम्म आक्रमण गर्नु हुन्न थियो । उहाँले कसैलाई आगोमा जलाउनुबाट कडाइका साथ रोक्नुभयो । लुटपाटबाट रोक्नुभयो । उहाँले भन्नुभयो : लुटपाटको माल मरेको वस्तु जति पनि जायज छैन । त्यसैगरी उहाँले खेतीबारी नाश गर्ने जनावर मार्ने र रूखविरुवा काट्ने क्रियाकलापबाट रोक्नुभयो । तर अति आवश्यक भएको खण्डमा रूखविरुवा नकाटेसम्म कुनै उपाय नलाग्ने भएको खण्डमा काट्ने अनुमति दिनुभयो । मक्का विजय गर्दा उहाँले भन्नुभयो : कुनै घाइतेमाथि आक्रमण नगर, डराएर भाग्नेहरूको पिछा नगर, राजदूतको हत्या नगर । साथै उहाँले गैरमुस्लिम नागरिकको हत्या गर्नबाट पनि कडाइका साथ रोक्नुभयो । उहाँले भन्नुभयो : जसले कुनै गैरमुस्लिम नागरिकको हत्या गर्छ उसले स्वर्गको बासना पनि पाउन सक्दैन । यद्यपि त्यसको बासना चालीस वर्षको दूरीसम्म फैलिएको हुन्छ ।

यी नियम र यी बाहेक अन्य उच्च युद्ध रणनीतिहरू थिए जसले गर्दा यी युद्धहरु इस्लामपूर्वको फोहरी युद्धबाट पवित्र जिहादमा परिणत भए ।[२]

१ सही मुस्लिम भाग २, तब्रानीको अल मुअजमुल सगीर भाग १
२ जादुल मआद भाग २

# अल्लाहको मार्गमा फौजका फौज प्रवेश

मक्का विजयको युद्ध एक निर्णायक युद्ध थियो । त्यसले मूर्तिपूजा जस्तो कुरीतिको अन्त्य गरेको थियो भन्ने कुरा हामीले उल्लेख गरिसकेका छौं । त्यो युद्ध सारा अरब कबिलाहरूमा सत्य र असत्यबीच भिन्नताको रूपमा प्रमाणित भयो । जसले गर्दा उनीहरूको शंकासंकोच हट्दै गयो । त्यसपछि उनीहरूले इस्लाम स्वीकारे । अमर बिन सलमाको बयान छ उनी भन्छन् : हामीहरूले मानिसहरूको बाटोघाटो नजिक एउटा मुहानको वरिपरि बसोबास गरेका थियौं । हामी भएको ठाउँबाट काफिलाहरू हिँड्ने गर्थे । हामीले उनीहरूसँग मानिसहरूको हालखबर बारे सोधिरहन्थ्यौं । त्यो व्यक्ति अर्थात ईशदूतको हाल खबर के छ ? कस्तो छ ? भनेर सोध्थ्यौं मानिसहरूले जवाफ दिँदै भन्थे : उसले भन्छ अल्लाहले मलाई ईशदूत बनाएको छ । अल्लाहले ममाथि ईशवाणी अवतरण गरेको छ । अल्लाहले यो यो वाणी अवतरण गरेको छ । मैले ती कुराहरू कण्ठ गर्थें र ती कुराहरू मेरो मनमा बस्थे । अरबीहरू इस्लाममा प्रवेश गर्नका लागि मक्का विजयको प्रतीक्षामा थिए । उनीहरूले भन्ने गर्थे उसलाई र उसको जातिलाई युद्ध गर्न देऊ । यदि ऊ आफ्नो जातिमाथि विजय भयो भने उ साँच्चिकै ईशदूत हो । तसर्थ जब मक्का विजय भयो मानिसहरू इस्लाम स्वीकारेर मदिनातर्फ लागे । मेरो बुबा पनि मेरो समुदायको साथमा इस्लाममा प्रवेश गरे । मुहम्मदﷺकहाँ बाट फर्केर आएपछि उनले भने : म अल्लाहको सत्य दूतकहाँ बाट आउँदै छु । उहाँले यो यो नमाज यो यो समयमा पढ्न, नमाजको समय भएपछि कुनै एक जनाले अजान दिन र सबैभन्दा बढी कुरआन कण्ठ भएको व्यक्तिले इमामत गर्न भन्नु भएको छ ।[१]

त्यस हदिसबाट प्रष्ट हुन्छ कि मक्काको विजयले परिस्थितिलाई बदल्न, इस्लामलाई शक्ति प्रदान गर्न, अरबवासीको म्याण्डेट निर्धारण गर्न, इस्लामको सामुने उनीहरूलाई आत्मसमर्पण गराउनमा अति दुरगामी प्रभाव पारेको थियो । त्यो स्थितिमा तबुक युद्धपछि झन् वृद्ध हुँदै गयो । त्यसकारण हिजरी सम्बत ९ र १० सालमा मदिनाबाट आउने टोलीको घुइँचो लागेको थियो । मानिसहरू इस्लाममा फौजका फौज प्रवेश भइरहेका थिए । मक्का विजय हुँदा फौजको संख्या दश हजार थियो भने त्यो संख्या बढेर तबुक युद्धमा तीस हजारको जनसागरमा परिणत भयो । त्यसैगरी हज्जतुल् वदाअको अवसरमा एक लाख चवालीस हजार मुसलमानहरूको जनसागर उर्लियो । उनीहरूले मुहम्मदﷺको साथमा लब्बैक भन्थे तक्बीर जप्थे र अल्लाहको प्रशंसा गर्थे । त्यसका साथै आकाश नै गुञ्जने गरी इस्लामी गान गाउँथे जसले गर्दा उपत्यका तथा पहाडपर्वत एकेश्वरवादको नाराले गुञ्जन्थ्यो ।

---

१ सही बुखारी भाग २

## प्रतिनिधि टोलीहरु

युद्ध बारे लेख्ने लेखकहरूले जुन टोलीहरूलाई उल्लेख गरेका छन् त्यसको संख्या ७० भन्दा अधिक छ। तर यहाँ न त्यसमा भएको प्रयास वर्णन गर्ने ठाउँ छ न त्यसको विवरण बयान गरेर कुनै ठूलो फाइदा हुनेछ। तसर्थ हामीले केवल ती टोलीहरूको बारेमा वर्णन गरेका छौं जसले ऐतिहासिक महत्व बोकेको छ। पाठकवर्गलाई ज्ञात रहोस्, सामान्य कबिलाका टोलीहरू मक्का विजयीपछि मुहम्मदﷺको सेवामा उपस्थित भएका थिए भने केही कबिला मक्का विजय हुनुभन्दा पहिला नै मदिना आएका थिए। यहाँ हामीले तिनै कबिलाको वर्णन गरेका छौं।

## १, अब्दुल कैसको टोली

त्यस कबिलाको टोली दुई पटक मुहम्मदﷺको सेवामा हाजिर भएको थियो। पहिलो चोटि हिजरी सम्बत ५ सालमा वा त्यो भन्दा पहिला। दोस्रो पटक हिजरी सम्बत ९ सालमा। पहिलो पटक आउने कारण के थियो भने त्यो कबिलाको एक जना मुन्किज बिन हैयान व्यापारको सामान लिएर मदिना आउजाउ गर्ने गर्थ्यो। मुहम्मदﷺले हिजरत गरेपछि ऊ पहिलो पटक मदिना आएको थियो। उसलाई इस्लामको बारेमा जानकारी भएपछि उसले इस्लाम स्वीकार्यो। ऊ मुहम्मदﷺको एउटा पत्र लिएर आफ्नो समुदायतर्फ गयो। उनीहरूले पनि इस्लाम कबुल गरे। उनीहरूबाट १३ वा १४ जनाको एउटा टोली निषेधित अर्थात पवित्र महिनामा मुहम्मदﷺको सेवामा उपस्थित भयो। त्यस पटक टोलीले ईशदूतसँग इमान र पियपदार्थ बारे सोध्यो। त्यस टोलीको नेतृत्व अल अश्जअ अल असरीले गरेको थियो। जसको बारेमा ईशदूतले भन्नुभएको थियो, तिमीमा दुईटा यस्ता विशेषता छन् जसलाई अल्लाहले राम्रो मानेका छन्। १ दुरदर्शीता र अर्को चतुरता।

दोस्रो पटक त्यस कबिलाको टोली अन्य टोलीहरू आगमन भएको वर्षमा आएको थियो। त्यतिखेर उनीहरूको संख्या चालीस थियो र उनीहरूमा जारुद बिन अला अब्दी पनि थियो। ऊ इसाइ थियो तर पछि मुसलमान भयो र ऊ राम्रो मुसलमान बन्यो।[१]

## २, दौसका टोली

त्यो टोली हिजरी सम्बत ७ सालको शुरुमा मदिना आएको थियो। त्यतिखेर मुहम्मदﷺ खैबरमा हुनुहुन्थ्यो। पछाडिको पृष्ठमा उल्लेख भए अनुसार त्यस कबिलाको नेतृत्व तुफैल बिन अमर दौसीले गरेका थिए। उनी मुहम्मदﷺ मक्कामा हुँदा नै मुसलमान भएका थिए। त्यसपछि उनी आफ्नो मुलुकतिर गएर आफ्नो

१ फतहुल बारी भाग ८

जातिलाई निरन्तर रूपमा इस्लामको निम्तो दिए । तर उनको समुदायले ढिलाई तथा टालमटोल गरिरह्यो । तुफैल पनि उनीहरूबाट निरास भए । उनले मुहम्मदﷺको सेवामा हाजिर भएर दौसमाथि नराम्रो होस् भनी प्रार्थना गर्न आग्रह गरे । तर उहाँले भन्नुभयो : हे अल्लाह दौसलाई मार्गदर्शन देऊ । त्यस प्रार्थनापछि कबिलाका मानिसहरू मुसलमान भए । तुफैलले आफ्नो समुदायबाट ७० वा ८० घरका जमातलाई लिएर हिजरी सम्बत ७ सालको शुरुमा त्यतिबेला मदिना हिजरत गरे जतिबेला मुहम्मदﷺ खैबरमा हुनुहुन्थ्यो । त्यसपछि तुफैल अगाडि गएर खैबरमा उहाँको साथ भए ।

## ३,फरवाह बिन अमर जुजामीको दुत

फरवाह इटालियन फौजका एक अरबी कमाण्डर थिए । उनलाई इटालीले आफ्नो सिमानासँग जोडिएको अरब क्षेत्रको राज्यमन्त्री बनाएको थियो । त्यसको केन्द्र जोर्डन थियो । कार्यक्षेत्र वरिपरिको इलाका थियो । उनले मुताह युद्धमा मुसलमानहरूको युद्धवीरता र युद्धदृढता देखेर इस्लाम स्वीकारेका थिए । एक जना दूत पठाएर मुहम्मदﷺलाई आफु मुसलमान भएको खबर दिए । उपहार स्वरूप एउटा सेतो खच्चर पनि पठाए । इटालियनलाई उनी मुसलमान भएको थाहा भएपछि उनीहरूले उनलाई गिरिफ्तार गरी जेल हाले । त्यसपछि दुईटा कुरामा एउटा कुरा रोज्ने अवसर दिए । कित मुर्तद (धर्मत्यागी) होउन् कि मर्न तयार होउन् । उनले मुर्तद हुनुभन्दा मर्नु नै उचित ठाने । तसर्थ उनीहरूले प्यालिस्टाइनको अफरा नामी एउटा मुहानमा उनलाई फाँसी दिएर उनको घाँटी समेत काटिदिए ।[१]

## ४, सदाअको टोली

त्यो टोली हिजरी सम्बत ८ सालमा मुहम्मदﷺ मदिना फर्केपछि जुअरानाहबाट आएको थियो । कारण मुहम्मदﷺले चार सय मुसलमानको एउटा टोली तयार गरी यमनको त्यो ठाउँलाई जहाँ कबिला सदा बसेको थियो ध्वस्त गर्न पठाउनुभयो । त्यो टोली उपत्यका कनातमा खेमा लगाएर बसेपछि जियाद बिन हारिस सदाअलाई थाहा भयो । उनी दौडेर मुहम्मदﷺको सेवामा आए । उनले भने : म पछाडि रहेका मानिसहरूको प्रतिनिधिको रूपमा हाजिर भएको छु । तसर्थ तपाईं उनीहरूलाई फिर्ता बोलाउनुहोस् । म तपाईंलाई आफ्नो समुदायको जमानत दिन्छु । उहाँले उपत्यका कनातबाट आफ्नो फौजी टोलीलाई फिर्ता बोलाउनुभयो । त्यसपछि जियाद बिन हारिसले आफ्नो समुदायमा गएर उनीहरूलाई ईशदूतको सेवामा हाजिर

१ जादुल मआद भाग ३

हुन प्रेरित गरे । उनले प्रेरित गरेपछि १५ जना व्यक्तिहरू मुहम्मदﷺको सेवामा उपस्थित भए । उनीहरूले इस्लाम स्वीकारे । त्यसपछि आफ्नो समुदायमा गएर इस्लामको प्रचारप्रसार गर्न लागे । यसरी उनीहरूमा इस्लामको विस्तार भयो । हज्जतुल वदाअको अवसरमा एक सय जनाले मुहम्मदﷺको सेवामा हाजिर भएर इस्लाम स्वीकारे ।

## ५, कअब बिन जुहैर बिन अबी सल्माको आगमन

त्यो व्यक्ति एउटा कवि परिवारको दियो थियो । ऊ स्वयम अरबको एक महाकवि पनि थियो । ऊ काफिर थियो । उसले मुहम्मदﷺको खिल्ली उडाउने गर्थ्यो । हाकिमको भनाइ अनुसार ऊ पनि त्यो सूचिमा थियो जसको बारेमा मक्का विजयको अवसरमा मार्ने आदेश दिइएको थियो । अर्थात उनीहरूलाई काबाको पर्दा समातेको अवस्थामा पनि फेला पारियो भने उनीहरूको गर्दन मारिने छ । तर ऊ बच्यो । उता ईशदूत ताइफको युद्धबाट फर्कँदा कअबलाई उसको भाइ बुजैर बिन जुहैरले पत्र लेख्यो : मुहम्मदﷺले मक्कामा ती व्यक्तिहरूलाई हत्या गराउनुभएको छ जसले उहाँको हाँसो गर्ने र उहाँलाई दुःख दिने गरेको थियो । कुरैशका बाँकी बचेका कविहरू जता फर्केका थिए तेतै भागे । यदि तिमीलाई आफ्नो ज्यानको माया छ भने छिटो मुहम्मदﷺकहाँ आऊ । किनभने जोकोही क्षमायाचना गरेर उहाँकहाँ आउँछ उहाँले उसको हत्या गर्नुहुन्न । यदि यो कुरा मन्जुर नभए जहाँ गएर बच्न सक्छौ त्यतै भाग । त्यसपछि दुवैमा अँझै पत्राचार भयो । जसले गर्दा कअब बिन जुहैरको लागि धर्ती साँघुरिए जस्तो भयो । उसलाई आफ्नो ज्यानको खतरा बढ्यो । अन्तत ऊ मदिना फर्क्यो । जुहैनाको एक जना व्यक्तिकहाँ पाहुनाको रूपमा बस्यो । उसैको साथमा उसले विहानको नमाज पढ्यो । नमाजबाट फारिग भएपछि जुहैनीले उसलाई इशारा गर्‍यो । ऊ उठेर मुहम्मदﷺकहाँ आएर बस्यो । आफ्नो हात उहाँको हातमा राख्यो । मुहम्मदﷺले उसलाई चिन्नुहुन्न थियो । उसले भन्यो : हे ईशदूत कअब बिन जुहैर क्षमायाचना गरेर मुसलमान भएको छ । उ तपाईंकहाँ शान्तिको लागि आएको छ । के म उसलाई तपाईंको सेवामा हाजिर गरिदिउँ ? के तपाईंले त्यसलाई स्वीकार्नु हुन्छ ? उहाँले भन्नुभयो : अवश्य । उसले भन्यो :म कअब बिन जुहैर हुँ । त्यो कुरा सुनेर एक जना अन्सारी साथी झम्टे । उसको हत्या गर्न अनुमति चाहे । उहाँले भन्नुभयो : छोडिदेऊ ऊ पुर्वाग्रहलाई त्यागेर आत्मालोचना गर्दै आएको छ ।

त्यसै अवसरमा कअब बिन जुहैरले आफ्नो प्रसिद्ध मुक्त बाचन गरेर सुनाए । अनुवाद छ : मोहम्मदﷺले मलाई धम्की दिएका छन् भन्ने कुरा मलाई बताइएको छ । मलाई ईशदूतले माफ् गरिदिने छन् भन्ने आशा छ । तपाईं एक छिन अडिनुहोस् चुगली गर्नेहरूको कुरा नसुन्नुहोस् । त्यो जातको कसम जसले तपाईंलाई उपदेश र

संदेशले भरिपूर्ण कुरआन उपहार स्वरूप दियो । यद्यपि मेरो बारेमा धेरै कुरा भनिएको छ । तर मैले कुनै अपराध गरेको छैन । म यस्तो ठाउँमा उभिएको छु र यस्तो कुरा सुनिरहेको छु यदि त्यो ठाउँमा हात्ती उभिएर ती कुरालाई सुन्यो भने हात्ती पनि काँप्ने छ । मैले आफ्नो हात निर्धक्क भई त्यो हस्तीको हातमा राखिदिएको छु जसलाई पूर्णरूपमा बदला लिने सामर्थ्य छ । उनको कुरा अर्थपूर्ण हुन्छ । यद्यपि मलाई भनिएकोछ तिमीमाथि यी यी कुराको आरोप छ । तिमीसँग सोधपुछ गरिने छ । उहाँ मेरो नजिक त्यो सिंहभन्दा पनि बढी खतरनाक हुनुहुन्छ जसको बास कुनै विरान उपत्यकामा अवस्थित कुनै बाँजो जमिनमा होस् र जहाँ त्यसभन्दा पहिला पनि कसैको नाश भएको होस् । वास्तवमा मुहम्मदﷺ एउटा दियो हुनुहुन्छ त्यसबाट उज्यालो प्राप्त गर्न सकिन्छ । अल्लाहको तरवारमध्ये एउटा धारिलो तरवार हुनुहुन्छ ।

त्यसपछि कअब बिन जुहैरले कुरैशी मुहाजिरको प्रशंसा गरे । किनभने कअबको आगमनमा मुहाजिरका कुनै पनि व्यक्तिले राम्रो कुराबाहेक अरु केही गरेनन् । तर उनले उनीहरूको प्रशंसा गर्ने क्रममा अन्सारमाथि व्यङग्य गरे । किनभने उनीहरूमध्ये एक जनाले उनको हत्या गर्ने अनुमति मागेको थियो । तसर्थ भने : ती कुरैशी हटिलामोटिला सुन्दर उँट झैं हिड्छन् । तरवार उनीहरूको रक्षामा हुन्छन् । तसर्थ काल पनि बाटो छाडेर भाग्छ ।

तर जब उनी मुसलमान भए र सच्चा मुसलमान भए उनले अन्सारको प्रशंसा गरे । उनीहरूको इज्जतमा जुन अपमान भएको थियो त्यसप्रति क्षमायाचना गरे । तसर्थ उनले आफ्नो कवितामा भने : जसलाई इज्जतको जीवन बाँच्नु छ ऊ सदैव अन्सारको समूहमा बसोस् । उनीहरूमा वंशीय गुण छ । वास्तवमा राम्रा बाउका संतान पनि राम्रा हुन्छन् ।

## ६, उजरहको टोली

त्यो टोली हिजरी सम्बत ९ साल सफर महिनामा आएको थियो । बाह्र जनामा सम्मिलित टोली थियो । उनीहरूमा नुअमानका छोरा हमजा पनि थिए । टोलीसँग तिमीहरू को होउ भनी सोध्दा उनीहरूले भने : हामी बनु उजरह हौं । कुसैका सौतेला भाइ हौं । हामीहरूले कुसैको समर्थन गरेका थियौं । खुजाअ र बनु बकरलाई मक्काबाट निकालेका थियौं । यहाँ हाम्रा नातापाताहरू छन् । त्यो कुरा सुनेर मुहम्मदﷺले उनीहरूको स्वागत गर्नुभयो । सिरिया विजय भएको शुभसूचना दिनुभयो । साथै उनीहरूलाई ज्योतिषी महिलासँग केही कुरा सोध्न निषेध गरिदिनुभयो । उनीहरूलाई गैर इस्लामी तरिकाले जनावर बध गर्नबाट पनि रोक्नुभयो । त्यस टोलीले पनि इस्लाम कबुल गरी केही दिन बसेर फर्क्यो ।

## ७, बेलीको टोली

त्यो टोली हिजरी सम्बत ९ साल रब्बिउल औवलको महिनामा आएको थियो । उनीहरू इस्लाम कबुल गरेर तीन दिनसम्म त्यहाँ बसे । टोलीका नेता अबु जुबैबले सोधे के पाहुना सत्कारमा पनि पुण्य छ ? ईशदूतले भन्नुभयो : अँ । कुनै धनी वा गरिबसँग राम्रो व्यवहार गर्नु पनि सदका हो । उनले पाहुना सत्कारको मियाद कति दिनसम्म रहन्छ भनी सोधे । उहाँले भन्नुभयो तीन दिनसम्म । उनले सोधे कुनै हराएको भेडा हात लाग्यो भने त्यसमा के कानुन लाग्छ ? उहाँले भन्नुभयो त्यो कि तिम्रो हुन्छ कि तिम्रो भाइको कि भेडावालाको । त्यसपछि उनले हराएको उँटको बारेमा सोधे । उहाँले भन्नुभयो : तिमीलाई त्यसको बारेमा के सरोकार ? त्यसलाई छोडिदेऊ । त्यसको हक उसको मालिकलाई मात्र हुन्छ ।

## ८, सकिफको टोली

त्यो टोली हिजरी सम्बत ९ साल रमजान महिनामा ईशदूत तबुकबाट फिर्ता भएपछि आएको थियो । त्यस कबिलामा इस्लाम फैलनुको कारण ईशदूत हिजरी सम्बत ८ सालमा ताइफको युद्धबाट फिर्ता भएर मदिना पुग्नुभन्दा पहिला नै त्यस कबिलाको सरदार उरवाह बिन मस्उदले उहाँको सेवामा उपस्थित भएर इस्लाम स्वीकारी आफ्नो कबिलामा गएर मानिसहरूलाई इस्लामको निम्तो दिएका थिए । उनी आफ्नो समुदायका सरदार थिए । समुदायका मानिसहरूले उनको कुरा मात्र होइन उनलाई आफ्नो छोरी तथा महिलाभन्दा पनि बढी माया गर्थे । त्यसकारण मानिसहरूले उनको कुरा स्वीकार्ने छन् भन्ने उनको सोच थियो । तर मानिसहरूलाई इस्लामको निम्तो दिँदा उनीहरूले तीर वर्षाएर उनको ज्यान लिए । उनको हत्यापछि केही महिना उनीहरू त्यत्तिकै बसे । वरिपरिको क्षेत्रमा बनेका मुसलमानसँग सामना गर्न सकिदैन भन्ने कुरा उनीहरूलाई अनुभूति भयो । तसर्थ उनीहरूले आपसी सल्लाह गरी आफुबाट एक जनालाई मुहम्मदﷺको सेवामा पठाउने निर्णय गरे । त्यसको लागि उनीहरूले अब्द यालिल बिन अमरसँग कुरा गरे तर ऊ त्यस कामको लागि तयार भएन । किनभने उरवाह बिन मस्उदसँग गरे जस्तो व्यवहार उसँग पनि गर्छन कि भन्ने उसलाई डर भयो । त्यसकारण उसले भन्यो : म यो काम त्यतिखेर मात्र गर्न सक्छु जब तपाईंहरूले मेरो साथमा अरू केही मानिसहरू पठाउनु हुन्छ । मानिसहरूले उसको त्यो माग स्वीकार गरी उसको साथमा सहाबीहरूबाट दुई जना र कबिला बनी मालिकबाट तीन जना व्यक्ति साथ गरिदिए । यसरी जम्मा ६ जनाको टोली तयार भयो । त्यस टोलीमा उस्मान बिन अबील आस सक्फी पनि थिए । उनी सबैभन्दा कम उमेरका थिए ।

उनीहरू मुहम्मदﷺको सेवामा पुगेपछि मुहम्मदﷺले उनीहरूले कुरआन सुनुन् र साथीहरूले नमाज पढेको हेरुन् भन्ने हेतुले उनीहरूको लागि मस्जिदको एक

कुनामा एउटा कोठा जस्तो बनाइदिनुभयो । अनि उनीहरू मुहम्मदﷺको सेवामा आउजाउ गर्न थाले र ईशदूतले उनीहरूलाई इस्लामको निम्तो दिइरहनुभयो । अन्तिममा उनीहरूको सरदारले ईशदूतसँग उहाँ र सकिफ कबिलाबीच भएको सम्झौतापत्र लेखिदिन माग गर्दै त्यसमा बलात्तकार, रक्सी सेवन र व्याज खाने अनुमति होस् साथै उसको भगवान लातलाई यथास्थितिमा राखियोस्, उनीहरूबाट नमाज माफ गरियोस् र उनीहरूको मूर्ति स्वयम उनीहरूको हातबाट नफुटाइयोस् भन्ने माग राख्यो । ईशदूतले उनीहरूको कुनै पनि माग स्वीकार्नु भएन । उनीहरूले एकान्तमा परामर्श गरे तर ईशदूतको सामुन्ने आत्मसमर्पण गर्नुबाहेक कुनै विकल्प देखेनन् । अन्तत उनीहरूले त्यही गरे र आफुहरूलाई ईशदूतको सामुन्ने अत्मसमर्पण गरी इस्लाम स्वीकारे । तर उनीहरूले लात नामक मुर्तिलाई तोड्ने काम ईशदूतले नै गरुन् भन्ने सर्त राखे । सकिफ कबिलाले त्यसलाई आफ्नो हातले तोड्ने छैनन् । उहाँले त्यो सर्त स्वीकार्दै एउटा कागज लेखिदिनुभयो र उस्मान बिन अबील आसलाई उनीहरूको अध्यक्ष बनाई पठाउनुभयो । किनभने उनले इस्लाम धर्म बुझ्न र कुरआनको शिक्षा ग्रहण गर्नमा सबैभन्दा बढी चासो देखाएका थिए । टोलीका सबै सदस्य हरेक दिन विहान मुहम्मदﷺको सेवामा उपस्थित हुन्थे र उस्मान बिन अबिल आसलाई कोठामा नै छाडिदिन्थे । दिउँसो टोली फर्केर आराम गर्न लाग्दा उस्मान बिन अबिल आस मुहम्मदﷺको सेवामा हाजिर हुन्थे र कुरआन पढ्थे र इस्लामको बारेमा ज्ञान हासिल  गर्ने गर्थे । ईशदूत आराम गरिरहेको बेला उनी कुरआन पढ्न अबु बकरकहाँ जान्थे । उस्मान बिन अबिल आसको गवर्नरको जिम्मेवारी पनि सकुशल रह्यो । ईशदूतको देहान्तपश्चात अबु बकरको पालामा मानिसहरूमा इस्लाम छाड्ने लहर चलेपछि सकिफले पनि इस्लाम छाड्ने सोच बनाउँदा उस्मान बिन अबिल आसले भनेका थिए : हे सकिफका मानिसहरू हो , तिमीहरूले सबैभन्दा अन्तिममा इस्लाम कबुल गरेका होउ त्यसकारण इस्लाम छाड्ने काम सबैभन्दा पहिला नगर । त्यो कुरा सुनेर उनीहरू इस्लाम त्याग गर्नबाट रोकिए र इस्लाममा दृढ रहे ।

जे होस्, टोलीले आफ्नो समुदायमा आएर वास्तविकता लुकायो । समुदायको सामुन्ने लडाइँ, काटमारको कुरा चलायो । उनीहरूले निरास र दुखित जस्तो भएर भने : ईशदूतले इस्लाम स्वीकार्ने, बलतकार त्याग्ने, र व्याज छोड्ने माग गर्नु पर्छ नत्र भीषण लडाइँ हुन्छ भन्नु भएको छ । त्यो कुरा सुनेर सकिफमा अज्ञानताको घमण्ड प्रवल रहेको कारण तीन दिनसम्म उनीहरू लडाइँको कुरा सोच्दै रहे । तर अल्लाहले उनीहरूको मनमा डर सृजना गरिदिए । उनीहरूले टोलीसँग फेरि ईशदूतकहाँ गएर उहाँको माग स्वीकार छ भनी आग्रह गर्न भने । त्यसपछि टोलीले

वास्तविकता खोल्यो जुन कुरामा सम्झौता भएको थियो ती सबै कुराहरू खोल्यो । कबिला सकिफले उतिखेरै इस्लाम स्वीकार्‍यो ।

उता ईशदूतले लात नामक मूर्तिलाई तोड्न खालिद बिन वलिदको नेतृत्वमा केही साथीहरूको एउटा सानो टोली पठाउनुभयो । मुगिराह बिन शुअबा उठेर कड्केर साथीहरूलाई भने : म तपाईंहरूसँग सकिफप्रति हाँस्यव्यंग्य गर्दछु । त्यसपछि लातमाथि झम्टेर त्यसलाई भत्काउँदै खुट्टा ठटाउन थाले । त्यो बनावटी दृश्य देखेर ताइफवासीहरूले डराउँदै उनीहरूले भन्न थाले : अल्लाहले मुगिराहलाई नाश गरून् । उसलाई देवीले मारिदिएको छ । त्यो कुरा सुनेर झटपट उठेर मुगिराहले भने : अल्लाहले तिमीहरूको नाश गरून् । यो त ढुंगा र माटोको तमाशा हो । त्यसपछि उनले ढोकामा हानेर त्यसलाई फुटाए । त्यसपछि सबैभन्दा अग्लो गारोमा चढे । उनको साथमा केही अरू साथीहरू पनि चढे । त्यसलाई फुटाएर माटोमा मिसाए । त्यसको निशान पनि रहेन । त्यसको गहना र लुगा खोले । त्यो दृश्य देखेर सकिफका मानिसहरू डराए । खालिद बिन वलिद गहना र लुगा लिएर आफ्नो समूहतर्फ आए । ईशदूतले त्यहाँबाट प्राप्त सबै धनमाल त्यसै दिन बाँडेर आफुलाई गरिएको सहयोग र इस्लामलाई दिइएको सम्मानप्रति अल्लाहको प्रशंसा गरे ।[१]

## ९,यमनका राजाको पत्र

ईशदूत तबुकबाट फर्केपछि उहाँलाई हुमैरका राजा जस्तै हारिस बिन अब्द कुलाल,नुऐम बिन अब्द कुलाल, नुमान बिन कै जिरइन,हमदान र मुआफिरको पत्र प्राप्त भयो । पत्र लिएर आउने व्यक्ति मालिक बिन मुर्रह रेहावी थियो । ती राजाहरूले आफुहरूले इस्लाम स्वीकार्ने र बहुदेववादीहरूबाट अलग हुने खबर दिएर उसलाई पठाएका थिए । ईशदूतले जवाफमा उनीहरूलाई मोमिनहरूको हक अधिकार र कर्तव्यलाई व्याख्या गर्दै पत्र लेख्नुभयो । उहाँले त्यस पत्रमा सम्झौता गर्नेहरूको बारेमा अल्लाह र ईशदूत जिम्मेवार हुने पनि उल्लेख गर्नुभएको थियो यदि उनीहरूले तोकिएको कर भुक्तानी गर्ने सर्त माने भने । त्यो बाहेक ईशदूतले केही साथीहरूलाई यमनतर्फ पठाउनुभयो र मुआज बिन जबललाई उनीहरूको प्रतिनिधि चयन गर्नुभयो ।

## १०, हमदानको टोली

त्यो टोली हिजरी सम्बत ९ सालमा ईशदूत तबुकबाट फर्केपछि उहाँको सेवामा हाजिर भएको थियो । ईशदूतले उनीहरूले माग गरेको सबै कुरा स्वीकार गर्दै एउटा कागज लेखिदिनुभयो । मालिक बिन नमतलाई उनीहरूको प्रतिनिधि बनाइदिनुभयो साथै उनको समुदायमा जुन मानिसहरू मुसलमान भएका थिए

---

१ जादुल मआद भाग ३, इब्ने हेशाम भाग २

उनीहरूको लागि उनलाई गवर्नर पनि बनाउनुभएको थियो । बाँकी रहेका मानिसहरूलाई इस्लामको निम्तो दिनको लागि खालिद बिन वलिदलाई पठाउनुभयो । उनी ६ महिनासम्म त्यहाँ बसेर मानिसहरूलाई इस्लामको निम्तो दिए तर कसैले इस्लाम स्वीकारेन । त्यसपछि खालीदलाई फिर्ता हुन भनी उहाँले अलीलाई पठाउनुभयो । अली हमदानकहाँ गएर ईशदूतको पत्र पढेर सुनाएर उनीहरूलाई इस्लामको निम्तो दिएपछि उनीहरू सबैले इस्लाम स्वीकारे । अलीले ईशदूतकहाँ उनीहरू इस्लाममा प्रवेश गरेको शुभसूचना पठाए । उहाँले पत्र पढेपछि सज्दा गर्नुभयो । टाउको उठाएर हमदानमाथि शान्ति होस् भनेर भन्नुभयो ।

## ११, बनी फजारहको टोली

त्यो टोली पनि हिजरी सम्बत ९ सालमा ईशदूत तबुकबाट फर्केपछि उहाँको सेवामा हाजिर भएको थियो । त्यस टोलीमा दश जनाभन्दा केही बढी व्यक्तिहरू थिए । सबैले इस्लाम कबुल गरिसकेका थिए । मानिसहरूले आफ्नो क्षेत्रमा परेको खडेरी बारे ईशदूतसँग भने । ईशदूतले मञ्चमा आएर दुवै हात उठाई पानीको लागि प्रार्थना गर्नुभयो । उहाँले भन्नुभयो : हे अल्लाह , आफ्नो मुलुक र आफ्नो चौपायाहरूलाई पानी देऊ, आफनो कृपा गरिदेऊ , आफ्नो मरुभूमिलाई जीवित गरिदेऊ । हे अल्लाह, हामीलाई यस्तो वर्षा वर्षाइदेऊ जसले हाम्रो हित गरोस् , हामीलाई राहत दियोस् , रमणीय होस् , चारैतिर फैलिएको होस् छिटो आओस् लामो समयसम्म रहोस् , लाभदायक होस् , हानिकार नहोस् । हे अल्लाह कृपाको वर्षा होस् प्रकोपीय नहोस् । न त नाश गर्ने खालको होस् न डुबाउने खालको होस् न हामीलाई मेटाउने खालको होस् । हे अल्लाह हामीलाई वर्षाबाट जलमग्न गरिदेऊ, शत्रुविरुद्ध हाम्रो मदत गर ।[१]

## १२, नजरानको टोली

नजरान मक्काबाट यमनतर्फ सातौं गन्तव्यमा अवस्थित ७३ वस्तीमा सम्मिलित एउटा ठूलो क्षेत्र थियो । तीव्रगतिको सवारीले एक दिनमा पूरा इलाका घुम्न सकिन्थ्यो ।[२] त्यस क्षेत्रमा एक लाख लडाकुहरू थिए । उनीहरू सबै क्रिश्चियन थिए ।

नजरानको त्यो टोली हिजरी सम्बत ९ सालमा आयो । उनीहरू ६० जनाको समूहमा आएका थिए । २४ जना ठूलाबडा व्यक्ति थिए । जसमध्ये तीन जनालाई नजरानको अगुवाई तथा नेतृत्व हासिल थियो । एक जना आकिब थियो उसको

१ जादुल मआद भाग ३

२ फतहुलबारी भाग ८

जिम्मामा राज्यसत्ता थियो । उसको नाम अब्दुल मसिह थियो । दोस्रो सरदार संस्कृति र राजनीतिको जिम्मेवार थियो । उसको नाम ऐहम वा शरहबिल थियो । तेस्रो व्यक्ति अस्कफ थियो । ऊ धर्मगुरु थियो । उसको नाम अबुल हारिसा बिन अलकमा थियो ।

त्यो टोलीले मदिना पुगेर ईशदूतसँग भेट गऱ्यो । उहाँले उनीहरूसँग केही प्रश्नहरू गर्नुभयो । उनीहरूले पनि उहाँसँग केही प्रश्न सोधे । त्यसपछि उहाँले उनीहरूलाई इस्लाम बारे बताउनुभयो । कुरआनका श्लोकहरू पढेर सुनाउनुभयो । तर उनीहरूले इस्लाम स्वीकारेनन् । उनीहरूले मसिहको बारेमा तपाईं के भन्नुहुन्छ भनी ईशदूतलाई सोधे । जवाफको लागि ईशदूत दिनभरी ध्यानमा बस्नुभयो अन्तिममा कुरआनको श्लोक अवतरण भयो :

إِنَّ مَثَلَ عِيسَىٰ عِنْدَ اللَّهِ كَمَثَلِ آدَمَ ۖ خَلَقَهُ مِنْ تُرَابٍ ثُمَّ قَالَ لَهُ كُنْ فَيَكُونُ ‎ الْحَقُّ مِنْ رَبِّكَ فَلَا تَكُنْ مِنَ الْمُمْتَرِينَ ‎ فَمَنْ حَاجَّكَ فِيهِ مِنْ بَعْدِ مَا جَاءَكَ مِنَ الْعِلْمِ فَقُلْ تَعَالَوْا نَدْعُ أَبْنَاءَنَا وَأَبْنَاءَكُمْ وَنِسَاءَنَا وَنِسَاءَكُمْ وَأَنْفُسَنَا وَأَنْفُسَكُمْ ثُمَّ نَبْتَهِلْ فَنَجْعَلْ لَعْنَتَ اللَّهِ عَلَى الْكَاذِبِينَ

(آل عمران:٥٩ – ٦١)

निसंदेह इसा अल्लाहको नजरमा आदम सरह हुन् । उसले उनलाई माटोबाट बनाएर भने, बन उनी मानव बने । तिम्रो पालनकर्ताको तर्फबाट सत्य यही नै हो । तसर्थ शंका तथा संकोच गर्नेहरूमध्ये नबन । संदेश आइसकेपछि यदि कसैले यस बारे विवाद गर्छ भने भनिदेऊ, आऊ हामी र तिमी आआफ्नो छोरा, आफ्नी श्रीमती र स्वयम आफुलाई बोलाऔं त्यसपछि प्रार्थना गरौं र झुट्टाहरूमाथि अल्लाहको धिक्कार होस् भनौं । (आले इमरान:५९,६०,६१)

विहान भएपछि मुहम्मदﷺले कुरआनको यिनै श्लोकको आधारमा उनीहरूलाई इसाको बारेमा आफ्नो मनाइद्वारा ज्ञात गराउनुभयो । त्यसपछि उनीहरूलाई दिनभरी त्यस बारे सोचविचार गर्ने मौका दिनुभयो । तर इसाको बारेमा उहाँको कुरा मान्न उनीहरूले अस्वीकार गरे । फेरि अर्को दिन विहान उनीहरूले इसाको बारेमा उहाँको कुरा मान्न र इस्लाम स्वीकार्न इन्कार गरिसक्दा पनि ईशदूतले उनीहरूलाई एकअर्काको आलोचना गर्न निम्तो दिनुभयो । हसन र हुसैन समेत एउटा धोती बाँधेर आए । पछाडिपछाडि फातिमा आउँदै थिइन् । टोलीले ईशदूतलाई एकदमै तयार भएको देखेपछि एकान्तमा गएर कुराकानी गर्न थाले । आकिब र सैयद दुवैले एकअर्कासँग भने : हेर आलोचना नगर । यदि उनी वास्तवमा ईशदूत हुन् र हामीले उनलाई सराप्यौं भने हामी र हाम्रा सन्तान कसै सफल हुन सक्दैनौं । संसारमा विनाश हुनबाट हाम्रो एउटा रौं तथा नंग पनि बच्न सक्दैन । अन्तिममा ईशदूतलाई नै आफ्नो बारेमा न्यायधिश बनाउने निर्णय भयो । तसर्थ उनीहरूले उहाँकहाँ आएर भने : हामी तपाईंको जे माग छ त्यसलाई स्वीकार्न तयार छौं । उनीहरूको त्यस प्रस्तावमा ईशदूतले उनीहरूसँग कर लिने कबुल गर्नुभयो र दुई हजार जोडा कपडा

लिने सम्झौता गर्नुभयो । एक हजार रजबको महिनामा र एक हजार सफरको महिनामा दिने गरी सम्झौता भयो । साथै प्रत्येक जोडा कपडासँगै एक सय बाउन्न ग्राम सुन पनि दिनु पर्ने कुरा तय भयो । त्यसको बदलामा उहाँले उनीहरूलाई अल्लाह र आफ्नो जिम्मामा राख्नुभयो । धर्मको बारेमा पूर्ण स्वतन्त्रता प्रदान गर्नुभयो । त्यस बारे उहाँले उनीहरूको निम्ति एउटा कागज पनि बनाइदिनुभयो । उनीहरूले आफु भएको ठाउँमा एक जना इमानदार व्यक्ति पठाइदिन उहाँसँग अनुरोध गरे । उहाँले सम्झौतामा तय गरिएको माल संकलन गर्न समुदायका इमानदार व्यक्ति अबु उबैदाह बिन जर्राहलाई पठाउनुभयो ।

त्यसपछि उनीहरूकहाँ इस्लाम विस्तार हुन थाल्यो । जीवनीकारहरूको भनाइअनुसार सैयद र आकिब आफ्नो क्षेत्रतिर फर्केर गएपछि मुसलमान भएका थिए । उनीहरूबाट दान तथा कर संकलन गर्न अलीलाई पठाउनुभयो । ज्ञात रहोस् दान अर्थात सदका केवल मुसलमानसँग लिइन्छ । [१]

## १३,बनी हनिफाको टोली

त्यो टोली हिजरी सम्बत ९ सालमा मदिना आएको थियो । त्यस टोलीमा मुसैलेमा कज्जाब समेत ७० जना व्यक्ति थिए ।[२] मुसैलेमाको वंशगत नाम यस प्रकार छ : मुसैलेमा बिन सुमामह बिन कबिर बिन हबिब बिन हारिस । त्यो टोली आएर एक जना अन्सारी साथीकहाँ बस्यो । त्यसपछि ईशदूतको सेवामा उपस्थित भएर इस्लाम कबुल गऱ्यो । तर मुसैलेमा कज्जाबको बारेमा मतभेद छ । सम्पूर्ण भनाइलाई नियालेर हेर्ने हो भने उसले घमण्ड तथा अहंकार देखाएको प्रमाणित हुन्छ । टोलीका बाँकी मानिसहरूसँग ईशदूतकहाँ ऊ हाजिर भएन । ईशदूतले सर्वप्रथम नम्र तरिकाले कुराकानी गर्नुका साथै राम्रो व्यवहारद्वारा उसको मन जित्न चाहानुभयो । जब उसमा त्यस किसिमको व्यवहारबाट पनि कुनै असर देखिएन अनि उहाँले उसमा कुनै विकृति छ भन्ने कुरा अड्कल गर्नुभयो ।

यसअघि उहाँले सपनामा आफ्नो अगाडि संसारको सम्पूर्ण धनसम्पत्ति ल्याएर राखिएको देख्नुभएको थियो । साथै सुनका दुई वटा बाला उहाँको हातमा परेको पनि देख्नुभयो । उहाँ ती दुई वटा कुराबाट अति दुखित हुनुभयो । तसर्थ उहाँलाई ईशवाणीद्वारा ती दुई वटा कुरा फुकिदिन आदेश भयो र उहाँले फुकेपछि ती दुईटा कुरा उडेर गए । सपनाको विश्लेषण गर्दै उहाँले भन्नुभयो उहाँपछि दुई जना झुटा व्यक्तिहरू निस्कने छन् । फलस्वरूप मुसैलेमाले घमण्ड गर्दै इनकार गरेपछि भनेको

१ फतहुलबारी भाग ८, जादुल मआद भाग ३, नजरान टोलीको बारेमा विवाद छ तर मेरो नजरमा मैले माथि उल्लेख गरेको कुरा नै सही छ ।
२ फतहुलबारी भाग ८,

थियो यदि मुहम्मदले आफुपछि सत्ता मलाई दियो भने म उसको अनुकरण गर्नेछु । त्यसपछि मुहम्मदﷺ उसकहाँ जानुभयो । उहाँको हातमा खजुरको एउटा छडी थियो । उहाँको साथमा उहाँका प्रवक्ता सावित बिन कैस बिन शम्मास पनि थिए । मुसैलेमा आफ्नो साथीहरूको साथमा थियो । उहाँले उसको अगाडि गएर कुराकानी गर्नुभयो । उसले भन्यो : सत्ताको मामिलामा तपाइँ स्वतन्त्र हुनुहुन्छ तर तपाइँपछि यसको जिम्मेवारी हामीलाई दिनुपर्छ । उहाँले खजुरको छडीतिर इशारा गर्दै भन्नुभयो यदि तिमीले यो टुक्रा पनि माग्यौ भने म तिमीलाई दिन सक्दिनँ र तिमी अल्लाहले गरेको निर्णयभन्दा बाहिर जान पनि सक्दैनौ । यदि तिमीले पिठ्यूँ देखायौ भने अल्लाहले तिमीलाई नाश गरिदिने छ । अल्लाहको कसम मैले तिमीलाई त्यो व्यक्ति ठान्दछु जसको बारेमा मलाई सपनामा देखाइएको थियो । यिनी सावित बिन कैस हुन् र उनले मेरो तर्फबाट तिमीलाई जवाफ दिने छन् भनी उहाँ फर्कनुभयो ।[१]

आखिरकार त्यही भयो जे ईशदूतले सोच्नु भएको थियो । अर्थात मुसैलेमा कज्जाब यमामहतिर गएर पहिला आफ्नो बारेमा सोच्यो अनि उसले ईशदूतत्वको पदमा आफुलाई पनि सामिल गरिएको दावी गऱ्यो । तसर्थ उसले आफु ईशदूत भएको दावी गर्दै केही मन्त्र गड्न थाल्यो । आफ्नो समुदायमा बलात्कार र लागूपदार्थ जायज गऱ्यो । ती सम्पूर्ण कुरा गर्नुका साथसाथै मुहम्मदﷺ ईशदूत हुन् भनी गवाही पनि दिन्थ्यो । उसकै कारणले उसको समुदाय विकारमा फसेर उसको अनुयायी एवं एकोहोरो भयो । फलस्वरूप समस्या झन जटिल बन्दै गयो । उसको यति सम्मान भयो कि उसलाई यमामहमा रहमान अर्थात कृपालु ईश्वर भनियो । त्यसपछि उसले मुहम्मदﷺलाई एउटा पत्र लेख्यो : मलाई तपाइँको पदमा साझेदार बनाइएको छ । तसर्थ आधा सत्ता हाम्रो र आधा कुरैशको लागि हुनु पर्छ । ईशदूतले प्रतिउत्तरमा लेख्नुभयो : धर्ती अल्लाहको हो । उसले जसलाई चाहन्छ उसलाई त्यसको उत्तराधिकारी बनाउँछ । राम्रो प्रतिफल ईशभय राख्नेहरू कै लागि छ ।[२]

इब्ने मस्उदमार्फत वर्णन गरिएको छः नौवाहाको छोरा र उसालको छोरा मुसैलेमाको दूत बनेर ईशदूतकहाँ आए । ईशदूतले उनीहरूसँग भन्नुभयो के तिमीहरूले मलाई ईशदूत मान्छौ ? उनीहरूले भने हामीले मुसैलेमालाई ईशदूत मानेका छौं । ईशदूतले भन्नुभयो : म अल्लाह र उसको दूतमा आस्था राख्दछु । यदि मैले राजदूतको हत्या गर्ने गरेको भए तिमीहरूको हत्या गर्ने थिएँ ।[३]

१ सही बुखारी भाग २, फतहुलबारी भाग ८
२ जादुल मआद भाग ३,
3 मुस्नद अहमद मिश्कात भाग २

मुसैलेमा कज्जाबले हिजरी सम्बत १० सालमा आफु ईशदूत भएको दावी गरेको थियो र हिजरी सम्बत १२ साल रब्बिअल औवलको महिनामा अबु बकरको राज्यकालमा उसको हत्या गरियो । उसको हत्यारा एक जना वहशी थियो । हमजाको हत्या पनि उसैले गरेको थियो ।

ईशदूतत्वको दावी गर्ने एक जना त्यही थियो । जसको परिणाम पनि त्यस्तै भयो । ईशदूतत्वको दावी गर्ने दोस्रो व्यक्ति अस्वद अन्सी थियो । उसले यमनमा विकारको संजाल फिजाएको थियो । ईशदूतको निधन हुनुभन्दा एक दिन एक रातअघि एक जना फैरुज नामक सहाबीले उसको हत्या गरेका थिए । त्यसपछि उसको बारेमा अल्लाहको तर्फबाट मुहम्मदﷺमाथि वाणी अवतरण भयो । उहाँले साथीहरूलाई उसको हत्या बारे जानकारी दिनुभयो । त्यसपछि यमनबाट अबु बकरकहाँ खबर आयो । [१]

## १४, बनी आमिर बिन सअसआहको टोली

त्यस टोलीमा अल्लाहको शत्रु आमिर बिन तुफैल, एक जना सहाबी लबिदको सौतेलो भाइ अरबद बिन कैस, खालिद बिन जाफर र जब्बार बिन अस्लम सामिल थिए । उनीहरू सबै आफ्नो समुदायका नायक एवं महापिचाश थिए । आमिर बिन तुफैल त्यो व्यक्ति हो जसले बिअरे मउना भन्ने ठाउँमा ७० जना सहाबीहरूलाई सहिद गरेको थियो । उनीहरूले मदिना आउने सोच बनाएपछि आमिर र अरबदले ईशदूतलाई धोका दिएर असामयिक हत्या गर्ने षड्यन्त्र पनि गरेका थिए । तसर्थ टोली मदिना पुगेपछि आमिरले ईशदूतसँग कुराकानी गर्न थाल्यो । अरबदर ईशदूतको पछाडि गयो । तरवारको खोलबाट एक वित्ता जति तरवार बाहिर निकालेको थियो । तर त्यसपछि अल्लाहले उसको हात रोकिदिए । उसले तरवार खोलबाट निकाल्न सकेन । अल्लाहले आफ्नो दूतलाई बचाए । ईशदूतले ती दुवैको हकमा नराम्रो होस् भनी प्रार्थना गर्नुभयो । परिणाम स्वरूप उनीहरू फर्कने क्रममा अल्लाहले अरबद र उसको उँटमाथि चट्याङ्ग वर्षाए । त्यसमा अरबद जलेर मर्‍यो । उता आमिर एक जना कलाकार महिलाकहाँ आयो । त्यसै अवधिमा उसको घाँटीमा गिल्टो निस्क्यो । त्यसपछि ऊ छिः उँटको जस्तो गिल्टो भन्दै त्यसैमय छट्पटाउँदै मर्‍यो । उसको मृत्यु एक जना कलाकार महिलाको घरमा भएको थियो ।

सही बुखारी नामक हदिसको किताबमा वर्णन गरिएको छ : आमिरले ईशदूतकहाँ आएर भन्यो : मैले तपाईंलाई तीन वटा कुरा रोज्ने अधिकार दिन्छु । १, तपाईंको निम्ति उपत्यकाका वासिन्दा र मेरो लागि वस्तीका वासिन्दा हुनु पर्छ । २ कि तपाईंपछि म राज्यको उत्तराधिकारी हुनु पर्छ । ३, नत्र गत्फानलाई एक हजार घोडा र घोडीका साथ आक्रमण गर्न आदेश दिन्छु । त्यसपछि ऊ एक महिलाको घरमा प्लेग रोगमा ग्रस्त भयो । उसले निरास हुँदै भन्यो : धिक्कार छ , उँटको जस्तै गिल्टो

---

१ फतहुलबारी भाग ८

निस्क्यो ? त्यो पनि फलानो महिलाको घरमा ? मेरो घोडा म भएको ठाउँमा ल्याओ । ऊ त्यसमा सवार भयो र त्यसैमा मऱ्यो ।

## १५,तजीबको टोली

ती मानिसहरू आफ्नो समुदायका गरिबहरूमा बाँडेर रहेको दान अर्थात सदका लिएर मदिना आएका थिए । टोलीमा १३ जना थिए । उनीहरूले कुरआन र हदिस सोध्ने र सिक्ने गर्थे । उनीहरूले ईशदूतसँग केही कुराहरू सोधे र उहाँले उनीहरूलाई त्यसको जवाफ लेखेर दिनुभयो । उनीहरू मदिनामा धेरै समयसम्म बसेनन् । ईशदूतले उनीहरूलाई उपहार प्रदान गरेकाले उनीहरूले एक जना युवकलाई पनि पठाए । उनी पछाडि डेरामा छुटेका थिए । उनले ईशदूतकहाँ हाजिर भएर भने , हे ईशदूत म केवल तपाईंको आशिर्वाद लिन आएको हुँ । तपाईं मेरो लागि अल्लाहसँग अल्लाहले ममाथि आफ्नो कृपा गरोस् र इस्लामको यो धन मेरो मनमा बसालोस भनी प्रार्थना गरिदिनु होस् । उहाँले उनको लागि प्रार्थना गर्नुभयो । फलस्वरूप उनी सबैभन्दा धैर्यशील व्यक्तिहरूमध्ये एक भए । मानिसहरूमा इस्लाम त्याग्ने लहर चल्दा पनि उनी इस्लाममा नै दृढ रहे साथै आफ्नो समुदायलाई इस्लामको उपदेश सुनाए । फलस्वरूप उनीहरू पनि इस्लाममा नै कायम रहे । त्यसपछि त्यस टोलीले हिजरी सम्बत १० साल हज्जतुल वदाको अवसरमा ईशदूतसँग दोस्रो पटक भेट गऱ्यो ।

## १६,तईको टोली

त्यस टोलीमा अरबका वीर योद्धा जैदुल खैल पनि थिए । उनीहरूले ईशदूतसँग कुराकानी गर्दा उहाँले उनीहरूलाई इस्लामको बारेमा बताउनुभयो । उनीहरूले पनि इस्लाम स्वीकारे । उनीहरू सच्चा पक्का मुसलमान बने । ईशदूतले जैदको प्रशंसा गर्दै भन्नुभयो : अरबका जुन व्यक्तिहरूको प्रशंसा गरिएको थियो त्यो व्यक्ति मकहाँ आउँदा उसलाई मैले नाम चलेभन्दा कमै पाएँ । तर जैदमा उनको नाम चलेभन्दा पनि बढी विशेषताहरू छन् । त्यसपछि उहाँले उनको नाम जैदुल खैर राखिदिनुभयो ।

यसरी हिजरी सम्बत ९ र १० सालमा टोलीहरू आउने क्रम जारी रह्यो । जीवनीकारहरूले ती टोलीहरूमा यमन, अजद, कुजाअका बनी सअद हुजैम, बनी आमिर बिन कैस, बनी असद, बहरा, खौलान, महारिब, बनी हारिस बिन कअब, गामिद,बनी मुस्तफिक, सलामान, बनी अबस, मुजैनाह, मुराद,जुबैद,किन्दह,जिमुर्रह,बनी गस्सान, ईश र नखअ आदिका नामहरू उल्लेख गरेका छन् । नखअको टोली आखिरी टोली थियो जो मोहर्रम महिनाको मध्यतिर आएको थियो । उनीहरू दुई सय जनाको समूहमा थिए । बाँकी अन्य टोलीहरूको आगमन हिजरी सम्बत ९ र १० सालमा भएको थियो । केही टोलीहरू ढिलो गरी ११ हिजरीसम्म आएका थिए ।

टोलीको निरन्तर आगमनले इस्लामी आह्वानको विस्तार कति लोकप्रिय भएको थियो भन्ने कुरा छर्लङ्ग हुन्छ । अरबीहरूले मदिनालाई अति सम्मानित दृष्टिले हेर्थे भन्ने कुरा पनि प्रमाणित हुन्छ । त्यसको अगाडि आत्मसमर्पण गर्नुबाहेक कुनै विकल्प

देख्दैनन् थिए । वास्तवमा मदिना अरब टापुको राजधानी बनिसकेको थियो । त्यहाँबाट नजर हटाउनु उनीहरूको लागि असम्भवै थियो । तर उनीहरू सबैको मनमा इस्लामले नै बास लिएको थियो भन्न सकिदैन । किनभने उनीहरूमा अधिकांश पाखेहरू थिए । उनीहरु केवल आफ्नो सरदारको आदेशमा मुसलामन बनेका थिए । उनीहरूमा हत्याहिंसाको जुन धारणाले जरो गाडेको थियो उनीहरू त्यसबाट अँझै पनि पखालिएका थिएनन् । उनीहरूलाई इस्लामी शिक्षाले अँझै पूर्ण रूपमा सभ्य बनाउन सकेको थिएन । तसर्थ कुरआनको सुरह तोबामा उनीहरूका केही व्यक्तिहरूको विशेषता यसरी दर्शाइएको छ :

الْأَعْرَابُ أَشَدُّ كُفْرًا وَنِفَاقًا وَأَجْدَرُ أَلَّا يَعْلَمُوا حُدُودَ مَا أَنْزَلَ اللَّهُ عَلَىٰ رَسُولِهِ ۗ وَاللَّهُ عَلِيمٌ حَكِيمٌ
وَمِنَ الْأَعْرَابِ مَنْ يَتَّخِذُ مَا يُنْفِقُ مَغْرَمًا وَيَتَرَبَّصُ بِكُمُ الدَّوَائِرَ ۚ عَلَيْهِمْ دَائِرَةُ السَّوْءِ ۗ وَاللَّهُ
سَمِيعٌ عَلِيمٌ (التوبة: ٩٧ – ٩٨)

अरबी पाखेहरू कुफ्र तथा नफाकमा कट्टर छन् । अल्लाहले आफ्नो दूतमाथि अवतरण गरेको कानूनी सीमाहरू नजान्नु नै उनीहरूको लागि उपयुक्त हुनेछ र अल्लाह सर्वज्ञाता र तत्वदर्शी छन् । अरबी पाखेहरूमध्ये केही यस्ता पनि छन् जसले जति खर्च गर्छन त्यसलाई जरिमाना ठान्दछन् । तिमीहरूका आपतविपतको प्रतीक्षा गर्छन् । आपतविपत उनीहरुमाथि आउने छ र अल्लाह सुन्ने र जान्नेवाला छ । (अत्तौबा:९७,९८)

एक अर्को किसिमका मानिसहरूको प्रशंसा गर्दै भनिएको :

وَمِنَ الْأَعْرَابِ مَنْ يُؤْمِنُ بِاللَّهِ وَالْيَوْمِ الْآخِرِ وَيَتَّخِذُ مَا يُنْفِقُ قُرُبَاتٍ عِنْدَ اللَّهِ وَصَلَوَاتِ
الرَّسُولِ ۚ أَلَا إِنَّهَا قُرْبَةٌ لَهُمْ ۚ سَيُدْخِلُهُمُ اللَّهُ فِي رَحْمَتِهِ ۗ إِنَّ اللَّهَ غَفُورٌ رَحِيمٌ (التوبة: ٩٩ )

केही अरबीहरू अल्लाह र महाप्रलोकमाथि आस्था राख्दछन् । उनीहरू जे खर्च गर्छन् त्यसलाई अल्लाहको सामीप्य र ईशदूतको आशिर्वाद प्राप्त गर्ने माध्यम ठान्दछन् । निसंदेह निकटमा नै अल्लाहले उनीहरूमाथि आफ्नो कृपादृष्टि गर्ने छन् । निसंदेह अल्लाह क्षमावान तथा दयालु छन् । (अत्तौबा:९९)

मक्का, मदिना, यमन र बहरैनका अधिकांश नागरिकहरूको बारेमा भन्नु पर्दा उनीहरू इस्लाममा दृढ थिए । महान सहाबा तथा नायकहरू उनीहरूबाट नै मुसलमान भएका थिए ।[१]



---

१ यो कुरा खजरमीले मुहाजिरात भाग १ मा भनेका छन् । सही बुखारी भाग १, इब्ने हेशाम भाग २, जादुल मआद भाग ३, फतहुलबारी भाग ८

# इस्लामी आह्वान, सफलता र प्रभाव

हामी मुहम्मदﷺको पवित्र जीवनको अन्तिम चरणलाई वर्णन गर्न गइरहेका छौं । तर त्यसलाई वर्णन गर्नुभन्दा पहिला अलिकति कलम रोकेर उहाँको त्यो महान कार्यलाई संक्षिप्त रूपमा बयान गर्न उपयुक्त होला जुन उहाँको जीवनको सार हो । जसको आधारमा उहाँलाई सम्पूर्ण ईशदूतहरूमा प्रधानता हासिल भयो र अल्लाहले उहाँको शिरमा शुरुदेखि लिएर अन्तिमसम्म नेतृत्वको ताज कायम राखे ।

उहाँलाई भनियो : हे बर्कोमा बेरिएका, रातमा केही बेर उठ । हे कम्बलमा बेरिएका, उठ र मानिसलाई भयानक परिणामबाट डराऊ ।

त्यसपछि भयो के ? उहाँ उठनुभयो र आफ्नो काँधमा संसारको सबैभन्दा ठूलो नासोको जिम्मेवारी बोकेर निरन्तर हिँडिरहनुभयो । अर्थात सम्पूर्ण मानवको उत्तरदायित्व,सम्पूर्ण आस्थाको भार र विभिन्न मैदानमा गरिएको युद्ध जिहाद र संघर्षको बोझ ।

उहाँले मानवआत्माको त्यो मैदानमा जिहाद र संघर्षको जिम्मेवारी वहन गर्नुभयो जुन अज्ञानताको संदेह र शंकामा लिप्त थियो । जसलाई दुनियाँ र त्यसप्रति निरन्तर आकर्षणको बोझले भारी बनाएको थियो । जो अपार इच्छाको कडीमा जकडिएको थियो । जब ईशदूतले त्यो आफ्ना साथीहरुको आत्मालाई अज्ञानता र सांसारिक प्रलोभनले खाँदिएको डुंगुरबाट सफा गरेपछि एकअर्को मैदानमा एउटा लडाइँ मात्र नभएर लडाइँमाथि लडाइँ लड्नुभयो । अर्थात ईश्वरीय आह्वानका ती शत्रुहरू जसले इस्लामी आह्वान र त्यसलाई अनुकरण गर्ने व्यक्तिहरू विरुद्ध आक्रमण गरेका थिए, त्यस पवित्र विरुवालाई हुर्कन, जरो गाड्न, हाँगाबिँगा फैलन र फल्नफुल्न नपाउँदै उम्रेको ठाउँमा निमोठ्न चाहेका थिए उनीहरू विरुद्ध उहाँले निरन्तर युद्ध गर्नुभयो । उहाँले अरब टापुमा युद्धविराम गर्न नपाउँदै इटालियनहरूले त्यो नयाँ समुदायलाई दबाउन त्यसको वरिपरि आएर तयारी शुरु गरे ।

ती सम्पूर्ण कारवाही भइरहँदा पनि प्रथम युद्ध अर्थात आध्यात्मिक युद्ध अँझै समाप्त भएको थिएन । किनभने त्यो भनेको सदाको युद्ध हो र त्यसमा पिचाशसँग प्रतिस्पर्धा हुन्छ । उसले मानवीय आत्मामा पसेर आफ्नो क्रियाकलाप जारी राखेको हुन्छ । एकछिन पनि थाक्दैन । मुहम्मदﷺ इस्लामी आह्वानको काममा दृढ हुनुहुन्थ्यो । विभिन्न मैदानको निरन्तर संघर्षमा व्यस्त हुनुहुन्थ्यो । दुनियाँ उहाँको पाइतलामुनि झुक्दा पनि उहाँले अभाव र कष्टमा नै जीवन व्यतीत गर्नुभएको थियो । मोमिन साथीहरूले उहाँको वरिपरि सुखको छायाँ फैलाउँदा पनि उहाँले दुःख र कष्ट झेलिरहनुभयो । निरन्तर र ठूलो परिश्रमको सामना थियो । तर उहाँले ती सम्पूर्ण कुरामा धैर्यधारण गर्नुभयो राती जाग्राम बसेर आफ्नो पालनकर्ताको ध्यान गर्नुहुन्थ्यो । कुरआन विस्तारै विस्तारै रोकिएर पढ्नुहुन्थ्यो । सारा संसारबाट अलगिएर उसैतर्फ

ध्यानकेन्द्रित गर्नुहुन्थ्यो । उहाँलाई जस्तो आदेश गरिएको थियो उहाँले त्यो गरेर देखाउनुभयो ।[१]

त्यसरी उहाँले युद्धमा निरन्तर बीस वर्ष बिताउनुभयो । त्यो पूरै अवधिमा उहाँलाई एउटा समस्याले अर्को समस्यालाई बाधा हाल्न सकेन । इस्लामी आह्वान यति उच्च स्थानमा सफल भयो त्यसबाट मानवीय विवेक पनि चकित बन्यो । सारा अरब टापु उहाँको अधीनमा आयो । त्यसको कुनाकाप्चाबाट अज्ञानताको धुलो हट्यो भयो । विग्रेको दिमाग ठिक भयो । उनीहरूले मूर्तिलाई छोडेका मात्र थिएनन् त्यसलाई फुटाएका पनि थिए । एकेश्वरवादको स्वरले वातावरण गुञ्जियो । नयाँ इमानबाट जीवित भएको मरुभूमिको कुनाकाप्चा पनि अजानको स्वरले थरथराउन थाल्यो । त्यसको जगमा अल्लाहु अक्बरको नारा पुग्न थाल्यो । कुरआनका पाठकहरू कुरआन पढ्दै र त्यसलाई लागु गर्दै उत्तरदेखि दक्षिणसम्म फैलिए ।

टुक्रिएको शक्ति र कबिलाहरू एकिकृत भए । मानव मानवीय दासित्वबाट मुक्त भएर एक अल्लाहको दासित्वमा आयो । अब संसारमा न त कुनै सशक्त रहयो न कुनै अशक्त, न कुनै मालिक रह्यो न कुनै दासी, न कुनै हाकिम रह्यो न कुनै नोकर, न कुनै अत्याचारी रह्यो न कुनै पीडित । संसारमा सबै एक अल्लाहका उपासक बने । उनीहरू आपसमा दाजुभाइ बने । एक अर्कासँग दयामायाको भाव राख्ने र अल्लाहको आदेश पालना गर्ने गरे । अल्लाहले उनीहरूबाट अज्ञानताको घमण्ड एवं अहंकार र बाबुबाजेमाथि गरिने मैमत्ता समाप्त गरिदिए । अबदेखि कुनै अरबीलाई गैर अरबीमाथि , गैर अरबीलाई अरबीमाथि, कुनै कालोलाई गोरोमाथि र गोरोलाई कालोमाथि कुनै प्रकारको प्रधानता रहेन । प्रधानताको मापदण्ड केवल ईश्भय रह्यो । सबै मानिसहरू आदमका सन्तान हुन् र आदम माटोबाट बनाइएका हुन् ।

त्यस आह्वानको कारण अरबीहरूमा मानवीय एकता र सामुहिक न्यायले जन्म लियो । मानवलाई सांसारिक समस्या र प्रलोकिय मामिलामा सत्य मार्ग प्राप्त भयो । अर्को शब्दमा भन्नु पर्दा समयको गति बदलियो, धर्तीमा परिवर्तन आयो । इतिहासको दिशा फेरियो र सोच्ने शैली पनि परिवर्तन भयो ।

त्यस आह्वानभन्दा पहिला संसारमा अज्ञानताको प्रभुत्व थियो । त्यसको आत्मा सडेको थियो । आत्मा दुर्गन्धित थियो । इज्जत र त्यसको मापदण्ड बिग्रेको थियो । अत्याचार तथा दासत्वको चहलखेल थियो । अवैध धनसम्पत्ति र विनाशकारी निराशापनको भेलले दुनियाँलाई डुबाएको थियो । यसमा कुफ्र तथा पथभ्रष्टको कालो एंव घोर बादल लागेको थियो । यद्यपि त्यतिबेला पनि आकाशीय धर्महरूको अस्तित्व

१ सैयद कुतुबको फि जिलालिल कुरआन भाग २९

छँदै थियो । तर ती धर्महरूमा केरकार गरिएको थियो । अशुद्धता मिसाइएको थियो । आफ्नो पकड पनि समाप्त भइसकेको थियो । ती धर्महरू केवल अस्तित्वहीन तथा सघन रीतिरिवाजको संग्रह बनेका थिए ।

इस्लामी आह्वानले मानवीय जीवनमा आफ्नो असर देखाउनुको साथै मानवीय आत्मालाई रुढीवादी, दासत्व, फसाद, दुर्गन्ध, फोहर र अराजकताबाट मुक्त गरिदियो । मानवीय समाजलाई अत्याचार ज्यादती, विखण्डता,जातीय भेदभाव, हैकमवाद र ज्योतिषीका घृणित प्रभुत्वबाट छुट्कारा दिलायो । इज्जत पवित्रता,अविस्कार तथा निर्माण, स्वतन्त्रता तथा नवनिर्माण, ज्ञान, विश्वास, इमान,इन्साफ, दया र कर्मको आधारमा जीवनलाई उच्च स्तरमा उठाउन, त्यसको विकास गर्न र हकवालालाई उसको हक दिनको लागि नयाँ संसार निर्माण गऱ्यो ।

तिनै परिवर्तनको आधारमा अरब टापुले एक यस्तो गरिमामय अभियानको अवलोकन गऱ्यो जसको उदाहरण मानवीय अस्तित्वको कुनै पनि युगमा भेटाउन सकिन्न । अरब टापुको इतिहास आफ्नो उमेरका ती अनौठा दिनहरूमा यस्तरी चम्कियो त्यसअघि कहिल्यै चम्किएको थिएन ।[१]



१ सैयद कुतुबको मा जाअ खसेरल आलम बे इन्हेतातिल मुस्लेमीन नामक किताबको भूमिका ।

# हज्जतुल वदाअ

इस्लामी आह्वान तथा इस्लामी प्रचारप्रसारको काम पूरा भयो । एकेश्वरवादको स्थापना,वहुदेववादको विस्थापन र मुहम्मदﷺको ईशदुतत्वको आधारमा एउटा नयाँ समाजको निर्माण कार्य सम्पन्न भयो । परोक्षीय स्वरले उहाँको मनमा अब दुनियाँमा उहाँको बसाइँको समयावधि समाप्त हुँदैछ भन्ने अनुभूति गराउँदै थियो । तसर्थ उहाँले मुआज बिन जबललाई १० हिजरीमा यमनको गवर्नर बनाएर पठाउनुभयो । विदाइ गर्ने क्रममा सबैकुरा भन्नुका साथै उहाँले भन्नुभयो : हे मुआज शायद यस वर्षपछि तिमीले मलाई भेट्न सक्दैनौ होला, शायद मेरो यस मस्जिद र यस चिहानबाट हिँड्ने छौ । त्यो कुरा सुनेर मुआज शोकाकुल भई रुन थाले ।

वास्तवमा अल्लाहले आफ्नो दूतलाई त्यो आह्वानको राम्रो परिणाम देखाउन चाहेको थियो जुन आह्वानको लागि उहाँले बीस वर्षभन्दा बढी अवधिसम्म विभिन्न कठिनाइ,दुख र कष्ट झेल्नुभयो । त्यो कुरा यसरी सम्भव भयो । उहाँ हजको अवसरमा मक्का वरिपरि अरब कबिलाहरूका प्रतिनिधिहरूका साथ भेला हुनुभयो । त्यसपछि उनीहरूले उहाँबाट इस्लामको नीतिनियम ग्रहण गरे । उहाँले उनीहरूलाई साक्षी राखेर मैले दायित्व पूरा गरिदिएँ, पालनकर्ताको संदेश पुऱ्याइदिएँ र मानव समुदायको भलाइको हक पूरा गरिदिएँ भन्नुभयो । अल्लाहको इच्छा बमोजिम ईशदूतले हज गर्ने योजनाको सूचना दिएपछि अरबका मुसलमानहरू हुलका हुल आउन थाले । हरेकको यही स्वर थियो हामीले ईशदूतको मार्गलाई नै आफ्नो मार्ग बनाउने छौं र उहाँको अनुकरण गर्ने छौं ।[१] शनिबारको दिन जब जिलकअदा महिनाको चार दिन बाँकी बच्यो अनि उहाँले मदिनाबाट प्रस्थान गर्ने तयारी गर्नुभयो ।[२] कपाल कोर्नुभयो, तेल लगाउनुभयो ,धोती लुंगी लगाएर दोसल्ला ओढ्नुभयो । बलि दिने जनावरलाई माला लगाइदिनुभयो । जोहरपछि उहाँ त्यहाँबाट प्रस्थान हुनुभयो । असरभन्दा पहिला जुल हुलैफा पुग्नुभयो । त्यहाँ पुगेर असरको दुई रकआत नमाज पढ्नुभयो । रातभरी खेमामा बस्नुभयो । विहान भएपछि साथीहरूसँग भन्नुभयो : राती पालनकर्ताको तर्फबाट एक जनाले आएर भन्यो: यस पवित्र उपत्यकामा नमाज पढ र हजका साथसाथै उमराह पनि छ भनिदेऊ ।[३]

---

१ सही मुस्लिम अध्याय हज्जतुन नबी भाग १
२ इब्ने हजरले यस बारे उत्तम रिसर्च गरेका छन् । केही हदिसमा उहाँले जिकअदा महिनाको पाँच दिन बाँकी रहँदा प्रस्थान गर्नुभएको थियो भन्ने भनाइलाई पनि सही मानेका छन् । फतहुलबारी भाग ८
3 सही बुखारी भाग १

जोहरको नमाजभन्दा पहिला उहाँले एहराम लगाउन स्नान गर्नुभयो । त्यसपछि आइशाले उहाँको पवित्र शरीर र टाउकोमा आफ्नो हातले अत्तर लगाइदिइन् । सुगन्धको चमक उहाँको शिर र दाह्रीबाट पनि झल्किन्थ्यो । उहाँले त्यो सुगन्ध पखाल्नु भएन । यथावतै राख्नुभयो । त्यसपछि आफ्नो लुंगी लगाएर दोसल्ला ओढ्नुभयो । दुई रकआत नमाज पढिसकेपछि नमाज पढ्ने ठाउँमा बसेर उमराह र हजको एक साथ एहरामको नियत गरी लब्बैकको नारा लगाउँदै बाहिर निस्कनुभयो । कस्वा नामक उँटनीमा सवार भएर दोस्रो पटक पनि लब्बैकको नारा लगाउनुभयो । त्यसपछि उँटनीमा सवार हुँदै खुल्ला मैदानमा जानुभयो र त्यहाँ पनि लब्बैकको नारा लगाउनुभयो ।

त्यसपछि उहाँले आफ्नो यात्रा जारी राख्नुभयो । एक हप्तापछि उहाँले मक्का नजिक जितुबामा गएर बास बस्नुभयो । रात त्यहीँ नै बिताउनुभयो । फजरको नमाज पढेर स्नान गर्नुभयो । त्यसपछि एका विहानी मक्कामा प्रवेश गर्नुभयो । त्यो हिजरी सम्बत ४ साल जिलहज्ज १० तारिख आइतवारको दिन थियो । बाटोमा आठ रात बस्नु पर्‍यो । मध्यम गतिमा त्यो दुरीको हिसाबले त्यति नै हुन्छ । पवित्र मस्जिदमा पुगेर उहाँले सर्वप्रथम काबाको तवाफ अर्थात परिक्रमा गर्नुभयो । त्यसपछि सफा र मरवा पहाडबीच सई अर्थात दौडनुभयो । तर एहराम खोल्नु भएको थिएन । किनभने उहाँले हज र उमराहको एहराम एक साथ बाँध्नु भएको थियो । आफ्नो साथमा उहाँले बलिको जनावर ल्याउनुभएको थियो । तवाफ तथा सई गरिसकेपछि उहाँले मक्काको माथिल्लो ठाउँ हजुनमा गएर विश्राम लिनुभयो । तर दोस्रो पटक हजको तवाफबाहेक अरू तवाफ गर्नुभएन ।

उहाँको साथमा जुन साथीहरू आएका थिए उनीहरूले आफ्नो साथमा बलि दिने जनावर ल्याएका थिएनन् । उनीहरूलाई उहाँले एहरामलाई उमराहको एहराममा परिणत गरी काबाको तवाफ र सफा मरवाको सई गरेर पूर्ण रूपमा एहराम फुकाउने आदेश दिनुभयो । तर उहाँले नै एहराम नफुकाएकाले साथीहरू दोधारमा परे । उहाँले भन्नुभयो यदि मलाई आफ्नो बारेमा त्यो कुरा पहिला थाहा भएको भए जुन पछि थाहा भयो मैले पनि आफ्नो साथमा बलि दिने जनावर ल्याउने थिएन । यदि मसँग बलि दिने जनावर नभएको भए मैले पनि एहराम खोलिदिन्थे । उहाँको त्यो कुरा सुनेपछि साथीहरूले उहाँको आदेशको पालना गरे । जुन साथीहरूसँग बलिको जनावर थिएन उनीहरूले एहराम खोले ।

जिलहज ८ तारिख तरवीयाको दिन उहाँ मेना जानुभयो । त्यहाँ जिलहज्ज ९ तारिखको विहानसम्म बस्नुभयो । जोहर, असर ,मग्रिब, इशा र फजरको नमाज त्यहीँ पढ्नुभयो र घाम उदाउञ्जेल त्यहाँ बस्नुभयो । । त्यसपछि अरफातको मैदानतिर लाग्नुभयो । त्यहाँ पुगेर नमराह नामक उपत्यकामा खिमा लगाएर बस्नुभयो । घाम

अस्ताएपछि उहाँको आदेश बमोजिम उहाँको कस्वा उँटनीको काठी बाँधियो । उहाँ उपत्यकाको माझमा जानुभयो । त्यति बेला उहाँको साथमा एक लाख चौबीस हजार वा एक लाख चवालीस हजारको महाजनसागर उर्लिएको थियो । उहाँले उनीहरूको सामुन्ने एउटा संदेशमूलक प्रवचन दिँदै भन्नुभयो :

हे जनसमुदाय ! मेरो कुरा सुन । हुन सक्छ यस वर्षपछि यस ठाउँमा तिमीहरूसँग मेरो भेट नहोला ।[१] तिम्रो रगत र तिम्रो माल एकअर्काको लागि आजको दिनबाट जारी महिनादेखि यो ठाउँ जस्तै सुरक्षित छ । सुन,अज्ञानताको प्रत्येक वस्तु मेरो पाइलामूनि दबिएको छ । अज्ञानी युगको रगतको बदला लिनु पनि अवैध गरिएको छ । हामीहरूमध्ये जसको रगत बोगाइएको थियो त्यसलाई मैले माफ गरेको छु त्यो रबिया बिन हारिसको छोराको रगत थियो । त्यो बच्चाले बनु सअदमा दूध खादै गरेको अवस्थामा हुजैल कबिलाले उसको हत्या गरेको थियो । अज्ञानी युगको व्याजलाई पनि समाप्त गरिएको छ । हाम्रो व्याजमध्ये पहिलो व्याज जसलाई मैले अन्त्य गर्दैछु त्यो अब्बास बिन अब्दुल मुत्तलिबको व्याज हो । अबदेखि सबै खाले व्याजको अन्त्य भएको छ ।

महिलाको बारेमा अल्लाहसँग डराऊ , किनभने तिमीहरूले उनीहरूलाई अल्लाहको नासोको रूपमा लिएका छौ । अल्लाहको कलमाद्वारा तिमीहरूले जायज गरेका छौ । उनीहरूको कर्तव्य के हो भने उनीहरूले तिमीहरूको विस्तरामा कुनै यस्तो व्यक्तिलाई आउन नदिउन् जसलाई तिमी नराम्रो ठान्दछौ । यदि उनीहरूले यसो गरे भने उनीहरूलाई पिट्ने अधिकार छ । तर बढी पिटाइ नगर । उनीहरूको लागि राम्रो गास बासको व्यवस्था गर्ने जिम्मेवारी तिमीहरूमा छ ।

मैले तिमीहरूमाझ यस्तो कुरा छोडेर जाँदैछु यदि तिमीहरूले त्यसलाई बलियोसँग समात्यौ भने तिमीहरू पथभ्रष्ट हुने छैनौ । त्यो हो अल्लाहको ग्रन्थ । [२]

जनसमुदाय, मपछि कुनै ईशदूत आउने छैन । तिमीपछि अर्को कुनै समुदाय पनि हुने छैन । तसर्थ आफ्नो पालनकर्ताको उपासना गर । पाँच वखतको नमाज पढ, रमजान महिनामा व्रत बस,आफ्नो मालबाट खुसीखुसी जकात देऊ, आफ्नो पालनकर्ताको घरको हज गर र आफ्नो नेतृत्वलाई स्वीकार । त्यसो गऱ्यौ भने आफ्नो पालनकर्ताको स्वर्गमा जाने छौ ।[३]

१ इब्ने हेशाम भाग २
२ सही मुस्लिम भाग १
3 मअदनुल अमाल हदिस नं ११०८,११०९,इब्ने जरिर, इब्ने असाकिर, रहमतुल लिल आलमीन १

तिमीहरूसँग मेरो बारेमा सोधिने छ । तिमीहरूले के जवाफ दिन्छौ ? सहाबीहरूले भने : तपाईंले धर्म प्रसारप्रचार गरिदिनु भएको थियो, संदेश पुऱ्याइदिनु भएको थियो र भलाईको हक पुरा गरिदिनु भएको थियो भनेर हामीले जवाफ दिने छौं ।

त्यो कुरा सुनेर उहाँले आफ्नो साक्षी दिने औंला आकाशतर्फ उठाएर तल झार्दै मानिसहरूलाई तीन पटक भन्नुभयो : हे अल्लाह साक्षी बनिदिनु ।[1]

उहाँको कुराहरूलाई रबिया बिन उमैया बिन खलफले ठूलो स्वर गरी मानिसहरूसम्म पुऱ्याउने काम गरेका थिए ।[2] उहाँले प्रवचन दिएर समाप्त गरेपछि अल्लाहले कुरआनको निम्न श्लोक अवतरण गरे । अनूवाद छ : आज मैले तिमीहरूको निम्ति तिम्रो धर्मलाई पूर्णता दिएको छु । तिमीहरूमाथि आफ्नो वरदान पूरा गरिदिएको छु र तिमीहरूको लागि धर्ममा इस्लामलाई रोजेको छु । (अल् मायदा:३)

कुरआनको यो श्लोक अवतरण भएपछि उमर रुन थाले । ईशदूतले किन रुदै छौ भनी सोध्नुभयो । हामीहरू आफ्नो धर्म बारे केही वृद्धि हुन्छ कि भन्ने अपेक्षामा थियौं । तर अब धर्म पूर्ण भएको छ र जो पूर्ण हुन्छ त्यो घट्न थाल्छ । उहाँले भन्नुभयो : तिमीले ठीक भन्यौ ।[3]

प्रवचनपछि बिलालले आजान र अकामत दिए । ईशदूतले जोहरको नमाज पढाउनुभयो त्यसपछि बिलालले फेरि अकामत दिए र उहाँले असरको नमाज पढाउनुभयो । यी दुवै नमाजबीच कुनै नमाज पढ्नुभएन । त्यसपछि उँटनीमा सवार भएर आफ्नो बासस्थानतिर जानुभयो । आफ्नो उँटनीको पेट ढुंगा भएतिर फर्काउनुभयो र बालुवाको खातलाई सामुन्ने गर्नुभयो । उहाँ किब्ला दिशातिर फर्केर बस्नुभयो । घाम पनि अस्ताउन थाल्यो । थोरै पहेलोपन हराएपछि घाम डुब्यो । त्यसपछि उसामालाई आफ्नो पछाडि बसाल्नुभयो । त्यहाँबाट निस्केर मुजदलफा जानुभयो । मुजदलिफामा मग्रिब र इशाको नमाज एक अजान र दुई अकामतमा पढाउनुभयो । बीचमा कुनै नफिल नमाज पढ्नुभएन । त्यसपछि उहाँ सुत्नुभयो । फजरसम्म सुतिरहनुभयो । विहान हुने वित्तिकै उहाँले अजान र अकामत दिएर नमाज पढ्नुभयो । त्यसपछि उँटनीमा सवार भएर मश्अरे हरामतर्फ जानुभयो । किब्लातिर फर्केर अल्लाहसँग प्रार्थना गर्नुभयो । अल्लाहको प्रशंसा गर्नुभयो । त्यहाँ निकै उज्यालो हुञ्जेल बस्नुभयो । त्यसपछि घाम उदाउनुभन्दा पहिला नै मेनातर्फ लाग्नुभयो । त्यहाँ फजल बिन अब्बासलाई आफ्नो साथमा बसाल्नुभएको थियो । महशर भन्ने उपत्यकामा पुग्दा उहाँले सवारीलाई अलि तेज दौडाउनुभयो । त्यसपछि जमराह कुब्रा

---

१ सही मुस्लिम भाग १
२ इब्ने हेशाम भाग २
3 तफसिर इब्ने कसिर भाग २, दारुल मन्सुर भाग २

जाने माझको बाटो हुँदै गएर जमराह कुब्रा पुग्नुभयो । त्यो समयमा त्यहाँ एउटा रूख थियो । त्यो रूखको कारणले जमराह कुब्रा चिनिन्थ्यो । जमराह कुब्राहलाई जमराह अकबा र जमराह उला पनि भनिन्छ। त्यसपछि उहाँले जमराहलाई सात वटा ससाना ढुंगा लिएर हान्नुभयो । प्रत्येक ढुंगा हान्दा अल्लाहको प्रशंसा गर्नुभयो । ढुंगा सानो सानो थियो । जसलाई चुटकीमा लिएर हान्न सकिन्थ्यो । उहाँले ती ढुंगा उपत्यकाको माझमा उभिएर हान्नुभएको थियो। त्यसपछि उहाँ वधस्थल जानुभयो र आफ्नो पवित्र हातले ६३ वटा उँट वध गरी अलीको जिम्मा लगाउनुभयो । उनले बाँकी रहेको ३७ वटा उँट वध गरे । यसरी उँटको संख्या एक सय पुग्यो । उहाँले अलीलाई पनि आफ्नो कुरबानीमा शामिल गर्नुभयो। त्यसपछि हरेक उँटबाट एकएक टुक्रा मासु काटेर ताउलामा पकाइयो। उहाँले र अलीले त्यो मासुबाट केही खानुभयो र त्यसको झोल पनि पिउनुभयो।

त्यसपछि ईशदूत सवार भएर मक्का जानुभयो । काबाको तवाफ गर्नुभयो । यसलाई तवाफे एफाजाह भनिन्छ । मक्कामा नै जोहरको नमाज अदा गर्नुभयो । त्यसपछि जमजम पानीको मुहान नजिक बनु अब्दुल मुत्तलिबकहाँ जानुभयो । त्यहाँ उनीहरूले हाजीहरूलाई जमजमको पानी पिलाइरहेका थिए । उहाँले भन्नुभयो : बनु अब्दुल मुत्तलिब तिमीले पानी तान । पानी पिलाउने यस काममा मानिसहरूले तिमीहरूलाई पछि पार्ने डर नभएको भए मैले पनि पानी पिलाउँथे । अर्थात सहाबीहरूले ईशदूतलाई पानी तानेको देख्ना साथ हरेक सहाबीले पानी तान्ने प्रयास गर्थे र हाजीहरूलाई पानी पिलाउने जुन शुभकार्य बनु अब्दुल मुत्तलिबलाई प्राप्त थियो त्यसको व्यवस्था बिथोलिने थियो। तसर्थ बनु अब्दुल मुत्तलिबले उहाँलाई एक घैंटो पानी दियो र उहाँले आफुलाई चाहिए जति पानी पिउनुभयो।[१]

कुरबानीको दिन थियो । अर्थात जिलहज्जको १० तारिख । ईशदूतले त्यो दिन पनि ११ बजेतिर एउटा प्रवचन दिनुभयो । प्रवचन दिँदा उहाँ खच्चरमा सवार हुनुहुन्थ्यो । अलीले उहाँको प्रवचन साथीहरूसमक्ष प्रवाह गरिरहेका थिए । सहाबीहरूमध्ये केही उभिएका थिए भने केही बसेका थिए ।[२] उहाँले त्यो दिनको प्रवचनमा पनि अघिल्लो दिन दिनुभएको प्रवचनका कैयन कुराहरू दोहोऱ्याउनुभयो । सही बुखारी र मुस्लिममा अबु बकरमार्फत वर्णन गरिएको छ : ईशदूतले हामीलाई कुरबानीको दिन अर्थात जिलहज्ज १० तारिखको दिन प्रवचन दिनुभएको थियो।

समयको चक्रव्युहले फेरि त्यो दिन देखायो जुन दिन अल्लाहले आकाश र धर्ती सृष्टि गरेका थिए । वर्ष बाह्र महिनाको छ । जसमा चार महिना पवित्र छन् ।

---

१ सही मुस्लिम भाग १
२ अबु दाऊद भाग १

तीन महिना लगातार जिलकअदा , जिलहज्ज र मोहर्रम साथै एउटा रजबको महिना जो जमादिल आखिर र शआबान महिनाकोबीचमा छ ।

ईशदूतले सोध्नुभयो, यो कुन महिना हो ? हामीले भन्यौँ : अल्लाह र उनका दूतलाई नै राम्रोसँग थाहा छ । त्यो कुरा सुनेर ईशदूत केही बोल्नुभएन । हामीले सम्झायौँ कि उहाँले यस महिनाको अरू कुनै नाम राख्नुहुने छ । तर पछि उहाँले भन्नुभयो : के यो जिलहज्ज होइन ? हामीले भन्यौँ : अवश्य हो । उहाँले सोध्नुभयो यो कुन शहर हो ? हामीले भन्यौँ : अल्लाह र अल्लाहका दूतलाई नै राम्रोसँग थाहा छ । त्यो कुरा सुनेर उहाँ मौन हुनुभयो । हामीले सम्झायौँ कि उहाँले त्यसको अरू कुनै नाम राख्नुहुने छ । उहाँले भन्नुभयो के यो मक्का होइन ? हामीले जवाफ दियौँ, अवश्य हो । उहाँले सोध्नुभयो : आजको दिन कुन दिन हो ? हामीले जवाफ दियौँ : अल्लाह र अल्लाहका दूतलाई राम्रोसँग थाहा छ । त्यो कुरा सुनेर उहाँ मौन हुनुभयो । हामीले सम्झयौँ कि यसको उहाँले अरु कुनै नाम राख्नुहुने छ । तर उहाँले भन्नुभयो : के आजको दिन कुरबानी दिने दिन अर्थात १० जिलहज्जको दिन होइन ? हामीले भन्यौँ, अवश्य हो । उहाँले भन्नुभयो : ल सुन, तिम्रो माल, तिमीहरूको इज्जत त्यसरी नै सुरक्षित रहने छ जसरी तिमीहरू यस शहरमा र यो महिना र दिनमा सुरक्षित छौ ।

तिमीहरू आफ्नो ईश्वरतिर छिटै जाने छौ । उसले तिमीहरूसँग तिमीहरूको कर्म बारे सोध्ने छ । तसर्थ मपछि पथभ्रष्ट भएर एकअर्काको टाउको न काट्नु । भन, के मैले शिक्षा प्रसार गरिदिएँ ? सहाबीहरूले भने, अवश्य । उहाँले भन्नुभयो हे अल्लाह साक्षी बस । आज जो हाजिर छन् गैरहाजिर भएकालाई बताउनु । किनभने ती मानिसहरूकहाँ यी कुराहरू पुऱ्याइयो भने उनीहरूमध्ये केहीले यी कुरा सुन्नेहरूले भन्दा बढी यी कुराहरूको अर्थ बुझ्ने छन् । [१]

एक अर्को हदिसमा उल्लेख भए बमोजिम उहाँले आफ्नो प्रवचनमा निम्न कुरा पनि भन्नुभएको थियो : याद राख, कुनै पनि अपराध गर्नेले स्वयम आफुमाथि अपराध गर्दछ । अर्थात त्यो अपराधको कारण उसलाई नै अपराधीको रूपमा गिरिफतार गरिने छ । याद राख, कुनै अपराधीले आफ्नो छोरा वा कुनै छोराले आफ्नो बाबुमाथि अपराध गर्दैन । अर्थात बाबुको अपराधमा छोरालाई र छोराको अपराधमा बाबुलाई गिरिफतार गरिने छैन । याद राख, पिचाश अब यस शहरमा उसको पूजा हुन सक्दैन भनेर निराश भइसकेको छ । तर जुन कर्मलाई तिमीहरू सानो ठान्ने छौ त्यसैमा उसको आज्ञा पालना हुनेछ र ऊ त्यसैबाट खुसी हुनेछ ।[२]

---

१ सही बुखारी भाग १

२ तिर्मिजी भाग २, इब्ने माजा पाठ हज,मिश्कात भाग १

त्यसपछि उहाँ मेनामा ११,१२,१३ तारिखसम्म बस्नुभयो । त्यस अवधिमा हजका कर्म पनि पूरा गरिरहनुभयो । मानिसहरूलाई इस्लामी नीतिनियमको बारेमा पनि शिक्षा दिइरहनुभयो । अल्लाहको प्रशंसा जप्दैरहनुभयो । इब्राहिमी सुन्नत अर्थात कुरबानी पनि दिनुभयो । विकृतिको सानोभन्दा सानो असर र निसान पनि मेटाउनु भयो । उहाँले तशिरकका दिनहरूमा पनि एउटा प्रवचन दिनुभयो । तसर्थ अबु दाउदमा वर्णन गरिएको छ । सराअ विन्त नब्हानले भनेकी छिन् : ईशदूतले हामीलाई बाह्र जिल हजको दिन सम्बोधन गर्नुभयो । उहाँले भन्नुभयो, के यो तशिरकका दिनमध्येको बीचको दिन होइन ?[१] उहाँको त्यो दिनको सम्बोधन पनि अघिल्लो दिनको सम्बोधन जस्तै थियो । त्यो प्रवचन सुरह नस्र अवतरण भएपछि दिइएको थियो ।

तशिरकका दिनहरू सकिएपछि १३ जिलहज्जको दिन उहाँ मेना जानुभयो र अब्तह उपत्यकाको खैफ बनी केनानाहमा बस्नुभयो । दिनका बाँकी समय र रात त्यहीँ बिताउनुभयो । जोहर, असर, मग्रिब र इशाको नमाज पनि त्यहीँ पढ्नुभयो । तर इशापछि एक निद्रा सुतेर उठेपछि सवार भएर काबातिर गएर तवाफे वदा अर्थात विदाइ तवाफ गर्नुभयो ।

उहाँले हजको सम्पूर्ण विधि पूरा गरिसकेपछि आफ्नो सवारीको दिशा मदिनातिर गर्नुभयो । मदिना आराम गर्न जानुभएको थिएन । उहाँले त्यहाँ गएर अल्लाहको मार्गमा एउटा नयाँ संघर्षको शुत्रपत गर्नु थियो ।[२]

---

१ अबु दाऊद भाग १
२ सही बुखारी, सही मुस्लिम, फतहुल बारी भाग ३, इब्ने हेशाम भाग २, जादुल मआद भाग १

# अन्तिम सशस्त्र संघर्ष

इटाली सत्तालाई इस्लाम र इस्लामावलम्बीहरूको जीवित रहने अधिकार पनि स्वीकार्य थिएन । त्यसकारण उसको अधनीमा रहेका वासीहरूमध्ये जसले इस्लाम कबुल गर्थ्यो उसको ज्यान सुरक्षित रहँदैन थियो । मआनको इटालियन गर्वनर फरवाह बिन अमर जुजामी त्यसको जीवन्त उदाहरण बने ।

उनीहरूको घमण्ड र अहंकारका कारण ईशदूतले हिजरी सम्बत ११ साल सफरको महिनामा एउटा महान लस्कर जुटाउने तयारी गर्नुभयो र उसामा बिन जैद बिन हारिसालाई त्यसको कमाण्डर नियुक्त गरी बलकाको क्षेत्र र इटालीको राजधानीमा अवस्थित प्यालिस्टिन भूमिलाई थिचोमिचो पारेर आऊ भनी आदेश दिनुभयो । त्यस युद्धको उद्देश्य इटालीलाई त्रसित पार्दै उनीहरूको सिमानामा रहेका अरबी कबिलाहरूको विश्वास वहाल गर्नु थियो । साथै गिरिजाघरबाट हुने आतंक बारे सोधखोज गर्ने वाला कोही छैन भन्ने उनीहरूको सोच मेटाउनु थियो । इस्लाम स्वीकार्नुको अर्थ आफ्नो मृत्युलाई निम्तो दिइदैछ भन्ने थियो ।

त्यस अवसरमा केही व्यक्तिहरूले कमाण्डर कम उमेरको भएकोले त्यसलाई आलोचनाको निसाना बनाएर त्यस युद्धमा सहभागी हुन ढिलाई गरे । त्यस कुरामा ईशदूतले भन्नुभयो : तिमीहरूले उनको नेतृत्वमाथि गरेको आलोचना कुनै नौलो कुरा होइन । तिमीहरूले यसअघि उसको बाबुको नेतृत्वमाथि पनि आलोचना गरेका थियौ । जबकि उनी नेतृत्वको लागि योग्य थिए । उनी मेरा प्यारा मानिसहरूमध्ये एक थिए र उनीपछि यिनी पनि मेरा प्यारा मानिसहरूमध्ये हुन् ।[१]

जेहोस् मानिसहरू उसामाको वरिपरि भेला भएर लस्करमा सहभागी भए । लस्कर हिंडेपछि मदिनाबाट तीन मिल दुर जरफ भन्ने ठाउँमा गएर क्याम्प बनाएर बस्यो । तर ईशदूत अस्वस्थ भएको खबर सुनेर अगाडि बढ्न सकेन र अल्लाहको निर्णयको प्रतिक्षामा त्यहीँ बस्न बाध्य भयो । अल्लाहको निर्णय त्यो लस्कर अबु बकरको राज्यकालको पहिलो सशस्त्र संघर्ष घोषित होस् भन्ने थियो ।[२]

---

१ सही बुखारी भाग २
२ सही बुखारी भाग २,इब्ने हेशाम भाग २

# पवित्र जीवनको अन्तिम अध्याय
# महामित्रतर्फ प्रस्थान

## बिदाइका संकेतहरू

जब इस्लामी आह्वान पूर्ण भयो र अरबको सत्ता इस्लामको कब्जामा आयो अनि ईशदूतको भावना, अनुभव, चालचलन, बोली बचन र व्यवहारबाट अब ईशदूतले यस क्षणिक जीवन र नाशी संसारका वासीहरूलाई बिदाइ गर्दै हुनुहुन्छ भन्ने संकेतहरु देखिन थाले । जस्तै उहाँले त्यस वर्षको रमजानको महिनामा बीस दिन इतेकाफ अर्थात ध्यानमा विताउनुभयो जबकि सदैव दश दिन मात्र इतेकाफमा बस्नुहुन्थ्यो । अल्लाहका फरिश्ता जिब्रइलले त्यस वर्ष दुई पटक कुरआनको पाठ गराए जबकि प्रत्येक वर्ष एक पटक मात्र गराउँथे । उहाँले हज्जतुल वदाअको अवसरमा भन्नुभएको थियो : यस वर्षपछि मैले यस ठाउँमा तिमीहरूसँग भेट गर्न सक्दिन होला । जमराह उक्बानिर भन्नुभएको थियो : मबाट हजका विधिहरू सिक । किनभने यस वर्षपछि मैले हज गर्न सक्दिनँ होला । उहाँमाथि जिलहज्ज महिनाको ११,१२,१३ तारिखहरूमध्ये बीचको दिनमा सुरह नस्र अवतरण भयो । त्यसबाट उहाँलाई अब संसारबाट बिदा हुने समय आइसकेको छ भन्ने कुरा ज्ञात भयो । यिनै कुराहरू उहाँको विदाईका सूचक थिए ।

हिजरी सम्बत ११ साल सफर महिनाको आरम्भमा उहाँ उहुद पहाडतिर जानुभयो । सहिदहरूको हकमा उहाँले जसरी प्रार्थना गर्नुभयो त्यसले अब उहाँ जीवित र मृतकहरूबाट बिदा लिदै हुनुहुन्छ भन्ने देखाएको थियो । त्यहाँबाट फर्केर आएपछि मञ्चमा बसेर भन्नुभयो : म तिमीहरूको पथपर्दक हुँ । तिमीहरूमाथि साक्षी छु । मैले यतिखेर आफ्नो कौसर नामी कुवा देखिरहेको छु । मलाई धर्तीका ढुकुटीहरूको चाबी दिइएको छ । मपछि तिमीहरूले शिर्क गर्ने छौ भन्ने डर त छैन तर तिमीहरू संसारको पछाडि होमिने छौ भन्ने डर छ ।[१]

एक दिन मध्यराती उहाँ बकिअ नामी कब्रिस्तानमा जानुभयो । बकिअमा रहेका मृतकहरूको हकमा प्रार्थना गर्दै भन्नुभयो : हे कब्रिस्तानवासी हो, तिमीहरूमाथि शान्ति होस् । जीवित मानिसहरू जुन अवस्थामा छन् त्यसको दाँजोमा तिमीहरू जुन अवस्थामा छौ त्यसको लागि बधाई छ । विकृतिहरु अँध्यारो रातका क्षण झैँ एकएक गरी आउँदैछ । तर पहिलाको भन्दा पछिका विकारहरू अति खराप हुनेछन् । त्यसपछि कब्रिस्तान वासीलाई शुभसूचना दिदै भन्नुभयो, म पनि तिमीहरूकहाँ आउँदै छु ।

---

१ सही मुस्लिम, बुखारी २, फतहुल बारी ३, हदिस नं १३४४,३५९६,४०८५,६४२६,६५९०

## शारीरिक अस्वस्थता शुरू

हिजरी सम्बत ११ साल सफर महिना सोमबारको दिन उहाँ एक जना मृतकको जनाजहको नमाज पढ्न बकिअ नामी कब्रिस्तान जानुभयो। फर्कँदा बाटोमा नै टाउको दुख्न थाल्यो । टाउको अति तातेको कारण त्यसमा बाँधिएको पट्टीबाट त्यसको असर देखिन थाल्यो । यो उहाँको घातक रोगको प्रारम्भ अवस्था थियो । उहाँले त्यसै अस्वस्थ अवस्थामा ११ दिनसम्म नमाज पढाउनुभयो। उहाँ अस्वस्थ हुनु भएको अवधि जम्मा १३ वा १४ दिन जति थियो ।

## जीवनको अन्तिम सप्ताह

ईशदूतको स्वास्थ्य दिनप्रति दिन बिग्रदै गएको थियो। त्यस अवधिमा उहाँले आफ्नो श्रीमतीहरूसँग भोलि म कहाँ बसुँ भनेर सोध्नुभयो। म कहाँ बस्ने भन्ने प्रश्नको अर्थ उहाँकी पवित्र श्रीमतीहरूले बुझिन्। तसर्थ उनीहरूले उहाँलाई आफ्नो स्वइच्छाले जहाँ बसे पनि हुन्छ भनिन् । त्यसपछि ईशदूत श्रीमती आइशाको घर सर्नुभयो। त्यहाँ सर्ने क्रममा उहाँ फजल बिन अब्बास र अली बिन अबी तालिबको सहारा लिएर जानुभयो। टाउकोमा पट्टी बाँधिएको थियो। खुट्टा भूइँमा घिस्रिएका थिए। यसरी ईशदूत श्रीमती  आइशाको घरमा सर्नुभयो । उहाँले आफ्नो पवित्र जीवनको अन्तिम सप्ताह उनैको घरमा विताउनुभयो।

श्रीमती आइशाले कुरआनका श्लोक र उहाँबाट कण्ठ गरेको प्रार्थना पढेर उहाँमाथि फुक्थिन् साथै दयादृष्टिको आशा गर्दै आफ्नो हातले उहाँको पवित्र शरीर मुसार्थिन्।

## देहान्तभन्दा पाँच दिन पहिला

देहान्त हुनुभन्दा पाँच दिन पहिला बुधबारको दिन उहाँलाई निकै ज्वरो आयो र त्यसले झन चाप्यो । उहाँ बेहोस हुनुभयो । होसमा आएपछि उहाँले भन्नुभयो : विभिन्न कुवाबाट सात जर्किन पानी लिएर ममाथि हालिदेऊ। अलि निको भयो भने म मानिसहरूमा गएर वसियत गर्छु। उहाँको त्यो इच्छा पूरा गर्न कपडा धुने ठूलो भाँडोमा उहाँलाई बसालियो र उहाँमाथि धेरै पानी हालियो । उहाँले भयो भयो भन्नुभयो।

त्यति बेला उहाँलाई केही राहत भयो र मस्जिदमा जानुभयो। टाउकोमा पट्टी बाँधिएको थियो । मञ्चमा गई बसेर प्रवचन दिनुभयो । उहाँको त्यो अन्तिम बैठक थियो । उहाँले अल्लाहको प्रशंसा गर्दै भन्नुभयो : साथी हो, मेरो अगाडि आओ । मानिसहरू उहाँको नजिक भए। त्यसपछि उहाँले भन्नुभयो : यहुदी र क्रिश्चियनमाथि अल्लाहले निन्दा गरेका छन् किनभने उनीहरूले ईशदूतहरूको कब्रिस्तानलाई मस्जिद बनाएका थिए। एकअर्को हदिसमा वर्णन गरिएको छ : अल्लाहको तर्फबाट यहुदी र

क्रिश्चियनमाथि विनाश होस् किनभने उनीहरूले ईशदूतहरूको कब्रिस्तानलाई मस्जिद बनाएका थिए ।[१] उहाँले भन्नुभयो : तिमीहरू मेरो कब्रिस्तानलाई पूजा गर्ने थलो नबनाउनु । [२]

त्यसपछि उहाँले आफुबाट बदला लिन आफुलाई प्रस्तुत गर्दै भन्नुभयो: मैले कसैलाई पिटेको भए मेरो पिठयूँ हाजिर छ उसले बदला लिओस् । यदि मैले कसैको इज्जत घात गरेको भए उसले मेरो इज्जत घात गरोस् ।

त्यसपछि ईशदूत मञ्चबाट ओर्लेर जोहरको नमाज पढी फेरि मञ्चमा जानुभयो र शत्रुताको बारेमा आफ्ना विगतका कुराहरू दोहोऱ्याउनुभयो । एक जनाले भन्यो : तपाईंको जिम्मामा मेरो तीन दिरहम पैसा बाँकी छ । उहाँले फजल बिन अब्बासलाई त्यो पैसा दिन भन्नुभयो । त्यसपछि अन्सारको बारेमा वसियत गर्दै भन्नुभयो : म तिमीहरूलाई अन्सारको बारेमा वसियत गर्छु किनभने उनीहरू मेरा हृदयका साथी हुन् । उनीहरूले आफ्नो कर्तव्य पूरा गरेका छन् तर उनीहरूको अधिकार बाँकी छ । तसर्थ उनीहरूका सज्जन व्यक्तिहरूको आदर गर्नु र उनीहरूका खराप व्यक्तिलाई माफ गर्नु । एकअर्को हदिसमा छ, उहाँले भन्नुभयो : मानिसहरू शिक्षित हुँदै जाने छन् तर न्याय घट्दै जाने छ । यतिसम्म कि न्याय खानामा नुन सरह शेष रहने छ । तसर्थ तिमीहरूमध्ये कुनै व्यक्ति प्रतिनिधि भयो भने उसले उनीहरूका सज्जनको आदर गरोस् र उनीहरूका खराप मानिसहरूलाई माफ गरोस् ।[३]

त्यसपछि ईशदूतले भन्नुभयो : एक जना उपासकलाई अल्लाहले स्वतन्त्रता दिएको छ । चाहे उसले दुनियाँको चमकदमक र रंगीचंगी अपनाओस् चाहे अल्लाहकहाँ जे छ त्यो अपनाओस् । तर उसले अल्लाहकहाँ भएको वस्तुलाई अपनाएको छ । अबु सईद खुदरीको बयान छ : त्यो कुरा सुनेर अबु बकर रुन थाले । उनले भने : हामी आफ्नो आमाबुबा समेत तपाईंप्रति बलिदान हुन्छौं । त्यस कुरामा हामीलाई आश्चर्य भयो । मानिसहरूले अबु बकरतिर इशारा गर्दै भने : यो बुढोलाई हेर । ईशदूतले त एक जना उपासकको बारेमा भन्नु भएको थियो : अल्लाहले उसलाई दुनियाँको चमकदमक तथा रंगीचंगीमध्ये मन परेको कुरा अपनाउन वा अल्लाहकहाँ जे छ त्यो अपनाउन स्वतन्त्रता दिएको छ । यो बुढोले भन्दैछ : हामी आफ्नो बाबुआमा समेत ईशदूतप्रति बलिदान हुन्छौं । तर केही दिनपछि थाहा भयो ।

१सही बुखारी भाग १, मोअत्ता इमाम मालिक
२ मोअत्ता इमाम मालिक
3 सही बुखारी भाग १

जुन उपासकलाई त्यो स्वतन्त्रता दिइएको थियो उहाँ त ईशदूत नै हुनुहुन्थ्यो । हामीमा अबु बकर सबैभन्दा बढी ज्ञानी थिए । [१]

त्यसपछि ईशदूतले भन्नुभयो : मलाई साथ दिने र आर्थिक सहयोग गर्नेहरूमा अबु बकर सबैभन्दा अगाडि छन् । यदि मैले अल्लाह बाहेक कुनै अरूलाई मित्र बनाउँथे भने अबु बकरलाई नै बनाउँथें । मलाई उनीसँग इस्लामी भाइबन्दुत्व र माया छ । मस्जिदमा कुनै ढोका नछोडियोस् । त्यसलाई अनिवार्य बन्द गरियोस् सेवाय अबु बकरको ढोकाको । [२]

## देहान्त हुनुभन्दा चार दिन पहिला

देहान्त हुनुभन्दा चार दिन पहिला विहीबारको दिन पीडाले मुर्छाउँदा उहाँले भन्नुभएको थियो : एउटा कागज ल्याऊ म तिमीहरूलाई एउटा कुरा लेखिदिन्छु त्यसपछि तिमीहरू पथभ्रष्ट हुने छैनौ । त्यतिखेर घरमा कैयन व्यक्तिहरू थिए । उनीहरूमा उमर पनि थिए । उनले भने : उहाँलाई धेरै पीडा भइरहेको छ । तिमीहरूसित कुरआन छ । अल्लाहको किताब नै तिमीहरूको लागि प्रयाप्त छ । त्यो कुरा गरेपछि घरमा बसेका मानिसहरूमा वादविवाद भयो । कुनैले भने,कागज ल्याओ , ईशदूतले केही लेखिदिनु हुनेछ । कसैले उमरले भनेको कुराको समर्थन गर्दै थिए । यसरी मानिसहरूले हल्लाह एवं विवाद गरेपछि ईशदूतले भन्नुभयो : यहाँबाट उठेर जाओ ।[3]

त्यसै दिन उहाँले तीन कुराको वसियत गर्दै भन्नुभयो : १ यहुदी , क्रिश्चियन र बहुदेववादीहरूलाई अरब टापुबाट निकाल्नु २, प्रतिनिधिहरूको सत्कार मैले झैं गर्नु । तेस्रो कुरा हदिस बयान गर्नेले भुल्यो । शायद कुरआन र सुन्नतलाई बलियोसँग समात्न भन्नुभएको थियो वा उसामाको नेतृत्वमा गएको लस्करलाई लड्ने वसियत गर्नुभएको थियो वा नमाज, दास र दासिकाको ख्याल गर्न वसियत गर्नु भएको थियो ।

ईशदूत अस्वस्थको शक्त पीडामा हुँदा पनि देहान्तको चार दिन पहिला विहिबारको दिनसम्म सबै नमाज आफैले पढाउनुभयो । त्यो दिन पनि मग्रिबको नमाज उहाँले नै पढाउनुभयो । त्यस नमाजमा उहाँले सुरह अल मुर्सलात पढ्नुएको थियो ।[४]

---

१ सही बुखारी व मुस्लिम, मिशकात भाग २
२ सही बुखारी भाग १
3 सही बुखारी व मुस्लिम, बुखारी भाग १

४ सही बुखारी भाग २

इशाको समयमा स्वास्थ्य बढी जटिल भएको कारण मस्जिदमा जान सक्नुभएन । माई आइशा भन्छिन् : ईशदूतले सोध्नुभयो, के मानिसहरूले नमाज पढे ? हामीले भन्यौँ, पढेका छैनन् । हे ईशदूत, उनीहरू तपाईंको प्रतीक्षामा छन् । उहाँले भन्नुभयो : कपडा धुने भाँडोमा पानी भर । हामीले पानी भऱ्यौं । स्नान गरेर उहाँ उठ्न लाग्दा बेहोस हुनुभयो । अलिकति होसमा आएपछि उहाँले सोध्नुभयो : के मानिसहरूले नमाज पढे ? हामीले भन्यौँ, पढेका छैनन्, उनीहरूले तपाईंको प्रतीक्षा गरिरहेका छन् । त्यसपछि पहिला झै दोस्रो र तेस्रो पटक पनि त्यस्तै भयो । उहाँले स्नान गर्नुभयो । स्नान गरेर उहाँ उठ्न लाग्दा फेरि बेहोस हुनुभयो । अन्तिममा उहाँले अबु बकरलाई नमाज पढाउन भन्नुभयो । ती दिनहरूमा अबु कबरले नमाज पढाए । [१]

ईशदूतको उपस्थितिमा उनले १७ पटक नमाज पढाए । बिहीबार इशाको नमाज, सोमबार फजरको नमाज र तीन दिन पाँच वखतको पन्ध्र नमाज ।[२]

मानिसहरू अबु बकरको बारेमा भ्रममा नपरुन् भनेर[३] माई आइशाले ईशदूतसँग इमामतको जिम्मेवारी अबु बकरको साटो कुनै अरूलाई सुम्पिन तीन चार पटक आग्रह गरिन् । तर ईशदूतले हरेक पटक इन्कार गर्नुभयो । तिमीहरू पनि युसुफ वालीहरु जस्तै हौ ।[४] अबु बकरलाई नमाज पढाउन भन । [५]

## देहान्त हुनुभन्दा तीन दिन पहिला

जाबिरमार्फत वर्णन गरिएको छ, उनी भन्छन् : मैले तीन दिन पहिला उहाँले भन्नुभएको थियो : याद राख तिमीहरूमध्ये हरेकको मृत्यु अल्लाहमाथि आस्था राखेको अवस्थामा होस् ।

---

१ सही बुखारी व मुस्लिम, मिशकात भाग १
२ सही बुखारी फतहुलबारी भाग २ हदिस नं ६८१, मुस्लिम हदिस नं १००,मुस्नद अहमद भाग ६
३ सही बुखारी हदिस नं ४४४५, मुस्लिम हदिस नं९३,९४
४ अल्लाहका संदेष्टा यूसुफको बारेमा जुन महिलाहरुले एजिप्टकी रानीको निन्दा गरेका थिए उनीहरुले देखावटी रुपमा उसको निन्दा गरे पनि उनीहरुले युसुफलाई देखेर आफनो औंला काटेपछि उनीहरु पनि त्यसमा फसेका छन् भन्ने कुरा थाहा भयो । मुखमा एउटा पेटमा अर्को कुरा थियो । यै कुरा यहाँ पनि भएको थियो । देखावटी रुपमा अल्लाहका संदेष्टासँग अबु बकरलाई उहाँका मित्र हुन् भनिएको थियो । उनी उहाँको ठाउँमा भएको भने शोकका कारण कुरआन पढ्न वा सुनाउन सक्दैनन् थिए । तर त्यसै अस्वस्थमा अल्लाहका संदेष्टाको निधन भयो भने अबु बकरको बारेमा नकारात्मक सोच उब्जन्छ भन्ने कुरा मानिसहरुको मनमा थियो । गुरुमा आइशाको यस आग्रहमा अन्य गुरुमाहरुले पनि समर्थन गरेका थिए । त्यसैकारण उहाँले भन्नुभयो तिमीहरु पनि युसुफको युगकी महिलाहरू जस्तै हौं । अर्थात तिमीहरुको पेटमा केही छ मुखमा केही छ ।
५ सही बुखारी भाग १

## देहान्त हुनुभन्दा एक दिन वा दुई दिन पहिला

शनिबार वा आइतबार ईशदूतले आफ्नो स्वास्थ्यमा अलिकति सुधार भएको अनुभूति गर्नुभयो र दुई जना साथीहरूको सहाराले जोहरको नमाज पढ्न जानुभयो । त्यतिखेर अबु बकर साथीहरूलाई नमाज पढाउँदै थिए । अबु बकर ईशदूतलाई देखेर पछाडि हट्न खोजे । उहाँले भन्नुभयो पछाडि नहट । ईशदूतले आफुलाई ल्याउने साथीहरूसँग भन्नुभयो, मलाई उनको साथमा बसालिदेऊ । तसर्थ उहाँलाई उनको दायाँतर्फ बसालियो । त्यसपछि अबु बकरले ईशदूतको इमामतमा नमाज पढ्दै सहाबीहरूलाई तकबीर सुनाए ।[१]

## देहान्त हुनुभन्दा एक दिन पहिला

देहान्त हुनुभन्दा एक दिन पहिला आइतबारको दिन ईशदूतले आफ्ना सबै दासीहरूलाई मुक्त गरिदिनुभयो । आफ्नो साथमा पाँच सात दिनार पैसा थियो त्यो पनि दान गर्नुभयो । आफ्नो हतियार मुसलमानहरूलाई उपहार स्वरूप दिनुभयो । तेल पनि नभएकाले माई आइशाले आफ्नो छिमेकीकहाँ बत्तीमा तेल भर्न पठाइन् । ईशदूतको एउटा युद्धवस्त्र एक जना यहुदीकहाँ ७५ किलो जौको बदलामा धरौटी राखिएको थियो ।[२]

## पवित्र जीवनको अन्तिम दिन

अनसको भनाइ अनुसार, सोमबारको दिन थियो । मानिसहरू फजरको नमाज पढिरहेका थिए । इमामत अबु बकरले गरेका थिए । अचानक ईशदूतले माई आइशाको कोठाको पर्दा उठाएर नमाज पढेका साथीहरूलाई हेर्नुभयो र मुस्काउनुभयो । उता अबु बकर आफ्नो कुर्कुच्चाले टेकेर पछाडि सरे । ईशदूत नमाजको लागि आउन चाहानु भएको छ भन्ने उनलाई लाग्यो । अनसको बयान छ, उनी भन्छन् : ईशदूत अचानक आउँदा मुसलमानहरू यति खुशी भए कि उहाँको हाल खबर सोध्न नमाज छोडछन् कि जस्तो भयो । तर ईशदूतले हातले इशारा गरी आफ्नो नमाज पूरा गर भन्नुभयो । त्यसपछि आफ्नो कोठाभित्र जानुभयो र पर्दा झार्नुभयो । [३]

त्यसपछि उहाँले अर्को नमाज पढ्ने अवसर पाउनु भएन । दिउँसो हुन लाग्दा उहाँले आफ्नी छोरी फातिमालाई बोलाउनुभयो उनीसँग केही भलाकुसारी गर्नुभयो । उनी रून थालिन् । उहाँले उनलाई फेरि बोलाउनुभयो र केही भलाकुसारी गर्नुभयो त्यसपछि उनी हाँस्न थालिन् । माई आइशाको बयान छ : हामीले पछि उनलाई

---

१ सही बुखारी भाग १, हदिस नं ६८३,७१२, ७१३
२ सही बुखारी हदिस नं २०६८,२०९६,२२००, २२१५, २२५१, २२५२, २३८६, २५०९, २५१३, २९१६,४१६७, मगाजीको अन्तिममा छ : जब उहाँको निधन भयो तब पनि उहाँको युद्ध वस्त्र धरौटीमा राखिएको थियो । मुस्नद अहमद अनुसार त्यो युद्ध वस्त्रलाई फर्काउने समय पाउनु भएन
3 सही बुखारी भाग २, फतहुलबारी हदिस नं ६८०, ६८१, ७५४,१२०५,४४४८

बोलाएर उनीसँग सोधेपछि उनले भनिन् : पहिलो चोटि उहाँले म यसै अस्वस्थ अवस्थामा बिदा हुन्छु भन्नुभएको थियो त्यसकारण म रून लागेँ । त्यसपछि उहाँले आफ्नो परिवारमा सबैभन्दा पहिला म उहाँको पछाडि जाने छु भन्नुभयो त्यसकारण म खुसीले हाँसेकी थिएँ ।[१]

ईशदूतले फातिमालाई सम्पूर्ण संसारकी सरदार बन्ने शुभसूचना पनि दिनुभयो ।[२]

ठीक त्यतिखेर ईशदूत पीडाले छट्पटाएको देखेर फातिमाले अचानक चिच्याएर भनिन् : बुबा तपाईंलाई पीडा भएको छ ? उहाँले जवाफमा भन्नुभयो तिम्रो बुबालाई आजको दिनपछि कुनै पीडा हुने छैन । [३]

ईशदूतले हसन र हुसैनलाई बोलाएर चुम्बन दिनुभयो उनीहरूमाथि दया गर्न वसियत गर्नुभयो । आफ्नी श्रीमतीहरूलाई बोलाएर उनीहरूलाई उपदेश दिनुभयो ।

अर्को तर्फ छिन छिनमा पीडा बढ्दै थियो । त्यो बिखको असर पनि जाहेर हुँदै थियो जुन उहाँलाई खैबरमा खुवाइएको थियो । तसर्थ उहाँले माई आइशासँग भन्नुभयो : हे आइशा, खैबरमा मैले जुन खाना खाएको थिएँ त्यसको असर महसुस गर्दैछु । यतिखेर मलाई त्यो बिखले गर्दा मेरा नसाहरू काटिए जस्तो महसुस भएको छ ।[४]

ईशदूतले आफ्नो अनुहारमा एउटा दोसल्ला राख्नुभएको थियो । साँस फुल्न लाग्दा उहाँले त्यसलाई आफ्नो अनुहारबाट हटाउनु हुन्थ्यो । त्यसै हालतमा उहाँले भन्नुभयो, त्यो नै उहाँको अन्तिम शब्द थियो र मानिसहरूको लागि अन्तिम वसियत थियो : यहुदी र क्रिश्चियनमाथि अल्लाहले निन्दा गरेका छन् । किनभने उनीहरूले अल्लाहका दूतहरूको चिहानलाई मस्जिद बनाएका थिए । उनीहरूको त्यस क्रियाकलापले गर्दा अरबको धर्तीमा दुईटा धर्म हुन्छन् कि भन्ने ईशदूतलाई चिन्ता लागेको थियो ।[५]

उहाँले सहाबीहरूलाई वसियत गर्दै भन्नुभयो : नमाज, नमाज र तिमीहरूका मातेहतमा रहेका दास दासिका । यी शब्द उहाँले कैयन चोटि दोहोऱ्याउनु भएको थियो । [६]

---

१ सही बुखारी भाग २
२ रहमतुल लिल् आलमीन भाग १
3 सही बुखारी भाग २

४ सही बुखारी भाग २
५ सही बुखारी फतहुलबारी भाग १, हदिस नं ४३५, १३३०, १३९०, ३४५३, ४४४१, ४४४३,४४४४,५८१५,५८१६, तबकात इब्ने सअद भाग २
६ सही बुखारी भाग २

## प्राणकष्ट शुरु

प्राणकष्ट सुरु भयो । माई आइशाले अडेस लागेर ईशदूतलाई सहारा दिइन् । उनको भनाइ छ : अल्लाहले ममाथि गरेको वरदानहरूमध्ये एउटा वरदान के थियो भने ईशदूतको देहान्त मेरो घरमा बस्ने पालो परेको दिन भयो । त्यो पनि मेरो काखमा भयो । अल्लाहले उहाँको निधन हुँदा उहाँको थुकलाई मेरो थुकमा मिसाइदिए । अबु बकरका छोरा अब्दुर्रहमान आए । उनको हातमा दतिउन थियो । मैले उहाँलाई सहारा दिएकी थिएँ । मैले उहाँलाई दतिउनतिर हेरेको देखेँ । उहाँले दतिउन चाहेको कुरा बुझेँ । मैले भने : तपाईंको लागि दतिउन ल्याउँ ? उहाँले टाउकोको इशाराले ल्याउन भन्नुभयो । मैले दतिउन लिएर उहाँलाई दिएँ । उहाँलाई त्यो दतिउन साह्रो लाग्यो । मैले भने, के यसलाई नरम बनाइदिउँ ? उहाँले टाउकाको इशाराले नरम बनाउन भन्नुभयो । मैले दतिउन नरम बनाएँ । उहाँले राम्रोसँग दतिउन गर्नुभयो । उहाँको अगाडि कचौरामा पानी थियो । उहाँले दुवै हातले कचौराबाट पानी लिएर मुख पुछ्दै भन्नुभयो : ला इलाह इल्लल्लाह अर्थात अल्लाह बाहेक कोही पूजनीय छैन । मृत्युमा कष्ट छ ।[1]

दतिउन गरिसकेपछि उहाँले हात अथवा औंला उठाउँदै छततिर नजर उठाउनुभयो । दुवै ओठमा केही स्पर्श भयो । माई आइशाले कान लगाएर सुन्दा उहाँले भनिरहनु भएको थियो : हे अल्लाह जसरी ईशदूत, सहिद र सज्जनहरूलाई पुरस्कृत गरेका छौ मलाई पनि क्षमा गर, ममाथि दया गर र मलाई महामित्रकहाँ पुऱ्याइदेऊ । हे महामित्र अल्लाह ।[2]

त्यो अन्तिम वाक्य उहाँले तीन पटक दोहोऱ्याउनुभयो । ठीक त्यसै बेला हात लत्रियो र उहाँ महामित्रकहाँ प्रस्थान हुनुभयो । **इन्ना लिल्लाहे वइन्ना यलैहे राजेउन्** अर्थात हामी अल्लाहका हौँ र हामीलाई उनैतर्फ जानु छ ।

त्यो घटना हिजरी सम्बत ११ साल रब्बिउल औवल १२ तारिख सोमबारको दिन विहान घाम चर्केको बेलामा घटेको थियो । त्यस वखत ईशदूतको उमेर ६३ वर्ष चार दिनको थियो ।

## शोकसागर

मनलाई रूवाउने त्यो खबर तुरुन्तै फैलियो । मदिनावासीमाथि शोकको पहाड खस्यो । ब्रह्माण्ड र त्यसका किनाराहरू अँध्यारा भए । अनस भन्छन् : ईशदूत

---

१ सही बुखारी भाग २
२ सही बुखारी भाग २

हामीकहाँ आउँदाको दिनभन्दा उज्यालो मैले कुनै दिन देखिनँ र जुन दिन उहाँको देहान्त भयो त्यो दिनभन्दा अँध्यारो अरू कुनै दिन देखिनँ ।[१]

उहाँको देहान्त हुँदा फातिमाले अलापविलाप गर्दै भनिन् : हाय बाबा, तपाईं अल्लाहको पुकारमा हाजिर हुनुभयो । तपाईंको बासस्थान स्वर्ग छ । हाय बाबा, हामी जिब्रइललाई तपाईंको निधनको खबर दिन्छौं ।

## उमरको धारणा

ईशदूतको निधनको खबर सुनेर उमरको होसै उड्यो । उनले खडा भएर भन्न थाले : केही मुनाफिकहरूले ईशदूतको निधन भएको ठानेका छन् । वास्तवमा उहाँको निधन भएको छैन । उहाँ त आफनो पालनकर्ताकहाँ जानुभएको छ । जसरी इमरानको छोरा मुसा जानुभएको थियो र त्यहाँ चालीस रात बसेर फेरि फर्केका थिए । उहाँ फर्केर नआउँदासम्म उहाँको निधन भएको छ भनिएको थियो ।

अल्लाहको कसम ईशदूत अवश्य फर्केर आउनु हुनेछ । ती व्यक्तिहरूको हातखुट्टा भाँचिइने छ जसले उहाँको निधन भयो भनेर भन्छ ।[२]

## अबु बकरको धारणा

उता अबु बकर शोकाकुल अवस्थामा आफ्नो घरबाट घोडामा सवार भएर आए । घोडाबाट झरेर मस्जिदे नवबीमा गए । मानिसहरूसँग केही कुरा नगरी सीधै माई आइशाको कोठामा गए । ईशदूतको शब राखिएको ठाउँमा गए । उहाँको पवित्र शरीर धर्के यमनी दोसल्लाले ढाकिएको थियो । अबु बकरले उहाँको अनुहारबाट दोसल्ला हटाए र अनुहार चुमेर रूँदै भने : मेरा आमा बुबा उहाँप्रति बलिदान होउन् । अल्लाहले उहाँलाई दुई पटक मृत्यु दिने छैन । अल्लाहले जुन मृत्यु लेखेको थियो त्यो भयो ।

त्यसपछि अबु बकर बाहिर निस्के । त्यतिबेला पनि उमरले मानिसहरूसँग कुराकानी गरिरहेका थिए । अबु बकरले उमरसँग भने : हे उमर बस । उमर बस्न मानेनन् । साथीहरूले आफ्नो ध्यान उमरबाट हटाएर अबु बकरतिर केन्द्रित गरे । अबु बकरले भने : तिमीहरूमध्ये जसले मुहम्मदﷺको पूजा गर्थ्यो उनीहरूलाई थाहा हुनुपर्छ, उहाँको निधन भइसकेको छ । तिमीहरूमध्ये जसले अल्लाहको पूजा गर्थ्यो अल्लाह सदैवको लागि जीवित छ । कहिल्यै मर्ने छैन । अल्लाहको भनाइ छ :

---

१ दारमी,मिश्कात भाग २, अनसमार्फत वर्णन गरिएको छ । जुन दिन उहाँ मदिना आउनु भएको थियो त्यो दिन हरेक वस्तु चम्किएको थियो, जुन दिन उहाँको निधन भयो त्यो दिन हरेक वस्तु अँध्यारा भएका थिए । जब हामीले अल्लाहका संदेष्टालाई दफनाउदै थियौं त्यतिखेर हामीलाई आफ्नो मन बदलिएको अनुभूति भयो ।

२ इब्ने हेशाम भाग २

وَمَا مُحَمَّدٌ إِلَّا رَسُولٌ قَدْ خَلَتْ مِنْ قَبْلِهِ الرُّسُلُ ۚ أَفَإِنْ مَاتَ أَوْ قُتِلَ انْقَلَبْتُمْ عَلَىٰ أَعْقَابِكُمْ ۚ وَمَنْ يَنْقَلِبْ عَلَىٰ عَقِبَيْهِ فَلَنْ يَضُرَّ اللَّهَ شَيْئًا ۗ وَسَيَجْزِي اللَّهُ الشَّاكِرِينَ (آل عمران: ١٤٤ )

मुहम्मदﷺ केवल ईशदूत हुन् । उनीभन्दा पहिलाका सबै ईशदूतहरू पनि संसारबाट गए । तसर्थ के मुहम्मदﷺको निधन भयो वा उहाँलाई सहिद गरियो भन्दैमा तिमीहरूले इस्लाम त्याग्छौ ? यदि इस्लाम त्याग्यौ भने तिमीहरूले अल्लाहको केही विगार्न सक्दैनौ । र अल्लाहले छिटो नै कृतज्ञ गर्नेहरूलाई प्रतिफल दिनेछ । (आले इमरान:१४४)

शोकग्रस्त सहाबीहरूलाई अबु बकरको वक्तव्य सुनेपछि ईशदूतले बिदाइ लिएको कुरामा विश्वास भयो । अब्बासको छोरा भन्छन् : अल्लाहले कुरआनको यो श्लोक अवतरण गरेका छन् भन्ने कुरा साथीहरूलाई थाहा नै थिएन जस्तो लागेको थियो । अबु बकरले त्यसको पाठ गरेपछि सबैले उनीबाट त्यो आयत लिए र सबैले त्यसै श्लोकको पाठ गरेको मैले सुनेँ ।

सईद बिन मुसैयबमार्फत वर्णन गरिएको छ, उमरले भने : अबु बकरले त्यो श्लोक पढेको सुनेपछि म बिचल्लित भएँ । मेरो शरीरलाई मेरा खुट्टाले पनि थाम्न सकेनन् । अबु बकरले त्यो श्लोक पढेको सुनेर म भूइँमा ढलेँ । किनकि ईशदूतको देहान्त भएको कुरामा मलाई विश्वास भयो ।[१]

## अन्त्यष्टि तथा अन्तिम संस्कार

उता ईशदूतको अन्त्यष्टि तथा अन्तिम संस्कार गर्नुभन्दा पहिला नै उहाँको कायम मुकाम को हुने भन्ने बारे विवाद भयो । सकिफा बनी सायदा भन्ने ठाउँमा अन्सार मुहाजिरबीच वहस भयो ,वादप्रतिवाद भयो र छलफल भयो । अन्तिममा अबु बकरको खेलाफत अर्थात नेतृत्वमा सहमती जुट्यो । त्यसै व्यस्ततामा सोमबारको बाँकी बचेको दिन पनि सिद्धयो । रात पऱ्यो । मानिसहरू ईशदूतको अन्त्यष्टि गर्नुको सट्टा अन्य काममा व्यस्त भए । रात वित्यो । मंगलबार विहान भयो । त्यतिबेलासम्म उहाँको पवित्र शरीर धर्के दोसल्लाहले ढाकिएको अवस्थामा विस्तारामा थियो । घरका मानिसहरूले घरको ढोका बन्द गरिदिए ।

मंगलबार उहाँको पवित्र शरीरबाट कपडा ननिकाली स्नान गराइयो । स्नान गराउने व्यक्तिहरूमा अब्बास,अली, अब्बासका दुई जना छोरा फजल र कुसम, ईशदूतले मुक्त गरेको दासी शकरान, उसामा बिन जैद र औस बिन खौली थिए । अब्बास, फजल र कुसमले उहाँको शरीरलाई ओल्टोपाल्टो पारे, उसामा र शकरानले पानी हाले र अलीले स्नान गराए त्यस क्रममा औसले उहाँको शरीरलाई आफ्नो छातीमा अँड्याएँ ।[२]

१ सही बुखारी भाग २
२ इब्ने माजा भाग १

उहाँलाई बयरको पात मिश्रृत पानीले तीन पटक स्नान गराइयो । उहाँलाई कुबामा अवस्थित सअद बिन खैसमाको गर्स नामी कुवाको पानीले स्नान गराइएको थियो । किनभने उहाँले त्यहाँको पानी पिउनुहुन्थ्यो ।[१]

त्यसपछि उहाँलाई तीन वटा सेतो यमनी कफन ओडाइयो । त्यसमा दौरा र पगरी थिएन ।[२] त्यसकारण उहाँलाई दोसल्ला नै ओढाएर राखिएको थियो ।

उहाँलाई राख्ने अन्तिम ठाउँ बारे साथीहरूबीच मतभेद भयो । अबु बकरले भने : मैले ईशदूतबाट सुनेको छु : कुनै पनि ईशदूतलाई आफ्नो मृत्यु भएको ठाउँबाट उठाइएन । त्यही ठाउँमा उनीहरूलाई राखियो । त्यस निर्णयपछि अबु तलहाले उहाँको विस्तारा उठाए जहाँ ईशदूतको निधन भएको थियो । त्यहीँ कबर खनिइयो । कबर लहदी थियो अर्थात बाकस आकारको ।

त्यसपछि दश दश जना सहाबीहरूले कोठामा गएर जनाजहको नमाज पढे । इमाम कोही बनेनन् । सबैभन्दा पहिला आफ्नो खानदान बनु हाशिमले जनाजहको नमाज पढ्यो । त्यसपछि मुहाजिरहरूले र त्यपछि अन्सारले । पुरुषले सकेपछि महिलाले नमाजे जनाजह पढिन् त्यसपछि बालबालिकाहरूले जनाजहको नमाज पढे ।

जनाजहको नमाज पढ्ने क्रममा मंगलबारको पूरै दिन वित्यो । रात भयो । रातीमा उहाँको पवित्र शरीरलाई माटोको हवाला गरियो । माई आइशा भन्छिन् : हामीलाई ईशदूतलाई दफन गरिएको बारेमा थाहा भएन । हामीले बुधबारको मध्यरातमा, एक हदिस अनुसार रातको अन्तिम पहरमा कोदालीको आवाज सुन्यौं ।[३]

---

१ तबकात इब्ने सअद भाग २,
२ सही बुखारी भाग १, फतहुलबारी भाग ३ हदिस नं १२६४,१२७१,१६८,१२७२,१२७३ १२७४,१३८७, मुस्लिम भाग १ हदिस नं ४५
3 मुस्नद अहमद भाग ६, बुखारी, फतहुलबारी,मुस्लिम, मिश्कात,इब्ने हेशाम, तलकीहुल अहलुल असर, रहमतुल लिल आलमिन

# ईशदूतका परिवारजन

**१,खदिजा** : हिजरत गर्नुअघि मक्कामा ईशदूतका परिवारमा आफु र आफ्नी श्रीमती खदिजा हुनुहुन्थ्यो । विवाह गर्दा उहाँको उमेर पच्चीस वर्षको थियो भने खदिजाको उमेर चालीस वर्षको थियो । खदिजा उहाँकी पहिली श्रीमती हुन् । उनी जीवित रहँदासम्म उहाँले कसैसँग विवाह गर्नुभएन । उहाँको सन्तानमध्ये इब्राहीम बाहेक सबै छोराछोरी उनैको कोखबाट जन्मेका थिए । छोराहरूमध्ये कोही पनि बाँचेनन् । तर छोरीहरू भने जीवित रहिन् । उनीहरूको नाम यस प्रकार छ : जैनब, रुकैया, उम्मे कुल्सुम र फातिमा । जैनबको विवाह हिजरत गर्नुभन्दा पहिला उहाँकी फुपुको छोरा अबुल आस बिन रबीअसँग भएको थियो । रुकैया र उम्मे कुल्सुमको विवाह एकएक गरी उस्मानसँग भएको थियो । फातिमाको विवाह बदर र उहुद युद्धको अन्तरालमा अली बिन अबी तालिबसँग भएको थियो । उनको कोखबाट हसन, हुसैन र उम्मे कुल्सुम जन्मिए ।

ज्ञात रहोस् ईशदूतलाई आफ्नो समुदायको दाँजोमा आफ्नो विभिन्न उद्देश्यका कारण चारभन्दा बढी विवाह गर्न सक्ने उच्च विशेषता हासिल थियो । तसर्थ जुन महिलाहरूसँग उहाँले विवाह गर्नुभयो उनीहरूको संख्या ११ थियो । उनीहरूमध्ये नौ वटी श्रीमतीहरू उहाँको देहान्त हुँदा जीवित थिइन् भने दुइ वटी श्रीमतीको निधन उहाँको जीवनमा नै भएको थियो । ती दुई वटी श्रीमती खदिजा र जैनब बिन्त खुजैमा हुन् । उनीहरूबाहेक दुई जनाभन्दा अधिक महिलासँग एकसाथ उहाँको विवाह भयो कि भएन भन्ने बारेमा विवाद छ । तर उनीहरूलाई बिदाइ गरिएको थिएन भन्ने बारेमा एकमत छ । तल हामी पवित्र श्रीमतीहरू र उनीहरूको जीवन बारे क्रमश संक्षिप्त चर्चा गर्दैछौं ।

**२, सौदा बिन्त जुमआ** : उनीसँग ईशदूतले खदिजाको देहान्त भएको एक महिनापछि ईशदूतत्वको दशौं साल शौवालको महिनामा विवाह गर्नुभएको थियो । उहाँले विवाह गर्नुअघि सौदा आफ्नो काकाको छोरासँग विवाहबन्धनमा बाँधिएकी थिइन् । उनी आफ्नो श्रीमानको निधनको कारण विधुवा भएकी थिइन् । सौदाको निधन हिजरी सम्बत ५४ साल शौवालको महिनामा मदिनामा भएको थियो ।

**३, आइशा सिद्दिका बिन्त अबु बकर :** उनीसँग ईशदूतले ईशदूतत्वको एघाह्रौं सालमा विवाह गर्नुभएको थियो । अर्थात सौदालाई विवाह गरेको एक वर्षपछि र हिजरतको दुई वर्ष पाँच महिनाअघि । त्यतिबेला उनको उमेर ६ वर्षको थियो । हिजरतको सात महिनापछि शौवाल महिनाको १ तारिखमा उनलाई बिदाइ गरियो । त्यस बेला उनको उमेर ९ वर्षको थियो । उनी कन्याँ थिइन् । उनीबाहेक कुनै कन्याँ केटीसँग ईशदूतले विवाह गर्नु भएन । आइशा उहाँकी सबैभन्दा प्यारी श्रीमती थिइन् । उनी उहाँको

समुदायका महिलाहरूमध्ये सबैभन्दा बढी शिक्षित तथा विज्ञ थिइन् । अन्य महिलामाथि उनको प्रधानता त्यति छ जति खानामा सरिद नामक खानाको हुन्छ । हिजरी सम्बत ५७ वा ५८साल शअबान महिनाको १७ तारिखमा उनको निधन भयो र बकिअमा उनलाई राखियो ।

**४, हफ्सा बिन्त उमर बिन खत्ताब :** उनको पहिलाका श्रीमान खुनैस बिन हुजाफा सहमी थिए । उनको निधन बदर र उहुद युद्धको अन्तरालमा भएको थियो । विधुवा भएपछि ईशदूतले उनीसँग विवाह गर्नुभयो । विवाह हिजरी सम्बत ३ सालमा भएको थियो । हिजरी सम्बत ४५ साल शअबानको महिनामा ६० वर्षको उमेरमा उनको निधन मदिनामा भएको थियो र उनलाई बकिअमा राखियो ।

**५, जैनब बिन्त खुजैमा :** उनको सम्बन्ध बनु हिलाल बिन आमिर बिन सअसआ नामी कबिलासँग थियो । दीनदुखिको सहयोगी र दयामायाको कारण उनको नाम अनाथकी आमा परेको थियो । उनी अब्दुल्लाह बिन जहशको विवाहबन्धनमा बाँधिएकी थिइन् । उनी उहुदको युद्धमा सहिद गरिएपछि ईशदूतले हिजरी सम्बत ४ सालमा उनीसँग विवाह गर्नुभयो । उनी केवल तीन वा आठ महिना ईशदूतको विवाहबन्धनमा रहिन् । हिजरी सम्बत ४ साल रब्बियल औवल वा जिकअदाको महिनामा उनको निधन भयो । ईशदूतले उनको जनाजहको नमाज पढाउनुभयो । उनलाई बकिअमा राखिएको छ ।

**६, हिन्दा बिन्त अबी उमैया :** उनी सल्माको बुबाको विवाहबन्धनमा थिइन् । हिजरी सम्बत ४ साल जमादिल आखिरको महिनामा सल्माको बुबाको निधन भएपछि हिजरी सम्बत ४ साल शौवालको महिनामा ईशदूतले उनीसँग विवाह गर्नुभयो । उनी बुद्धिमानी तथा इस्लामी नीतिनियमकी ज्ञानी थिइन् । चौरासी, भनिन्छ हिजरी सम्बत ५९ सालमा र एक भनाई अनुसार हिजरी सम्बत ६२ सालमा उनको निधन भएको थियो । उनलाई पनि बकिअमा राखिएको छ ।

**७, जैनब बिन्त जहश बिन रियाब:** उनको सम्बन्ध बनु असद बिन खुजैमा नामक कबिलासँग थियो । उनी ईशदूतकी फुपुकी छोरी थिइन् । उनको विवाह पहिला जैद बिन हारिसासँग भएको थियो । जसलाई ईशदूतको छोरा ठानिन्थ्यो । तर जैदसँग उनको निभ्न सकेन तसर्थ उनले उनलाई तलाक दिए । इद्दत सकिएपछि ईशदूतलाई सम्बोधित गरिदै निम्न श्लोक अवतरण भयो : जब जैदले उनीबाट आफ्नो आवश्यकता पूरा गरे अनि हामीले उसलाई तिम्रो विवाहबन्धनमा बाँधिदियौं ।

उनको बारेमा कुरआनको अध्याय अहजाबका कैयन श्लोकहरू अवतरण भएका छन् । जसमा मुतबन्नी अर्थात धर्मपुत्रको नाता बारे दुई टुक शब्दमा बताइएको छ । विवरण अगाडि आउँदै छ । जैनबसँग ईशदूतको विवाह हिजरी सम्बत

५ साल जिलकआदा महिना र भनिन्छ ४ सालमा भएको थियो । उनी सबैभन्दा बढी धर्मकर्म गर्ने र दानदक्षिणा दिने महिला थिइन् । हिजरी सम्बत २० सालमा उनको निधन भएको थियो । त्यतिखेर उनको उमेर ५३ वर्षको थियो । ईशदूतको देहान्तपछि ईशदूतकी श्रीमतीहरूमध्ये पहिला निधन हुने श्रीमती उनै हुन् । उनको नमाजे जनाजह उमर बिन खत्ताबले पढाए र उनलाई बकिअमा राखियो ।

**८, जुवेरिया बिन्त हारिस :** उनका पिता खुजाआ कबिलाको शाखा बनु मुस्तलिकका सरदार थिए । जुवेरिया बनु मुस्तलिकबाट बन्दी बनाएर ल्याइएकी थिइन् । उनी साबित बिन कैस बिन शम्मासको भागमा परेकी थिइन् । उनले जुवेरीयालाई तोकेको मुल्य पाए मुक्त गर्ने निर्णय गरे । त्यसपछि ईशदूतले उनको तर्फबाट निश्चित रकम भुक्तानी गरेर उनीसँग विवाह गर्नुभयो । त्यो कुरा हिजरी सम्बत ५ वा ६ सालको हो । त्यस विवाहको कारण मुसलमानहरूले बनु मुस्तलिकका एक सय घरपरिवारलाई मुक्त गरिदिएका थिए । उनीहरूले भने, उनीहरू ईशदूतका ससुराली हुन् । तसर्थ उनी आफ्नो समुदायको सबै महिलाहरूभन्दा इज्जदार भइन् । हिजरी सम्बत ५५ वा ५६साल रब्बियल औवलको महिनामा ६५ वर्षको उमेरमा उनको निधन भयो ।

**९, रमला बिन्त अबु सुफयानः** उनी उबैदुल्लाह बिन जहशको विवाहबन्धनमा थिइन् । उसको साथमा हिजरत गरेर हब्शा गएकी थिइन् । तर अबैदुल्लाहले त्यहाँ गएर इस्लाम त्यागी क्रिश्चियन धर्म लियो र त्यहीँ मऱ्यो । तर रमला आफ्नो धर्म र हिजरतमा नै कायम रहिन् । ईशदूतले हिजरी सम्बत ७ सालमा अमर बिन उमैयालाई आफ्नो पत्र लिएर शाह नजाशीकहाँ पठाउँदा नजाशीलाई रमलासँग आफ्नो विवाह गरिदिन भनी संदेश पनि पठाउनु भएको थियो । उसले रमलाको मन्जुरीमा उहाँसँग विवाह गरिदियो । शरहबिल बिन हसनाको साथमा उनलाई ईशदूतकहाँ पठायो । ईशदूतले खैबरपछि उनलाई आफ्नो घरमा ल्याउनुभयो । उनको निधन हिजरी सम्बत ४२ वा ४४ वा ५० सालमा भएको थियो ।

**१०, सफिया बिन्त हुयै बिन अख्तबः** उनको सम्बन्ध बनी इज्रायलबाट थियो । खैबरमा बन्दी बनाइएकी थिइन् । ईशदूतले आफ्नो भागमा उनलाई रोज्नुभयो । उनलाई मुक्त गरी विवाह पनि गर्नुभयो । त्यो कुरा हिजरी सम्बत ७ सालको हो । खैबरदेखि बाह्र मिलको दुरीमा मदिनामार्गको सद सहबाअ नामक ठाउँमा उनको बिदाइ गराइ आफ्नो घर ल्याउनुभयो । उनको निधन हिजरी सम्बत ५० वा ५२ वा ३६ सालमा भएको थियो र उनलाई बकिअमा राखिएको छ ।

**११, मैमुना बिन्त हारिस :** उनी उम्मे फज्ल लुबाबह बिन्त हारिसकी बहिनी थिइन् । ईशदूतले उनीसँग हिजरी सम्बत ७ साल जिकअदाको महिनामा उमराहे कजाबाट फुर्सद पाएपछि सही भनाइ अनुसार एहराम फुकालेपछि विवाह गर्नुभएको थियो ।

मक्कादेखि ९ मिलको दुरी सरिफ भन्ने ठाउँमा उनको बिदाइ गराउनुभयो । हिजरी सम्बत ६१ वा ६३ सालमा उनको त्यहीँ निधन भयो र उनको अन्त्यष्टि पनि त्यहीँ गरियो । उनको कबर भएको ठाउँ आज पनि प्रसिद्ध छ ।

यी ११ वटी श्रीमतीहरू ईशदूतको विवाह बन्धनमा थिइन् र उहाँको मायाप्रेममा बसिन् । उनीहरूमध्ये दुई वटी श्रीमती खदिजा र जैनबको निधन उहाँको निधनभन्दा पहिला भएको थियो भने ९ वटी श्रीमतीहरू उहाँको निधनपछि जीवित रहे । उनीहरूबाहेक दुई जनालाई बिदाइ गरिएको थिएन । उनीमध्ये एक जनाको सम्बन्ध केलाब कबिलासँग र अर्कोको किन्दा कबिलासँग थियो । किन्दा कबिलाकी महिला जुनियाको नामबाट प्रसिद्ध छिन् । उनको ईशदूतसँग विवाह भएको थियो कि थिएन र उनको बिदाइ भएको थियो कि थिएन यस बारेमा जीवनीकारहरूबीच ठूलो मतभेद छ । जसको विवरणको आवश्यकता हामी महसुस गर्दैनौं ।

दासिकाहरूको कुरा गर्ने हो भने दुई वटी दासिकालाई उहाँले आफुकहाँ राखेको कुरा प्रसिद्ध छ । एउटी मारिया किब्तिया थिइन् जसलाई एजिप्टका राष्ट्रप्रमुख मुकौकिसले उपहार स्वरूप दिएका थिए । उनको कोखबाट ईशदूतका छोरा इब्राहीम जन्मिए । उनी बाल्यकालमा नै १० हिजरीको शौवाल महिना २८,२९ तारिख तदनुसार २७ जनवरी ६३२ मा मदिनामा बितेका थिए ।

अर्की दासिका रैहाना बिन्त जैद थिइन् । उनको सम्बन्ध यहुदी कबिला बनी नजिर वा बनु कुरैजासँग थियो । उनी बनु कुरैजाको बन्दीहरूमध्ये थिइन् । ईशदूतले उनलाई आफ्नो लागि रोज्नुभयो । उनी उहाँको मातहतमा थिइन् । केही विज्ञहरूको भनाइ अनुसार ईशदूतले उनलाई दासिकाको रूपमा राख्नुभएको थिएन । उनलाई मुक्त गरी विवाह गर्नुभएको थियो । तर इब्ने कैयमले पहिलो भनाइको समर्थन गरेका छन् । अबु उबैदाहले यी दुई वटीबाहेक अरू दासिका बारे पनि उल्लेख गरेका छन् । जसमध्ये एक जनाको नाम जमिला बताइन्छ । उनी कुनै युद्धबाट बन्दक बनेर आएकी थिइन् । एक अर्की दासिकालाई जैनब बिन्त जहशले उहाँलाई दान गरेकी थिइन् ।[1]

यहाँ अलिकित विश्राम लिएर ईशदूतको अन्य पक्षमाथि विचार गर्ने आवश्यकता छ । ईशदूतले आफ्नो किशोरावस्थाको फुर्तिला तथा सुनौला दिनहरू करिब ३० वर्षको जीवन केवल एउटी श्रीमतीमा नै निर्भाह गर्नुभयो । त्यो पनि यस्ती श्रीमती जो करिब बूढी भइसकेकी थिइन् । पहिला खदिजा र त्यसपछि सौदासँग । यो कुरा कसरी ठीक मान्न सकिन्छ कि यति लामो अवधि बिताएपछि जब उहाँ बृद्धावस्थामा पुग्नुभयो अनि उहाँभित्र एक्कासी यति यौनशक्ति बढ्यो कि उहाँलाई लगातार ११

---

१ जादुल मआद भाग १

वटी श्रीमतीसँग विवाह गर्नु पऱ्यो ? अवश्य होइन । कुनै पनि विवेकशील व्यक्तिले यी दुवै अवस्थालाई नियाल्ने हो भने यस धारणालाई सही ठान्न सक्दैन । सत्यतथ्य के हो भने ईशदूतले बहुविवाह अन्य उद्देश्यका निम्ति गर्नु भएको थियो । ती उद्देश्य सामान्य विवाहको उद्देश्यभन्दा अति महान एवं उच्च स्तरका थिए ।

यस कुरालाई यसरी पनि व्याख्या गर्न सकिन्छ । उहाँले माई आइशा र हफसासँग विवाह गरेर अबु बकर र उमरसँग ज्वाइँको नाता स्थापित गर्नुभयो । त्यसैगरी उस्मानसँग निरन्तर दुई वटी छोरी रुकैया र उम्मे कुल्सुमको र आफ्नो हृदयकी टुक्रि फातिमाको विवाह अलीसँग गरी जुन कुटुम्बी नाता गाँस्नु भएको थियो त्यसको उद्देश्य उनी चार जना सच्चा पुरुषसँग आफ्नो सम्बन्ध बलियो बनाउनु थियो । किनभने ती चार सज्जनहरूले जटिल अवस्थामा पनि इस्लामको लागि जुन बलिदान दिएका थिए त्यो प्रसिद्ध छ ।

अरबको रीति अनुसार उनीहरू कुटुम्बीय नाताको अति आदर गर्दथे । उनीहरूमा विभिन्न कबिलाबीच निकटता पैदा गर्नको लागि कुटुम्बीय नाता एक महत्वपूर्ण खुड्किलो थियो । ज्वाइँको विरुद्ध युद्ध गर्नु लज्जित तथा तुच्छ मानिन्थ्यो । यसै कुरालाई मद्देनजर गरी विभिन्न व्यक्ति तथा कबिलाहरूमा इस्लाम विरुद्ध रहेको शत्रुताको जोड् टुटोस् र उनीहरूभित्र रहेको घृणा तथा दुस्मनीको आगो निभोस् भनेर उहाँले विवाह गर्नुभएको थियो । उम्मे सल्माको सम्बन्ध अबु जहल र खालिद बिन वलिदको कबिला मख्जुमबाट थियो । ईशदूतले उनीसँग विवाह गरेपछि खालिद बिन वलिदमा त्यो कट्टरता हट्यो जुन उनले उहुदको युद्धमा देखाएका थिए । केही दिनमा नै उनले आफ्नो स्वइच्छाले इस्लाम स्वीकारे । त्यसैगरी अबु सुफ्यानकी छोरी उम्मे हबिबासँग विवाह गरेपछि अबु सुफ्यान उहाँको विरुद्ध खडा हुन सकेन । त्यसैगरी जुवैरिया र सफिया उहाँको विवाह बन्धनमा आएपछि कबिला बनु नजिर र कबिला बनु मुस्तलकले युद्ध त्याग्यो । ईशदूतले ती दुइटी महिलासँग विवाह गरेपछि ती कबिलाहरूले कुनै दंगाफसाद वा सशक्त संघर्ष गरेको प्रमाण भेटिदैन । जुवैरिया त झन् आफ्नो समुदायमा सबैभन्दा इज्जतदार तथा प्रतिष्ठित भइन् । किनभने ईशदूतले उनीसँग विवाह गरेपछि सहाबीहरूले उनीहरूको बन्दी बनाइएका एक सय घरलाई मुक्त गर्दै भने : यिनीहरू ईशदूतका ससुराली हुन् । उनीहरूमा उनीहरूले देखाएको व्यवहारको जुन प्रभाव पऱ्यो त्यो छर्लङ्ग छ ।

ती सम्पूर्ण कुराहरूमा महत्वपूर्ण कुरा के थियो भने ईशदूत त्यो अशिक्षित समुदायलाई शिक्षादिक्षा दिन र उनीहरूलाई सभ्यता सिकाउनमा व्यस्त हुनुभयो जो समुदाय सभ्यता, संस्कृति र संस्कारको मौलिक आधारलाई स्वीकार्ने र समाजको संरचना तथा निर्माणमा सहभागी हुने जिम्मेवारीबाट विलकुलै पछाडि थियो । इस्लामी समाजको संरचना जुन नियमको आधारमा हुनु थियो त्यसमा पुरुष र महिलाको

मिश्रणको कुनै गुन्जायश थिएन । तसर्थ साधारण रूपमा सहभागी गराउने नियमलाई अवलम्बन गर्दा पनि महिलाहरूलाई प्रत्यक्षरूपमा शिक्षादिशा दिन सम्भव थिएन । जबकि उनीहरूलाई शिक्षादिक्षाको आवश्यकता पुरुषलाई भन्दा कम थिएन । केही बढी नै थियो ।

त्यसकारण ईशदूतको सामुन्ने एउटै विकल्प थियो । त्यस उद्देश्यको प्राप्तिको लागि विभिन्न उमेर र क्षमतावान महिलासँग विवाह गरी उनीहरूलाई तालिम तथा शिक्षादिक्षा दिनु, उनीहरूको आत्मशुद्धिकरण गर्नु, उनीहरूलाई धार्मिक नीतिनियम सिकाउनु , उनीहरूलाई इस्लामी सभ्यता तथा संस्कारका ज्ञाता बनाएर गाउँ शहरका वृद्धा र किशोरी लगायत सम्पूर्ण उमेरका महिलाहरूलाई प्रशिक्षण दिन र उनीहरूलाई इस्लामी नीतिनियम सिकाउन सक्षम बनाउनु जरुरी थियो ।

तसर्थ हामी देख्छौं, ईशदूतका घरेलु मामिलालाई समुदायसम्म पुऱ्याउने जिम्मेवारी उनै पवित्र श्रीमतीहरूको टाउकोमा थियो । उनीहरूमा विशेष गरी ती पवित्र श्रीमतीहरू थिइन् जसले लामो उमेर पाएका थिए । जस्तै आइशा, उनले ईशदूतको प्रवचन तथा व्यवहारलाई अत्यधिक वर्णन गरेकी छन् ।

ईशदूतले एउटा विवाह त अरब समाजमा परम्परादेखि निरन्तर चल्दै आएको रीतिरिवाजलाई तोड्नको निम्ति गर्नु भएको थियो । त्यो रीति कसैलाई मुतबन्नी अर्थात धर्मपुत्र बनाउने रीति थियो । धर्मपुत्रलाई अज्ञानी युगमा त्यही अधिकार तथा मान्यता प्राप्त थियो जुन वास्तविक छोरालाई हासिल थियो । त्यस विसंगतिले अरब समाजमा यति बलियो जरो गाडेको थियो त्यसलाई मेटाउन सहज थिएन । त्यो विकृति इस्लामले विवाह, तलाक, अंशबण्डा र अन्य मामिलामा तोकेको आधार तथा नियमको एकदमै उल्टो थियो । अज्ञानताको त्यस रीतिले जुन विकृति र विसंगति सृजना गरेको थियो त्यसबाट समाजलाई पवित्र गर्नु इस्लामको प्रथम उद्देश्यमध्ये एक थियो । त्यै अज्ञानी रीतिलाई परास्त गर्न अल्लाहले ईशदूतको विवाह जैनब बिन्त जहशसँग गर्ने आदेश दिए । जैनबको विवाह पहिला जैदसँग भएको थियो । उनी ईशदूतका धर्मपुत्र थिए र उनलाई मुहम्मदﷺको छोरा भनिन्थ्यो । तर जैद र जैनबबीच गुजारा हुन नसकेपछि जैदले उनलाई तलाक दिने सोच बनाए । ईशदूतसँग त्यस बारेमा छलफल गरे । यो त्यो समय थियो जब सारा काफिरहरू ईशदूतको विरुद्ध थिए ।

उता ईशदूतले परिस्थितिको लचकता र अल्लाहले दिएको सूचनाको आधारमा त्यो कुरालाई बुझिसक्नु भएको थियो । यदि जैदले तलाक दिए भने जैनब मियाद अर्थात इद्दत गुजारेपछि ईशदूतलाई उनीसँग विवाह गर्ने आदेश दिइने छ । तसर्थ उहाँ डराउनुभयो । यदि यिनै परिस्थितिमा विवाह गर्नु पऱ्यो भने मुनाफिक, बहुदेववादी र यहुदीहरूले कुराको तानाबाना बुनेर उहाँको विरुद्ध सक्त प्रोपेकण्डा गर्ने छन् र

साधारण मुसलमानहरूलाई विभिन्न कुरामा फसाएर उनीहरूमा नकारात्मक प्रभाव पार्ने छन् । तसर्थ जैदले जैनबलाई तलाक दिने बिचार बारे ईशदूतसँग कुराकानी गर्दा उहाँले उनलाई उनीसँग जीवन विताउने र तलाक नदिने सल्लाह दिनुभयो । किनभने त्यस कठिन परिस्थितिमा त्यो विवाह नहोस् भन्ने उनीहरुको चाहान थियो । तर अल्लाहलाई त्यो कुरो राम्रो लागेन । अल्लाहले ईशदूतलाई दबाब दिए । कुरआनमा उल्लेख छ :

وَإِذْ تَقُولُ لِلَّذِي أَنْعَمَ اللَّهُ عَلَيْهِ وَأَنْعَمْتَ عَلَيْهِ أَمْسِكْ عَلَيْكَ زَوْجَكَ وَاتَّقِ اللَّهَ وَتُخْفِي فِي نَفْسِكَ مَا اللَّهُ مُبْدِيهِ وَتَخْشَى النَّاسَ وَاللَّهُ أَحَقُّ أَنْ تَخْشَاهُ (الأحزاب: ٣٧ )

जब तिमीले उनीसँग भनिरहेका थियौ जसमाथि अल्लाहले कृपा गरेका थिए र तिमीले कृपा गरेका थियौ । आफ्नो श्रीमतीलाई आफुसँगै राख । अल्लाहसँग डराऊ । तिमीले आफ्नो मनमा त्यो कुरा लुकाएका थियौ जसलाई अल्लाहले प्रकट गर्नेवाला थिए । तिमी मानिसहरूसँग डराउँदै थियौ । तर अल्लाह नै बढी हकदार छन् जोसँग तिमी डराउनु पर्छ (अल् अहजाब:३७)

आखिरकार जैदले जैनबलाई तलाक दिइछाडे । जब उनको मियाद आर्थत इद्दत सकियो अनि ईशदूतलाई विवाहको आदेश अवतरण भयो । अल्लाहले उहाँमाथि विवाह गर्न अनिवार्य गरिदिए । कुनै विकल्प राखेनन् । त्यस सम्बन्धमा अवतरण भएको आयत यस प्रकार छ :

فَلَمَّا قَضَىٰ زَيْدٌ مِنْهَا وَطَرًا زَوَّجْنَاكَهَا لِكَيْ لَا يَكُونَ عَلَى الْمُؤْمِنِينَ حَرَجٌ فِي أَزْوَاجِ أَدْعِيَائِهِمْ إِذَا قَضَوْا مِنْهُنَّ وَطَرًا (الأحزاب: ٣٧ )

जब जैदले उनीसँग आवश्यकता पूरा गरे अनि हामीले तिमीसँग उसको विवाह गरिदियौं । ताकि मोमिनहरूले आफ्नो धर्मपुत्रकी श्रीमतीसँग विवाह गर्न सकुन् । जबकि उनीहरूले तिनीहरूसँग आफ्नो आवश्यकता पूरा गरेका हुन्छन् । (अल् अहजाब:३७)

त्यसको उद्देश्य धर्मपुत्रसँग सम्बन्धित अज्ञानी रीतिरिवाज तोड्नु थियो । जसरी यसअघि निम्न भनाइद्वारा मौखिक रूपमा तोडिएको थियो ।

उनीहरूलाई उनीहरूको बाबुको नाताबाट पुकार । अल्लाकहाँ यही कुरा बढी न्यायोचित छ । (अल् अहजाब:५)

मुहम्मदﷺ तिमी पुरुषहरूमध्ये कसैका बाबु होइनन् । उनी त ईशदूत तथा अन्तिम ईशदूत हुन् । (अल् अहजाब:४०)

यस अवसरमा त्यो कुरा पनि ध्यानमा राख्नु पर्छ जब समाजमा कुनै रीतिरिवाजले राम्रोसँग जरो गाडेको छ भने त्यसलाई केवल कुराले मेटाउन र त्यसमा परिवर्तन गर्न कहिल्यै सम्भव हुँदैन । जो व्यक्ति त्यो कुरा मेटाउन वा परिवर्तन गर्नमा लागिपरेको हुन्छ ऊ स्वयम उच्च आचरणको धनी हुनु पनि जरुरी छ । हुदैबीया

सम्भौतामा मुसलमानहरूको तर्फबाट जुन गतिविधि भएको थियो त्यसले त्यस सत्यतालाई राम्रोसँग व्याख्या गर्दछ । त्यस अवसरमा मुसलामनहरूको आज्ञा पालनाको जुन स्थिति थियो उरवाह बिन मसउद सकफीले उहाँलाई हेर्दा के देख्छन् भने ईशदूतको थुक पनि कुनै न कुनै सहाबीको हातमा परेको छ। ईशदूतले वजु गर्दा सारा सहाबीहरू उहाँले वजु गरेर झरेको पानी लिन यसरी दौडन्थे जस्तै उनीहरू आपसमा लड्दै छन् । हो, ती तीनै सहाबीहरू हुन् जसले रूखमूनि बसेर मृत्युबाट नभाग्ने प्रतिज्ञा गर्न होड्बाजी गरेका थिए । ती सहाबीहरूमा उमर र अबु बकर जस्ता विभूति साथीहरू पनि थिए। तर तीनै सहाबीहरू जो उहाँको निम्ति मरिमिट्न आफ्नो सौभाग्य सम्झन्थे जब उनीहरूलाई हुदैबीया सम्भौतापछि आफ्नो जनावर बलि दिने आदेश गरियो उहाँको आदेश मान्न कोही पनि तयार भएनन् । यतिसम्म कि ईशदूत अति दुखित हुनुभयो । तर उम्मे सलमाले उहाँलाई पहिला आफु गएर चुपचाप जनावर बलि गर्ने सुझाव दिइन् । उहाँले त्यसै गर्नुभयो अनि सबै जना उहाँको अनुकरण गर्न दौडे । सबै सहाबीहरूले अगाडि बढेर आफ्नो जनावर बलि दिए। त्यस घटनाबाट कुनै कठोर रीतिरिवाजलाई मेटाउन गराइ र भनाइको प्रभावमा कति भिन्नता हुँदो रहेछ भन्ने कुरा बुझ्न सकिन्छ । तसर्थ धर्मपुत्र सम्बन्धी पूरानो रीतिको नियमलाई तोड्न ईशदूतको विवाह आफ्नो धर्मपुत्रबाट तलाक भएकी श्रीमतीसँग गराइयो ।

त्यो विवाह हुनु थियो कि मुनाफिकहरूले उहाँको विरुद्ध व्यापक रूपमा झुटा प्रोपेगण्डा रच्न शुरु गरे । विभिन्न किसिमका कुरा तथा अफ्वाह फैलाए जसको केही असर साधारण मुसलमानमा पनि पऱ्यो । त्यस प्रोपेगण्डालाई उर्जा दिन मुनाफिकहरूले धार्मिक पक्ष पनि पाए । जैनब ईशदूतकी पाँचौ श्रीमती थिइन् । जबकि मुसलमानहरूले एकसाथ चारभन्दा बढी श्रीमती राख्न जायज ठान्दैनन् थिए । ती सबै कारण बाहेक प्रोपेगण्डाको असल मगज के थियो भने जैद ईशदूतका छोरा मानिन्थे र छोराको श्रीमतीसँग विवाह गर्नु अति घृणित तथा फोहर कुरा थियो । अन्तिममा अल्लाहले सुरह अहजाबमा त्यस बारे प्रष्ट श्लोकहरू अवतरण गरे र सहाबीहरूलाई पनि इस्लाममा धर्मपुत्रको कुनै हैसियत छैन भन्ने कुरा थाहा भयो । साथै अल्लाहले विशेष एवं उच्च उद्देश्यका कारण आफ्ना दूतलाई बहुविवाह गर्ने संख्यामा जुन वृद्धि गरेका थिए त्यो अरू कसैलाई गरेका छैनन् ।

ईशदूतले आफ्नी पवित्र श्रीमतीहरूसँग सरल सहज र सदाचारी जीवन विताउनुभयो । पवित्र श्रीमतीहरू पनि इज्जतदार, धैर्यशील, सहनशील,सेवक एवं दाम्पत्य कर्तव्य निभाउने खालकी थिइन् । जबकि उहाँले विपन्नता तथा कष्टकर जीवन विताइरहनु भएको थियो । जसलाई झेल्ने अरु कसैको सामर्थ्य थिएन । अनस भन्छन् : ईशदूतले जीवनमा कहिल्यै मैदाको नरम रोटी खाएको मलाई थाहा छैन ।

न उहाँले बाखाको मासु देख्नुभयो । आइशाको भनाइ छ : दुई दुई महिना वित्थ्यो तेस्रो महिनाको चन्द्रमा उदाउँदा पनि ईशदूतको घरमा चुलो जल्दैन थियो । उरवाले सोधे त्यसो भए तपाईंहरू के खानु हुन्थ्यो ?उनले भनिन् केवल दुई वटा कालो वस्तु । अर्थात खजुर र पानी । यस विषयका हदिसहरू अत्यधिक छन् ।

त्यति अभाव तथा विपन्नताका बावजुद पवित्र श्रीमतीहरूबाट झन्कने भन्कने खालको कुनै क्रियाकलाप भएन । एक चोटि मात्र त्यस्तो भएको थियो त्यो पनि मानवीय स्वभावको कारणले गर्दा । त्यसै आधारमा केही कानुनहरू जारी गर्नु थियो । तसर्थ अल्लाहले त्यसै मौकामा कुरआनको श्लोक अवतरण गरे :

يَا أَيُّهَا النَّبِيُّ قُلْ لِأَزْوَاجِكَ إِنْ كُنْتُنَّ تُرِدْنَ الْحَيَاةَ الدُّنْيَا وَزِينَتَهَا فَتَعَالَيْنَ أُمَتِّعْكُنَّ وَأُسَرِّحْكُنَّ سَرَاحًا جَمِيلاً وَإِنْ كُنْتُنَّ تُرِدْنَ اللَّهَ وَرَسُولَهُ وَالدَّارَ الْآخِرَةَ فَإِنَّ اللَّهَ أَعَدَّ لِلْمُحْسِنَاتِ مِنْكُنَّ أَجْرًا عَظِيمًا (الأحزاب: ٢٨ ـ٢٩ )

हे दूत आफ्नो श्रीमतीहरूसँग भनिदेऊ, यदि तिमीहरूले सांसारिक जीवनमा चैन चाहन्छौ भने आऊ म तिमीहरूलाई केही दिएर राम्ररी बिदाइ गरिदिउँ । यदि तिमीहरूले अल्लाह, ईशदूत र प्रलोक चाहन्छौ भने निसंदेह अल्लाहले तिमीमध्ये सज्जनहरूको लागि उत्तम पुरस्कार राखेका छन् । (अल् अहजाब:२८,२९)

अब ती पवित्र श्रीमतीहरूको सदाचारी तथा उच्च चरित्रलाई हेर्नुहोस् । उनीहरूले अल्लाह र ईशदूतलाई प्राथमिकता दिइन् र दुनियाँतिर लागिनन् ।

त्यसैगरी सौता सौताका आपसी जुन दैनिक व्यवहार हुन्छन् पवित्र श्रीमतीहरू बहुसंख्यामा हुँदा पनि त्यस प्रकारको घटना कहिले कहिले मात्र हुन्थ्यो । त्यो पनि मानव भएको कारण । त्यसमा पनि अल्लाहले सचेत गरेपछि त्यस प्रकारका कुनै घटना हुँदैन थियो । सुरह तहरिमको सुरुका पाँच श्लोकमा त्यसैको चर्चा गरिएको छ ।

अन्तिममा वहुविवाहको विषयमा चर्चा गर्न आवश्यक नठानेको कुरा उल्लेख गर्न निरर्थ नहोला । किनभने जुन व्यक्तिहरूले यस विषयमा सबैभन्दा बढी चाँसो राख्छ अर्थात युरोप । उनीहरूले जुन प्रकारको जीवन व्यतीत गरेका छन् जुन तितो र दुराचारीको जाम खाँदैछन् छन, जुन घृणा र अभियोगमा लतपतिएका छन् र वहुविवाहको नियमलाई तोडेर जुन प्रकारको निराशा,दु:ख र कठिनाइको सामना गरेका छन् ती कुराहरू विभिन्न खालको बहस र विवादबाट मुक्त गर्न प्रयाप्त छन् । युरोपको घृणित जीवनको दाँजोमा वहुविवाहको नियम ठीक रहेछ भन्ने सबैभन्दा साँचो प्रमाण हो र बौद्धिक व्यक्तिहरूको लागि त्यसमा ठूलो पाठ छ ।

# आचरण तथा शारीरिक स्वरूप

ईशदूत जुन गरिमामय तथा प्रतिभाशाली चरित्रका पात्र हुनुहुन्थ्यो त्यसको बखान असीम छ । त्यो सचरित्र तथा प्रतिभाको गहिरो छापले गर्दा मानवीय हृदय उहाँप्रति आदर तथा कदरको भावनाले भरिपूर्ण थियो । तसर्थ उहाँको सुरक्षा र गरिमामा मानिसहरूले यस्तो बलिदानीको सबुत दिए जसको उदाहरण विश्वको अरु कुनै व्यक्तिको लागि प्रस्तुत गर्न सकिदैन । उहाँको मित्र साथीहरूले उहाँसँग असीम माया गर्दथे । उहाँलाई अलिकति चोट लागेको उनीहरू सहन सक्दैनन् थिए चाहे त्यसको लागि आफ्नो टाउको नै  कटाउन किन नपरोस् । त्यति धेरै आत्मियताको कारण के थियो भने सामान्यतया जुन प्रतिभा तथा प्रतिष्ठाको कारण ज्यानको आहुति दिइन्छ त्यो प्रतिभा तथा प्रतिष्ठाको जुन अधिक्तम मात्रा उहाँलाई प्रदान गरिएको थियो त्यो कुनै मानवले पाएको थिएन । तल हामीले ती हदिसहरूको सारांश वर्णन गर्दैछौं जसले उहाँको गरिमा तथा प्रतिभालाई झल्काउँदछ ।

## शारीरिक स्वरूप

हिजरत गर्ने क्रममा ईशदूत उम्मे मअबद खुजाइयाको शिविरबाट जाँदै गर्दा उसले उहाँ गइसकेपछि आफ्नो श्रीमानसँग उहाँको शारीरिक स्वरूपको जुन चित्र चित्रण गरेकी थिई त्यो यस प्रकार छ : उहाँ चहकिलो रंग,उज्यालो अनुहार,सुन्दर जिउडालको हुनुहुन्थ्यो, उहाँको कपाल न बाक्लो थियो न पातलो , प्राकृतिक सौन्दर्य पनि उहाँको अनुहारको दाँजोमा मन्द थियो , उहाँको आँखा गाजलु, परेला लामा, स्वर मोटो, गला लामो, आँखा कालो थियो , उहाँको कालो गाजलु परेला, पातलो तथा आपसमा मिलेका आँखीभौं, चम्किलो कालो कपाल थियो, उहाँको मौनतामा महिमा थियो, कुराकानीमा आकर्षण थियो, टाढाबाट सबैभन्दा उज्याला एंव सुन्दर र नजिकबाट सबैभन्दा सुन्दर तथा मधुर देखिनु हुन्थ्यो , उहाँको कुराकानी मधुर, कुरा स्पष्ट र दुई टुक, न बढी न कम हुन्थ्यो , शैली मोतीको मालाबाट मोती झरे झैं थियो, उहाँ मध्यम जिउडालको हुनुहुन्थ्यो, न त होँचो न अग्लो हुनुहुन्थ्यो, उहाँ त्यो दुई वटा हाँगाबीचको तेस्रो हाँगो जस्तै हुनुहुन्थ्यो जुन तीन वटै हाँगाभन्दा बढी हरियो र सुन्दर देखिन्छ, उहाँको वरिपरि गोलामेच भएर बस्ने साथीहरूले उहाँलाई ध्यानसँग सुन्थे । कुनै आदेश हुँदा अगाडि बढेर गर्थे, उहाँ महामहिम हुनुहुन्थ्यो, उहाँको कुरा न त कडा हुन्थ्यो न बढी ।[१]

अली उहाँको गरिमा दर्शाउँदै भन्छन् : ईशदूत न त अग्ला हुनुहुन्थ्यो न होँचा । मिलेको जिउडाल थियो । उहाँको कपाल न घुम्रेको थियो न उठेको । राम्रोसँग

१ जादुल मआद भाग २

मिलेको थियो । गाला न धेरै फुकेको थियो न धेरै सुकेको । निधार सापिएको र अनुहार केही गोलो थियो । गोरो गुलाबी रंगको । आँखा रातोरातो र परेला लामा थिए । जोर्नीको हाडहरू ठूलाठूला थिए छातीदेखि नाभिसम्म रौंको पातलो रेखा थियो भने शरीरको अन्य भागमा रौं थिएन । हत्केला र पैतला भरिला थिए । हिँड्दा भ्वाट्ट खुट्टा उठाउनु हुन्थ्यो । यसरी हिँडनु हुन्थ्यो मानौं उकालोबाट ओरालोतिर भर्दै हुनुहुन्छ । कसैतर्फ फर्कंदा पुरै फर्कनु हुन्थ्यो । दुवै काँधको बीचमा ईशदूतत्वको छाप थियो । उहाँ सम्पूर्ण दूतहरूको समापक  हुनुहुन्थ्यो । सबैभन्दा दानी,आँटिला,सज्जन, सबैभन्दा बढी सम्भौताका पालनकर्ता, मधुर स्वभाव र बुज्रुग हुनुहुन्थ्यो । कसैले उहाँलाई अचानक देख्दा भयभीत हुन्थ्यो भने परिचित भएपछि भेट्दा माया गर्थ्यो । उहाँको खुबी बयान गर्ने वालाले यही भन्छ कि मैले उहाँभन्दा पहिला र पछि उहाँ जस्तो कसैलाई देखिनँ ।[१]

अलीको एकअर्को बयान छ : उहाँको टाउको ठूलो थियो, जोर्नीका हाडहरू ठूला  थिए । छातीको बीचमा रौंको पातलो रेखा थियो । उहाँ हिँड्दा उकालोबाट ओरालोतिर भरे जस्तै अलिकति भुकेर हिँड्नु हुन्थ्यो ।

जाबिर बिन समुराह भन्छन् : उहाँको दाहिने हात लामो, आँखा अलिकति रातो र  कुर्कुच्चा पातलो थियो । [२]

तुफैल भन्छन्: उहाँ गोरो,उज्यालो अनुहार र मध्यस्थ जिउडालको हुनुहुन्थ्यो ।

अनस बिन मालिक भन्छन् : उहाँको हत्केला चौडा थियो भने रंग चम्किलो, न त एकदमै गोरो थियो न गहुँ गोरो । उहाँको अवसान हुँदा टाउको र अनुहारमा बीस वटा रौं पनि फुलेका थिएनन् । केवल कंचटको कपाल फुलेको थियो र टाउकोमा केही कपाल फुलेको थियो ।[३]

अबु जुहैफा भन्छन् : मैले उहाँको तल्लो ओठतल दाह्री फुलेको देखेको थिएँ ।

अब्दुल्लाह बिन बसर भन्छन् : उहाँको तल्लो ओठनिरको केही दाह्री फुलेको थियो ।[४]

बराअको बयान छ : उहाँको अनुहार मध्यस्थ थियो भने काँध फराकिलो थियो, कपाल दुवै कानको लोतीसम्म लर्केको थियो । मैले उहाँलाई रातो लुगा लगाएको देखें । उहाँ जतिको सुन्दर मैले कसैलाई देखिनँ ।

---

१ इब्ने हेशाम भाग १, तिर्मिजी भाग ४
२ सही मुस्लिम भाग २
३ सही बुखारी भाग १, सही मुस्लिम भाग २
४ सही बुखारी भाग १

पहिला उहाँले क्रिश्चियनको अनुशरण गर्न मन पराउँनु हुन्थ्यो । त्यसकारण कपाल कोर्दा बीचमा सिउँदो निकाल्नु हुन्न थियो तर पछि सिउँदो निकाल्नु हुन्थ्यो ।

बराअ भन्छन् : उहाँको अनुहार सबैभन्दा सुन्दर थियो । उहाँको चरित्र सबैभन्दा उच्च थियो ।[१] उनीसँग सोधियो, के ईशदूतको अनुहार तरवार जस्तो लाम्चो थियो ? उनले जवाफ दिए, थिएन । चन्द्रमा जस्तो थियो । एक हदिस अनुसार उहाँको अनुहार गोलो बताइएको छ । [२]

रबीअकी छोरी मुऔविज् भन्छिन् : यदि तिमीहरूले ईशदूतलाई देखेको भए उहाँलाई झुल्केको सूर्य जस्तै देख्थ्यौ ।[३]

जाबिर बिन समुराह भन्छन् : मैले एक पटक पूर्णिमाको राती उहाँलाई देखेँ । उहाँले रातो कपडा लगाउनु भएको थियो । मैले चन्द्रमालाई पनि हेर्थँ र उहाँलाई पनि हेर्थँ । आखिरकार म चन्द्रमाभन्दा ईशदूत सुन्दर हुनुहुन्छ भन्ने निष्कर्षमा पुगेँ ।[४]

अबु हुरैराहको बयान छ : मैले ईशदूत जस्तो सुन्दर केही देखिनँ । उहाँको अनुहार सूर्य जस्तो देखिन्थ्यो । ईशदूतभन्दा तीव्रगतिमा हिँडने अन्य कुनै व्यक्ति देखिनँ । उहाँको लागि धर्ती फुकेको छ जस्तो लाग्थ्यो । हामीले थकाइ माथ्यौं तर उहाँ चाहीँ थाक्नु हुन्न थियो ।[५]

कअब बिन मालिक भन्छन् : उहाँ खुसी हुँदा उहाँको अनुहार चन्द्रमाको टुक्रा झैं चम्कन्थ्यो ।

एक दिन ईशदूत माई आइशाकहाँ बस्दा उहाँले जुता सिउँदै हुनुहुन्थ्यो र उनी धागो बनाउँदै थिइन् । पसिनाले गर्दा निधारका रेखाहरू चम्केका थिए । त्यो हालत देखेर माई आइशाले छक्क परेर भनिन् : अबुल कबिर हजलीले तपाईँलाई देखेको भए आफ्नो यस मुक्तकको हकदार तपाईँबाहेक कसैलाई ठान्थेन : उहाँको अनुहारको रेखा चम्केको बादल जस्तै देखिन्थ्यो ।[६]

अबु बकर उहाँलाई देखेर एउटा मुक्तक बाचन गर्ने गर्थे । अनुवाद छ : उहाँ इमानदार,मनोनीत र सच्चा हुनुहुन्छ । भलो कामतिर बोलाउनुहुन्छ । उहाँ पूर्णिमाको त्यो उज्यालो जस्तै हुनुहुन्छ जसमा अँध्यारोले लुकामारी खेल्दछ ।

उमरले जुहेरद्वारा रचित त्यो मुक्तक पढ्थे जो हरम बिन सिनानको बारेमा रचिएको थियो, अनुवाद छ : यदि उहाँ मानवभन्दा अरु नै प्राणी भएको भए

---

१ सही बुखारी भाग १, सही मुस्लिम भाग २
२ सही बुखारी भाग १, सही मुस्लिम भाग २
३ मुस्नद दारमी , मिश्कात २
४ तिर्मिजी,दारमी, मिश्कात भाग२
५ तिर्मिजी,तोहफतुल अहवजी भाग ४, मिश्कात भाग२
६ तहजिब तारिख दिमश्क

पूर्णिमाको रात झैँ अरु रातलाई पनि उज्यालो गरिदिनु हुन्थ्यो । त्यसपछि उनी भन्छन्, ईशदूत पनि त्यस्तै हुनु हुन्थ्यो ।

उहाँ रिसाउँदा अनुहार रातो र गाला अनारको दाना निचोरिएको जस्तै रातो हुन्थ्यो ।[१]

जाबिर बिन समुराह भन्छन् : कुर्कुच्चा केही पातलो थियो । उहाँ हाँस्दा केवल मुस्काउनु हुन्थ्यो । आँखा गाजलु थिए । तिमीले देखेको भए भन्ने थियौ : उहाँको आँखामा काजल लगाइएको छ । जबकि काजल लागेको हुँदैन थियो । [२]

उमर भन्छन् : उहाँको दाँत सबैभन्दा राम्ररी मिलेका थिए ।[३]

अब्बासका छोरा भन्छन् : उहाँको अगाडिका दुवै दाँत छुट्टिएका थिए । उहाँले कुराकानी गर्दा उहाँको दुवै दाँतको बीचबाट एक प्रकारको चमक निस्केको देखिन्थ्यो ।[४]

उहाँको गला चाँदी पालिस गरिएको गुडियाको गला जस्तै थियो । परेला लामा, दाह्री झ्याम्म, निधार फराकिलो र आँखीभौँ मिलेका र एकअर्काबाट छुट्टिएको थियो । लाम्चे नाक, गाला मध्यस्थ थियो भने छातीदेखि नाभिसम्म छडी जस्तो सोभ्को रौँको रेखा थियो । पेट तथा छातीमा त्यो बाहेक अरु रौँ थिएन । तर पाखुरा तथा काखीमा भने रौँ थियो । पेट र छाती बराबर थियो । छाती बराबर तथा फराकिलो नाडी ठूलाठूला र हत्केला फराकिला थिए । जिउडाल सीधा,पैतला खाली, अंग ठूलठूला थिए । हिँडदा उहाँ फटाफट हिँड्नु हुन्थ्यो । अलिकति निहुरेर हिँड्नुहुन्थ्यो । सहज गतिमा हिँड्नु हुन्थ्यो ।

अनस भन्छन् : ईशदूतको हत्केला जत्तिको नरम कुनै रेशम छोएको छैन । ईशदूतको सुगन्धभन्दा राम्रो अरु कुनै अम्बर वा अत्तर वा अरु कुनै बासना सुँघेको छैन ।[५]

अबु जुहैफा भन्छन् : ईशदूतको हात आफ्नो अनुहारमा राख्दा उहाँको हात बरफ भन्दा चिसो र अत्तरभन्दा बढी सुगन्धित महसुस गरेँ । अनस भन्छन् : उहाँको पसिना मोती जस्तै देखिन्थ्यो । उम्मे सुलैम भन्छिन् : उहाँको पसिना नै सबैभन्दा उत्तम सुगन्ध हुन्थ्यो ।

---

१ तर्मिजी २, मिश्कात भाग १
२ तिर्मिजी,तोहफतुल अहवजी भाग ४
३ सही मुस्लिम भाग ३, हदिस नं १४८९
४ तिर्मिजी, मिश्कात भाग२

५ सही बुखारी भाग १, सही मुस्लिम भाग २

जाबिर भन्छन् : उहाँ कुनै मार्गबाट हिँडदा उहाँको शरीरको पसिनाको सुगन्धको कारण यो बाटोबाट ईशदूत जानुभएको छ भन्ने कुरा थाहा हुन्थ्यो ।[१]

उहाँको दुवै काँधको बीचमा ईशदूतत्वको छाप थियो । त्यो परेवाको अण्डाकार जस्तो र उहाँको शरीरसँग मिल्दोजुल्दो थियो । त्यो छाप बायाँ काँधको कुर्कुरे हाडनिर थियो ।

## आध्यात्मिक प्रतिभा र उच्च चरित्र

ईशदूत सरल र सहज भाषा शैली प्रयोग गर्नमा पनि उत्कृष्ट हुनुहुन्थ्यो । उहाँलाई सरल स्वभाव, सुन्दर शब्द, ठेट वाक्य, सही अर्थको प्रयोग गर्ने र घोचपेच कुरा नगर्ने र अर्थपूर्ण कुरा गर्ने योग्यता प्रदान गरिएको थियो । उहाँलाई तत्वदर्शीता र अरबका सबै भाषाको ज्ञान प्रदान गरिएको थियो । तसर्थ उहाँले हरेक कबिलाहरूसँग उनीहरूकै भाषामा कुराकानी गर्नुहुन्थ्यो । उहाँ गाउँलेहरूको अख्खड भाषा र शहरवासीहरूको सभ्य भाषाको संगम हुनुहुन्थ्यो । साथै ईशवाणीको भाषाको पनि उहाँ ज्ञाता हुनुहुन्थ्यो ।

धैर्यता, सहने शक्ति र कठिनाइमा धैर्य गर्ने जस्ता विशेषताद्वारा अल्लाहले उहाँलाई सुसज्जित गरेका थिए । हरेक धैर्यवानमा कुनै न कुनै चुक वा भुल देखिन्छ तर ईशदूतको उच्च चरित्र भने शत्रुहरूबाट दुख,कष्ट र गुण्डाहरूको अत्याचार बढ्दा उहाँको धैर्यतामा वृद्धि हुँदै जान्थ्यो । माई आइशा भन्छिन् : जब उहाँलाई दुई वटा काममा एउटा काम रोज्ने अवसर दिइन्थ्यो उहाँले पापमुक्त सरल काम नै रोज्नु हुन्थ्यो । गलत कामलाई छोड्ने उहाँ पहिलो व्यक्ति हुनुहुन्थ्यो । उहाँले आफ्नो व्यक्तिगत स्वार्थको लागि कसैसँग बदला लिनुभएन । तर अल्लाहले पवित्र गरेको वस्तुलाई कसैले अपमान गर्थ्यो भने त्यसको उहाँले बद्ला लिनुहुन्थ्यो ।[२]

उहाँ क्रोध तथा रिसबाट धेरै टाढा बस्नुहुन्थ्यो । कुनै पनि कुरा छिटो मान्नु हुन्थ्यो । उहाँको दानदक्षिणा दिने गुण बारे बखान गर्न सकिदैन । नडराइकन खर्च गर्नुहुन्थ्यो । अब्बासको छोरा भन्छन् : ईशदूत सबैभन्दा महान दाता हुनुहुन्थ्यो । उहाँको दानको भेल रमजानको महिनामा त्यतिखेर सबैभन्दा बढी उर्लन्थ्यो जब दूत जिब्रइल उहाँसँग भेट गर्न आउँथे । जिब्रइलले रमजानको महिनामा उहाँलाई भेट्थे र कुरआनको पाठ गराउँथे । दानदक्षिणा गर्नुमा ढुकुटी र कृपाबाट भरीपूर्ण गरी पठाइएको हावाभन्दा पनि तेज हुनुहुन्थ्यो । जाबिरको बयान छ, उहाँसँग केही माग्दा कहिल्यै पनि छैन भनेर भन्नु भएन ।

---

१ दारमी मिश्कात भाग २
२ सही बुखारी भाग १

वीरता र बहादुरीमा पनि उहाँ सबैभन्दा अगाडि हुनुहुन्थ्यो । उहाँ सबैभन्दा बलियो हुनुहुन्थ्यो । कठिनभन्दा कठिन घडीमा सबै वीरहरू भागे तापनि उहाँ आफ्नो ठाउँमा अडिग भएर बस्नुहुन्थ्यो । पछाडि हट्नुको साटो अगाडि बढ्नुहुन्थ्यो । कदम अलिकति पनि डगमगाउँदैन थियो । ठूलाठूला वीरहरू एक न एक दिन भागे र पराजित भए । तर उहाँमा त्यस्तो कुरा कहिल्यै भएन । अली भन्छन् : जब भीषण आक्रमण हुन्थ्यो र युद्धको ज्वाला फुट्थ्यो त्यतिखेर हामी ईशदूतको आडमा बस्थ्यौं । शत्रुको सामना गर्न पनि उहाँभन्दा अगाडि कोही जाँदैन थियो ।[१] अनस भन्छन् : एक चोटि रातको समयमा मदिनावासीहरूलाई खतरा महसुस भयो । मानिसहरू होहल्ला भएतिर दौडे । बाटोमा ईशदूत फर्केको भेटाए । ईशदूतले मानिसहरूभन्दा पहिला नै हल्ला भएको ठाउँमा पुगेर त्यहाँ जाँच बुझ गरिसक्नु भएको थियो । त्यति बेला उहाँ अबु तलहाको घोडामा सवार हुनुहुन्थ्यो । गलामा तरवार बोक्नुभएको थियो । उहाँले भन्दै हुनुहुन्थ्यो, नडराऊ नडराऊ ।[२]

उहाँ सबैभन्दा लज्जालु व्यक्ति हुनुहुन्थ्यो । अबु सइद खुदरी भन्छन् : उहाँ पर्दामा सजिएकी कन्याभन्दा पनि बढी शर्माउनु हुन्थ्यो । उहाँलाई नराम्रो लागेको कुरा उहाँको अनुहारबाट थाहा हुन्थ्यो । उहाँले आफ्नो नजर कसैमाथि गाड्नु हुन्न थियो । आफ्नो नजर झुकाएर राख्नु हुन्थ्यो । उहाँको नजर बढी तल रहन्थ्यो । सामान्यतया कृपादृष्टिले हेर्नुहुन्थ्यो । शर्मका कारण उहाँले कसैको नराम्रो कुरा सबैको सामुन्ने भन्नुहुन्न थियो । कुनै व्यक्तिको बारेमा उहाँसँग नराम्रो कुरा भनिएको खण्डमा उहाँले नाम किटेर भन्नुहुन्न थियो । बरु उहाँले सामान्य रूपमा मानिसहरूले किन यसो गरेका छन् भनी सम्झाउनु हुन्थ्यो ।

फर्जदिकद्वारा रचिएको यस मुक्तकका पात्र उहाँ नै हुनुहुन्थ्यो अनुवाद छ :

उहाँले शर्मका कारण नजर तल राख्नु हुन्थ्यो, उहाँको महिमाको कारण नजर तल राखिन्थ्यो । त्यसैले उहाँसँग त्यति बेला मात्र कुरा गरिन्थ्यो जब उहाँ मुस्काउनु हुन्थ्यो ।

उहाँ सबैभन्दा बढी न्यायिक, स्वच्छ, सरल स्वभावका र सबैभन्दा बढी इमानदार व्यक्ति हुनुहुन्थ्यो । यस कुरालाई उहाँका शत्रु तथा मित्र सबैले स्वीकारेका थिए । ईशदुतत्वको जिम्मेवारी ग्रहण गर्नुभन्दा पहिला उहाँलाई सबैले अमिन अर्थात इमानदार भन्थे । अज्ञानी युगमा छिनोफानो गर्नको लागि मुद्दाहरू उहाँकहाँ ल्याइन्थ्यो । तिर्मिजी नामक हदिसमा अलीद्वारा वर्णन गरिएको छ : एक चोटि अबु जहलले उहाँसँग भन्यो : हामीले तपाईंलाई झुटा ठान्दैनौं तर जुन कुरा लिएर आउनु भएको छ

---

१ शेफा काजी अयाज भाग १
२ सही बुखारी भाग १, सही मुस्लिम भाग २

त्यसलाई झुटो ठान्दछौं । त्यसको प्रतिउत्तरमा अल्लाहले निम्न श्लोक अवतरण गरे :[1]

यिनीहरूले तपाईंमाथि मिथ्यारोपण गरेका होइनन् । यिनीहरूले त अल्लाहका निशानीहरूमाथि मिथ्यारोपण गर्दैछन् । (६:३३)

हिरक्ल्ले अब सुफ्यानसँग सोध्यो, के त्यो ईशदूतले जे कुरा भनेको छ त्यो कुरा भन्नुभन्दा पहिला तिमीहरूमध्ये कसैले उसलाई झुटा भनेका थियौ ? अबु सुफ्यानले भन्यो, भनेका थिएनौं ।

उहाँ सबैभन्दा नम्र स्वभावको हुनुहुन्थ्यो र घमण्डबाट स्वच्छ हुनहुन्थ्यो । राजारजौटाको अगाडिपछाडि चेलाचपेटा तथा भारदारहरू उभिए झैं सहाबीहरूलाई आफ्नो अगाडिपछाडि उभिइनुबाट रोक्नुहुन्थ्यो । अनाथको खोजखबर गर्नुहुन्थ्यो । दीनदुखिहरूसँग बस्नुहुन्थ्यो । दासीहरूको निम्तो स्वीकार्नुहुन्थ्यो । साथीहरूबीच कुनै सामान्य व्यक्ति झैं बस्नुहुन्थ्यो । माई आइशा भन्छिन् : उहाँले आफ्नो जुत्ता आफै सिउनुहुन्थ्यो । आफ्नो कपडा आफै सिउनुहुन्थ्यो । आफ्नो काम एक सामान्य व्यक्तिले आफ्नो घरको काम गरे झैं गर्नुहुन्थ्यो । उहाँ पनि मानवमध्येका एक जना मानव हुनुहुन्थ्यो । आफ्नो कपडा आफै सफा गर्नु हुन्थ्यो । आफ्नो बाखा आफै दुहुनुहुन्थ्यो र आफ्नो काम आफै गर्नुहुन्थ्यो ।[2]

उहाँले बाचा बचन अरूले भन्दा बढी पूरा गर्नुहुन्थ्यो साथै उहाँ दयालु हुनुहुन्थ्यो । मानिसहरूसँग सबैभन्दा बढी दयामायाका साथ प्रकट हुनुहुन्थ्यो । जीवनशैली सरल थियो भने आदरसत्कारमा सबैभन्दा उच्च हुनुहुन्थ्यो । उहाँको चरित्र सबैभन्दा उच्च एंव महान थियो । अनैतिक कार्यबाट धेरै टाढा बस्नुहुन्थ्यो । उहाँको बानी व्यहोरामा अशलील कुराहरु नै थिएनन् । उहाँले कुनै फोहर कुरा भन्नुहुन्न थियो । न कसैको निन्दा गर्नुहुन्थ्यो न बजारमा चिच्याउनु हुन्थ्यो न नराम्रोको बदला नराम्रो तरिकाले दिनुहुन्थ्यो । क्षमा तथा माफ गर्नु उहाँको बानी थियो । कसैलाई आफुपछाडि छोड्नु हुन्न थियो । उहाँले आफ्ना दास तथा दासिकाभन्दा राम्रो खाना खानु भएन । आफ्नो नोकरको काम पनि आफैले नै गरिदिनुहुन्थ्यो । आफ्नो सेवकलाई कहिल्यै नराम्रो भन्नु भएन । कुनै काम गरे वा नगरेकामा कहिल्यै डाँटडपेट गर्नुभएन । अनाथसँग माया गर्नुहुन्थ्यो उनीहरूसँग बस्नुहुन्थ्यो । उनीहरूको मृत्यु अन्त्यष्टिमा सहभागी बन्नुहुन्थ्यो । कुनै अनाथलाई उनीहरू अनाथ भएको कारण तुच्छ ठान्नु हुन्न थियो । एक पटक उहाँ यात्रामा हुनुहुन्थ्यो । एउटा बाखी बध गरी पकाउने सल्लाह भयो । एक जनाले भन्यो बध गर्ने काम मेरो जिम्मा,अर्कोले भन्यो छाला निकाल्ने

१ मिश्कात भाग २

२ मिश्कात भाग २

काम मेरो, तेस्रोले भन्यो : पकाउने मेरो जिम्मा, ईशदूतले भन्नुभयो, दाउरा जम्मा गर्ने मेरो जिम्मा, सहाबीहरूले भने : तपाईंको काम हामीले गरिदिने छौं । उहाँले भन्नुभयो : मलाई थाहा छ तिमीहरूले मेरो काम गरिदिन्छौ तर म तिमीहरूबीच ठूलो बन्न चाहन्नँ । किनभने कुनै व्यक्तिले आफुलाई साथीहरूमा ठूलो ठानेको कुरा अल्लाहले रुचाउँदैन । त्यसपछि उहाँले उठेर दाउरा जम्मा गर्नुभयो ।

आउनुहोस् हिन्द विन अबी हालाबाट उहाँको गुणहरू सुनौं । हिन्दले आफुले वर्णन गरेको एउटा लामो कथनमा भनेका छन् : ईशदूत निरन्तर चिन्ता गर्नुहुन्थ्यो । सदैव चिन्तन मनन गर्नुहुन्थ्यो । उहाँलाई चैन थिएन । अनावश्यक बोल्नु हुन्न थियो । अधिक मौन बस्नु हुन्थ्यो । कुराकानीको आरम्भ र अन्त्य मुखले बोलेरै गर्नु हुन्थ्यो । मुख बंगाएर बोल्नुहुन्न थियो । अर्थपूर्ण र दुई टुक कुरा गर्नु हुन्थ्यो । त्यसमा न त फजुल कुरा हुन्थ्यो न अधुरो । उहाँ नम्र स्वभावको हुनु हुन्थ्यो । प्रचण्ड देखाउने र अपमान गर्ने व्यक्ति हुनु हुन्न थियो । सानोभन्दा सानो चीजको कदर गर्नु हुन्थ्यो । कुनै पनि चीजलाई घृणा गर्नु हुन्न थियो । खानामा कुनै ऐब लगाउनुहुन्न थियो । यदि कुनैले खानामा ऐब लगाउँथ्यो भने बदला नलिएसम्म उहाँको रिसलाई रोक्न सकिदैन थियो । तर उहाँ मनका ठूला हुनु हुन्थ्यो । आफ्नो स्वार्थको लागि न त रिसाउनु हुन्थ्यो न बदला लिनुहुन्थ्यो । इशारा गर्दा पूरा हत्कलाले गर्नु हुन्थ्यो । अनौठो लाग्दा हत्केला फर्काउनु हुन्थ्यो । रिसाउँदा आफ्नो अनुहार विपरित दिशातिर फर्काउनु हुन्थ्यो । खुसी हुँदा आफ्नो नजर झुकाउनु हुन्थ्यो । उहाँको हाँसो भनेको मुस्कान थियो । मुस्काउँदा दाँत मोती झैं चम्कन्थे ।

नचाहिँदो कुरा बोल्नुहुन्न थियो । साथीहरूमा मेलमिलाप गराउनु हुन्थ्यो उनीहरूलाई फुटाउने काम गर्नुहुन्न थियो । हरेक समुदायको प्रतिष्ठित व्यक्तिको आदर गर्नु हुन्थ्यो र उसैलाई त्यो समुदायको उत्तराधिकारी बनाउँनु हुन्थ्यो । मानिसहरूको विकारबाट सतर्क रहनु हुन्थ्यो र त्यसबाट बचाउ पनि गर्नु हुन्थ्यो । तर त्यसको लागि कसैबाट आफ्नो स्वाभिमान गुमाउनु हुन्न थियो ।

आफ्ना सहाबीहरूको हालखबर लिइरहनु हुन्थ्यो । मानिसहरूको हालखबर सोध्नु हुन्थ्यो । राम्रो कुराको प्रशंसा र नराम्रो कुराको घृणा गर्नु हुन्थ्यो । उहाँ मध्यम हुनु हुन्थ्यो । न धेरै नम्र न धेरै कठोर । निरास हुनुहुन्न थियो । कहिलेकाँहि मानिसहरू सुस्ताए पनि उहाँ सदैव फुर्तिलो रहनु हुन्थ्यो । सत्यमा पछि पर्नुहुन्न थियो र असत्यको पछि लाग्नुहुन्न थियो । उहाँसँग बस्नेहरू सबै असल मानिसहरू थिए । उनीहरूमध्ये सबैभन्दा उच्च त्यो व्यक्ति मानिन्थ्यो जसले सबैभन्दा बढी अरुको भलो चाहन्थ्यो । उहाँको लागि सबैभन्दा स्वाभिमान त्यो थियो जसले दुःखमा सबैभन्दा बढी साथ दिने र मदत गर्ने गर्थ्यो ।

उहाँले उठ्दा बस्दा अल्लाहको प्रशंसा गरिरहनु हुन्थ्यो । त्यसको लागि कुनै निश्चित ठाउँ तोक्नुहुन्न थियो । अर्थात आफ्नो लागि कुनै विशिष्ट ठाउँ बनाउनु हुन्न थियो । समुदायको माझमा जाँदा जहाँ ठाउँ पाउनु हुन्थ्यो त्यहीँ बस्नुहुन्थ्यो र त्यसै कुराको आदेश पनि दिनु हुन्थ्यो । साथीहरू सबैलाई उनीहरूको हक अधिकार दिनु हुन्थ्यो । कसैलाई काखा र कसैलाई पाखा गरेको कसैलाई अनुभूति हुँदैन थियो । कुनै साथी केही आवश्यकताको कारण उहाँको अगाडि बस्दा वा उभिएर कुरा गर्दा साथी आफै फर्केर नजाँदासम्म उहाँ उसको साथमा बस्नु हुन्थ्यो । कुनैले कुनै चीज माग्दा भए दिएर नभए राम्रो कुरा गरेर मात्र फर्काउनु हुन्थ्यो । उहाँले आफ्नो सत् चरित्र र सदाचारण सबैलाई देखाउनु भयो । उहाँ सबैका पिता सरह हुनु हुन्थ्यो । उहाँका लागि सबै समान थिए । यदि कसैलाई प्रधानता थियो भने केवल ईशभयको आधारमा । उहाँको बैठक शर्म,धैर्य र इमानदारीमा आधारित हुन्थ्यो । त्यहाँ स्वर ठूलो गरिदैन थियो र कुनै आदर्श कुराको अपहेलना गरिदैन थियो । अर्थात कुनैको इज्जतको हत्या गरिने डर थिएन । मानिसहरूले ईशभयको कारण आपसमा मायाप्रेम गर्दथे । ठूलालाई आदर सानालाई माया गर्दथे । अनाथलाई दान गर्थे र अपरिचित व्यक्तिमा माया बाँटथे ।

उहाँको अनुहार जहिले हाँसिलो देखिन्थ्यो । उहाँ नम्र तथा सरल स्वभावका हुनु हुन्थ्यो । प्रचण्ड स्वभावका हुनुहुन्न थियो । उहाँले न ठूलो स्वरले बोल्नु हुन्थ्यो न नराम्रो कुरा गर्नु हुन्थ्यो । न कसैको निन्दा गर्नु हुन्थ्यो न कसैको प्रशंसा नै । जुन कुराको चाहना हुँदैन थियो त्यो कुरादेखि टाढा बस्नु हुन्थ्यो । उहाँ कहिल्यै निरास हुनु भएन । उहाँले तीन वटा कुरादेखि आफुलाई सुरक्षित राख्नु भएको थियो :१, आडम्बरी २, सांसारिक प्रलोभन ३, अनावश्यक कुरा । साथै उहाँले मानिसहरुको बारेमा तीन वटा कुरा कहिल्यै गर्नुभएन : १, कसैको निन्दा गर्नु भएन २, कसैलाई वेइज्जत गर्नु भएन ३, कसैको नराम्रो बखान्नु भएन । उहाँले त्यही कुरा मात्र बोल्नु हुन्थ्यो जसमा पुण्यको आशा गर्न सकिन्थ्यो । उहाँले कुरा गर्दा सहाबीहरू आफ्नो टाउको निहुरो गरी बस्थे मानौं उनीहरूको टाउकोमा चरा बसेको छ । उहाँ मौन बस्दा सहाबीहरू कुराकानी गर्थे । सहाबीहरूले उहाँको सामुन्ने अनावश्यक गफसफ गर्दैनन् थिए । उहाँको साथमा बसेर जो कोही बोल्थ्यो आफ्नो कुरा नटुंग्याउञ्जेल सबै जनाले उसको कुरा सुन्थे । उहाँले आफुभन्दा पहिला बोलेको साथीले भनेको कुरा बोल्नु हुन्थ्यो । जुन कुराले सबै हाँस्थे त्यही कुरामा उहाँ पनि हाँस्नु हुन्थ्यो । जुन कुरालाई सबैले अनौठो ठान्थे त्यही कुरा उहाँलाई पनि अनौठो लाग्थ्यो । कुनै अपरिचित व्यक्ति कड्केर बोल्दा उहाँले धैर्य गरी भन्नु हुन्थ्यो : कुनै मानिस समस्यामा परेको छ भने

उसको समस्या समाधान गर । उहाँले गुण लगाइएको व्यक्ति सिवाय कसैबाट प्रशंसा चाहनु भएन ।[१]

खारिजा बिन जैदको भनाइ छः ईशदूत बैठकमा बस्दा आदरपूर्ण तरिकाले बस्नु हुन्थ्यो । कुनै अंग बाहिर निकाल्नुहुन्न थियो । अत्यधिक मौन बस्नु हुन्थ्यो । अनावश्यक बोल्नु हुन्न थियो । अनावश्यक कुरा गर्नेहरूबाट अनुहार फर्काउनु हुन्थ्यो । उहाँको हाँसो मुस्कान थियो । कुरा दुई टुक गर्नु हुन्थ्यो, न त बढी गर्नु हुन्थो न अधुरो । उहाँका सहाबीहरू पनि हाँस्दाखेरि उहाँको इज्जतको ख्याल गर्दै केवल मुस्काउने गर्थे ।

निष्कर्षमा भन्ने हो भने उहाँ अनुपम प्रतिभाका मालिक हुनुहुन्थ्यो । अल्लाहले उहाँलाई उच्च स्वभाव प्रदान गरेका थिए । उनैले उहाँको प्रशंसा गरे :

وإنك لعلى خلق عظيم ( آل عمران :28 )

वास्तवमा तिमी चरित्रको उच्च कोटिमा छौ । यिनै गुणहरूले गर्दा मानिसहरू उहाँतर्फ आकर्षित भए । उनीहरूको हृदयमा उहाँप्रति माया बस्यो । उहाँको नेतृत्व अति उच्च स्तरको भएकाले मानिसहरूले ज्यानको बलिदान दिए । तिनै गुणको कारण उहाँको समुदायको घमण्ड तथा अहंकार सरलता र नम्रतामा परिणत भयो । मानिसहरू अल्लाहको मार्गमा फौजका फौज प्रवेश भए ।

स्मरण रहोस्, ईशदूतको बारेमा माथि हामीले जुन गुण बयान गरेका छौं त्यो उहाँको उच्च चरित्र तथा विशेषताबाट झल्किएको एउटा सानो अंश हो । किनभने उहाँका गरिमा,चरित्र तथा आचरण यति उच्च छ त्यसको सत्यतथ्य, सतह र गहिराइमा पुग्न असम्भव छ ।

दुनियाँमा आएका महामानवको महानतामा कसैको पहुँच हुन सक्छ र ? उहाँले गरिमा तथा प्रतिभाको सबैभन्दा उच्च शिखरमा आफ्नो स्थान बनाएका र आफ्नो पालनकर्ताको ज्योतिबाट आफुलाई उज्यालो पारेकाले ईश्ग्रन्थलाई नै उहाँको गुण र चरित्र घोषित गरियो । कारी नजर आता है, हकिकत मैं है कुरआन अर्थात उहाँ कुरआनका पाठक देखिनु हुन्छ तर वास्तवमा उहाँ नै कुरआन हुनुहुन्छ ।

लेखक

**सफिउर्रहमान मुबारकपूरी**

हुसैन आबाद मुबारकपूर

आजमगढ उत्तर प्रदेश

१७ जुन १९८४

१ शेफा काजी अयाज भाग १

# सन्दर्भ पुस्तकहरू


| | |
|---|---|
| अख्बारुल केराम बेअख्बारिल मस्जिदिल हराम | शहाबुद्दीन अहमद मुहम्मद |
| अदबुल मुफ्रद | मुहम्मद बिन इस्माइल बुखारी |
| अल अलाम | खैरुद्दीन जरकली |
| अल बिदायाह व अल निहायाह | इब्ने कसिर दिमश्की |
| बुलुगुल मराम मिन अदिल्लतिल अहकाम | इब्ने हजर अस्कलानी |
| तारिख अरदिल कुरआन | सैयद सुलेमान नदवी |
| तारिखुल उमम् वल मुलुक | इब्ने जरीर तबरी |
| तारिख उमर बिन खत्ताब | अब्दुर्रहमान बिन जौजी |
| तोहफतुल अहवजी | अब्दुर्रहमान मुबारकपूरी |
| तफ्सीर इब्ने कसीर | इस्माइल इब्ने कसीर |
| तफ्हीमुल कुरआन | सैयद अबुल आला मौदुदी |
| तलकिह फहुमे अहलिल असर | अब्दुर्रहमान बिन जौजी |
| जामे तिर्मिजी | मुहम्मद बिन इसा |
| अल जिहाद फिल इस्लाम | सैयद अबुल आला मौदुदी |
| खुलासतुल सियर | मुहिबुद्दीन अबु जाफर |
| रहमतुल लिल आलमीन | सुलैमान मन्सुरपूरी |
| रसुले अक्रम कि सियासी जिन्दगी | डा. हमिदुल्लाह |
| अल रौजतुल उन्फ् | अब्दुर्रहमान बिन अब्दुल्लाह |
| जादुल मआद | इब्नै कैयम |
| सफरुल तक्वीन | |
| सुनन् इब्ने माजा | इब्ने माजा |
| सुनन् अबु दाउद | अबुदाउद सुलैमान |
| सुनन् निसइ | अबु अब्दुर्रहमान अहमद |
| अस्सिरतुल हलबीयाह | अब्दुल मालिक बिन हेशाम |
| शरह शुजुर अल जहब | इब्ने हेशाम |
| शरह सही मुस्लिम | मुहियुद्दीन याहया |
| शरह अल मवाहिब अल दिनिया | जरकानी |
| अश्शिफा बितारिफ हुकुकिल मुस्तफा | काजी अयाजुद्दी |
| सहीह् बुखारी | मुहम्मद बिन इस्माइल |
| सहीह् मुस्लिम | मुस्लिम बिन हिजाज |
| सहिफह हब्कुक | |
| सुलह अल हुदैबीया | मुहम्मद अहमद बाश्मील |

| | |
|---|---|
| औनुल माबुद शरह अबु दाउद | शम्सुल हक |
| गजवाह उहुद | मुहम्मद अहमद बाश्मील |
| गजवाह बदर अल कुब्रा | मुहम्मद अहमद बाश्मील |
| गजवाह खैबर | मुहम्मद अहमद बाश्मील |
| गजवाह बनी कुरैजा | मुहम्मद अहमद बाश्मील |
| फतहुल बारी | इब्ने हजर अल अस्कलानी |
| फिकहु अल सिरह | मुहम्मद गजाली |
| फि जिलालिल कुरआन | सैयद कुतुब |
| अल कुरआनुल अजिम | |
| कल्ब जजिरतुल अरब | फुआद हमजा |
| माजा खसेर आलम............. | अबुल हसन अली मियाँ नदवी |
| मुहाजिरात तारिखुल उममिल इस्लामीयाह | मुहम्मद खुदैरी बिक |
| मुख्तसर सिरतुर्रसुल | मुहम्मद बिन अब्दुल वह्हाब |
| मुख्तसर सिरतुर्रसुल | अब्दुल्लाह बिन मुहम्मद नजदी |
| मदारिकुल तन्जिल | नसफी |
| मिर्कातुल मफातिह | अबुल हसन उबैदुल्लाह मुरूज |
| अल दहब | अबुल हसन अली मस्उदी |
| अल मुस्तदरक | मुहम्मद हाकिम नेसापुरी |
| मुस्नद अहमद | इमाम अहमद बिन हम्बल |
| मुस्नद अल दारमी | अब्दुल्लाह बिन मुहम्मद |
| मिश्कात अल मसाबिह | वलीउद्दीन मुहम्मद बिन अब्दुल्लाह |
| मुअजमुल बुल्दान | कस्तलानी |
| वफाउल वफा | अली बिन अहमद समूहुदी |